**श्रीकेशवकाश्मीरी भट्टाचार्य कृत**

# श्रीमद्भगवद्गीता

तत्त्वप्रकाशिका टीका (नेपाली अनुवाद) सहित


**अनुवादक**

**पं. श्रीकृष्ण शरण पोखरेल 'शास्त्री'**



प्रकाशक

## श्रीहरिव्यास निकुंज मन्दिर

**वृन्दावन, उत्तरप्रदेश, भारत**

प्रकाशन मितिः- जन्माष्टमी, २०७३

टाईपसेटिङ्गः- सन्देश पोखरेल एवं शैलेश पोखरेल

प्रेरणास्त्रोतः- परमपूज्य गुरुदेव श्रीश्री १०८ श्रीमुरारीदास ब्रह्मचारी ज्यू महाराज

प्राप्तिस्थानः- श्रीहरिव्यास निकुंज मंदिर, वृन्दावन एवं
पं. श्रीतोयानाथ पोखरेल,
रानीगंज-२, सर्लाही, नेपाल

# नम्र निवेदन

मलाई आज अत्यन्त हर्ष भईरहेको छ किनकी पूज्य गुरुदेवको कृपाले गर्दा यो श्रीमद्भगवद्गीता तत्त्वप्रकाशिका टीका हजुरहरूका हस्तकमलमा समर्पण गर्न पाएको छु। मेरो पहिले देखि कै इच्छा थियो कि नेपाली अनुवाद सहितका निम्बार्कसम्प्रदायका ग्रन्थहरू प्रकाशित हुन पाए राम्रो हुनेथियो। किनकी अहिले पनि निम्बार्क सम्प्रदाय सम्बन्धी ग्रन्थहरू नेपाली अनुवाद सहितका पाउन मुश्किल नै छ होला। त्यसैको कमी पुरा हुन्छ कि भनि मैले यो सानो प्रयास गरेको छु। यद्यपि मलाई ब्रह्मसूत्र र उपनिषद् पछि चैं यो ग्रन्थ बनाउने विचार थियो। मूलरूपमा जुन भाव हुन्छ त्यो त अनुवाद मा कहिल्यै पनि हुँदैन। यो ग्रन्थ पनि आचार्य श्रीकेशवकाश्मीरी भट्टाचार्यले संस्कृत मा टीका गर्नुभएको छ। त्यति धेरै कठिन पनि छैन। सामान्य रूपमा संस्कृत व्याकरण पढेकाहरूले पनि सजिलै संझिन सक्दछन्। किनकी आचार्य चरणले सरल-रूपमै टीका गर्नुभएको छ। तैपनि अहिले को समयमा संस्कृतमा रुचि घट्दै गएको अवस्थामा नेपालीमा अनुवाद हुनु पनि आवश्यक नै थियो।

यस टीकामा निम्बार्क सम्प्रदायको 'द्वैताद्वैत सिद्धान्त' लाई श्रीमद्भगद्गीताद्वारा प्रमाणित गरिएको छ। जसको उदाहरणका रूपमा तेह्रौं अध्यायको दोस्रो श्लोकलाई लिन सकिन्छ। यस अनुवादका लागि श्रीव्रजवल्लभ शरण वेदान्ताचार्य ज्यूको हिन्दी टीका र मूल गीताको अनुवाद का लागि गीताप्रेस द्वारा प्रकाशित साधक-संजीवनी टीकाको सहायता लिईएको छ।

यो टीकालाई मैले राजमार्ग बनाउनु भन्दा पहिले बनाईने ट्र्याक-रोडको रूपमा लिएको छु। यसमा मैले सल्लाह-सुझावको अपेक्षा गरेको छु।

यस कार्यमा मलाई प्रमुख रूपमा प्रेरणा परमपूज्य गुरुदेव श्रीश्री १०८ श्रीमुरारीदास ब्रह्मचारी ज्यू ले दिनुभएको हो। प्रत्यक्ष-अप्रत्यक्ष रूपमा यस कार्यमा सल्लाह-सुझाव प्रदान गर्नुहुने परमपूज्य श्रीरासबिहारी शरण (गिरीबाबा)जी महाराज शिक्षागुरु पं. श्रीघनश्याम शरण ज्यू, पं. डा. श्रीदेवर्षि शरण ढकाल, आचार्य पं. श्रीसुदर्शन शरण ढुंगेल र पं. श्रीसर्वेश्वर शरण सुवेदी (सागर) को आभारी छु।

हजुर हरूकै

पं. कृष्ण शरण शास्त्री 'पोखरेल'

रानीगंज-२, सर्लाही, नेपाल

# तत्त्वप्रकाशिका टीकाकारको संक्षिप्त परिचय



अनन्त श्रीविभुषित सुदर्शनावतार जगद्‌गुरु भगवान् निम्बार्काचार्यज्यू का उत्तरवर्ती परम्परामा अनेकौं यस्ता आचार्यहरू भईसक्नुभएका छन् कि जसले निस्वार्थ भावले जनकल्याणको उद्देश्यले महान् कार्यहरू गर्नुभएको छ। त्यस्ता दीर्घजीवी, निस्वार्थ भावनाले जनता माथी कृपा दृष्टि राख्ने आचार्यहरू भएपनि आफ्ना बारेमा कहीं कतै उल्लेख गर्ने गरेको पाईंदैन। यसैले उहाँहरूको सही समय यकीन गरेर भन्न सकिंदैन। प्रस्तुत ग्रन्थका टीकाकार आचार्यचरण श्रीकेशवकाश्मीरी भट्टाचार्यको समय पनि केवल अनुमान मात्रै गर्न सकिन्छ किटेर केहि भन्न सकिदैन। विभिन्न ग्रन्थहरूका आधारमा उहाँको समय लगभग वि.सं. १३५६ भन्दा पहिले देखि नै मान्न सकिने आधारहरू छन्। हुनत कतिपयले उहाँलाई चैतन्यमहाप्रभु का समकालिन बनाउन प्रयास नगरेका होईनन्। (चैतन्य महाप्रभु सोह्रौ शताब्दी तिर हुनुभएको थियो।) तर उनीहरूले प्रमाणित गर्न सकेनन्।

काश्मीरमा हुँदा एकपल्ट त्यहीं बाट हिमालयको यात्रा गर्नुभयो र त्यहाँ श्रीनारदजी को प्रतिमा स्थापना गर्नुभयो। त्यहाँ योगमार्गद्वारा भगवान्‌को ध्यानमा समाधिस्थ भएर ११० वर्ष सम्म उतै बस्नुभयो। त्यस पछि भगवान्‌को प्रेरणाले पुनः कश्मीरमा आई त्यहाँका साधकहरूलाई योगका साथमा भगवान्‌को भक्ति गर्ने उपदेश दिएर हरिद्वार हुँदै नारायणाश्रम(बद्रीनाथ) जानुभयो। त्यहाँ भगवद्विग्रहहरूका दर्शन गर्दै केही समय त्यतै निवास गर्नुभयो। त्यहाँबाट नेपालमा रहेका मुक्तिक्षेत्र, दामोदरकुण्ड, जनकपुर आदि दर्शन गर्दै काशीमा पुग्नुभयो त्यसपछि नैमिषारण्यमा निवास गर्नुभयो। त्यही सुन्नुभयो मथुरामा आततायी मुसलमानहरूले अत्याचार गरेको कुरा। त्यताबाट सिधै मथुरा प्रस्थान गर्नुभयो। त्यहाँ मुसलमान तान्त्रिकले विश्रामघाटको द्वारमाथि यस्तो यन्त्र लगाएको थियो कि जो त्यस द्वार मुनिभएर जान्छ त्यो शिखा-सूत्र रहित भएर मुसलमान बन्न पुग्दथ्यो। सनातन धर्मीलाई दुःख दिन अनेक प्रकारका कर लगाईएको थियो। आचार्य-चरणले त्यहाँ पुगेर उनीहरूका शासकलाई यस्तो आततायी कार्य नगर्नका लागि भन्नुभयो तर उनीहरू मानेन र आचार्यचरण सँग उल्टै अनेक थरिका दुष्चक्र गर्न लागे। दुष्टहरू दण्डले मात्र मान्दछन् भनेर उहाँले त्यै मुसलमानले स्थापित गरेको यन्त्रलाई आफ्नो प्रभावले निस्तेज गरेर त्यसैमा श्रीसुदर्शन चक्र र भगवान् सूर्यको आवाहन गरीदिनु भयो। श्रीसुदर्शन चक्र र सूर्यको प्रभावले गर्दा जो विधर्मीहरू छन् त्यस मार्गबाट जाने बित्तिकै उनीहरूका शरीरमा जलन हुन लाग्यो। यसले गर्दा मुसलनमानहरू आफ्ना काजी सहित त्राहि-त्राहि गर्दै आचार्यको चरणमा परेर माफी मागे पछि, भविष्यमा त्यस्तो नगर्ने प्रतिज्ञा गराई माफ गरिदिनु भयो। यसप्रकारका महनीय कार्यहरू छन् जो विस्तार भयले यहाँ उल्लेख गर्न सकिदैन। उहाँले आफ्नो जीवनकालमा निम्बार्क-सम्प्रदायका अनेक ग्रन्थहरूको पनि प्रणयन गर्नुभयो। तिनीहरूमा प्रमुखरूपमा केहि १. वेदान्त कौस्तुभ प्रभा, २. श्रीमद्भगवद्गीता तत्त्वप्रकाशिका टीका, ३. ईशादि प्रमुख दश उपनिषद्‌हरूको भाष्य, आदि प्रणयन गर्दै "द्वैताद्वैत दर्शन" को सर्वश्रेष्ठता प्रमाणित गर्नुभयो। यस प्रकार विभिन्न महनीय कार्य गर्दै नित्यलीलामा प्रवेश गर्नुभयो।

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

★ श्रीराधासर्वेश्वरो जयति★

★श्रीनिम्बार्काय नमः★

# भूमिका

यो मायागुणदोषलेशरहितः स्वाभाविकैः सद्गुणैः

स्वातन्त्र्याखिलविज्ञताद्यगणितैर्युक्तोऽब्जजादिस्तुतः।

भक्ताभीष्टप्रदो रमैकरमणो वैदैकगम्यो हि यस्तं

वन्दे मनसा गिरा च शिरसा गोपीप्रियं श्रीहरिम् ॥१॥

यस्य श्रीकरुणार्णवस्य करुणालेशेन वालो ध्रुवः

स्वेष्टप्राप्य समार्यधाम समगाद्रङ्कोऽप्यविन्दच्छ्रियम्।

याता मुक्तिमजामिलादिपतिताः शैलोऽपि पूज्योऽभवत्-

तं श्रीमाधवमाश्रितेष्टदमहं नित्यं शरण्य भजे ॥२॥

श्रुतीनां सूत्राणां स्मृतिनिखिलवेदानुवचसां

परं हार्द्दं युक्तं ह्यखिल चिदचिद्भिन्नमपि च।

अभिन्नं स्वाभाव्याद्गुणि च परमं ब्रह्मकमिदं

समादिष्टं यैतानपि सततमीडे गुरुवरान् ॥३॥

संसाररोगशमने खलु निम्बबद्यो

हार्द्दान्धकारहरणेऽर्क्कवदेव यश्च।

श्रीकृष्णपादापरिचारणतुष्टचेता

निम्बार्कदेशिकवरः स हि मे गतिः स्यात् ॥४॥

श्रीश्रीनिवासमाचार्यं गुरुं श्रीगंगलाभिधम्।

प्रणम्य क्रियते गीता-व्याख्या तत्त्वप्रकाशिका ॥५॥

अथ स्वभावतोऽपास्ताखिलाविद्याक्लेशकर्मजन्मादि-षड्भवसत्त्वादिगुकार्यसम्बन्धः सत्यज्ञानानन्तस्वरूपो ज्ञानशक्तिबलैश्वर्यतेजोवीर्यवात्सल्यौदार्य्यकारुण्यक्षमादयामा-धुर्यलावण्यमार्द्दवाद्यनन्तकल्याणगुणमहोदधिः समस्तक्षेत्र-प्रकृतिकालकर्मनियन्ता अतिशयसाम्यवर्जितो विष्वक्सेन-गरुडादिनित्यमुक्तैर्निषेवितो ब्रह्मरुद्रेन्द्राद्यचिन्त्यमहिमा तद्वन्द्यो वेदान्तैकवेद्यो जगज्जन्मादिहेतुः प्रणतार्त्तिक्षपण-स्वभावः उभयविभूतिर्भगवांञ्छ्रीपुरुषोत्तमो देवासुरसंग्राम-निहतावनितलावतीर्णराजन्यरूपदैत्यदानवचमूवृन्दाक्रान्तभूभूरि-भारोत्तरणाय ब्रह्मरुद्रादिदेवतावृन्दैः स्तोत्राराधनप्रार्थितो भूभारोत्तारणाय यादवकुले आविर्बभूवेति सर्वजनप्रसिद्धं भगवदवतारप्रयोजनम्। नैतद्भगवतो मुख्यं तात्पर्य्यं

मायाको गुण दोषले रहित जो ब्रह्मादिले पूज्य छ।

जो स्वाभाविक सद्गुणाढ्य सबैमा स्वाधीन ज्ञानी तथा॥

वेदै ले प्राप्य त्यो भक्तवरद श्रीकान्त गोपीप्रिय।

यस्ता श्रीहरिलाई प्रणाम शिरले वाणी मनैले सदा॥१॥

जो श्रीविष्णु दयासमुद्र जसको दिव्य कृपाले ध्रुव।

पाई सिद्धि गए स्वधाम, निर्धन लाई पनि मिल्यो सम्पदा॥

पाई मुक्ति अजामिलादि पतितहरू ले पनि पूज्य भए गिरिपर्वत।

दिन्छन् आश्रितलाई फल जो नित्य भज्दछु उनै लाई म पनि॥२॥

श्रुती सूत्रको स्मृति सकल वेदानुगत को।

गुणी भेदाभेदाश्रय पुरुष चैतन्य जडले॥

त्यही सत्शास्त्रको, परममत वेदान्तविदको।

जसले देखाए, उनै गुरुवरहरूको स्तुति गर्दछु॥३॥

जो निम्ब तुल्य भवरोग विनाशकारी।

स्वान्तान्धकार हरने रवि कर्मचारी॥

श्रीकृष्णचन्द्र चरणार्चन तुष्टचित्त।

निम्बार्कदेव होऊन गति नित्य मेरो॥४॥

भाष्यकार श्री श्रीनिवासाचार्य र गुरुदेव श्रीगंगल- भट्टाचार्यजी महाराजलाई नमन गर्दै अब गीताको तत्त्वप्रकाशिका व्याख्या गर्न लागिरहेको छु॥५॥

जो सदा समस्त अविद्या, क्लेश, कर्म, जन्मादि, षड्भाव र प्राकृत देहादिकहरूको कार्यको सम्बन्धले स्वभावतः नै निर्लिप्त छ, जो सत्यज्ञान र अनन्त स्वरूप छ, जो ज्ञान, शक्ति, बल, ऐश्वर्य, तेज, वीर्य, वात्सल्य उदारता, करुणा, क्षमा, दया, मधुरता, लावण्य,कोमलता आदि गुणहरूको समुद्र हुनुहुन्छ, समस्त जीव, माया, काल र कर्मको नियन्ता हुनुहुन्छ, जसको बराबरी गर्न कसैले सक्दैन र जो देखि ठूलो कोई पनि छैन, विष्वक्सेन, गरुड आदि नित्यमुक्त जीवहरूबाट जो सधैं सेवित हुनुहुन्छ ब्रह्मा, रुद्र, इन्द्र आदि जसको महिमा जान्न सक्दैनन् उनीहरू जसको सदा वन्दना गर्दछन्, जुन प्रभुलाई एकमात्र वेदान्त बाट जान्न सकिन्छ र जो जगत्को जन्म, स्थिति र प्रलय, मोक्षको कारण हुनुहुन्छ, जसको स्वभाव प्रणत पुरुषहरू(आश्रित भक्तहरू)को दुःख हटाउने छ र जो लीला र नित्य दुबै प्रकारको विभूतिहरूले युक्त हुनुहुन्छ यस्ता श्रीपुरुषोत्तम भगवान्ले देवासुर संग्राममा मरेर फेरि पृथ्वीमा राजा भएर जन्म पाएका दैत्य-दानव सेना समुहले आक्रान्त ठूलो भूभार हटाउनको लागि ब्रह्मा, रुद्र, इन्द्र आदि देवताहरूको स्तुति र आराधनाले प्रसन्न भएर यादवकुलमा अवतार लिनुभयो। भगवान्को अवतार लिने कारण यही लोकमा प्रसिद्ध छ। तर भगवान्को अवतारको यति नै प्रयोजन भने होईन, किन भने भूमिको भारलाई त वराह, पृथु, परशुराम आदि

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

यतस्तस्य बराहपृथुपरशुरामादिवदंशकलामात्रेणापि भूभारमपहर्त्तुं समर्थत्वात् ''पृथिवीं चान्तरिक्षं च दिवं च पुरुषोत्तमः। विचेष्टयतिभूतानि क्रीडन्निव सनातनः। कालचक्रं जगच्चक्रं युगचक्रं च केशवः। आत्मयोगेन भगवान्परिवर्तयतेऽनिशम्॥ कालस्य च हि मृत्योश्च जंगमास्थावरस्यच॥ ईशते भगवानेकः सत्यमेतद्ब्रवीमि ते'' इति महाभारतोक्तात्यद्भुतप्रभावस्य भगवतोऽचिन्त्य-शक्तेर्न केवलं भूभारहरणायैवाविभार्वः, किन्तु अक्षपादकणदसांख्यजैमिन्यादिभिः शास्त्रकृद्भिर्हैरण्य-गर्भपाशुपतसौरगाणपत्यमतवादिभिश्च प्रणीतैः, परतत्त्वापह्नवपरैरन्यविषयैः शास्त्रैः स्वभक्तिज्ञानहीनान् संकीर्णमतीन् जीवान्वीक्ष्य कृष्णद्वैपायनरूपेण परतत्त्व-प्रकाशकशारीरकमीमांसादि सच्छास्त्रनिरूणेनोक्त मतानि निरस्तानि,तथापि भगवतधर्मविरोध्यसुरराजन्यप्राये लोके भगवतधर्मप्रवृत्त्यभावमेवान्वीक्ष्य भवाब्धिपतितजनतातत्तर-णासाधारणेपायस्वज्ञानभक्तिप्रवृत्यर्थं कलिमलापहरा-ध्यतिमानुषाणि कर्माणि कर्त्तुं स्वदर्शने चातक-वदत्युत्कण्ठितचेतसां स्वाश्रितानन्यरसिकभक्तानां नन्दयशोदागोपीगोपाक्रुररोद्धवादीनामतिकमनीयमाधुर्य-लावण्यादिगुधनिधिमूर्त्तिदर्शनमधुरालापमनोहरलीला-भिर्मनोऽभिलाषपूर्त्यर्थं च भूभारोद्धरधव्याजेन वसुदेव-देवकीभक्तिवशीभूतोऽजहद्गुणशक्तिः पूर्णानन्दरूपेणैव तयोः पुत्रभावेविर्बभूव। तथोक्तं श्रीभागवते कुन्तीस्तुतौ पक्षान्तराण्युन्यस्य ''भवेऽस्मिन् क्लिश्यमानानामविद्या-कामकर्मभिः॥ श्रवणस्मरणार्हाणि करिष्यन्निति केचने'' त्युक्त्वा तच्छ्रवणादिफलकथनेनास्यैव पक्षस्य सिद्धान्ति-तत्वात्। तत्र स्वस्वरूपज्ञानोपदेशेन तावभिनन्द्य नन्दव्रजं गत्वा नन्दयशोदादन्सुखयित्वा पूतनादिकेश्यन्ता-सुरसंहरणवत्सालनकालीयदमनगोवर्द्धनोद्धरणरासलीलादिव्याजेन चतुर्मुखसहस्राक्षपुष्पधन्वादिगर्वापहरणरूपां निरंकुशां पारमेश्वरीं लीलां विधाय लीलयैव कंसादीन्निहत्य द्वारकामेत्य तत्र रुक्मिणीहरणमहोक्षदमननरकासुर-संहारणादिनानाश्चर्यविवाहान्कृत्वा यादवकुन्तीसुतादि-स्वभक्तोत्कर्षं दर्शयितुं भक्तिकण्टकान् पौण्ड्रकजरा-

**अंश र कलावतार नै हटाउनमा समर्थ थिए।**

**पुरुषोत्तम भगवान् त पृथ्वी, आकाश, स्वर्ग र सम्पूर्ण जीवहरू लाई सजिलै खेल-खेल मै चलाउनु(बिगार्ने-बनाउने) गर्नुहुन्छ। भगवान सदा कालचक्र, जगच्चक्र र युगचक्रलाई आफ्नो शक्तिले परिवर्तन गरिरहनुहुन्छ। काल, मृत्यु, जंगम, स्थावर सबैलाई एउटै भगवान् शासन गर्नुहुन्छ, यो म तिमि सँग सत्य कुरो भन्दछु।**

**महाभारतमा भनिएको यस्तो अद्भुत प्रभाव र अचिन्त्य शक्ति भएको भगवान् को अवतार केवल भूभार हरणगर्नको लागि मात्रै हुँदैन।**

**यद्यपि गौतम, कणाद(परमाणु कारणवादी), कपिल(प्रकृतिवादी) जैमिनी(कर्मवादी) आदि शास्त्रकारहरू र हैरण्यगर्भ, पाशुपत, सौर, गाणपत्य आदि मतवादिहरू द्वारा प्रणीत, परतत्त्वको अपहारक तथा अन्य विषयक शास्त्रहरू द्वारा संकीर्ण बुद्धियुक्त र आफ्नो ज्ञान र भक्ति ले शून्य जीव लाई देखेर कृष्णद्वैपायन (वेदव्यास) रूपमा अवतरित भएर परतत्त्वको प्रकाशक शारीरक मीमांसादि सत्शास्त्रलाई निरूपण गरेर उक्त मतहरूलाई ध्वस्त पार्नुभयो। तथापि भागवतधर्मको विरोधि राक्षस राजाहरूले भरिएको लोकमा भागवतधर्मको प्रवृत्ति(प्रचार)को अभाव देखेर संसार-सागरबाट पतितहरूको उद्धारको असाधारण उपाय आफ्नो ज्ञान र भक्तिको प्रचारार्थ, कलिमलको नाशक आफ्नो अतिमानुष कर्महरूको लागि र उनको दर्शनको लागि चातक जस्तै उत्कण्ठित चित्त तथा उनैको अनन्यआश्रित, अनन्य प्रेमी भक्त, नन्द, यशोदा, गोपी, गोप, अक्रूर, उद्धव आदिलाई अतिसुन्दर, मधुरता, लावण्य आदि गुणहरूले युक्त स्वमूर्तिको दर्शन, उहाँ संग मधुरआलाप, आफ्नो मनोहर लीला आदिले उनीहरू(भक्तहरू)को मनोकामना पूर्ण गर्नको लागि, भूभार हटाउने उद्देश्यले, वसुदेव देवकीको भक्तिको वशीभूत भई आफ्नो गुणशक्ति को सहित पूर्णानन्द रूपमा प्रकट हुनुभयो। श्रीमद्भागवतमा कुन्तीस्तुती मा र अरू पक्षमा उल्लेख गरेर, "यस संसारमा अविद्या, काम र कर्महरूले दुःखित मनुष्यहरूको श्रवण र स्मरणको योग्य कर्म गर्नुहुने भगवान्को लीला श्रवण आदि फलहरूलाई भनेर पक्षान्तरले माथि भनिएको कुराहरूलाई नै समर्थन गरिएको छ।**

**जन्म लिईसके पछि आफ्नो स्वरूपको ज्ञान दिएर आफ्ना माता-पितालाई प्रसन्न गरेर भगवान् नन्दब्रज मा जानुभयो। त्यहाँ भगवान्ले नन्द यशोदालाई सुखी तुल्याउनु भयो, पूतना देखि लिएर केशी सम्म अनेक असुरहरूको संहार गर्नुभयो, वत्स-पालन, कालीय-दमन, गोवर्द्धन-धारण, रासलीला आदिको द्वारा ब्रह्मा, इन्द्र, कामदेव, आदिको गर्वलाई चूर-चूर गर्नुभयो। यस्तो निरङ्कुश पारमेश्वरी लीलाहरूलाई गरेर कंसलाई खेल-खेलमा नै मार्नुभयो, माता-पितालाई कैदबाट छुटाउनुभयो, गुरुगृहमा गएर विद्याध्ययन गर्नुभयो, मरेका गुरुको पुत्रहरूलाई (पातालबाट)ल्याएर दिनुभयो,**

सन्धचैद्यशाल्वादीन्भूभाररूान्हतवान्। अवशिष्टं भूभार-मपाकर्त्तुं दुर्योधनार्जुनभीमादीन्निमित्तीकृत्य महाभारत-युद्धारम्भं कारयामास। तत्र स्वप्रियभक्तकुन्तीसुतानुकम्प-याऽजुनसारथ्यमंगीकृतवान्तदोभयसैन्यमध्ये स्वजनबन्धु गुरुबधपातकभयेन युद्धान्निवृत्य रथोपविष्टं युद्धकरणे कुलघ्नतारूपो महान्दोषो, युद्धत्यागे स्वधर्महानिः स्यादित्युभयथाऽप्यनिष्टमेव कथं मे श्रेयः स्यादिति शोकमोहसागरे निमग्नमर्जुनमुपलक्ष्य सर्वमुमुक्षुभक्तानु-कम्पयाज्ञानकर्मोपासनात्मकत्रिकाण्डविषयकसकलवेद-सारभूतगीताशास्त्रोपदेशैस्तत उज्जहार तच्च स्वयमेवार्जुनो वक्ष्यति ''नष्टोमोहः स्मृतिलब्धा त्वत्प्रसादान्मयाऽच्युत!। स्थितोऽस्मि गतसन्देहः करिष्ये वचनं तवे''ति॥ तच्च गीताशास्त्रं पञ्चचत्वारिंशदधिकसप्तशत श्लोकैर्महाभारते भगवता व्यासेन निवद्धं तदुक्तं भीष्मपर्वणि ''षट्शतानि सविंशानि श्लोकानां प्राह केशवः॥ अर्जुनः सप्तपञ्चा-शत्सतषष्टिं तु सञ्जयः॥ धृतराष्ट्रः श्लोकमेकं गीताया-मानमुच्यत''इति।तत्र शोकनिवृत्तिकारणमात्मस्वरूप-गुणादियाथात्म्यज्ञानमेव ''तरति शोकममात्मविदिति'' श्रुतेः, आत्मा द्विविधः जीवात्मपरमात्मभेदात् तत्रजीव-क्षेत्रज्ञपुरुषादिश्ब्दभिधेयो ज्ञानस्वरूपो ज्ञतुत्वादिधर्माश्रयः सर्वदा परमेश्वरायत्तस्वरूस्थितिप्रवृत्तिकोऽणुपरिमाणकः प्रतिशरीरं भिन्नो बन्धमोक्षार्ह आद्यः, तद्बन्धहेतुः सत्त्वादि-गुणमायादिश्ब्दवाच्यं देहेन्द्रियादिरूपेण परिणतम-चेतनद्रव्यम्, सर्वज्ञः सर्वशक्तिः सत्यज्ञानानन्तस्वरूपः सर्वात्मा प्रकृतिपुरुषकर्मकालनियन्ताऽतिशयसाम्यवर्जितः सर्वाऽराध्यः स्वतन्त्रसत्ताश्रयः सर्वत्रैकस्वरूपो हरिनाराय-णादिशब्दाभिधेयः परब्रह्मभूतो भगवान् वासुदेवो द्वितीयः, तत्प्राप्त्यसाधारणहेतुस्तदनन्यभक्तियोग इति साक्षाद्भगव-तोपदिष्टं तदेतदध्यायषट्कत्रयात्मकं गीताशास्त्रमप्रामाण्य-कारणबुद्धिमान्द्यदुराग्रहादिदोषचतुष्टयशून्यत्वात्सर्वविदुषां प्रमाणतममत एव तस्य सर्वशास्त्रश्रैष्ठ्यमुक्तं वाराहे ''सारथ्यमर्जुनस्यादौ कुर्वन्गीतामृतं ददौ। लोकत्रयोपकाराय तस्मै कृष्णात्मने नमः॥१॥ संसारसागरं घोरं तर्त्तुमिच्छति यो नरः॥ गीतानावं समारुह्य पारं याति

गुरुऋणबाट मुक्तिरूप आफ्नो धर्म देखाउनु भयो र कालयवनलाई मारेर द्वारका जानुभयो। त्यहाँ गएर रुक्मिणी हरण, महोक्षदमन, नरकासुर-संहार आदि, आश्चर्ययुक्त अनेक विवाह गरेर यादव, कुन्तीसुत आदि आफ्ना भक्तहरूको उत्कर्ष देखाउनको लागि भक्तिको मार्गमा काँडा-स्वरूप पौण्ड्रक, शिशुपाल, जरासन्ध, शाल्व आदि भूभार स्वरूप राजाहरूको विनाश गर्नुभयो। शेष भूभार हर्नको लागि दुर्योधन र अर्जुनलाई निमित्त बनाएर महाभारतको युद्ध गराउनु भयो। युद्धमा आफ्नो प्रिय भक्त अर्जुन माथि कृपा गरेर उनै अर्जुनको सारथी पनि बन्नुभयो। त्यहाँ दुबै सेनाको बीचमा, स्वजन-बन्धु एवं गुरुबधको पातक को भयले युद्ध बाट हटेर अर्जुन रथमा गएर बसे र भगवान् सँग सोधे कि युद्ध गर्दा कुलघ्नतारूप महादोष र नगर्दामा आफ्नो क्षात्र-धर्मको हानी हुने, यस प्रकार दुईटै अनिष्ट हुने देखिन्छ भने मेरो कल्याण कसरी हुन्छ? यस प्रकार मोहसागर मा डुबेको अर्जुनलाई लक्ष्य गरेर सबै मुमुक्षुहरू माथि कृपा गरेर ज्ञान, कर्म र उपासना तीन काण्ड विषयक र सकल वेदको सारभूत गीताशास्त्रको उपदेश दिएर अर्जुनलाई मोहसागर बाट पार लगाउनु भयो।

हे भगवान् हजुरको कृपाले मेरो मोह नष्ट भयो, मैले स्मृति प्राप्त गरे। म सन्देह बाट रहित भएँ। म हजुरले भनेको मान्नेछु। गीतामा यो कुरा भनिएको छ कि आत्मस्वरूप, गुण आदि को ठीक ठीक ज्ञान नै शोक निवृत्तिको उपाय हो।

श्रुतिमा भनेको छः-'तरति शोकमात्मवित्' अर्थात् आत्मालाई जान्नेवाला शोक लाई तर्दछ। जीवात्मा र परमात्मा को भेदले आत्मा दुई प्रकारको हुन्छ। पहिलो अर्थात् जीवात्मा-जीव, क्षेत्रज्ञ, पुरुष आदि शब्दहरूले सम्बोधित हुन्छ। त्यो ज्ञानस्वरूप, ज्ञातृत्व आदि धर्मयुक्त, सर्वदा परमेश्वरको अधीन स्वरूप स्थित र प्रवृत्तिवाला, अणु परिमाण, प्रति शरीरमा भिन्न र बन्ध मोक्षको योग्य हुन्छ। सत्त्व, रज, तम गुणमय, प्रधान, प्रकृति, माया, आदि शब्दहरूले भनिने देह इन्द्रियरूप मा परिणत, अचेतन द्रव्य जीवात्मा को संसारबन्धनको हेतु हो। सर्वज्ञ, सर्वशक्तिमान्, सत्य, ज्ञान र अनन्त स्वरूप, सर्वात्मा, प्रकृति, पुरुष, कर्म र कालको नियन्ता, अतिशय र बराबरी ले शून्य, सबैका आराध्य, स्वतन्त्र सत्तायुक्त, सर्वत्र एकस्वरूप, हरि, नारायण, राम, कृष्ण आदि जसको नाम हुन यस्ता ब्रह्मभूत भगवान् वासुदेव परमात्मा अर्कै हुनुहुन्छ। परमात्माको अनन्य भक्तियोग नै परमात्मा प्राप्तिको असाधारण उपाय हो। यस्ता साक्षात् भगवान्ले नै यस गीता मा उपदेश गर्नुभएको छ। यो गीता शास्त्र जो कि छः छः अध यायहरूको तीन षटक् युक्त छन्, बुद्धिमान्द्य, दुराग्रह आदि अप्रमाणताको चार दोषहरू यस मा छैनन्, र त्यसैले विद्वान्हरूको द्वारा श्रेष्ठतम प्रमाण मानिएको छ। यसैले सबै शास्त्रहरूको भन्दा यसको श्रेष्ठता वराह पुराण मा भनिएको छ।

अर्जुनको सारथीपना गर्दै जुन भगवान् श्रीकृष्णले गीतारूप अमृतलाई तीनै लोकको उपकारका लागि दिनुभयो, उहाँलाई

सुखेन सः ॥२॥ गीताज्ञानं श्रुतं नैव सदैवाभ्यासयोगतः। मोक्षमिच्छति मूढात्मा याति बालस्य हास्यताम् ॥ ये शृण्वन्ति पठन्ति च गीताशास्त्रमहर्निशम्। न ते वै मानुषा ज्ञेया देवरूपा न संशयः ॥४॥ धिक्तस्य मानुषं देहं धिग्ज्ञानं धिक्कुलीनतां। गीतार्थं यो न जानाति नाधमस्तत्परो जनः ॥५॥ गीतागीतं न यज्ज्ञानं तद्विद्ध्यासुरसंमतम्। तन्मोघं धर्मरहितं वेदवेदान्तगर्हितम् ॥६॥ तस्माद्धर्ममयी गीता सर्वज्ञानप्रयोजिका। सर्वशास्त्रमय यस्मात्तस्माद्गीता विशिष्यते'' इत्यादिना। अत एव बहुभिराचार्यैः स्वस्वमतानुसारेण व्याख्यातमिदं शास्त्रं परन्तु तेषां सर्वज्ञत्वाभावात्तद्व्याख्यानानां शास्त्रविरुद्धांशेनापि युक्तत्वान्न सर्वमुमुक्षूपादेयत्वं, किन्तु ''उदयव्यापिनी ग्राह्या कुले तिथिरुपोषणे। निम्बार्क्को भगवान्येषां वाञ्छितार्थ-प्रदायक'' इति भविष्यपुराणे श्रीव्यासवचनाच्छ्री-निम्बार्क्काचार्यस्यैव भगवच्छब्दाभिहितत्वेन सर्वज्ञत्वात्सर्वेभ्यः प्राचीनाचार्यत्वाच्च तद्व्याख्यानस्यैव सर्वश्रुतिसूत्राविरुद्धत्वेन परमश्रेयोऽर्थिभिरुपादेयत्वं, तस्य त्वतिगम्भीरार्थतया शारीरकमीमांसादिसर्ववेदान्तोक्तसाधन सम्पन्नसूक्ष्मबुद्ध्यधिकारिकत्वेन मन्दमतीनां तत्र प्रवेशानर्हत्वात्तेषां तदर्थजिज्ञासूनामल्पप्रयत्नानां मुमुक्षुणामुपकारायाञ्जसा तदुक्तार्थोपलब्धये तच्चरण-स्मरणैकेबलेनतत्कृपालब्धतदुक्तसिद्धान्तेन मया श्रीभगवद्गीताटीका सुगमा तत्त्वप्रकाशिकाभिधा यथामति विधियते। तया श्रीवासुदेवो भगवान्प्रसीदतु।

नमस्कार छ। जो मनुष्य घोर संसारसमुद्रलाई पार गर्ने इच्छा राख्दछ, त्यो गीतारूपी नाउ (डुंगा)मा चढेर सुखले पार गर्दछ। जुन मनुष्यले गीताज्ञान सुनेन र त्यसको अभ्यास गरेन, त्यो मूढात्मा यदि मोक्ष चाहन्छ, भने त्यसको मूर्खता मा बच्चाहरू पनि हाँस्दछन्। जो गीताशास्त्र दिन-रात पढ्दछन् र सुन्दछन् ती देवरूप हुन्, यस मा संशय छैन। त्यस पुरुषको मनुष्य जीवनलाई धिक्कार छ जसले गीतार्थलाई जानेन। त्यो भन्दा नीचतर मनुष्य अर्को कोई पनि छैन। जुन ज्ञानको उल्लेख गीता मा छैन, त्यो असुर-सम्मत, धर्मरहित, वेद रहित र व्यर्थ छ। त्यसैले गीता धर्ममयी, सर्वज्ञानको प्रयोजक तथा सर्वशास्त्रमयी छ, र यसैले सबै भन्दा धेरै यसको विशेषता छ। अतः धेरै आचार्यहरूले आफ्नो मत को अनुसार यसको व्याख्या गरेका छन्। तिनीहरूमा कुनै-कुनै व्याख्या केही अंशमा शास्त्र-विरुद्ध हुनाले मुमुक्षुहरूलाई उपादेय हुन सक्दैन। तर भगवान् वेदव्यासले भविष्यपुराण को "उदयव्यापिनी ग्राह्या कुले तिथिरुपोषणे। निम्बार्क्को भगवान्येषां वाञ्छितार्थप्रदायक" यस श्लोकमा निम्बार्क आचार्यलाई भगवान् शब्दले सम्बोधन गरिएको छ, जसले निम्बार्काचार्य सर्वज्ञ हुनु र सबै आचार्यहरूको भन्दा प्राचीनता पनि सिद्ध हुन्छ। यसैले उहाँले गर्नुभएको गीता व्याख्या, श्रुति-सूत्र को अविरोधि भएको ले, परम कल्याण चाहनेहरूका लागि उपादेय छ। तर त्यो व्याख्या अति गम्भीर छ र त्यसको अधिकारी त्यो नै हो जो शारीरक मीमांसादि सबै वेदान्तमा भनिएको साधन द्वारा सूक्ष्म बुद्धिले सम्पन्न छ। मन्दमतिहरूको त्यस मा प्रवेश हुन सक्दैन। यसैले त्यसको अर्थको जिज्ञासु अल्प प्रयत्नभएका मुमुक्षुहरूलाई त्यहाँ भनिएको अर्थको सुगमताको लागि श्रीनिम्बार्कचार्यको युगलचरणको स्मरण गर्दै उहाँकै कृपाले प्राप्त उहाँले गर्नुभएको गीताव्याख्या सिद्धान्तको अनुसार यो "सुगम तत्त्वप्रकाशिका" नामको श्रीगीताको टीका आफ्नो बुद्धि अनुसार गरिरहेको छु, यसले भगवान् वासुदेव प्रसन्न हुनुहोस।



ॐ श्रीपरमात्मने नमः

# अथ प्रथमोऽध्यायः

तत्र तदवद् 'अशोच्यानन्वशोचस्त्वमि'त्यारभ्यार्जुनस्य शोकमोहापनोदाय भगवदुदेशं वर्णयितुमर्जुनस्य सहेतुक-शोकदर्शनाय प्रथमाध्यायारम्भः। तत्र च स्वपुत्रजया-भिलाषी नष्टदृष्टिरर्जुनस्य गिरीश तोषणदिव्यास्त्रलाभो घोषयात्रायां दुर्योधनस्य गन्धर्वेभ्यो मोचनं विराटनगर उत्तरगोग्रहे कौरवोष्णीषादिहरणमित्यादि बहुशः श्रुताद्भुतपौरुषशङ्कितात्मा धृतराष्ट्रस्तदनुकम्पया श्रीवेद-व्यासदत्तमहाभारतसर्ववृत्तान्तविषयकज्ञानदृष्टिं संजयं पृच्छति स्मेत्याह वैशम्पायनो जनमेजयं प्रति। धृतराष्ट्र उवाचेतिप्रश्नमेवाहः-

अर्जुनको शोक मोहलाई मेटाउनको लागि "अशोच्या०(गीता २।१०) यस श्लोक बाट प्रारम्भ गरेर भगवान्ले दिनुभएको उपदेशको वर्णनको लागि अर्जुनको सहेतुक शोक देखाउने गीताको यो प्रथम अध्याय आरम्भ हुन्छ। आफ्नो पुत्र(दुर्योधन) को विजय को आशा राख्ने दृष्टि र विमर्शविहीन धृतराष्ट्रले ती संजयलाई सोधेः-जसलाई श्रीवेदव्यासजी ले महाभारत युद्धको समस्त वृत्तान्तलाई टाढैबाट हेर्ने दृष्टि प्रदान गर्नुभएको थियो। किनकी भगवान् शंकरलाई पनि संतुष्ट गर्न योग्य अर्जुनलाई दिव्य अस्त्रहरूको प्राप्ति, घोषयात्रा मा दुर्योधनलाई अर्जुनद्वारा गन्धर्वहरूबाट मुक्त गराउनु, विराटनगर मा गाईहरूलाई हरणगर्ने समयमा कौरवहरूको पगरी हरण आदि अद्भुत पराक्रमहरूलाई बारम्बार सुनेर धृतराष्ट्रको चित्तमा यो सन्देह भईरहेको थियो। यस वृत्तान्तलाई वैशम्पायनजी ले राजा जनमेजयलाई भन्नुभयो। र त्यो प्रश्न यस प्रकार छः-

**धृतराष्ट्र उवाच**

**धर्मक्षेत्रे कुरुक्षेत्रे समवेता युयुत्सवः।**
**मामकाः पाण्डवाश्चैव किमकुर्वत सञ्जय॥**

**धृतराष्ट्र सोध्नुहुन्छ- हे सञ्जय! धर्मभूमि कुरुक्षेत्रमा युद्ध गर्ने मनसायले एकत्रित, मेरा र पाण्डुको पुत्रहरूले के गरे? ॥१॥**

धर्मक्षेत्र इति। युयुत्सवो योद्धुमिच्छवो मामका ममपुत्राः दुर्योधनादयः, पाण्डवाश्च युधिष्ठिरादयः, धर्मक्षेत्रे धर्मोत्प-त्तिभूमौ 'कुरुक्षेत्रं वै देवयजनमि'ति श्रुतेः। ''ब्रह्मवेदी कुरुक्षेत्रं पुण्यं ब्रह्मर्षिसेवितम्। तस्मिन् वसन्तिये राजन्न ते शोच्याः कथञ्चने'त्यादिमहाभारतादिप्रसिद्धमाहात्म्ये समवेताः संगताः किमकुर्वत। उभयसैन्यमध्ये दिव्यास्त्रविदो महाप्रबलवीरान्भीष्मार्जुनादीन्दृष्ट्वा युद्धव्यवसायं त्यक्त्वा शममास्थिता वा युद्धोद्योगमेव कुर्वन्तः स्थिता इति प्रश्नार्थः। धर्मक्षेत्र इत्यस्य अधार्मिका अपि ममपुत्राः कपटाहृतं पाण्डवराज्यं पितृबधजन्यको-पाविष्टपरशुरामकृतपितृनिष्कृतिहेतु क्षत्रियबधतद्रुधिरापू-

हे संजय! युद्धगर्ने इच्छाले दुर्योधन आदि मेरा पुत्रहरू र युधिष्ठिरादि पाण्डवहरूले धर्म उत्पन्न हुने भूमि कुरुक्षेत्रमा जम्मा भएर के गरे?

कुरुक्षेत्र धर्मोत्पत्तिको भूमि हुनमा श्रुति नै प्रमाण छ। जस्तो 'कुरुक्षेत्रं वै देवयजनम्' अर्थात् कुरुक्षेत्र देउताहरूको यज्ञ गर्ने भूमि हो। फेरि यसका प्रमाण महाभारत आदि मा पनि छ। जस्तै-"ब्रह्मवेदी कुरुक्षेत्रं पुण्यं ब्रह्मर्षिसेवितम्। तस्मिन् वसन्ति ये राजन्न ते शोच्याः कथञ्चन॥" अर्थात् कुरुक्षेत्र ब्रह्माको यज्ञ गर्ने वेदी हो, र पवित्र छ र ब्रह्मर्षिहरू द्वारा सेवित छ। हे राजन! जो त्यहाँ बस्दछन् तिनीहरू अलिकति पनि शोकगर्न योग्य छैनन्(तिनिहरूको लागि शोक गरिरहनु पर्दैन)। धृतराष्ट्रले प्रश्न गर्नुको यो आशय हो कि दुबै दलमा महाप्रबल, वीर र दिव्यास्त्रहरू जान्ने भीष्म, अर्जुन इत्यादिलाई देखेर दुबै पक्षका मान्छेहरू युद्धगर्न छोडेर शान्त भए कि युद्ध गर्न मा नै लागि रहे। कुरुक्षेत्रलाई धर्म उत्पन्न गर्ने र धर्म बढाउने शक्ति यसैले छ कि पिताको बध ले क्रोधित परशुरामले पितृहरूको शान्तिको लागि क्षत्रियहरूलाई मारेर र उनीहरूको रगतले पाँच-कुण्ड भरेर त्यसैले पितृहरूको तर्पण गरेका थिए र

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

रितकुण्डपञ्चकतर्पितभृग्वादिपितृसन्तुष्टिदत्ततत्प्रार्थितकुण्ड–तत्क्षेत्रपावनत्ववरयोगाद्देवयजनभूमित्वात्कुरुराज्ञस्तसा च जातधर्मोत्पादकत्वतद्वृद्धिहेतुत्वरूपकुरुक्षेत्रप्रभावाद् धर्मबुद्ध्युत्पत्या यदि तेभ्यः एव दद्युस्तर्हि युद्धं विनैव नष्टप्रायाः स्युः। अथवा पूर्वमेव धार्मिकाः पाण्डवाः धर्मक्षेत्रसंगत्या धर्मवृद्ध्या स्वजनबन्धुजनबधनिमित्तं राज्यं यदि नेच्छेयुश्चेत्तर्हि सपुत्रः सुखी स्यामित्यभिप्रायः।

भृग्वादि पितृहरूले सन्तुष्ट भएर ती कुण्डहरू र यस क्षेत्रको विषयमा पवित्रताको वर दिएका थिए। फेति देउताहरूको यज्ञभूमि भएको र कुरुराजले त्यहाँ तपस्या गरेको ले पनि त्यो भूमि पवित्र छ। यसैले त्यस भूमिमा धर्मको उत्पादन र वृद्धि गर्ने शक्ति छ।

फेरि 'धर्मक्षेत्र' यस विशेषणको प्रयोगको यो तात्पर्य हो कि कपटद्वारा पाण्डवहरूको राज्य हरण गर्ने अधार्मिक मेरा छोराहरू, यस कुरुक्षेत्रको यस्तो पवित्रभूमिको प्रभावले यदि धर्मबुद्धिवाला बनेर पाण्डवहरूलाई राज्य फर्काई दिएभने त युद्धनै नगरी ती प्रायः नष्ट हुनेछन्। अथवा पहिले देखि नै धार्मिक पाण्डवहरूको धार्मिक बुद्धि यस पवित्रभूमिमा आएर यदि अरू प्रबल भयो र ती आफ्ना बन्धु-बान्धवलाई मारेर राज्य लिन चाहेनन् भने त म आफ्ना छोराहरूका साथमा सुखी हुनेछु॥१॥

–★–★–★–

## सञ्जय उवाच

**दृष्ट्वा तु पाण्डवानीकं व्यूढं दुर्योधनस्तदा।**
**आचार्यमुपसङ्गम्य राजा वचनमब्रवीत् ॥**

**सञ्जयले भने– त्यस समय राजा दुर्योधनले व्यूहरचनायुक्त पाण्डवहरूका सेना देखेर द्रोणाचार्य संग गएर यो कुरा भने॥२॥**

एवं पुत्रस्नेहनिबद्धहृदयस्य भगवान्मायाभिभूतस्यान्धमात्रस्य धृतराष्ट्रस्य प्रश्ने विदिताभिप्रायस्य संजयस्योत्तरमवतारयति वैशम्पायनः। संजय उवाच–दृष्ट्वा इति। पाण्डुपुत्राणा–मनीकं सैन्यं व्यूढं धृष्टद्युम्नादिभिर्व्यूहरचनया स्थापितं राजा दुर्योधनो दृष्ट्वा आचार्य धनुर्वेदविद्योपदेष्टारमुपसंगम्य तत्समीपं गत्वा वचनमब्रवीत्। एतेन पाण्डवसैन्यदर्शनजन्यं भयं सूचितम्।

यस पुत्रस्नेह मा निविष्ट-चित्त र भगवान्को मायाले मोहित अन्धा धृतराष्ट्रले गरेको प्रश्नको अभिप्राय जानेर सञ्जयले जुन उत्तर दिए त्यसैलाई वैशम्पायन जी भन्नुहुन्छ–
धृष्टद्युम्नादि द्वारा व्यूहरचनाद्वारा स्थापित पाण्डवहरूको सैन्यलाई देखेर राजा दुर्योधन ले धनुर्विद्याको उपदेश दिने गुरु द्रोणाचार्यको नजिकै गएर यो कुरा भने। पाण्डवहरूको सैन्य देखेर दुर्योधन को हृदयमा जो भयको संचार भएको थियो त्यसैलाई यस श्लोकमा सूचित गरियो॥२॥

–★–★–★–

**पश्यैतां पाण्डुपुत्राणामाचार्य महतीं चमूम् ।**
**व्यूढां द्रुपदपुत्रेण तव शिष्येण धीमता ॥**

**हे आचार्य! हजुरको बुद्धिमान् शिष्य द्रुपदपुत्र धृष्टद्युम्नद्वारा व्यूहाकार बनाईएको पाण्डुपुत्रहरूका यस विशाल सेनालाई हेर्नुहोस॥३॥**

आचार्यस्यामर्षं जनयितुं तावत्पाण्डवसैन्योत्कर्षमाह। पश्यैतामिति। भो आचार्य! एतां पाण्डुपुत्राणां महतीं चमूम् व्यूढां पश्य, युद्धार्थमागतानां युक्तमेव चमूव्यूहरचनमिति चेत्तत्रोक्तमाचार्येति। त्वदाश्रितास्मदुद्योगमप्रतीक्ष्या–दावेवोद्युक्ता इति तद्धाष्ट्र्यं पश्येति भावः। ननु तेषामपि

द्रोणाचार्यको इर्ष्या उत्पन्न गर्नको लागि दुर्योधन पाण्डव-सैन्य को बडाई गर्दछ–व्यूहरचनामा स्थित पाण्डवहरूको यस सैन्यलाई हेर्नुहोस यदि तपाईं भन्नुहुन्छ कि युद्धगर्न आएका पाण्डवहरूले व्यूहरचना गर्नु त स्वभाविक नै हो भने तपाईं त आचार्य हुनुभयो र तपाईंको आश्रित हामीहरूको तयारीको प्रतीक्षा नगरीकनै यिनीहरूले आफ्नो तयारी प्रारम्भ गरे। अतः यिनीहरूको धृष्टतालाई हेर्नुहोस। यदि भन्नुहुन्छ कि पाण्डव पनि त मेरा नै

मच्छिष्यत्वाज्ज्येष्ठत्वादि गुणवत्त्वाच्च युक्तः प्रथमं तदुद्योग इति चेत्तत्राह– द्रुपदपुत्रेणेति द्रुपदस्य तव शत्रोः पुत्रेण व्यूढां व्यूहरचनया स्थापितां अतस्त्वया न क्षम्यतामिति भावः। प्रवलेन शत्रुपुत्रेण सेनापतिना सह न सहसा योद्धव्यमिति चेत्तत्राह–तव शिष्येणेति। नहि गुरोरधिकः शिष्यो भवति, एवं चेत्ततः का शङ्का तत्राह–धीमतेति। तव मारणे कृतमतिनेत्यतो नोपक्षणीय इत्यभिप्रायः। एतेन धर्मक्षेत्रगतस्यापि तवपुत्रस्य धर्मबुद्धिर्नोत्पन्ना। सर्पस्य पयःपानेऽपि न क्रोधहानिः, प्रत्युत विषवृद्धिरेव भवति, तद्वत्। तस्मात् तद्राज्यप्रत्यर्पणशंका त्वया न कार्या इति भावः।

शिष्य हुन् र तिम्रो भन्दा(जेष्ठत्वादि) अवस्थामा ठूलो हुनु आदि गुणहरूको कारण श्रेष्ठ छन्, यसैले उनीहरू पहिला तयारी गर्नु अर्थात् व्यूह रचना गर्नु त ठीकै हो। तर प्रश्न यो हो कि व्यूह रचेको हो कसले? तपाईंको शत्रु राजा द्रुपद को पुत्रले यस व्यूहको रचना गरेको हो। भाव यो कि यस कारणले यीनिहरूलाई क्षमा गर्नुहुँदैन। यदि तपाईं भन्नुहुन्छ कि शत्रुपुत्र बाट जो कि पाण्डवहरूको सेनापति हो सहसा युद्ध गर्नु हुँदैन भने यो त तपाईंको शिष्य हो, यस सँग यति धेरै किन डराउनु फेरि यदि तपाईं भन्नुहुन्छ कि यो त मेरा शिष्य हो यो त म भन्दा ठूलो के हुन सक्छ र त्यसको चिन्ता नै के छ र? भने यो धीमान् अर्थात् बुद्धिमान् हो र तपाईंलाई नै मार्नको लागि नै यसले निश्चय गरिसकेको छ। यस श्लोकमा संजयले राजा धृतराष्ट्रको प्रति यो प्रकट गरिदिए कि धर्मक्षेत्रमा गएर पनि तिम्रो छोराहरूको मनमा धर्मबुद्धि उत्पन्न भएन। जस्तै सर्पले दुध पिएर उसको क्रोधको हानी हुँदैन कि बरू उसको विष मात्रै बढ्दछ, त्यस्तै नै दुर्योधन आदि तिम्रो छोराहरूको बारेमा पनि हो। यसैले यो शंका कि तिनीहरू पाण्डवहरूलाई राज्य फर्काई दिनेछन, व्यर्थ हो॥३॥

–★–★–★–

## अत्र शूरा महेष्वासा भीमार्जुनसमा युधि ।
## युयुधानो विराटश्च द्रुपदश्च महारथः ॥

**यस सेनामा ठूला–ठूला धनुषवाला तथा युद्धमा भीम र अर्जुनको समान शूरवीर सात्यकि र विराट तथा महारथी राजा द्रुपद छन्॥४॥**

स्यादेवत्तथाप्येकेन द्रुपदपुत्रेणाधिष्ठितां तेषां चमूमस्मन्मध्ये कश्चिदेकोऽपि जेष्यति, न त्वया तदजेयत्वशंका कार्येति चेन्नैक इत्याह–अत्रशूरा इत्यादिभिः। अत्रास्यां पाण्डवचम्वामन्येऽपि शूराः सन्ति अतो नैकेन जेतुं शक्या तेषां चमूः। शूरान्विशिष्याह–महेष्वासा इति। महान्त इष्वासा धनूंषि येषां ते तथा। किञ्च नाल्पयुद्धकौशलाः किन्तु युधि भीमार्जुनसमाः तान्निर्दिशति–युयुधान इत्यादिना। युयुधानः सात्यकिः महारथ इति। त्रयाणां विशेषणम्।

यदि यस्तै नै होस जस्तो तिमीले भनेको छौ, भने एक्लो द्रुपदपुत्र द्वारा परिचालित उनीहरूको सेनालाई त हामीहरू मध्ये कुनै एकले नै जित्न सक्छ। तिमिले यस्तो शंका गर्नु पर्दैन कि त्यो अजेय छ। आचार्य को यस विचारलाई खण्डित गर्दै दुर्योधन भन्दछ कि पाण्डवहरूको सेनामा अरूपनि अनेक वीर छन्, यसैले उनीहरूको सेनालाई एक व्यक्ति जित्न सक्दैन। त्यो पाण्डव–सेनाको वीरहरू को गणना तीन श्लोकहरू मा यसरी गर्दछः– महारथी सात्यकि, द्रुपद र विराट, यिनीहरू ठूला–ठूला धनुर्विद्या विशारद् हुन, अल्पयुद्ध कौशलवाला होईनन्। यी भीम र अर्जुनको समान वीर हुन्। यहाँ महारथी शब्द युयुधान, विराट र द्रुपद यी तीनैको विशेषण हो॥४॥

–★–★–★–

## धृष्टकेतुश्चेकितानः काशीराजश्च वीर्यवान् ।
## पुरुजित्कुन्तिभोजश्च शैव्यश्च नरपुङ्गवः ॥

**त्यस्तै गरेर धृष्टकेतु र चेकितान तथा बलवान काशीराज, पुरुजित्, कुन्तिभोज र मनुष्यहरूमा श्रेष्ठ शैब्य छन्॥५॥**

धृष्टकेतुः शिशुपालपुत्रः चेकिस्तानोऽन्यो राजा काशिराजश्च

दुर्योधन पाण्डवहरूको पक्षका अरूपनि राजाहरूको गणना गर्दै

प्रसिद्धः तेषां त्रयाणां विशेषणम् वीर्यवानिति। कुन्तिभोजस्य पुरुजिदिति विशेषणं, शैव्यस्य नरपुंगव इति।

भन्दछ-धृष्टकेतु, शिशुपालको छोरो चेकितान र काशीराज यी सबै बलवान छन्। पुरुजित्, कुन्तिभोज र मनुष्यहरूमा श्रेष्ठ शैव्य(यीनीहरू पनि श्रेष्ठ योद्धा हुन्॥५॥

–★–★–★–

## युधामन्युश्च विक्रान्त उत्तमौजाश्च वीर्यवान्।
## सौभद्रो द्रौपदेयाश्च सर्व एव महारथाः॥

**पराक्रमी युधामन्यु तथा बलवान् उत्तमौजा, सुभद्रापुत्र अभिमन्यु एवं द्रौपदीका पाँचै छोराहरू यी सबै महारथी हुन्॥६॥**

युधामन्योर्विक्रान्त इति उत्तमौजसो वीर्यवानिति। सौभद्रोऽभिमन्युः द्रौपदेयाः प्रतिविन्ध्यादयः पञ्च चकारादन्येऽपि घटोत्कचादयः सर्व एव महारथाः। अर्जुनादयः प्रसिद्धत्वादतिरथित्वाद्वा महारथेषु न गणिताः रथार्धरथा अपि न गणिताः महारथादि लक्षणं च–

''एको दशसहस्त्राणि योधयेद्यस्तु धन्विनाम्।
शस्त्रशास्त्रप्रवीणश्च महारथ इति स्मृतः॥
अमिताान्योधयेद्यस्तु संप्रोक्तोऽतिरथस्तु सः।
रथस्त्वेकेन यो योद्धा तन्न्यूनोऽर्धरथः स्मृत॥''

इति।

बलवान युधामन्यु र बहादुर उत्तमौजा, सुभद्रापुत्र अभिमन्यु र द्रौपदी को प्रतिविन्ध्यादि पाँच पुत्रहरू र अरुपनि घटोत्कचादि सबै महारथी हुन्। प्रकृतमा चकारको अर्थ यो हो कि यी गन्ती गरिएकालाई छोडेर अरुपनि जो घटोत्कचादि महारथीहरू छन्। यहाँ अर्जुन आदि को गिन्ती यसैले गरिएन कि उनी त प्रसिद्ध र अतिरथी हुन। महारथी आदिको लक्षण स्मृति-ग्रन्थमा यस प्रकार लेखिएको छ जस्तै- ''*एको ............स्मृत॥*''
अर्थात् जो एक्लै दस हजार धनुर्धारीहरू सँग लड्न सक्छ र शस्त्र तथा शास्त्र मा प्रवीण पनि छ भने, त्यसलाई महारथी भनिन्छ। जो असंख्य धनुर्धर योद्धाहरूका साथ मा एक्लै लड्दछ र त्यो अतिरथी र जो एक हजार सँग एक्लै लड्दछ भने त्यो रथी भनिन्छ र जो त्यो भन्दा पनि न्यून संख्या मा एक्लै लड्दछ भने अर्धरथी भनिन्छ॥६॥

–★–★–★–

## अस्माकं तु विशिष्टा ये तान्निबोध द्विजोत्तम।
## नायका मम सैन्यस्य सञ्ज्ञार्थं तान्ब्रवीमि ते॥

**हे ब्राह्मण श्रेष्ठ! हाम्रो पक्षमा पनि जो प्रधान छन्, तिनीहरूलाई जान्नुहोस। हजुरको जानकारीका लागि मेरो सेनामा जो-जो सेनापति छन्, तिनीहरूको नाम भन्दछु॥७॥**

नन्वेवं परसैन्यमजेयं मन्से चेत्तर्हि तैः सह सन्धिरेव क्रियतां किं युद्धाग्रहेणेत्याशंक्याह–अस्माकं त्विति। तु शब्देन सर्वविद्याश्रयसर्वधनुष्मदाचार्यभूतभवद्विधाश्रयाणामस्माकं नास्ति तदजेयत्वशङ्केत्यात्मनस्तेभ्यो वैशिष्ट्यं द्योतयति। अस्माकं ये विशिष्टा विद्यापौरुषादिनोत्कर्षवन्तस्तान्निबोध, मद्विश्वासविषयान् जानीहि ये च मम सैन्यस्य नायकाः स्वाज्ञया योधयितारस्तान् संज्ञार्थं एते विशिष्टा इति नामभिस्ते तुभ्यं सम्यग्बोधनार्थं ब्रवीमि। द्विजोत्तमेतिशब्दस्य स्तुतिबो–धकत्वेऽपि न योत्स्यसे चेत्तर्हि केवलं भोजनार्थं ब्राह्मणोत्तम इति गूढ़ार्थः।

यदि आचार्य यस्तो सोच्नुहुन्छ कि यस प्रकार शत्रुको सैन्यलाई अजेय मान्दछौ भने उनीहरू सँग सन्धि किन गर्दैनौ, र युद्धको आग्रह नै किन गर्दैछौ? यस शंका को उत्तर दुर्योधन दिंदैछ। त्यो पाण्डवहरू भन्दा आफ्नो विशेषता देखाउँदै भन्दछ कि हाम्रो पक्षमा पनि जो विद्या, पौरुष आदि विशेष गुणहरूले युक्त छन्, ती मेरा विश्वासपात्र छन्, त्यो तपाईं जान्नुहोस र जो-जो मेरो सैन्यको नायक छन् अर्थात् आफ्नो आज्ञा दिएर सैनिकहरूलाई लडाउनेवाला छन्, तीनीहरूको नाम लिएर म तपाईंलाई उनीहरूको परिचय दिन्छु, अर्थात् तपाईंको राम्रो जानकारीको लागि म उनीहरूको नाम भन्दछु। यहाँ श्लोकारम्भमा 'तु' शब्दको प्रयोगको यो तात्पर्य होकि सबै विद्याहरूले युक्त र सबै धनुर्धारीहरू को आचार्य(तपाई)को आश्रयमा जब हामी छौं भने हार्ने त शंका नै छैन र "द्विजोत्तम" शब्द प्रयोग गर्ने गूढ अर्थ यो हो कि तपाईंलाई द्विजोत्तम भनेर यत्रो बडाई गरेको छु। र पनि तपाईं लड्नुहुन्न भने म यो सम्झिन्छु कि तपाईं भोजनको लागि मात्र ब्राह्मणोत्तम हो॥७॥

–★–★–★–

**भवान्भीष्मश्च कर्णश्च कृपश्च समितिञ्जयः ।**
**अश्वत्थामा विकर्णश्च सोमदत्तिस्तथैव च ॥**

**तपाईं-द्रोणाचार्य र पितामह भीष्म तथा कर्ण र संग्रामविजयी कृपाचार्य तथा त्यस्तै नै अश्वत्थामा, विकर्ण र सोमदत्तको पुत्र भूरिश्रवा ॥८ ॥**

तानेव निर्दिशति-भवानिति। समितिञ्जय इति द्रोणदिकृ-पान्तानां चतुर्णां विशेषणं समितिं संग्रामं जयति तथा सः। उक्तेभ्यश्चतुर्भ्यः किञ्चिन्न्यूनान् दर्शयति- अश्वत्थामेत्यदि। अश्वत्थामा गुरुपुत्रः विकर्णः स्वकनिष्ठभ्राता सोमदत्तस्य पुत्रः सौमदत्तिर्भूरिश्रवाः।

आफ्नो पक्षका वीरहरूको गिन्ती सुनाउँदछ-रणविजयी तपाईं, भीष्म, कर्ण, र कृपाचार्य तथा तपाईं चारै जनाहरू भन्दा केहि मात्र कम अश्वत्थामा, मेरो सानोभाई विकर्ण र भीष्मजी को काका बाह्लीकको छोरो भूरिश्रवा। यहाँ समितिञ्जय विशेषण द्रोण, भीष्म, कर्ण र कृपाचार्यको लागि प्रयुक्त भएको छ॥८॥

-★-★-★-

**अन्ये च बहवः शूरा मदर्थे त्यक्तजीविताः।**
**नानाशस्त्रप्रहरणाः सर्वे युद्धविशारदाः॥**

**अरू पनि धेरै छन् जो मेरो लागि जीवनको आशा त्यागि दिने , शूरवीर अनेक प्रकारको शस्त्रास्त्रहरूबाट सुसज्जित र सब-का-सब युद्धमा चतुर छन्॥९॥**

किमेत एव तव विशिष्टा योद्धारो, नेत्याह- अन्ये चेति। अन्ये च जयद्रथशल्यप्रभृतयः मदर्थे मत्प्रयोजनाय त्यक्त-जीविताः जीवितु त्यक्तुं कृतनिश्चयाः। ननु त्वदर्थे त्यक्त-जीविताः अप्यसमर्थाश्चेत्किं कुर्युरिति चेन्नेत्याह- विशेषणद्वाभ्याम्। नानाशस्त्रप्रहरणाः सर्वे युद्धविशारदा इति। नानाशस्त्राणि प्रहरणानि येषां ते तथा युद्धविशारदाः विविधयुद्धमार्गेषु सर्वे निपुणा इत्यर्थः।

बस यति नै विशेष गुण सम्पन्न योद्धा तिमि तर्फ छन्? दुर्योधन यस प्रश्नको उत्तर दिन्छ कि यति मात्रै होईन कि अरु पनि छन्। जयद्रथ, शल्य, इत्यादि र अरु पनि योद्धा हाम्रो लागि प्राण दिन तयार छन्। यहाँ शंका यस्तो कि यदि शक्ति उनीहरूमा छैन भने प्राण दिएर मात्रै के हुन्छ र? त्यसको जवाफमा दुर्योधन उनीहरूको दुई ओटा विशेषणहरू लाई भन्दछ कि ती सबै शस्त्र चलाउनमा प्रवीण छन् र नाना प्रकारको युद्धकला बडो कुशल छन्॥९॥

-★-★-★-

**अपर्याप्तं तदस्माकं बलं भीष्माभिरक्षितम् ।**
**पर्याप्तं त्विदमेतेषां बलं भीमाभिरक्षितम्॥**

**भीष्मपितामहद्वारा रक्षित यो हाम्रो सेना सम्पूर्ण प्रकारले अजेय छ र त्यसैले भीमद्वारा रक्षित यिनिहरूको यो सेना जित्न हामीहरूलाई गाह्रो छैन॥१०॥**

एवं चेत्तर्हि भयाभावात्किमितस्ततो धावसीत्यत आह- अपर्याप्तमिति। तत् यथोक्तयोद्धृविशिष्ट भीष्माभिरक्षित-मस्माकं बलं सैन्यमपर्याप्तमपूर्णं मे भाति। एतेषां पाण्डवानां तु बलं भीमादिभिरक्षितं पर्याप्तं पूर्णं समर्थं मे प्रतिभाति इत्यर्थः।

यदि यस्तो कुरो हो भने अर्थात् ठूला-ठूला योद्धा तिम्रो तर्फमा छन् र तिमीलाई केही पनि डर छैन भने फेरि तिमी यताउती किन दौडिरहेका छौ? यस्को उत्तर दुर्योधन दिन्छ-
माथि जुन-जुन योद्धाहरूको नाम लिईएको छ उनीहरूले भरिएको हाम्रो सैन्य बल, जसको रक्षा भीष्म गर्नुहुन्छ (उनीहरूलाई जित्नको लागि)मलाई अपूर्ण जस्तो लाग्छ र पाण्डवहरूको सैन्य बल जसको रक्षा भीम गर्दैछ (हामीलाई जित्नको लागि) पूर्ण अर्थात् सर्मथ लागिरहेको छ॥१०॥

-★-★-★-

## अयनेषु च सर्वेषु यथाभागमवस्थिताः।
## भीष्ममेवाभिरक्षन्तु भवन्तः सर्व एव हि॥

**यसैले सबै मोर्चाहरूबाट आफ्नो-आफ्नो ठाऊँमा नै रहेर हजुरहरू निःसन्देह भएर भीष्मपितामहको नै रक्षा गर्नुहोस॥११॥**

तर्हि किं कर्त्तव्यमित्यत आह- अयनेष्विति। अयनेषु व्यूह-प्रवेशनिर्गमस्थानेषु सर्वे यथाभागं विभक्तां स्वां स्वां रण-भूमिमपरित्यज्यावस्थिताः सन्तो भवन्तः सर्व एव हि भीष्मं सेनापतिमेवाभिरक्षन्तु। सेनापतौ रक्षिते सर्वं रक्षितं भवति इति भावः।

तब के गर्ने? दुर्योधन यसको उत्तर दिन्छ कि व्यूहमा प्रवेश गर्ने र त्यहाँ बाट निक्लने मार्गहरूमा यथा यथा स्थानमा रहेर अर्थात् रणभूमिमा आफ्नो-आफ्नो निर्दिष्ट स्थानलाई नछोडिकन तपाईंहरू सेनापति भीष्मको नै जसरी हुन्छ रक्षा गर्नुहोस किनकी सेनापति को रक्षा भएमा सबै सैन्य बलको रक्षा हुन्छ॥११॥

-★-★-★-

## तस्य सञ्जनयन्हर्षं कुरुवृद्धः पितामहः।
## सिंहनादं विनद्योच्चैः शङ्खं दध्मौ प्रतापवान्॥

**कौरवहरूमा वृद्ध ठूला प्रतापी पितामह भीष्मले त्यस दुर्योधनको हृदयमा हर्ष उत्पन्न गर्दै उच्च स्वरले सिंह गर्जेझैं गर्जेर शङ्ख बजाउनु भयो॥१२॥**

एवं शत्रुसैन्यादन्तर्भीतोऽपि शठत्वेनैवाचार्यमुपसृत्य स्वोकषद्योतकवचनैरतुष्टेनाचार्येणोपेक्षितं राजानां ज्ञात्वा अयनेष्वित्यादिनाऽऽत्माश्रितं ज्ञात्वा राजत्वान्नोपेक्षणीय इति तं भीष्मो हर्षयामासेत्याह-तस्येति। तस्य हर्षं सम्यग्जनयन् प्रतापवान् कुरुवृद्धः पितामहः उच्चैः सिंहनादं विनद्यशङ्खं दध्मौ।

यस प्रकार शत्रु सैन्य देखि भित्र-भित्रै डराएपनि दुर्योधन मूर्खतावश गुरु द्रोणाचार्यको नजिकै गएर आफ्नो बडाई गर्दछ। भीष्मले यस्तो सोच्नुभयो कि आचार्यले त्यसैको मुख बाट त्यसको बडाई सुनेर अप्रसन्न भएर त्यसको उपेक्षा गर्नुभयो र माथिको श्लोक बाट यस्तो सम्झेर की दुर्योधन मेरो आश्रित छ र द्रोणाचार्यले राजा संझिएर त्यस्तो उपेक्षा गर्नु हुँदैन थियो, तपाईंले त्यसलाई प्रसन्न पार्नुभयो। दुर्योधनलाई प्रसन्न गर्दै प्रतापी कुरुवृद्ध पितामह भीष्मले ठूलो जोर लगाएर सिंहनादको समान गर्जेर शंख बजाउनु भयो॥१२॥

-★-★-★-

## ततः शङ्खाश्च भेर्यश्च पणवानकगोमुखाः।
## सहसैवाभ्यहन्यन्त स शब्दस्तमुलोऽभवत्॥

**यस पछि शङ्ख र नगारा तथा ढोल, मृदङ्ग र नरसिंघा आदि बाजाहरू एकै साथ बज्न लागे। त्यसको त्यो शब्द बडा भयंकर भयो॥१३॥**

ततो भीष्मस्य सेनातेः शङ्खशब्दान्तरं शंखभेर्यादयः सहसैव तत्क्षणमेवाभ्यहन्यन्त। कर्मविवक्षया कर्मकर्तरि प्रयोगः शंखादिनां स शब्दस्तुमुलो वीरहृदयकम्पनोऽभवत्। पाण्डवास्तु नाकम्पन्तेति भावः।

सेनापति भीष्मले शंख बजाएपछि शंख, भेरी, पणव, आनक, गोमुख, नगारा, ढोल, मृदंग नरसींगा आदि बाजाहरू एकैसाथ बज्न लागे। त्यसको बडो भयंकर शब्द भयो। अर्थात् वीरहरूको हृदय कम्पायमान पार्नेवाला शब्द भयो। भाव यो कि पाण्डवहरूको हृदय यस शब्दले काँपेन॥१३॥

-★-★-★-

**ततः श्वेतैर्हयैर्युक्ते महति स्यन्दने स्थितौ ।**
**माधवः पाण्डवाश्चैव दिव्यौ शङ्खौ प्रदध्मतुः ॥**

**यसको तुरुन्तै पछि सेतो घोडाहरू जोतिएको उत्तम रथमा बसेर श्रीकृष्ण महाराज र अर्जुनले पनि अलौकिक शङ्ख बजाउनु भयो ॥१४॥**

ततः पाण्डवसैन्यस्य हर्षं द्योतयितुं माधवादीनां शंखदध्मानमाह-तत इति ततो दुर्योधनसैन्ये शंखशब्दाप्रवृत्यनन्तरं श्वेतैर्हयैर्युक्ते महति स्यन्दने स्थितौ माधवः पाण्डवश्च दिव्यौ शंखौ प्रदध्मतुरित्यादिभिः शब्दैस्तज्जन्यः सूचितः।

अब पाण्डवसेना को हर्षको सूचना गर्नको लागि भगवान् श्रीकृष्ण आदि ले जो शंख बजाउनु भयो त्यसको वर्णन गर्दछु। दुर्योधन को सैन्य मा शंखादि बजेपछि सेता चारओटा घोडाले युक्त रथमा स्थित भएका भगवान् श्रीकृष्ण र अर्जुनले दिव्य शंख जोर ले बजाउन लाग्नुभयो। 'शंखहरू जोरले बजाउनु भयो' यस यी शब्दको व्यवहार गरेर (पाण्डव)हरूको जय सूचित गरियो ॥१४॥

-★-★-★-

**पाञ्चजन्यं हृषिकेशो देवदत्तं धनञ्जयः। पौण्ड्रं दध्मौ महाशङ्खं भीमकर्मा वृकोदरः ॥**
**अनन्तविजयं राजा कुन्तिपुत्रो युधिष्ठिरः। नकुलः सहदेवश्च सुघोषमणिपुष्पकौ ॥**

पाण्डवोत्कर्षमेव द्योतयितुं तच्छंखनामानि वर्णयति-पाञ्चजन्यमिति द्वाभ्याम्। पाञ्चजन्यदेवदत्तादिनामभिस्तेषां शंखा विदितास्तव पुत्रसैन्ये तु कस्यापि नाम्ना प्रसिद्धः शंखो नास्ति। किञ्च हृषीकाणामिन्द्रियाणामीशः हृषीकेशो येषां सहायः तेषामेव जयो भविष्यति इति अभिप्रायः।

पाण्डवहरूको उत्कर्ष देखाउनको लागि यी दुई श्लोकहरूले ती शंखहरूको नाम वर्णन गरिदैछ। भगवान् कृष्णले पाञ्चजन्य शंख बजाउनुभयो, अर्जुनले देवदत्त नामक शंखलाई र भयंकर कर्म गर्नेवाला भीम पौण्ड्र नामक र कुन्तीपुत्र राजा युधिष्ठिरले अनन्तविजय नामक शंख बजाउनु भयो। र नकुल र सहदेवले क्रमशः सुघोष र मणीपुष्पक नामक शंखहरू बजाए।

भन्नुको मतलब यो कि पाण्डवहरूका शंख पाञ्चजन्य, देवदत्त आदि नामले प्रसिद्ध छन् र हे धृतराष्ट्र! तिम्रो छोराहरू मध्ये कसैको शंख कुनै पनि नामले प्रसिद्ध छैनन् र इन्द्रियको मालिक श्रीकृष्णनै जसको सहायक हुनुहुन्छ उनै पाण्डवहरूको जय हुन्छ ॥१५-१६॥

-★-★-★-

**काश्यश्च परमेष्वासः शिखण्डी च महारथः। धृष्टद्युम्नो विराटश्च सात्यकिश्चापराजितः ॥**
**द्रुपदो द्रौपदेयाश्च सर्वशः पृथिवीपते। सौभद्रश्च महाबाहुः शङ्खान्दध्मुः पृथक्पृथक् ॥**

**श्रेष्ठ धनुषभएका काशिराज र महारथी शिखण्डी एवं धृष्टद्युम्न तथा राजा विराट र अजेय सात्यकि, राजा द्रुपद एवं द्रौपदीका पाँचै पुत्रहरू र ठूला-बाहु भएका सुभद्रापुत्र अभिमन्यु-यी सबैले, हे राजन् सबै तिरबाट बेग्ला-बेग्लै शङ्ख बजाए। कुन्तीपुत्र राजा युधिष्ठिरले अनन्तविजय नामक र नकुल तथा सहदेवले सुघोष र मणिपुष्पकनामक शङ्ख बजाए ॥१७-१८॥**

अन्येऽपि तत्सैन्ये शङ्खान्दध्मुरित्याह-काश्यश्चेति। काश्यः काशिराजः। शिखण्डी द्रुपदपुत्रः, भीष्मबधाय तपसोत्पन्नो वाऽपूर्वजन्मा धृष्टद्युम्नो द्रोणाचार्यबधायाग्निकुण्डादुत्पन्नः।

पाण्डवसेना मा अरूले पनि शंख बजाए यसको वर्णन गरिन्छः- हे महाराज धृतराष्ट्र! ठूलो धनुषवाला काशीको राजा र भीष्मवध का लागि तपबाट उत्पन्न द्रुपदपुत्र शिखण्डी तथा द्रोणाचार्यको वधका लागि अग्निकुण्ड बाट उत्पन्न पूर्व जन्मवाला धृष्टद्युम्न,

अपराजितः सात्यकिरर्जुनसमः। एतेन भीष्मद्रोणादिसहायेन मत्पुत्रो जेष्यतीति नाऽऽशासनीयमिति ध्वनितम्। स्पष्टार्थमन्यत्।

**विराट, र अर्जुनको समान अजेय सात्यकि, द्रुपद र द्रौपदी का सबै छोराहरू र ठूलो बाहु भएको सौभद्र यी सबैले चारै दिशाहरू बाट आ-आफ्नो शंख बजाए। पूर्वोक्त कथन ले यो ध्वनि निक्लन्छ कि भीष्म द्रोणादि को सहायताले मेरा छोराहरूले नै जित्दछन्। यस्तो आशा, हे धृतराष्ट्र तपाईंले गर्नु हुँदैन॥१७-१८॥**

-★-★-★-

**स घोषो धार्तराष्ट्राणां हृदयानि व्यदारयत्।**
**नभश्च पृथिवीं चैव तुमुलो व्यनुनादयन्॥**

**त्यस भयानक शब्दले आकाश र पृथ्वीलाई गुञ्जायमान पार्दै धार्तराष्ट्रहरू अर्थात तपाईंको पक्ष लिनेहरूका हृदय छिन्नभिन्न गरिदियो॥१९॥**

धार्तराष्ट्राणामन्यत् भयं सूचयति स घोष इति। स पाण्डवसैन्ये वीरकृतशङ्खघोषो धार्तराष्ट्राणां तव ये वीरास्तेषां सर्वेषां हृदयानि व्यदारयत्। हृदयविदारणतुल्यां पीडामजनयत्। किं कुर्वन् नभश्चपृथिवीं च व्यनुनादयन् प्रतिध्वनिनाऽऽपूरयन्। यतः तुमुलोऽतितीव्रः।

**अब धृतराष्ट्रका पुत्रहरूको अन्य भयलाई सूचित गरिएको छः- पाण्डवसैन्यले बजाएका शंखहरूले ठूलो शब्द गरे। आकाश र पृथ्वी त्यस शब्दले गुँजायमान भयो। र धार्तराष्ट्रको वीरहरूको हृदयमा त्यस शब्दले हृदय विदीर्ण भएको समान पीडा भयो॥१९॥**

-★-★-★-

**अथ व्यसस्थितान्दृष्ट्वा धार्तराष्ट्रान् कपिध्वजः।**
**प्रवृत्ते शस्त्रसम्पाते धनुरुद्यम्य पाण्डवः॥**

**हे राजन! यस पछि कपिध्वज अर्जुनले मोर्चा बाँधेर उभिएका धृतराष्ट्र-सम्बन्धिहरूलाई देखेर, शस्त्र चलाउने तयारी भईरहेको समय धनुष उठाए॥२०॥**

यथा त्वदीयानां भयं प्राप्तं पाण्डवानाम् तथा भयंजातम् प्रत्युत् शूरत्वा-वृद्धिमाह-अथेति। तुमुलघोषानन्तरं कपिध्वजो गर्जनेन वैरिधैर्य्यापहारकः कपिर्हनुमान् ध्वजेयस्य सोऽर्जुनः धार्त्तराष्ट्रान् व्यवस्थितान् दृष्ट्वा शस्त्रसम्पाते प्रवृत्ते प्रवर्तमाने सति दिग्विजयिनः पाण्डोः पुत्रो गाण्डीवमग्निदत्तं धनुरुद्यम्य।

**हे धृतराष्ट्र! शंखहरूको शब्द सुनेर जसरी तपाईंका पक्ष लिनेहरूलाई भय उत्पन्न भयो, त्यस्तो पाण्डवहरूलाई भएन कि उल्टै तिनीहरूमा शूरता को वृद्धि भयो। यसै आशयलाई यसरी भनियोः- आफ्नो गर्जनाले वैरिहरूका धैर्यको अपहारक हनुमान् जसको ध्वजमा हुनुहुन्छ, यस्ता दिग्विजयी पाण्डुपुत्र अर्जुनले धार्तराष्ट्रहरूलाई सैनिक ढंगले लड़ाईको लागि अवस्थित देखेर, जब कि शस्त्र प्रयोगको बेला हुन लागि सकेको थियो, त्यसै समयमा अग्निको द्वारा प्राप्त गाण्डीव धनुष उठाए॥२०॥**

-★-★-★-

**हृषीकेशं तदा वाक्यमिदमाह महीपते।**

**अर्जुन उवाच**

**सेनयोरुभयोर्मध्ये रथं स्थापय मेऽच्युत॥**

**हृषीकेश भगवान् श्रीकृष्ण संग यो कुरा भने-हे अच्युत! मेरो रथलाई दुईओटै सेनाहरूको बीचमा खडा गर्नुहोस॥२१॥**

तदा हृषीकेशं सर्वेन्द्रियनियन्तारं स्वसारथीभूतं भगवन्तमिदं

**सबै इन्द्रियहरूको नियन्ता आफ्नो सारथी भगवान् श्रीकृष्ण संग**

वक्ष्यमाणं वाक्यमाह–महीपते इति संबोधनेन एवम्भूतेऽर्जुने युद्धायोपस्थिते नीत्यभावान्नश्यमानं तव महीपतितमित्युपहासो ध्वनितः। अर्जुनवाक्यमनुवदति–हे अच्युत! यथा तव कुतोऽपि च्युतिर्नास्ति तथा मे रथमुभयोः सेनयोर्मध्ये स्थापय।

यो कुरा भने–हे अच्युत! अर्थात् सदा एकरसमा रहने! तपाईं मेरो रथलाई दुबै सेनाको बीचमा राख्नुहोस। यहाँ धृतराष्ट्रलाई संजयले 'महीपते' भनेर सम्बोधन गरेको छन्। यसले यो ध्वनित हुन्छ कि यस प्रकार अर्जुन लडाई मा उपस्थित भए पछि नीतिको अभावका कारण तपाईको राज्य नष्ट हुन्छ र तपाईलाई अब महीपति भन्नु केवल तपाईको उपहास गर्नुमात्र हो॥२१॥

–★–★–★–

**यावदेतान्निरीक्षेऽहं योद्धुकामानवस्थितान् ।**
**कैर्मया सह योद्धव्यमस्मिन्रणसमुद्यमे ॥**

**जब सम्म कि म युद्धक्षेत्रमा डटेका युद्धका अभिलाषि यी विपक्षी योद्धाहरूलाई राम्रो संग हेरौं कि यस युद्धरूप व्यापारमा मैले को–को संग युद्ध गर्नु योग्य छ त्यतिबेर सम्म खडा गर्नुहोस॥२२॥**

न ह्येकत्रैव स्थिरीभूय योद्धुंनियमोऽस्ति, किमर्थमुभयोः सेनयोर्मध्ये रथः स्थापनीय इत्यपेक्षायामाह–यावदिति। योद्धुकामानवस्थितानेतान्यावदहं निरीक्ष्ये तावत्कालं स्थपय, न तु सर्वदेत्यर्थः। ननु त्वं प्रेक्षको भूत्वा द्रष्टुमागतोऽसि योद्धुंवेत्यत आह–कैरिति। अस्मिन् रणसमुद्यमे प्रायो बान्धवा एव समागताः अतः कैर्मया सह योद्धव्यं, केषां मया सह, मम च कैः सह योद्धुंयोग्यमित्यर्थः।

एकै ठाउँमा बसेर लड्ने नियम त छैन, अतः तिमी किन सेनाहरूको मध्यमा रथ लैजानको लागि भन्दैछौ? यसको उत्तर अर्जुन दिन्छन्– युद्धको लागि आएका यी सबैजनालाई जब सम्म म हेर्दछु तब सम्म हजुर दुबै सेनाको बीचमा मेरो रथ उभ्याउनु होस, सधैंको लागि होईन। फेरि तिमि तमाशा हेर्नको लागि आएको हौ कि युद्ध गर्नको लागि? यस प्रश्नको उत्तर अर्जुन दिंदैछन्, कि यस रणस्थलमा प्रायः आफन्तहरू नै जुटेका छन्। यसैले मैले यो हेर्नु पर्दछ कि को सँग मैले र कसले म सँग लड्नु उचित छ॥२२॥

–★–★–★

**योत्स्यमानानवेक्षेऽहं य एतेऽत्र समागताः।**
**धार्तराष्ट्रस्य दुर्बुद्धेर्युद्धे प्रियचिकीर्षवः॥**

**दुर्बुद्धि दुर्योधनको युद्धमा हित चाहने जो–जो यी राजाहरू यस सेनामा आएका छन्, यी युद्ध गर्नेवालाई म हेर्दछु॥२३॥**

ननु बान्धवाः सर्वे त्वया दृष्टपूर्वा एव योग्यतामयोग्यतां च जानास्येव किं पुनरत्र तन्निरीक्षणेनेति चेत्तत्राह–योत्स्यमानानिति। य एतेऽत्र समागतास्तान्योत्स्यमानानहमवेक्ष्ये द्रक्ष्यामि। ननु भीष्मादयः कुलवृद्धत्वात्समा द्रोणादयस्त्वाचार्यत्वात्सुहृदः एवोभयोः समार्थमागताश्चेद्येऽत्र समागतास्तान्योत्स्यमानानिति कथमुक्तमिति चेत्तत्राहदुर्बुद्धेर्धार्तराष्ट्रस्य युद्धे प्रियचिकीर्षवः अतस्तदवेक्षणमुचितमेवेति भावः।

सबै आफन्तहरूलाई त तिमिले पहिले देखि नै देखेको छौ र तिनिहरूको योग्यता र अयोग्यता पनि जान्दछौ भने फेरि के हेर्छौ? यस प्रश्नको उत्तर अर्जुन दिन्छन् कि जो लडाईंको लागि नै आएका छन् तिनिहरूलाई म हेर्दछु।

भीष्म इत्यादि कुलको वृद्ध हुनाले र द्रोणादि आचार्यको नाताले तिमिहरू दुबै पक्षको लागि समान हुन् र दुबै पक्षको सुहृद हुन् र दुबै पक्षको सहायताको लागि आएका हुन्, भने तिमि उनीहरूलाई युद्धको इच्छाले आएका कसरी भन्दछौ? अर्जुन उत्तर दिन्छन् कि यस्तो कुरा होईन। यिनिहरू युद्धमा दुर्बुद्धि धार्तराष्ट्रहरूका प्रिय कामना गर्नेहरू हुन्। भाव यो कि यस कारण यिनिहरूको निरीक्षण गर्नु नै उचित छ॥२३॥

–★–★–★

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

## सञ्जय उवाच

**एवमुक्तो हृषीकेशो गुडाकेशेन भारत। सेनयोरुभयोर्मध्ये स्थापयित्वा रथोत्तमम्॥**
**भीष्मद्रोणप्रमुखत: सर्वेषां च महीक्षिताम् । उवाच पार्थ पश्यैतान् समवेतान्कुरूनिति॥**

**सञ्जय भन्दछन्- हे धृतराष्ट्र! अर्जुनद्वारा यस प्रकार प्रार्थना गरिए पछि भगवान् श्रीकृष्णचन्द्रले दुवै सेनाको बीचमा भीष्म र द्रोणाचार्यको सामने नै तथा सम्पूर्ण राजाहरूको पनि सामने उत्तम रथलाई खडा गरेर यस प्रकार भन्नुभयो कि हे पार्थ! युद्धको लागि जम्मा भएका यी कौरवहरूलाई हेर॥२४-२५॥**

तत: किं वृत्तमित्यपेक्षायां सञ्जयो धृतराष्ट्रं प्रत्युक्तवानिति आह वैशम्पायन:-सञ्जयउवाचेति। सञ्जयवचनमवतारयति- एवमिति द्वाभ्याम्। हे भारत! अतिधार्मिकस्य भरतस्यान्वये जातस्य तवापि ज्ञातिद्रोहचिन्तनमनुचितमिति भाव:। गुडाका निद्रा तस्य ईशेनार्जुनेन एवं पूर्वोक्तप्रकारेणोक्तो हृषीकेश उभयो: सेनयोर्मध्ये भीष्मद्रोणयो: प्रमुखत: प्रमुखे सर्वेषां च महीक्षितां मह्यां क्षीयन्ते महीक्षितो राजानस्तेषां च प्रमुखे, रथोत्तमं स्थापयित्वा हे पार्थ! समवेतान्युद्धाय मिलितानेतान् कुरुन् पश्येत्युवाच॥२४-२५॥

**वैशम्पायनले जन्मेजयलाई भने कि 'त्यस पछि के भयो' धृतराष्ट्रको यस कथनको उपेक्षा गरेर संजयले भने।(संजयले भनेको अब यहाँ दुई श्लोकमा वर्णन गरिन्छ।)**
**हे भारत!(यहाँ धृतराष्ट्रलाई भारत भन्नुको तात्पर्य यो हो कि तिमी अत्यन्त धार्मिक भरतको कुलमा जन्मिएका हौ, तिमिले आफ्नो जातिको द्वेष सोच्नु राम्रो होईन।) निद्रालाई जित्ले अर्जुनले भनेपछि भगवान्ले दुई सेनाका बीचमा र मुख्यत: भीष्म द्रोणादि र अन्य सबै राजाहरूका सामुन्ने अर्जुनको रथलाई राख्नुभयो, र हे अर्जुन! युद्धको लागि आएका यी कौरवहरू लाई राम्रो सँग हेर यस्तो भन्नुभयो॥२४-२५॥**

-★-★-★-

**तत्रापश्यत्स्थितान् पार्थ: पितृनथ पितामहान्। आचार्यान्मातुलान्भ्रातृन्पुत्रान्पौत्रान्सखींस्तथा॥**
**श्वशुरान् सुहृदश्चैव सेनयोरुभयोरपि ।**

**यस पछि पृथापुत्र अर्जुनले ती दुईओटै सेनाहरूमा स्थित ठूला बालाई, काकाहरूलाई, हजुरबाहरूलाई, गुरुहरूलाई, मामाहरूलाई, भाईहरूलाई, पुत्रहरू, नातिहरू,तथा मित्रहरूलाई, ससुराहरूलाई र सुहृदहरू लाई पनि देखे॥२६ औं र २७औं को पूर्वार्ध॥**

तत: किं वृत्तमित्यत आह-तत्रेतिसार्धेन। समवेतान् कुरून् पश्येत्येवं भगवतोक्ते सति पार्थ: उभयो: सेनयोरपि स्थितान् पितृन् भूरिश्रवादीन् तदनन्तरं पितामहान् भीष्मादीन्, आचार्यान् द्रोणकृपादीन्,मातुलान् शल्यशकुन्त्यादीन् भ्रातृन्भीमदुर्योधनादीन् पुत्रानभिमन्युलक्ष्मणादीन् पौत्रान् लक्ष्मणादिपुत्रान् सखीन्वयस्यानश्वत्थामादीन् श्वसुरान् भार्याणां पितृन् सुहृद: कृतोपकारा ये तान्सर्वानपश्यत्।

**त्यस पछि के भयो? यसको उत्तर डेढ़ श्लोकमा दिन्छन्। भगवान्ले भने अनुसार अर्जुनले दुबै सेनाहरूको बीचमा स्थित भूरिश्रवा आदि पितृवर्गलाई, तदनन्तर भीष्मआदि पितामहहरू लाई, द्रोण, कृप आदि गुरूवर्गलाई, शल्य, शकुनि आदि मामाहरूलाई, दुर्योधन आदि भाईहरूलाई, अभिमन्यु, लक्ष्मण आदि छोराहरूलाई, लक्ष्मणको पुत्ररूप नातिहरूलाई, अश्वत्थामादि साथिहरूलाई, ससुराहरूलाई र जसले उपकार गरेका थिए-यस्ता मित्रहरूलाई पनि त्यहाँ देखे॥२६½॥**

-★-★-★-

**तान्समीक्ष्य सकौन्तेयः सर्वान्बन्धूनवस्थितान् ॥**
**कृपया परयाविष्टो विषीदन्निदमब्रवीत् ।**

**त्यहाँ उपस्थित सम्पूर्ण बन्धुहरुलाई देखेर ती कुन्तीपुत्र अर्जुन अत्यन्त करुणाले युक्त भएर शोक गर्दै यी कुराहरू भने॥२७औंको उत्तरार्ध र २८औंको पूर्वार्ध॥**

ततः किं कृतवानिति पुत्रराज्यहानिशङ्काव्याकुलचित्तं धृतराष्ट्रमाश्वासयन्निवाह– तानिति। पितृहीनानां वने क्लीष्टानां राज्यभागो देय इति तव कृपानोत्पन्ना। तथाऽर्जुनस्तुमहादेवादिन्द्रादेश्च लब्धदिव्यायुधोऽपि अग्निदत्तगाण्डीवधनुषा वासुदेवेन सारथिना च सर्वत्रक्षत्रियजयनसमर्थोऽपि तान् सर्वान् बन्धूनवस्थि–तान्समीक्ष्य परया स्वभाविक्या कृपयाऽऽविष्टो व्याप्तोऽभूत्। तत्कुतः यतः कौन्तेयः महापराधिन्यपि कंसे क्षमाशीलस्य ज्ञानिनो भक्तस्य वसुदेवस्य तत्समशीलायाः भगिन्याः कुन्त्याः सुतस्तत एव विषीदन् विषादं कुर्वन्निदम् वक्ष्यमाणं वचनमब्रवीत्।

'तब अर्जुनले के गरे?' पुत्र-राज्य-हानि को शङ्काले व्याकुल चित्तभएको धृतराष्ट्रको यस प्रश्नको उत्तरमा उसलाई सान्त्वना दिदै संजय भन्दछन्, कि हे धृतराष्ट्र! पितृहीन तथा बनमा कष्ट सहेका पाण्डवहरूलाई राज्यको हिस्सा दिनु पर्दछ, यस्तो कृपा त तिमिमा उत्पन्न भएन। तर महादेव र इन्द्रादि देउताहरू बाट दिव्य आयुधहरू प्राप्त गरेर, र अग्नि बाट गाण्डीव धनुष प्राप्त गरेर, भगवान् वासुदेव जस्ता सारथी पाएर, र सबै क्षत्रियहरूलाई जित्ने सामर्थ्य भएर पनि अर्जुन, ती सबै बन्धु-बान्धवहरू लाई युद्ध भुमिमा देखेर कृपाले पूर्ण भए(भने यस्ता कुन्ति पुत्र महाअपराधि कसरी हुन्छन्? क्षमाशील ज्ञानिभक्त वसुदेवको नै समान शीलले युक्त बहिनी कुन्ती र तिनैको पुत्र मा यस्तो कृपा उत्पन्न हुनु स्वभाविक नै हो।) यस प्रकार दुःखि हुँदै अर्जुनले यसरी भने॥२७औंको उत्तरार्ध र २८औंको पूर्वार्ध॥

–★–★–★–

## अर्जुन उवाच

**दृष्ट्वेमं स्वजनं कृष्ण युयुत्सु समुपस्थितम् ॥**
**सीदन्ति मम गात्राणि मुखं च परिशुष्यति। वेपथुश्च शरीरे मे रोमहर्षश्च जायते ॥**
**गाण्डीवं स्त्रंसते हस्तात्त्वक्चैव परिदह्यते । न च शक्नोम्यवस्थातुं भ्रमतीव च मे मनः ॥**

**अर्जुन भन्दछन्– हे कृष्ण! युद्धक्षेत्रमा डटेका युद्धका अभिलाषी यस स्वजनसमुदायलाई देखेर मेरा अङ्गहरू शिथिल हुँदै गईरहेका छन् र मुख पनि सुक्दै गईरहेको छ तथा मेरो शरीर कम्प एवं रोमाञ्च भईरहेको छ । साथै मेरा हातबाट गाण्डीव धनुष पनि छुटिरहेको छ र मेरो त्वचा(छाला)मा पनि जलन भईरहेको छ तथा मेरो मन भ्रमित जस्तो हुँदैछ; यसैले म उभिन पनि सकिरहेको छैन॥२८औं को उत्तरार्ध –३०॥**

तदेवाह–अर्जुन उवाचेति। तच्च दृष्ट्वेत्यारभ्य धार्तराष्ट्रारणे हन्युस्तन्मे क्षेमतरं भवेदित्यन्तम्, हे कृष्ण! सच्चिदानन्दस्वरूप। इमं स्वकीयं भ्रातृपुत्रादिबन्धुवर्ग युयुत्सुं योद्धुमिच्छुं समुपस्थितं सम्यक् शस्त्रकवचादि संनह्य समीपे स्थितं दृष्ट्वा मम गात्राण्यङ्गानि सीदन्ति व्यथन्ते। मुखं परिशुष्यति, सर्वतः शुष्यति। किञ्च मे शरीरे वेपथुः कम्पः रोमहर्षश्च जायते, गाण्डीवस्त्रंसनं

(अर्जुनले कुन कुरा के-कसरी भने त्यो कुरा 'दृष्ट्वा०' यहाँ देखि आरम्भ गरेर 'धार्तराष्ट्रा रणे०' यहाँ सम्म वर्णन गरिएको छ।) हे सच्चिदानन्दस्वरूप श्रीकृष्ण! यी आफ्ना भाई, छोरा आदि बन्धुवर्गको लडाईंको लागि कसिकसाउ भएर शस्त्र कवचादिले सजिएको देखेर मेरो शरीरमा व्याकुलता भईरहेको छ, मेरो मुखपनि सुक्दै गएको छ, शरीरमा कँपकँपी भईरहेको छ। मेरो गाण्डीव धनुष हातबाट चिप्लिरहेको छ, मेरो छाला र शरीरमा जलन भईरहेको छ।(छाला पोल्नु र गाण्डीव चिप्लिनु अमंगलको लक्षण

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

त्वग्दाहश्चेत्यनिष्टसूचकं लक्षणं प्रतीयते। किञ्च अवस्थातुं च न शक्नोमि च पुनर्मे मनो भ्रमतीव भ्रमसदृशं विकारं मनसि भावयामि।

हुन्छ भन्ने थाहा हुन्छ), म उभिन पनि सक्दिन र मेरो मन चक्कर खाएर भ्रमित जस्तो भएको छ॥२८औं को उत्तरार्ध-३०॥

-★-★-★-

## निमित्तानि च पश्यामि विपरीतानि केशव।
## न च श्रेयोऽनुपश्यामि हत्वा स्वजनमाहवे॥

**हे केशव! म लक्षणहरू पनि विपरीत नै देखिरहेको छु तथा युद्धमा स्वजनसमुदायलाई मारेर कल्याण पनि देख्दिन॥३१॥**

हे केशव! विपरीतानि निमित्तानि वामाङ्गस्फुरणादीनि पश्यामि। अत एवाऽऽहवे युद्धे स्वजनं हत्वा श्रेय ऐहलौकिकं पारलौकिकं वा नाऽनुपश्यामि,मनसि विचारणादनु पश्चान्न पश्यामि। यद्यपि-

द्वाविमौ पुरुषौ लोके सूर्यमण्डलभेदिनौ।
परिव्राट् योगयुक्तश्च रणे चाभिमुखोहतः॥

-इति श्रेयोऽभिधानमस्ति, तथापि हतस्यैव तदभिधानान्न हन्तुः किञ्चित्पुण्यमुक्तम्।

हे केशव! म बायाँ अंग फर्फराउने आदि अपशकुनहरू देखि रहेको छु। यसैले युद्धमा आफ्नो सम्बन्धीहरू लाई मारेर म न पारलौकिक कल्याण पाउँदछु न त यस लोकको। विचार गर्दा त मलाई यस्तै लाग्दछ। यद्यपि शास्त्रमा यस्तो लेखिएको छ कि-

"द्वाविमौ पुरुषौ लोके सूर्यमण्डलभेदिनौ।
परिव्राट्योगयुक्तश्च रणे चाभिमुखो हतः॥"

अर्थात् यस लोकमा दुई प्रकारको मनुष्य नै सूर्यमण्डलको भेदन(पार) गरेर माथि जान्छन्, एक त योगयुक्त सन्यासी र अर्को लड़ाईंमा सम्मुख भएर मर्ने, तथापि यहाँ लड़ाईं मा मर्नेको नै पुण्य प्राप्तिको वर्णन छ मार्नेको हैन॥३१॥

-★-★-★-

## न काङ्क्षे विजयं कृष्ण न च राज्यं सुखानि च।
## किं नो राज्येन गोविन्द किं भोगैर्जीवितेन वा॥

**हे कृष्ण! म न त विजय चाहन्छु, न त राज्य तथा सुखहरूलाई नै। हे गोविन्द! मलाई यस्ता राज्य संग के प्रयोजन छ अथवा यस्तो भोगहरूबाट तथ जीवनबाट पनि के लाभ छ र?॥३२॥**

ननु मास्त्वामुष्मिकं श्रेय ऐहिकं-राज्यभोगसुखादिकं तु स्यादेवेत्यत आह-न कांक्ष इति। हे कृष्णेति संबाधनेन सच्चिदानन्दस्वरूपस्त्वं मामपि स्वरूपानन्दतुष्टं कुर्विति सूचितम्। राज्यसाधनभूतविजयमहं कांक्षे नेच्छामि, विजयसाध्यं राज्यं न च कांक्षे राज्याधीनानि सुखानि च न कांक्षे नेच्छामि। ननु लोके शत्रुविजयराज्यसुखार्थमेव सर्वजनप्रवृत्तिस्तव कुतस्तदनाकांक्षोत्पन्नेत्यत आह किन्न इति। गावः स ममेन्द्रियमनः प्रवृत्तिं सदा त्वं जानासीति भावेन सम्बोधयति गोविन्देति। बहुहिंसावद्युद्धसाध्यराज्येन नोस्माकं किं प्रयोजनं, राज्यसाध्यविशिष्टभोगैः किं,

जे होस, तिमिलाई परलोक सम्बन्धी कल्याण प्राप्त नभए पनि यस लोकको राज्यसुख इत्यादि त प्राप्त हुने नै छ। यसैको उत्तर अर्जुन दिन्छन्- हे कृष्ण!(यहाँ कृष्ण नामले सम्बोधन गर्नुको भाव यो हो कि तपाईं सच्चिदानन्द स्वरूप हुनुहुन्छ। मलाई पनि त स्वरूपको आनन्दले तुष्टि प्रदान गर्नुहोस।) राज्यको साधनभूत विजयलाई म चाहन्न र विजयले प्राप्त हुने राज्यको पनि मलाई इच्छा छैन। राज्यको अन्तर्गत आउने सुखहरूलाई पनि म चाहन्न। संसार मा सबै मनुष्यहरू को यही इच्छा हुन्छ कि शत्रु माथि विजय होस र राज्य तथा सुख मिलोस। तिमिलाई किन यो सबै बाट अनिच्छा उत्पन्न भयो। यस प्रश्नको उत्तरमा अर्जुन भन्दछन् कि हे गोविन्द!(गोविन्द नामले सम्बोधन गर्नुको यो अर्थ हो कि तपाईं मन सहित सबै इन्द्रियहरूका नियन्ता हुनाले उनीहरूको रक्षक अथवा स्वामि पनि हुनुहुन्छ। यसैले तपाईं मेरो मन र इन्द्रियहरूको प्रवृत्ति जान्नुहुन्छ।) बहुहिंसायुक्त युद्धले प्राप्त राज्यबाट हामीलाई के को प्रयोजन? र भोगहरूले मलिन जीवन

जीवितेन भोगकरणक–जीवितेनोपक्रोशमलीमसेन प्राणधारणपोषणेन वा किं प्रयोजनं, न किमपीत्यर्थः।

सँग नै हामीलाई के प्रयोजन? अर्थात् यी सबै देखि हामीलाई केही मतलब छैन॥३२॥

–★–★–★–

**येषामर्थे काङ्क्षितं नो राज्यं भोगाः सुखानि च ।**
**त इमेऽवस्थिता युद्धे प्राणांस्त्यक्त्वा धनानि च॥**

**हामीलाई जसको लागि राज्य, भोग र सुखादि अभीष्ट छ, तीनीहरू सबै जनानै धन र जीवनको आशालाई त्यागेर युद्धका लागि उभिएका छन्॥३३॥**

ननु पाण्डुपृथापुत्रस्य तव राजयसुखदिनैराकांक्ष्यं भवतु? तथापि स्वजनवर्गार्थं तदाकांक्षोचितैवेति चेत्तत्राह–येषामिति। येषां स्वजनबन्धूनामर्थे नो राज्याद्यपेक्षितं, त इमे प्राणन्प्राणसाधनानि धनाशां च त्यक्त्वा युद्धेऽवस्थितास्तस्मान्नयोद्धुमिच्छामि।

यदि मानिलिउँ कि पाण्डु र पृथाको छोरो तिमिलाई राज्यको आकांक्षा छैन, तथापि स्वजनवर्गको लागि त राज्यको आकांक्षा त गर्न उचित नै छ। यसको उत्तर अर्जुन दिन्छन्- जुन बन्धु-बान्धवहरूको लागि राज्य, भोग, सुख इत्यादि को आवश्यकता छ, उनीहरू नै प्राण र त्यसको साधनभूत धनको आशा छोडेर यस युद्धमा उपस्थित छन्। यसैले मेरो युद्ध गर्ने इच्छा नै छैन॥३३॥

–★–★–★–

**आचार्याः पितरः पुत्रास्तथैव च पितामहाः।**
**मातुलाःश्वशुराः पौत्राः श्यालाः सम्बन्धिनस्तथा॥**

**गुरुजन, काका–बा, छोराहरू र त्यसै प्रकार हजुरबाहरू, मामाहरू, ससुरा, पौत्र, साला तथा अरू पनि सम्बन्धीहरू छन्॥३४॥**

ननु युद्धे वो हन्तुं शत्रव एव स्थिता, न बन्धव इति चेत्तत्राह–आचार्या इति स्पष्टार्थः। न ह्येतेभ्योऽन्यो भवन्तीति भावः।

यदि यो भने पनि कि युद्धमा तिमिहरूलाई मार्नको लागि शत्रुहरू उपस्थित छन्, यी तिमिहरूका बन्धु हैनन् र पनि यो कुरा ठिक होईन किनकी यहाँ त गुरु, पिता, छोरा तथा पितामहहरू, फेरि मामा, ससुरा, नाति, साला र अन्य सम्बन्धी नै युद्धको लागि डटेका छन्। भाव यो कि यीनिहरूलाई छोडेर अरू आफन्त नै को हुन सक्दछ ॥३४॥

–★–★–★–

**एतान्न हन्तुमिच्छामि घ्नतोऽपि मधुसूदन ।**
**अपि त्रैलोक्यराज्यस्य हेतोः किं नु महीकृते॥**

**हे मधुसूदन! मलाई मारे पनि अथवा तीनै लोकको राज्यका लागि पनि म यिनीहरूलाई सबैलाई मार्न चाहन्न; भने पृथ्वीको लागि त भन्नु नै के छ र?॥३५॥**

ननु यद्येतान्स्वकीयबन्धुबुद्ध्या त्वं न हनिष्यसि तर्हि त्वमेवैते राज्यलोभेन हनिष्यन्ति, तस्मात्त्वमेवैतान्हत्वा सकलपृथ्वीराज्यं कुर्विति चेत्तत्राह एतानिति। अस्मान् घ्नतोऽप्येतान् त्रैलोक्यराज्यस्य हेतोरहं हन्तुं नेच्छामि, महींकृते

यदि तिमि आफ्नो आफन्त सम्झेर यीनिहरूलाई मार्दैनौ भने यीनिहरू नै राज्यको लोभले तिमिलाई मार्ने छन्। यसैले तिमिनै यिनिहरूलाई मारेर समस्त पृथ्वीको राज्य गर। यस शंकाको उत्तर अर्जुन दिन्छन्- यिनिहरू द्वारा मारिए पनि, हे मधुसूदन! त्रैलोक्यको राज्यका लागि पनि म यिनीहरूलाई मार्ने इच्छा गर्दिन

महीमात्रराज्यप्राप्त्यर्थं न हन्यामिति किमुत वक्तव्यमित्यर्थः। मधुसूदनेति सम्बोधनेन त्वमपि दैत्यमेव हतवान्न स्वबन्धूनिति सूचितम्।

भने पृथ्वीमात्र को राज्यका लागि मार्नु त टाढैको कुरा भयो। 'मधुसूदन' सम्बोधनले यो ध्वनि निस्कन्छ कि तपाईंले पनि त आफ्नो शत्रु मधुदैत्यलाई नै मार्नुभयो आफ्नो बान्धवहरूलाई होईन॥३५॥

–★–★–★–

## निहत्य धार्तराष्ट्रान्नः का प्रीतिः स्याज्जनार्दन ।
## पापमेवाश्रयेदस्मान्हत्वैतानाततायिनः ॥

**हे जनार्दन! धृतराष्ट्रको छोराहरूलाई मारेर हामीलाई के प्रसन्नता हुन्छ र? यी आततायिहरूलाई मारेर त हामीलाई पाप नै लाग्दछ॥३६॥**

भवतु तथाऽप्यन्यान्विहाय युष्मद्वधे सदा कृतप्रयत्नानति–निर्घृणान्धृतराष्ट्रपुत्रांस्त्वं जहि। तद्धनने युष्माकं महती प्रीतिर्भविष्यतीत्यत आह– निहत्येति । धार्तराष्ट्रान्निहत्य नोऽस्माकं का प्रीतिस्यान्नकाऽपीत्यर्थः। ननु गराग्निदानादि–नैते आततायिन, अतस्तद्वधे दोषाभावश्च शास्त्रविहितः तथा हि–

अग्निदो गरदश्चैवशस्त्रपाणिर्धनापहः।
क्षेत्रदारहरश्चैव षडेते आततायिनः॥
आततायिनमायान्तं हन्यादेवाविचारयन्।
नाततायिवधे दोषो हन्तुर्भवतिकश्चन॥

–इति स्मृतेः। तस्माच्छस्त्रानुवर्तिना त्वया आततायि लक्षणसंपन्नाः दुर्योधनादयो हन्तव्या इति चेत् ''यस्य ब्रह्म च क्षत्रं च उभे भवत ओदनम्। मृत्युर्यस्योपसेचनम्।'' ''ब्रह्माणमिन्द्रं रुद्रं च यमं वरुणमेव च। प्रसह्य हरते यस्मात्तस्माद्धरिरितीर्य्यते।'' ''अत्ता चराचरग्रहणात्'' न कर्मणा लिप्यते पापकेने'त्यादिशास्त्राच्चराचरसंहारकोऽपि निर्दोषस्त्वमित्यभिप्रायेण संबोधयति जनार्दन इति। वयं तु न तथेत्याह–एतानाततायिनो हत्वाऽस्मान् पापमेवाश्रयेत्, बन्धुत्वात्, मातृपितृबन्धुबधस्य शास्त्रे महापातकत्वे–नोक्तत्वात्।

जे होस अरूलाई नमारे पनि धृतराष्ट्रका पुत्रहरू त सधैं तिम्रो वधको प्रयत्नमा नै लागि रहन्छन् र अति निर्घृण अर्थात् क्रूर छन् यीनीहरूलाई त मार। यिनीहरूलाई मारेर तिमिलाई ठूलो खुशी हुनेछ। यसको उत्तर अर्जुन दिन्छन् कि धृतराष्ट्रको पुत्रहरूलाई मारेर हामी कुन चैं खुशी पाउँदछौ अर्थात् केहि पनि पाउँदैनौं। तर यी दुर्योधन आदि त आततायि हुन् किनकी यिनीहरूले तिमिहरूलाई विष दिएका थिए र आगो मा जलाएर मार्ने चेष्टा गरेका थिए। यस्ता आततायीहरू लाई मारिदिए दोष हुँदैन, जस्तो कि शास्त्रमा लेखिएको छ– "अग्निदो०....आततायिनः॥ आततायिन०....भवतिकश्चन॥

आगो लगाउने, विष दिने, शस्त्रधारी, धनको अपहरण गर्ने, खेत र स्त्रीलाई हरने यी छः आततायी भनिन्छन्। आउँदै गरेको आततायीलाई देखेर त्यसलाई विचारै नगरी मारिदिनेलाई केहि दोष लाग्दैन। यसैले शास्त्रलाई मान्ने तिमिले यी दुर्योधन आदि आततायीहरूलाई मार्नु नै उचित छ। भगवान्‌को प्रश्नको उत्तर अर्जुन यस प्रकार दिन्छन्– हे जनार्दन!(जनार्दन भन्ने भाव यो हो कि तपाईं त चर–अचरलाई संहार गर्नेवाला हुनुहुन्छ, फेरि पनि निर्दोष हुनुहुन्छ, तर हामी त्यस्ता होईनौं।) यी आततायीहरूलाई मारेर हामीलाई पाप नै लाग्दछ, किनकी यी हाम्रा बन्धु हुन्, र माता, पिता र बन्धुको वधलाई शास्त्रमा महापातक भनेको छ। भगवान् चराचरको संहारक हुन् यस विषयमा शास्त्र नै प्रमाण छ–''यस्य ......सेचनम्।'' (कठोपनिषद् १।२।२५॥) ''ब्रह्माणमिन्द्रं.......तीर्य्यते।'' ''अत्ता चराचरग्रहणात्'' ब्र०सूत्र १।२।९॥"न कर्मणा लिप्यते पापकेन" इत्यादि
जसको ब्रह्मण र क्षत्रिय भोजन हुन। मृत्यु जसको चटनी हो अर्थात् घृतादिमा मिलाएर खानयोग्य भोज्य वस्तु जस्ता छन्। ब्रह्मा, रुद्र, इन्द्र, यम, वरुण सबैलाई बलात् आफ्नो अधिकारले हटाई दिनुहुन्छ। यसैले उहाँ "हरि" भनिनुहुन्छ। चर र अचरलाई खानुहुन्छ, यसैले उहाँलाई अत्ता अर्थात् खानेवाला भन्न सकिन्छ। पापकर्म गरेर पनि पापबाट लिप्त हुँदैनन्॥३६॥

–★–★–★–

## तस्मान्नार्हा वयं हन्तुं धार्तराष्ट्रान् स्वबान्धवान् ।
## स्वजनं हि कथं हत्वा सुखिनः स्याम माधव ॥

**यसैले हे माधव! आफ्नै बन्धु-बान्धव धृतराष्ट्रका छोराहरूलाई मार्नको लागि हामी योग्य छैनौं; किनकी आफ्नै कुटुम्बलाई मारेर हामी कसरी सुखी हुन सक्दछौं? ॥३७॥**

यस्माद्बन्धुवधे ऐहिकं पारलौकिकं च न किमपि फलं, प्रत्युत बन्धुबधजन्यपातकफलं नरकपातः स्यात्तस्मात्स्व-बान्धवान्धार्तराष्ट्रान्वयं हन्तु नार्हाः। यद्यपि विषाग्निदानाद् दुष्कषर्माण एते इति सत्यं, तथापि स्वजनं हत्वा वयं कथं सुखिनः स्याम। हीतिनिश्चयेनैव स्यामेत्यर्थः। माधवेति त्वमपि वंशबर्द्धको न तु वंशनाशक इति भावः।

किनकी आफन्तहरूलाई मारेर न यस लोकको फल मिल्दछ न परलोक को बरु उल्टै बन्धुवधको पापको फल, नरक भोग नै प्राप्त हुन्छ। यसैले हाम्रो लागि आफ्नो आफन्त धृतराष्ट्रका छोराहरूलाई मार्नु योग्य छैन। यद्यपि यिनीहरूले हामीलाई विष दिएर र आगोमा डढाउने चेष्टा गरेर दुष्कर्म गरेका छन् फेरि पनि आफ्ना स्वजनहरूलाई मारेर हामी कसरी सुखी हुन्छौ? अर्थात् कदापि सुखी हुन सक्दैनौ। 'माधव' शब्दले सम्बोधन गर्नुको अर्थ यो हो कि तपाईं पनि त आफ्नो वंशको वर्द्धक हुनुहुन्छ, न कि नाशक॥३७॥

-★-★-★-

## यद्यप्येते न पश्यन्ति लोभोपहतचेतसः ।
## कुलक्षयकृतं दोषं मित्रदोहे च पातकम् ॥

**यद्यपि लोभले भ्रष्टचित्त भएका यिनीहरू कुलको नाशले उत्पन्न दोषलाई र मित्रको विरोध गरेर हुने पापलाई पनि देख्दैनन्॥३८॥**

ननु यूयमपि तेषां स्वजना एव ते कथं युष्मद्वधे प्रवृत्ताः इति चेत्तत्राह-यद्यपीति। यद्यप्येते दुर्योधनादयो लोभोपहत-चेतसः लोभेनोपहतं नष्टं धर्मविषयं चेतो येषां ते तथा नष्ट धर्मज्ञानत्वात्कुलघ्नतादिदोषं पश्यन्तोऽपि न पश्यन्तीत्य-तोऽस्मद्वधे प्रवृत्ता इत्यर्थः।

तिमिहरू पनि त उनीहरूको स्वजन नै हौ, फेरि किन उनीहरू तिमिहरूलाई मार्नको लागि उद्यत छन्? यस प्रश्नको उत्तर अर्जुन यस प्रकार दिन्छन् कि यी दुर्योधनादिहरूको धर्म-विषयक बुद्धि लोभ ले नष्ट भईसकेको छ। जसको कारण यी कुलक्षयको दोष र मित्र सँग द्रोह गर्ने पापलाई देखेर पनि देख्दैनन्। तात्पर्य यो कि यसैले यिनीहरू हामीलाई मार्नको लागि तयार छन्॥३८॥

-★-★-★-

## कथं न ज्ञेयमस्माभिः पापादस्मान्निवर्तितुम् ।
## कुलक्षयकृतं दोषं प्रपश्यद्भिर्जनार्दन ॥

**तैपनि हे जनार्दन! कुलको नाशले उत्पन्न हुने दोषलाई जान्ने हामीहरूले यो पापबाट बच्नको लागि किन विचार (प्रयत्न) नगर्ने? ॥३९॥**

वयं तु न तथेत्याह-कथमिति। कुलक्षयकृतं दोषं प्रकर्षेण पश्यद्भिः अस्माभिश्रस्मात्पापान्निवर्त्तितुं कथं न ज्ञेयं? धर्मप्रर्वतकभवदाश्रयाणामस्माकं नाधर्मे प्रवृत्तिः स्या-दित्यस्माभिर्भवानद्यं ते याच्यते इति जनार्ददनेति सम्बो-धनभिप्रायः। कृत्यल्युटोर्बहुलमि'ति कर्मणि ल्युट्।

हामी त्यस्ता छैनौं, यस सम्बन्धमा भन्दछन् कि-कुलक्षयको दोष हामी पूर्णरूपले देखिरहेका छौं, भने हामी त्यस पाप बाट आफुलाई बचाउने विचार किन नगर्ने? यहाँ 'जनार्दन' शब्दले सम्बोधन गर्नुको तात्पर्य यो हो कि धर्मको प्रवर्त्तक तपाईंको आश्रयमा भएर हाम्रो अधर्ममा प्रवृत्ति नहोस, यही नै हाम्रो तपाईं सँग याचना छ। यहाँ जनार्दन शब्द मा 'अर्द' धातु याचनार्थक छ॥३९॥

-★-★-★-

**कुलक्षये प्रणश्यन्ति कुलधर्माः सनातनाः।**
**धर्मे नष्टे कुलं कृत्स्नमधर्मोऽभिभवत्युत॥**

**कुलको नाशले सनातन कुलधर्म नष्ट हुनजान्छ, धर्मको नाश भए पछि सम्पूर्ण कुलमा पाप पनि धेरै फैलिन्छ॥४०॥**

कुलक्षयकृतं दोषं प्रपश्यद्भिरित्युक्तमिदानीं तमेव दोषं प्रपञ्चयति–कुलक्षय इति। सनातनाः परम्परागताः कुलोचिताः धर्मा कुलक्षये धर्मानुष्ठातृपुरुषवर्गे नष्टे सति प्रणश्यन्ति। नैतावानेव दोषः किन्तु उत अन्योऽपि इत्यर्थः। अनुष्ठात्रभावाद्धर्मे धर्ममात्रे नष्टे समि कृत्स्नं कुलं यत्किञ्चिदवशिष्टं स्त्रीबालादिरूपम् अधर्मोऽभिभवति व्याप्नोति।

कुलक्षयको दोष हामीहरू जान्दछौं, यो भनेर अर्जुन अब ती दोषहरूको वर्णन गर्दछन्–

कुलको क्षय भएमा अर्थात् कुल धर्मको अनुष्ठान गर्ने पुरुषवर्ग नष्ट भएमा परम्परागत कुलोचित धर्मको नाश हुन जान्छ। यही मात्र होईन, अरू पनि दोष छन् कि अनुष्ठान गर्नेहरूको अभावले धर्मको नाश भएपछि सम्पूर्ण कुललाई अर्थात् कुलमा बचेका स्त्री, बालकहरूलाई अधर्मले घेर्दछ॥४०॥

–★–★–★–

**अधर्माभिभवात्कृष्ण प्रदुष्यन्ति कुलस्त्रियः।**
**स्त्रीषु दुष्टासु वार्ष्णेय जायते वर्णसङ्करः॥**

**हे कृष्ण! पाप धेरै फैलिए पछि कुलका स्त्रिहरू अत्यन्त दूषित हुन्छन् र हे वार्ष्णेय! स्त्रिहरू दूषित भएपछि वर्णसङ्कर उत्पन्न हुन्छन्॥४१॥**

ततश्च महान् दोषो न भवतीत्याह–अधर्मेति। अधर्मव्यापनात्कुलस्त्रियः प्रदुष्यन्ति यथेष्टाचारेण वर्त्तन्ते। भक्तानां पापकर्षकस्त्वं न तु पापे नियोजक इत्यभिप्रायेण कृष्णेति संबोधनं, वार्ष्णेयेति हे धर्मज्ञ! कुलप्रसूतस्त्रीषु दुष्टासु सतीषु वर्णसंकरो जायते।

कुललाई अधर्मले घेरेपछि ठूलो दोष पैदा हुन्छ, त्यसै दोषलाई यहाँ वर्णन गरिन्छ। हे कृष्ण!(कृष्ण सम्बोधन गर्नुको अर्थ यो हो कि तपाईं भक्तहरूका पापलाई कर्षण गर्ने(तान्ने) होईसिन्छ, पापमा लगाउनेवाला होईन) अधर्मले व्यापेपछि कुलको स्त्रिहरू स्वेच्छाचारिणी हुन्छन्। हे वृष्णिवंशमा उत्पन्न! हे धर्मलाई जान्ने! कुलको स्त्रिहरू जब दुष्टा हुन्छन् तब उनीहरूमा यो वर्णसंकर अथवा दोग्ला(ठिमाहा) पैदा हुन थाल्दछन्॥४१॥

–★–★–★–

**सङ्करो नरकायैव कुलघ्नानां कुलस्य च।**
**पतन्ति पितरो ह्येषां लुप्तपिण्डोदकक्रियाः॥**

**वर्णसङ्कर कुलघातिहरूलाई र कुललाई नरमा लिएर जानको लागि नै हुन्छन्। लुप्त भएको पिण्ड–पानीको क्रियावाला अर्थात् श्राद्ध र तर्पणले वञ्चित यिनीहरू का पितृ पनि अधोगति मा प्राप्त हुन्छन्॥४२॥**

संकरोत्पत्तिफलमाह–संकर इति जात्यन्तरपुरुषादन्यस्त्रियां जातः संकरः, कुलघ्नानां कुलस्य च नरकायैव भवति। न केवलं कुलघ्नानामेव नरकपातः, किन्तु तत्पितृणाम–पीत्याह–पतन्तीति। हि यतः संतत्यभावात् लुप्ता पिण्डो–दकक्रिया येषां कुलघ्नानां पितरः पतन्ति नरके इति शेषः।

अब यहाँ वर्णसंकरको उत्पत्तिको फल देखाउदछन्–

कुलमा दोग्ला उत्पन्न हुनाले कुलको नाश गर्ने वाला र कुलवाला दुबै नरकमा जान्छन्। यही मात्र होईन पितृ पनि नरकमा पर्दछन्। सन्तान नहुँदामा पितृहरूलाई पिण्ड–पानी मिल्दैन, यसैले कुलको नाशगर्नेहरूको पितृ नरकमा पर्दछन्॥४२॥

–★–★–★–

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

**दोषैरेतैः कुलघ्नानां वर्णसङ्करकारकैः। उत्साद्यन्ते जातिधर्माः कुलधर्माश्च शाश्वताः॥**
**उत्सन्नकुलधर्माणां मनुष्याणां जनार्दन। नरकेऽनियतं वासो भवतीत्यनुशुश्रुम॥**

**यी वर्णसङ्करकारक दोषहरूबाट कुलघातिहरूका सनातन कुल-धर्म र जाति-धर्म नष्ट हुन्छन्, हे जनार्दन! जसको कुल-धर्म नष्ट भएको छ, त्यस्तो मनुष्यको अनिश्चित कालसम्म नरकमा वास हुन्छ, यस्तो कुरा मैले सुन्दै आएको छु॥४३-४४॥**

संकरस्य कुलतत्पितृणामनर्थकरत्वमुक्तमिदानीं तद्धेतु-भूतपुरुणाणामस्त्रदुःखानुभूतिरूपं फलमाह-दोषैरितिद्वाभ्याम्। जातिधर्माः ब्राह्मणत्वक्षत्रियत्वादिजात्यसाधरणा वेदविहिताः कुलधर्माश्च शाश्वताः परमश्रेयः साधनभूताः सदाचार्योपदिष्टा वेदवेदान्तनिर्णीता भगवदुपासनादिप्रधानाः कुलघ्नानां वर्णसंकरकारकैरेतैदोषैरुत्साद्यन्ते विनाश्यन्ते। धर्मोच्छेदात्तेषां नरके नियतं निवृत्तिवर्जितमजस्त्रमित्यर्थः यथास्यात्तथा वासो भवतीत्यतो महानर्थकारणं बन्धुवधकरं युद्धम्।

संकरहरूको कुल र उनीहरूका पितृहरूको अनिष्ट भनिसके। अब संकरहरूका कारणभूत पुरुषहरूको कहिले पनि नछुट्ने दुःखरूप फलको वर्णन गरिन्छ- कुलको नाश गर्नेवालाहरू का यी वर्णसंकरहरूलाई उत्पन्न गर्ने दोषले जातिधर्म, अर्थात् ब्राह्मण, क्षत्रिय इत्यादिक वेदले प्रतिपादित विशेष-धर्म र कुलधर्म अर्थात् परमकल्याणको साधनभूत श्रेष्ठ आचार्यहरू द्वारा उपदेश गरिएको वेद-वेदान्तले निश्चय गरिएको भगवदुपासनारूप प्रधान धर्म, यी दुबै धर्म नष्ट हुन्छन्। हे जनार्दन! जो मनुष्य कुलधर्मको नाश गर्दछन् ती धर्मको नाश गर्नाले सदा नरकमा वास गर्दछन्, यस्तो हामीले सुनेका छौं। यसैले बन्धुहरूको नाश गर्ने यो युद्ध ठूलै अनर्थको कारण हो॥४३-४४॥

-★-★-★-

**अहो बत महत्पापं कर्तुं व्यवसिता वयम्।**
**यद्राज्यसुखलोभेन हन्तुं स्वजनमुद्यताः॥**

**अहो! कस्तो आश्चर्य र दुःखको कुरा, हामी बुद्धिमान भएर पनि महान् पाप गर्नको लागि तयार भएका छौं; जुन कि राज्य र सुखको लोभले स्वजनलाई नै मार्न उद्यत भएका छौं।॥४५॥**

यस्मादेवं तस्मादनर्थेऽर्थबुद्ध्या तदध्यवसायिनो वयं महामूढा इति श्चात्तापं कुर्वन्नाह-अहो बत इति खेदे वयं, महत्पापं कर्तुं व्यवसिता निश्चयं कुर्वन्तः। यद्यस्माद्रा-राज्यसुखलोभेन स्वजनं हन्तुमुद्यता इति।

जब यस्तो कुरा हो भने, तब हामीले अनर्थ गर्नेवाला विषयलाई लाभदायक सम्झेर ठूलो भूल गरेका छौं। यस प्रकार पश्चात्ताप गर्दै अर्जुन भन्दछन्- ठूलो दुःखको कुरो हो कि हामीहरू ठूलो पाप गर्न उतारू भएका छौं, किनकी राज्यसुखको लोभले आफ्नो बन्धु-बान्धवहरूलाई मार्नको लागि उद्यत भएका छौं॥४५॥

-★-★-★-

**यदि मामप्रतीकारमशस्त्रं शस्त्रपाणयः।**
**धार्तराष्ट्रा रणे हन्युस्तन्मे क्षेमतरं भवेत्॥**

**यदि शस्त्ररहित र सामना नगर्नेवाला मलाई शस्त्र हातमा लिएका धृतराष्ट्रको छोराहरूले युद्धमा मारे भने त्यो मार्नु पनि मेरो लागि धेरै कल्याणकार हुन्छ॥४६॥**

ननु बन्धुकृपामोहेन त्वयिनिर्विण्णेऽपि परेषां भीमादीनां च निर्वेदाभावाद्राज्यहेतोस्ते परस्परं योत्स्यन्त एव ततौ युद्धाऽवेशेन धार्तराष्ट्रस्त्वामपि हनिष्यन्ति चेत्तदा त्वया किं कर्तव्यमिति चेत्तत्राहयदीति। अप्रतीकारं प्राणत्राणाय

माने कि तिमि बन्धु-कृपा ले उत्पन्न मोहको कारण लड़ाईंबाट विरक्त होऊ, तर भीमादि त वैराग्यको अभावले राज्यको लागि जरूर लड्ने छन्। तब युद्धको आवेशमा आएर यदि दुर्योधनादिले तिमिलाई नै मारिदिए भने तिमि के गर्छौ? यस प्रश्नको उत्तर अर्जुन यहाँ दिन्छन्- यदि हातमा शस्त्र लिएका धृतराष्ट्रका पुत्रहरू

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

प्रतीकारमकुर्वन्तमत एवाशस्त्रं मां यदि शस्त्रपाणयः धार्तराष्ट्राः लोभाऽऽविष्टचेतस्त्वेन नष्टज्ञाना रणे हन्युश्चेत्तर्हि अजस्त्रनरकफलाद्बन्धुबधात्तन्मरणं मे क्षेमतरं भवेदत्यर्थं हितं भवेत्। एतच्छरीरनाशेऽपि किमहं पापमकरवं किमहं साधुनाकरवमित्येवं पश्चात्तापाभावादितिभावः।

**जसको ज्ञान लोभले छोपिएको हृदयको कारण नष्ट भएको छ, म आफ्नो प्राण बचाउनको लागि केही पनि उद्योग गर्दिन र यसैले निशस्त्र छु, लडाईंमा मार्दछन् भने यो कुरा बन्धुहरूलाई मारेर जो पापको फलस्वरूप मलाई अजस्त्र नरक मिल्नेछ त्यो भन्दा कहीं अधिक कल्याण कारक हुन्छ। भाव यो कि शरीर छुटिसके पछि यो पश्चात्ताप कि 'मैले बन्धुहरूलाई मारेर नराम्रो कर्म किन गरे, राम्रो कर्म किन गरिन' हुने छैन॥४६॥**

-★-★-★-

## सञ्जय उवाच

## एवमुक्त्वार्जुनः सङ्ख्ये रथोपस्थ उपाविशत्।
## विसृज्य सशरं चापं शोकसंविग्नमानसः॥

**सञ्जय भन्दछन्- रणभूमिमा शोकले उद्विग्न मन भएका अर्जुन यसप्रकारले भनेर बाणसहित धनुषलाई त्यागि रथको पछिल्तिर गएर बसे॥४७॥**

ततः किं वृत्तमिति धृतराष्ट्रापेक्षायां सञ्जय उवाच-एवमिति। शोकेन संविग्नं व्यार्पितं मानसं यस्य सोऽर्जुनः संख्ये संग्रामे पूर्वोक्तप्रकारेणोक्त्वा सशरं चापं विसृज्य रथोपस्थे रथोपर्युपवेशनस्थाने उपाविशत्।

**त्यस पछि के भयो? धृतराष्ट्रको यस प्रश्नको उत्तरमा संजयले भने-शोकले दुःखित हृदयभएको अर्जुन युद्धभूमिमा यस प्रकार भनेर धनुष-वाण फ्याँकि रथमा लुकेर बस्ने स्थानमा गएर बसे॥४७॥**

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयिश्रीकेशवकाश्मीरिभट्टाचार्यविरचितायाम् अर्जुनशोकवर्णन उपोद्घाताख्य प्रथमोऽध्यायः॥१॥

--★--★--★--

ॐ श्रीपरमात्मने नमः

# अथ द्वितीयोऽध्यायः

## सञ्जय उवाच

**तं तथा कृपयाविष्टमश्रुपूर्णाकुलेक्षणम् ।**
**विषीदन्तमिदं वाक्यमुवाच मधुसूदनः ॥**

**सञ्जय भन्दछन्- त्यस प्रकार करुणाले व्याप्त र आँसुहरूले पूर्ण तथा व्याकुल नेत्रभएका शोकयुक्त ती अर्जुनलाई भगवान् मधुसूदनले यो कुरा भन्नुभयो॥१॥**

एवं बन्धुवधपापभयेन युद्धादुपरतमर्जुनं श्रुत्वा निवृत्तपुत्र-राज्यापायभयं तदुत्तरवृत्तान्तं जिज्ञासुं धृतराष्ट्रं प्रति सत्वादी सञ्जय उक्तवानित्याह वैशम्पायनः-सञ्जय उवाचेति। उक्तप्रकारेण यथा मायोक्तम् तथा स्वभाविक्या कृपया आविष्टमत एव विषीदन्तं विषादं कुर्वन्तमत एवाश्रुपूर्णा-कुलेक्षणम् अश्रुभिः पूर्णेऽत एवाकुले ईक्षणे यस्य तमर्जुनं मधुसूदन इदं वक्ष्यमाणं वाक्यमुवाच। दैत्यराजस्य मधोरपि सूदनो निहन्ता वासुदेवो क्षत्रियरूपेणावतीर्णे दुष्ट-दैत्यान् पृथ्वीभारभूतान् सर्वान्हनिष्यतीति मधुसूदनशब्दाभिप्रायः।

वैशम्पायनले भन्नुभयो-बन्धुहरूका बधको पापका डरले अर्जुन लड़ाईंबाट विमुख भए, यो कुरा सुनेर धृतराष्ट्रलाई आफ्ना छोराहरूको राज्यनाशक भय भाग्नलाग्यो, परन्तु त्यस पछिको वार्त्ता जान्नको लागि उसको प्रबल इच्छा भयो, यसैले सत्यवादी संजय अगाडीको वार्ता यस प्रकार भन्न थाले-

आफ्नो बन्धुको प्रति स्वभाविक करुणाले व्याप्त भएर दुःख गर्दै तथा आँसूले टिल्पिल भईरहेको आँखा भएको अर्जुनको प्रति भगवान् मधुसूदनले निम्नलिखित कुरा भन्नुभयो-
'मधुसूदन' शब्दको प्रयोग को यहाँ यो मतलब हो कि क्षत्रियरूपले अवतीर्ण मधुराक्षसलाई मार्नेवाला भगवान् वासुदेव पृथ्वीको भारभूत दुष्ट दैत्यहरूको जरूर विनाश गर्नुहुन्छ॥१॥

-★-★-★-

## श्रीभगवानुवाच

**कुतस्त्वा कश्मलमिदं विषमे समुपस्थितम् ।**
**अनार्यजुष्टमस्वर्ग्यमकीर्तिकरमर्जुन ॥**

**श्रीभगवान्‌ले भन्नुभयो- हे अर्जुन! तिमिलाई यस असमयमा यो मोह के कारणले प्राप्त भयो? किनकी न त यो श्रेष्ठ पुरुषहरूद्वारा आचरित छ, न त स्वर्गलाई दिन्छ र न त कीर्ति नै॥२॥**

भगवद्वाक्यमवतारयति- श्रीभगवानुवाचेति। स्वभावि-कैश्वर्यादिषड्गुणानां नित्याश्रयभूतो भगवच्छब्दवाच्यो वासुदेवः स्वभक्तविहितं चिकीर्षुः कुतस्त्वामिति द्वाभ्या- मुक्तवानित्यर्थः। हे अर्जुन! बन्धुकृपाव्यामोहकृता- श्रुपातपुरः सरं स्वधर्मवैमुख्यकरं युद्धात्पराङ्मुखत्वमिदं कश्मलं मानसं कथमनार्य्यैरधर्मवद्भिर्जुष्टं सेवितमतए- वास्वर्ग्यं स्वर्गविरोधि अकीर्तिकरं च विषमे शोकानर्हस्थाने संग्रामे त्वा त्वां सर्वक्षत्रप्रवरस्यपाण्डोः पुत्रं कुतो हेतोरुपस्थितं प्राप्तम्।

भग अर्थात् ऐश्वर्यादि षड् गुणहरूको नित्य आश्रय श्रीवासुदेव आफ्नो भक्त अर्जुनको हितको कामनाले उनी सँग यस्तो भन्न लाग्नुभयो- हे अर्जुन! स्वधर्म देखि विमुख गर्ने,युद्ध देखि पछाडि हटाउने र जसको कारण तिमि बन्धुहरू माथि कृपा देखाउँदै रोईरहेको छौ, यस्तो हृदयको दुर्बलता तिमिलाई यस शोकको अयोग्य संग्राम स्थलमा कहाँ बाट र किन आयो? यो दुर्बलता अनार्यको योग्य, स्वर्गको विरोधि र तिम्रो अपकीर्ति गर्नेवाला हो॥२॥

-★-★-★-

**क्लैब्यं मा स्म गमः पार्थ नैतत्त्वय्युपपद्यते।**
**क्षुद्रं हृदयदौर्बल्यं त्यक्त्वोत्तिष्ठ परन्तप॥**

**यसैले हे अर्जुन! नपुंसक जस्तो नबन, तिमी यस्तो देखिनु राम्रो हुँदैन। हे परंतप! हृदयको तुच्छ दुर्बलता लाई त्यागेर युद्धको लागि खड़ा होऊ॥३॥**

हे पार्थ! पृथया आराधितदेवराजप्रसादाल्लब्धस्तद्वीर्यातिशयसंपन्नः पुत्रस्त्वं क्लब्यं क्लीवभावं तेजोवीर्यादिनाशकं मा गमः। एतत्कश्मलं च त्वयि साक्षान्महादेवतोषकार्यद्भुतयुद्धकारिणि नोपपद्यते। यच्च त्वयोक्तं- 'न च शक्नोम्यवस्थातुं भ्रमतीव च मे मनः' अति तत् क्षुद्रमतितुच्छं यतो हृदयदौर्बल्यं हृदयस्य दौर्बल्यं कृपामोहजन्यं कातर्य्यं त्यक्त्वा कुलोचितधैर्यावलम्बनेनापीयोत्तिष्ठ। तत्र हेतुगर्भितसंबोधनमाह-हे परन्तप! परान् शत्रूंस्तापयति इति तथा सर्वान् शत्रून् जेष्यतीति जन्मसमये देववाण्याऽप्युक्तत्वादिति भावः।

हे पार्थ!(यहाँ पार्थ शब्दले अर्जुनलाई सम्बोधन गर्नुको भाव यो हो कि हे अर्जुन! तिमि पृथाको पुत्र हौ जसले इन्द्रको कृपाले तिमिलाई प्राप्त गरेको थिईन्, यसैले तिमि इन्द्रको बल ले युक्त छौ।) तेज र वीर्यको नाशक यस क्लीबता अर्थात् हृदयको दुर्बलता लाई छोडिदेऊ। साक्षात् महादेवजीलाई पनि लड़ाईंमा अद्भुत रीतिले युद्ध गरेर संन्तुष्ट गरिदिने तिमिमा यो मोह र दुर्बलता सुहाउँदैन। हे परन्तप! अर्थात् शत्रुहरूलाई दुःख दिनेवाला(परन्तप भन्नुको अर्थ यो हो कि तिमि शत्रुहरूलाई अवश्य जीत्नेछौ र तिमी जन्मिएको बेलामा पनि आकाशवाणी ले यही कुरा भनेको थियो) 'न च शक्नोम्य०' भनेर जुन तिमिले आफ्नो तुच्छ कातरता प्रकट गरेको छौ, त्यस कृपा र मोहले उत्पन्न कातरतालाई छोड र स्वकुलोचित धैर्य अवलम्बन गरेर उठ॥३॥

-★-★-★-

## अर्जुन उवाच

**कथं भीष्ममहं सङ्ख्ये द्रोणं च मधुसूदन।**
**इषुभिः प्रति योत्स्यामि पूजार्हावरिसूदन॥**

**अर्जुन भन्दछन्- हे मधुसूदन! म रणभूमिमा कसरी आफ्नो बाणले भीष्मपितामह र द्रोणाचार्यको विरुद्ध युद्ध गरूँ? किनकी हे अरिसूदन! वहाँहरू दुईजनै पूजनीय हुनुहुन्छ॥४॥**

ननु भगवदुक्तं सर्वं सत्यं, तथापि सत्कुलीनेन परम्पराप्राप्तस्वार्माविरोध्येव युद्धं कर्त्तव्यं, न तु धर्मनाशकमित्यभिप्रायवानर्जुनः श्रीकृष्णं प्रत्युक्तवानित्याह सञ्जयः-अर्जुन उवाचेति। तदेव वाकयमाह-कथमिति। भीष्मं पितामहं द्रोणं चाचार्यं संख्ये संग्रामेऽहं कथं प्रतियोत्स्यामि, न कथमपीत्यर्थः तत्रापीषुभिः? याभ्यां सह वाचाऽपि युद्धमनुचितं किं पुनः प्राणहारिभिः शरैरित्यर्थः। कुतो यतस्तौपूजार्हौ दुर्योधनादिभिरस्मद्धर्मनाशाय पुरस्कृतौ। 'गुरुं हुंकृत्य तुंकृत्य विप्रं निर्जित्य वादतः। अरण्ये निर्जले स्थाने स भवेद्ब्रह्मराक्षसः॥' इत्यादिशास्त्रोक्तं गुरोर्वचनाऽवज्ञाऽऽचरणमपि महादोषं जानद्भिरस्माभिः कथं तन्निधननिमित्ते युद्धे वर्तितव्यमिति भावः।

यद्यपि भगवान्ले जे-जे भन्नुभयो त्यो सबै सत्य हो, तथापि सत्कुलोत्पन्न व्यक्तिले धर्मको अविरोधि युद्धमात्र गर्नु पर्दछ, यस्तो युद्ध होईन कि जसले धर्मको नाश गरोस। यसै अभिप्रायले अर्जुन भगवान् सँग भन्दछन्- पितामह भीष्म र गुरु द्रोणाचार्यको विरुद्धमा लड़ाईं कसरी गर्न सक्दछु अर्थात् कहिले पनि लड्न सक्दिन त्यो पनि वाणको द्वारा। जसको साथमा वाग्युद्ध गर्नुपनि अनुचित छ उनै माथि प्राणहारी वाणको प्रहार कसरी गर्न सक्दछु। किनकी उहाँ दुबै जना हाम्रा पूज्य हुन् र धर्मको नाश गर्नको लागि नै दुर्योधन ले उहाँहरूलाई समरभूमिमा अगाडी राखेको छ। शास्त्रको वचन छ-
'गुरुं हुंकृत्य०........।.......ब्रह्मराक्षसः॥' अर्थात् गुरु सँग जसले हँकार या तँकार पूर्वक बोल्दछ र ब्राह्मणलाई वितण्डावादले जित्दछ, त्यो जलशून्य प्रदेशमा ब्रह्मराक्षस हुन्छ। यस्तो अवस्थामा गुरुलाई अवज्ञा वचनमात्र भन्नाले पनि हुने महान् दोषलाई जानेर पनि उनै गुरुहरूको नाशगर्ने युद्धमा हामी कसरी लाग्नु?॥४॥

-★-★-★-

**गुरूनहत्वा हि महानुभावान् श्रेयो भोक्तुं भैक्ष्यमपीह लोके ।**
**हत्वार्थकामांस्तु गुरूनिहैव भुञ्जीय भोगान् रुधिरप्रदिग्धान्॥**

**यसैले यी महानुभाव गुरुजनहरूलाई नमारिकन म यस लोकमा भिक्षाको अन्न खानु पनि कल्याणकारक सम्झिन्छु; किनकी गुरुजनहरूलाई मारेर यस लोकमा रगतले भिजेका अर्थ र कामरूप भोगहरूलाई नै त भोगिरहेको हुन्छु॥५॥**

ननु पूजार्हाविति सत्यमुक्तं तथापि भीष्मद्रोणकृपाणां पौत्रत्वेन शिष्यत्वेन च धार्तराष्ट्रा यूयं च समा एव योगक्षेमेण रक्षणीयाः, कथं ते धार्तराष्ट्रानुवर्तिनो भूत्वाऽनपकारिणां शिष्याणां शत्रव इव राज्यप्राप्तिविरोधिनो युद्धाय प्रवृत्ताः अतः कार्याकार्यविवेकरहिता उत्पथगामिनस्त्वतो बधार्हाः। उक्तं च भीष्मेणैव–

'गुरोरप्यवलिप्तस्य कार्याकार्यमजानतः।
उत्पथप्रतिपन्नस्य परित्यागोऽभिधियते॥'

इति चेत्तत्राह–गुरूनिति। महानुभावः सर्वसामर्थ्यरूपः प्रभावो येषां तान् गुरून् हत्वा इहास्मिंल्लोके भैक्ष्यं भिक्षितान्नाद्यपि भोक्तुं श्रेयः, परलोकश्रेयोविरोधि पापस्पर्शाभावादित्यर्थः। महानुभावत्वादेव तेषां नावलिप्तत्वादिदोष योगः तत्त्यागवचनमपि कालकामादिजयनशीलानां तेषामेवोपपद्यते, नेतरेषाम्–

नैतत्समाचरेज्जातु मनसापि ह्यनीश्वरः।
विनश्यत्याचरन्मौढ्याद्यथाऽरुद्रोऽब्धिजं विषम्॥

–इति वचनात्। ननु–

अर्थस्य पुरुषो दासस्त्वर्थो दासो न कस्यचित्।
इति सत्यं महाराज! बद्धोऽस्म्यर्थेन कौरवैः॥

–इति तद्वाक्येनैव तेषामर्थकामपरत्वान्न तद्धननं दोषावहमित्याशङ्क्याह हत्वेति। अथकान्गुरुन् हत्वा इहैव भोगान् भुञ्जीय अश्नीयां गुरुबधजनितमहापातकेन तन्नाशादित्यर्थः। इहापि न शुद्धान् किन्तु रुधिरप्रदिग्धान् रुधिरेण प्रकर्षेणोपचितान्॥

यदि भगवान् यो भन्नुहुन्छ कि भीष्म, द्रोण पूज्य त छन् तर पौत्र र शिष्यको नाताले तिमि र दुर्योधन त उनीहरूका लागि बराबर हौ भने उनीहरू दुर्योधनको पक्ष लिएर तिम्रो प्रति शत्रुताको व्यवहार किन गर्दछन्? तिमिले त उनीहरूको कुभलो केही गरेका छैनौ, फेरि पनि तिम्रो राज्य प्राप्तिको विरोधि युद्धमा उनीहरू प्रवृत्त छन्, अतएव उनीहरू मार्न योग्य छन्, किनकी भीष्मले नै भन्नुभएको छ कि–

'गुरो...............यते॥'

अर्थात् गुरु पनि यदि सत् र असत् कार्यको विवेकले रहित, दर्पयुक्त तथा उल्टो बाटो हिड्नेवाला छ भने ती त्याग गर्न नै योग्य छन्। यस शंका को अर्जुन यसरी यस श्लोकमा दिन्छन्। अर्जुन भन्दछन् कि सर्व सामर्थ्यले युक्त गुरुहरूलाई नमारेर यस संसारमा भीख माँगेर खानु राम्रो हो, किनकी यसमा परलोक प्राप्तिको विरोधि पापको स्पर्शमात्र पनि छैन। भन्नुको तात्पर्य यो कि उहाँहरू महानुभाव हुनुहुन्छ, यसैले उहाँहरूलाई अवलिप्त आदि दोष लाग्दैनन् र उहाँहरूको परित्यागको वचन पनि सबैको लागि होईन। त्यो त काल र कामलाई जसले जीतेको छ त्यसैको लागि हो किनकी भनेको छ–'नैतत्समाचरेज्जातु .................. विषम्॥' अर्थात् सामर्थ्यहीन पुरुष यस कार्य(गुरुको त्यागादि कार्य) नगर्नु, होईन भने शिवजीको विषपानको अनुकरण गर्नेवालाको समान त्यो नष्ट हुनजान्छ। फेरि यदि भगवान् भन्नुहुन्छ कि भीष्म, द्रोण अर्थकामी हुन्, जस्तो कि भीष्मले स्वयं भन्नुभएको छ–

'अर्थस्य .................कौरवैः॥'

अर्थात् मनुष्य अर्थ(धन)को दास हो। अर्थ कसैको दास होईन। यो सत्य हो। हे महाराज! हामी कौरवहरूका अर्थले बाँधिएका छौं। यस्तो हालतमा यिनीहरूलाई मार्न केही दोष पनि हुँदैन। यस शंकाको उत्तर अर्जुन यस प्रकार दिन्छन् कि यी अर्थकामी गुरुहरूलाई मारेर यिनीहरूको रगतले भिजेको यसै पनि यहाँ अशुद्ध, भोग केवल यस संसारमा नै भोग्न सकिन्छ, किनकी गुरुपातकले दूषित भोग चिर स्थाई अर्थात् परलोकमा प्राप्त हुन सक्दैन॥५॥

–★–★–★–

**न चैतद्विद्मः कतरन्नो गरीयो यद्वा जयेम यदि वा नो जयेयुः।**
**यानेव हत्वा न जिजीविषामस्तेऽवस्थिताः प्रमुखे धार्तराष्ट्राः॥**

**हामी यो पनि जान्दैनौं कि हाम्रो लागि युद्ध गर्नु र नगर्नु–यी दुईकुरामा कुन श्रेष्ठ छ, अथवा यो पनि जान्दैनौं कि उनीहरूलाई हामी जित्लेछौं वा उनीहरूले नै हामीलाई जित्लेछन्। र जसलाई मारेर हामी बाँच्न पनि चाहँदैनौं, तिनै हाम्रा आत्मीय धृतराष्ट्रका छोराहरू हाम्रो मुकाबला गर्न खडा भएका छन्॥६॥**

ननु शास्त्रविहितं क्षत्रियस्यश्रेयो युद्धरूपं स्वधर्मं विहाय परधर्मं भैक्ष्यं कथं श्रेयो मन्यसे इत्यत आह– न चैतदिति। भैक्ष्यं वा युद्धं वा नोऽस्माकं कतरत् गरीयः श्रेष्ठमेतद्वयम् न विद्मः। युद्धांगीकारेऽपि यद्वा तान् वयं जयेम, यदि वा नोऽस्मान् ते जयेयुरेतच्च न विद्मः। किञ्च जयोऽप्यस्माकं पराजय इत्याहयावानेवेति। यान् बन्धूनेव हत्वा वयं न जिजीविषामो जीवितं नेच्छामस्ते धार्तराष्ट्राः प्रमुखेऽवस्थिताः।

यदि भगवान् यसो भन्नुहुन्छ कि शास्त्रमा विहित क्षत्रियहरूको कल्याणकर युद्धरूप आफ्नो धर्मलाई छोडेर परधर्म(भीख माग्नु) किन श्रेष्ठ मानिरहेको छौ भने अर्जुन यसको उत्तर दिन्छन्– भीख माग्नु वा युद्ध गर्नु यी दुबैमा हाम्रो लागि कुल चैं श्रेष्ठ छ यो थाहा पाउन सकेको छुईन। फेरि युद्ध गर्दा पनि हामी दुर्योधन–हरूलाई जीत्दछौं या उनीहरू नै हामीलाई जीत्दछन यो पनि जान्दिन। र फेरि हाम्रो जीत पनि त हारको बराबर नै हुन्छ, किनकी जुन बन्धुहरूलाई मारेर हामी बाँच्न पनि चाहँदैनौं, तिनीहरू नै यस लडाई मा हाम्रो सामने उभिएका छन्॥६॥

–★–★–★–

**कार्पण्यदोषोपहतस्वभावः पृच्छामि त्वां धर्मसम्मूढचेताः।**
**यच्छ्रेयः स्यान्निश्चितं ब्रूहि तन्मे शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम्॥**

**यसैले कायरतारूप दोषले ढाकिएको स्वभाववाला र धर्मको विषयमा मोहितचित्त भएको म हजुर सँग यो भन्दछु कि जुन साधन कल्याणकारक छ, त्यो मेरो लागि भन्नुहोस; किनकी म हजुरको शिष्य हूँ यसैले हजुरको शरणमा आएको मलाई शिक्षा दिनुहोस॥७॥**

एवं चेत्कि त्वया स्वश्रेयो निश्चितमित्यपेक्षायां ‘यो ब्रह्माणं विदधाति पूर्वं यो वै वेदाश्च प्रहिणोति तस्मै,तं ह देवमात्मबुद्धिप्रकाशं मुमुक्षुर्वै शरणमहं प्रपद्ये। यो ब्रह्माणं विदधाति पूर्वं, यो विद्याञ्च तस्मै गोपायतिस्म कृष्णः, तं देवमात्मबुद्धिप्रकाशें मुमुक्षुर्वै शरणं व्रजेत्, ये तु कृष्णं प्रपद्यन्ते न ते मुह्यन्तिमानवाः। भये महति मग्नानां त्राता नित्यं जनार्दने’त्यादिश्रुतिस्मुतिप्रतिपादितां भगवदुपसत्तिमेव सर्वसाधनेषु गरीयसीं मनसि निधाय स्वहिताहितज्ञानकौशलं विहाय ब्रह्मरुद्रदिभिरनवगतमहिमानमचिन्त्यगुणशक्तिकं कारुण्यवात्सल्यादिगुणार्णवं स्वभक्तहिताय वसुदेव–गृहेऽवतीर्णं साक्षात्परमात्मभूतं(भगवन्तं) त्वमेव शरणं व्रजामि इत्याह– कार्पण्येति। ‘यो वा एतदक्षरमविदित्वा गार्ग्यस्माल्लोकात्प्रैति स कृपणः’। इति श्रुतेः पूर्वप्रति–पादिताक्षरशब्दवाच्यसूर्यचन्द्रवायुवह्नीन्द्रादिसर्वजगन्नियन्तृप–

यदि यस्तो कुरा हो भने तिमिले आफ्नो श्रेय के निश्चय गर्यौ? यस प्रश्नको अपेक्षा गरेर अर्जुन भन्दछन् कि हे भगवान्। यो श्रुतिहरूमा लेखिएको छ कि–
‘यो............व्रजेत्॥’
अर्थात् जुन परमात्मा सृष्टिको आरम्भमा ब्रह्माको सृष्टि गरेर उनलाई स्वाधिकारमा स्थापना गरेर उनलाई यस अधिकारको निर्वाहको लागि वेदको शिक्षा दिनुहुन्छ, आत्मा(जीवहरू)को बुद्धिको प्रकाशक त्यसै देवको शरणमा मोक्षको इच्छुक म पनि जान्छु। जुन कृष्ण सृष्टिको आरम्भमा ब्रह्मालाई पैदा गरेर उनको लागि विद्या(वेद)को रक्षा गर्नुहुन्छ, उनै आत्मबुद्धिको प्रकाशक देवको शरणमा मुक्ति चाहनेवाला जाउन। फेरि स्मृतिमा लेखिएको छ कि– ‘ये ..........जनार्दनः’
अर्थात् जुन मनुष्य कृष्णको शरणमा जान्छ, त्यसलाई कहिले पनि मोह हुँदैन। ठूलो भयंकर भयमा परेकाहरूको रक्षक श्री जनार्दन नै हुनुहुन्छ।
यसैले आफ्नो हित–अहितलाई जान्ने कुशलतालाई छोडेर र मनमा यो निश्चय गरी सबै साधनहरूमा भगवान्को ‘शरणागति’ नै सबैभन्दा श्रेष्ठ साधन हो, म हजुरको शरण मा छु। हजुर साक्षात्

रमात्मस्वरूपगुणादिज्ञानहीनः कृपणः इत्युच्चते शास्त्रे। लोके तु स्वल्पमपि द्रव्यव्ययं कर्तुमक्षमः कृपणस्तस्य भावः कार्पण्यं तन्निमित्ते एतत्स्वजनबधेऽस्मज्जीवने निरर्थकमिति मोहरूपो दोषस्तेनोपहतो विवेकात्मको स्वभावो यस्य अतएव धर्मे संमूढम् चेतो यस्य सोऽहं त्वां स्वभावतोऽपास्तसमस्तदोषं सर्वज्ञं पृच्छामि। किं ? यत् निश्चितम् असंदिग्धं श्रेयः परमपुरुषार्थभूतं हितं स्यात्तन्मे मह्यं ब्रूहि। हितोपदेशस्यात्मनो योग्यतामाह– शिष्यस्तेऽह–मिति। तव शासनयोग्योऽहम् अतः सखित्वान्मम तुल्योऽयं नोपदेशार्ह इति न शंकनीयं त्वया,तस्मात्त्वां प्रपन्नं शरणागतं मां त्वं शाधि स्वकरुणावशेन शिक्षयेत्यर्थः।

**परब्रह्म हुनुहुन्छ। भक्तहरूको हितका लागि वसुदेवको घरमा अवतार लिनुभएको छ। ब्रह्मा, रुद्र पनि हजुरको महिमा, गुण र शक्तिको कल्पना गर्न सक्दैनन्। र हजुर कारुण्य, वात्सल्य आदि गुणहरूको समुद्र होईसिन्छ।**

**यीनै माथिको भावहरूलाई दर्शाउँदै अर्जुन भन्दछन् कि आफ्नो बन्धुहरूलाई मारेर हाम्रो जीवन निरर्थक हुनजान्छ, यस्तो कृपणताले मेरो विवेक छोपिन गएको छ र धर्मको विषयमा मेरो हृदयमा मोह वा भ्रान्ति उत्पन्न भएको छ। यसैले म, समस्त दोषहरू बाट स्वभावैले रहित र सर्वज्ञ हजुर सँग सोद्धछु कि जो निश्चित रूपमा नै मोक्ष दिने बाटो हो, त्यो मलाई भनिदिनुहोस। हजुरको हितोपदेश सुन्नको लागि म मा योग्यता पनि छ। यो न संझिनुहोला कि म हजुरको सखा हूँ यसैले हितोपदेश सुन्नको लागि अयोग्य छु। म आफुलाई हजुरको शिष्य सम्झन्छु। म हजुरको शरणमा छु, मलाई हजुर कृपा गरेर शिक्षा दिनुहोस॥७॥**

–★–★–★–

## न हि प्रपश्यामि ममापनुद्याद् यच्छोकमुच्छोषणमिन्द्रियाणाम् ।
## अवाप्य भूमावसपत्नमृद्धं राज्यं सुराणामपि चाधिपत्यम् ॥

**किनकी भूमिमा निष्कण्टक, धन–धान्यसम्पन्न राज्यलाई र देवताहरूको स्वामीपन प्राप्त गरेर पनि मैले त्यस उपायलाई देखेको छैन, जुन मेरा इन्द्रियहरू सुकाउने शोकलाई भगाउन सकोस॥८॥**

ननु लोके देवताऽऽराधनजन्यसम्पत्पुत्रराज्यादीनि यथाकामं श्रेयांसि बूनि संति। क्षत्रियाणां तु प्रायो निष्कण्टकराज्यमेव श्रेय इति त्वमेव स्वबुद्ध्या निश्चित्य तदुपाये प्रयतस्वेति चेत्तत्र 'सोऽहं भगवः शोचामि तं मां भगवान् शोकस्य पारं तारयतु श्रुतं ह्येव भगवदृशेभ्यस्तरति शोकमात्मवदि'ति श्रुत्यर्थं हृदि निधाय नैतानि शोकतरणोपायानीत्याह–नहीति यच्छब्दः श्रेयपरामर्शपरः। यच्छ्रेयः इन्द्रियाणां शोषणं मम शोकमपनुद्यान्नाशयेत्तत् भूमौ असपत्नं निष्कण्टकं राज्यंमवाप्य सुराणां च आधिपत्यं देवेन्द्रतां च प्राप्यापि न पश्यामि। हीत्यवधारणे। प्रकर्षेण नैव पश्यामीत्यर्थः। अतः त्वमेव तद्वक्तुमर्हसीति भावः।

**यदि भगवान् भन्नुहुन्छ कि हे अर्जुन! संसारमा जस्तो मान्छेहरूको लागि देवाराधनाले प्राप्त आ–आफ्नो इच्छाको अनुसार सम्पत्ति, पुत्र, राज्य इत्यादि धेरै नै श्रेयहरू छन्, त्यस्तै क्षत्रियहरूको लागि निष्कण्टक राज्य पाउनु नै सबैभन्दा ठूलो श्रेय हो, भने तिमि स्वयं नै आफ्नो श्रेय निश्चित गरेर त्यसको साधनहरूको उपायमा लाग। यसको उत्तर अर्जुन दिन्छन्–हे भगवान्! यी सबै शोकबाट पार तर्ने उपाय होईन श्रुतिमा भनेको छ–'सोऽहं ......... .शोकमात्मवित्॥' अर्थात् मलाई शोकको पार पुर्‍याईदिनुहोस। आत्म–ज्ञानी शोकलाई पार गर्दछ यो मैले हजुर जस्तै महात्माहरूबाट सुनेको छु। फलतः इन्द्रियहरूलाई सुकाउने मेरो शोकको नाश समस्त पृथ्वीको एकाधिपत्य राज्य वा इन्द्रको राज्य पाएर पनि होला जस्तो मलाई लाग्दैन। यसैले हजुर कृपा गरेर मेरो श्रेय को हेतु निश्चित गरि दिनुहोस। किनकी म हजुरको शरणागत छु र शरणागतको भार स्वामी माथि नै हुन्छ॥८॥**

–★–★–★–

## सञ्जय उवाच

## एवमुक्त्वा हृषीकेशं गुडाकेशः परन्तपः।
## न योत्स्य इति गोविन्दमुक्त्वा तूष्णीं बभूव ह ॥

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

**सञ्जय भन्दछन्- हे राजन्! निद्रालाई जित्ने अर्जुन अन्तर्यामी भगवान् श्रीकृष्ण सँग यस्तो भनेर फेरि श्रीगोविन्द भगवान्लाई " म युद्ध गर्दिन" यो स्पष्ट भनेर चुपलागे ॥९॥**

ततः किं वृत्तमिति धृतराष्ट्राकांक्षायां सञ्जय उवाच– एवमिति। गुडाकाया निद्राया ईशः जितनिद्रोऽर्जुनः हृषीकेशं इन्द्रियनियन्तारं एवमुक्तप्रकारेणोक्त्वा गोविन्दं गां वेदलक्षणां वाणीं वेदयते इति गोविन्दः त(य) थोक्तमुद्योगपर्वणि 'गोविन्दो वेदनाद्गवामि'ति हरिवंशेऽपि गौरेषा तु यतो वाणी तां च वेदयते भवान्। गोविन्दस्तु ततो देव! मुनिभिः कथ्यते भवान्। इति तं सर्ववेदोपदेष्टारं सर्वज्ञं भगवन्तं न योत्स्य इत्युक्त्वा तुष्णीं बभूव। हेति स्फुटम्।

यस पछि के भयो? यो जान्ने इच्छा राखेका धृतराष्ट्रको प्रति संजयले भने- निद्राको विजेता र शत्रुहरूलाई नाश गर्ने अर्जुनले इन्द्रियहरूका स्वामी भगवान् सँग यस्तो भने कि हे गोविन्द! म युद्ध गर्दिन र चुप लागे। (गोविन्द शब्दको अर्थ यो हो कि भगवान् 'गो' अर्थात् वेद-वाणीलाई जान्नु हुन्छ महाभारतको उद्योगपर्वमा भनिएको छ, यस्तै प्रकारले श्रीहरिवंशपुराणमा भनिएको छ 'गौ भनेको वेद हो र भगवान् वेदलाई जान्नुहुन्छ यसैले गोविन्द भनिन्छ भनेर तपाईलाई मुनिहरू भन्दछन।' भगवान् सबैलाई शिक्षा दिनुहुन्छ अर्थात् सबै वेदको उपदेष्टा र सर्वज्ञ हुनुहुन्छ।) ॥९॥

–★–★–★–

## तमुवाच हृषीकेशः प्रहसन्निव भारत ।
## सेनयोरुभयोर्मध्ये विषीदन्तमिदं वचः ॥

**हे भरतवंशी धृतराष्ट्र! अन्तर्यामी श्रीकृष्ण भगवान्ले दुवैसेनाको बीचमा शोकविह्वल त्यस अर्जुनलाई मुस्कुराउँदै यो कुरा भन्नुभयो ॥१०॥**

एवं युद्धत्यागाय कृतव्यवसायेऽर्जुने मम पुत्राणां सुखं जीवनं सिद्धमिति चेतनाचेतननियन्तरि दुर्जनविनाशायावतीर्णे भगवत्यधिष्ठातरि सति नाशासनीयमिति धृतराष्ट्राय सूचयितुं सञ्जय आह– तमिति। हे भारत! महावीरस्य वंशे जातस्य तव युद्धोपरतौ पुत्रस्नेहेन हर्षो नोचित इति भावः। हृषीकेशः सर्वेन्द्रियनियन्ता तमुभयोः सेनयेर्मध्ये युद्धार्थं विषीदन्तं विषादं कुर्वन्तमर्जुनं प्रहसन्निव इदं वक्ष्यमाणं वच उवाचेन्निवेत्युक्तम्। अर्जुनं निमित्तीकृत्य सर्वसेनासंहारार्थं प्रवर्त्तस्य गुरुत्वेनांगीकृतस्य हितोपदेष्टुर्भगवतः स्वधर्मे प्रवर्त्तयितुमुद्यतस्य प्रहासो नोचितः;किन्तु (तद्विद्या) तद्वि–धाबुद्धिकौशल्यगर्वापनयनेन तत्त्वज्ञानाधिकारिता–सम्पादनाय तथा वचनमितीवशब्दाभिप्रायः।

यो सुनेर कि अर्जुन लड़ाई छोडिदिन नै कटिबद्ध कृत-निश्चय भईसकेका छन्, धृतराष्ट्रले आफ्नो मनमा सोचे कि अब मेरो छोराहरूको जीवन सुख ले बित्ने भो। यस विश्वास लाई भगाउनको लागि र यो जनाउनको लागि कि चेतन अचेतन को नियन्ता र दुर्जनहरूका नाशको लागि अवतार लिने भगवान् हुँदा सम्म तिमिले यस्तो आशा गर्नै पर्दैन, संजयले यस प्रकार भने- हे भारत! (भारत सम्बोधन गर्नुको अभिप्राय यो हो कि तपाई यती शक्तिशाली महावीर भरतको कुल मा उत्पन्न हुनुभएको छ। तपाईले पुस्त्रस्नेहको वशमा भएर अर्जुन युद्धबाट हट्दा खुशी मनाउनु हुँदैन।) सबै इन्द्रियहरूका स्वामी भगवान्ले दुबै सेनाको बीचमा स्थित र दुःख गर्दै अर्जुनको प्रति क्रोध र लज्जा उत्पन्न गराउनको लागि, उसको उपहास गर्दै भगवान्ले यस्तो भन्नुभयो।
यहाँ भगवान माथि यो आक्षेप हुन सक्छ कि अर्जुनलाई निमित्त बनाएर सबै सेनाहरूको नाश गर्नमा प्रवृत्त र अर्जुनलाई स्वधर्ममा प्रवृत्त गराउनमा उद्यत, उहाँको गुरु र उपदेष्टा बनेर, उहाँले अर्जुन लाई उपहास गर्दै भन्नु उचित थिएन। यसको उत्तर यो हो कि अर्जुनको विद्या बुद्धिको कुशलताको घमण्डलाई हटाएर तत्त्वज्ञानको अधिकारी बनाउनको लागि भगवान्ले उपहास गरेको जसरी भन्नुभयो ॥१०॥

–★–★–★–

## श्रीभगवानुवाच

## अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादांश्च भाषसे ।

## गतासूनगतासूंश्च नानुशोचन्ति पण्डिताः॥

**श्रीभगवान् भन्नुहुन्छ– हे अर्जुन! तिमी शोक गर्नु नपर्ने मनुष्यको पनि शोक गर्दछौ र पण्डितको जस्तो कुरा पनि गर्दछौ; तर जसको प्राण गयो उनीहरूका लागि र जसको प्राण गएको छैन उनीहरूका लागि पनि पण्डितहरू शोक गर्दैनन्॥११॥**

तत्र 'तस्मै स विद्वानुसन्नाय सम्यक् प्रशान्तचित्ताय समन्विताय येनाक्षरं पुरुषं वेद सत्यं प्रोवाच तां तत्वतो ब्रह्मविद्यामि'ति श्रुतेरुक्तलक्षणाधिकारिणे गुरुणा ब्रह्म–विद्योपदेष्टव्या अतस्तथाभूतार्जुनाय 'एतस्यप्रशासने गार्गि! सूर्याचन्द्रमसौ विधृतौ तिष्ठतः भीषास्माद्वातः पवते भीषोदेत सूर्यः भीषास्मादग्निश्चेन्द्रश्च मृत्युर्धावति पञ्चमः। यच्च किञ्चिज्जगत्यस्मिन्दृश्यते श्रूयतेऽपिवा। अन्तर्बहिश्च तत्सर्वं व्याप्यनारायणस्थितः॥ नारायणः परं ब्रह्म तत्त्वं नारायणः परः। नारायणः परोध्याता ध्यानं नारायणः परः॥'सर्वं खल्विदं ब्रह्म तज्जलानिति शान्त उपासीत्'। ससुरासुरगन्धर्वं सयक्षोरगराक्षसम्॥जगद्वशे वर्त्ततेऽदः कृष्णस्यसचराचरम्।यदाह वसुधा सर्वं सत्यमेतद्दिवौकसः॥अहं भवो भवन्तश्च सर्वे नारायणात्मकाः।किमनेन जगन्नाथ! सर्वं त्वद्वशगं जगत्॥ एकः समस्तं यदिहास्ति किञ्चित् तदच्युतो नास्तिपरं ततोऽन्यत्। सकलमिदमहं च वासुदेवः परमः पुमान् परमेश्वरः स एकः॥' तत्र को मोहः कः शोक एकत्व–मनुपश्यत' इत्यादि श्रुतिस्मृतिनिर्णीता सूर्यचन्द्र–वाय्वग्नीन्द्रमृत्युद्यावादिसर्वचेतनानियन्तृजगज्जन्मस्थिति–लयाभिन्ननिमित्तोपादानकारणसर्वव्यापकसर्वात्मभूतसर्वभिन्नाभिन्न–स्वरूपाक्षरनारायणहरिवासुदेवादिशब्दाभिधेयपरम–ब्रह्मस्वरूपगुणादिविषयिणि विद्या निःशेषशोक मोहवि–नाशिनी तामेवोपदेष्टुं तावन्नियम्य्भूतचिद्वर्गयाथात्म्य–ज्ञानाभावेन शोचते देहात्मविवेकमुत्पादयितुं तस्य पाण्डीत्याभिमानं निरासयन् श्रीभगवानुवाच– अशोच्यानिति। अशोच्यान् शोचितुमयोग्यान् पुण्यलोकजयोद्यतान् भीष्मद्रोणादीन् त्वमन्वशोचः शोकमकार्षीः– 'न च .... वा॥'–इत्यादिना। एतैर्विना राज्यादिना जीवितेन वाऽस्माकं किं प्रयोजनमित्येवं शोकंकृतवानसि इति ते मूर्खत्वम्। किञ्च प्रज्ञावादांश्च भाषसे प्रज्ञावतां वादाः प्रज्ञावादाः

शोक र मोहलाई जरैबाट उखाल्नेवाला विद्या अर्जुनलाई सिकाउनको लागि र देह र आत्माको विवेक उत्पन्न गर्नको लागि एवं अर्जुनको पण्डित हुनुजस्तो अभिमानलाई हटाउनको लागि भगवान् भन्नुहुन्छ। अर्जुन सबै प्रकारले शिष्य हुनको योग्य छन्, किनकी जुन गुण शिष्यमा हुनुपर्दछ भनेर श्रुतिले भनेको छ त्यो सबै गुण अर्जुनमा छ। जस्तो– 'तस्मै ............ ब्रह्मविद्याम्॥' अर्थात् विधि पूर्वक समीपमा प्राप्त, राम्रो सँग प्रशान्त चित्त र समन्वित(बाह्य, इन्द्रिय निग्रह युक्त) शिष्यलाई विद्वान्(गुरु) त्यस ब्रह्मविद्याको उपदेश गर्नु जसले अक्षर पुरुष अर्थात् परब्रह्मलाई जान्न सकिन्छ। अब यस अक्षर पुरुषको विषयमा श्रुतिस्मृतिहरू यसरी भन्दछन्– 'एतस्यप्रशासने ........ पञ्चमः।

अर्थात् यस अक्षर परब्रह्मले शासित सूर्य र चन्द्रमा विना आधार कै स्थित छन्। यसको डरले वायु बहन्छ। यसैको डरले सूर्य समयमा उदाउँछ र यसैको भयले अग्नि, इन्द्र र पाँचौ मृत्यु दौडिन्छ। अरू पनि छ जस्तो–' यच्च ..व्याप्यनारायणस्थितः॥ ' यस जगत्मा जे केहि देखिन्छ या सुनिन्छ ती सबैलाई बाहिर–भित्र देखि नै व्याप्त गरेर नारायण स्थित हुनुहुन्छ। र पनि श्रुति स्मृतिहरूले निर्णीत ब्रह्मविद्या, अर्थात् सूर्य, चन्द्र, अग्नि, मृत्यु इत्यादि सबै चेतन र अचेतन को नियामक, जगत्को जन्म, स्थिति र लयको अभिन्न निमित्तोपादान कारण, सबैमा व्यापक, सबैका आत्मस्वरूप, सबैभन्दा भिन्नाभिन्नस्वरूप र जो नारायण वासुदेव इत्यादि नामले सम्बोधन गरिन्छ, उनै ब्रह्मको गुण र स्वरूप बताउनेवाला विद्या भगवान् अर्जुनलाई सिकाउन चाहनुहुन्छ। भगवान् भन्नुहुन्छ कि हे अर्जुन्! पुण्यलोक जीत्ने कामना गर्नेवाला भीष्म, द्रोणादिक शोक गर्न योग्य छैनन् र तिमि उनीहरूका लागि शोक गरिरहेको छौ। यो तिम्रो मूर्खता नै हो। तर तिमि भनिरहेको छौ पण्डितले जस्तो, किनकी तिमिले पछाडि गईसकेको अध्याय

स्वपाण्डित्यद्योतकास्तान् ''पापमेवाश्रयेदस्मान्हत्वैताना– ततायिनः, उत्सन्नकुलधर्माणां जनार्दन। नरके नियतं वासो भवति, गुरून् हत्वा हि महानुभावाञ्छ्रेयो भोक्तुं भैक्ष्यमपीहलोके' इत्यादिना भाषसे, कथयसि। एवं मूर्खत्वं पाण्डित्यं चैकस्मिन्विरुद्धमतो मुधा ते पाण्डित्यमित्यर्थः। यतो गतासून् गतप्राणान् मृतान् अगतासूनगताणवतो जीवितान् पण्डिता नानुशोचन्ति। तत्वविवेचनीबुद्धिः पण्डा सा जाता येषां ते पण्डितास्ते देहेन्द्रियादिविच्छेदे सत्वे वा तद्व्यतिरिक्तात्मनां शोकं न कुर्वन्ति इत्यर्थः।

मा पनि भनिसकेको छौ कि- ''पापमेवा-.... भैक्ष्यमपीहलोके॥' यी पण्डितहरूका जस्ता बोली हुन्। यस प्रकार मूर्खता र पाण्डित्य एकै ठाउँमा समावेश गरेर तिमि आफ्नो पाण्डित्यलाई व्यर्थ गरिरहेको छौ। कारण कि मरेकाहरूको र जीवितहरूको तत्त्वतत्त्वविवेक बुद्धियुक्त पण्डित शोक गर्दैनन्। तात्पर्य यो हो कि पण्डितहरू देह र इन्द्रिय आदिको नाश हुँदा उनीहरू बाट विछोड भएको आत्माको लागि शोक गर्दैनन्॥११॥

–★–★–★–

## न त्वेवाहं जातु नासं न त्वं नेमे जनाधिपाः।
## न चैव न भविष्यामः सर्वे वयमतः परम्॥

**न त यस्तो नै होकि म कुनै समयमा थिईंन, तिमी थिएनौ अथवा यी राजाहरू थिएनन् र न त यस्तो नै हो कि अब फेरि हामी सबै रहँदैनौं॥१२॥**

ननु कुतस्तेऽशोच्याः? यतस्तान् पण्डिता न शोचन्तीत्ये– क्षायां देहातिरिक्तात्मनां नित्यत्वादित्याह–नत्विति। तत्रामत्वेन स्वस्य जीवात्मसाम्यापत्तिं तु शब्देन निराकरोति। सर्वात्मनां मध्ये यथा अहं सर्वेश्वर इतः पूर्वस्मिन्काले जातु कदाचिन्नासं नाभवमिति न, अपित्वासमेव। तथात्वं नासीरिति न, किन्त्वासीरेव। तथेमे जनाधिपा नाऽऽसन्निति न, किन्त्वासन्नेव। एतेनात्मनां भूतकाले सत्त्वादुत्पत्तिर्नि– राकृता। न चेति। पुनः सर्वे वयं पूर्वोक्ता अतः वर्तमानकालान् परमन्ते( परमग्रिमे) काले न भविष्याम इति न, अपि तु भविष्याम एव। एतेन नाशाभावो निरूपितः, उत्पत्तिनाशाभावादेव मध्येऽपि तेषां सत्वं सिद्ध्यति। एवं कालत्रयेऽपि सत्व– प्रतिपादनात्सर्व एवात्मानो नित्या अतोऽशोच्या इति भावः।

पण्डितहरू मृत र जीवितको विषयमा जुन कारणले शोक गर्दैनन त्यो(देह देखि भिन्न आत्माको नित्यस्वरूप) कारणलाई भगवान् भन्नुहुन्छ-प्रथम 'तु' शब्द जीवात्मा र परमात्मा मा समानताको निराकरण गर्दछ। जसरी सबै आत्माहरूमा सर्वेश्वर म पूर्वकाल मा थिईन, यस्तो कुरा होईन, अर्थात् पूर्वकालमा पनि थिएँ, त्यस्तै तिमि पनि या यी राजाहरू पनि पूर्वकाल मा थिएनन्, यस्तो कुरा होईन अर्थात् तिमि र यिनीहरू सबैजना पूर्वकाल मा पनि थिए। यसले भूतकालमा पनि सबै आत्माहरू विद्यमान रहनाले आत्मा कुनै बेला उत्पन्न भएको थियो यस कुराको खण्डन भगवान् गर्नुहुन्छ। फेरि हामी वर्त्तमान काल को पछि भविष्यमा हुँदैनौ भन्ने कुरो पनि होईन अर्थात् भविष्यमा पनि रहने छौं। यसले यो प्रष्ट हुन्छ कि आत्माको नाश कहिल्यै हुँदैन, यो कुरा निरूपित गरियो र जसको उत्पत्ति वा नाश हुँदैन त्यो बीचको समयमा पनि अवश्य हुन्छ। यस प्रकार आत्मा भूत, भविष्य र वर्त्तमान तीनै कालमा स्थित छ। यसैले सबै आत्माहरू नित्य छन्, भने उनीहरूको लागि किन शोक गर्नु?॥१२॥

–★–★–★–

## देहिनोऽस्मिन्यथा देहे कौमारं यौवनं जरा।
## तथा देहान्तरप्राप्तिर्धीरस्तत्र न मुह्यति॥

**जसरी जीवात्माको यस देहमा बालकपन, जवानी र वृद्धावस्था हुन्छ, त्यसरी नै अन्य शरीरको प्राप्ति हुन्छ; यस विषयमा धीर पुरुष मोहित हुँदैनन्॥१३॥**

ननु देवत्तस्य पुत्रो जातः यज्ञदात्तोमृत इति परम्परागत–

(एउटा शंका छ) जस्तो कि देवदत्तको छोरो जन्मियो, यज्ञदत्त

प्रतीतेजन्ममरणयोर्दशाहानि: ब्राह्मणस्यशौचप्रतिपादक-धर्मशास्त्रस्य च प्रामाण्यात्मकथमात्मनां जन्मनाशाभाव:, कथं वाऽशोच्यत्वमन्यथा प्रमाणबाध स्यदित्याशंक्याह देहिन इति, देह: कर्मफलभोगायतनभूतो विद्यते यस्य स देही, तस्यैकस्मिन्नेव देहे यथा कौमारं यौवनं जरा परस्पर-विरुद्धावस्था: कालभेदेन प्राप्नोति, न त्ववस्थाभेदे-नात्मभेद:, योऽहं पित्राद्यंकेऽक्रीडं स एवाहं यौवने विषय-मनुभूयेदानीं वार्द्धके पुत्रपौत्रादीननुभवामी'त्यबाधि-तप्रत्यभिज्ञानात् अनुभवस्मृत्योरेकाधिकरणनियमाच्च। तथा पूर्वदेहादन्यो देहो देहान्तरं तस्यप्राप्तिस्तस्यैवात्मन:, न तु देहभेदेनात्मभेद:। तत्र देहान्तरप्राप्तौ धीरो धारणावती बुद्धिमान्न मुह्यति, पितृपुत्रादौ मृते नष्टोऽयमिति मोहं न प्राप्नोति इत्यर्थ:। 'देहिन' इत्यारभ्य 'देहि नित्यमबध योऽयमि'त्यन्तेषु श्लोकेष्वेकवचनं जात्यभिप्रायकमेव, न तु जीवात्मस्वरूपैकत्वविषयम्। 'आचार्यप्रोक्ता या जाति: सा नित्या साऽजराऽमरे'ति सनत्सुजातवचनात्।' 'न त्वं नेमे जनाधिपा:' इति निरन्तरश्लोके बहुत्वनित्यत्व-प्रतिपादनाच्च। नैतावदेव प्रमाणमपि तु 'कामात्मान: स्वर्गपरा:, ये मे मतमिदं नित्यमनुतिष्ठन्ति मानवा:। श्रद्धावन्तोऽनसूयन्तो मुच्यते तेऽपि कर्मभि:। बहवो ज्ञानतपसा पूता मद्भावमागता:। ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहं, सांख्ययोगोपृथग्बाला: प्रवदन्ति न पण्डिता:, कायेन मनसा बुद्ध्या केवलैरिन्द्रियैरपि। योगिन: कर्म कुर्वन्ति संगं त्यक्त्वात्मशुद्धये। तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिक:। योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना। न मां दुष्कृतिनो मूढा: प्रपद्यन्ते नराधमा:। चतुर्विधा भजन्ते मां जना: सुकृतिनोऽर्जुन। कामैस्तैस्तैर्हृतज्ञाना: प्रपद्यन्तेऽन्यदेवता:। येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम्। ते द्वन्द्वमोहनिर्मुक्ता: भजन्ते मां दृढव्रता:। यदक्षरं वेदविदो वदन्ति विशन्ति यद्यतयो वीतरागा:। महात्मानस्तु मां पार्थ ? दैवीं प्रकृतिमास्थिता:। ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते। मच्चिता मद्गतप्राणा बोधयन्त: परस्परम्।

मरे, यस प्रकार परम्परागत जन्म-मरणको चक्र देखिन्छ। ब्राह्मणादिको आशौच प्रतिपादक धर्मशास्त्रको प्रामाण्यता ले जन्म-मृत्युको अभाव कसरी देखिन्छ। (ती धर्म शास्त्रहरूमा आशौच बार्नुपर्ने उल्लेख छ। आशौच बार्नु नपर्ने भए बार्नुपर्ने किन भनियो।) देह भनेको कर्मफल भोग्ने देहीको घरमात्र हो।(देहको आशौच मात्रै हो देही को होईन) भन्ने कुरा गर्न 'देहिन' यस प्रकार भन्दै हुनुहुन्छ।

जस्तो एउटै शरीरमा देही काल भेदले बचपन, जवानी, बुढ्यौली तिनै परस्पर भिन्न अवस्था लाई प्राप्त गर्दछ, तर त्यस देहीको स्वरूप मा कुनै भेद देखिदैन। किनकी अनुभव गर्नेलाई मात्र अनुभूत विषयको स्मरण रहन्छ, यस नियमानुसार त्यो संझिन्छ, त्यसलाई यो स्मरण हुन्छ कि म एक समय मा पिताको काखमा खेल्ने गरेको थिएँ, फेरि त्यही मैले जवानीमा विषय भोग गरें र त्यही म बुढ्यौलीमा पुत्र पौत्र सुखको अनुभव गरिरहेको छु। त्यस्तै नै जीवलाई अर्को शरीरको प्राप्ति हुन्छ, तर जीव त्यही नै रहन्छ। देहान्तरको प्राप्ति भए पनि आत्माको भेद हुँदैन, यसैले जो धीर र धारणावती बुद्धिवाला छ त्यसलाई, मोह हुँदैन। पितापुत्रादि पनि त्यस्तै जीव हुन त्यसैले शोक मा पर्नु हुँदैन भन्ने अर्थमा हो। यसैले स्वधर्म युद्धमा मर्दाखेरि विवेकिहरूलाई शोक गर्न सुहाउँदैन।

यहाँ 'देहिन०' देखि आरम्भ गरेर 'देहिनित्य०' सम्म एक वचन प्रयोग गरिएको छ यसको मतलब यो होईन कि जीव एउटा हो। यहाँ देहि शब्दको प्रयोग जातिको अर्थमा भएको छ। जीव यथार्थ मा अनन्त छन् र गीताको प्रत्येक अध्याय र यस्तो (मूलमा लेखिए अनुसार)अनेकानेक श्लोकहरू छन् जहाँ जीवको लागि बहुवचन व्यवहृत भएको छ, जस्तै:-**'कामात्मान: स्वर्गपरा:, ये मे मतमिदं नित्यमनुतिष्ठन्ति मानवा:। श्रद्धावन्तोऽन-सूयन्तो मुच्यते तेऽपि कर्मभि:। बहवो ज्ञानतपसा पूता मद्भावमागता:। ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहं, सांख्ययोगोपृथग्बाला: प्रवदन्ति न पण्डिता:, कायेन मनसा बुद्ध्या केवलैरिन्द्रियैरपि।**

सर्वे नमस्यन्ति च सिद्धसंघाः। मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते। तेषामह समुद्धर्त्ता मृत्युसंसारसागरात्। इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागताः। सर्गेऽपि नोपजायन्ते प्रलये न व्यथन्ति च। निर्मानमोहा जितसंगदोषा अध्यात्मनित्या विनिवृत्तकामाः। द्वन्द्वैर्विमुक्ताः सुखदुःख-संज्ञैर्गच्छन्त्यमूढाः पदमव्ययं तदि'त्यादि सर्वेषु अध्यायेषु प्रत्यागात्मबहुत्वप्रतिपादकानि वाक्यानि विद्यन्ते, एकात्मत्वांगीकारे तानि बाध्येरन्। न चोपाधिकृत-भेदप्रतिपादनेन न तद्बाध इति वाच्यं,तेषामुपाधिपरत्वकल्पने मानाभावात्। प्रत्युत 'लभन्ते ब्रह्मनिर्वाणमृषयः क्षीणकल्मषाः। छिन्नद्वैधा यतात्मानः सर्वभूतहितेरताः। कामक्रोधवियुक्तानां यतीनां यतचेतसाम्। अभितो ब्रह्मनिर्वाणं वर्तते विदितात्मनामि'ति निवृत्तशेषाऽवि-द्यानामपि बहुत्वप्रतिपादनात् अन्यथा सर्वदेहेषु चेतनै-कत्वाङ्गीकारे एकस्मिन्सुप्ते मूर्छिते मृते वा सर्वेषां तत्साम्यपत्तिः स्यात्, सर्वान्तर्वृत्तिसुखदुःखादिज्ञानं सर्वेषां समानं स्यात्। किञ्च अहं त्वमयमिति प्रत्ययानां निगमनाविरहेण विभागाभावः स्यात्सर्वत्राहमेव प्रतीतिः स्यात् न तु तथाऽस्ति। किं तर्हि भगवदुक्तात्मभेदः स्वरू-पनिरूपित अति श्रुतिरपि निश्चाययति। 'नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामानि'ति। तस्मादात्मैकत्ववादिनो भ्रान्ता इति निश्चीयते। अतः स्वधर्मे युद्धे मरणेऽपि विवेकिनो न शोकमोहौ स्यातामिति भावः।

**योगिनः कर्म कुर्वन्ति संगं त्यक्त्वात्मशुद्धये। तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिकः। योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना। न मां दुष्कृतिनो मूढाः प्रपद्यन्ते नराधमाः। चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन। कामैस्तैस्तैर्हृतज्ञानाः प्रपद्यन्तेऽन्यदेवताः। येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम्। ते द्वन्द्वमोहनिर्मुक्ताः भजन्ते मां दृढव्रताः। यदक्षरं वेदविदो वदन्ति विशन्ति यद्यतयो वीतरागाः। महात्मानस्तु मां पार्थ? दैवीं प्रकृतिमास्थिताः। ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते। मच्चिता मद्गतप्राणा बोधयन्तः परस्परम्। सर्वे नमस्यन्ति च सिद्धसंघाः। मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते। तेषामह समुद्धर्त्ता मृत्युसंसारसागरात्। इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागताः। सर्गेऽपि नोपजायन्ते प्रलये न व्यथन्ति च। निर्मानमोहा जितसंगदोषा अध्यात्मनित्या विनिवृत्तकामाः। द्वन्द्वैर्विमुक्ताः सुखदुःखसंज्ञैर्गच्छन्त्यमूढाः पदमव्ययं तत्।।** त्यसैले यो प्रमाणित हुन्छ कि जीव अनन्त छन्। नत्र भने सबै मा एउटा मात्र जीव मान्ने हो भने त एउटा सुतिरहँदा वा बेहोस हुँदा वा मर्दा सबैलाई त्यही अवस्था प्राप्त हुनुपर्ने हो, सबैलाई सुख-दुःख समान हुनुपर्ने हो॥१३॥

-★-★-★-

## मात्रास्पर्शास्तु कौन्तेय शीतोष्णसुखदुःखदाः।
## आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत॥

**हे कुन्तीपुत्र! जाड़ो-गर्मी र सुख-दुःखलाई दिने इन्द्रिय र विषयको संयोग त उत्पत्ति-विनाशशील र अनित्य छ, यसैले हे भारत! तिनिहरूलाई तिमि सहन गर॥१४॥**

ननु भवत्वात्मनां स्वरूपेण नित्यत्वे बहुत्वे च तन्नाशनिमित्तं मोहानौचित्यमिति। तथाऽपि युद्धे शस्त्रपातादिना आचार्यपितृबन्धूनां प्रियदेहवियोगे सुखहानिर्दुःखावाप्तिश्च भवेदेव, तन्निमित्तो मोहः सम्भवतीत्याशंक्याह-मात्रास्पर्शा

यदि यही नै कुरा हो कि आत्मा स्वरूपले नै नित्य र अनेक छन् भने त्यसका लागि मोह गर्नु अनुचित हो माने तर युद्धमा शस्त्र इत्यादिले आहत भएर गुरु, भाई इत्यादिको प्रिय देह हानि त भई नै हाल्छ, तब बन्धुहरूको वियोगले दुःख अवश्य नै हुन्छ। यसैले दुःख र शोक हुनु सम्भव छ। यसको उत्तर भगवान् दिनुहुन्छ-

इति। मात्राः शब्दादितन्मात्राणि तत्कार्यत्वाच्छब्दस्पर्शादयो विषया मात्राशब्दवाच्यास्तेषां श्रोत्रादीन्द्रियैः स्पर्शाः शीतोष्णसुखदुःखदा भवन्ति। मृदुमधुराः सुखदाः कटुप–रुषा दुखदाः। तथाऽपिनात्मवन्नित्याः किन्त्वागमापायिनः आगमापायशीलाः अतएव अनित्यस्ततस्तान्विवेक–धैर्यसम्पत्त्या तितिक्षस्व सहस्व। कालान्तरे स्वयमेव नंक्ष्यन्ति। तन्निमित्तो मोहस्तव नोचित इति कौन्तेय भारतेति सम्बोधनाभ्यां सूचितम्।

**हे कुन्तिपुत्र अर्जुन! शब्दादि तन्मात्राहरूका विषयहरूको अर्थात् शब्द स्पर्शादिकहरूको कान, आँखा आदि इन्द्रियहरूको साथमा सम्मिलन शीतल र तातो, सुखद र दुखद हुन्छ। जसरी जुन मृदु वा मधुर हुन्छ त्यो सुखद छ भन्ने थाहा हुन्छ र जो कटु वा कडा हुन्छ त्यो दुखद छ भन्ने थाहा हुन्छ। तर विवेक र धैर्यको बलले यिनीहरू लाई सहनु। यी कालान्तरमा स्वयमेव नाश हुनेछन्। 'भारत' र 'कौन्तेय' सम्बोधनले यो देखाउनु भयो कि यीनीहरूका लागि तिमिले मोह गर्नु उचित छैन, किनकी तिमि ठूलो विवेकीहरूको वंशमा उत्पन्न भएको हौ॥१४॥**

–★–★–★–

## यं हि न व्यथयन्त्यते पुरुषं पुरुषर्षभ ।
## समदुःखसुखं धीरं सोऽमृतत्वाय कल्पते॥

**किनकी हे पुरुषश्रेष्ठ! दुःख–सुखलाई समान मान्ने जुन धीर पुरुषलाई यी इन्द्रिय र विषयको संयोग व्याकुल गर्दैनन्, तिनीहरू नै मोक्षको योग्य हुन्छन्॥१५॥**

मात्रास्पर्शतितिक्षायां किं फलं स्यादित्यपेक्षायामाह– यं हीति। हे पुरुषर्षभ! यं पुरुषं स्वधर्मानुवर्तिनं शास्त्रविहितं फलसंकल्पशून्यं युद्धादिकं स्वधर्मं कुर्वाणं समदुःखसुखं समे दुःखसुखे यस्य स तमतएव धीर धैर्यवन्तमेते शस्त्रपातादिजन्यमृदुपरुषाः स्पर्शान व्यथयन्ति स्वधर्मान्न चालयन्ति। सोऽमृतत्वाय परमपुरुषार्थभूतजरामरणादि–धर्मवर्जितस्वरूपप्राप्तये कल्पते योग्यो भवति।

**तन्मात्रा स्पर्शहरूलाई सहनाले जुन फल प्राप्त हुन्छ अब त्यसको वर्णन छ। हे पुरुषश्रेष्ठ! जुन पुरुष आफ्नो धर्मको अनुगत भएर र फलको इच्छा नराखिकन शास्त्रमा भनिएको युद्धादि आफ्नो धर्मलाई पालना गर्दछ र जुन पुरुषलाई सुख–दुःख बराबर लाग्दछ, अर्थात् शस्त्रादिको मृदु वा कठोर चोट जसलाई धर्म देखि च्युत गराउन सक्दैन, त्यो, परम पुरुषार्थरूप, जरा–मरणादिले रहित, शुद्ध आत्मस्वरूपलाई प्राप्त गर्दछ अर्थात् मुक्त हुनजान्छ॥१५॥**

–★–★–★–

## नासतो विद्यते भावो नाभावो विद्यते सतः ।
## उभयोरपि दृष्टोऽन्तस्त्वनयोस्तत्त्वदर्शिभिः ॥

**असत् वस्तुको सत्ता छैन र सत्को अभाव छैन। यस प्रकार यी दुवैलाई नै तत्त्वज्ञानी पुरुषद्वारा देखिएको छ॥१६॥**

नन्वतिप्रभूतशीतोष्णादिप्राप्तावात्माऽप्यतिदुःख्यनुभूयते, अमुकोऽतिदुःखेनमृत इत्यातमनोऽप्यभावप्रतीतेः कथं शीतोष्णादेरात्मनि भावः सत्ता न विद्यते, सतोऽवि–कार्यस्यात्मनोऽभावो विनाशो न विद्यते। अनयोर्भावाभावौ नाज्ञप्रतीत्यवसेयावित्याह–उभयेरिति। उभयोश्रप्यनयोः सदसतोर्विचारे जाते अन्तः सिद्धान्तपक्षः निर्णय इत्यर्थः

**अब यहाँ शंका हुन्छ कि, अधिक चिसो र तातो भएमा आत्मा पनि दुःख अनुभव गर्न लाग्दछ। त्यो पुरुष धेरै दुःख पाएर मर्‍यो, यस्तो पनि मान्छे भन्दछन् र मरेपछि आत्मा पनि शरीरको साथ–साथै बेपत्ता हुन्छ। यस्तो अवस्थामा आत्मालाई नित्य र अमृत तथा चिसो र तातोलाई आउने जाने कसरी मान्नु? यस शंकाको उत्तर दिनुहुन्छ– अनात्म धर्मभएको र विकारी शीतोष्णको आत्मा मा सत्ता वा स्थिति छैन, यसले सत् वा अविकारी जुन आत्मा छ यसको अभाव अर्थात् विनाश हुँदैन। यो कुरा मूढ़हरूले भनेको होईन किन्तु सत् र असत् विचारको सिद्धान्त वा निर्णयलाई जान्ने जो तत्त्वदर्शी छन्, उनीहरूले देखेको या जानेको हो। यथा**

तत्वदर्शिभिर्दृष्टः। 'सदेव सोम्येदमग्र आसीदेक-मेवाद्वितीयम्, एतदात्म्यमिदं सर्वं, तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो!' इत्यादिश्रुतिप्रतिपादितं तत्वं जीवात्मपरमात्मनोः स्वरूपं, तद्दर्शनशीलैर्दृष्टो ज्ञात इत्यर्थः।

श्रुतिः-'सदेव ..... श्वेतकेतो॥' अर्थात् हे सौम्य! (शिष्य) यसको (सृष्टिको) पहिले एउटा सत् मात्रै थियो। त्यो एउटा मात्रै सत् ब्रह्म अद्वितीय थियो। यस सम्पूर्ण जगत्को आत्मा त्यही नै हो। हे श्वेतकेतु! त्यो सत्य हो। त्यो आत्मा हो। तिम्रो अन्तरात्मा पनि त्यहि हो। यसैबाट अर्थात् तत्पद वाच्य ब्रह्म र त्वम्पदवाच्य जीवान्तर्यामी ब्रह्मको अभेदले तिमि तदात्मक छौ॥१६॥

-★-★-★-

## अविनाशि तु तद्विद्धि येन सर्वमिदं ततम्।
## विनाशमव्ययस्यास्य न कश्चित्कर्तुमर्हति॥

**नाशरहित त तिमि त्यसलाई जान्नु, जो बाट यो सम्पूर्ण जगत्-दृश्यवर्ग व्याप्त छ। यस अविनाशीको विनाश गर्न कोही पनि समर्थ छैनन्॥१७॥**

निर्णीतार्थमाह- अविनाशि इति। तत्तत्वं त्वविनाशि विनाशाभावशीलं विद्धि। किं तत्? येनात्मवर्गेण सर्वमिदमचेतनं ततं व्याप्तं, व्यापकं सूक्ष्मं व्याप्यं स्थूलं, व्यापकत्वेन सूक्ष्मत्वादव्ययस्यात्मतत्वस्य विनाशं कश्चिदनात्मपदार्थः कर्त्तुं नार्हति न योग्यो भवति।

अब निर्णयको लागि भन्दछु। त्यस तत्त्वलाई तिमि अवनाशी भनेर जान्नु। कुन तत्त्वलाई? जसले यो सबै अचेतन व्याप्त छ। किनकी जुन व्याप्य हुन्छ त्यो स्थूल र व्यापक सूक्ष्म हुन्छ र यसैले यस सूक्ष्म, व्यापक, अव्यय आत्मतत्त्वको नाश कुनै अनात्म पदार्थ गर्न सक्दैन॥१७॥

-★-★-★-

## अन्तवन्त इमे देहा नित्यस्योक्ताः शरीरिणः।
## अनाशिनोऽप्रमेयस्य तस्माद्युध्यस्य भारत॥

**यस नाशरहित, अप्रमेय, नित्यस्वरूप जीवात्माको यी सबै शरीर नाशवान् भनिएको छ। यसैलै हे भरतवंशी अर्जुन! तिमी युद्ध गर॥१८॥**

नन्वात्मनां विनाशानहैत्वेन नित्यत्वमुक्तं, तर्हि सर्वेषां मातृपित्रादयो नष्टा इत्यबाधितप्रतीते के विषया इत्याशंक्याह- अन्तवन्त इति। नित्स्य शरीरिणः इमे कर्मफलभोगायतन-भूताः पञ्चमहाभूतावयवोपचिता देहा अन्तवन्तो विनाशिन उक्ता व्यासादिभिः। तथाहि- 'मातृपितृसहस्राणि पुत्रदार-शतानि च। संसारेष्वनुभूतानि याता यास्यन्ति यान्ति च॥ हर्षस्थानसहस्राणि शोकस्थानशतानि च। दिवसे दिवसे मूढमाविशन्ति न पण्डितम्॥' धर्मो नित्यः सुखदुःखे त्वनित्ये,जीवो नित्यो हेतुरस्याप्यनित्य॥ इति हेतु स्थूल-सूक्ष्मशरीरम्। शरीरिणे नित्यत्वे हेतुगर्भितविशेषणमाह- अनाशिन इति। नाशाभाववतः अतएव नित्यस्य 'अनाशी

विनाश नहुने भएको ले आत्मालाई नित्य भनिएको छ भने तब फलानुको आमा मरी, फलानुको बुवा मर्‍यो, यी देखिने प्रतीतिहरूको विषय चैं के हो? यस प्रश्नको उत्तर दिनुहुन्छ। नित्य आत्माको कर्मफल भोग स्थानस्वरूप र पञ्चमहाभूतले बनेको शरीर नाशवान् छ। व्यासादि तत्त्वज्ञ महर्षिहरूले यस्तै भनेका छन्, 'संसारमा स्थित हजारौं माता-पिता र सैकड़ौं स्त्री, पुत्र मरेर गएका छन्, मरिरहेका छन् र मर्नेछन्। यस संसारमा हर्षको हजारौं स्थान छन् र शोकको पनि सैकड़ौ स्थान छन्, तर यसले मूर्खहरूलाई मात्रै मोह हुन्छ, पण्डितलाई होईन। धर्म नित्य छ। सुख दुःख अनित्य छ। जीव नित्य छ। यसको हेतु स्थूल सूक्ष्म शरीर अनित्य छ।' आत्माको नित्यतामा हेतुपूर्ण विशेषण जोडिन्छ। आत्मा अविनाशी छ, यसैले नित्य छ। विष्णुपुराणमा जडभरतको वाक्य छ-'पण्डितहरू आत्मालाई अविनाशी र परमार्थ भनेर जान्दछन्। नाशवान् द्रव्यले बनेको पदार्थ शरीर नाशवान्

परमार्थप्राज्ञैरभ्युपगम्यते। तत्तु नाशी न संदेहो नाशिद्रव्यो- पपादितमि 'ति वैष्णवे जडभरतवाक्यात्। ननु नित्योऽवि- नाशी चेदात्मा तर्हि देहे नष्टेऽपि तदुपलब्धिः किन्न स्यादित्यशंका निरासाय हेतुगर्भितविशेषणमाह- अप्रमेयस्य इति। भगवत्कृपां शास्त्रमन्तरेण प्रत्यक्षादिप्रमाणैरिद- मित्थमिति प्रमातुमशक्यत्वात्। 'एनं विदुर्वैभगवत्प्रसादादि' त्याद्याचार्यपादोक्तेश्च। यद्देहादि इदमित्थमित्युपलभ्यते तन्नाशित्वेनाप्युपलभ्यते, आत्मा न तथा। किन्त्वहं जानाम्यनुभवामीति प्रतीत्या प्रमातृतयैवोपलभ्यते, यस्मादनाशित्वादात्मानो न शोच्याः, नाशित्वादन्तवन्तो देहा अपि न शोच्याः। तस्मान्मोहं विहाय हे भारत! त्वं युद्धयस्व।

छ, यसमा सन्देह नै छैन।' यदि आत्मा अविनाशी छ भने शरीरको नाश हुँदा देखिदैन किन? यस शंका को उत्तरमा यो भनिन्छ, कि यस्तो हुनु सम्भव छैन। किनकी आत्मा अप्रमेय हो अर्थात् भगवत् कृपा र शास्त्रको प्रमाण छोडेर अरू कुनै प्रत्यक्ष अनुमान आदि प्रमाणहरू द्वारा 'यो यस्तो नै हो' यस्तो ज्ञानको विषय हुँदैन। आचार्यपाद श्रीनिम्बार्क भगवान्को उक्ति छ-'यस आत्मालाई भगवान्को कृपाले जान्न सकिन्छ।' देह आदिको जुन 'इदमित्थम्' (यो यस्तो हो) ज्ञान हुन्छ, त्यो उसको नाशवान् हुने कारणले हो।आत्मा त्यस्तो छैन, यसैले आत्माको 'इदमित्थम्' ज्ञान हुनु असम्भव छ। तर 'म जान्दछु', 'म अनुभव गर्दछु' यी प्रतीतिहरूबाट प्रमातारूप ले (अर्थात् ज्ञानाश्रय रूपले) त्यसको ज्ञान प्राप्त हुन्छ। यसैले अविनाशी भएको कारण आत्माको लागि शोक गर्नु उचित छैन र नाशवान् हुनाले शरीर पनि शोकको योग्य छैन। यसैले हे भारत! मोह छोडेर तिमि युद्ध गर॥१८॥

-★-★-★-

**य एनं वेत्ति हन्तारं यश्चैनं मन्यते हतम्।**
**उभौ तौ न विजानितो नायं हन्ति न हन्यते॥**

**जो यस आत्मालाई मार्नेवाला सम्झिन्छ तथा जो यसलाई मरेको मान्दछ, ती दुबै वास्तवमा जान्दैनन्; किनकी यो आत्मा वास्तवमा न त कसैलाई मार्दछ न अरूबाट नै मारिन्छ। ॥१९॥**

एवमात्मनोऽविनाशित्वे सिद्धे गुरून् हत्वेत्यादिना आत्मनो गुर्वादिहन्तृत्वकल्पनं तेऽज्ञानमेवेत्याहय-इति। यः पुरुषः एनमुक्तविधं शरीरिणं हन्तारं हननक्रियायाः कर्त्तारमयं मम हन्तेति वेत्ति जानाति यश्चान्य एनं हतं हननक्रियायाः कर्मभूतं हतोऽयं मयेति मन्यते तावुभौ न विजानीतः, आत्मस्वरू- पानभिज्ञावित्यर्थः। यतो नायं हन्ति न हन्यते, हननक्रियायः कर्त्ता कर्म वा न भवतीत्यर्थः।

आत्मा अविनाशी सिद्ध भएपछि गुरु आदिको हनन-संकल्प अज्ञान मात्र हो। यसैलाई यहाँ भन्नुहुन्छ। जुन मनुष्य यस शरीरी अर्थात् आत्मालाई मार्नेवाला संझिन्छ र जुन यो संझिन्छ कि आत्मा मारियो यी दुबै आत्मस्वरूपबाट अनभिज्ञ छन्, किनकी आत्मा न मारिन्छ न मर्दछ, अर्थात् हनन क्रिया को, आत्मा न कर्म हो न कर्त्ता॥१९॥

-★-★-★-

**न जायते म्रियते वा कदाचि न्नायं भूत्वा भविता वा न भूयः।**
**अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे॥**

**यो आत्मा कुनै कालमा न त जन्मिन्छ र न त मर्दछ तथा यो उत्पन्न भएर फेरि हुनेवाला नै छ; किनकी यो अजन्मा, नित्य, सनातन र पुरातन हो; शरीर मारिदा पनि यो मारिदैन॥२०॥**

हननक्रियायाः कर्त्ता कर्म वाऽयं कुतो न भवतीत्याकांक्षायां जन्मादिषड्विक्रियारहितत्वादित्याह-नेति। अयं पुरुषः न जायते नोत्पद्यते। वा शब्दश्चार्थे। न चायं कदाचिन्म्रियते। तत्कुतो यस्मान्नायं भूत्वा भविता वा न भूयः। अयमात्मा

आत्मा हनन क्रियाको कर्त्ता वा कर्म होईन, किनकी यो षड्विकारले रहित छ। यसैलाई यहाँ देखाउनु हुन्छ- यो पुरुष कहिले पनि उत्पन्न हुँदैन र न कहिल्यै मर्दछ। यस्तो किन? कारण कि यो पूर्वमा भएर पछि हुने छैन यस्तो कुरा होईन। जुन पहिले नभएर पछि हुन्छ त्यसैलाई उत्पन्न हुनु भनिन्छ,

पूर्वं भूत्वा पश्चान्न भवितेति। न यो हि अभूत्वा भविता स उत्पद्यते, यश्च प्राग्भूत्वा भूयो न भविता स म्रियते इत्युच्वते। अयं तु प्रागपि सत्वान्नोत्पद्यते। उत्तरकालेऽपि सत्वान्न म्रियते। यतो न जायते अतोऽजो न म्रियतेऽतो नित्यः, इति द्वाभ्यां पदाभ्यां जन्ममरणलक्षणे विक्रिये निरस्ते। अस्तित्वलक्षणविकाररवारणायाह–शाश्वत इति। सनातनः प्राकृतवत्सदसत्परिणामशून्यः इत्यर्थः। वृद्धिलक्षण-विक्रियावारणाय पुराण इति। पुरापि नव एव। यो हि सावयवः सोऽवयवोपचयाद्वर्द्धते। अयं तु निरवयवो ज्ञानैकस्वरूपत्वान्न वर्द्धते इत्यर्थः। परिशिष्टौ परिणामा-पक्षयौ जन्ममरणास्तिवृद्ध्यभावादेव निरस्तौ। एवं षड्वि-कारशून्य आत्मा शरीरे हन्यमाने सति न हन्यते। शरीरमेव हननक्रियायाः कर्मभूतमित्यर्थः।

र जुन पहिले भएर पछि हुँदैन त्यसैलाई मर्नु भनिन्छ। यो आत्मा पहिले पनि थियो यसैले उत्पन्न भएन र पछि पनि हुनेछ यसैले मर्दा पनि मर्दैन। जन्म लिदैन त्यसैले अज छ। मर्दैन यसैले नित्य छ। यी दुबै शब्दले आत्मालाई दुई विकारले रहित अर्थात् जन्म-मरणबाट रहित भनियो। अब तेस्रो विकार(अस्तित्व)ले पनि रहित बताउनको लागि भनिन्छ आत्मा शाश्वत छ अर्थात् सनातन छ र प्राकृत वस्तुहरूको समान सत् र असत् परिणामवाला होईन। फेरि चौथो विकार(वृद्धि) शून्य बताउनको लागि भनिन्छ कि आत्मा पुराण छ अर्थात् पुरानो भएर पनि नयाँ नै छ। जो अवयववाला हुन्छ त्यसैको अवयव बढ्नाले वृद्धि हुन्छ। आत्मा ज्ञानस्वरूप एवं अवयव हीन छ, यसैले यसको वृद्धि सम्भव छैन। र शेष दुई विकार परिणाम(अदला बदली) र अपक्षय(नाश) आत्मा मा सम्भव छैन। जसमा हुनु र वृद्धि सम्भव छैन, त्यसमा अदला बदली र नाश पनि सम्भव हुन सक्दैन। यस प्रकार यो सिद्ध भयो कि षड्विकारले रहित आत्माको नाश, यस शरीरको नाश भएमा पनि हुँदैन। षड्विकारवाला शरीर नै हनन-क्रियाको कर्म हो॥२०॥

-★-★-★-

**वेदाविनाशिनं नित्यं य एनमजमव्ययम् ।**
**कथं स पुरुषः पार्थ कं घातयति हन्ति कम्॥**

**हे पृथापुत्र अर्जुन! जुन पुरुष यस आत्मालाई नाशरहित, नित्य, अजन्मा र अव्यय भनेर जान्दछ, त्यो पुरुष कसरी कसलाई मार्न लगाउँछ र कसरी कसलाई मार्न सक्दछ?॥२१॥**

कथं तर्हि 'ब्राह्मणो न हन्तव्य' इत्यादि निषेधशास्त्रस्य गोघ्नब्रह्मघ्नादेर्नरकादिविधायक शास्त्रस्य च सार्थक्य-मित्याशङ्कापरिहारार्थमाह–वेदेति। अविनाशिनं विनाशा-भाववन्तमत एवं नित्यं यतोऽजमव्ययं जन्मपरिणामादि-रहितमेनं प्रतिशरीरभिन्नमात्मानं यः पुरुषो वेद जानाति हे पार्थ! स कथं हन्ति कथं घातयति। बहुष्वेव किं शब्दप्रयोगो लोके शास्त्रे च दृष्टः। तथा च ब्राह्मणादिश्वपचपशुकृम्यन्त शरीरेषु विनाशानर्हस्वभावतया वर्तमानेष्वात्मसु कं कतमं हन्ति हननक्रियायाः कर्त्ता भवति। कं वा घातयति तां क्रियां प्रति प्रयोजको भवति। न कञ्चिदपि इत्यर्थः। एतेन त्वं प्रयोजको भूत्वा घातयसि अहं त्वन्नियुक्तो हन्मीत्यत उभयोः पापं स्यादिति न शंकितव्यमिति ध्वनितम्। एवञ्च ब्राह्मणादिहनननिषेधशास्त्रस्य हननजन्यपापफलाभि-धायकस्य च उक्तात्मस्वरूपस्वभावयाथात्म्यज्ञानाभावव-द्विषयकत्वेन सार्थक्यम्।

यदि यस्तो कुरा हो भने त (ब्राह्मणो न हन्तव्यः) ब्राह्मणलाई मानु हुँदैन इत्यादि निषेध शास्त्र तथा ब्राह्मण र गाईलाई मार्नेवाला नरकमा जान्छ यस विधायक शास्त्रको सार्थकता कसरी सिद्ध हुन्छ? यस शंकाको उत्तरमा भन्नुहुन्छ कि, जो यस प्रति देहमा भिन्न आत्मालाई जन्म परिणामादिले रहित अतएव अविनाशी र नित्य जान्दछ, हे अर्जुन! त्यो कसरी मार्दछ कसलाई मार्न लगाउँदछ? अर्थात् तिमि यस्तो बुझ कि यो आत्मा न कसैलाई मार्दछ, न त कसैलाई मार्न लगाउँदछ। यसले यो भाव निस्कन्छ कि यो शंका नगर्नु कि मलाई मार्न लगाउने र तिमीलाई मार्ने पाप लाग्दछ र माथि भनिएको ब्राह्मणादि मार्न निषेध गर्ने शास्त्र त्यसैमा सार्थक अर्थात् लागु हुन्छ जसलाई यो ज्ञान हुँदैन कि आत्मा उक्त अविनाशी आदि स्वभाववाला छ॥२१॥

-★-★-★-

## वासांसि जीर्णानि यथा विहाय नवानि गृह्णाति नरोऽपराणि ।
## तथा शरीराणि विहाय जीर्णा न्यन्यानि संयाति नवानि देही ॥

**जसरी मनुष्य पुराना कपडा त्यागेर नयाँ कपडा लगाउँदछ, त्यसरी नै जीवात्मा पुरानो शरीरलाई त्यागेर अर्को नयाँ शरीरमा प्रवेश गर्दछ ॥२२॥**

नन्वात्मनामविनाशिनत्वेन शोकानर्हत्वेऽपि देहानां विनाशित्वात्तद्विनाशनिमित्ते युद्धे प्रियभोगसाधनभूतेषु भीष्मादिप्रियदेहेषु नश्यत्सु तद्वियोगनिमित्तः शोकः स्यादेवेत्याशंकायामाह–वासांसीति। यथा नरो जीर्णानि वस्त्राणि विहायाऽपराणि नवानि गृह्णाति, न तत्त्यागे शोको भवति, प्रत्युत हर्ष एव जायते। तथा देही जीर्णानि शरीराणि विहायाऽन्यानि नवानि शरीराणि संयाति प्राप्नोति। न तस्य पूर्वदेहत्यागे शोको भवति, प्रत्युत हर्ष एवोपजायते। तस्मात्स्वधर्मे युद्धे पूर्वशरीरं त्यक्त्वाऽन्यत्कल्याणतरं शरीरं गृह्णतां भीष्मादीनां हर्षविशेष एवोत्पत्स्यते। अतस्त्वया तदुपकार एव कृतः स्यान्न द्रोहसंभावना कर्त्तव्येति भावः।

मानियो कि आत्मा अविनाशी हुनाले शोक गर्न योग्य छैन, तर शरीर त विनाशी छ त्यसको लागि त शोक हुन्छ नै। हाम्रा भाई बन्धुहरूका शरीर यस युद्धमा नाश हुन्छ, यसले उनीहरूको प्रिय भोगहरूको भोग्ने साधन, शरीरको वियोगको लागि दुःख त अवश्य नै हुनेछ। अर्जुनको यस शंका को उत्तर भगवान् यस प्रकार दिनुहुन्छः- जस्तै कि मनुष्य पुराना च्यातिएका कपडाहरूलाई छोडेर अर्कै नयाँ कपडा लगाउँदछ र पुरानो कपडालाई फ्याँकिदिंदा शोक गर्दैन, बरू खुशी मनाउँदछ, त्यस्तै नै देही अर्थात् जीव पुरानो शरीरलाई छोडेर नयाँ शरीर धारण गर्दछ। त्यस पूर्व देह त्यागको लागि दुःख हुँदैन, बरू खुशी नै हुन्छ। यसैले भीष्मादि तिम्रो भाई बन्धुहरू यस स्वधर्म युद्धमा आफ्ना पुराना शरीरहरूलाई त्यागेर अर्कै अहिलेको भन्दा पनि अधिक कल्याणकारक शरीरलाई प्राप्त गरेर खुशी नै मनाउने छन्, दुःख मान्ने छैनन्। यसैले तिमी उनीहरूको उपकार नै गर्नेछौ र तिमिले उनीहरू सँग द्रोहको सम्भावना नै सोच्नु पर्दैन॥२२॥

-★-★-★-

## नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः।
## न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः॥

**यस आत्मालाई शस्त्र काट्न सक्दैन, यसलाई आगोले जलाउन सक्दैन, पानीले गलाउन सक्दैन र हावाले पनि यसलाई सुकाउन सक्दैन॥२३॥**

ननु गृहदाहे तदन्तर्वर्त्तिपुरुषदाहवद्देहस्य छेददाहादौ सत्यात्मनोऽपि छेददाहादिः किन्न स्यात्तथात्वेऽविनाशित्व–हानिरत्यत आह नैनमिति। सर्वदेहेषु समानरूपमेनमात्मानं शस्त्राग्न्यव्वायवः छेदनदहनक्लेदन शोषणात्मकक्रिया–फलाश्रयं न कुर्वन्ति, छेदनदहनक्लेदनादिना विनाशयितं न शक्नुवन्तीत्यर्थः। एकेनापि प्रसज्यात्मकनञोक्तार्थसिद्धौ तस्य चतुःकृत्व उपादानमुक्तार्थदार्ढ्यायार्जुनस्य हृदि मन्दीभूयापि शंका न तिष्ठेदित्येतदर्थम्।

तर घर डढ्दा जसरी त्यस भित्र भएका मान्छे डढेर पोलिन्छन्, मर्दछन् त्यसरी नै शरीर नष्ट हुँदा त्यसको भित्रको आत्मा नष्ट हुन किन सक्दैन? यस शंकाको उत्तर यहाँ दिनुहुन्छः-

सम्पूर्ण देहहरूमा समान रूपले बसेको यो आत्मालाई शस्त्र काट्न सक्दैनन्, आगो पनि डढाउन सक्दैन, पानीले भिजाउन सक्दैन र हावा यसलाई सुकाउन सक्दैन यसैले यसको अविनाशित्वको कहिल्यै हानि हुन सक्दैन। जसले अर्जुनको हृदयमा शंका न रहोस यसको लागि भगवान्ले यस श्लोकमा चार पल्ट नकारको प्रयोग गर्नुभएको छ॥२३॥

-★-★-★-

**अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च ।**
**नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातनः ॥**

**किनकी यो आत्मा काट्न नसकिने, जलाउन नसकिने, गलाउन नसकिने, निःसन्देह सुकाउन पनि नसकिने तथा यो आत्मा नित्य, सर्वव्यापी, अचल, स्थिर रहनेवाला र सनातन छ॥२४॥**

शस्त्रादिजन्यतन्नाशानर्हत्वे हेतूनाह-अच्छेद्य इति। यतोऽच्छेद्योऽयं तस्मादेनं शस्त्राणि न छिन्दन्ति। एवमेवाशोष्यन्तानि विशेषणानि हेतुरूपविशेषणानि योज्यानि। अच्छेद्यत्वादिष्वपि हेतुमाह-नित्य इति। अनित्यश्छेद्यदाह्यादिरूपो भवति, नो नित्यः। नित्यत्वेऽपि हेतुः- सर्वगत इति। सर्वगतत्वव्यापन स्वभावोऽतिसूक्ष्म इत्यर्थः। नहि व्यापनशीलमतिसूक्ष्मं वस्तु शस्त्राग्न्यादि-भिश्छेद्यदाह्यादि कर्त्तुं शक्यते। यतोऽछेद्योऽदाह्यश्च तत एव स्थाणुः स्थिरस्वभावः स्वरूपान्यथाभावरहितः। स्थाणुत्वादक्लेद्य अद्भिरार्द्रीकृत्य स्वरूपाच्च्यावयितु-मशक्यः। स्थाणुत्वादेवाचलः अप्रकम्प्यः। अचलत्वाद-शोष्यो वायुना शोषयितुमशक्यः। तस्मादुक्तेभ्यो हेतुभ्यः सनातनः, नित्यस्वरूप इत्यर्थः।

**शस्त्रादिले आत्माको नाश किन हुँदैन यसको कारण भन्नुहुन्छ-यो आत्मा काट्न योग्य छैन यसैले शस्त्र यसलाई काट्न सक्दैनन्। यो आत्मा जलाउन योग्य छैन यसैले आगो यसलाई जलाउन सक्दैन।यो आत्मा भिजाउन योग्य छैन यसैले पानी भिजाउन सक्दैन। यो आत्मा सुकाउन योग्य छैन त्यसैले हावा यसलाई सुकाउन सक्दैन। आत्मा मा माथि भनिएको शस्त्रादिको नाशको योग्यता यसैले छैन कि यो नित्य छ र नित्य यसैले छ कि यो सर्वगत नाम व्यापन स्वभाववाला छ, यसैले धेरै सूक्ष्म छ र व्यापनशील अतिसूक्ष्म हुनाले शस्त्र, अग्नि, जल, वायुको यस मा प्रभाव पर्न सक्दैन। अच्छेद्य र अदाह्य हुनाले आत्मा स्थाणु अर्थात् स्थिर स्वरूपवाला छ, यसको स्वरूपमा हेरफेर हुन सक्दैन। स्थिर स्वभाववाला हुनाले पानी यसलाई भिजाएर बदल्न सक्दैन र यो हल्लाउन-घुमाउन सकिदैन, अर्थात् अचल छ। अचल हुनाले वायु यसलाई सुकाउन सक्दैन किनकी यो आफ्नो पूर्व देखि चलायमान हुँदैन। भाव यो कि माथि भनिएको कारणहरूले आत्मा सनातन र नित्य स्वरूप हो॥२४॥**

-★-★-★-

**अव्यक्तोऽयमचिन्त्योऽयमविकार्योऽयमुच्यते ।**
**तस्मादेवं विदित्वैनं नानुशोचितुमर्हसि ॥**

**यो आत्मा अव्यक्त, अचिन्त्य र विकार रहित भनिन्छ। यसैले हे अर्जुन! यस आत्मालाई उपर्युक्त प्रकारले जानेर तिमी शोक गर्न योग्य छैनौ अर्थात् तिमीले शोक गर्नु उचित होईन॥२५॥**

किञ्चान्योऽप्यशोच्यत्वे हेतुरित्याह अव्यक्त इति। छेद्यादि-द्रव्याणि यथा यैः प्रमाणैर्व्यज्यन्ते तथा तैः प्रमाणैरयमात्मा न व्यज्यतेऽतोव्यक्तः। तथा स्वेतरसमस्तवस्तुस्वरूप-स्वभावौपम्येन चिन्तयितुमनर्हस्ततोऽचिन्त्यः, अत एवावि-कार्यः। दध्यादिवद्विकारशून्य उच्यते तस्मादेवमुक्तस्वरू-पस्वभावमेनमात्मानम् विदित्वा त्वं नार्हसि।

**आत्मा शोक गर्न योग्य छैन, यस मा अरू कारण पनि भनिन्छ। आत्मा अव्यक्त छ अर्थात् जुन प्रमाणहरू द्वारा काट्ने र जलाउने वस्तु प्रकट गरिन्छ, त्यही प्रमाणहरू द्वारा आत्मा प्रकट गर्न सकिंदैन यसैले यसलाई अव्यक्त भनिन्छ। आत्मा अचिन्त्य छ अर्थात् त्यसलाई पृथक् वस्तु द्वारा त्यसको स्वरूप र स्वभावको उपमा दिएर हामी त्यसलाई बुझ्न सक्दैनौं। आत्मा यसैले सर्वथा विकारहीन छ। दूधको विकार जस्तो दही हुन्छ, त्यस्तो आत्मा मा कुनै प्रकार विकार हुन सक्दैन। यी कारणहरूले आत्मालाई पहिले नै भनिएको स्वभाव र स्वरूपवाला जानेर, हे अर्जुन! तिमिले त्यसको लागि शोक गर्नु हुँदैन॥२५॥**

-★-★-★-

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**अथ चैनं नित्यजातं नित्यं वा मन्यसे मृतम् ।**
**तथापि त्वं महाबाहो नैवं शोचितुमर्हसि॥**

**तर तिमी यस आत्मालाई सदा जन्मने र मर्नेवाला मान्दछौ, भने पनि हे महाबाहो! तिमी यस प्रकार शोक गर्न योग्य छैनौ॥२६॥**

एवं वैदिकमातानुकूल्येन भगवता प्रत्यगात्मनोऽशोच्यत्व–मुपपाद्येदानीं देहातिरिक्तो देहतुल्यमरिमाणक आत्मा देहेन सह जायते म्रियते चेति दिगम्बरमतांगीकारेऽपि तस्याशोच्यतोच्यते– अथ चेति। अथेति पक्षान्तरे मदुक्त–मतेतरमाताभ्युगमपक्षेऽपि नित्यजातं नित्यं वा मृतमेनमात्मानं त्वं मन्यसे तथापि हे महाबाहो! नैवं शोचितुमर्हसि।

वैदिकमतानुकूल आत्मा शोक गर्न योग्य छैन, यो प्रतिपादन गरेर अब भगवान् यो भन्नुहुन्छ कि दिगम्बर मत अंगीकार गर्दा पनि, (जसको मतमा आत्मा देह भन्दा पृथक् भए पनि देहको समान परिणामवाला छ र देहको साथ नै जन्मिन्छ र मर्दछ।) आत्मा शोक गर्न लायक छैन। हे अर्जुन! पक्षान्तरमा यदि मेरो मत भन्दा भिन्नै मतलाई स्वीकार गरेर आत्मालाई नित्य जन्मिने र मर्ने मान्दा पनि आत्माको लागि तिमिले शोक गर्नु योग्य छैन॥२६॥

–★–★–★–

**जातस्य हि ध्रुवो मृत्युर्ध्रुवं जन्म मृतस्य च ।**
**तस्मादपरिहार्येऽर्थे न त्वं शोचितुमर्हसि॥**

**किनकी यस मान्यताको अनुसार जन्मनेको मृत्यु निश्चित छ र मरेकाको जन्म पनि निश्चित छ। यसले पनि यो बिना उपायवाला (बिनाकामको) विषयमा तिमी शोक गर्न योग्य छैनौ॥२७॥**

कुतस्तत्राह–जातस्येति। उत्पन्नस्य विनाशोऽवश्यम्भावी तच्छरीरारम्भकर्मणां नियतकालस्थायित्वनियमात्। मृतस्य च पूर्वदेहकृतस्योत्तरदेहसंबंधहेतुकर्मणो विद्यमानत्वात् जन्माप्यवर्जनीयं, हेतुसत्वे कार्योत्पत्ते सम्भवात्। यस्मादेवं तस्मादपरिहार्येऽर्थे तत्तत्कर्माधीनावर्जनीयजन्ममरणपदार्थे त्वं शोचितुं नार्हसि।

जुन उत्पन्न भएको छ त्यसको नाश अवश्य हुनेछ किनकी यस्तो नियम छ कि शरीरलाई आरम्भ गर्ने प्रारब्धादि कर्म तोकिएको समय सम्म अर्थात् उसको भोगको समय सम्म नै स्थित रहन्छन्। र जो मरेर गयो त्यसको जन्म अनिवार्य नै छ किनकी पूर्व देहमा गरिएको कर्म उत्तर देह सँग सम्बन्ध गराउनेवाला हुन्छन्, कारण कि हेतु रहेमा त्यसको कार्यको उत्पत्ति हुन्छ नै। यसैले यदि कर्मको अधीन हुनाले जन्म र मरण यी दुबै अनिवार्य(कहिल्यै नमेटिने) छन् भने उनीहरूका लागि शोक गर्नु पर्दैन॥२७॥

–★–★–★–

**अव्यक्तादीनि भूतानि व्यक्तमध्यानि भारत ।**
**अव्यक्तनिधनान्येव तत्र का परिदेवना॥**

**हे अर्जुन! सम्पूर्ण प्राणी जन्मभन्दा पहिले अप्रकट थिए र मरेपछि पनि अप्रकट नै हुनेवाला हुन, केवल बीचमा मात्रै प्रकट छन्; फेरि यस्तो स्थितिमा के शोक गर्नु? ॥२८॥**

देहवियोगयोगयोरवर्जनीयत्वेऽपि अस्मदनुभूतभीष्मादिदेहेषु नश्यत्सु एतान्कथं पुनर्द्रक्ष्यामः, क्व गमिष्यन्तीति शोक–कारणमस्तीत्याह– अव्यक्तादीनि इति। अव्यक्तं त्रिगुणात्मकं प्रधानं मायादिरुत्पत्तेः पूर्वं स्वरूपं येषां

देह को योग र वियोग अनिवार्य भए पनि हामी सँग अनुभूत भीष्म आदिको यो शरीर नष्ट हुन जान्छ र उनीहरूलाई फेरि हामी देख्न पाउने छैनौं। उनीहरू बेपत्ता हुन जान्छन्। यी सबैको दुःख त अवश्य हुन्छ नै। यसैको उत्तर भगवान् यहाँ दिनुहुन्छ– भीष्मादिको चेतनको आधेय शरीर यस जन्मभन्दा पूर्व अव्यक्त थियो अर्थात् सत् रूप कारण द्रव्य मा स्थित हुँदा यति सूक्ष्म

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

तान्यव्यक्तादीनि भूतानि चेतनाधेयभूतशरीराणि सद्रूपकारणद्रव्यात्मना स्थितान्यपि अतिसूक्ष्मत्वादु-लब्धुमयोग्यानि, न तु तार्किकाभिमतप्रागभावरूपाणि ततो व्यक्तमभिव्यक्तमवस्थान्तरापत्तिलक्षणं जन्मैव मध्ये येषां तथा तानि। सदेव कारणद्रव्यमवस्थान्तरापत्त्या कार्यव्य-क्तादिशब्दाभिधेयं प्रत्यक्ष शास्त्राभ्यां गृह्यते। अतो मध्येऽस्थान्तरापन्नान्यपि कारणाभिन्नान्येव। 'सदेवसोम्ये-दमग्र आसीत्' इति श्रुतेः 'तदन्यत्वमारम्भणशब्दादिभ्यः, भावे चोपलब्धेः, सत्त्वाच्चावरस्ये'त्यादिसूत्रेभ्यश्च। ननु 'असदेवेदमग्र आसीत् ततः सदजायते'ति श्रुतेः कार्यस्योत्पत्तेरसत्पूर्वकत्वोक्तेस्तदनन्यत्वे चासदेवेदं जगदिति चेन्न, एतच्छ्रुतिस्थासच्छब्दार्थस्य सूत्रकारेणैव निर्णीतत्वात् 'असद्व्यपदेशादिति चेन्न, धर्मान्तरेण वाक्य शेषात्, पटवच्चे'ति सूत्राभ्याम्। अन्यथा तत्रैव वाक्यशेषे 'कथमसतः सज्जायते'ति श्रुतिविरोधात्। असत उत्पत्यंगीकारे तिलेभ्यः इव सिकताभ्योऽपि तैलोत्पत्ति स्यान्न च सा दृष्टा श्रुता वा। तस्मात्सत एव सूक्ष्मद्रव्स्य स्थूलावस्थापत्तिः कार्यत्वेनाभिधीयते इति दिक्। यदुपादा-नकं वस्तु तस्य तत्रैव लयो नान्येत्रेत्याह-अव्यक्तनिध-नान्येवेति। अव्यक्ते प्रधाने एव निधनं प्राणवियोगानन्तरा-वस्थानम् येषां तानि घटकुण्डलादेर्मृत्सुवर्णादिस्वरूपाप-त्तिवत्। तत्रैवम्भूतेषु देहेषु नश्यत्सु का परिदेवना कः शोकनिमित्तो विलापः। बुद्धिमतो न युज्यत इत्यर्थः।

**थियो कि त्यसको प्राप्ति वा उपलब्धि हुन सक्दैन थियो। यो कुरो होईन कि त्यो छँदै थिएन, जस्तो कि तार्किकहरूको मत हो। त्यो थियो जरूर, तर सूक्ष्मातिसूक्ष्म रूपले आफ्नो सत् रूप कारण(प्रकृति) मा स्थित थियो। फेरि यो शरीर बीचमा जन्म हुनाले व्यक्त अर्थात् प्रकट भयो। अवस्थान्तरमा प्राप्त हुनु (सूक्ष्म बाट स्थूल हुनु) नै त्यसको जन्म या प्रकट हुनु हो। कारण द्रव्य जो सत्य छ त्यसैको अवस्थान्तर हुनाले कार्य यस्तो नाम पर्न जान्छ अर्थात् कार्य र कारण मा अभिन्नता छ। यसमा शास्त्र र प्रत्यक्ष दुबै थरिको प्रमाण छन्। श्रुतिमा भनिएको छ- 'सदेवसोम्येदमग्र आसीत्' अर्थात् हे शिष्य! यस सृष्टिभन्दा पहिले सत् नै थियो। फेरि व्यासको सूत्र छ- 'तदन्यत्वमारम्भणशब्दा-दिभ्यः, भावे चोपलब्धेः, सत्त्वाच्चावरस्य'(यी सबैको अर्थ श्रीनिवासाचार्य कृत वेदान्त कौस्तुभ भाष्यमा हेर्नु।) यसको भावार्थ यो हो कि कार्य कारणमा सदा अनन्यत्व छ। कारणबाट नै कार्यको प्राप्ति हुन्छ र कारणमा कार्य सूक्ष्मरूपले रहन्छ अतः कार्य पनि सत् नै हो। तर यसमा यो शंका हुन सक्छ कि 'असदेवेदमग्र आसीत् ततः सदजायत' अर्थात् प्रारम्भमा यो असत् नै थियो त्यसै बाट सत् को उत्पत्ति भयो र जब कारण नै असत् ठहरियो भने कार्य कारणमा अनन्यत्व सम्बन्ध छ भने त यो जगत् पनि असत् नै छ। तर यस्तो शंका गर्नु भूल हो, किनकी यस श्रुतिमा जुन असत् शब्द व्यवहार भएको छ त्यसको अर्थ को निर्णय स्वयं सूत्रकारले नै गरिदिनुभएको छ। उहाँ भन्नुहुन्छ-'असद्व्यपदेशादिति चेन्न, धर्मान्तरेण वाक्य शेषात्, पटवच्च' अर्थात् माथि उल्लेखित श्रुतिबाट यो संझिनु हुँदैन कि कारण असत् हो किन्तु यस असत् भनिने श्रुतिमा केवल धर्मान्तर भनिएको छ। होईन भने त त्यहाँ नै वाक्य शेष मा भनिएको छ कि-'कथमसतः सज्जायत' अर्थात् असत् बाट सत् कसरी पैदा हुन सक्छ? फेरि यदि असत् बाट सत् हुने मानियो भने त तिल बाट तेल निकाल्नुको के आवश्यकता छ, बालू बाटै तेल र पानी मथेर नै घीऊ निकाले भैगयो। तर यो कतै देखिंदैन पनि सुनिदैन पनि। यो प्रत्यक्ष प्रमाण भयो यी सबै बाट यो प्रष्ट सिद्ध भयो कि सूक्ष्मरूपले जुन द्रव्य कारणमा स्थित छ त्यसैलाई स्थूल भएर दृष्टिगोचर हुनुलाई कार्य भनिन्छ।**

**जुन वस्तु जहाँ बाट निस्कन्छ त्यसको लय पनि त्यहीं हुन्छ यसैले भन्दछन कि यस शरीरको अन्त अव्यक्त अर्थात् प्रधानमा नै हुन्छ। जस्तो घड़ा फुटेपछि माटो मा मिल्दछ र कुण्डल टुक्रिए पछि सुन नै हुन्छ, त्यस्तै नै अव्यक्त माया र प्रधानबाट निस्किएको शरीर फेरि त्यसैमा लीन हुन्छ। तब यस्तो नाशवान शरीरको लागि शोक गर्नु बुद्धिमानको काम होईन॥२८॥**

-★-★-★-

**आश्चर्यवत्पश्यति कश्चिदेनमाश्चर्यवद्वदति तथैव चान्यः।**
**आश्चर्यवच्चैनमन्यः शृणोति श्रुत्वाप्येनं वेद न चैव कश्चित्॥**

**कुनै एउटा महापुरुष नै यसलाई आश्चर्यको भाँति हेर्दछ र त्यस्तै नै अर्को महापुरुष यसको तत्त्वलाई आश्चर्यको भाँति वर्णन गर्दछ तथा दोस्रो कुनै अधिकारी पुरुष नै यसलाई आश्चर्यको भाँति सुन्दछ र कुनै–कुनै त यसलाई सुनेर पनि जान्दैनन्॥२९॥**

स्यादेतद्देहानामचित्प्रधानपरिणामत्वादन्ते तत्रैव लयसम्भावन्न पुनस्तद्दर्शनादीति, आत्मा त्वपरिणमिस्वभावतया नित्यो ध्रुवश्चोक्तस्ततो देहवैलक्षण्येन दर्शनादियोग्यो भवेदित्याकांक्षायां दुर्बोध आत्मेत्याह–आश्चर्यवदिति। सहस्रेषुमध्ये कश्चिद्‌भगवदाराधनलब्धतत्प्रसादनिवृत्तदेहाद्यभिनिवेश एनं देहिनं पश्यति, शास्त्रसंस्कृतबुद्धावनुभवति। कथमाश्चर्यवत् पूर्वानुभूतसर्वसस्तुविजातीयत्वादद्‌भुमिव, न तु लौकिकवस्तुसाधारणतया न केवलमनुभवितुस्तदाश्चर्यवद् वदति, तथैव कश्चिदेवान्यस्तदुपदेष्टा गुरुरपि शिष्यायाश्चर्यवद्वदति, न तु केनचिद्दृष्टवस्तुनोपमातुं शक्नोति। तथैवान्य आश्चर्यवदेनं शृणोति। कश्चिदेनं श्रुतवाऽपि न च नैव वेद। तस्माद्द्रष्टा श्रोता वक्ता चास्य दुर्लभ इति भावः।

शरीर मायापरिणामी हुनाले माया मा नै त्यसको लय हुन्छ। त्यसको मृत्यु पछि त्यसलाई देख्नु असम्भव छ। तर आत्मा देह भन्दा विलक्षण छ र परिणामी स्वभाववाला नहुनाले नित्य र ध्रुव छ यसैले त्यसलाई देख्न पनि सकिनु पर्ने हो। यसको उत्तर यहाँ दिनुहुन्छ- हजारौं मनुष्यहरूमा कुनै एउटा जसको देहादि मा अभिनिवेश भगवदाराधनाले प्राप्त भगवत् कृपाले छुटेको छ, आत्मालाई देख्दछ, अर्थात् शास्त्रद्वारा पवित्र गरिएको बुद्धिद्वारा त्यसको अनुभव गर्दछ, यो मनुष्य आत्मालाई आश्चर्यमयी पदार्थको जस्तो देख्दछ अर्थात् जति पनि वस्तुहरू छन् त्यसले पूर्वमा देखेको या अनुभव गरेको छ ती सबै भन्दा आत्मा विलक्षण लाग्दछ। केवल अनुभव गर्नेवाला नै आश्चर्यको रूपमा देख्दछ सो कुरा होईन। आत्मस्वरूपलाई भन्नेवाला या त्यसको आफ्नो शिष्यलाई शिक्षा दिनेवाला गुरु पनि आत्मालाई आश्चर्यपदार्थ यस्तो नै भन्दछन् अर्थात् कुनै दृष्ट या अनुभूत पदार्थद्वारा उपमा दिएर भन्न सक्दैन। यसै प्रकार श्रोता पनि आश्चर्यमयी पदार्थको जस्तो सुन्दछन् अर्थात् आत्माको विषयमा सुन्नेहरूलाई पनि यो मात्र थाहा हुन्छ कि यस्तो कुरा पहिले कहिल्यै पनि सुनिएन। कुनै आत्माको विषयमा सुनेर पनि त्यसलाई जान्न सक्दैन। भन्नुको तात्पर्य यो कि आत्मस्वरूपलाई देख्ने, भन्ने र सुन्नेहरू धेरै नै दुर्लभ छन्॥२९॥

–★–★–★–

**देही नित्यमवध्योऽयं देहे सर्वस्य भारत।**
**तस्मात्सर्वाणि भूतानि न त्वं शोचितुमर्हसि॥**

**हे अर्जुन! यो आत्मा सबैको शरीरमा सदा नै अवध्य छ। यस कारण सम्पूर्ण प्राणीहरूका लागि तिमी शोक गर्न योग्य छैनौ॥३०॥**

एनमित्येकवचनेनात्मैक्यभ्रमं मा कार्षीरिति वदन्नात्मोपदेशमुपसंहरति–देहीति। हे भारत! सर्वस्य देवर्तिर्यग् कीटादिप्राणिमात्रस्य देहे बध्यमानेऽप्ययमुक्तविधो देही कर्मफलभोगायतनभूतं देहं प्रति भिन्नस्वरूपेणाश्रयीभूतोऽवध्यः, हन्तुमशक्यः। यस्मादेवं तस्मात्सर्वाणि भूतानि आत्माश्रितशरीराणि त्वं शोचितं नार्हसि।

पूर्व श्लोकमा (एनं) शब्द आत्माको लागि प्रयोग गरिएको छ। यो एक वचन हो। यसले यो भ्रम हुन सक्दछ कि आत्मा एउटा मात्रै हो। त्यसै भ्रमलाई हटाउनको लागि आत्माको विषयमा भगवान् उपदेश गर्नुहुन्छ। हे अर्जुन! सबै(देव, तिर्यक्, कीट इत्यादि)को नाश हुन योग्य शरीरमा आत्मा नित्य र अवध्य छ, किनकी कर्मफल भोगको स्थानस्वरूप शरीरबाट यो भिन्न छ। यसैले यसलाई कसैले मार्न सक्दैन। यसैल आत्माश्रित शरीरहरूका लागि दुःख मान्नु तिम्रो योग्य होईन॥३०॥

–★–★–★–

## स्वधर्ममपि चावेक्ष्य न विकम्पितुमर्हसि ।
## धर्म्याद्धि युद्धाच्छ्रेयोऽन्यत्क्षत्रियस्य न विद्यते ॥

**तथा आफ्नो धर्मलाई(कर्तव्यलाई)हेरेर पनि तिमी भय गर्न योग्य छैनौ अर्थात् तिमीले डराउनु हुँदैन; किनकी क्षत्रियको लागि धर्मयुक्त युद्धभन्दा ठूलो कुनै कल्याणकारी कर्तव्य छैन ॥ ३१ ॥**

एतावताऽऽत्मनोऽशोच्यत्वमुपपाद्य' यच्छ्रेयः स्यान्निश्चितं ब्रूहि तन्मे' इति यदर्जुनेनोक्तं तस्योत्तरमाह–स्वधर्ममिति। न केवलमात्मतत्त्वमेवावेक्ष्य किन्तु स्वधर्म–क्षत्त्रियधर्ममपि चावेक्ष्य शास्त्रेण निश्चित्य त्वं विकम्पितु विचलितुं धर्माद–धर्मभ्रान्त्या निवर्त्तितुं नार्हसि। कोऽसौ धर्म इत्यपेक्षायामाह–धर्म्यादिति। धर्मादनपेतं धर्म्यं तस्मात् युद्धादन्यत् क्षत्रियस्य श्रेयो न विद्यते। शास्त्रे इति शेषः। तथोक्तं याज्ञवल्क्यन्–'पदानि क्रतुतुल्यानि भग्नेष्वनिवर्त्तिनामिति' एतेन 'दृष्ट्वेमं स्वजनं कृष्ण युयुत्सुं समुपस्थितमि'त्यारभ्य 'वेपथुश्च शरीरे मे रोमहर्षश्च जायत' इति मध्ये 'न च शक्नोम्यवस्थातुं भ्रमतीव च मे मन' इत्यन्तं स्वधर्मप्रतिकूलं ते वचनमनुचितमिति भावः।

**आत्मा शोक गर्न योग्य छैन, यसको प्रतिपादन गरेर, अब अर्जुनले सोधेका थिए कि मेरो लागि जो सबै भन्दा श्रेय छ त्यसलाई निश्चय गरेर भन्नुहोस, यसको उत्तर भगवान् दिनुहुन्छ–आत्मतत्त्वको विचारबाट मात्र हैन, बरु धर्मको विचारले पनि अर्थात् शास्त्रोक्त आफ्नो क्षत्रिय धर्मको पनि विचार गरेर तिमिले धर्ममा अधर्मको भ्रान्ति मानेर त्यसबाट हट्‌नु हुँदैन। क्षत्रिहरूका लागि धर्मयुक्त युद्ध भन्दा बढेर ठूलो कल्याणकारी वस्तु शास्त्रमा छैन। याज्ञवल्क्य ऋषि भन्नुहुन्छ–'जो लड़ाईं बाट भाग्दैनन्, उनीहरू प्रत्येक पाईला यज्ञको समान पवित्र छ। यसैले धर्मको प्रतिकुल 'दृष्ट्वेमं स्वजनं कृष्ण' देखि आरम्भ गरेर 'न च शक्नोम्यवस्थातुं' सम्म, जुन कुरा तिमिले भन्यौ, त्यो तिम्रो योग्य छैन ॥ ३१ ॥**

–★–★–★–

## यदृच्छया चोपपन्नं स्वर्गद्वारमपावृतम् ।
## सुखिनः क्षत्रियाः पार्थ लभन्ते युद्धमीदृशम् ॥

**हे पार्थ! आफ–से–आफ प्राप्त भएको र खुलेको स्वर्गको द्वाररूपी यस प्रकारको युद्धलाई भाग्यमानी क्षत्रीयले मात्रै पाऊँदछ ॥ ३२ ॥**

स्वश्रेयो महता यध्तनेन प्राप्यते, इदं तु तवायत्नतः प्राप्तमित्याह–यदृच्छया स्वप्रयत्नं विनैवोपपन्नमुपस्थितमीदृशं पौरुष–विशेषविशिष्टवीरपुरुषप्रतियोद्‌धृनिष्ठमुष्मिकेष्टकीर्तिलाभ–करं युद्धं सुखिनः सुखार्हाः क्षत्रियाः लभन्ते। ननु युद्धे मृतश्चेत् तस्य किं सुखं स्यादित्यत्राह–स्वर्गद्वारमिति। अप्रतिरुद्धं स्वर्गस्य द्वारभूतं,तत्–

य आहवेषु युद्ध्यन्ते भूम्यर्थमपराङ्मुखा।
अकूटैरायुधैर्यान्ति ते स्वर्गं योगिनो यथा॥
–इति वचनात्।

**आफ्नो कल्याण कसरी हुन्छ भनेर मान्छे कति परिश्रम गरेर खोजिरहन्छन्, तिमिलाई त आफ–से–आफ आईपुगेको छ। यसैलाई देखाउनु हुन्छ– हे पार्थ प्रयत्न नगरीकन आफ्नै इच्छाले आएको यस्तो युद्ध, जसमा तिमि ठूला पराक्रमशाली वीरहरूसँग लड़ेर आफ्नो कीर्तिको यस लोक तथा परलोकमा फैलाउन सक्छौ, भाग्यमानी क्षत्रिहरूलाई मात्रै यस्तो युद्ध मिल्दछ। यदि यो सोध कि हामी लड़ाईं मा मारियौं भने के फल हुन्छ? भने मारियौ भने त तिम्रो लागि स्वर्गको ढोका खुल्नेछ किनकी शास्त्रमा यो वचन छ कि– 'य ........यथा॥'**
**अर्थात् जो भूमिको लागि पीठ नदेखाईकन सामने लड्दछन् र शस्त्रास्त्रबाट मारिन्छन् ती योगिहरूका समान स्वर्गमा जान्छन् ॥ ३२ ॥**

–★–★–★–

## अथ चेत्त्वमिमं धर्म्यं सङ्ग्रामं न करिष्यसि।
## ततः स्वधर्मं कीर्तिं च हित्वा पापमवाप्यसि॥

**तर यदि तिमी यो धर्मयुक्त युद्धलाई गर्दैनौ भने स्वधर्म र कीर्तिलाई छोडेर पापमात्र तिमीलाई प्राप्त हुनेछ॥३३॥**

यदुक्तं 'एतान्न हनुमिच्छामि घ्नतोऽपि मधुसूदन। अपि त्रैलोक्यराज्यस्य हेतोः किन्नु महीकृते। कथं भीष्ममहं संख्ये द्रोणं च मधुसूदन। इषुभिः प्रतियोत्स्यामि पूजार्हावरिसूदन। इति तस्योत्तरमाह- अथ चेदिति। अथ पक्षान्तरे ऐहिकामुष्मिकसुखलाभानपेक्षया चेद्यदि धर्म्यं धर्मादनपेतं 'निर्जित्य परसैन्यानि क्षितिं धर्मेण पालयेदि'ति शास्त्रविहितमिमं संग्रमं त्वं न करष्यिसि ततः संग्रामाकरणात्स्वधर्मं स्वधर्मजन्यं निरतिशयसुखं देवसममहावीरपुरुषविजयागामिनीं कीर्तिं च हित्वा पापमवाप्स्यसि।

पहिले अर्जुनले भनिसके कि तीनै लोकको राज्यको लागि र यिनीहरू बाट आहत भए पनि म यिनीहरूलाई म मार्दिन भने पृथ्वीको राज्यका लागि मार्नु त टाढैको कुरा भयो। र म हजुरबा र गुरुलाई कसरी बाण प्रहार गर्न सक्दछु, यसको उत्तर भगवान् दिनुहुन्छ-
यदि सांसारिक र पारलौकिक लाभहरूलाई उपेक्षा गरेर तिमि शास्त्रविहित धर्मयुक्त युद्ध लड्दैनौ भने अति सुख दिने शास्त्रमा भनिएको-'शत्रुको सेनालाई जीतेर पृथ्वीलाई धर्मद्वारा पालन गर्नु' यस आफ्नो क्षत्रियधर्म र स्वधर्मजन्य श्रेष्ठसुख एवं देउता जस्ता वीरहरूलाई जीतेर प्राप्त कीर्त्तिको नाश गरेर पाप नै कमाउने छौ॥३३॥

-★-★-★-

## अकीर्तिं चापि भूतानि कथयिष्यन्ति तेऽव्ययाम्।
## सम्भावितस्य चाकीर्तिर्मरणादतिरिच्यते ॥

**सबै मान्छेहरू सधैं तिम्रो अपकीर्तिको नै बखान गर्ने छन् र माननीय पुरुषको लागि अपकीर्ति मृत्यु भन्दा पनि ठूलो(मृत्यु) हुन्छ॥३४॥**

संग्रमत्यागे न केवलं भाविस्वधर्मकीर्त्तिहनिमात्रमपि तु महान्दोषः स्यादित्याह- अकीर्तिमिति। क्षत्रियहर्षकरे संग्रामे प्राप्ते पाण्डुपुत्रो गाण्डीवधन्वाऽर्जुनः कातरो भूत्वा पलायित इत्यव्ययां बहुजनदृष्टश्रुतपरम्परया सर्वदेशव्यापिनीं पुनरविनाशिनीं तेऽकीर्त्तिं न केवलं क्षत्रियाः कथयिष्यन्ति किन्तु देवर्षिक्षत्रियवणिग् शूद्रान्तान्ति सर्वाणि भूतानि कथयिष्यन्ति। ननु युद्धे मरणसन्देहान्मरणादकीर्त्तिर्नाधिकेत्यतः सा सोढव्या, न तु मरणोपायं कुर्यात्। तथोक्तं शान्तिपर्वणि- 'साम्ना दानेन भेदेन समस्तैरुत चापृथक्।विजेतु प्रयतेतारीन्न तु युद्धेत् कदाचन॥ अनित्यो विजयो यस्माद्दृश्यते युध्यमानयोः। पराजयश्च संग्रामे तस्माद्युद्धं विवर्जयेदि'ति॥ तस्मान्मरणादकीर्त्तिः किमधिकं दुःखमित्यत आह-सम्भावितस्येति। खाण्डवे इन्द्रेणापि अनवार्यो वासुदेवसखाऽग्नितर्पणाद्यतुल्यपराक्रकैरन्य दुर्लभैर्गुणैर्बहुमतस्याकीर्तिर्मरणादतिरिच्यते। अधिका भवति।

युद्ध बाट हट्दा केवल तिम्रो भविष्यमा मात्र धर्म र कीर्त्तिको हानी हुने छ त्यो होईन। यस समय पनि तिम्रो ठूलो अपकीर्ति हुन्छ र तिमीलाई ठूलो दोष लाग्नेछ। यही भन्नुहुन्छ- क्षत्रियलाई आनन्द दिने युद्धलाई प्राप्त गरेर वीर पाण्डुको पुत्र, गाण्डीव धनुषधारी अर्जुन कातर भएर र डराएर रणभूमिबाट भाग्यो, यस्तो तिम्रो कहिल्यै नाश नहुने अपकीर्त्ति सदाको लागि संसारमा फैलने छ। केवल क्षत्रिय मात्रै होईन, किन्तु देव, ऋषि, क्षत्रिय, वैश्य, शूद्र इत्यादि सबै तिम्रो अपकीर्त्ति को कुरा गर्ने छन्। र यदि यो संझिबसेका छौ कि युद्धमा मर्नु भन्दा अपकीर्त्ति त्यति दुःखद हुँदैन होला यसैले त्यसलाई सहन्छु, मर्ने उपाय किन गर्नु। महाभारतको शान्तिपर्वमा पनि युद्धको खण्डनमा यस्तो लेखिएको छ- साम्ना........ ....विवर्जयेत्॥' अर्थात् साम, दाम, भेद ले या यीनिहरूमा नै कुनै एकले शत्रुलाई जित्ने कोशिश गर्नु। लड्नेहरूका जय पराजय दुबै अनित्य छन्, यसैले युद्धलाई छोडिदिनु पर्दछ। तर यस्तो संझिनु तिम्रो भूल हो किनकी सम्मानित पुरुषहरूको अपकीर्ति मर्नु भन्दा पनि धेरै दुःखद हुन्छ र तिमि जुन खाण्डव वनको दहनमा इन्द्र भन्दा पनि अनिवार्य र अग्निलाई प्रज्वलित गर्नेवाला हौ, मेरा सखा हौ, र अरुपनि अतुल पराक्रम इत्यादि दुर्लभ गुणहरूले युक्त छौ, अतः सबै जना तिमीलाई अति सम्मानको दृष्टिले हेर्दछन् र यसैले तिम्रो अपकीर्ति मर्नुभन्दा पनि अधिक दुःखदायी हुन्छ॥३४॥

-★-★-★-

**भयाद्रणादुपरतं मंस्यन्ते त्वां महारथाः ।**
**येषां च त्वं बहुमतो भूत्वा यास्यसि लाघवम् ॥**

**जसको दृष्टिमा तिमी पहिले धेरै सम्मानित भएर अब लघुतालाई प्राप्त गर्दछौ भने तिनै महारथीहरू तिमिलाई डरले गर्दा युद्धबाट हटेको मान्नेछन् ॥ ३५ ॥**

ननु नाहं युद्धात्कातरतया भीतो निवर्त्ते। किन्तु बन्धु स्नेहकारुण्यादतोऽकीर्तिनिमित्ताभावात्कथं मेऽकीर्तिं कथयिष्यन्तीति चेत्तत्राह–भयादिति। युद्धोद्योगात्पूर्वमेव नाहं युद्धं करिष्यामीति व्यवसायेनानुद्युक्तश्चेत्तर्ह्येवं सर्वे मन्येरन्, पूर्वन्तु गराग्निदानकपटद्युतसर्वस्वाहरणवन–निर्यापणादिबह्वपकारिधार्तराष्ट्रंबंधेच्छुः परशुरामाद्यजेय–भीष्मादिभयात्तदधिकविद्यालाभाय तपः करणगिरीश–तोषणस्वर्गप्रयाणाद्यद्भुतकर्म कृत्वा सर्वान्वधिष्यामीति प्रतिज्ञापूर्वकं युद्धार्थमागत्य बहुशस्त्रास्त्रशौर्यतेजः पराक्रमैर्येषां त्वं बहुमतोऽर्जुनेन युद्धं भविष्यतीति हर्षेणागतास्ते महारथाः अदानीमुभयोः सेनयोर्मध्ये रथं मे स्थापयेति मां प्रेर्य्य रथे स्थित्वा सम्प्रतिन्यस्तशस्त्र–मश्रुव्याप्ताक्षं त्वां दृष्ट्वा भयाद्रणाद्युपरतं मंस्यन्ते। नहि भयं विना क्षत्रियाणां युद्धादुपरामः संभवतीति भावः। तस्माद्युद्धादुपरतो भीष्मद्रोणकर्णादिभ्यो लाघवं यास्यसि।

यदि अर्जुन यस्तो उत्तर दिउन कि म डरले कातर भएर लड़ाई बाट मुखफेर्न लागेको हैन। किन्तु बन्धु-स्नेह वश करुणा उत्पन्न भएर लडिरहेको छुईन। यस मा अपकीर्ति हुने कुनै कारण नै छैन, त भगवान् भन्नुहुन्छ–
हे अर्जुन! तिमि युद्धबाट जुनसुकै कारणले हट, तर महारथीहरू यहि संझिनेछन् कि हाम्रो डरले नै अर्जुन भाग्यो। किनकी यदि तिमी युद्धको उद्योग गर्नुभन्दा पहिले नै निश्चयपूर्वक भनिदिन्थ्यौ कि म युद्ध गर्दिन भनेर, त्यतिखेर त तिमिले जे भन्थ्यौ वा संझिन्थ्यौ त्यो तिनीहरू सबै जना मान्दथे, तर अब त त्यो कुरो रहेन। अग्निद्वारा तिमिलाई जलाउन इच्छुक, कपट जुवाद्वारा तिम्रो सर्वस्व अपहरणकारी तिमिलाई वनमा निर्वासन गरेर अरु पनि नानाथरीका अपकार गर्ने धृतराष्ट्रपुत्रहरूको वधको इच्छाले परशुराम इत्यादि भन्दा पनि अजेय भीष्मादि को भयले उनीभन्दा पनि अधिक विद्या सिक्नको लागि तिमिले तपस्या गर्‍यौ, शिवजीलाई प्रसन्न गर्‍यौ, स्वर्गमा गयौ र यस्तै अरु पनि अद्भुतकर्म गर्‍यौ, फेरि सबैलाई मार्नेछु यस्तो प्रतिज्ञा गरेर रणमा आयौ, धेरै अस्त्र-शस्त्र, शूरता, तेज र पराक्रमहरूको कारण जो तिमिलाई सम्मानको नजरले हेर्दछन्, तीनै महारथी तिमिसँग लडेर युद्ध गर्नुको आनन्द लुट्न को लागि यहाँ आएका छन्; फेरि तिमिले मलाई दुबै सेनाको बीचमा रथ खड़ा गर्न लगायौ, र यो सबै गर्नु गराएर अब शस्त्र फ्याँकेर आँखामा आँसू ल्याई रोईरहेको छौ भने ती महारथीहरू के संझन्छन्? तिनीहरू जरूर यही संझिनेछन् कि हामी देखि डराएर अर्जुनको यो दशा भईरहेको छ। किनकी भय को बिना क्षत्रिय अरु कुनै कारणले युद्धबाट पछि हट्‌दैन, यस प्रकार युद्धबाट हट्‌दा खेरि भीष्म कर्णादिको नजरमा तिमी तुच्छ हुनेछौ ॥ ३५ ॥

–★–★–★–

**अवाच्यवादांश्च बहुन्वदिष्यन्ति तवाहिताः ।**
**निन्दन्तस्तव सामर्थ्यं ततो दुःखतरं नु किम् ॥**

**तिम्रो शत्रुहरू तिम्रो सामर्थ्यको निन्दा गर्दै तिमिलाई भन्न नहुने धेरै कुरा भन्नेछन्; त्यो भन्दा धेरै दुःख अरू के होला ? ॥ ३६ ॥**

न केवलं लाघवमात्रमपि त्वन्यदपि दुःखमित्याह–अवाच्येति। दुर्बलहृदयः पार्थोऽस्मच्छरैः कथमयं योद्धुं शक्नुयात्। भीष्मादिभ्योऽन्यत्रैव यस्य सामर्थ्यम–

केवल तुच्छ मात्रै हुनेछौ यही मात्र होईन बरू अझै पनि दुःख हुनेछ सुन! (तिमिलाई भन्नु नभन्नु भन्नेछन्) दुर्बल हृदय अर्जुन हाम्रा बाणहरूका सामने कसरी टिक्न सक्थ्यो? त्यसको सामर्थ्य त भीष्म आदि नभएको ठाँउमा मात्रै चल्छ। यसैले हाम्रो अगाडी

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

तोऽमत्सन्निधौ स्थातुमपि न समर्थ इति तव सामर्थ्यं निन्दन्तस्तवाहिताः कर्णदुर्योधनादयो राज्ञामग्रे बहूनवाच्य-वादान् वदिष्यन्ति।

पर्न नसकेर भाग्यो। यस प्रकार तिम्रो सामर्थ्य को निन्दा गर्दै दुर्योधन, कर्ण इत्यादि तिम्रा जो शत्रु छन्, उनीहरू र अरु राजाहरूका सामुन्ने तिम्रो धेरै बेईज्जत गर्दै तिमीलाई गिज्याउने छन्। यस भन्दा धेरै ठूलो दुःख अरु के हुन सक्दछ, अर्थात् केहि हुन सक्दैन॥३६॥

-★-★-★-

**हतो वा प्राप्स्यसि स्वर्गं जित्वा वा भोक्ष्यसे महीम्।**
**तस्मादुत्तिष्ठ कौन्तेय युद्धाय कृतनिश्चयः॥**

**या त तिमी युद्धमा मारिएर स्वर्गलाई प्राप्त गर्नेछौ अथवा संग्राममा जीतेर पृथ्वीको राज्य भोग्नेछौ। यस कारण हे अर्जुन! तिमी युद्धको निश्चय गरेर ऊठ॥३७॥**

अतः सामर्थ्यवतो वीरस्योभयलोकरक्षणाय परैर्युद्धकरणमेव श्रेय इत्याह- हत इति। धर्मयुद्धे शत्रुर्भिर्हतश्चेत्स्वर्गं प्राप्स्यसि तान् जित्वा वा महीं भोक्ष्यसे, एतेन 'न चैतद्विद्मः कतरन्नो गरीयो यद्वा जयेम यदि वा नो जयेयुरि'ति संशयो निरस्तः। यत उभयथाऽपि लाभ एव। तस्माद्युद्धाय युद्धं कर्तुं कृतनिश्चयः सन्नुत्तिष्ठ।

सामर्थ्यवान् वीरहरूले दुबै लोकको रक्षाका लागि वैरिहरूका साथमा युद्ध गर्नु नै भलो हुन्छ(राम्रो हुन्छ)। यसैलाई स्पष्ट संझाउनु हुन्छ। धर्मयुद्धमा शत्रुहरूबाट मारियौ भने स्वर्ग पाउनेछौ र उनीहरूलाई जीतेमा पृथ्वीको भोग भोग्ने छौ। यसले अर्जुनको मनको (न चैतद्विद्मः) जुन सन्देह थियो कि 'यो जान्दिन कि म उनीहरूलाई जीत्लेछु वा उनीहरू नै मलाई जीत्लेछन् र यी दुबैमा कुन श्रेष्ठ छ- 'त्यो निरस्त गर्नुभयो'। यस प्रकार जसरी पनि लाभ छ। यसैले लड़ाईं गर्नको लागि पक्का निश्चय गरेर ऊठ॥३७॥

-★-★-★-

**सुखदुःखे समे कृत्वा लाभालाभौ जयाजयौ।**
**ततो युद्धाय युज्यस्व नैवं पापमवाप्स्यसि॥**

**जय-पराजय, लाभ-हानी र सुख-दुःखको समान मानेर त्यस पछि युद्धको लागि तयार होऊ; यस प्रकार युद्ध गर्नाले तिमी पापको भागी हुनुपर्दैन॥३८॥**

यदुक्तं 'पापमेवाश्रयेदस्मान्हत्वैतानाततायिन' इति तस्योत्तरमाह-सुखदुःखेति। यद्यपि स्वधर्मभूतयुद्धे शस्त्रपातादिनिमित्ते सुखदुःखे अवर्जनीये तथापि देहस्यैव ते, नोक्तस्वभावस्य देहविलक्षणस्यात्मन इति मत्वा, ते समे कृत्वा तद्धेतुभूतौ लाभालाभौ जयाजयौ च समौ कृत्वा स्वर्गादिफलेऽभिसन्धिरहितः सन् युद्धाय युज्यस्व। केवलं स्वधर्मानुष्ठानबुद्ध्या युद्धमारभस्व। एवं विवेकबुद्ध्या एतान्सर्वान्हत्वा पापं नावाप्स्यसि, प्रत्युत स्वधर्माकरण-जन्यपापात्प्रमोक्ष्यसे।

अर्जुनले पहिले नै भनेका थिए कि- 'पापमेवाश्रयेदस्मान्' आदि अर्थात् मलाई यी आततायीहरूलाई मारेर पाप नै लाग्नेछ त्यसको उत्तर भगवान् दिनुहुन्छ- यद्यपि लड़ाईंमा शस्त्रादिको चोटले दुःख निश्चित छ, तथापि यो संझेर कि यो सुख दुःख शरीरलाई नै हुनेछ, देह देखि विलक्षण आत्मालाई हुँदैन। सुख दुःखलाई बराबर संझ र त्यसको हेतुभूत लाभ, हानि, जय पराजय लाई पनि बराबर संझ र उनीहरूको स्वर्गादि फलको आकांक्षाले रहित भएर युद्धको लागि सचेत होऊ। अर्थात् आफ्नो धर्म को अनुष्ठान को बुद्धिले लड़ाई आरम्भ गर। यस प्रकार विवेक राख्दै यी सबैलाई मार्दा तिमिलाई कुनै पाप लाग्ने छैन, बरु आफ्नो धर्म पालन नगर्नाले जो पाप हुनेछ त्यस बाट छुट्ने छौ॥३८॥



-★-★-★-

## एषा तेऽभिहिता साङ्‌ख्ये बुद्धिर्योगे त्वमां शृणु।
## बुद्ध्या युक्तो यया पार्थ कर्मबन्धं प्रहास्यसि ॥

**हे पार्थ! यो बुद्धि तिम्रो लागि ज्ञानयोगको विषयमा भनियो र अब तिमी यसलाई कर्मयोगको विषयमा सुन- जुन बुद्धिले युक्त भएको तिमी कर्मबन्धनलाई भली-भाँति त्यागि दिनेछौ अर्थात् सर्वथा नष्ट गरिदिनेछौ॥३९॥**

एवं देहाद्विविक्तात्मतत्वयाथात्म्यज्ञानमुपदिश्य तदर्जुनस्य हृद्यदृढभूतं ज्ञात्वा नहि साधनमृते तत्त्वज्ञानं स्थिरीभवतीति दर्शयन्साधनानुष्ठानदार्ढ्यायोक्तमनुवदन् तत्साधनभूतं कर्मयोगं वक्तुं प्रस्तौति-एषेति। एषा 'अशोच्यानन्वशोचस्त्वमि'त्यारभ्य 'तस्मात्सर्वाणि भूतानि'इत्यन्तैः श्लोकैः सांख्ये सम्यक् ख्यायते प्रकथ्यते तत्त्वमनयेति संख्याऽध्यात्म शास्त्रजा बुद्धिस्तयाऽवधारणीयं तत्त्वं सांख्यं तस्मिन्विषये बुद्धिरभिहिता निरूपिता। तथापि (तव) तत्साधनानुष्ठानाभावात्त्वय्यस्थिरेव लक्ष्यतेऽतो योगे निःसंगतया भगवदाराधनात्मके कर्मयोगे तु तद्भिन्नां तत्साधनभूतामिमां 'सुखदुःखे समे कृत्वा'इत्यनन्तरमेव संक्षेपेणोक्तामग्रे विस्तरेण वक्ष्यमाणां श्रृणु। हे पार्थ! शुद्धान्तःकरणायाः पृथायाः पुत्र! यया बुद्ध्या युक्तस्त्वं कर्मबन्धं कर्मणा बन्धभूतं संसारं प्रहास्यसि प्रकर्षेण त्यक्ष्यसि।

भगवान्‌ले अर्जुनलाई देह भन्दा भिन्न आत्मतत्त्वको यथार्थ ज्ञानको उपदेश दिनुभयो; तर यो देखेर कि अर्जुनको हृदयमा त्यो ज्ञान बसेन र यो संझेर कि साधनको बिना तत्त्वज्ञान स्थिर हुन सक्दैन, अब आत्मतत्त्वज्ञानलाई दृढ गर्नको लागि त्यसको साधनभूत कर्मयोगको बारेमा भन्नुहुन्छ। 'अशोच्यानन्व०' यहाँ देखि आरम्भ गरेर 'तस्मात् सर्वाणि०' सम्म का श्लोकहरूमा मैले तिम्रो बुद्धि सांख्य(अध्यात्म) योगले लगाएँ अर्थात् यी श्लोकहरू द्वारा तिमिलाई मैले सांख्ययोग(आत्मतत्त्व)को उपदेश गरें, त्यसमा पनि साधनानुष्ठान को बिना त्यो तिम्रो मनमा बसेको देख्दिन। यसैले भगवदाराधनरूप निष्काम कर्मयोग, जुन त्यसको साधन हो, त्यो म तिमिलाई भन्दछु। पछाडिका श्लोकहरूमा संक्षेपले मैले भनिदिएको छु। अब विस्तार पूर्वक सुन। हे शुद्धान्तःकरणवाला पृथापुत्र! यस साधनरूप कर्मयोग को बुद्धिले तिमि कर्मको बन्धनहरूबाट पूर्णतया मुक्त हुनेछौ॥३९॥

-★-★-★-

## नेहाभिक्रमनाशोऽस्ति प्रत्यवायो न विद्यते।
## स्वल्पमप्यस्य धर्मस्य त्रायते महतो भयात्॥

**यस कर्मयोगमा आरम्भको अर्थात बीजको नाश हुँदैन र उल्टो फलरूप दोष पनि छैन, बरू यस कर्मयोगरूप धर्मको अलिकति पनि साधन जन्म-मृत्युरूप महान् भयबाट रक्षा गर्दछ॥४०॥**

ननु 'यथेह कर्मचितो लोकः क्षीयते एवमेवामुत्र पुण्यचितो लोक क्षीयते' इति श्रुत्या कर्मणां कृषिवत् क्षयिष्णुत्वाभिधानात्किञ्चिदंगवैगुण्ये प्रत्यवायसम्भवाच्च कुतः कर्मयोगस्य कर्मबन्धप्रहणनशक्तिरिति चेत्तत्राह-नेहेति। इह भगवदाराधनात्मके निष्कामकर्मणि अभिक्रमः प्रारम्भस्तस्य नाशो नास्ति। कृष्यादेरिव विघ्नबाहुल्येन नैष्फल्यं नास्ति इत्यर्थः। आरब्धस्य च विच्छेदेऽपि

श्रुतिमा यो कुरा लेखिएको छ कि 'यथेह कर्मचितो लोकः क्षीयते, एवमेवामुत्र पुण्यचितो लोक क्षीयते' अर्थात् जसरी यहाँ कर्मले प्राप्त गरिएको लोक(फल)को क्षय हुन्छ, यसै प्रकार यागादि पुण्य कर्महरूले प्राप्त स्वर्गादि लोक पनि नाश हुन्छ। यसले श्रुति, कर्मलाई खेतिको जस्तो नाशवान् भन्दछ र सकामकर्म मा मन्त्रादि को अन्यथा उच्चारणदि कुनै पनि अंगहानि भएमा प्रत्यवायको(पाप) भय बनिरहन्छ। यदि यस्तो कुरो हो भने कर्मयोग को कर्मबन्धनबाट छुटाउने शक्ति कहाँबाट हुन सक्छ? यस शंका को उत्तर यहाँ दिनुहुन्छ।
भगवदाराधनरूप निष्काम कर्मको प्रारम्भको नाश हुँदैन, जस्तो कि कृषिकर्ममा विघ्न हुनु सम्भव छ। र भगवदाज्ञापालनरूप

प्रत्यवायो न विद्यते। भगवदाज्ञापालनबुद्ध्याऽनुष्ठिते प्रत्यवायसम्भवात्। अतोऽस्य निष्कामकर्मयोगस्य धर्मस्य स्वल्पमप्यनुष्ठानं महतो भयात्संसारात्त्रायते रक्षति।

बुद्धिले कर्म गरेमा यदि आरम्भ गरिएको कर्मको विच्छेद भयो भने पनि त्यसमा प्रायश्चित लाग्दैन। कारण कि भगवदाज्ञापालनको बुद्धि ले गरिएको कर्ममा प्रत्यवाय हुनु सम्भव छैन। यसैले यस निष्काम कर्मको अलिकति पनि अनुष्ठान संसाररूपि भयंकर भय देखि रक्षा गर्दछ॥४०॥

–★–★–★–

**व्यवसायात्मिका बुद्धिरेकेह कुरुनन्दन।**
**बहुशाखा ह्यनन्ताश्च बुद्धयोऽव्यवसायिनाम्॥**

**हे अर्जुन! यस कर्मयोगमा निश्चयात्मिका बुद्धि एउटै हुन्छ; तर अस्थिर विचारभएको विवेकहीन सकाम मनुष्यहरूको बुद्धि निश्चय नै धेरै भेद भएको र अनन्त हुन्छ॥४१॥**

सकामकर्मविषययाया बुद्धेर्निष्कामभगवदाराधनात्मक–कर्मयोगविषयबुद्धेः सुखदेतुत्वेन महान्विशेष इत्याह–व्यवसायेति। इह कर्मानुष्ठातरि जीवलोके व्यवसायात्मिका बुद्धिरेका। भगवत्तोषणात्मकमेव कर्त्तव्यं नान्यत् तत्प्रसादेन सुखेनैव तरिष्यामो नान्ययाराधनेनेति। निश्चयो व्यवसा–यस्तदात्मिका बुद्धिः सर्वनियन्तृसर्वकर्मफलप्रसादातृसर्व–मुमुक्षुध्येयसर्वेश्वराराधनैकविषयत्वादेकफलकत्वाच्चैका, अतः सुखदा, सा च परमनिःश्रेयस्कामानां मुमुक्षूणामेवेति निश्चियते। अव्यवसायिनामनिश्चिततत्वानां स्वर्गधनस्त्री–पुत्रश्वादिबहुकामानां तत्तत्कर्मफलसाधनकर्मनिष्ठानां बुद्धयः कर्मकाण्डे कामानां बहुभेदेन बहुशाखाः, तत्राप्य–वान्तरानन्तप्रकारभेदादनन्ताश्च दुःखदाश्चेत्यनुभवगम्यम्।

सकाम कर्मविषयक बुद्धिले निष्काम भगवत् आराधनात्मक कर्मयोगविषयक बुद्धि अधिक सुख दिनेवाला हुन्छ। यसैलाई भन्दै हुनुहुन्छ–
हे अर्जुन! भगवानलाई प्रसन्न गर्ने कर्मलाई नै गर्नु पर्दछ, अरु कुनै कर्म होईन। भगवान्‌को कृपाले नै हामी सुख संग यस संसारलाई तर्दछौं। अरु देवताहरूको आराधनाले होईन। यस्तो निश्चयात्मिका बुद्धि एक हो अर्थात् भ्रम मा पार्ने होईन। सबैका नियन्ता, सबै फलको दाता हुनुको कारण सबै मोक्षार्थिहरूलाई ध्यान गर्न योग्य र सबैका आराध्य सर्वेश्वर भगवान् नै यस व्यावसायात्मिका बुद्धिको एक विषय हुनुहुन्छ र यसको फल पनि एकमात्र मुक्ति नै हो। जुन मानिसहरूको बुद्धि अव्यवसायी छ, अर्थात् कुनै एक वस्तुको निश्चयरूपले कामना गर्नेवाला छैन, स्वर्ग, धन, स्त्री, पुत्र इत्यादि धेरै नै कामनाहरूले भ्रमित भईरहेको छ, उनीहरू ती समस्त कामनाहरूलाई प्राप्त गर्नका लागि धेरै प्रकारको कर्मकाण्डको अनुष्ठान गर्दछन्। अतएव यस्तो बुद्धि, कामनाहरूका धेरै भेदले, बहुशाखा वाला भएको हो। र त्यसमा धेरै प्रकारको अवान्तर भेद हुनाले अनन्त छन्। यसैले यो दुःख दिनेवाला हो। यो कुरा अनुभवले जान्न सकिन्छ॥४१॥

–★–★–★–

**यामिमां पुष्पितां वाचं प्रवदन्त्यविपश्चितः।**
**वेदवादरताः पार्थ नान्यदस्तीति वादिनः॥**

**हे अर्जुन! जो भोगहरूमा तन्मय भईरहेका छन्, जो कर्मफलको प्रशंसक वेदवाक्यमा नै प्रीति राख्दछन्, जसको बुद्धिमा स्वर्ग नै परमप्राप्य वस्तु हो र जो स्वर्ग भन्दा ठूलो अर्को कुनै वस्तु नै छैन– यस्तो भन्नेहरू छन॥४२॥**

ननु विधिवदधीतंवेदानां तदर्थपरिशीलानां पण्डितानामपि व्यवसायात्मिका बुद्धिः कुतो न भवतीत्यपेक्षायां वेदशिरोभागमविदित्वा वेदतात्पर्याज्ञानादित्याह–यामिति त्रिभिः। यामिमां वक्ष्यमाणां पुष्पितां विषलतावदापातर–

जसले वेद विधिवत् अध्ययन गरेको छ; र त्यसको अर्थलाई पनि विचार गरेको छ, यस्तो पण्डितहरूको बुद्धि व्यवसायात्मिका किन हुँदैन? यसको कारण यसको कारण वेदको शिरोभाग उपनिषदहरूको ज्ञानको अभावले वेदको तात्पर्यको ज्ञान नहुनु नै हो। यस आशयलाई तीन श्लोकहरू मार्फत दर्शाउनु हुन्छ–

मणीयां प्रकर्षेण वदन्ति तेऽविपश्चितो ज्ञानहीना: न तु पण्डिता:। कुतो यतो वेदवादरता: वेदेषु ये फलार्थवादा: 'अक्षय्यं ह चातुर्मास्यस्य याजिन: सुकृतं भवति, अपाम सोमममृता अभूम, यत्र नोष्णं न च शीतं स्यान्न ग्लानिर्नाप्यरातय' इत्यादयस्तुषु रता: सक्ता:। सक्तत्वलक्षणं नान्यदस्तीति वादिन इति। स्वर्गादिभोगादधिकं किञ्चितफलं मोक्षसुखं नास्तीति वदनशीला:।

जो मान्छे अब भनिने, पुष्पित विषलताको समान बाहिर बाट हेर्न सुन्दर तर भित्र हलाहल विष भरिएको वार्त्ताको प्रशंसा गर्दछन्, ती मूढ र ज्ञानहीन हुन्, किनकी वेदको फलार्थवाद मा रत छन्, अर्थात् वेदमा जुन सबै फलार्थवादको वचन छन् जस्तो कि 'अक्षय्यं ह चातुर्मास्यस्य याजिन: सुकृतं भवति, अपाम सोमममृता अभूम, यत्र नोष्णं न च शीतं स्यान्न ग्लानिर्नाप्यरातय:' अर्थात् चतुर्मासमा जो यज्ञ गर्दछ त्यसलाई अक्षय पुण्य हुन्छ। हामी अमृत पियेर अमर भयौं। जहाँ स्वर्ग मा न गर्मी छ न जाडो, न दु:ख छ न शत्रु। यिनै सकाम वेदको वचनमा उसलाई प्रेम छ। र त्यसको प्रमाण यो हो कि उनीहरू भन्दछन् कि स्वर्गादि भोग भन्दा ठूलो सुख अरु कुनै पनि मोक्षादि सुख छैन॥४२॥

-★-★-★-

**कामात्मान: स्वर्गपरा जन्मकर्मफलप्रदाम् ।**
**क्रियाविशेषबहुलां भोगैश्वर्यगतिं प्रति॥**

**ती अविवेकीहरू यस प्रकारको जुन पुष्पित अर्थात् देखावटी शोभायुक्त वाणीलाई भन्ने गर्दछन् जुन कि जन्मरूप कर्मफल दिने एवं भोग तथा ऐश्वर्यको प्राप्तिको लागि नाना प्रकारको धैरै नै क्रियाहरू वर्णन गर्नेवाला छन्॥४३॥**

एतत्कुतो यत: कामात्मान:। कामा विषयेन्द्रियजन्यसुखानि तेष्वेवात्मा मनो येषां ते तथा। अत एव स्वर्गपरा: एतद्देहत्यागानन्तरं दिव्यविमानारोहणाप्सरोभोगाम्लान-परिजातपुष्पमालाविधारणदिव्ययचन्दनालेपामृतपानादि स्वर्गफलमेव परमपुरुषार्थं मन्यमाना: स्वर्गफलभोगावसाने इहलोके विद्याधनाढ्यकुले जन्म तदनुगुणश्रेष्ठवर्णाश्रम-निबन्धनानि कर्माणि च पुनस्तज्जन्यं पूर्वोक्तं फलं तानि प्रकर्षेण घटीयन्त्रवदविच्छेदेन ददातीति तथा तां, पुनर्भोगै-श्वर्यगतिं प्रति क्रियाविशेषबहुलां पूर्वोक्तो भोग ऐश्वर्यं च क्वचिदिन्द्रेण देवाधिकारे गन्धर्वासरोदेवविशेषं प्रत्याज्ञापनं तयोर्गतिं प्राप्तिं प्रति साधनभूताया: क्रियाया विशेषा बहुद्रव्याऽऽयाससाध्यचातुर्मास्यज्योतिष्टोमदर्शपूर्णमासाद-यस्तैर्बहुलां विस्तृतां भोगैश्वर्यप्राप्तिफलकातिविस्तृत-क्रियाप्रतिपादिकामिति यावत् एतादृशीं वाचं प्रवदन्तीत्यनुषंग:।

यस्तो किन अर्थात् यिनीहरू यस प्रकारको वेदवाद मा रत किन छन्? यसको उत्तर दिनुहुन्छ- यिनीहरूको आत्मा(मन) विषयेन्द्रियजन्य सुखको पछि लालायित छ, यसैले ती स्वर्गको इच्छुक छन्। यस देहलाई त्याग गरिसके पछि दिव्यविमानमा चढेर अप्सराहरूको भोगविलासको सुख भोग्नु, कहिल्यै नसुक्ने पारिजात फूलको माला लगाउनु, दिव्य चन्दनादि को लेपन, अमृतको पान इत्यादि जुन स्वर्गको सुख छ यसैलाई परम पुरुषार्थ मान्दछन्। फेरि स्वर्गको भोगको अन्त्य भएपछि यस भूलोक मा विद्या र धनले युक्त कुलमा उत्पन्न भएर त्यस कुलको अनुकूल वर्णाश्रम धर्मलाई पालन गर्दै फेरि धर्मको बलले स्वर्गलाई प्राप्त गरेर पुन: पुण्य भोगको पछि यस संसारमा आउँदछन्। यस प्रकार घटीयन्त्रको जस्तो वेदहरूका उक्त वचन अविच्छिन्न रूपले जन्म र कर्म दिनेवाला हुन्। र फेरि भोग र ऐश्वर्य पाउनको लागि, यथा-कहिले इन्द्र जस्तो देउता को अधिकारी बनेर गन्धर्व, अप्सरा तथा अरु देउता माथि शासन गर्ने काम पाउनको लागि, लाखौं प्रकारको, धैरै द्रव्य र परिश्रमले हुने, ज्योतिष्टोम आदि यज्ञको प्रतिपादक यस्तै वचनहरूको ती मूढ मनुष्यहरू, अर्थात् वेदको वास्तविक तात्पर्यलाई न जान्नेहरू नै प्रसंशा गर्दछन्॥४३॥

-★-★-★-

**भोगैश्वर्यप्रसक्तानां तयापहृतचेतसाम् ।**
**व्यवसायात्मिका बुद्धि: समाधौ न विधियते॥**

**त्यस वाणीद्वारा जसको चित्त हरण गरिदिईएको छ, जो भोग र ऐश्वर्यमा अत्यन्त आसक्त छन्,**

**ती पुरुषहरूको परमात्मामा निश्चयात्मिका बुद्धि हुँदैन॥४४॥**

तेषां भोगैश्वर्ययो: प्रसक्तानां तया पुष्पितया वाचाऽपहृतं चेतो येषां परमार्थतत्त्वविचारानर्हचेतसामिति यावत् अत: उक्तप्रकाराव्यवसायात्मिका बुद्धि: समाधौ न विधियते, समाधीयते आत्मतत्त्वमस्मिन्निति समाधिश्चित्तैकाग्र्यं तस्मिन्मोक्षसाधनभूतभगवदाराधनात्मककर्मनिश्चयरूपा बुद्धिर्न विधियते नोत्पद्यते इत्यर्थ:।

भोग र ऐश्वर्यमा आसक्त चित्तभएका र माथि भनिएको लोभ्याउने वचनहरूले परमार्थ तत्त्वको विचारमा अयोग्य बुद्धिभएकाहरूको व्यवसायात्मिका बुद्धि मा चित्तको एकाग्रता हुँदैन, अर्थात् भगवान्‌को सेवा एकमात्र मोक्षको साधन हो यस्तो दृढ र निश्चयात्मिका बुद्धि उनीहरूमा पलाउँदैन॥४४॥

-★-★-★-

## त्रैगुण्यविषया वेदा निस्त्रैगुण्यो भवार्जुन।
## निर्द्वन्द्वो नित्यसत्त्वस्थो निर्योगक्षेम आत्मवान्॥

**हे अर्जुन! वेद उपर्युक्त प्रकारले तीनै गुणहरूका कार्यरूप समस्त भोगहरू एवं उनीहरूको साधनको प्रतिपादन गर्नेवाला हुन, यसैले तिमी ती भोगहरू एवं त्यसको साधनहरूमा आसक्तिहीन, हर्ष-शोकादि द्वन्द्वहरूबाट रहित, नित्यवस्तु परमात्मामा स्थित, योग-क्षेमलाई न चाहने र स्वाधीन अन्त:करणवाला होऊ॥४५॥**

ननु यदि स्वर्गादिकं फलं परमाथरूपं न भवति चेत्तर्हि अपौरुषेयतया निर्दोषा वेदा: सर्वजनस्य हितार्थावबोधने प्रवृत्ता: किमिजि स्वर्गाद्युद्देशेन कर्माणि विदधतीति चेत्तत्राह-त्रैगुण्यविषया इति। त्रयो गुणा: सत्वरजस्तामांसि तत्र भवास्तद्वृत्तिस्था: पुरुषास्त्रैगुण्यशब्दवाच्या:। तत्र केचित्सत्वाधिका: केचिद्रजोऽधिका:, केचित्तमोऽधिका इति त्रिविधा जना भवन्ति, तद्विषया वेदा उपनिषद् व्यतिरिक्ता: काम्यफलाद्यभिधायका: यो यत्कामस्तस्य तदेव विहितं, तदनुसारेण तत्तत्फलस्तुतितत्प्रकारांस्तत्साधनानि कर्माणि बोधयन्ति यदि तेषां तत्तद्गुणानुसारेण तत्तद्धितसाधनं वेदा न बोधयेयुस्तर्हि तत्त्वज्ञाननिष्ठाभावात् त्रिगुणविलक्षणमोक्षफलमजानन्त: स्वाभिमतस्वर्गादि-फलहितप्राप्तिसाधनानि कर्माण्यप्यविाायोभयथा नष्टा भवेयुरिति तद्धितकर्मबोधनास्त्रैगुण्यविषया इति युक्तमुक्तम्। हे अर्जुन! त्वन्तु निस्त्रैगुण्यो भवेति त्रिगुणमयस्वर्गादि-फलतत्साधनतत्प्रतिपादकवेदानिष्ठो भव। वेदविहितेऽपि त्रिगुणात्मकफलसाधनादौ नि:स्पृहो भवेति भाव:। ननु

यदि स्वर्गादि फल परमार्थरूप या परमश्रेय होईन भने त ईश्वरोक्त हुनाले जो निर्दोष वेद छन्, र जो सबै जीवलाई कल्याणको शिक्षा दिनमा रत छन्, ती स्वर्गादि को प्राप्तिको लागि काम्यकमहरूको विधान किन गर्दछन्? यस शंकाको उत्तर दिनुहुन्छ-

गुण तीन प्रकारको हुन्छ, जस्तै- सत्त्व, रज, तम र यीनैका अनुसार मनुष्य पनि तीन प्रकारका हुन्छन्, जस्तो- जसमा सत्त्वगुणको मात्रा अधिक हुन्छ त्यो सात्त्वगुणी भयो, जसमा रजोगुणको मात्रा अधिक हुन्छ त्यो रजोगुणी र जसमा तमोगुणको मात्रा अधिक हुन्छ त्यो तमोगुणी भयो। उपनिषदहरूको अतिरिक्त जो काम्यफल भन्नेवाला वेदछन्, ती यिनै तीन प्रकारको मनुष्यलाई आफ्नो विषय बनाउँदछन्, अर्थात् जुन मनुष्य जस्तो गुणवाला हुन्छ वेद उसको लागि त्यस्तै कर्म र त्यसको साधन बताउँदछन्, त्यही कर्मको प्रशंसा गर्दछन्। यदि वेद यस्ता मनुष्यका हित साधनको लागि उनीहरूका गुणको अनुसार कर्म र साधन बताउँदैनन् भने यी मनुष्यहरू दुबै तिरबाट नष्ट हुन्छन्। उता तत्त्वज्ञानमा त तिनीहरूको निष्ठा छैन यसैले त्रिगुण भन्दा पृथक् मोक्षफललाई जान्दैनन् र यता स्वर्गादि प्राप्तिको साधन कर्महरू यदि वेद बताउँदैनन् भने त उनीहरूलाई स्वर्गादि पनि मिल्दैनन्। यसैले वेद भिन्न-भिन्न गुणवालाहरूको लागि त्रिगुणात्मक कर्महरू र तिनीहरूका साधनको वर्णन गर्दछन्। यस प्रकार वेदहरूलाई त्रिगुण विषयवाला भन्नु धेरै ठिक हो। यसैले हे अर्जुन! तिमि त्रिगुणमय वेदहरूमा प्रतिपादित स्वर्गादि फलहरूका साधनस्वरूप कर्ममा निष्ठा नराख। अर्थात् वेदहरूको पूर्वकाण्डमा प्रतिपादित त्रिगुणात्मक फलसाधनादि मा निस्पृह बन।

स्वर्गादौ निःस्पृहत्वेऽपि सर्वस्यान्नवस्त्रादेस्त्रिगुणमयत्व-मेव? तस्य च देहनिर्वाहार्थमवश्यापेक्षितत्वात् कथं निस्त्रैगुण्यसंभव इत्यत आहनिर्द्वन्द्व इति। द्वन्द्वानि शीतोष्णक्षुधापिपासा सुखदुःखानि तद्रहितो भव तानि सहस्वेत्यर्थः। कथमिति चेत्तत्राह-नित्यसत्त्वस्थ इति। नित्यसत्वं रहस्तमोभ्यामनाभिभूतं सत्वं तल्लक्षणं धैर्यं तत्रस्थः सन्, रजस्तमोऽभिभूतसत्त्वः पुरुषः शीतोष्णादि-प्राप्तौ मरणभयेन धैर्यात्प्रचलति। त्वं तु रजस्तमसी अभिभूय शुद्धसत्वनिष्ठो भवेति भावः। ननु परिग्रहवतस्तद्योग-क्षेमार्थिनः कुतो नित्यसत्त्वस्थत्वमिति चेत्तत्राह-निर्योगक्षेम इति। अपेक्षितस्य लाभोः योगः लब्धस्य रक्षणं क्षेमस्तन्निरपेक्षो भव। एवं चेत्कथं मे निर्वाहो भविष्यतीति सन्देहो न कर्त्तव्य इत्याह-आत्मवानिति। आत्मा परमात्मा सर्वाभीष्टप्रदो ध्येयतया विद्यते यस्य स तथा तदाश्रितो भूत्वा चिन्तां विहाय किञ्चिद्योगक्षेमाय नान्यं कञ्चन समाश्रयेति भावः।

अर्जुन शंका गर्दछन् कि त्रिगुणात्मक हुनाले स्वर्गादिमा स्पृहा नगरे पनि देहनिर्वाहको लागि अन्न-वस्त्रादिको स्पृहा त गर्नै पर्‍यो र यी पनि त्रिगुणात्मक नै छन्। यस प्रकार त्रिगुणयुक्त विषयहरूमा बिल्कुल निस्पृह हुन कसरी सम्भव हुन सक्दछ? यसको उत्तरमा भगवान् भन्नुहुन्छ कि निर्द्वन्द्व होऊ अर्थात् जाडो-गर्मी, भोक-प्यास, सुख-दुःख इत्यादि द्वन्द्वबाट रहित भएर यिनीहरूलाई सहन गर। अर्जुनले सोधे कि कसरी सहनु?
भगवान् भन्नुहुन्छ कि नित्य सत्त्वस्थ भएर सहने गर, अर्थात् रजोगुण र तमोगुणलाई छोडेर जब तिमी सत्त्वगुणमा स्थित हुनेछौ तब तिमीलाई धैर्य हुनेछ। यसै धैर्यको बलमा यी द्वन्द्वहरू लाई सहनु। रजोगुण र तमोगुणले नै जो मनुष्य घेरिएका छन्, तीनै मनुष्यहरूलाई जाडो-गर्मी आदि प्राप्त भएमा मरने भय हुन्छ र तिनीहरू नै त्यसबाट अधीर हुन्छन्। तिमी सत्त्वमा स्थिर भएर र यस प्रकार धैर्य प्राप्त गरेर सहने गर। अर्जुन फेरि शंका गर्दछन् कि जो गृहस्थ छ, त्यो संसारमा संग्रह गर्न र संग्रह गरेको वस्तुलाई रक्षा गर्न चाहन्छ, भने त्यो सतोगुणमा सधैं कसरी बस्न सक्दछ? भगवान् यसको उत्तर दिनुहुन्छ, कि योग अर्थात् अपेक्षित वस्तुको प्राप्ति र क्षेम अर्थात् त्यसको संरक्षण दुबैबाट मनलाई फेर्नु। तब अर्जुनले सोधे कि यस्तो गरेर त निर्वाह कसरी हुन्छ? भगवान भन्नुहुन्छ कि निर्वाहको चिन्ता नगर। आत्मवान् होऊ, अर्थात् परमात्मा सबै अभीष्टलाई दिनुहुन्छ र उनैको आश्रय सबैले लिनुपर्दछ यस्तो विचार गरेर चिन्ता छोडिदेऊ र योगक्षेमको लागि उनैको शरणमा जाउ र उनैको भरोसा गर॥४५॥

-★-★-★-

## यावानर्थ उदपाने सर्वतः सम्प्लुतोदके।
## तावान्सर्वेषु वेदेषु ब्राह्मणस्य विजानतः॥

**सबै तिरबाट परिपूर्ण ठूलो जलाशय पाएपछि सानो जलाशयमा मनुष्यको जति प्रयोजन रहन्छ त्यस्तै नै ब्रह्मलाई तत्त्वबाट जान्ने ब्राह्मणको समस्त वेदहरूमा त्यति नै प्रयोजन रहन्छ॥४६॥**

ननु वेदविषयपरित्यागे तदर्थातिरिक्तपदार्थाभावान्मुमुक्षोरपि साधनानुष्ठानाद्यपेक्षितं सर्वं हेयं स्यात्तथात्वे तस्य स्वार्थभ्रंश एव स्यादिति चेत्तत्राह-यावानिति। यथा स्नानपानाद्यर्थिनः पुरुषस्य उदपाने वापीकूपतडागादिषु यावान्यावत्परिमाणः स्नानपानाद्यर्थः सर्वतः संप्लुतोदके बहुदेशप्रसृतजलसमूहे महानद्यादिषु तावानेवार्थः। एवं वेदार्थ विजानतः ब्राह्मणस्य ब्रह्मज्ञस्य मुमुक्षोरिति यावत्। वेदैकदेशे यावानर्थः स्वश्रेयः साधनभूतसर्वदेवेशभगवत्तोषकरं कर्माचरणं प्रयोजनं

वेदलाई छोडेर साधनादि वर्णनगर्ने अर्को कुनै पदार्थ छैन, र मुमुक्षुलाई पनि वेदमा भनिएको मोक्षको साधन र त्यसको अनुष्ठानको आवश्यकता हुन्छ। यी सबैको हेय भएपछि मुक्तिको इच्छा गर्नेहरूको पनि स्वार्थको नाश हुन्छ। यस शंकाको उत्तर दिंदै भगवान् भन्नुहुन्छ-
स्नान, पान इत्यादि मनुष्यहरूका काम जस्तो कुवा, तलाउ आदिले सधिन्छ, त्यस्तै नै धेरै देशमा फैलिएको जलसमूह जस्तै महानदी, सरोवर इत्यादिले पनि चल्दछ, अर्थात् चाहे कुवा होस या तलाउ, नदी होस या ठूलो जलाशय, मनुष्य आफ्नो कामको जति मात्र पानी त्यहाँ बाट लिन्छ, अर्थात् दुबै (ठूला र साना जलसमूह) सँग उसको काम एकै रूपले चल्दछ। यसै प्रकार वेदको अर्थलाई जान्ने ब्रह्मज्ञ या मोक्षार्थीलाई वेदको तिनै भागहरू सँग काम छ,

तावानेव सर्ववेदेष्वर्थः प्रयोजनं, ननु वेदोक्तं सर्वं सर्वैरुपादेयं किन्तु यथाधिकारमेव । यथा वेदोदितमेवाग्निहोत्र–श्राद्धपितृतर्पणादिकं कर्म न संन्यासिनाऽनुष्ठेयमनधिका–रात्। किन्तु प्रवृत्तिनिष्ठगृहस्थस्यैव तत्राधिकारः। संन्यासिनां तु स्नानप्रणवजपतत्त्वानुसंधानयावद्देहयात्रामात्रभिक्षावसनो–पादानमेव वेदोदितमनुष्ठेयम् तद्वदिति विवेकः।

जहाँ आफ्नो कल्याण (मोक्ष) को साधनभूत, सबै सृष्टिको स्वामी भगवान्लाई तोष (प्रसन्न) गर्ने कर्मको वर्णन छ। पूरै वेदसँग उसको केही पनि प्रयोजन हुँदैन। वेदमा वर्णन गरिएको सबै विषय सबैले ग्रहण गर्न योग्य हुँदैनन्। किन्तु, आफ्नो-आफ्नो अधिकारानुसार प्रयोजनीय विषयमात्रै ग्रहण गर्नुपर्दछ। जस्तै वेदमा भनिएको अग्निहोत्र, श्राद्ध, तर्पण आदि कर्म सँग संन्यासीको के प्रयोजन हुन सक्दछ? ती कर्महरू सँग त केवल गृहस्थको नै प्रयोजन छ। संन्यासीहरूलाई त केवल वेदको त्यति नै भाग सँग प्रयोजन छ जहाँ स्नान, प्रणव, जप, तत्त्वानुसन्धान, देहयात्राको लागि भिक्षाग्रहण इत्यादिको विधान छ। यस्तो नै मोक्षार्थीहरूका बारेमा पनि संझिनु पर्दछ॥४६॥

–★–★–★–

## कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन ।
## मा कर्मफलहेतुर्भूर्मा ते सङ्गोऽस्त्वकर्मणि॥

**तिम्रो कर्म गर्नमा नै अधिकार छ, त्यसको फलमा कदापि होईन। यसैले तिम्रो कर्मफलको आशा कर्म गर्ने कारण नबनोस तथा तिम्रो कर्म नगर्न मा पनि आशक्ति नहोस॥४७॥**

ननु यद्येव तर्हि मुमुक्षुणा ज्ञाननिष्ठैव सम्पादनीया, किं कर्मणेति चेत्तत्राहकर्मण्येवेति। ते तव मुमुक्षोः तत्त्वनिष्ठापादनाय तावदन्तःकरणशुद्ध्यर्थं कर्मण्येवा–धिकारोऽस्ति । न च कर्मणि अधिकृतस्य मे तत्राऽऽसक्त्याऽव्यवसायात्मिका बुद्धिः स्यादिति वाच्यमित्याह–मा फलेषुकदाचनेति । कर्मफलेषु ते अधिकारो मा भूत्। नहि फलेच्छां त्यक्त्वा कर्म कुर्वतोऽव्यवसायात्मिका बुद्धिर्भवति, अपि तु फलासक्तस्यैव। न तु फलेच्छाभावेऽपि कर्म कुर्वतः फलावाप्तिः स्यदेवेति चेत्तत्राह–माकर्मफलहेतुर्भूरिति। मत्कृतस्य कर्मण इदं फलमित्यात्मानं फलं प्रति हेतुं मा भावयेथाः। फलोद्देशं विनैव कर्म कुर्वित्यर्थः। ननु निष्फलकर्मकरणादकरणमेवज्यायो 'न कुर्यान्निष्फलं कर्मे'ति निषिद्धत्वादिति चेत्तत्राह– मा ते संगोऽस्त्वकर्मणि इति। अकर्मणि कर्माकरणे तव मुमुक्षोः संगो न, योत्स्या–मीत्यहंकारो माऽस्तु नित्यनैमित्तिकाकरणे प्रत्यवायापत्तेः 'मोक्षार्थी न प्रवर्त्तेत तत्र काम्यनिषिद्धयोः। नित्यनैमित्तिके कुर्यात्प्रत्यवायजिहासये'ति मनुस्मरणात्।

यदि यस्तो कुरो हो भने त मोक्षार्थीहरूलाई केवल ज्ञाननिष्ठाको लागि चेष्टा गर्नु पर्दछ, कर्मसँग उनीहरूको के प्रयोजन छ र? यसको उत्तर मा भगवान् भन्नुहुन्छ–
तत्त्वनिष्ठा प्राप्त गर्नको लागि जब सम्म अन्तःकरणको शुद्धि हुँदैन तब सम्म तिम्रो(अर्थात् मोक्षार्थीको) कर्ममा नै अधिकार छ। तब सम्म तिमिले कर्म गर्नुपर्दछ। तर कर्म गर्नाले तिम्रो त्यसमा आसक्ति भएर बुद्धि अव्यवसायात्मिका(अनिश्चितता) हुन सक्दछ। तब कर्मको फल मा तिम्रो आफ्नो अधिकार न संझ, कर्मको फलको इच्छा नगर, किनकी फलमा आसक्ति हुनाले नै बुद्धि अनिश्चित हुन जान्छ। तर फलको इच्छा नगरे पनि फल त हुन्छ नै। यस आशयको उत्तर भगवान् दिनुहुन्छ, कि फल हुन्छ भने हुन देऊ। त्यसको कारण तिमी नबन। यस्तो नसंझिनु कि मेरो यस कर्मको फल यो हो। बिना फलको उद्देश्यले नै कर्म गर। फेरि त यस्तो फलशून्य कर्म गर्नु भन्दा त नगर्नु नै राम्रो हुन्छ किनकी भनिएको छ-'न कुर्यान्निष्फलं कर्म' अर्थात् निष्फल कर्म गर्नु हुँदैन। यसको उत्तरमा भगवान् भन्नुहुन्छ कि तिम्रो अकर्म मा प्रेम नहोस अर्थात् तिमी जस्तो मुमुक्षुलाई 'म युद्ध गर्दिन' यस प्रकार अभिमानपूर्वक अकर्म मा प्रेम हुनुहुँदैन, किनकी यस्तो गर्नाले नित्य नैमित्तिक कर्महरूलाई नगर्नुको पाप लाग्दछ। मनुले पनि भनेका छन्–
मोक्षार्थी, काम्य र निषिद्ध कर्ममा नलाग्नु। पापबाट बच्ने इच्छाले मात्र नित्य नैमित्तिक कर्महरू अवश्य गर्नु॥४७॥



–★–★–★–

**योगस्थः कुरु कर्माणि सङ्गं त्यक्त्वा धनञ्जय ।**
**सिद्ध्यसिद्ध्योः समो भूत्वा समत्वं योग उच्यते ॥**

**हे धनञ्जय! तिमी आसक्तिलाई त्यागेर तथा सिद्धि र असिद्धिमा समान बुद्धिवाला भएर योगमा स्थित भई कर्तव्यकर्मलाई गर, समत्वलाई नै योग भनिन्छ ॥४८ ॥**

तर्हि किं कुर्यामित्यत आह–योगस्थ इति। योगस्थः सन् संगं कर्तृत्वाभिनिवेशं त्यक्त्वा सिद्ध्यसिद्ध्योः समो भूत्वा कर्माणि कुरु। कर्माणि इति बहुवचनं नित्यनैमित्तिकयोरेव बहुप्रकाराभिप्रायेण। न च काम्यस्यापि ग्रहणमिति वाच्यम्। पूर्वापरविरोधात्। योगशब्दार्थ स्वयेमेवाह समत्वं योग उच्यते इति सिद्ध्यसिद्ध्योर्यत्समचित्तत्वं स एव योग उच्यते विवेकिभिः।

अर्जुनले सोधे कि फेरि म के गर्नु? भगवान् भन्नुहुन्छ कि हे अर्जुन! योगमा स्थित भएर, संग अर्थात् म यस कर्मको कर्त्ता हूँ, यस अभिमानलाई छोडेर, फलको आशाले रहित भएर र काम को सिद्धिले न प्रसन्न र न कामको असिद्धि मा अप्रसन्न होऊ, केवल नित्य नैमित्तिक कर्महरूलाई गर। काम्य कर्महरू नगर। यहाँ 'कर्माणि' यो बहुवचनको प्रयोगले काम्य कर्मको ग्रहण हुन सक्दैन। किनकी यसले पूर्वापर को विरोध हुन्छ। समत्वलाई नै योग भनिन्छ अर्थात् सिद्धि र असिद्धिमा एकै जस्तो रहनु, दुःख सुखको अनुभव नगर्नु, विवेकीहरू यसैलाई 'योग' भन्दछन्॥४८॥

–★–★–★–

**दूरेण ह्यवरं कर्म बुद्धियोगाद्धनञ्जय ।**
**बुद्धौ शरणमन्विच्छ कृपणाः फलहेतवः॥**

**यस समत्वरूप बुद्धियोग भन्दा सकाम कर्म अत्यन्तै निम्न श्रेणीको हो। यसैले हे धनञ्जय! तिमी समबुद्धिमा नै रक्षाको उपाय खोज अर्थात् बुद्धियोगको नै आश्रय ग्रहण गर; किनकी फलको हेतु बन्ने अत्यन्त दीन हुन्॥४९॥**

ननु फलार्थमपि कर्मकर्त्तुरभीष्टदानेन श्रेष्ठं प्रतीयते किर्ममसकृत्तन्निषिध्यत इत्यत आह–दूरेणेति। हे धनञ्जय, पूर्वमेव धनं जितवानसि नहि ते धनादिफलाकांक्षया स्व–धर्मे प्रवृत्तिरिति भावः। व्यवसायात्मिकबुद्ध्याऽनुष्ठितः कर्मयोगो बुद्धियोगस्तस्मात् काम्यं कर्म दूरेणावरम् अतिनिकृष्टमित्यर्थः। हि यस्मादेवं तस्माद् बुद्धौ शरणं निवासस्थानमाश्रयमिति यावत्। अन्विच्छ तदाश्रितो भवेत्यर्थः। फलहेतवः फलोद्देशेन कर्मकुर्वाणाः कृपणा अतिदीनाः। त्वं तु कृपणो मा भवेति भावः।

अर्जुन भन्दछन् कि कर्म गर्नेहरूलाई फल दिने कारण, फलको लागि गरिएको कर्म त धेरै श्रेष्ठ जस्तो लाग्दछ। फेरि किन हजुर बारम्बार त्यसको निषेध गर्नुहुन्छ। भगवान उत्तर दिनुहुन्छ कि हे ध नञ्जय! (यहाँ धनञ्जय शब्द प्रयोग गर्नुको भाव यो हो कि तिमिले त पहिले नै धनलाई जितिसकेको छौ, यसैले तिम्रो धर्ममा प्रवृत्ति त धनादिको प्राप्तिको फलको कामनाले हुन सक्दैन।) व्यवसायात्मिका बुद्धिले गरिएको कर्मको अपेक्षा काम्य-कर्म ध रै नै निकृष्ट या तुच्छ हुन्छन्। यसैले आत्मज्ञानको साधक, हे अर्जुन! तिमी एक निश्चयात्मक बुद्धिको शरणमा स्थित होऊ र कामना शून्य भएर काम गर। फलको इच्छाले कर्म गर्नेहरू वास्तवमा अति दीन हुन्। अभिप्राय यही हो कि तिमी धनञ्जय हौ, अतः तिमी दीन नबन॥४९॥

–★–★–★–

**बुद्धियुक्तो जहातीह उभे सुकृतदुष्कृते ।**
**तस्माद्योगाय युज्यस्व योगः कर्मसु कौशलम्॥**

**समबुद्धियुक्त पुरुष पुण्य र पाप दुवैलाई यसै लोकमा त्यागि दिन्छ अर्थात् त्यसबाट मुक्त हुन्छ। यसैले तिमी समत्वरूप योगमा लाग; यो समत्वरूप योग नै कर्महरूमा कुशलता अर्थात् कर्मबन्धनबाट छुट्ने उपाय हो॥५०॥**

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

काम्यकर्माणि दोषं प्रदर्श्य बुद्धियोगे गुणं दर्शयति–बुद्धीति। बुद्धियुक्तः पुरुषः इह कर्मभूमौ उभे सुकृतदुष्कृते पुण्यपापे जहाति। तस्माद्योगायोक्तबुद्धियोगाय युज्यस्व प्रवृत्तो भव। कर्मसु वर्तमानस्य पुरुषस्य योगः समत्वं कौशलं यद्बन्धन हेतूनां कर्मणां मोक्षहेतुत्वापादनमितिमहत्कुशलत्वमित्यर्थः।

आत्मज्ञानलाई राम्रो सँग बुझ्नको लागि काम्यकर्ममा दोष (आनन्दाभाव) देखियो, अब बुद्धियोगको गुण भन्दछु। बुद्धियुक्त पुरुष यस कर्मभूमिमा पुण्य–पाप दुईटैलाई छोडिदिन्छ। यसैले बुद्धियोग मा तिमी होऊ। ईश्वरार्थ कर्म गर्ने पुरुषको कर्ममा योग हुनु अर्थात् यसमा समता प्राप्त गर्नु नै कुशलता हो किनकी यसले बन्धनका हेतु जति कर्म छन्, ती पनि मोक्षको साधन हुनजान्छन्॥५०॥

–★–★–★–

## कर्मजं बुद्धियुक्ता हि फलं त्यक्त्वा मनीषिणः।
## जन्मबन्धविनिर्मुक्ताः पदं गच्छन्त्यनामयम्॥

**किनकी समबुद्धिले युक्त ज्ञानीजन कर्मबाट उत्पन्न हुने फललाई त्यागेर जन्मरूप बन्धनबाट मुक्त भई निर्विकार परमपदलाई प्राप्त गर्दछन्॥५१॥**

ननु दुष्कृतत्यागे भवति कौशलं सुकृतं तु किमर्थं त्याज्यमितयत आह–कर्मजमिति। उक्तबुद्ध्या युक्ता मनीषिणः बन्धमोक्षहेतुमननशीलाः हि यतः कर्मजं फलं सुख–दुःखात्मकमुभयविधमपि बन्धनरूपं मत्वा न केवलं दुष्कृतफलमपि तु जन्मापादकं सुकृतफलमपि त्यक्त्वा जन्मबन्धविनिर्मुक्ताः जन्मैव बन्धस्तस्माद्विनिर्मुक्ताः सन्तः अनामयम् आमयो मायाकार्यस्वभावः परिणामापक्षयादि–रूपो रोगस्तद्रहितं पदमुपनिषत्प्रतिपाद्यं परवैकुण्ठाख्यं स्थानं गच्छन्ति। तस्मात्तुच्छफलं सुकृतमप्यनन्तफलाय त्याज्यमिति भावः।

दुष्कर्मलाई त्याग्नु नै कर्मको कुशलता हो, किन्तु सुकर्मलाई किन छोड्नु? यसको उत्तर दिनुहुन्छ, यथा–
बन्धमोक्षको हेतुको विषयमा विचार गर्ने पुरुष उपरोल्लिखित अर्थात् व्यवसायात्मिका बुद्धिले युक्त छन्। तिनीहरू सुखदुःखात्मक राम्रा नराम्रा दुबै प्रकारको कर्मलाई बन्धनरूप संझेर नै छोडिदिन्छन्। र यस प्रकार कर्मबाट उत्पन्न जन्मरूपी बन्धनबाट छुटकारा पाएर मायाको कार्य मा पाईने परिणाम र अपक्षय आदि रोगहरू बाट रहित तथा जुन उपनिषदहरू बाट प्रतिपाद्य परवैकुण्ठ छ त्यहाँ पुग्दछन्। भन्नुको भाव यो हो कि सुकृत या राम्रो कर्मको पनि त अन्त हुने नै छ। यसैले त्यो पनि तुच्छ र क्षणिक फलको दाता हो र अनन्तफल (मुक्ति)को लागि तुच्छ फलवाला पुण्य कर्महरूलाई पनि छोडिदिनु पर्दछ॥५१॥

–★–★–★–

## यदा ते मोहकलिलं बुद्धिर्व्यतितरिष्यति।
## तदा गन्तासि निर्वेदं श्रोतव्यस्य श्रुतस्य च॥

**जुन बेला तिम्रो बुद्धि मोहरूपी दलदललाई राम्रो सँग पार गर्नेछ, त्यस बेला तिमी सुनेका र सुन्नमा आउने यस लोक र परलोक सम्बन्धी सबै भोगहरूबाट विरक्त हुन्छौ॥५२॥**

कर्माणि कुर्वतो ममाप्येवम्भूतो निर्वेदः कदा भविष्यतीति अपेक्षायामाह–यदेति। नास्ति कालनियमः किन्तु यदा यस्मिन्काले ते बुद्धिर्मोहकलिलं मोहो मन्निमित्तमेते मरिष्यन्ति अहं पापभागी स्यामित्याद्यन्तःकरणविभ्रम एव कलिलं गहनकर्दमं व्यतिरिष्यति विशेषेणोल्लंघ्य गमिष्यति तदा श्रेतव्यस्य श्रोतु योग्यस्य श्रुतस्य च कर्मफलस्य निर्वेदं वैराग्यं गन्तासि गमिष्यसि प्राप्स्यसि। पुनस्तज्जिज्ञासां न करिष्यसीति भावः।

अर्जुन शंका गर्दछन् कि यस प्रकारको कर्म गर्दै म वैराग्यलाई कहिले प्राप्त गर्नेछु? भगवान् उत्तर दिनुहुन्छ कि यसको कुनै समय निश्चित छैन। जति खेर तिमी अन्तःकरणमा भरिएको मोहको गाढा फोहोरलाई पार गर्नेछौ अर्थात् यी भाई–बान्धवादि मेरो लागि मर्नेछन्, म पापको भागी हुनेछु इत्यादि जुन यो विभ्रम छ, यी सबै जब छुट्नेछन् तब तिमीलाई सुन्नयोग्य र सुनेको कर्मफलबाट वैराग्य हुनेछ। र तिमी तब कर्मफल जान्ने इच्छा गर्नेछैनौ॥५२॥

–★–★–★–

**श्रुतिविप्रतिपन्ना ते यदा स्थास्यति निश्चला ।**
**समाधावचला बुद्धिस्तदा योगमवाप्स्यसि ॥**

**जब नाना थरी कुरा सुनेर विचलित भएको तिम्रो बुद्धि जब परमात्मामा अचल र स्थिर भएर बस्छ, तब तिमी योगलाई प्राप्त गर्नेछौ अर्थात् तिम्रो परमात्मा सँग नित्य संयोग हुनेछ ॥५३॥**

निष्कामकर्मानुष्ठानेन कदा योगं प्राप्स्यामीत्यपेक्षायामाह– श्रुति इति। इतः पूर्वमतत्त्वविद्भ्यः श्रुतिभिर्नानाविधसाधनफलश्रवणैस्ते बुद्धिर्विप्रतिपन्ना इदं श्रेय इदं वेत्यादिसंशयग्रस्ततयाऽतत्वनिष्ठासती विक्षिप्ताऽऽसीत्। यदा यस्मिन्काले समाधिर्मनस आत्मप्रावण्यं तस्मिन्नचला विषयान्तराग्रहणेन तदेकनिश्चया सती स्थास्यति। तदा योगं योगफलमात्मयाथात्म्यानुभवमवाप्स्यसि।

अर्जुनले सोधे कि निष्काम कर्म गर्दै म योगलाई कहिले प्राप्त गर्नेछु? भगवान् उत्तर दिनुहुन्छ–हे अर्जुन! श्रुतिहरूमा वर्णित नाना प्रकारको साधन र तिनीहरूका फललाई अज्ञानिहरूबाट अहिले सम्म तिमी सुन्दै आएको छौ, यसैले तिम्रो बुद्धि विक्षिप्त भएको छ, अर्थात् यो श्रेष्ठ हो कि त्यो श्रेष्ठ हो, यस्तै विचारहरूबाट संशयग्रस्त भएको छ। जतिखेर तिम्रो मन, अचल भई र विषयलाई ग्रहण नगरी आत्मोन्मुखी हुनेछ, तब तिम्रो बुद्धि निश्चल भईजानेछ, त्यतिखेर तिमी योगलाई प्राप्त गर्नेछौ अर्थात् निष्काम कर्मयोगको फल, आत्माको स्वरूपको यथार्थ अनुभव प्राप्त गर्नेछौ ॥५३॥

–★–★–★–

## अर्जुन उवाच

**स्थितप्रज्ञस्य का भाषा समाधिस्थस्य केशव ।**
**स्थितधीः किं प्रभाषेत किमासीत व्रजेत किम् ॥**

**अर्जुले भने– हे केशव! समाधिमा स्थित परमात्मालाई प्राप्त गरेका स्थिर बुद्धि पुरुषको लक्षण के हो? त्यो स्थिर बुद्धि पुरुष कसरी बोल्दछ, कसरी बस्दछ र कसरी हिंड्दछ? ॥५४॥**

यदा समाधावचला बुद्धिस्तदा योगमवाप्स्यसीत्युक्तं तेन समाधिस्थः स्थितप्रज्ञस्तत्त्वज्ञो भवतीति विज्ञाय तस्य लक्षणभाषणासनब्रजनानि जिज्ञासुरर्जुनः पृच्छति स्थितप्रज्ञस्येति। हे केशव! स्थिता प्रज्ञा बुद्धिर्यस्य तत्कुतो यतः समाधिस्थस्तस्य का भाषा? भाष्यते प्रकर्षेण कथ्यतेऽनयेति भाषा लक्षणमित्यर्थः। तथा स्थितधीः पुरुषः समाधेरुत्थाय किं प्रभाषेत्? किं भाषणं कथं वा भाषणं कुर्वीत। तथा किमासीत कथमासीत उपविशेत। तथा कि कथं वा व्रजेत गमनं कुर्यात्। स्थितप्रज्ञस्य मूढजनाद्विलक्षणानि भाषणादीन्यतः पृच्छामि एतद्ब्रूहि इति शेषः। ननु समाधिासीस्य लक्षणभाषणादिकं समाधिमच्छ्रेष्ठो ब्रह्मशिवादिः कश्चिज्जानीयत्तत एव जिज्ञासितव्यमित्याशंकानिरासकं संबोधनमुक्तं–केशवेति। कश्च ईशश्च केशौ वापयति उतदयति नियमयति ताभ्यां ज्ञानं प्रापयति वा तथा स त्वमेव ब्रह्मशिवादिजनकत्वान्नियन्तृत्वाद्गुरुत्वाद्वा सर्वेश्वरः

जब समाधिमा तिम्रो बुद्धि अचल हुनजान्छ तब तिमी योगलाई पाउनेछौ, यस्तो भगवान्ले अर्जुनलाई भन्नुभयो। तब समाधिनिष्ठ स्थितप्रज्ञ नै तत्त्वज्ञ हुन्छ यस्तो जानेर अर्जुन भगवान् सँग सोध्दछन् कि यस्तो समाधिमा स्थित, स्थितबुद्धिवाला तत्त्वज्ञको लक्षण के हो?

हे केशव! समाधिमा स्थित हुनाले जसको बुद्धि निश्चल भएको छ त्यसको कस्तो भाषा हुन्छ र लक्षण कस्तो हुन्छ? समाधिबाट उठेपछि यस्तो पुरुष के र कस्तो बोल्दछ? त्यो कसरी उठ–बस गर्दछ? त्यो कसरी घुम–फिर गर्दछ? अभिप्राय यो हो कि संसारी मूढ़मनुष्यको बोलचाल, चलन व्यवहारले यस समाधिस्थ पुरुषको बोलचाल, चलनव्यवहार मा कति अन्तर हुन्छ, जसले त्यसलाई चिन्न सकिन्छ? यी अन्तरहरूलाई म हजुर सँग सोध्दछु। हजुर भनिदिनुहोस।

यहाँ भगवान् यो भन्न सक्नुहुन्छ कि ब्रह्मा, शिव आदि जो समाधिनिष्ठहरूमा श्रेष्ठ छन उनै सँग तिमीले समाधिस्थको लक्षण सोध्नुपर्दछ। यसैको उत्तरमा अर्जुन उहाँलाई केशव भनेर सम्बोधन गर्दछन्। अर्थात् हजुर त 'क' ब्रह्मा, 'ईश' शिवको उत्पादक तथा नियामक र उनीहरूलाई ज्ञानदिनेवाला हुनुहुन्छ। यसैले उनीहरूको पिता, नियन्ता र गुरु हुनाले सर्वेश्वर र सर्वज्ञ होईसिन्छ।

सर्वज्ञश्च समाश्रयणीय इत्यर्थः। 'यो ब्रह्माणं विदधाति पूर्वं यो वा वेदांश्च प्रहिणोति तस्मै तं ह देवमात्मबुद्धिप्रकाशं, मुमुक्षुर्वै शरणमहं प्रपद्ये, तस्य ध्यानान्तःस्थस्य ललाटात् त्र्यक्षः शूलपाणिः पुरुषोऽजायत, क इति ब्रह्मणो नाम ईशोऽहं सर्वेदेहिनाम्। आवां तवांगसम्भूतौ तस्मात्केश-वनामवानि'त्यादिश्रुतिस्मृतिभ्यः।

यसैले म हजुरको नै शरणमा आएको छु। हजुर नै मलाई भन्नुहोस। शिव र ब्रह्माको हजुरबाट नै उत्पत्ति भएको हो। यसलाई श्रुतिमा पनि भनेको छ। यथा-पहिलो श्रुतिको अर्थ पहिले नै लेखिसकिएको छ। दोस्रो अर्थ यो हो कि भगवानको ध्यानमा स्थित भएपछि ब्रह्माको निधार बाट तीन नेत्र र हातमा त्रिशूल लिएका पुरुष अर्थात् शिवजी पैदा हुनुभयो। स्मृतिको अर्थ यो हो कि-'ब्रह्मा र सबै देहिहरूका ईश्वर म(शिव) हजुरको अंग बाट निस्किएको हुँ। यसैले हजुरको नाम केशव हो॥५४॥

-★-★-★-

## श्रीभगवानुवाच

**प्रजहाति यदा कामान्सर्वान्पार्थ मनोगतान्।**
**आत्मन्येवात्मना तुष्टः स्थितप्रज्ञस्तदोच्यते॥**

**श्रीभगवान् भन्नुहुन्छ-हे अर्जुन! जुन बेला त्यो पुरुष मनमा उत्पन्न भएका सम्पूर्ण कामनाहरूलाई त्यागेर आत्मामा नै संतुष्ट रहन्छ त्यस बेला त्यो स्थितप्रज्ञ भनिन्छ॥५५॥**

एवमर्जुनस्य चतुरः प्रश्नान् क्रमेण यावदध्यायान्तं वक्तुं तावत्प्रथमप्रश्नस्योत्तरं श्रीभगवानुवाच-प्रजहाति इति द्वाभ्याम्। मनोगतान् सर्वान् कामान् यदा प्रजहाति प्रकर्षेण त्यजति, तदा स्थितप्रज्ञः उच्यते। मनोगतकामपरित्यागे किं गमकमित्यत आह-आत्मन्येवात्मना तुष्ट इति। आत्मनि स्वस्वरूपे प्रजापतिविद्योक्तापहतपाप्मत्त्वादिविशिष्टे ज्ञाना-नन्दस्वरूपे आत्मनाकाममलपरित्यागान्निर्मलीभूतेन मनसा तुष्टः प्रसन्नो यदा भवति तदा तस्य स्थितप्रज्ञता ज्ञेयेत्यर्थः।

अर्जुनको प्रश्नहरूको उत्तर अध्यायको समाप्ति सम्म एक-एक गरेर दिनुहुन्छ। प्रथम प्रश्नको उत्तर दुई श्लोकहरू मार्फत दिनुहुन्छ-जो मनमा स्थित सबै अभिलाषाहरूलाई छोडिदिन्छ र यस कारण सामवेदीय छान्दोग्य उपनिषदको प्रजापति-विद्यामा भनिएको, सबै पापहरूबाट रहित हुनु इत्यादि आठ गुणहरूले युक्त, ज्ञानानन्द, आफ्नो आत्मस्वरूपमा नै, कामरहित अतएव निर्मल मनको द्वारा, आनन्दको अनुभव गर्दछ, त्यसैलाई स्थितप्रज्ञ भनिन्छ। अर्थात् जब कसैको यस्तो दशा भयो भने तब यो संझिनु पर्दछ कि त्यस मनुष्यलाई स्थितप्रज्ञता को प्राप्ति भयो॥५५॥

-★-★-★-

**दुःखेष्वनुद्विग्नमनाः सुखेषु विगतस्पृहः।**
**वीतरागभयक्रोधः स्थितधीर्मुनिरुच्यते॥**

**दुःखको प्राप्तिमा(अर्थात दुःख पर्दा) जसको मनमा उद्वेग हुँदैन(अर्थात् मन विचलित हुँदैन), सुखको प्राप्तिमा जो सर्वथा निःस्पृह छ तथा जसको राग, भय र क्रोध सर्वथा नष्ट भएका छन्, यस्ता मुनि स्थिरबुद्धि भनिन्छन्॥५६॥**

नन्विदं लक्षणं स्वसंवेद्यं तस्यात्मसंतुष्टत्वमन्यैः कथं ज्ञेयमित्यपेक्षायामाह-दुःखेष्विति। दुःखानि तावदध्यात्मा-धिदैवाधिभौतिकभेदात्त्रिविधानि। तत्राध्यात्मं शारीरक-मानसभेदात् द्विविधम्। तत्राक्षिशिरोरोगातिसारज्वरादिकं शारीरकम्, निन्दाऽसूयाऽवमानेर्ष्यादिजन्यं मानसम्, शीतोष्णवातवर्षाविद्युदादिसमुद्भवमाधिदैविकम्,

माथि भनिएको लक्षण त स्वम्वेद्य छ अर्थात् यिनीहरूलाई जसमा छ, त्यो मात्रै अनुभव गर्न सक्दछ, बाहिरका अरु मान्छेहरू कसरी जान्न सक्दछन् कि कुनै व्यक्ति स्थितधी भयो भनेर? भगवान् यसको उत्तर दिनुहुन्छ। दुःखलाई आउने जानेवाला स्वभावको र प्रारब्धले आएको मानेर, यस्तो विचार गरेर कि भोग गरिसके पछि स्वयं नाश भएर जान्छन्, स्थितधी मनुष्यको मन दुःख पर्दा चंचल हुँदैन। त्यसै तरीकाले सुखलाई प्रारब्धले नै दिएको मानेर यस्तो मनुष्य अरु अधिकाधिक सुखलाई पनि चाहँदैन। (दुःख

मनुष्यराक्षसपशुपक्ष्यादिजन्यंमाधिभौतिकमिति विवेकः। तेषु प्रारब्धवशात् प्राप्तेषु एतान्यागमापायित्वात्स्वयमेव भोगेन वा नक्ष्यन्तीति विचारेण नोद्विग्नं मनो यस्य सोऽनुद्विग्नमनाः तथा प्रारब्धवशात्सुखनि अपि प्राप्नुवन्ति तेष्वनागतेषु विगतस्पृहः वाञ्छारहितः। तत्र हेतुः वीतरागभयक्रोध इति। मनस आसक्तिविषयेष्वभीष्टपदार्थेषु ममैते मा छिद्येरन्निति प्रीत्यतिशयो रागः। प्रियवियोग–जन्यागामिदुःखनिमित्तजन्यं दुःखं भयं, प्रियवस्तुनाशहेता–वुपस्थिते तद्वियोगकर्तृविषयोऽन्तः करणविकारविशेष क्रोधः, एते रागादयो नित्यसुखस्वरूपे आत्मन्यविवेकेन जायन्ते, तद्विवेकेन( वीता) गता यस्मात्स मुनिर्मननशीलः स्थितप्रज्ञ उच्यते विवेकिभिरिति शेषः।

तीन प्रकारका हुन्छन्-आध्यात्मिक, आधिभौतिक, र आधिदैविक। आध्यात्मिक दुःख दुई प्रकारका छन्, शरीर सम्बन्धी जरो, आँखाको पीडा इत्यादि, र मन सम्बन्धी जस्तो ईर्ष्या, डाह इत्यादि, आधिभौतिक दुःख त्यो हो जो सांसारिक जीवहरूको द्वारा प्राप्त हुन्छ, जस्तो मनुष्य, पशु, पंक्षी र राक्षस इत्यादि बाट उत्पन्न र आधिदैविक दुःख त्यो हो जो दैवी शक्तिहरू जस्तै-वर्षा, चट्याङ् इत्यादि बाट उत्पन्न हुन्छ।)स्थितप्रज्ञ पुरुष सुख-दुःखको प्रवाह नै गर्दैन यसको कारण यो हो कि राग(प्रेम या आसक्ति) भय र क्रोध ाबाट रहित छ। यो नाश नहोस यस्तो जुन अभीष्ट पदार्थमा मनलाई अतिशय प्रिति छ त्यसैलाई नै राग भनिन्छ। प्रियवियोगजन्य आगामी दुःखलाई भय भनिन्छ। प्रिय वियोग गराउनेको प्रति अन्तःकरणमा जो विकार हुन्छ, त्यसैलाई क्रोध भनिन्छ। यी रागादिक नित्य सुखस्वरूप आत्मामा अविवेकले पैदा हुन्छन्। आत्मस्वरूपको विवेक भएर जसको रागादि छुटेका छन्, यस्तो नै रागादिरहित मननशील मनुष्यलाई विवेकीहरू स्थितप्रज्ञ भन्दछन्॥५६॥

–★–★–★–

**यः सर्वत्रानभिस्नेहस्तत्तत्प्राप्य शुभाशुभम् ।**
**नाभिनन्दति न द्वेष्टि तस्य प्रज्ञा प्रतिष्ठिता॥**

**जुन पुरुष सर्वत्र स्नेहरहित भएर शुभ या अशुभ कुराको प्राप्ति हुँदा न प्रसन्न हुन्छ, न रीस गर्छ त्यसको बुद्धि स्थिर हुन्छ॥५७॥**

इदानीं स्थितधीः किं प्रभाषेतत्यस्योत्तरमाह– यः सर्वत्रेति। यो मुनिः सर्वविषयेष्वनभिस्नेहश्चित्तासक्तिरहितस्ततः एव तत्तत् शुभाशुभं मूढजनाभिमतं शुभं सुखहेतुं सुमिष्टस्निग्धापायसमोदकादिभोजनमिष्टरसादिपानं कोमलं सुरूपं वस्त्रं गृहपानादिकं वा प्राप्य नाभिनंदति। त्वया ममातिप्रियं कृतं त्वत्समो नास्ति कश्चिदित्यभिनंदनं करोति। अशुभं दुःखहेतुतया मतं उक्ताद्विपरीतभोजनपानादिमृषासमाधिार्दाम्भिक इत्यादिवाक्यं वा प्राप्यकञ्चित्प्रति न द्वेष्टि। अतोरागदोषाभावात्स्तुतिनिन्दारहितं सर्वहितमल्पभाषणं करोतीति भावः। तस्य प्रज्ञा प्रतिष्ठिता, स स्थितप्रज्ञ इत्यर्थः।

स्थित बुद्धिवाला कसरी बोल्दछ अब यसको उत्तर दिनुहुन्छ- जो मननशील पुरुष विषयहरूबाट आसक्तिरहित भएर मूढमान्छे सँग अभिलषित सुख अर्थात् खीर, लड्डू इत्यादि मीठो पेय वस्तु या कोमल वस्त्रादिलाई पाएर आनन्दित हुँदैन र ठीक यसैको उल्टो दुःख दिने, अरुचिकर भोजन, पान इत्यादिलाई पाएर दुःखी हुँदैन र त्यसको लागि कसैसँग प्रीति या द्वेष गर्दैन अर्थात् राम्रो कुरा दिनेको खुशामद र नराम्रो कुरा या गालि दिनेहरूको पनि कुरा लाउने गर्दैन त्यही स्थितप्रज्ञ भनिन्छ। राग-द्वेषादि दोषहरूबाट शून्य भएको कारण जो निन्दा-स्तुतिबाट रहित भएर सबैको हितार्थ कम वचन बोल्दछ (आत्म-तत्त्वको ज्ञानले युक्त कुरा मात्र गर्दछ) यस्तो मनुष्यको बुद्धि नै प्रतिष्ठित छ, निश्चल छ, त्यही नै वास्तवमा स्थितप्रज्ञ हो॥५७॥

–★–★–★–

**यदा संहरते चायं कूर्मोऽङ्गानीव सर्वशः ।**
**इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता॥**

**जसरी कछुवाले चारैतिर बाट आफ्ना अङ्गलाई समेट्दछ (खुम्च्याउँछ), त्यसरी नै त्यो पुरुष इन्द्रियहरूको विषयबाट इन्द्रियहरूलाई सबै प्रकारले हटाउँदछ, तब त्यसको बुद्धि स्थिर हुन्छ (यस्तो संझिनु पर्दछ)॥५८॥**

किमासीतेत्यस्योत्तरमाह–यदेति। यदा समाधेर्व्युत्थानसमये अयं योगी इन्द्रियार्थेभ्य: शब्दादिविषयेभ्य: सर्वेभ्य: सर्वश: इन्द्रियाणि श्रोत्रादिज्ञानेन्द्रियाणि संहरते बहिर्न प्रवर्त्तयति। कर्मेन्द्रियाणि त्वावश्यके कर्मणि संकोचेन प्रवर्त्तयति च। तत्र दृष्टान्त: कूर्मोऽङ्गानीवेति। यथा यथा कूर्मोऽन्यभ्यात्करचरणाद्यंगानि शरीरान्तरुपसंहरति आहारार्थं शनैर्नि:सार्य्य प्रवर्त्तते च, तद्वत्। तस्य प्रज्ञा प्रतिष्ठिता स्थितप्रज्ञ एवमासीतेत्यर्थ:।

स्थितधीको रहनी कस्तो हुन्छ? यसको उत्तर दिनुहुन्छ। समाधि बाट उठेपछि यो योगी सबै विषयहरूबाट इन्द्रियहरूलाई समेट्दछ अर्थात् उनीहरूलाई बाहिर फैलिन दिंदैन। आवश्यक काम गर्नको लागि मात्र बड़ो संकोचले त्यसको व्यवहार गर्दछ। यसलाई संझाउन दृष्टान्त दिनुहुन्छ–जस्तो कछुवा डरको कारण आफ्नो हात, खुट्टा आदि अंगलाई आफ्नो शरीरभित्र नै लुकाई राख्दछ, केवल खाना संग्रहको लागि मात्र बिस्तारै–बिस्तारै कहिले–काहीं त्यसलाई बाहिर निकाल्दछ, त्यस्तै गरी यो योगी पनि आफ्नो इन्द्रियहरूलाई तिनीहरूको विषयबाट रोकिराख्दछ। यस्तै योगीको बुद्धि प्रतिष्ठित या स्थिर हुन्छ अर्थात् स्थितप्रज्ञको रहनी यस्तै हुन्छ॥५८॥

–★–★–★–

## विषया विनिवर्तन्ते निराहारस्य देहिन:।
## रसवर्जं रसोऽप्यस्य परं दृष्ट्वा निवर्तते॥

**इन्द्रियहरूद्वारा विषय भोग नगर्ने पुरुषको केवल विषय त निवृत्त हुन्छन् तर त्यसमा रहने आसक्ति निवृत्त हुँदैनन्। यस स्थिरप्रज्ञ पुरुषको आसक्ति त परमात्माको साक्षात्कार गर्दैमा निवृत्त हुन्छन्॥५९॥**

नन्वयोगिनां मूढानामपि रोगादिवशादिन्द्रियाणि विषयेभ्य: स्वयमुपसंह्रीयन्ते कथमिन्द्रियाणां विषयेष्वप्रवर्त्तनं स्थित–प्रज्ञस्य लक्षणमिति चेत्तत्राह– विषया इति। निराहारस्य रोगेण भोजनरहितस्य देहिन इन्द्रियशैथिल्या– द्विषया: शब्दस्पर्शादिभोगास्तद्ग्रहणशक्य– त्वात् विशेषेण निर्वर्तन्ते इति सत्यं, तथापि रसवर्जं रसो विषयेष्वन्ता राग: स्नेहस्तं विना रोगिण: पुरुषस्य विषयभोगो निवर्तते। परन्तु दु:खनिवृत्तेरनन्तरं मधुराम्लभक्षणपानस्त्रीभोगादिसर्वं सुखं भोक्ष्यामीति मनसि वासना न निवर्त्तते इत्यर्थ:। स रसोऽप्यस्य विदुष: परं परमानंदं दृष्ट्वा निवर्त्तते। नहि नित्यानन्तानन्दज्ञस्य विनाशिनि तुच्छानन्दे रागो भवति। परशब्दार्थस्तु सर्वानन्दकारणस्य निखिलहेयगन्ध ावर्जितस्य(ध्येयस्य) भगवतश्चिद्धनं वपुरेव। 'एतस्यैवा–नन्दस्यान्यानि भूतानि मात्रामुपजीवन्ति, यदात्मको भगवाँस्तदात्मिका व्यक्ति: किमात्मको भगवान् ज्ञानात्मक ऐश्वर्यात्कश्चे'ति श्रुते:।

अयोगी यानी मूढ़को मन पनि बिरामी भएको बेला विषयबाट हट्दछ। तब विषयहरूबाट मन हट्नु स्थितप्रज्ञको लक्षण कसरी हुन सक्दछ? यस शंकाको उत्तर दिनुहुन्छ– यो सहि हो कि रोगले गर्दा भोजनले रहित मनुष्यको मन, इन्द्रियको विषय रस, रूप, गन्ध इत्यादि बाट हट्दछ, तर यसको कारण विषयत्याग होईन किनकी त्यस समय आहार आदि नमिल्नाले जुन भोग गर्नको लागि साधनरूप इन्द्रियहरू छन् ती शिथिल र बलहीन हुनजान्छन्, यसैले विषयहरूको भोग गर्न अशक्त हुन जान्छन्। तर भित्र–भित्रै मन मा इन्द्रियहरूको आ–आफ्नो विषयहरूमा राग बनि नै रहेको हुन्छ। त्यसमा कुनै कमी हुँदैन। रोगी मनै–मन यो सोचिरहन्छ कि बिसेक भएपछि राम्रा राम्रा षट्रस भोजन, पान, स्त्रीसंभोग इत्यादि सबै विषयहरूको सुख भोग्दछु। किन्तु योगि मा यस्तो कुरा हुँदैन। परमानन्दलाई पाएर विद्वान योगीको मन विषयहरूमा अन्तराग पनि नष्ट हुन्छ। के नित्य आनन्दलाई जान्नेहरूको कहिल्यै तुच्छ विनाशी विषयानन्दमा प्रेम हुन सक्दछ? अर्थात् कहिल्यै पनि हुँदैन। परमानन्दको तात्पर्य यहाँ सर्वानन्दको कारण, समस्त हेय गुणहरूको गन्धले रहित र सबै मुमुक्षुको ध्येय भगवान्को चिद्घनविग्रह सँग नै छ। किनकी श्रुतिमा भनिएको छ कि यसै ब्रह्मानन्द(परमात्मा) को आनन्दको मात्राले नै सबै जना बाँच्दछन्। अभिप्राय यो हो कि सर्वानन्दस्वरूप भगवान् को नै आनन्दको छिटा यस लोकको आनन्दको कारण हो। भगवान्को स्वरूप जस्तो आनन्दमय छ, त्यस्तै नै विग्रह पनि आनन्दस्वरूप छ। भगवान्को कस्तो स्वरूप छ? भगवान् ज्ञानात्मक र ऐश्वर्यात्मक हुनुहुन्छ। भन्नुको अर्थ यो कि भगवान् जस्तो चिद्घन हुनुहुन्छ त्यस्तै नै उहाँको विग्रह पनि चिद्घन नै हुनाले आनन्दस्वरूप छ॥५९॥

–★–★–★–

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

**यततो ह्यपि कौन्तेय पुरुषस्य विपश्चितः।**
**इन्द्रियाणि प्रमाथीनि हरन्ति प्रसभं मनः॥**

**हे अर्जुन! आसक्तिको नाश नभएकोले यी प्रमथन स्वभाववाला इन्द्रियहरू, प्रयत्नशील बुद्धिमान् पुरुषको मनलाई पनि जबर्जस्ती हरण गर्दछन्॥६०॥**

स्थितप्रज्ञतायामिन्द्रियसंयमस्य कारणत्वमुक्तं तदभावे दोषमाह–यतत इति। हे कौन्तेय! विपश्चितः विविधं गुणदोषं पश्यतो विवेकिनः पुरुषस्य यततोऽपि मनोध्येयरूपे प्रवणीकरणार्थं भूयो भूयो विषयेभ्यो विनिवर्त्तने प्रयतमानस्यापि मनः सर्वेन्द्रियाणि प्रसभं बलात्कारेण हरन्ति विषयेषु रागवत्कुर्वन्ति। यततोऽपि विपश्चितश्च कथं हरन्ति तत्राह–प्रमाथिनीति। प्रमथनशीलानि अतस्तद्विवेकं यत्नं चाकिञ्चित्कृत्वा विषयानुध्याने प्रवर्त्तयन्तीत्यर्थः।

स्थितप्रज्ञता मा इन्द्रिय संयमलाई कारण भनेर अब इन्द्रिय संयमको अभावमा जुन दोष उत्पन्न हुन्छ, त्यसैलाई यहाँ भनिन्छ–
हे अर्जुन! विवेकी पुरुषहरूको यत्नलाई माटोमा मिलाएर(बेकार पारेर) जबर्जस्ती विषय तिर लैजाने शक्तिशाली इन्द्रियहरू गुण–दोषलाई विचार गर्ने विवेकी पुरुषको मनलाई पनि जबर्जस्ती हर्दछन्। उनीहरूको मनमा पनि विषयासक्ति उत्पन्न गर्दछन्। यद्यपि त्यो विवेकी पुरुष विषयहरूबाट आफ्नो मनलाई हटाएर त्यसलाई ध्येय तर्फ लगाउने बारम्बार चेष्टा गर्दछ तथापि इन्द्रियहरू धेरै नै प्रबल छन्, अतः बलशील विवेकी पुरुषको मनमा पनि विक्षोभ पैदा गरेर विषयहरूको(भोगहरूको) ध्यानमा त्यसलाई लगाईदिन्छ॥६०॥

–★–★–★–

**तानि सर्वाणि संयम्य युक्त आसीत मत्परः।**
**वशे हि यस्येन्द्रियाणि तस्य प्रज्ञा प्रतिष्ठिता॥**

**यसैको लागि साधकले ती सम्पूर्ण इन्द्रियहरूलाई वशमा गरि समाहितचित्त भई मेरो परायण भएर ध्यानमा बस्नु, किनकी जुन पुरुषको इन्द्रियहरू वशमा हुन्छन् त्यसैको बुद्धि स्थिर हुनजान्छ॥६१॥**

यस्मादवशीकृतेन्द्रियाण्यनर्थकारणानि तस्मान्मुमुक्षुणा प्रथमं तज्जयः कर्त्तव्यः इत्याह– तानि दुष्टानि सर्वाणीन्द्रि–याणि संयम्य सम्यङ्नियम्य वशीकृत्य युक्तः ध्येये नियुक्त–मना आसीत् समादध्यादित्यर्थः। ननु यदि तानि प्रमाथीनि तर्हि कथं तेषां संयमः स्यादित्याह–मत्पर इति। अहं हृषीकेशः पर उत्कृष्ट उपायो यस्य स तथा मदाश्रयो भूत्वा अनायासेन जयेदित्यर्थः। मदाश्रयणं विनेन्द्रियाणि वशीकर्त्तुमशक्यानीति भावः। इन्द्रियवशीकरणमेव पुरुषार्थकारणमित्याह–वशे हीतिहीत्यवधारणे। यस्य सा–धस्येन्द्रियाणि वशे भवन्ति तस्यैव प्रज्ञा प्रतिष्ठिता भवति, नान्ययस्येत्यर्थः। एतावता किमासीतेत्यस्योत्तरमुक्तम्।

वशमा नगरिएको इन्द्रियहरू अनर्थको कारण हुन् यसैले मोक्षार्थीहरूले पहिले उनीहरूलाई नै जित्नु पर्दछ, यही भन्नुहुन्छ। यी दुष्ट र दुर्जेय इन्द्रियहरूलाई सम्यक् प्रकारले वशमा गरेर मनलाई ध्येय–वस्तुमा लगाउनु। यदि अर्जुन यो शंका गर्दछन् कि इन्द्रियहरू त धेरै प्रबल छन्, यी कसरी वशमा हुन सक्दछन्? त भगवान् भन्नुहुन्छ कि मेरो आश्रय ग्रहण गरेर नै यीनीहरूलाई सहजै वशमा गर्न सकिन्छ किनकी म हृषीकेश हूँ अर्थात् इन्द्रियहरूका स्वामी हूँ(नियन्ता हूँ) भन्नुको तात्पर्य यो हो कि बिना मेरो शरणमा आई इन्द्रियहरू वशमा गर्न सकिदैन।

इन्द्रियहरूलाई वशमा गर्नु नै पुरुषार्थको कारण हो। जुन साध ाकको इन्द्रियहरू वशमा भएका छन् उसैको स्थितप्रज्ञ संज्ञा हुन्छ अर्थात् त्यसको प्रज्ञा या बुद्धि निश्चल हुन्छ। यहाँ सम्म,स्थित प्रज्ञको रहनीको उत्तर दिनुभयो॥६१॥

–★–★–★–

**ध्यायतो विषयान्पुंसः सङ्गस्तेषूपजायते। सङ्गात्सञ्जायते कामः कामात्क्रोधोऽभिजायते॥**
**क्रोधाद्भवति सम्मोहः सम्मोहात्स्मृतिविभ्रमः। स्मृतिभ्रंशाद् बुद्धिनाशो बुद्धिनाशात्प्रणश्यति॥**

**विषयहरूको चिन्तन गर्ने पुरुषको ती विषयहरूमा आसक्ति हुनजान्छ, आसक्तिले ती विषयहरूको कामना उत्पन्न हुन्छ र कामनामा विघ्न भएमा क्रोध उत्पन्न हुन्छ। क्रोधले अत्यन्त मूढ़भाव उत्पन्न हुन्छ र मूढ़भावले स्मृतिमा(दिमागमा) भ्रम पैदा हुन्छ, भ्रम भएपछि बुद्धि अर्थात् ज्ञानशक्तिको नाश हुनजान्छ र बुद्धिको नाश भएपछि त्यो मनुष्य आफ्नो स्थितिबाट तल झर्दछ॥६२-६३॥**

एवं वशीकृतेन्द्रियतवं स्थितप्रज्ञतालक्षणमुक्तमिदानीं बाह्येन्द्रिय संयमे सत्यपि मनः संयमाभावेऽनर्थप्राप्तिः स्यादित्याह-ध्यायत इति द्वाभ्याम्। विषयान् रूपरसादीन् ध्यायतो मनसा पुनः पुनश्चिन्तयतः पुंसस्तेषु संग आसक्तिः सुखहेतुबुद्ध्या प्रीत्यतिशय उपजायते। संगात्कामः संगस्य परिणामो अवस्थाविशेषः, यस्मिन् जाते पुरुषो विषयानुभूय वधिरोऽन्धउन्मत्त इव जायते। स कामः सम्यग् जायते कामात् क्रोधोऽभिजायते। कामे जाते विषयप्राप्तिप्रतिबन्धे सति तत्प्रतिबन्धकेषु जनेषु अभिज्वलतात्मकोऽन्तः करणपरिणामः क्रोधः साक्षाज्जायते। क्रोधात्संमोहः कार्याकार्याविवेको भवति। संमोहात् स्मृतिविभ्रमः स्मृतेराचार्योपदिष्ट शास्त्रार्थविचारस्य विभ्रमो भ्रंशो भवति। स्मृतिभ्रंशात् सुखरूपात्मव्यवसायात्मिकाया बुद्धेर्नाशो भवति। बुद्धिनाशात्प्रणश्यति सर्वपुरुषार्थहीनो मृततुल्यो भवतीत्यर्थः। तस्मान्मनो निग्रहोऽवश्यं कर्त्तव्य इति भावः।

यस प्रकार इन्द्रियहरूलाई वशमा गर्ने स्थितप्रज्ञताको लक्षण भनेर, बाहिरको इन्द्रियहरूलाई वशमा राखेर पनि मनको संयमको अभावमा जुन हानिहरू हुन्छन्, त्यसलाई दुई श्लोकहरूमा वर्णन गर्नुहुन्छ। रूप, रस, गन्ध आदि विषयहरूको मनमा बारम्बार चिन्तन गर्नाले मनुष्यहरूलाई तिनीहरूमा आसक्ति पैदा हुन्छ। त्यो विषयहरूमा(उनीहरूलाई सुखको हेतु संझेर) अतिशय प्रीति हुनाले उनीहरूको लागि मनमा काम उत्पन्न हुन्छ। काम संगत को फल हो। काम हुँदामा मनुष्य विषयहरूको अनुभव गरेर बहिरो, अन्धो र पागल जस्तो हुनजान्छ। त्यसलाई केहि पनि सुनिदैन र देखिदैन। काम बाट क्रोध पैदा हुन्छ अर्थात् मनमा काम उत्पन्न भएपछि विषयप्राप्तिमा रोकावट गर्ने मनुष्यको प्रति शरीरलाई जलाउने अन्तःकरणको त्यो अवस्था प्राप्त हुन्छ जसलाई क्रोध भनिन्छ। क्रोधले मोह हुन्छ र जस्ले गर्दा मनुष्य राम्रो र नराम्रो कार्यको विचारै गर्न सक्दैन। मोह भएपछि स्मृति अर्थात् आचार्यले सिकाउनु भएको सदुपदेशलाई मनुष्य बिर्सन्छ जसको कारण त्यसको निश्चयात्मिका बुद्धि नष्ट हुन्छ, र जब बुद्धि नै हुँदैन भने त्यस बुद्धिहीन मनुष्यको नाश हुने समय आईपुग्छ। त्यो बुद्धिहीन मनुष्य सबै पुरुषार्थले रहित भएर मृततुल्य (मरेको बराबर) हुन्छ। यसैले सबै अनर्थहरूको जड़ मनलाई अवश्य वशमा गर्नु पर्दछ॥६२-६३॥

-★-★-★-

**रागद्वेषवियुक्तैस्तु विषयानिन्द्रियैश्चरन्।**
**आत्मवश्यैर्विधेयात्मा प्रसादमधिगच्छति॥**

**आफ्नो अन्तःकरणलाई वशमा गरेको साधकले आफ्नो वशमा गरेको, राग-द्वेष रहित इन्द्रियहरू द्वारा चाहिंदो विषयहरूमा विचरण गरेर पनि अन्तःकरणको प्रसन्नतालाई प्राप्त गर्दछ॥६४॥**

मनसो निग्रहे बाह्येन्द्रियनिग्रहाभावोऽपि न दोषयोग इति वदन् व्रजेत्किमित्यवशिष्टस्य प्रश्नस्योत्तरमाह-रागादेः द्वाभ्याम्। तु शब्दः पूर्वस्माद्वैलक्षण्यद्योतनार्थः। विधेयः वशीभूतः आत्मा मनो यस्य स रागद्वेशवियुक्तैरिन्द्रियैर्विष-यान् चरन् भुञ्जानः प्रसादं चित्तस्य प्रसन्नतामधिगच्छति निर्मलान्तःकरणो भवतीत्यर्थः।

मनलाई रोकिसके पछि बाहिरी इन्द्रियहरूलाई रोक्न सकिएन भने पनि धेरै हानी हुँदैन यही कुरा भन्दै अर्जुनको अन्तिम प्रश्नको उत्तर भगवान् दुई श्लोकहरू मा दिनुहुन्छ। प्रश्न थियो कि स्थित-धी मनुष्य कसरी घुम-फिर गर्ने गर्दछ। जुन मनुष्यले मनलाई वशमा गरेको छ, त्यो वशमा गरिएको र राग-द्वेषले हीन इन्द्रियहरू द्वारा विषयलाई भोग्दै पनि प्रसन्नतालाई प्राप्त गर्दछ, अर्थात् त्यसको अन्तःकरणमा कुनै पनि विकार हुँदैन। त्यो निर्दोष र निर्मल बनि रहन्छ॥६४॥

-★-★-★-

**प्रसादे सर्वदु:खानां हानिरस्योपजायते ।**
**प्रसन्नचेतसो ह्याशु बुद्धि: पर्यवतिष्ठते ॥**

**अन्त:करणको प्रसन्नता प्राप्त भएपछि त्यसको सम्पूर्ण दु:खहरू को अभाव हुन्छ(नाश हुन्छ) र त्यो प्रसन्न चित्तवाला कर्मयोगीको बुद्धि शीघ्र सबैतिर बाट हटेर एक परमात्मामा नै भलीभाँति स्थिर हुन्छ ॥६५ ॥**

चित्तप्रसादे सति अस्य मुमुक्षो: सर्वदु:खानामाध्यात्मिकादीनां हानिरूपजायते। विषयासक्तचेतसां विपाकदशायां यान्यवर्जनीयानि दु:खानि, निर्मलमनसस्तेषां हानिर्नियतभोगनिवृत्तिरनायासेन भवतीत्यर्थ:। न केवलं तस्य दु:खहानिमात्रमपि तु महत्फलं प्राप्नोतीत्याह–प्रसन्नचेतस इति। हीत्यवधारणे। प्रसन्नचेतस आशु शीघ्रमेव बुद्धि: पर्यवतिष्ठते परित: सर्ववृत्ती: समाकृष्य निश्चला भवतीत्यर्थ:।

**चित्तमा प्रसन्नता भएपछि त्यस(मोक्षको इच्छा गर्नेवाला) पुरुषको सबै आध्यात्मिकादि दु:खहरूको नाश हुनजान्छ अर्थात् विषयमा आसक्त चित्तवालाको विपाकदशा अर्थात् भोगको समयमा जो दु:ख उनीहरूलाई अवश्य भोग्नुपर्दछ, ती दु:खहरूलाई विषयमा रागहीन पुरुषहरूको बिना परिश्रम नै छुट्कारा हुनजान्छ। केवल दु:ख बाट मात्रै छुटकारा हुँदैन बरु अरु पनि ठूलो फल हुन्छ। त्यो यो कि यस्तो प्रसन्न चित्तवालाको बुद्धि शीघ्र नै निश्चितरूपमा सबै वृत्तिहरूबाट यानि कि इन्द्रियहरूको सबै विषयबाट हटेर ध्येयस्वरूप भगवान्मा निश्चल(केन्द्रित) हुन्छ ॥६५ ॥**

–★–★–★–

**नास्ति बुद्धिरयुक्तस्य न चायुक्तस्य भावना ।**
**न चाभावयत: शान्तिरशान्तस्य कुत: सुखम् ॥**

**मन र इन्द्रियलाई नजितेका पुरुषमा निश्चयात्मिका बुद्धि हुँदैन र त्यस अयुक्त मनुष्यको अन्त:करणमा भावना पनि हुँदैन तथा भावनाहीन मनुष्यलाई शान्ति मिल्दैन र शान्तिहीन मनुष्यलाई सुख कसरी मिल्नसक्छ? ॥६६ ॥**

उक्तार्थदृढीकरणायासंयतमनस: सर्वं विपरीतफलं दर्शयतीति–नास्ति इति। अयुक्तस्यवशीकृतचित्तस्य बुद्धि: सर्ववेदवेदान्तनिर्णीत तत्वविषयिणी व्यवसायात्मिका न भवति। किञ्च अयुक्तस्य भावना तत्त्वपरिशीलनात्मिका मनोवृत्तिर्नास्ति। अभावयत: भावनाशून्यस्य शान्तिर्विषयेभ्य उपरतिर्न भवति। अशान्तस्य सुखं दु:खलेशात् संभिन्नं नित्यानपायिसुखं कुत: स्यात्। प्राकृतविषयजन्यं राजसं सुखं तु तस्यापि भवति, विषयेन्द्रियसंयोगादित्यादिना वक्ष्यमाणत्वात्।

**पहिले नै वर्णन गरीसकिएको विषयलाई दृढ गर्नको लागि असंयत मनभएको लाई जुन विपरीत फल हुन्छ त्यसलाई स्पष्ट गर्नुहुन्छ।**

**जसले मनलाई वशमा गरेको छैन त्यसलाई सबै वेद-वेदान्त द्वारा निर्णय गरिएको परमतत्त्वमा निश्चयात्मिका(दृढ) बुद्धि हुँदैन। यस्तो अयुक्त पुरुषको भावना अर्थात् तत्त्वलाई विचार गर्ने मनोवृत्ति पनि हुँदैन। अर्थात् त्यसको मन तत्त्वलाई विचार गर्नमा लाग्दैन। भावनाहीन मनुष्यलाई लाई विषयहरूलाई विषयहरूबाट आराम हुँदैन। र जसलाई शान्ति छैन त्यसलाई नित्य अनपायी सुख कहाँ बाट पाईन्छ? । प्राकृत विषयहरूबाट उत्पन्न राजसी सुख त्यसलाई पनि मिल्न सक्दछ जस्तै कि अगाडी 'विषयेन्द्रिय संयोगात्' इत्यादिले भन्नुहुनेछ ॥६६ ॥**

–★–★–★–

**इन्द्रियाणां हि चरतां यन्मनोऽनुविधीयते ।**
**तदस्य हरति प्रज्ञां वायुर्नावमिवाम्भसि ॥**

**किनकी जसरी पानीमा तैरिने डुंगालाई हावाले हरण गर्दछ त्यसरी नै विषयमा विचरणगर्ने इन्द्रियहरूमा मन जुन इन्द्रियको साथमा रहन्छ त्यो एउटै इन्द्रिय त्यस अयुक्त पुरुषको बुद्धिलाई हरण गर्दछ ॥६७ ॥**

अयुक्तस्य बुद्धि: कुत:? नास्तीत्यत आह–इन्द्रियाणामिति। हि

**अयुक्त अर्थात् जसले इन्द्रियहरू वशमा गरेको छैन त्यसलाई**

यस्मात् इद्रियाणां चरतां विषयेषु प्रवर्त्तमानानां मध्ये यत्कि-मपीन्द्रियं मनोऽनुविधीयते, कर्मभूतं मनः पुरुषेणाऽनु-वर्त्यते। तदिन्द्रियं मनो वा अस्य पुरुषस्य प्रज्ञां आत्मतत्व-विषयिणीं बुद्धिं हरति, तत्वतः प्रच्याव्य स्वानुवर्त्तिनीं विषयाभिमुखीं करोति। तत्र दृष्टान्तः-वायुर्नावमिति। यथा अम्भसि नीयमानां नावं प्रतिकुलो वायुर्हरति। गन्तव्यमार्गात् प्रच्याव्य विकटे प्रक्षिप्य नाशयति, तद्वदित्यर्थः।

बुद्धि(प्रज्ञा) किन हुँदैन, यसको अब उत्तर दिनुहुन्छ। जुन पुरुषको मन विषयहरूमा लागेको इन्द्रियहरूको अलिकति पनि अनुसरण गर्दछ त्यसको मन वा इन्द्रियहरू त्यसको प्रज्ञा या आत्मतत्त्वविषयिणी बुद्धिलाई हर्दछन्। अर्थात् बुद्धिलाई तत्त्वबाट हटाएर आफ्नो अनुवर्त्ति बनाएर विषय तर्फ नै लगाईदिन्छन्। जसरी पानीमा तैरिरहेको असावधान माझीको डुंगालाई, हावा सीधा बाटो बाट हटाएर विपत्तिमा पारेर नाश गरिदिन्छ॥६७॥

-★-★-★-

**तस्माद्यस्य महाबाहो निगृहीतानि सर्वशः ।**
**इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता॥**

**यसैले हे महाबाहो! जुन पुरुषको इन्द्रियहरूलाई इन्द्रियहरूको विषयबाट सम्पूर्ण प्रकारले हटाईएको छ,त्यसैको बुद्धि स्थिर छ॥६८॥**

एवमिन्द्रियाणि प्रमाथीनित्यादिनेन्द्रियाणां मनोबुद्धिभ्रंशकत्वं तन्नियमनस्य च स्थितप्रज्ञताहेतुत्वं चानेकधोपपाद्येदानीं तमर्थमनूद्योपसंहरति-तस्मादिति। यस्मादिन्द्रियाण्येव विषयप्रवृत्तिहेतुत्वेनानर्थकराणि तस्मात् हे महाबाहो! यस्य पुरुषस्य सर्वशः सर्वप्रकारेण इन्द्रियाणि इन्द्रियार्थेभ्यो निगृहीतानि तस्य प्रज्ञा प्रतिष्ठिता भवति।

इन्द्रियहरू धेरै बलवान् हुन्छन् र मन बुद्धिलाई भ्रष्ट गर्नेवाला हुन्छन्। यसैले यिनीहरूको संयम गर्नु स्थितप्रज्ञताको कारण हो। यस कुरालाई धेरै तरीकाले संझाएर अब भगवान् स्थितप्रज्ञताको अर्थ भनेर यस विषयलाई समाप्त गर्नुहुन्छ। हे महाबाहु! (अर्जुन) यी इन्द्रियहरू मनुष्यलाई विषयमा लगाएर अनर्थ उत्पन्न गर्दछन्। यसैले जुन पुरुषले इन्द्रियहरूलाई उनीहरूको विषयबाट रोकिदिएको छ त्यसै पुरुषको बुद्धि स्थिर हुन्छ॥६८॥

-★-★-★-

**या निशा सर्वभूतानां तस्यां जागर्ति संयमी ।**
**यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः॥**

**सम्पूर्ण प्राणिहरूका लागि जुन रात्रीको समान छ, त्यस नित्य ज्ञानस्वरूप परमानन्दको प्राप्तिमा स्थितप्रज्ञ योगी जागिरहन्छ र जुन नाशवान् सांसारिक सुखको प्राप्तिमा सबै प्राणि जागिरहन्छन्, परमात्माको तत्त्वलाई जान्ने मुनिको लागि त्यो रात्रीको समान छ॥६९॥**

ननु सर्वेन्द्रियव्यापारशून्यः स्थितप्रज्ञ उक्तस्तथाभूतो न कोऽपि दृश्यते, किन्त्वन्यजनवद्दर्शन श्रवणादि व्यापारः स्थितप्रज्ञस्याप्यवर्जनीयः कथमुक्तार्थः सम्भाव्येतेत्याशंक्य स्थितप्रज्ञस्य दर्शनादि सर्वलोकविलक्षणमित्याह-या निशेति। सर्वभूतानां प्राणिनां या निशेव निशा आत्मस्वरूपादिदर्शयोग्या बुद्धिवृत्तिः, विषयासक्तचेतसां दर्शनाद्ययोग्यतया गाढान्धतमस्वती कुहूशर्वरीव, तस्यामात्मस्वरूपादिदर्शनार्हबुद्धिवृत्तौ प्राणिमात्रनिशायां संयमी सम्यङ्नियमित-बाह्यान्तःकरणे मुनिर्जागर्त्ति,

यस्तो सम्म शंका हुन्छ कि जस्तो सुतेको मान्छे, इन्द्रियहरूको व्यापार(क्रिया) बाट शून्य हुन्छ यस्तो इन्द्रियहरूको व्यापारले शून्य त कोई देखिदै-देखिदैन, स्थितप्रज्ञावालाको हेर्नु सुन्नु र अरु मान्छेहरूको हेर्नु सुन्नु समान नै हुन्छ होला, भने पछाडि जुन कुरा भनियो कि यी स्थितप्रज्ञ इन्द्रियहरूको व्यापारलाई रोकिराख्दछन्, यो कसरी सम्भव हुन सक्दछ? यसको उत्तरमा स्थितप्रज्ञावालाहरूको हेर्नु सुन्नुको विलक्षणताको वर्णन गर्नुहुन्छ।

जुन आत्मस्वरूपको दर्शन गर्न योग्य बुद्धिवृत्ति छ, त्यो सबै विषयासक्त जीवहरूको लागि औंसी को अँध्यारो रात जस्तै हो। अर्थात् जस्तै- अंधेरी रातमा केहि देखिंदैन त्यस्तै नै यी जीवहरूलाई आत्मतत्त्वको अनुभव हुँदैन, त्यस रात्रिमा इन्द्रिय संयम गर्नेहरू जाग्दछन्। अर्थात् जो मान्छेले राम्रो सँग बाहिर भित्रको

प्रबुद्धः सन् यथात्म्येन शास्त्रतत्त्वं बुद्धावनुभवति। यस्यां तु विषयानुभवयोग्यायामनात्मनिष्ठायां बुद्धिवृत्तौ भूतानि अवशीकृत–बाह्यान्तःकरणाः प्राणिनः जाग्रति सावधा–नतया वर्त्तन्ते, सा विषयानुभवयोग्या बुद्धिवृत्तिः आत्मतत्वं याथात्म्येन पश्यतो मुनेर्निशा निशेव निशा निषयदर्शनानर्हा बुद्धिवृत्तिरित्यर्थः। अतः सम्भावितमेवेदं स्थितप्रज्ञस्य लक्षणमिति सिद्धम्।

इन्द्रियहरूलाई संयम गरेका छन्, ती जागेर आफ्नो बुद्धिमा शास्त्रोक्त तत्त्व आत्मस्वरूपको यथार्थ अनुभव गर्दछन्। र विषयहरूको अनुभव गर्ने शक्ति या योग्यता राख्ने र अनात्म वस्तुमा निष्ठा राख्ने जुन बुद्धिवृत्तिमा बाहिर भित्रको इन्द्रियहरूलाई वशमा नगरेकाहरू जाग्दछन् अर्थात् त्यसमा सावधानी पूर्वक लाग्दछन्, त्यो आत्मतत्त्वलाई साक्षात् देख्ने मुनिहरूलाई रात्रिको समान छ। अर्थात् ती मुनिहरू त्यसमा आत्मतत्त्वको साक्षात अनुभव गर्दछन्, अतएव उनीहरूको बुद्धि विषयहरूको दर्शनको अयोग्य हुन जान्छन्। यसैले स्थितप्रज्ञको जुन माथि लक्षण भनिएको छ त्यो सम्भव छ यस्तो सिद्ध भयो॥६९॥

–★–★–★–

## आपूर्यमाणमचलप्रतिष्ठं समुद्रमापः प्रविशन्ति यद्वत् ।
## तद्वत्कामा यं प्रविशन्ति सर्वे स शान्तिमाप्नोति न कामकामी॥

**जस्तै अनेक नदिहरूका जल सबैतिर परिपूर्ण अचल प्रतिष्ठा भएको समुद्र त्यसलाई विचलित नगरिकन मिसिन्छन्, त्यस्तै सबै भोग जुन स्थितप्रज्ञ पुरुषमा कुनै विकार उत्पन्न नगरीकनै भोगिन्छ, त्यही नै पुरुष परमशान्तिलाई प्राप्त गर्दछ, भोगहरूको चाहना गर्नेहरू होईन॥७०॥**

नन्वेवं निगृहीतसर्वेन्द्रियस्य सर्वविषयेभ्यो निवृत्तबुद्धेर्योगिनो योगप्रभावाद्यादि सर्वकामसिद्धयः स्वयं प्राप्नुयुः स तान् कामान् गृह्णीयाच्चेत्तर्हि तस्य तत्रासक्त्या तत्त्वतश्च्युतिः स्यादित्याशंकावारणाय आह–आपूर्णमाणमिति। सर्वाभिर्नदीभिः सदा आपूर्यमाणं तथाऽप्यनुल्लंघितमर्यादं समुद्रं पुनरपि वृष्टिजाः सर्वा आपः प्रविशन्ति स यद्वन्न कञ्चन विशेषमापद्यते, तद्वत्। विषयात्मभिः काम्यन्त इति कामाः सर्वे रूपरसादयो विषयात्मभिः काम्यन्त इति कामाः सर्वे रूपरसादयो विषयाः प्रारब्धवशाद्योगविघ्नार्थं देवैः प्रेषिताः वा यं स्थितप्रज्ञं मुनिं प्रविशन्ति तदिन्द्रिय ग्राह्यतां स्वयमेव प्राप्नुवन्त्यपि किञ्चिद्विकारं कर्त्तुं न प्रभवन्ति। स शान्ति सर्वविक्षेपहेतुकर्मध्वंसेन निरतिशयानन्दरूपां मुक्तिमाप्नोति। न तस्य तत्त्वनिष्ठाया भ्रंशशंकाऽपीत्यर्थः। विषयिणस्तदभावमाह–न कामकामीति। कामान्विष–यान्कायितु शीलं यस्य स तथा शान्तिं न प्राप्नोति। किन्तु विषयानुभवार्हे संसार एव वर्त्तते।

यदि यस्ता इन्द्रियसंयमी र सबै विषयहरूबाट निवृत्त बुद्धिभएका योगीहरूलाई उनीहरूको योगबलले सबै सिद्धिहरू आफ–से–आफ प्राप्त होउन र त्यो तिनीहरूले ग्रहण गरेमा तब त त्यसमा उनीहरूको आसक्ति हुन सक्दछ। र यस प्रकार त्यो तत्त्वज्ञानबाट तल झर्दछ। यसै आशंकाको उत्तर दिनुहुन्छ–

जस्तै सबै नदीहरूको पानीबाट सधैं भरिएको र सधैं अचल आफ्नो मर्यादा न छोड्ने समुद्रमा वर्षाको सबै पानी आएर झर्दछ तर समुद्रमा त्यसले कुनै विकार, बढ्नु या घट्नु अथवा अरु कुनै विशेषता पैदा हुँदैन त्यस्तै प्रकार प्रारब्धवश आएका या योगमा विघ्न गर्नका लागि आएका देउताहरू बाट पठाईएका रूप, रस, गन्धादि विषय त्यस स्थितप्रज्ञ मुनिको इन्द्रियहरूलाई स्वतः प्राप्त हुन्छन्, तर ती विषय, त्यसको मनमा कुनै विकार पैदा गर्न सक्दैनन्।

यस्तो स्थितप्रज्ञ मुनि विक्षेप उत्पन्न गर्नेवाला सबै कर्महरूको विध्वंस गरेर शान्ति अर्थात् निरतिशय आनन्दरूप मुक्तिलाई प्राप्त गर्दछन्। भाव यो हो कि त्यसको तत्त्वज्ञानबाट झर्ने कुनै पनि आशंका बाँकी बस्दैन।

जो कामना को इच्छा राख्ने अरु मान्छेहरू छन् तिनीहरू यस शान्तिलाई पाउन सक्दैनन्। ती विषयको अनुभव गर्ने योग्य संसारमा नै स्थित रहन्छन्॥७०॥

–★–★–★–

**विहाय कामान्यः सर्वान्पुमांश्चरति निःस्पृहः।**
**निर्ममो निरहङ्कारः स शान्तिमधिगच्छति॥**

**जुन पुरुष सम्पूर्ण कामनाहरूलाई त्यागेर ममतारहित, अहंकाररहित र स्पृहारहित भएर विचरण गर्दछ, त्यहि नै शान्तिमा प्राप्त छ, अर्थात त्यसैले शान्ति प्राप्त गर्दछ॥७१॥**

एवम्भूतमहाफलस्य योगस्य कोऽधिकारीत्येक्षायामाह– विहायेति। सामान्ययच्छब्दप्रयोगात्सर्वविषयत्यागपूर्व– कालनिष्ठायां वर्णाश्रमविशेषनियमो नास्ति। किन्तु यः कश्चिदपि पुमान्सर्वान्कामान्कामानप्राप्तान्प्राप्तान्वा विहाय विशेषेण त्यक्त्वा देहयात्रामात्रेऽपि निस्पृहः अत एव निर्मम यदृच्छाप्राप्ते भोजनाच्छानादौ ममेदमित्यभिमानशून्यः पुनश्च निरहंकारः देहेन्द्रियादावहंकाररहितः आत्मनस्तद्वैलक्षण्य– ज्ञानपूर्वकदेहादि संबंधस्यानित्यत्वज्ञानात् चरति यदृच्छा– प्राप्तभोगान् भुङ्क्ते यत्र क्व वा गच्छति स शान्तिमुक्तल– क्षणामधिगच्छति निर्वन्धतया प्राप्नोति।

यस्तो महाफल भएको योगको कुन अधिकारी हो? यसको उत्तर दिनुहुन्छ–

जुन कुनै मनुष्य, चाहे त्यो कुनै पनि जाति या आश्रमको किन नहोस, सबै प्राप्त या अप्राप्त कामहरू या अभिलाषाहरूलाई पूर्णरूपले छोडेर देहयात्रामा पनि स्पृहाहीन भई अर्थात् भोजन-कपड़ा कसरी पाईन्छ यसको पनि चिन्ता छोडेर र यसैले भोजन-कपडामा ममतारहित भई र देह-इन्द्रिय आदि मा पनि यो जानेर कि यो आत्मा देखि भिन्न छ र यसको आत्माको साथ सम्बन्ध पनि अनित्य छ, अहंकार रहित भएर आफ्नो प्रारब्धले प्राप्त भोगहरूलाई भोग्दै जहाँ काँही पनि रहोस, त्यो बिना रोक-टोक कै शान्ति अथवा मोक्ष प्राप्त गर्दछ॥७१॥

–★–★–★–

**एषा ब्राह्मी स्थितिः पार्थ नैनां प्राप्य विमुह्यति।**
**स्थित्वास्यामन्तकालेऽपि ब्रह्मनिर्वाणमृच्छति॥**

**हे अर्जुन! यो ब्रह्मलाई प्राप्त गरेको पुरुषको स्थिति हो, यसलाई प्राप्त गरेर योगी कहिल्यै मोहित हुँदैन र अन्तकालमा पनि यस ब्राह्मी स्थितिमा स्थित भएर ब्रह्मानन्दमा प्राप्त हुन्छ॥७२॥**

उक्तात्मनिष्ठां स्तुवन्नुपसंहरति–एषेति। एषाऽसंगकर्म– पूर्विका ब्राह्मी ब्रह्मसंबंधिनी ब्रह्मप्रापिकेति यावत् स्थितिः स्थितप्रज्ञा लक्षणा निष्ठोक्तेति शेषः। एनां स्थितिं प्राप्य कर्मयोगी न विमुह्यति देहात्मबुद्धिं न प्राप्नोति। अस्यां स्थित्यां अन्तकाले मरणासन्नकालेऽपि स्थित्वा ब्रह्मनिर्वाणं ब्रह्मणि निर्वाणं सर्वकर्मध्वंसपूर्वकं दुःखात्यन्ताभावं निरतिशय–सुखं मोक्षमृच्छति प्राप्नोति। प्राकृतोभयशरीर त्यागपूर्वकमप्राकृतदेहवान् भूत्वा निरंतरभगवद्भजनानंद– सुखानुभवयोग्यो भवतीति भावः। किं पुनर्वक्तव्यं? यदि पूर्वसमर्थे वयस्यस्यां स्थित्वा ब्रह्मनिर्वाणमृच्छतीति।

हे अर्जुन! यो मैले तिमीलाई त्यो ब्राह्मीस्थिति भने, अर्थात् आसक्तिहीन कर्मले युक्त त्यो स्थिति जुन ब्रह्म सम्बन्धिनी या ब्रह्मको प्राप्ति गराउँदछ। यस स्थितिलाई प्राप्त गरेर कर्मयोगी लाई मोह हुँदैन अर्थात् देहमा आत्मबुद्धि उत्पन्न हुँदैन। मरणकालमा पनि यस स्थिति मा स्थित हुनाले मनुष्यलाई सबै दुःखहरू बाट एकदम रहित, निरतिशय सुख दिने मोक्षपद प्राप्त हुन्छ। अर्थात् त्यो जीव स्थूल सूक्ष्म दुबै प्रकारको प्राकृत शरीरहरूलाई छोडेर अप्राकृत(दिव्य) शरीरलाई धारण गरेर सदा भगवत् भजन को आनन्द सुखलाई अनुभव गर्न योग्य हुन्छ र यदि त्यो ब्राह्मीस्थिति युवावस्था देखि नै हुने हो भने त फेरि त्यसको कुरा त के नै सोध

भगवत्प्राप्तिहेतुस्तत्पराभक्तिर्हि वक्ष्यते।
तदंगमात्मविज्ञानं साधनं तस्य कर्म च ॥१
असंगं तेन शुद्धात्मा स्थितप्रज्ञो भवेत्ततः।
सर्वदु:खविनिर्मुक्तः परां शान्तिनिगच्छति ॥२
इति गीतार्थसंक्षेः श्रीकृष्णेन कृपावशात्।
अध्यायेऽस्मिन् समादिष्टो भक्तानां हितसिद्धये ॥३

**नुपर्दछ र? ॥७२॥ यस दोस्रो अध्यायमा भगवान्लाई प्राप्त गर्ने पराभक्ति भनियो। यस पराभक्तिको अङ्ग आत्मस्वरूपको विज्ञान अर्थात् देह र आत्माको यथार्थ विवेक पनि भनियो। र देहात्मविज्ञानको साधन आसक्ति रहित निष्काम कर्म गर्नु र त्यस निष्कामकर्मले अन्तःकरणको शुद्धि, तब श्रीभगवान्को आश्रयग्रहण गर्नाले इन्द्रियहरूको संयम, त्यसले स्थितप्रज्ञता र तब सबै दुःखहरूबाट छुटकारा पाएर पराशान्ति(मुक्तिलाभ)हुनु, यो सबै पूरा गीताशास्त्रको अर्थ संक्षेपमा श्रीकृष्णभगवान्ले कृपा गरेर भक्तहरूको हितार्थ यसमा भन्नुभयो।**

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयिश्रीकेशवकाश्मीरिभट्टाचार्यविरचितायाम् सांखयोग द्वितीयोऽध्यायः ॥२॥

--★--★--★--

ॐ श्रीपरमात्मने नमः

# अथ तृतीयोऽध्याय

## अर्जुन उवाच

**ज्यायसी चेत्कर्मणस्ते मता बुद्धिर्जनार्दन ।**
**तत्किं कर्मणि घोरे मां नियोजयसि केशव ॥**

**अर्जुन भन्दछन्- हे जनार्दन! यदि हजुर कर्म भन्दा ज्ञान श्रेष्ठ मान्नु हुन्छ भने, हे केशव! मलाई भयङ्कर कर्ममा किन लगाउनुहुन्छ? ॥१॥**

एवं तावदर्जुनस्यात्मतत्वोपदेशनिमित्तशोकमोहप्रदर्शनायो-पोद्घाततत्वेन प्रथमाध्यायो निरूपितः। ततः शोकमोहनिवृत्तये देहात्मविवेकः तत्साधनभूतासंगकर्मयोगसत्त्वशुद्धिपूर्वक-भगवदाश्रयणसाध्यसर्वेन्द्रियसंयमस्ततः स्थितप्रज्ञता तत्फलं सर्वदुःखनिवृत्तिपूर्वकपरमा शान्तिरिति सर्वगीता-शास्त्रार्थः संक्षेपेण द्वितीयाध्याये निरूपितः। तत उक्तार्थ-स्यैव षोडशाध्यायैर्विस्तरो कृतो बोध्यः। तत्र तावत्पूर्वाध्याये 'अशोच्यानन्वशोचस्त्वमिति' श्लोकेनात्मज्ञानहीनं मां कुत्सयित्वा 'न त्वेवाहमि'त्यारभ्य' 'एषा तेऽभिहिता सांख्ये बुद्धिरि'त्यन्तेन शोकविनाशोपायं ज्ञानयोगम् मह्यमुपदिश्य पुनर्योगेत्विमां शृण्वि'त्युक्त्वा 'कर्मण्येवाधिकारस्ते, मा ते संगोऽस्त्वकर्मणि, योगस्थः कुरुकर्माणि' इत्यादिना कर्मनिष्ठामुपादेयतयाऽभिधाय 'श्रुतिविप्रतिपन्ना ते यदा स्थास्यति निश्चले'त्यादिना समाधिनिष्ठामुपदिश्य, स्थितप्रज्ञलक्षणे सर्वकामत्यागपूर्वक सर्वेन्द्रियसंयम-मात्मनैव संतुष्टत्वं चोक्त्वा 'या निशे'त्यादिना 'एषा ब्राह्मी स्थितीः पार्थ! स्थित्वाऽस्यामन्तकालेऽपि ब्रह्मनिर्वाण-मृच्छति'इति ज्ञानफलेनापसंहारात् मध्येऽभिहितायाः कर्मबुद्धेः सकाशात् ज्ञाननिष्ठाया ज्यायस्त्वं भगवतोऽभि-प्रेतमिति प्रतीयते। एवं सति सर्वज्ञो हितोपदेष्टा गुरुर्भगवान् निकृष्टे कर्माधिकारे कथं मा नियोजयतीति संदिह्य, पृच्छति। अर्जुनउवाच-ज्यायसी चेदिति। हे जनार्दन! श्रेयोऽर्थिभिः सर्वैर्भक्तैः स्वस्याभीष्टमर्द्यते याच्यते तथा भूतस्त्वं मयाऽपि स्वश्रेयः साधननिश्चयार्थं याच्यते इत्यर्थः। कर्मणः

अर्जुनलाई आत्मतत्त्वको उपदेश दिनको लागि पहिलो अध्यायमा भूमिकाको स्वरूपमा उनको शोक मोहलाई देखाईयो। त्यस पछि दोस्रो अध्यायमा उनको शोक मोहलाई छुटाउनको लागि देह र आत्माको विवेक अर्थात् त्यसको पृथक्ता को निरूपण गरियो। फेरि त्यस विवेकको साधनभूत इन्द्रियसंयम आदिको वर्णन भयो। अनन्तर यो इन्द्रियसंयम आसक्तिहीन कर्मद्वारा अन्तःकरणको शुद्धिपूर्वक भगवान्को आश्रय ग्रहण गरेर मात्रै प्राप्त गर्न सकिन्छ, यस कुराको वर्णन गरियो। फेरि यस इन्द्रियसंयमबाट स्थितप्रज्ञता प्राप्त हुन्छ, जसको फल सबै दुःखहरूको निवृत्तिपूर्वक परमशान्ति(मुक्ति) पाउनु हो।

अब अर्जुन भन्दछन् कि हे भगवान्! पछाडिको अध्यायमा 'शोक गर्नु नपर्ने वस्तुको लागि शोक गर्दछौ' यस श्लोक बाट हजुरले म(आत्मज्ञानहीन)लाई भर्त्सना गरेर 'नत्वेवाहम्' यस श्लोक देखि प्रारम्भ गरेर 'एषातेभिहिता०' सम्मका श्लोकहरूद्वारा ज्ञानयोगलाई शोकको विनाशको उपाय बताउनुभयो। फेरि 'पुनर्योगेत्विमां०' यस्तो भनेर 'कर्मण्येवाऽधिकारस्ते०' 'मा ते संगोस्त्वकर्मणि' 'योगस्थः कुरु कर्माणि०', इत्यादि बाट कर्मनिष्ठाको प्रतिपादन गर्नुभयो। फेरि 'श्रुति विप्रतिपन्ना०' इत्यादि द्वारा समाधिनिष्ठाको उपदेश गरेर सर्वकर्मत्याग पूर्वक इन्द्रियहरूको संयमलाई र आत्मामा नै आनन्द अनुभव गर्नु लाई स्थितप्रज्ञको लक्षण भन्नुभयो र अन्तमा फेरि 'या निशा०' इत्यादि ले र 'एषा ब्राह्मी०', 'स्थित्वास्यामन्त०' ले स्थितप्रज्ञताको ज्ञानरूपी फलको कथन गर्नुभयो।

यसबाट थाहा हुन्छ कि हजुरको मतमा ज्ञाननिष्ठा कर्मबुद्धि भन्दा श्रेष्ठ हो, किनकी आरम्भ र अन्तमा हजुरले ज्ञाननिष्ठाको नै बड़ाई गर्नुभएको छ। यदि यथार्थमा यस्तो कुरा हो भने र हजुरको यही मत हो भने त हजुर सर्वज्ञ, हितको उपदेश गर्ने, भगवान् र हाम्रो गुरु भएर मलाई ज्ञानको अपेक्षा निकृष्ट कर्ममा किन लगाउनु हुन्छ? यस्तो नै मनमा सन्देह गरेर अर्जुनले भगवान् सँग सोधे-हे जनार्दन! (जनार्दन शब्दको अर्थ यो हो कि आफ्नो श्रेयको इच्छा राख्ने सबै भक्त हजुर सँग आफ्नो अभीष्टको याचना गर्दछन्। म

साकाशात्, बुद्धिर्ज्ञानयोगाख्या मोक्षहेतुत्वेन ज्यायसी श्रेष्ठतरा चेद्यदि ते तव मता? तत्तर्हि किं किमर्थं घोरे हिंसाबुले युद्धाख्ये कर्मणि मां त्वदेकशरणं नियोजयसि। 'कर्मण्येवाधिकारस्ते' इत्यादिना प्रेरयसि। हे केशव ब्रह्मशिवादीनामीश्वर! त्वया भक्तस्य मम बुद्धिव्यामोहो न कर्त्तव्य इत्यभिप्रायः।

पनि आफ्नो श्रेयको निश्चय गर्नको लागि हजुर सँग प्रार्थना गर्दछु।) यदि हजुरको विचारमा मोक्ष पाउनको लागि कर्म भन्दा ज्ञानयोग अर्थात् बुद्धि नै श्रेष्ठ हो, भने हजुर मलाई, जसको एकमात्र शरण्य हुनुहुन्छ, यस्तो हिंसापूर्ण घोर युद्धमा 'कर्मण्येवाऽधिकारस्ते' भनेर किन लगाउनुहुन्छ? अभिप्राय यो हो कि हे केशव! अर्थात् ब्रह्मा, शिव आदिको स्वामी हजुर, म जस्तो भक्तको बुद्धिमा मा मोह उत्पन्न गर्नु उचित हैन॥१॥

–★–★–★–

**व्यामिश्रेणेव वाक्येन बुद्धिं मोहयसीव मे।**
**तदेकं वद निश्चित्य येन श्रेयोऽहमाप्नुयाम्॥**

**तपाईं छ्यासमिसे कुराले मेरो बुद्धिलाई मानौं मोहित गरिरहनु भएको छ। यसैले त्यसमा एउटा कुरालाई निश्चित गरेर भन्नुहोस जसले मेरो कल्याण होस॥२॥**

ननु नाहं त्वद्बुद्धिं मोहयामि त्वं मे किं व्यामोहकत्वं पश्यसि तद्वदेति चेत्तत्राह–व्यामिश्रेणैवेति। 'न त्वेवाहमि'त्यादिना ज्ञाननिष्ठामुपदिश्य 'योगस्थः कुरु कर्माणी'ति कर्मनिष्ठां चोपदिश्य पुनरन्ते ज्ञाननिष्ठामेव सप्रशंसं यदुपदिष्टवान् भवांस्तत्ते वाक्यमधिकारिभेदाप्रतिपादनेन मदेकविष–यत्वाद्व्यामिश्रेणेव वाक्येन मम बुद्धिं मोहयसीव। यद्यपि महाकारुणिकस्य सर्वसुहृदो गुरोस्तव मोहकत्वं नास्त्येव, तथापि तव वाक्यार्थानिश्चयान्ममैव तथा भातीतीव शब्दाभिप्रायः। यस्मादेवं तस्मादेकं ज्ञानं कर्मवा निश्चित्य वद येनानुष्ठितेनाहं श्रेयोऽर्थी श्रेय आप्नुयां प्राप्नुयाम्।

यदि भगवान् भन्नुहोस कि म त तिम्रो बुद्धिलाई मोहित गर्दिन। मेरो वचनमा मोह उत्पन्न गर्ने कुन–कुन कुरा छन्? तब भगवान्को यस प्रश्नको उत्तर अर्जुन यस प्रकार दिन्छन्–'नत्वेवाहं जातुनासं' इत्यादि श्लोकहरूद्वारा हजुरले ज्ञाननिष्ठाको उपदेश गर्नुभयो। फेरि 'योगस्थ कुरु कर्माणि' द्वारा कर्मनिष्ठाको उपदेश गर्नुभयो र अन्तमा फेरि ज्ञाननिष्ठाको नै प्रशंसा गरेर त्यसैको उपदेश गर्नुभयो र यी सबै कुराहरू अधिकारी भेदको अभावमा मेरो लागि नै भनियो। अर्थात् म नै यी दुबै ज्ञान र निष्ठाको अधिकारी मानिएँ। यसैले यी सबै कुराहरूले मेरो मनमा मोह जस्तो भईरहेको छ। (यद्यपि परम कारुणिक, सबैको भलो गर्ने र गुरु भएर हजुर मोह उत्पन्न गर्न चाहनुहुन्न, तर वाक्यार्थको निश्चय नभएको कारण मलाई नै मोह जस्तो परिरहेको छ।) अतएव ज्ञान या कर्म कुनै एउटाको निश्चय गरेर भन्नुहोस जसले गर्दा कल्याण चाहनेवाला मलाई श्रेय अर्थात् कल्याण प्राप्त होस॥२॥

–★–★–★–

**श्रीभगवानुवाच**

**लोकेस्मिन्द्विविधा निष्ठा पुरा प्रोक्ता मयानघ।**
**ज्ञानयोगेन साङ्ख्यानां कर्मयोगेन योगिनाम्॥**

**श्रीभगवान् भन्नुहुन्छ–हे निष्पाप! यस लोकमा दुई प्रकारको निष्ठा मैले पहिल्यै भनेको छु। उनीहरूमा सांख्ययोगिहरूको निष्ठा त ज्ञानयोगमा र कर्मयोगिहरूको निष्ठा कर्मयोगमा हुन्छ॥३॥**

तत्रोत्तरम्–श्रीभगवानुवाच।लोकेऽस्मिन्निति।हे अनघार्जुन! त्वं तूपदेशयोग्यः, यथा तव संदेहो जातस्तथा न मया मोक्षसाधनत्वेन परस्परनिरपेक्षत्वेन ज्ञानकर्मात्मिके द्वेनिष्ठे एकाधिकार्य्युद्देशेनाभिहिते, किन्तु एकस्याप्यधिकार–

अर्जुनको प्रश्नको भगवान् उत्तर दिनुहुन्छ–हे पापरहित अर्जुन! (पापरहित भन्नुको आशय यो हो कि तिमी उपदेशको योग्य छौ।) जस्तो तिमीले शंका गरेका छौ त्यस्तो कुरा केहि पनि छैन। मैले ज्ञाननिष्ठा र कर्मनिष्ठालाई मोक्षको साधनमा परस्पर निरपेक्ष अर्थात् बिना सम्बन्धकै भनेको होईन। र यही कुरा एउटा मनुष्यको लागि

भेदेनांगांगिभावेन निष्ठाद्वयमुक्तमिति विविच्य दर्शयति–लोक इति। नानाविधेऽपि अस्मिन् लोके जने मुमुक्षुजनोद्देशेन द्विविधा द्विप्रकारा ज्ञानकर्मात्मिका निष्ठा मत्प्राप्तिसाधनलक्षणा स्थितिर्यथाधिकारमसंकीर्णा पुरा पूर्वाध्याये मयोक्ता 'एषा तेऽभिहिता सांख्ये बुद्धिर्योगे त्विमां शृणु' इत्यादिना । अधिकारभेदमेव दर्शयति–ज्ञानेति। सम्यक्ख्यायते आत्मतत्वमनयेति संख्या बुद्धिस्तन्निष्ठाः सांख्यास्तेषां यथाऽधिकारमनभिहितफलकैरीश्वराराधनभूतैः कर्मभिः शुद्धान्तःकरणानां ज्ञानयोगेन स्थितप्रज्ञता लक्षणा निष्ठोक्ता। 'तानि सर्वाणि संयम्य युक्त आसीत् मत्परः'। इत्यादिना। योगिनां पूर्वमननुष्ठितानभिसंहितफलकर्मणामशुद्धान्तः करणानां मुमुक्षूणामुक्तसांख्यनिष्ठामारुरुक्षूणाम् अन्तःकरणशुद्धिद्वारा स्थितप्रज्ञतालक्षणज्ञानारूढताप्राप्त्यर्थं योगो निष्कामकर्मानुष्ठानं तद्वतां योगिनां कर्मयोगेन 'कर्मण्येवाधिकारस्ते' इत्यादिना निष्ठा स्थितिरुक्ता। 'तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेन इति श्रुतेः कर्मणां विविदिषायां विनियोगात्। न चैषोधिकारभेदोऽनुष्ठातृपुरुषभेद एव नियत इति शङ्कनीयम्, एकस्यापि पुरुषस्यावस्थाभेदेनाधिकारभेदस्य संभवात। तथाहि 'अविद्यया मृत्युं तीर्त्वा विद्ययाऽमृमश्नुते। अविद्या कर्मसंज्ञाऽन्या तृतीया शक्तिरिष्यते।' इति श्रुतिस्मृत्यभिहिताविद्याशब्दवाच्येन कर्मणा पुरुषो मृत्युं प्रमादं तीर्त्वा तत्कारणमन्तःकरणमलं विधूय विद्ययाऽमृतं मोक्षमश्नुते प्राप्नोति इति श्रुत्यर्थानुसारेण मुमुक्षायां जातायां पुरुषो न सहसा ज्ञानेऽधिकरोति। अपितु निष्कामकर्मानुष्ठानेनान्तःकरणशुद्धिद्वारेणैवेति भगवता–निष्ठाद्वयमुपदिष्टम्। यस्य तु कर्मानुष्ठानं विनैवेह जन्मन्युक्तलक्षणं ज्ञानं जायेत तस्य जन्मान्तरानुष्ठितनिष्कामकर्मभिरन्तःकरणशुद्धिः अनुमेयेति नोक्तव्यवस्थायां कश्चिद्विरोधः।

पनि अधिकारी भेदले यी दुबै निष्ठाहरू अंगाङ्गी सम्बन्धवाला हुन्। यसै कुरालाई अधिक स्पष्ट गरेर भगवान् अब अगाडि भन्नुहुन्छ–

पछि गएको दोस्रो अध्यायमा 'एषातेऽभिहिता०' इत्यादि श्लोकहरू द्वारा मैले यो भनेको थिएँ कि यस नानाभाँति मनुष्यभएको संसारमा मुमुक्षुहरूका लागि दुई प्रकारको निष्ठा हुन्छन्। एउटा ज्ञाननिष्ठा र अर्को कर्मनिष्ठा। यी दुबै निष्ठाद्वारा मनुष्य मलाई प्राप्त गर्न सक्दछ। अधिकारी भेदले दुबै पृथक् र अमिश्रित हुन्। (अब अधिकार भेद तल देखाउनु हुन्छ) जुन मुमुक्षुहरूको अन्तःकरण यथाधिकार निष्काम ईश्वराराधनरूप कर्मले शुद्ध भएको छ, यस कारण जसको आत्मतत्त्वविषयिणी बुद्धिमा निष्ठा छ, यस्ता सांख्यहरूका लागि ज्ञानयोगद्वारा स्थितप्रज्ञ लक्षणवाला निष्ठा हुनु मैले 'तानि सर्वाणि०' इत्यादि श्लोकहरू द्वारा प्रतिपादन गरें। र जुन मुमुक्षुहरूको अन्तःकरण यस प्रकार शुद्ध भएको छैन, तर माथि भनिएको सांख्यनिष्ठा को पथको पथिक र मुमुक्षु छन्, उनीहरूको लागि अन्तःकरणको शुद्धि द्वारा स्थितप्रज्ञता लक्षण ज्ञानको मार्गमा हिंड्नको लागि मैले 'कर्मण्येवाधिकारस्ते'० इत्यादि श्लोकहले कर्मयोग को निष्ठा प्रतिपादन गरे। श्रुतिमा पनि भगवान्लाई जान्ने योग्यता उत्पन्न गर्ने कर्मको उपयोगिता भनिएको छ। जस्तै–

'तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेन' अर्थात् वेदाध्ययन यज्ञ, तप, दान र उपवासले ब्राह्मण त्यस ब्रह्मलाई जान्ने इच्छा गर्दछन् । यहाँ यस्तो शंका गर्नु हुँदैन कि अधिकार भेदले अधिकारीको भेद अवश्य नै हुन्छ, किनकी एउटा नै मनुष्य अवस्था भेदले ज्ञान र कर्म दुबैको अधिकारी हुन सक्दछ, अर्थात् एक नै मनुष्य पहिले कर्मयोगी भएर, जब निष्कामले त्यसको अन्तःकरण शुद्ध हुन्छ भने ज्ञानयोगको अधिकारी बन्न सक्दछ। फेरि स्मृतिमा पनि भनेको छ–

'अविद्यया ............. शक्तिरिष्यते।'

पुरुष अविद्या अर्थात् कर्मद्वारा मृत्यु नामको प्रमादलाई पार गरेर विद्याले अमृत् अर्थात् मोक्षलाई प्राप्त गर्दछ। अविद्याको नै नाम कर्म हो, र यसलाई तेस्रो शक्ति भन्दछन्।(परा र अपरा यी दुई शक्तिहरू हुन्।) यस श्रुतिस्मृतिद्वारा कथित अविद्या अर्थात् कर्मद्वारा मनुष्य प्रमादलाई पार गरेर (त्यसको अन्तःकरणको मललाई धोएर) विद्याद्वारा मोक्षलाई प्राप्त गर्दछन्।

यसले यो प्रमाणित हुन्छ कि मुमुक्षु पुरुष सहसा ज्ञानको अधिकारी हुन सक्दैन। किन्तु निष्काम कर्मको द्वारा अन्तःकरणको शुद्धि प्राप्त गरेर मात्र ज्ञानको अधिकारी हुन सक्दछ। जुन पुरुषलाई कर्मको अनुष्ठान बिना नै उक्त प्रकारको ज्ञान प्राप्त हुनजान्छ, संझिनु पर्दछ कि त्यसले पूर्व जन्ममा निष्काम कर्म गरेर अन्तःकरण को शुद्धि गरिसकेको रहेछ॥३॥

–★–★–★–

**न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते ।**
**न च सन्न्यसनादेव सिद्धिं समधिगच्छति ॥**

**मनुष्य न त आरम्भ नगरिकन निष्कर्मतालाई यानी योगनिष्ठामा प्राप्त हुन्छन् र न कर्मको केवल त्यागमात्रले सिद्धि यानी सांख्यनिष्ठामा नै प्राप्त हुन्छन् ॥४॥**

कर्मणां ज्ञानार्थे विनियोग इत्युक्तं तदभावे न ज्ञानप्राप्तिरित्याह– न कर्मणामिति। स्वस्ववर्णा श्रमोचितभगवदाज्ञापाल–नात्मककर्मणामनारम्भादकरणान्नैष्कर्म्यं कर्मराहित्यं ज्ञानं पुरुषो नाश्नुते न प्राप्नोति। ननु 'एतमेव लोकमिच्दन्तः प्रव्रजन्ती'ति श्रुतेः सर्वकर्मसंन्यासादेव मोक्षाभिधानात्किं कर्मभिरित्यत आह–न चेति। चित्तशुद्ध्यभावेन ज्ञानं विना कृतात्केवलात्संन्यासात्सिद्धिं मोक्षं न च समाधिगच्छति प्राप्नोति। लोके संन्यासीति प्रथामात्रप्राप्तावपि न संन्यासफलभाग्भवतीत्यर्थः।

कर्मको उपयोग ज्ञानप्राप्तिको लागि हो, यस्तो पूर्वश्लोक मा भनेर अब यो भन्नुहुन्छ कि कर्म नगर्दा ज्ञान प्राप्ति हुन सक्दैन।

भगवदाज्ञा संझेर आ–आफ्नो वर्णाश्रमको कर्म(वर्ण अनुसारको कर्म) नगर्नाले मनुष्य, कर्मबाट राहित्य अर्थात् ज्ञान प्राप्त गर्न सक्दैन। तर श्रुतिमा भनेको छ–'एतमेव लोकमिच्छन् प्रव्रजन्ति' अर्थात् परब्रह्मको लोकको इच्छा गर्नेहरू सबै कर्महरूलाई पूर्णरूपमा त्यागि दिन्छन्। यस प्रकार जब सबै कर्महरूको त्यागलाई नै श्रुतिले मोक्ष को कारण भन्यो भने फेरि कर्म गर्नु सँग के प्रयोजन? यसको उत्तर यहाँ दिनुहुन्छ कि चित्तशुद्धिको अभावमा ज्ञान हुँदैन र ज्ञानको विना केवल संन्यासले सिद्धि अर्थात् मोक्ष कोही प्राप्त गर्न सक्दैन। संसारमा नाममात्र को संन्यासी कहलाएर, यस्तो अशुद्ध अन्तःकरणवाला पुरुष संन्यासको फलको अधिकारी हुन सक्दैन॥४॥

–★–★–★–

**न हि कश्चित्क्षणमपि जातु तिष्ठत्यकर्मकृत्।**
**कार्यते ह्यवशः कर्म सर्वः प्रकृतिजैर्गुणैः॥**

**निःसन्देह कुनै पनि मनुष्य कुनै पनि बेला क्षणमात्र पनि कर्म नगरीकन रहनसक्दैन; किनकी सारा मनुष्यसमुदाय प्रकृतिजनित गुणहरूद्वारा परवश भई कर्म गर्नको लागि बाध्य गरिन्छ॥५॥**

तस्य फलपर्यवसायित्वं दूरे तिष्ठतु तावत्सर्वकर्मसंन्यास–एवाशक्य इत्याह नहीतिति जातु कदाचित् कश्चिदपि मूर्खो ज्ञानी वा क्षणमपि अकर्मकृत्कर्माकुर्वाणो न हि तिष्ठति। हीत्यवधारणे। नैव तिष्ठति। अपि तु वैदिकं लौकिकं वा कर्मकुर्वन्नेव तिष्ठतीत्यर्थः। हि यतोऽवशः यावत्स्थूल–सूक्ष्मदेहहेतुभूतकर्मास्ति तावत्प्रकृतिवशगस्तस्मात्प्रकृतिजैः सर्वजगद्धेतुप्रकृतिसमुद्भवैः सत्वादिभिर्गुणैः सर्वोऽपि जनः कर्म कार्य्यते। बलात्कर्मणि नियुज्यते। तस्मान्मुमुक्षुणा ज्ञानप्रतिबंधकपापक्षयार्थं स्वोचितः कर्मयोग एवानुष्ठेयः।

संन्यासको फल मिल्नु त टाढैको कुरा भयो, पहिले सबै कर्मलाई छोड्नु नै असम्भव छ। यसै अभिप्रायलाई यस प्रकार भन्नुहुन्छ–

मूर्ख या ज्ञानी कुनै पनि कहिल्यै पनि एकछिनको लागि कर्म नगरिकन बस्न सक्दैन। अर्थात् वैदिक अथवा लौकिक कर्म त्यो अवश्य गर्ने नै छ। किनकी त्यो अवश(बन्धन)मा छ। अर्थात् जब सम्म स्थूल र सूक्ष्म शरीरको कारणरूप कर्म हुन्छन् तब सम्म त्यो प्रकृतिको अधीनमा छ। यसैले प्रकृतिद्वारा उत्पन्न सत्त्व, रज र तमोगुण यी सबै सँग जबर्जस्ति कर्म गराउँदछन्। यसैले मुमुक्षुहरूको ज्ञान प्राप्तिमा प्रतिबन्धक(रोकावट गर्ने) पापहरूको नाशका लागि आफ्नो वर्ण र आश्रमको उचित कर्मलाई जरूर गर्नु पर्दछ॥५॥

–★–★–★–

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

**कर्मेन्द्रियाणि संयम्य य आस्ते मनसा स्मरन्।**
**इन्द्रियार्थान्विमूढात्मा मिथ्याचारः स उच्यते॥**

**जो मूढ़बुद्धि मनुष्य सबै इन्द्रियहरूलाई हठपूर्वक माथिबाट रोके जस्तो गरेर मनले ती इन्द्रियहरूको विषयलाई चिन्तन गरिरहन्छ, त्यसलाई मिथ्याचारी अर्थात् दम्भी भनिन्छ॥६॥**

ननु कर्मणः कर्मेन्द्रियाधीनत्वात् तन्नियमने कर्म कथं स्यादिति चेत्तत्राह–कर्मेन्द्रियाणीति। यो विमुढात्मा अनादिविषयवासनया मलीमसत्वेनऽऽत्मतत्त्वस्मरणा–नर्हतया विषयासक्तमनाः कर्मेन्द्रियाणि संयम्य, मनसा इन्द्रियार्थान्विषयान् स्मरन्नास्ते, स मिथ्याचार उच्यते। निष्कामकर्मानुष्ठानं विनाऽनादिपापानिवृत्त्या मनसो विषयासंगोऽवर्जनीय इति भावः। तस्मात्परमार्थोप–योगित्वाभावात् सर्वकर्मसंन्यास्यहमिति लोके दर्शयितुं मिथ्या वृथैव कर्मेन्द्रियसंयमरूपाचारो यस्य स तथाउच्यते। शास्त्रविद्भिरिति शेषः।

यहाँ यो शंका हुन सक्दछ कि कर्म कर्मेन्द्रियहरूका आधीन छन्, तब इन्द्रियहरूको नियम न भएको ले कर्म कसरी सम्भव छ? यस शंकाको उत्तर भगवान् यस प्रकार दिनुहुन्छ। यथा– अनादि विषयवासनाद्वारा उत्पन्न मलिनताको कारण आत्मतत्त्वको विचार गर्न अयोग्य र यस कारण विषयहरूमा आसक्त जुन मनुष्य कर्मेन्द्रियहरूको नियमन गरेर मनले विषयहरूको स्मरण गरिरहन्छ, त्यस मनुष्यलाई शास्त्रलाई जान्नेहरू मिथ्याचारी(ढोंगी) भन्दछन्। उपर्युक्त कथनको तात्पर्य यो हो कि निष्काम कर्मको अनुष्ठान बिना अनादि पापको निवृत्ति हुँदैन, र यस निवृत्तिको बिना मनको विषयसँग बाट छुटकारा हुँदैन। यसैले सबै कर्महरूको बनावटी संन्यास(त्याग) मोक्ष दिनेवाला हुन सक्दैन। यस्ता संन्यासी निरर्थक संन्यासको ढोंग देखाउँदछन् र त्यसका कर्मेन्द्रिहरूको संयमरूप आचार पनि व्यर्थ हो॥६॥

–★–★–★–

**यस्त्विन्द्रियाणि मनसा नियम्यारभतेऽर्जुन।**
**कर्मेन्द्रियैः कर्मयोगमसक्तः स विशिष्यते॥**

**तर हे अर्जुन! जुन पुरुष मनले इन्द्रियहरूलाई वशमा गरेर अनासक्त भई सबै इन्द्रियहरूद्वारा कर्मयोगको आचरण गर्दछ भने त्यही श्रेष्ठ हो॥७॥**

तस्माद्विषयासक्तिशून्यः कर्मकर्त्ताऽपि ततः श्रेष्ठ इत्याह–यस्त्विति। तु शब्दः पूर्वोक्तसंन्यासिनो वैलक्षण्यद्योतनार्थः। इन्द्रियाणि ज्ञानेन्द्रियाणि श्रोत्रादीनि आत्मस्मरणयोग्येन विषयविमुक्तेन मनसा नियम्य वशीकृत्य कर्मेन्द्रियैः वाक्पाणिपादादिभिः कर्मयोगमसक्तः फलाभिसन्धिरहितः सन् य आरभते स क्रमेण महच्छ्रेयोयोग्यत्वाद्विशिष्यते श्रेष्ठो भवति॥७॥

यस कारण यस्ता मिथ्याचारी संन्यासीभन्दा विषयासक्तिले शून्य कर्म गर्नेवाला श्रेष्ठ हो। श्रीभगवान् यही भाव यहाँ प्रकट गर्नुहुन्छ–

श्लोकमा 'तु' शब्दको प्रयोगले बनावटी संन्यासी भन्दा यस प्रकारका कर्मयोगीहरूको विलक्षणता बताउनु नै अभीष्ट हो। आँखा, कान, नाक इत्यादि ज्ञानेन्द्रियहरूलाई आत्मचिन्तनको योग्य र विषयहरूबाट रहित, मनद्वारा वश गरेर वाणी तथा हात–गोडा इत्यादि कर्मेन्द्रियहरूबाट जो , कर्मको फल को आशाले शून्य भएर कर्महरूलाई गर्दछ त्यो क्रमैले मोक्षको योग्यता प्राप्त गर्दछ। यसैले यस्ता पुरुष पूर्वकथित बनावटी संन्यासी भन्दा कहीं धेरै श्रेष्ठ हो॥७॥

–★–★–★–

**नियतं कुरु कर्म त्वं कर्म ज्यायो ह्यकर्मणः।**
**शरीरयात्रापि च ते न प्रसिद्ध्येदकर्मणः॥**

**तिमी शास्त्रविहित कर्तव्यकर्म गर; किनकी कर्म नगर्नु भन्दा कर्म गर्नु नै श्रेष्ठ छ तथा कर्म नगर्दा**

**तिम्रो शरीर-निर्वाह पनि त सिद्ध हुँदैन (बाँच्नुको अर्थ हुँदैन) ॥८॥**

पूर्वोक्तयत्तच्छब्दाभ्यामन्यपर एवायमुपदेश इति न मन्तव्यमित्याह–नियतमिति। मोहलिंगेन पूर्वमकृत–निष्कामकर्मा त्वं नियतं नित्यकर्त्तव्यतया विहितं स्नान–संध्योपासनतर्पणादिकं कर्म कुरु। हि यस्मादकर्मणः कर्माकरणात्कर्म ज्यायः प्रशस्यं पापक्षयहेतुत्वात्। न केवलं प्रशस्यतरया कर्त्तव्यमपि तु अकर्मणः सर्वकर्मरहितस्य तव शरीरयात्रा देहनिर्वाहोऽपि न प्रकर्षेण सिद्ध्येत्कुतोऽन्यदिति अपि शब्दार्थः ॥८॥

हे अर्जुन! तिम्रो मोह बाट यो थाहा हुन्छ कि तिमीले पूर्वमा निष्काम कर्म गरेको रहेनछौ। तिमी नियत अर्थात् शास्त्रद्वारा विहित नित्य कर्म यथा स्नान, संन्ध्योपासना, तर्पणादि कर्महरूलाई गर, किनकी कर्म नगर्नु भन्दा कर्म गर्नु नै श्रेष्ठ हो। कारण कि नित्यकर्महरूलाई नगर्नाले पाप लाग्दछ र नित्यकर्मलाई गर्नाले विधिलंघनरूप पापको क्षय हुन्छ। कर्म नगर्नुभन्दा कर्म गर्नु श्रेष्ठ हो, केवल यसैले गर्नुपर्दछ त्यो कुरा होईन। यसको अरु पनि कारणहरू छन्। त्यो यो हो कि कर्म नगर्नाले शरीरयात्रा(जीविका) पनि राम्रो सँग चल्दैन भने अरु त टाढैको कुरा भयो॥८॥

–★–★–★–

## यज्ञार्थात्कर्मणोऽन्यत्र लोकोऽयं कर्मबन्धनः।
## तदर्थं कर्म कौन्तेय मुक्तसङ्गः समाचर॥

**यज्ञको निमित्त गरिने कर्महरूका अतिरिक्त अर्को कर्महरूमा लागेरै यो मनुष्यसमुदाय कर्महरूबाट बाँधिन्छ । यसैले हे अर्जुन! तिमी आसक्तिले रहित भएर त्यस यज्ञको निमित्त सम्पूर्णरूपले कर्तव्यकर्म गर॥९॥**

ननु 'ज्ञात्वा देवं मुच्यते सर्वपाशैरि'ति श्रुतेः 'कर्मणा वध्यते जन्तुरि'ति स्मृतेश्च सर्वकर्मणा बन्धनत्वाभिधानात्कथं मां तत्रैव प्रवर्त्तयसीति विवक्षुं मत्वाऽऽह–यज्ञार्थादिति। यज्ञो विष्णुः 'यज्ञो वै विष्णुरि'ति श्रुतेः तदर्थ तदाराधनं तदाज्ञापालनात्मकं यत्कर्म ततोऽन्यत्र कर्मणि प्रवृत्तोऽयं लोकः कर्माधिकारी जनः कर्मबन्धन कर्मैव बन्धनं यस्य स तथा कर्मणा बध्यते इत्यर्थः अतस्तदर्थ विष्णुप्रीत्यर्थं कर्म हे कौन्तेय! मुक्तसंगः फलसंकल्परहितः सन् सम्यग्विधिश्रद्धापूर्वकमाचर॥९॥

श्रुतिमा भनिएको छ कि–'ज्ञात्वादेवं मुच्यते सर्वपाशैः' अर्थात् मनुष्य, देव नामक परब्रह्मलाई जानेर सबै बन्धनहरूबाट मुक्त हुनजान्छ। फेरि स्मृतिमा भनेको छ– 'कर्मणाबध्यते जन्तुः' अर्थात् कर्महरू ले नै जीव बाँधिन्छ। यी सबै वाक्यहरूले कर्म बन्धनरूप भनिएको छ। तब मलाई त्यही कर्ममा किन लगाउनु हुन्छ? अर्जुनको यस शंकाको उत्तर भगवान् यस प्रकार दिनुहुन्छ–श्रुतिमा भनिएको छ कि 'यज्ञोवै विष्णुः' अर्थात् विष्णु नै यज्ञ हुन्। यज्ञको अर्थ अर्थात् विष्णुको लागि उनको आराधनारूप र उनको आज्ञापालनरूप कर्मको अतिरिक्त अन्य कर्ममा प्रवृत्त मान्छेहरूको कर्म बन्धनरूप हुन्छ। अर्थात् यस्तो नै कर्मले मनुष्य बन्धनमा पर्दछन्। यसैले हे अर्जुन! तिमी फलसंकल्पले रहित होऊ, श्रद्धा र विधिपूर्वक, विष्णुको प्रीतिको लागि कर्महरू गर॥९॥

–★–★–★–

## सहयज्ञाः प्रजाः सृष्ट्वा पुरोवाच प्रजापतिः।
## अनेन प्रसविष्यध्वमेष वोऽस्त्विष्टकामधुक्॥

**प्रजापति ब्रह्माले कल्पको आदिमा यज्ञसहित प्रजाहरूलाई रचेर उनीहरूसँग भने कि तिमीहरू यस यज्ञको द्वारा वृद्धिलाई प्राप्त गर र यो यज्ञ तिमीहरूको इच्छित भोग प्रदानगर्ने होओस॥१०॥**

एवं मुमुक्षुणा ज्ञानलाभाय विष्णुप्रीत्यर्थं तदाराधनात्मकं निष्कामकर्मकर्त्तव्यमित्युक्तमिदानीं विष्णवाराधनरूपं कर्म स्वभक्तायैवोपदिशामि, न तु सर्वजनेभ्यः। यतो मद्भक्तेतरे

ज्ञानप्राप्तिको लागि मुमुक्षुहरूलाई विष्णुप्रीत्यर्थ विष्णुको आराधनरूप निष्कामकर्म गर्नु पर्दछ। यस्तो भनेर भगवान् अब यो भन्नुहुन्छ कि यो उपदेश सबैको लागि होईन, केवल मेरा भक्तहरूका लागि हो। यसको कारण यो हो कि ब्रह्माले मेरा भक्तहरूका

सर्वे जनाः सृष्टिवृद्धये प्रजापतिना विष्णिवतरदेवताऽऽराधने काम्ये कर्मणि नियुक्ता इति ज्ञापनाय प्रजाः प्रति तन्नियोगमाह–सहयज्ञा इति चतुर्भिः। सहयज्ञा यज्ञसाधनद्रव्यक्रियाकलापसहिताः प्रजाः ब्राह्मणादित्रिवर्णान् पुरा सर्गकाले कल्पादौ सृष्ट्वा प्रजापतिब्रह्मोवाच। किं ? तदाह। अनेन यज्ञेन यथावर्णाश्रमोचितविधिश्रद्धायुक्तेन प्रसविष्यध्वं प्रसवो वृद्धिः उत्तरोत्तरामभिवृद्धिं लभध्वमित्यर्थः। अनेन कथं वृद्धिः स्यादत आह– एष यज्ञो वो युष्माकमिष्टकामधुगस्तु। इष्टानभीष्टान्कामान्दोग्धीति तथा ऐहिकामुष्मिकाभीष्टभोगप्रदोऽस्त्वित्यर्थः। इहेत्थं काम्य कर्मणि नियोगः प्रलोभनं चोक्तसंगत्यैवं संगच्छते। अन्यथा–'न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते, असक्तः स विशिष्यते, मुक्तसंगः समाचरे'ति प्रकृतनिष्कामकर्मोपदेश विरोधात्। 'यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः। आत्मन्येव च संतुष्टस्तस्य कार्यं न विद्यते। असक्तो ह्याचरन्कर्म परमाप्नोति पुरुष' इत्यादिवक्ष्यमाणात्मरतस्य कर्मनिरपेक्षत्वोक्तेरनासक्त्या चरतो मोक्षफलोक्तेर्जनकादिनिदर्शनाच्चासंगतं स्यादित्यलं विस्तरेण॥१०॥

अतिरिक्त अरु मनुष्यलाई सृष्टिको वृद्धिका लागि, विष्णु भन्दा इतर अन्य देवताहरूको आराधनरूप काम्यकर्ममा लगाउनुभयो। यसै कुरालाई स्पष्ट गर्नका लागि प्रजाका पति ब्रह्माको जुन आज्ञा भयो त्यसको वर्णन चार श्लोकहरूमा छ- कल्पको आरम्भमा जब सृष्टि भयो तब ब्रह्माले यज्ञको साधन, द्रव्य र क्रियाकलापहरूका साथ ब्राह्मणादि तीनै वर्णहरूलाई उत्पन्न गरेर यो उपदेश दिनुभयो कि तिमीहरू यस यज्ञद्वारा अर्थात् आ-आफ्नो वर्णाश्रमधर्मको अनुकूल विधि र श्रद्धायुक्त भएर कर्म गर्दै उत्तरोत्तर वृद्धिलाई प्राप्त होऊ(यज्ञबाट वृद्धि कसरी हुन्छ यो अगाडी बताउनु हुन्छ) र यो यज्ञ तिमीहरूलाई इच्छित पदार्थ दिनेवाला होस, अर्थात् यो यज्ञ लोकमा र परलोकमा तिमीहरूलाई अभीष्ट भोग प्रदान गरोस। यहाँ काम्यकर्ममा नियोग र यसको लागि प्रलोभन माथि भनिएको विष्णुभक्त भन्दा इतर मनुष्यहरूका लागि मात्र हो। होईन भने त भगवान् ले जुन निष्कामकर्मको उपदेश गर्नुभएको छ, त्यो सँग विरोध हुन जान्छ। यथा–'न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते, असक्तः स विशिष्यते, मुक्तसंगः समाचर' फेरि अगाडिको अध्यायमा पनि तल लेखिएको श्लोकहरूद्वारा भगवान्ले आत्मामा रत पुरुषहरूलाई कर्मका विषयमा निरपेक्ष भन्नुभएको छ। र आसक्तिहीन भएर कर्महरू गर्नु मोक्षको कारण भन्नुभएको छ। यस भन्दा माथि लेखिएको प्रजापतिको उपदेश केवल विष्णुभक्त भन्दा इतर सांसारिक विषयसुखको वासनावाला मान्छेको लागि नै हो। यस्तो नमाने मा तल लेखिएको श्लोकहरू सँग विरोध हुनेछ। यथा–'यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः। आत्मन्येव च संतुष्टस्तस्य कार्यं न विद्यते। असक्तो ह्याचरन्कर्म परमाप्नोति पूरुषः'॥१०॥

–★–★–★–

## देवान्भावयतानेन ते देवा भावयन्तु वः ।
## परस्परं भावयन्तः श्रेयः परमवाप्स्यथ ॥

**तिमीहरू यस यज्ञको द्वारा देउताहरूलाई उन्नत गर र ती देउताहरू तिमीहरूलाई उन्नत गरून्। यस प्रकार निःस्वार्थभावले एक-अर्कालाई उन्नत गर्दै तिमीहरू कल्याणलाई प्राप्त गर्नेछौ(तिमीहरूको कल्याण हुनेछ)॥११॥**

कथमयमिष्टकामधुक् स्यादित्यपेक्षायामाह–देवानिति। अनेन यज्ञेन यूयं देवानिन्द्रादीन्भावयत हविर्भागे वर्द्धयत। ते देवा वर्धिताः सन्तो वो युष्मान्भावयन्तु वृष्ट्याऽन्नोत्पत्तिद्वारेण धनसंततिदानेन वर्द्धयन्तु। एवं परस्परं अन्योन्यं भावयन्तो यूयं देवाश्च परं श्रेयोऽभिमतार्थं प्राप्स्यथ॥११॥

यज्ञ अभिलषित पदार्थलाई दिनेवाला कसरी हुन्छ, यसलाई भन्नुहुन्छ-

यस यज्ञद्वारा तिमीहरू इन्द्रादि देवताहरूको उपकार गर अर्थात् हवि प्रदान गरेर उनीहरूको वृद्धि गर। र ती देवताहरू पनि उपकारवर्द्धित भएर तिम्रो उपकार गरुन्, अर्थात् वर्षा प्रदान गरेर अन्न उब्जाउन र धन-सन्तान आदि दिएर तिमीलाई बढाउन्। यस प्रकार एक अर्काको भलाई गर्दै तिमीहरू र देवताहरू आफ्नो-आफ्नो परम श्रेय अर्थात् इच्छित फल पाउने छौ॥११॥

–★–★–★–

**इष्टान्भोगान्हि वो देवा दास्यन्ते यज्ञभाविताः।**
**तैर्दत्तानप्रदायैभ्यो यो भुङ्क्ते स्तेन एव सः॥**

**यज्ञको द्वारा पुष्ट भएका भएका देउताहरू तिमीहरूलाई नमागिकनै इच्छित भोगहरू निश्चयनै दिईरहनेछन्। यस प्रकार ती देउताहरूद्वारा दिईएको भोगलाई जुन पुरुष देउताहरूलाई नदिई स्वयं भोग गर्दछ, त्यो चोर नै हो॥१२॥**

उक्तार्थं दृढीकुर्वंस्तस्याकर्तुर्दोषमाह इष्टानिति। यज्ञैर्भाविता देवा युष्मभ्यमिष्टान्भोगान्हि निश्चितं दास्यन्ते। यस्तैर्देवैर्दतान्भोगानेभ्यो देवेभ्योऽप्रदाय बलिवैश्वदेवाग्नि-होत्राद्यकरणेनादत्त्वा यो भुंक्ते स स्तेन एव, स चौरवद् दण्ड्य इति भावः॥१२॥

माथि भनिएको कुरा लाई दृढ गर्नका लागि त्यस्तो नगर्नमा दोष देखाउनु हुन्छ- यज्ञबाट सन्तुष्ट भएर देवताहरू तिम्रो अभिलषित भोगहरूलाई जरुर दिनेछन्। जो यी देउताहरूद्वारा दिईएको भोगहरूलाई उनीहरूलाई समर्पण नगरिकन अर्थात् बिना बलिवैश्वदेव अग्निहोत्र इत्यादि कै भोग्दछ त्यो चोर हो, र चोरको समान दण्डनीय हुन्छ॥१२॥

-★-★-★-

**यज्ञशिष्टाशिनः सन्तो मुच्यन्ते सर्वकिल्बिषैः।**
**भुञ्जते ते त्वघं पापा ये पचन्त्यात्मकारणात्॥**

**यज्ञमा बचेको अन्न खाने श्रेष्ठ पुरुष सबै पापहरूबाट मुक्त हुन्छन् र जुन पापी आफ्नो शरीर-पोषण गर्नको लागि मात्रै अन्न पकाउँदछन्, तिनीहरू त केवल पापमात्रै खान्छन्॥१३॥**

तस्माद्देवार्चानुभोजिनो निर्दोषा इत्याह-यज्ञशिष्टाशिन इति। यज्ञशिष्टं देवर्षिभुताद्यर्चनाख्यपञ्चमहायज्ञावशिष्टमन्नं येऽश्नन्ति ते सन्तः सदाचाराः सर्वकिल्विषैर्विहिताकरणा-विहितकरणजैः स्वर्गप्रतिबन्धकैः पञ्चसूनोद्भवैमुच्यन्ते। पञ्च यज्ञास्तु-'पाठो होमश्चातिथीनां सपर्या तर्पणं बलिः। अमी पंच महायज्ञा ब्रह्मयज्ञादिनामका॥' इत्युक्ताः। पञ्चसूनाश्च 'कण्डनी पेषणी चूल्ली उदकुम्भी च मार्जनी। पञ्चसूना गृहस्थस्य ताभिः स्वर्गं न विदन्ति। पञ्चसूनाकृतं पापं पञ्चयज्ञैर्व्यपोहती' ति स्मृत्युक्ताः। येत्वात्मकारणात् आत्मनः स्वस्य भोजनार्थं पचन्ति, न तु देवाद्यर्थं, ते पापाः पापाचारा अघं पञ्चसूनानिमित्तं विध युपेक्षादिनिमित्तं च पापं भुञ्जते प्राप्नुवन्ति। एवं जगत्प्रवृत्त्यधिकारिणः कर्मकरणाकरणयोर्हेतुना

यसैले देवार्चनको पश्चात् भोजन गर्नेहरू निर्दोष हुन्छन्। यसै आशयलाई अब सविस्तार भन्नुहुन्छ-
देउता, ऋषि, भूतादिको अर्चनरूप जुन पञ्च महायज्ञ छन्, ती यज्ञहरूबाट बचेको अन्नको जुन पुरुष भोजन गर्दछन्, ती सदाचारी मनुष्य विहित कर्महरूलाई नगरेको र अविहित कर्म गरेर उत्पन्न स्वर्गप्राप्तिमा रोकावट हाल्ने पापहरूबाट बिल्कुल मुक्त हुनजान्छन्। यी पाप पञ्चसूनाबाट उत्पन्न हुन्छन्। ती पञ्चसूना हुन्- 'कण्डनी पेषणी..........पञ्चयज्ञैर्व्यपोहती' अर्थात् ओखलमा कुट्नु, जाँतोमा पिस्नु, चुल्होमा पकाउनु, धुनु र बढार्नु यी पाँच पाप गृहस्थबाट हुन्छन्। यसको कारण ती स्वर्गमा जान सक्दैनन्। उक्त पञ्चसूनाद्वारा गरिएको पाँच पाप, पाँच महायज्ञबाट नष्ट हुन्छन्। पञ्चमहायज्ञ यी हुन्-'पाठो ....ब्रह्मयज्ञादिनामकाः॥' अर्थात् वेदपाठ, होम, अतिथि सेवा, तर्पण र बलि यीनै पाँच ब्रह्मयज्ञादि नाम भएका महायज्ञ हुन्। परन्तु जो आफ्नो लागि नै भोजन बनाउँदछन्, देवताहरूको लागि होईन, ती पापाचारी पंचसूना र विधिको उपेक्षा गर्नेकारण पापको भागी हुन्छन्॥१३॥

-★-★-★-

**अन्नाद्भवन्ति भूतानि पर्जन्यादन्नसम्भवः।**
**यज्ञाद्भवति पर्जन्यो यज्ञः कर्मसमुद्भवः॥**

**सम्पूर्ण प्राणी अन्नबाट उत्पन्न हुन्छन्, अन्नको उत्पत्ति वृष्टिबाट हुन्छ, वृष्टि यज्ञबाट हुन्छ र यज्ञ विहित कर्महरूबाट उत्पन्न हुन्छ॥१४॥**

गुणदोषौ दर्शयित्वा पुनः तस्यैव कर्माकरणे हेत्वन्तरेण

जगत् मा प्रवृत्तिको अधिकारी पुरुषहरूलाई कर्म नगर्नुको र गर्नु

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

दोषमाह–अन्नादिति त्रिभिः। भुक्तादन्नाद्रजोरेतोरूपेण परिणतानि सजीवानि शरीराणि भवन्ति उत्पद्यन्ते। पर्जन्याद्वृष्टेरन्नस्य संभवः प्रसिद्धः। पर्ज्जन्यो यज्ञाद्भवतीति शास्त्रेण ज्ञायते। यज्ञश्च समिदाज्यादिद्रव्यस्य मंत्रपुरःसरमग्नौ प्रक्षेपणादिरूपकर्तृव्यापाररूपात्कर्मणः समुद्भवति इति सर्वं विलोमेनाह मनुः 'अग्नौ प्रस्ताऽऽहुतिः सम्यगादित्यमुपतिष्ठति। आदित्याज्जायते वृष्टिर्वृष्टेरन्नं ततः प्रजाः।' इति।

को गुण देखाएर फेरि अब अर्को तरिकाले उनीहरूको कर्म नगर्नुको दोष तीन श्लोकहरूमा देखाउनुहुन्छ–

भोजन गरिएको अन्नले रज, वीर्य उत्पन्न भएर जीवको साथ शरीर उत्पन्न हुन्छ। र वृष्टिले अन्न उत्पन्न हुन्छ, यो सबैजना जान्दछन्। बादल या वृष्टि यज्ञद्वारा हुन्छ, यो शास्त्र भन्दछ र यज्ञ काष्ठ, घ्यू आदि द्रव्यलाई अग्निमा मन्त्रको साथमा हवन गर्नाले कर्त्ताको व्यापाररूप कर्मद्वारा उत्पन्न हुन्छ। मनुले पनि उल्टो रीतिले यसै कुरालाई भनेका छन्। यथा– 'अग्नौ प्रस्ताऽऽहुतिः सम्यगादित्यमुपतिष्ठति। आदित्याज्जायते वृष्टिर्वृष्टेरन्नं ततः प्रजाः।' अर्थात् अग्निमा हवन गरिएको आहुति सूर्यलाई पुग्दछ। सूर्यबाट वृष्टि हुन्छ। पुनः वृष्टिबाट अन्न र अन्नबाट प्रजा उत्पन्न हुन्छ॥१४॥

–★–★–★–

## कर्म ब्रह्मोद्भवं विद्धि ब्रह्माक्षरसमुद्भवम्।
## तस्मात्सर्वगतं ब्रह्म नित्यं यज्ञे प्रतिष्ठितम् ॥

**कर्मसमुदायलाई तिमी वेदबाट उत्पन्न र वेदलाई अविनाशी परमात्माबाट उत्पन्न भएको जान्नु। यसबाट सिद्ध हुन्छ कि सर्वव्यापी परम अक्षर परमात्मा सदा नै यज्ञमा प्रतिष्ठित छ॥१५॥**

यज्ञहेतुभूतं कर्मब्रह्मोद्भवं विद्धि। अत्र ब्रह्मशब्देन प्रकृतिपरिणामरूप शरीरं विविक्षितं 'तदेतद्ब्रह्म नामरूपमन्नं च जायते' इतिश्रुतौ ब्रह्मशब्देन प्रकृतिर्निर्दिष्टा, इहापि चतुर्दशाध्याये वक्ष्यते। 'मम योनिर्महद्ब्रह्मे'ति। अतो ब्रह्मशब्दनिर्दिष्टप्रकृतिपरिणामरूपशरीरोद्भवं कर्मेति युक्तम् 'कार्यकारणकर्तृत्वे हेतुः प्रकृतिरुच्यते'इति प्रकृतेः कर्महेतुत्वेन वक्ष्यमाणत्वात्। तच्चशरीररूपेणैव सम्भवति। ब्रह्म उक्तस्वरूपमक्षरसमुद्भवम्। अत्राक्षरशब्देन पुरुषक्षेत्रज्ञादिशब्दवाच्यो जीवात्मोच्यते। 'कूटस्थोऽक्षर उच्यते' इति वक्ष्यमाणत्वात्। तेनाधिष्ठितं शरीररूपं प्रकृत्याख्यं ब्रह्म भुक्तान्नपानादिनापुष्ट्या लब्ध–सामर्थ्यं सत्कर्मोत्पादने योग्यो भवति। कार्योत्पादनयोग्यतैव समुद्भवशब्देनाभिहिता, अतो ब्रह्माक्षरसमुद्भवमित्युक्तं, प्रकृतिरपि क्षेत्रज्ञाधिष्ठितैव कार्योत्पादने समर्था, न केवला।

यज्ञको हेतुभूत कर्म ब्रह्मबाट उत्पन्न भएको जान्नु। (यहाँ ब्रह्म शब्दको अर्थ प्रकृति या परिणाम स्वरूप शरीर हो।) श्रुतिमा पनि ब्रह्म शब्द प्रकृतिको अर्थमा व्यवहार गरिएको छ। यथा–'तदेतत् ब्रह्म नामरूपमन्नं च जायते' अर्थात् यो ब्रह्म नाम रूप र अन्न हुन्छ। फेरि चौधौं अध्यायमा पनि भगवान् 'मम योनिर्महद्ब्रह्म' यस्तो भन्नुहुनेछ, अर्थात् मेरो योनि अर्थात् प्रकृति(सर्वभूतोत्पत्तिस्थान) महद् ब्रह्म हो। यसैले ब्रह्म शब्दले निर्दिष्ट प्रकृतिको परिणाम रूप शरीरबाट नै कर्म उत्पन्न हुन्छ, यो अर्थ धेरै ठिक भयो, किनकी अगाडी भगवान् प्रकृतिलाई नै कर्मको हेतु भन्नुहुनेछ, जस्तो–'कार्यकारणहेतुत्वे हेतुः प्रकृतिरुच्यते' अर्थात् कार्यकारण हुनुमा प्रकृति नै हेतु हो। र प्रकृति कार्यकारण को हेतु हुनु शरीरको द्वारा नै सम्भव हुन सक्दछ।

माथि भनिएको स्वभाववाला ब्रह्म(शरीर) अक्षरबाट उत्पन्न भयो। यहाँ अक्षर शब्दको अर्थ पुरुष, क्षेत्रज्ञ आदि शब्दहरूका द्वारा भनिएको जीवात्मा संज्ञिनु पर्दछ। किनकी अगाडी गएर भगवान् भन्नुहुनेछ–'कूटस्थोऽक्षर उच्यते' अर्थात् कूटस्थ जुन जीव हो त्यसैलाई अक्षर भनिन्छ। यस जीवसँग अधिष्ठित शरीररूप प्रकृति नामवाला ब्रह्म भोजन गरिएको अन्नपानादि बाट पुष्ट भएर सामर्थ्य गरी राम्रा कर्महरू गर्ने योग्यता प्राप्त गर्दछ। कार्यको उत्पादनको योग्यता प्राप्त गर्नुनै 'समुद्भव' शब्दको अर्थ हो। यसैले ब्रह्म(प्रकृति)लाई अक्षरबाट समुद्भव भनियो। प्रकृति पनि क्षेत्रज्ञ अर्थात् जीवको आश्रय ग्रहण गरेर नै कार्य गर्नमा समर्थ हुन्छ। एक्लै प्रकृतिले केही गर्न सक्दैन। विष्णुपुराणमा पनि यही कुरा भनिएको छः–'गुण.......द्विजोत्तमः॥' अर्थात् हे द्विजहरूमा श्रेष्ठ!

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

तथा चोक्तं विष्णुपुराणे। 'गुणसाम्यात्ततस्तस्मात्क्षेत्रज्ञाधिष्ठितान्मुने। गुण व्यञ्जनसंभूतः सर्गकाले द्विजोत्तमे' ति यस्मादक्षरशब्दवाच्यं जीवाधिष्ठितं शरी- रात्मया परिणतं प्रकृत्याख्यं ब्रह्म यज्ञहेतुभूतकर्मोत्पादकं तस्मात्सर्वगतं यज्ञादियजमानहोत्रादिशरीरं नित्यं यज्ञे प्रतिष्ठितं, प्रकर्षेण स्थितं पूजितं वेत्यर्थः॥१५॥

हे मुने! सृष्टिको गुणहरूमा पहिले समता थियो। फेरि सृष्टिको समय मा क्षेत्रज्ञ अर्थात् जीवको आश्रय पाएर गुणहरूको प्रकाश भयो। किनकी अक्षर शब्दले वाच्य, जीवसँग अधिष्ठित, शरीररूप प्रकृतिनामवाला ब्रह्म, यज्ञको हेतुभूत कर्महरूको उत्पादक हो, अर्थात् शरीरद्वारा नै सबै यज्ञको सबै कर्म हुन्छन्, यसैले यज्ञादि सबै कर्ममा त्यो शरीर आवश्यक छ। त्यसको बिना यज्ञको प्रवृत्ति हुन सक्दैन। यसैले यजमान, होता, ब्रह्मा आदिको शरीर नित्य यज्ञमा प्रतिष्ठित छन्। अर्थात् राम्रो सँग स्थितवा पूजित छन्। भन्नुको तात्पर्य यो कि शरीरबाट कर्म हुन्छ र शरीर जीवको बिना बस्न सक्दैन। यसैले सबै यज्ञकर्महरूमा जीवसँग अधिष्ठित शरीरको आवश्यकता छ अर्थात् शरीर प्रधान हो॥१५॥

-★-★-★-

**एवं प्रवर्तितं चक्रं नानुवर्तयतीह यः।**
**अघायुरिन्द्रियारामो मोघं पार्थ स जीवति॥**

**हे पार्थ! जुन पुरुष यस लोकमा यस प्रकार परम्पराबाट प्रचलित सृष्टिचक्रको अनुकुल गर्दैन अर्थात् आफ्नो कर्तव्यको पालन गर्दैन, त्यो इन्द्रियहरूका द्वारा भोगमा रमण गर्नेवाला पापायु व्यर्थै बाँच्दछ॥१६॥**

एतेन किं निर्दिष्टमित्यत आह-एवमिति। अयं भावः परमेश्वरेणादौ सृष्टिकाले स्वस्मिन् लीनानां जीवानां तत्तत्कर्मफलभोगसिद्धये स्वांशभूतजीवानुप्रवेशेन प्रकृतिपरिणामद्वारा नामरूपविभागं कृत्वा, चतुर्मुखद्वारेण ब्राह्मणादीनुत्पाद्य सृष्टिवृद्ध्यर्थं तेभ्योऽन्नादिभोगम् प्रदर्श्य, ततो ब्राह्मणादीनां यज्ञादिकर्मोत्पादनसामर्थ्यं, ततः कर्मोत्पत्तिस्ततो यज्ञसंभवस्ततो वृष्टिस्ततः पुनरन्नोत्पत्तिस्ततः सजीवानि शरीराणीत्येवं प्रकारेणेश्वरेण प्रवर्त्तितं जगच्चक्रं, इह जगति कर्माधिकारे वतमानो यः स्वाधिकारानुसारं नानुवर्तयति, यज्ञादिकर्मणा सृष्टिं न वर्द्धयति सोऽघायुरघार्थमेवायुर्यस्य स तथाभूतो भवति। यतः इन्द्रियाराम इन्द्रियप्रीतयेऽयज्ञशिष्टान्नवर्द्धितदेहत्वेन देवपित्रतिथिवञ्चकः पापवर्द्धक एवेत्यर्थः। हे पार्थ! स पुरुषो मोघं वृथैव जीवति तज्जीवनान्मरणं श्रेय इति भावः॥१६॥

सृष्टिको प्रारम्भमा भगवान्ले आफुमा लीन जीवहरूलाई उनीहरूको कर्मफल भोग्नको लागि, आफ्नो अंशभूत जीवहरूमा प्रवेश गरी, प्रकृतिको परिणाम, शरिरादि नामरूपको विभाग गरेर, ब्रह्माको द्वारा ब्राह्मणादिलाई उत्पन्न गराउनु भयो। फेरि सृष्टिको वृद्धिका लागि उनीहरूलाई अन्नादि भोग देखाउनु भयो। यी भोगहरू बाट ब्राह्मणादिमा यज्ञादि कर्म गर्ने सामर्थ्य भयो। यस सामर्थ्यले कर्मको उत्पत्ति भयो। कर्मबाट यज्ञ भयो। यज्ञ गर्नाले वृष्टि भयो। वृष्टिले फेरि अन्न उत्पन्न भयो। अन्नबाट सजीव शरीर उत्पन्न भए। यस प्रकार ईश्वरले चलाउनु भएको जगच्चक्रको यस संसार मा कर्माधिकारमा स्थित जो पुरुष आफ्नो अधिकारको अनुसार अनुसरण गर्दैन, अर्थात् यज्ञादि कर्महरूको द्वारा सृष्टिको वृद्धि गर्दैन, त्यसको आयु पापको लागि नै हो, अर्थात् त्यसको जीवन पापमय छ। किनकी यस्तो पुरुष आफ्नो इन्द्रियसुखको लागि यज्ञबाट नबचेको(अर्थात् यज्ञ नगरीकन बचेको) अन्नले शरीरलाई बढाएर देव, पितृ अतिथिलाई ठग्नेवाला हुन्छ। हे अर्जुन! यस्तो मनुष्य व्यर्थै जीउँदछ। अर्थात् त्यो बाँच्नु भन्दा मरेकै राम्रो॥१६॥

-★-★-★-

**यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः।**
**आत्मन्येव च सन्तुष्टस्तस्य कार्यं न विद्यते॥**

**तर जुन मनुष्य आत्मामा नै रमण गर्नेवाला, आत्मामा नै तृप्त तथा आत्मामा नै सन्तुष्ट छ, त्यसको लागि कुनै कर्तव्य रहँदैन॥१७॥**

एवमनादिविषयवासनावतां प्रवृत्त्यधिकारिणां जगच्चक्रप्रवृत्तिहेतुभूते काम्ये कर्मण्यधिकार इति निर्णीतमिदानीं

यस प्रकार अनादि विषयवासनामा लिप्त, प्रवृत्तिमार्गको अधिकारी पुरुषहरूको काम्यकर्ममा, जो संसारचक्र को प्रवृत्तिको

विषयवासना शून्यस्यात्मनिष्ठस्य तूक्तयज्ञादिकर्माकरणे न कश्चिद् दोषयोग इत्याह–यस्त्विति द्वाभ्याम्। तु शब्दः पूर्वोक्तात्सकामान्निष्कामस्य विदुषो महद्वैलक्षण्यं द्योतयति। यो मानवः आत्मरतिः आत्मनि स्वात्मभूते भगवति रतिः प्रीतिर्यस्य नतु शब्दादिपञ्चेन्द्रियविषयेषु स्त्रीषु वा तथाऽऽत्मना तेनैव तृप्तः पूर्णः, न तु नानाविधभोजनादिना। तथा आत्मन्येव संतुष्ट आत्मस्वरूपगुणाद्यनुभव एव संतुष्टः स्यात्, न तु धनपुत्रपशुक्षेत्रादिलाभे। तस्य तथाभूतस्य कार्यं कर्त्तव्यं कर्म न विद्यते, न स कर्म–नियोगार्ह इत्यर्थः॥१७॥

कारण हो, अधिकार भएको बताएर विषयवासना ले शून्य, आत्मनिष्ठ पुरुषहरूलाई माथि भनिएको यज्ञादि कर्म नगर्नाले पनि केहि दोष हुँदैन, यस भावलाई अब दुई श्लोकहरू बाट भन्नुहुन्छ- यहाँ 'तु' शब्दले यो अभिप्राय देखाईएको छ कि पूर्वोक्त सकामी पुरुषहरू सँग निष्कामी विद्वान् पुरुषहरू को ठूलो अन्तर छ। जुन मनुष्यलाई आफ्नो आत्मभूत भगवान् मा प्रीति छ, परन्तु शब्दादि इन्द्रियको विषयमा अथवा स्त्री पुत्र इत्यादिमा होईन, र जो आत्माकै अनुभवमा तृप्त वा पूर्ण छन्, नाना प्रकारको भोजनादिहरूले होईन, र जो आत्माकै स्वरूप र गुणादिको अनुभवमा नै सन्तुष्ट छन्, धन, पुत्र, खेत, पशु, आदिको लाभले होईन, यस्ता पुरुषहरूका लागि कुनै कर्त्तव्यकर्म छैनन्, उसको लागि त कर्मको नियोग वा आज्ञा छैन॥१७॥

–★–★–★–

**नैव तस्य कृतेनार्थो नाकृतेनेह कश्चन ।**
**न चास्य सर्वभूतेषु कश्चिदर्थव्यपाश्रयः॥**

**त्यो मनुष्यको यस विश्वमा न त कर्म गर्न सँग कुनै प्रयोजन रहन्छ न त कर्म नगर्न सँग कुनै प्रयोजन रहन्छ। तथा सम्पूर्ण प्राणिहरूमा पनि यसको किञ्चिन्मात्र पनि स्वार्थको सम्बन्ध रहँदैन॥१८॥**

तत्र हेतुमाह- नैवेति। लोके कर्मणां कर्त्तुरुत्कर्षो भवति तदकरणेऽपकर्षो जायते। तस्यात्मरतस्य विदुषः कृतेन कर्मणा कश्चनोत्कर्षाद्यर्थो नास्ति। चाप्यकृतेनेह कश्चनाप–कर्षो दोषो वा भवति। आत्मव्यतिरिक्तस्य सर्वस्योपेक्षि–तत्वात्। अत एव चास्यात्मविदः सर्वभूतेषु देवमनुष्यादिषु कश्चिदर्थव्यपाश्रयः कोऽप्यर्थाय प्रयोजनाय सेवनीयो न भवतीत्यथः॥१८॥

माथिको श्लोकमा दिईएको विषयको कारण यहाँ भन्नुहुन्छ- संसारमा कर्म गर्नेहरूको बड़ाई वा भलाई हुन्छ, र जो कर्म गर्दैनन् उनीहरूको निन्दा, चियोचर्चो वा हानी हुन्छ। जुन पुरुषलाई आत्मभूत भगवान् मा प्रीति छ, आफ्नोद्वारा गरिएको कर्मबाट कुनै लाभ वा बड़ाईको इच्छा हुँदैन, र न त्यसलाई कर्म नगरेमा यस जगतमा हानि वा दोष हुन्छ। यसको कारण यो हो कि आत्माको अतिरिक्त यो अरु विषयलाई उपेक्षा गर्दछ, अर्थात् उनीहरूको पर्वाह गर्दैन्। यसैले आत्मालाई जान्ने पुरुष देव, मनुष्यादि कसैसँग केहि पाउनको लागि तिनीहरूको सेवा श्रुशूषा गर्दैन, किनकी त्यसलाई कसैसँग केहि प्रयोजन छैन॥१८॥

–★–★–★–

**तस्मादसक्तः सततं कार्यं कर्म समाचर ।**
**असक्तो ह्याचरन्कर्म परमाप्नोति पूरुषः॥**

**यसैले तिमि निरन्तर आसक्तिले रहित भएर सदा कर्तव्यकर्मलाई राम्रो सँग गर्दै रहु। किनकी आसक्तिले रहित भई कर्म गर्दै गरेर मनुष्य परमात्मालाई प्राप्त गर्दछ॥१९॥**

एवम्भूतात्मज्ञान्यवस्थेप्सुना फलाभिसन्धिशून्यं कर्म कर्त्तव्यमित्याह–तस्मादिति । यस्मात्परमेश्वराराधनात्मकं कर्म एवम्भूतज्ञानफलकं तस्मादसक्तः फलसंकल्पवर्जितः सन् कार्य्यं नियतं कर्त्तव्यं कर्म सततं नित्यं यावज्जीवं

यस्ता आत्मज्ञानी को अवस्था चाहनेहरूले फलको इच्छा छाडेर कर्म गर्नु पर्दछ। यसै आशय यहाँ भन्नुहुन्छ। किनकी परमेश्वरको आराधनारूप कर्म उपरोक्त आत्मज्ञानलाई दिन्छ, यसैले फलको इच्छा छोडेर नियत कर्म अर्थात् कर्त्तव्यकर्मलाई यावज्जीवन सुचारुरूपले गरिरहु। यसको कारण यो हो कि संगरहित वा

समाचर। हि यतः, असक्तः सन्कर्माचरन् पुरुषः कोऽपीश्वराराधकः सत्त्वशुद्धिज्ञानद्वारा(परं) परमेश्वरं परं सर्वोत्तमं मोक्षाख्यं फलं वा आप्नोति॥१९॥

आसक्ति रहित भएर सबै कर्महरूलाई गर्ने भगवान्को कुनै पनि भक्त सत्त्वशुद्धिपूर्वक ज्ञानद्वारा भगवान्लाई वा सर्वोत्तम मोक्ष प्राप्त गर्दछ॥१९॥

-★-★-★-

**कर्मणैव हि संसिद्धिमास्थिता जनकादयः ।**
**लोकसङ्ग्रहमेवापि सम्पश्यन्कर्तुमर्हसि ॥**

**जनकादि ज्ञानीजन पनि आसक्तिरहित कर्मद्वारा नै परमसिद्धिमा प्राप्त भएका थिए। यसैको लागि तथा लोकसंग्रहलाई हेर्दाखेरि पनि तिमी कर्मगर्ने नै योग्य छौ अर्थात् तिमिले कर्म गर्नुनै उचित हो॥२०॥**

नन्वन्तःकरणशुद्ध्यर्थमेव कर्म कर्त्तव्यं, तच्छुद्ध्या ज्ञाने जाते कर्म त्याज्यमन्यथा सदा कर्मणि क्रियमाणे मोक्षो न स्यात्तेन बन्धः स्यात्। 'नास्त्यकृतः कृतेने'ति श्रुतेः कर्मणा वध्यते जन्तुरि'ति शास्त्रादित्याशंकानिरासार्थं कर्म कुर्वतो ज्ञानिनः प्रमाणयति कर्मणैवैति सहार्ये तृतीया। 'वृद्धोयूने'ति निर्देशात् तथा च कर्मणा सहैव न तु कर्मत्यागेन, ज्ञानित्वेन विख्याताः जनकादयः जनकाश्वपतिप्रभृत्तयः ज्ञानस्य संसिद्धिं मोक्षमाख्यामास्थिताः प्राप्ताः, न तु कर्मानुष्ठानेन बन्धं प्राप्ताः ज्ञानप्रभावादिति भावः। हि यत एवं तस्मात्त्वमपि ज्ञानी चेत्कर्मकर्त्तुमर्हसि। ननु ज्ञाननिष्ठः पुरुषः कर्मणि क्रियमाणेऽविस्सपफनयिद्धिमेव प्राप्नोति, न तु कर्मणा बध्यते। एवम्प्रभावा ज्ञाननिष्ठा चेत्किमर्थं ज्ञानिनोऽपि कर्मकरणावश्यकत्वमिति। यद्यपि ज्ञाननिष्ठार्हस्त्वं तथापि लोकसंग्रहमेव पश्यन् लोकानां स्वधर्मे प्रवृर्त्तनमधर्मान्निवर्त्तनं लोकसंग्रहस्तं संपश्यन्कत्तुमर्हसि योग्यो भवसि॥२०॥

यहाँ यो शंका हुन सक्दछ कि, जब अन्तःकरणको शुद्धिको लागि नै कर्म गरिन्छ भने, तब अन्तःकरणको शुद्धिद्वारा ज्ञान प्राप्त भईसकेपछि कर्म छोडिदिनु पर्दछ, होईन भने त सदा कर्ममा लागिरहनाले मोक्ष प्राप्त हुन सक्दैन, किन्तु कर्म बाट बन्धन हुनसक्दछ। किनकी श्रुतिमा पनि भनेको छ-'नास्यकृतः कृतेन' अर्थात् गरिएको कर्मले मोक्ष हुन सक्दैन। शास्त्रहरूमा पनि लेखिएको छ कि- 'कर्मणा बध्यते जन्तुः' अर्थात् कर्मले नै जीव बन्धनमा पर्दछ। यीनै शंकाहरूलाई हटाउनको लागि भगवान् कर्मगर्नेवाला ज्ञानीहरूको उदाहरण दिनुहुन्छ- ज्ञानिहरूमा प्रसिद्ध जनक, अश्वपति इत्यादि कर्म गर्दै गरेर नै, कर्मलाई छोडेर होईन, ज्ञानको सिद्धि अर्थात् मोक्षमा प्राप्त भए। ज्ञानको प्रभावले उनीहरूको कर्म उनीहरूलाई बन्धन भएन। यसैले यदि तिमी पनि ज्ञानी हो भने त कर्मबाट विमुख हुनु तिम्रो लागि उचित हैन, अर्थात् तिमीले कर्म गर्नु नै पर्दछ। फेरि शंका हुन्छ कि ज्ञाननिष्ठ पुरुष कर्म गरेर पनि ज्ञानको फल सिद्धिलाई नै प्राप्त गर्दछ, र कर्म त्यसलाई बाँध्दैन। यदि ज्ञाननिष्ठा कै यति महिमा छ भने त ज्ञानीहरूलाई कर्म गर्नुपर्ने किन जरुरी छ? यसै शंकाको उत्तर दिनुहुन्छ- यद्यपि तिमी ज्ञाननिष्ठाको योग्य छौ, तर पनि लोकसंग्रहलाई ध्यानमा राख्दै तिमीले कर्म गर्नु नै उचित छ। अर्थात् जसले मान्छेहरू स्वधर्ममा लागुन् र अधर्मबाट हटुन यसैले तिमीले कर्म गर्नु पर्दछ॥२०॥

-★-★-★-

**यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः।**
**स यत्प्रमाणं कुरुते लोकस्तदनुवर्तते ॥**

**श्रेष्ठ पुरुष जस्तो-जस्तो आचरण गर्दछ, अन्य पुरुष पनि त्यस्तै-त्यस्तै आचरण गर्दछन्। त्यो जुन कुनै प्रमाद गर्दछ, समस्त मनुष्य-समुदाय त्यसैको अनुसरण गर्दछन्॥२१॥**

ननु मया कर्मकरणे लोकसंग्रहः कथं स्यादित्यतआह- यद्यदिति। श्रेष्ठः जातिकुलगुणादिना लोकेऽतिशयप्रशस्य- तया संमतः पुरुषो यद्यत्कर्माऽऽचरति, इतस्ततो निकृष्टो

अर्जुन शंका गर्न सक्दछन् कि, मैले कर्म गर्नाले लोकसंग्रह कसरी हुन्छ? भगवान् यसैको उत्तर दिनुहुन्छ-

जाति, कुल, गुण इत्यादि बाट जुन पुरुष संसारमा प्रसिद्धि पाएर सबैबाट पूज्य हुन्छ, त्यो जुन-जुन कर्महरू गर्दछ, त्यो

जनस्तत्तदेवाचरति। ननु शुभाशुभाचारयोः शास्त्रमेव सर्वेषां प्रमाणं तदेव दृष्ट्वाऽन्येपि किन्न कुर्वन्तीत्यत आह–स इति। स श्रेष्ठ पुरुषो यच्छास्त्रमन्यद्वा प्रमाणं कुरुते मन्यते लोकोऽज्ञजनस्तदेवानुवर्त्तते तदुक्तवचनं विश्वस्तः कुरुते। यथा शास्त्रगर्हितमपि मत्स्य–भोजनं पूर्वं केनचिच्छ्रेष्ठेन कृतं कान्यकुब्जादयस्तदनुवर्त्तिनो वहवो भुञ्जते, तद्वत्।

भन्दा निकृष्ट अरु मान्छेहरू तिनैकर्महरू गर्दछन्। फेरि यहाँ शंका हुन्छ कि शुभ र अशुभ आचारमा त शास्त्र नै प्रमाण छ, भने त्यसैलाई देखेर उनीहरू त्यसैको अनुसार गर्म किन गर्दैनन्? यस शंकाको उत्तर दिनुहुन्छ– त्यो श्रेष्ठ पुरुष जुन शास्त्रोक्त वा अरु कुराहरूलाई प्रमाण मान्दछ वा राम्रो संझिन्छ, त्यसैलाई सबैजना त्यसको कुरामा विश्वास गरेर प्रमाण वा उत्तम मान्दछन् र भन्दछन्। जस्तो शास्त्रबाट निषिद्ध माछाको भोजन कुनै–कुनै जातिको श्रेष्ठ ब्राह्मणहरू बाट गरिनाले मैथिल, कान्यकुब्ज आदि जातिका धेरै मान्छेहरू, ती श्रेष्ठहरूको अनुसरण गर्दै, यो गर्हित(निषिद्ध) कर्म गर्दछन्॥२१॥

–★–★–★–

## न मे पार्थास्ति कर्तव्यं त्रिषु लोकेषु किञ्चन।
## नानवाप्तमवाप्तव्यं वर्त एव च कर्मणि॥

**हे अर्जुन! मलाई यस तीनै लोकमा कुनै कर्तव्य छैन र न त कुनै प्राप्त गर्नयोग्य वस्तु मलाई अप्राप्त छ तर पनि म कर्ममा नै लागिरहन्छु॥२२॥**

न केवलं त्वामेवेदमाज्ञापयामि किन्त्वहमपि लोकसंग्र–हार्थमेव कर्म करोमीत्याह–न मे इति। हे पार्थ! मे ममत्रिषु लोकेषु अनवाप्तमप्राप्तं अवाप्तव्यं प्राप्तुं योग्यमपेक्षितं किञ्चन नास्ति, अतः कर्त्तव्यं नास्ति। तथापि कर्मणि वर्त्त एव, कर्म करोम्येवेत्यर्थः॥२२॥

भगवान् भन्नुहुन्छ कि हे अर्जुन! तिमीलाई नै मात्र म यो आज्ञा दिन्छु सो कुरा होईन, म पनि लोक संग्रहको लागि नै कर्म गर्दछु–यही आशयलाई यहाँ स्पष्ट पार्नुहुन्छ– हे अर्जुन! तीनै लोकहरूमा यस्तो कुनै चीज छैन जुन मलाई प्राप्त नहोस या जसको प्राप्तिको मलाई इच्छा छ र जसलाई पाउनको लागि मैले कर्म गर्नु परोस। अतः मलाई कुनै कर्त्तव्य छैन। तथापि लोकसंग्रहको लागि भएपनि म कर्म गर्दछु॥२२॥

–★–★–★–

## यदि ह्यहं न वर्तेयं जातु कर्मण्यतन्द्रितः।
## मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः॥

**किनकी हे पार्थ! यदि कदाचित् म सावधान भएर कर्ममा लागिन भने ठूलो हानि हुनेछ; किनकी मनुष्य सबै प्रकारले मेरो नै अनुसरण गर्दछन्॥२३॥**

तद करणे मम दोषः स्यादित्याह यदीति। जातु कदाचिदतन्द्रितोऽनलसः सन्यदि कर्मण्यहं न वर्त्तेयं कर्म नाचरेयं, तर्हि हे पार्थ! जगद्धिताय धर्मज्ञशिष्टजनाग्रवर्ति–वसुदेवगुहाऽवतीर्णस्य सर्वेश्वरस्य वर्त्म कर्मानुष्ठानमार्गं मनुष्याः कर्माधिकारिणः सर्वश सर्वप्रकारेणानुवर्त्तन्ते। अयमेव।

कर्म नगर्नाले जो स्वयं भगवान् लाई दोष हुन्छ, त्यसैको वर्णन गर्नुहुन्छ–

यदि कदाचित् आलस्य रहित भएर मैले कर्म गरिन भने त हे अर्जुन! कर्माधिकारी सबै मनुष्य सबैप्रकारले मेरो नै अनुसरण गर्नेछन्। किनमी मैले जगतको हितको लागि धर्मज्ञ, सदाचारी पुरुषहरूमा अग्रणी वसुदेवको गृहमा अवतार लिएको छु र म सर्वेश्वर हूँ। यसैले मेरो चाल देखेर मान्छे यही संझिन्छन् कि यो बाटो नै सही हो, यो नै धर्म हो, यसैमा हाम्रो हित छ र यस प्रकार म उनीहरूको लागि प्रमाण बनिन्छु अर्थात् अरु मनुष्य पनि मेरो नै देखा सिखी कुलोचित कर्महरूलाई छोडिदिन्छन्॥२३॥

–★–★–★–

**उत्सीदेयुरिमे लोका न कुर्यां कर्म चेदहम् ।**
**सङ्करस्य च कर्ता स्यामुपहन्यामिमाः प्रजाः ॥**

**यसैले यदि मैले कर्म गरिन भने यी सबै मनुष्य नष्ट–भ्रष्ट हुनेछन् र म सङ्करता बनाउनेवाला हुनेछु तथा यी समस्त प्रजाहरूलाई पनि नष्ट गर्नेवाला हुनेछु ॥ २५ ॥**

ननु लोकानां सर्वशज्ञस्य सर्वश्रेष्ठस्य तवानुवर्त्तनमुचितमेव तव कर्माकरणे को दोष इत्यत आह–उत्सीदेयुरि'ति। चेद्यमहं कर्म न कुर्यां तर्हीमे ममाचारानुवर्त्तिनो लोका जना उत्सीदेयुः। कर्मविदामग्रणीर्वासुदेवो यदि कर्म न करोति तर्ह्यस्माभिरपि न कर्त्तव्यमिति मत्वा धर्माद्भ्रष्टाः भवेयुरित्यर्थः। स्वधर्मनियमत्यागात्संकरः वर्णानां सांकर्य्यं स्यात्तस्य कर्त्ताऽहमेव स्यां ततश्चेमाः प्रजा उपहन्यां नरकपातार्हताहेतुना विनाशकर्त्ता स्यामित्यथः। एवं सर्वलोकसंरक्षणार्थमवतीर्णस्य मम महान्दोष एव स्यादिति भावः॥२४ ॥

यदि मैले सावधान भएर कर्म गरीन भने सबै जना मेरो मार्गमा चलेर पथभ्रष्ट हुन्छन्। अर्थात् मैले कर्म नगर्दा मान्छेहरू यही सोच्ने छन् कि कर्मलाई जान्नेहरूमा सर्वश्रेष्ठ वासुदेव श्रीकृष्ण नै जब कर्म गर्दैनन् भने हामीहरूले पनि कर्म गर्नु हुँदैन र यस प्रकार संझेर कर्म नगर्नाले ती पथभ्रष्ट हुन्छन् तथा आ–आफ्नो धर्मको नियमलाई छोड्नाले वर्णमा संकरता आउँदछ र यस संकरताको जड म नै हुनेछु। यस प्रकार सबैलोकको रक्षाका लागि अवतार लिएर म महादोषको पात्र बन्नेछु॥ २४ ॥

–★–★–★–

**सक्ताः कर्मण्यविद्वांसो यथा कुर्वन्ति भारत ।**
**कुर्याद्विद्वांस्तथासक्तश्चिकीर्षुर्लोकसङ्ग्रहम् ॥**

**हे भारत! कर्ममा आसक्त भएका अज्ञानीहरू जसरी कर्म गर्दछन्, आसक्तिरहित विद्वान् पनि लोकसंग्रह गर्ने चाहना राख्दै त्यसरी नै कर्म गरून् ॥ २५ ॥**

तस्माद्विदुषाऽपि लोकोपकारार्थं कर्म कर्त्तव्यमित्याह–सक्ता इति त्रिभिः। अविद्वांसो वेदान्ततत्त्वज्ञानहीनाः कर्मणि सक्ता अभिनिविष्टाः सन्तो यथा कर्म कुर्वन्ति, विद्वानात्मा–नात्मविवेकज्ञोऽसक्तः कर्मणि तत्फलेऽभिनिवेशवर्जितः सन् लोकसंग्रहं चिकीर्षुः, स्वाचारेण लोकानां स्वधर्मे निश्चयं कत्तुमिच्छुस्तथाऽविद्वद्वत्कुर्यात्।

विद्वानले पनि लोकको कल्याणका लागि कर्म गर्नुपर्दछ। परमात्मा यसै आशयलाई यहाँ प्रकट गर्नुहुन्छ–

हे अर्जुन! वेदान्तको तत्त्वज्ञानले हीन मनुष्य कर्महरूमा आसक्त भएर जसरी कर्मलाई नै गर्दछन्। आत्म र अनात्मको विवेकी पुरुष कर्ममा अनासक्त भएर अर्थात् कर्ममा रागरहित भएर लोकसंग्रहको कामनाले त्यसरी नै (अविद्वान्हरूको समान नै) कर्महरू गर्नु। भावार्थ यो कि कर्म दुबैको एकै प्रकारको हुन्छ। मूढ़लाई कर्मको फलमा प्रेम छ तर विद्वान्लाई कर्मको फलमा आसक्ति हुँदैन। त्यो कर्म केवल यसैले गर्दछ कि त्यसको आचार देखेर मान्छेहरू आफ्नो धर्मको निश्चय गर्नेछन् अर्थात् कुलोचित कर्म गरिरहने छन्॥ २५ ॥

–★–★–★–

**न बुद्धिभेदं जनयेदज्ञानां कर्मसङ्गिनाम् ।**
**जोषयेत्सर्वकर्माणि विद्वान्युक्तः समाचरन् ॥**

**परमात्माको स्वरूपमा अटल स्थिति भएका ज्ञानी पुरुषले यो गर्नुपर्दछ कि त्यो शास्त्रविहित कर्ममा आसक्तिवाला**

**अज्ञानीहरूको बुद्धिमा भ्रम अर्थात् कर्ममा अश्रद्धा उत्पन्न नगरीदिऊन । र स्वयं शास्त्रविहित समस्त कर्म गर्दै उनीहरूलाई पनि गराउनु ॥२६॥**

ननु पंकलिप्तानां पंके(नि) पातनवत्कर्मासक्तानामज्ञानां कर्मण्येव प्रवर्त्तनमहितमेव कृतं स्यादतस्तद्धितेप्सुना विदुषा ज्ञानमेवोपदेष्टव्यमिति चेत्तत्राह–न बुद्धिभेदमिति। अज्ञाना–मन्तःकरणशुद्ध्यभावात्तत्वोपदेशानर्हाणामत एव कर्मसंगिनामनादिकर्मवासनयाऽशुद्धमनस्त्वेन कर्मण्ये–वारूढमतीनामात्मज्ञानं विना कर्मभिर्मोक्षो नास्तीति बुद्धिभेदं न जनयेन्नोत्पादयेत्। किंतर्हि एते ज्ञानेऽनधिकृताः कर्मच्युताः भ्रष्टाः भवेयुरितिविद्वान् तेषां हितबुद्ध्या युक्तः सन् सर्वकर्माणि नित्यनैमित्तिकानि समाचरन् अज्ञान् कर्मसु जोषयेत् प्रीति जनयेत्।

कर्ममा आसक्त अज्ञानिहरूलाई कर्ममा नै लगाउनु, पङ्क मा बेरिएका लाई फेरि पङ्कमा नै धकेल्नुको समान उसको अहित गर्नु हो। यसैले अज्ञानीहरूको हित चाहनेवाला विद्वान्हरू ले त्यसलाई ज्ञानको नै उपदेश गर्नुपर्दछ। भगवान् यसको उत्तरमा भन्नुहुन्छ–

अन्तःकरणको शुद्धिको अभावले तत्त्वोपदेशको अयोग्य र यसैले कर्ममा आसक्त, अर्थात् अनादि कर्मवासनाले अशुद्ध मन भएको कारण कर्ममा नै तत्पर जो अज्ञानीहरू छन्, उनीहरूलाई यो भनेर कि 'ज्ञानको बिना कर्मबाट मुक्ति हुँदैन' उनीहरूमा बुद्धिभेद वा भ्रम उत्पन्न गर्नु हुँदैन किनकी यस्तो गर्नाले ज्ञानको अनधिकारी यी मान्छेहरू कर्मबाट च्युत भएर अर्थात् कर्मलाई छोडेर भ्रष्ट हुनजान्छन्। यसैले उनीहरूको हितको बुद्धिले युक्त भएर विद्वान् स्वयं नित्य नैमित्तिक कर्म गर्दै त्यसलाई कर्ममा लगाउनु अर्थात् उनीहरूको कर्ममा प्रीति उत्पन्न गर्नु॥२६॥

–★–★–★–

**प्रकृतेः क्रियमाणानि गुणैः कर्माणि सर्वशः।**
**अहङ्कारविमूढात्मा कर्ताहमिति मन्यते॥**

**वास्तवमा सम्पूर्ण कर्म सबै प्रकारले प्रकृतिको गुणहरूद्वारा गरिन्छ तर पनि जसको अन्तःकरण अहङ्कारले मोहित भईरहेको छ, यस्तो अज्ञानी 'म कर्ता हूँ' यस्तो मान्दछ॥२७॥**

ननु विदुषोऽप्यविद्वत्कर्मानुष्ठानं चेत्तर्ह्यविदुषो विदुषः को विशेष इत्याकांक्षोपशमार्थं तद्विशेषं दर्शयति। प्रकृतेरिति द्वाभ्याम्। प्रकृतिरीश्वरस्याचिच्छक्तिर्माया तस्या गुणैः सत्त्वादिभिर्देहेन्द्रियरूपेण परिणतैः सर्वशः सर्वप्रकारेण क्रियमाणानि कर्माणि अहंकारविमूढात्मा अनात्मनि देहादावात्मबुद्धिरहंकारेण विमूढ आत्मा मनो यस्य सोऽहंकर्त्ता इति मन्यते, न तु गुणांस्तत्कार्भूतान्देहेन्द्रिया–दीन्वा। यद्यपि कर्त्ता शास्त्रार्थवत्त्वादित्यादिशास्त्रादात्मनः कर्तृत्वमस्ति, तथापि बद्धावस्थायां संकुचितज्ञान त्वादे–हेन्द्रियाधीन कर्तृत्वं न केवलस्यात्मनः। 'अधिष्ठानं तथा कर्त्ता करणं च पृथग्विधम्। विविधाश्च पृथक् चेष्टा दैवं चैवात्र पंचमम्। शरीरवाङ् मनोभिर्यत्कर्मप्रारभते नरः।

यदि विद्वान् को पनि कर्मानुष्ठान अज्ञानीको नै जस्तो भयो, भने ज्ञानी र अज्ञानीमा विशेषता नै के रह्यो र? यस प्रश्नको उत्तर भगवान् यहाँ दुई श्लोकहरूले दिनुहुन्छ–

ईश्वरको अचित्(ज्ञान विहीन) जड शक्ति, मायाको कार्य्य सत्वादिगुणहरूको, देह, इन्द्रियरूप परिणामहरू द्वारा सबै प्रकारले गरिएको कर्महरूको, अहंकारले मोहित मनवाला पुरुष आफुलाई कर्त्ता मान्दछ, मायाको गुण र त्यसको कार्य देह तथा इन्द्रियादिकहरूलाई होईन। (यहाँ अहंकारको अर्थ हो देहादि अनात्म पदार्थलाई आत्मा संझिनु)। यद्यपि 'कर्त्ता शास्त्रार्थवत्त्वात्' इत्यादि शास्त्रको वचनहरू द्वारा आत्माको कर्त्तापन हुनु सिद्ध छ, तथापि बद्धावस्थामा धर्मभूत ज्ञान संकुचित हुनाले आत्माको कर्त्तापन देह इन्द्रिय इत्यादि कारणहरूको अधीन छ। बद्धावस्थामा त्यो स्वाधीन कर्त्ता हुँदैन। अगाडि अध्यायहरूमा यो कुरा भनिएको छ। यथाः–

'अधिष्ठानं तथा कर्त्ता करणं च पृथग्विधम्। विविधाश्च पृथक् चेष्टा दैवं चैवात्र पंचमम्। शरीरवाङ् मनोभिर्यत्कर्मप्रारभते नरः। न्यायं वा विपरीतं वा पञ्चैते तस्य हेतवः। तत्रैवं सति कर्त्तारमात्मानं केवलं तु यः। पश्यत्यकृतबुद्धित्वान्न स पश्यति दुर्मतिः' (गी० १८।१४-१६)

न्यायं वा विपरीतं वा पञ्चैते तस्य हेतवः। तत्रैवं सति कर्त्तारमात्मानं केवलं तु यः। पश्यत्यकृतबुद्धित्वान्न स पश्यति दुर्मतिरि'ति (गी० १८।१४-१६) वक्ष्यमाणत्वात्। अत एव 'अहंकार विमूढात्मा कर्त्ताऽहमिति मन्यते' इत्युक्तम्। अन्यथा जक्षन् क्रीडन् रममाणः सह ब्रह्मणा विपश्चितेति मोक्षदशायामप्यात्मनः कर्तृत्वप्रतिपादक श्रुतिबाधः स्यादित्यलं विस्तरेण।

सारांश यो कि शरीर, वचन र मनले जो राम्रो नराम्रो कर्म मनुष्य गर्दछ त्यसमा पाँच कारण हुन्छन्, यथा- अधिष्ठान, कर्त्ता, करण, विविध चेष्टा र दैव। यस्तो भएपछि पनि जो मनुष्य केवल आफुलाई नै कर्त्ता मान्दछ, त्यो मूढ हेर्दा हेर्दै पनि देख्दैन। यसैले माथि भनिएको छ कि अहंकारले मोहित पुरुषनै आफुलाई कर्त्ता मान्दछ। यस्तो नमान्नाले 'जक्षन् क्रीडन् रममाणः सह ब्रह्मणा विपश्चिता' अर्थात् मुक्त आत्मा, विद्वान् मुक्तको उपासना भावानुसार फलभोग गराउनमा चतुर ब्रह्मको साथ मोक्षको दशामा पनि पूजा गर्दछ, खेल गर्दछ र रमण गर्दछ इत्यादि, यसको र अरु पनि (मोक्ष दशामा आत्मा को कर्तृत्व प्रतिपादक) श्रुतिहरूको बाध हुनजान्छ॥२७॥

-★-★-★-

**तत्त्ववित्तु महाबाहो गुणकर्मविभागयोः ।**
**गुणा गुणेषु वर्तन्त इति मत्वा न सज्जते॥**

**परन्तु हे महाबाहो! गुणविभाग र कर्मविभागको तत्त्वलाई जान्ने ज्ञानयोगी सम्पूर्ण गुण नै गुणमा लागि रहन्छन्, यस्तो बुझेर त्यसमा आसक्त हुँदैनन्॥२८॥**

गुणानां सकार्याणां सत्त्वादीनां विभागः, कर्माणि सत्त्वाद्यनुगुणानि तेषां च विभागः दैहिकमानसादिरूपः, तयोर्विभागयोस्तत्त्वं यथात्म्यं वेत्तीति गुणकर्मविभागवित्। स तु गुणाः सत्त्वादिकार्यभूता मनोवाक्शरीररूपाः गुणेषु स्वस्वकर्मभूतविषयेषु वर्त्तन्त इति मत्वा न सज्जते अहमेव करोमीति न मन्यते ॥२८॥

जुन पुरुष सत्वादि गुणहरूको विभागलाई उनीहरूको कार्यका साथ र ती गुणहरू अनुरूप दैहिक मानसिक आदि कर्महरूको विभागलाई राम्रो सँग जान्दछ, त्यो यो जानेर कि यी सत्त्वादिगुणहरू को कार्यभूत मन, वाक् मा लागि रहन्छन्, यस्तो कहिले पनि मान्दैन कि म यी कर्महरूको कर्त्ता हूँ॥२८॥

-★-★-★-

**प्रकृतेर्गुणसम्मूढाः सज्जन्ते गुणकर्मसु ।**
**तानकृत्स्नविदो मन्दान्कृत्स्नविन्न विचालयेत्॥**

**प्रकृतिको गुणहरूबाट अत्यन्त मोहित भएका मनुष्य गुणहरूमा र कर्महरूमा आसक्त रहन्छन्, ती पूर्णरूपमा अबुझ मन्दबुद्धि अज्ञानीहरूलाई पूर्णतया जान्ने ज्ञानी विचलित न गरोस॥२९॥**

एवं विद्वदविदुषोभेदं प्रदर्श्य पुनः 'न बुद्धिभेदं जनयेदि'ति उक्तमेव दृढयति-प्रकृतेरिति। प्रकृतेर्गुणैः सम्मूढाः सन्तः पूर्वोक्तगुणकर्मसु सज्जन्ते। वयमेवैत्कर्म कृत्वैतत्फलं भोक्ष्याम इत्थमासक्ता भवन्ति। तानकृत्स्नविद आत्मज्ञानहीनानतएव मन्दान्मन्दबुद्धीन् कृत्स्नवित् गुणकर्मविभागात्मवित् न विचालयेत् कर्मनिष्ठातो न च्यावयेत्।

यस प्रकार ज्ञनी र अज्ञानी को भेद भनेर अब फेरि जुन पहिले नै भनेको, कि अज्ञानीहरूको बुद्धिमा भेद उत्पन्न गर्नुहुँदैन, त्यसैलाई दृढ गर्नुहुन्छ- प्रकृतिको गुणहरूद्वारा मोहित भएको कारण पहिले भनिएको गुणहरूको कार्यरूप कर्ममा अज्ञानी पुरुष आसक्त हुनजान्छन्। अर्थात् ती यस्तो सोच्न लाग्दछन् कि हामी नै यी कर्महरूका कर्त्ता हौं र हामी नै यीनिहरूको फल भोग्नेछौं। यस्ता आत्मज्ञानबाट हीन अतएव मन्दबुद्धि पुरुषहरूलाई गुण कर्मको विभागहरू जान्ने ज्ञानी पुरुष कर्मनिष्ठाबाट न हटाउनु॥२९॥

-★-★-★-

**मयि सर्वाणि कर्माणि सन्न्यस्याध्यात्मचेतसा।**
**निराशीर्निर्ममो भूत्वा युध्यस्व विगतज्वरः॥**

**म अन्तर्यामी परमात्मामा लगाईएको चित्तद्वारा सम्पूर्ण कर्महरूलाई मलाईंनै अर्पण गरेर आशारहित, ममतारहित र सन्तापरहित भएर युद्ध गर॥३०॥**

एवं 'नकर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते' इत्यारभ्य कर्मकरणावश्यकत्वं तस्य फलाभिसन्धिरहितत्वेना–बन्धकत्वंलोकसंग्रहार्थमनासक्त्या कर्त्तव्यत्वमभिहितमेतत् सर्वं कथं स्यादिति चिन्तयतेऽर्जुनाय कृपया भगवान् स्वयमेव तत्प्रकारमुपदिशति–मयीति। मयि भगवति सर्वज्ञे सर्वशक्तौ सर्वान्तर्यामिणि वासुदेवे सर्वाणि कर्माणि दैहिकमानसादीनि सर्वप्रकाराणि अध्यात्मचेतसा अध्यात्मन्यन्तर्यामिणि यच्चेतस्तदध्यात्मचेतस्तेन संन्यस्य ममान्तर्यामीश्वर एव सर्वकर्माणि कारयति नाहं स्वतंत्रः कर्त्तेति मत्वा तत्प्रीत्यर्थमेव भवेयुरिति बुद्धियाऽप्यर्पयित्वा निराशीः कर्मसुफल कामनावर्जित अतएव निर्ममस्तत्र ममता शून्यो भूत्वा विगतज्वरः शोकमोहरहितः सन् युद्धयस्व। एवं कृतेऽसङ्गत्वमन्तः शुद्धिर्लोकसंग्रहश्च भवेदिति भावः।

'न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोश्नुते' देखि आरम्भ गरेर भगवान्‌ले कर्म गर्नुको आवश्यकता, त्यसको फलको इच्छा नरहनाले त्यसमा संसारको बन्धनमा बाँध्ने शक्तिको अभाव र आसक्तिहीन भएर लोकसंग्रह (रक्षा) को लागि कर्महरू गर्नुपर्ने भन्नुभयो। यो सबै कसरी हुन सक्दछ? यदि यस्तो चिन्ताले अर्जुनको मनमा स्थान पाएको छ भने त त्यसको सामाधान भगवान् कृपा गरेर अर्जुनले नसोधिकनै स्वयं गरिदिनु हुन्छ र यस श्लोकमा त्यसको बाटो देखाउनु हुन्छ। दैहिक, मानसिक इत्यादि कर्महरूलाई अध्यात्म बुद्धिद्वारा म सर्वज्ञ, सर्वान्तर्यामी, सर्वशक्तिमान् वासुदेवमा अर्पण गर अर्थात् यो संझेर कि मेरो अन्तर्यामी भगवान् नै मबाट सबै कर्महरू गराउनु हुन्छ, म स्वतन्त्र कर्त्ता होईन यसैले मेरो सबै काम उहाँ कै प्रीतिको लागि हो र उनैमा अर्पित छ, हे अर्जुन! तिमि कर्मको फलको इच्छाले शून्य होऊ र यसैले त्यसमा ममता रहित भएर तथा मोहशोक को ज्वरले रहित भएर युद्ध गर। यस्तो गर्नाले तिम्रो त्यसमा आसक्ति हुँदैन, र तिम्रो अन्तःकरण पनि शुद्ध हुनेछ र लोकसंग्रह पनि हुनेछ॥३०॥

–★–★–★–

**ये मे मतमिदं नित्यमनुतिष्ठन्ति मानवाः।**
**श्रद्धावन्तोऽनसूयन्तो मुच्यन्ते तेऽपि कर्मभिः॥**

**जुन कुनै मनुष्य दोषदृष्टिले रहित र श्रद्धायुक्त भएर मेरो यस मतलाई सदा अनुसरण गर्दछन्, ती सम्पूर्ण कर्महरूबाट छुट्‌दछन्॥३१॥**

एतेन 'अन्तः प्रविष्टः शास्ताजनानां, सर्वात्मा, एष एव साधुकर्म कारयति तं यमेभ्यो लोकेभ्यो उन्निनीषते, एष एवासाधुकर्मकारयति तं यमेभ्यो लोकेभ्यो लोकेभ्योऽधो निनीषते। स कारयेत् पुण्यमथापि पापं न तावता दोषवानीषिताऽपि इत्यादि श्रुतिशतसिद्धं परमेश्वराधीनम् सर्वात्मकर्त्तृत्वं, तदपर्णबुद्धया च कृतं कर्म दोषस्पर्शाय न भवतीति भगवता स्वमतमुक्तमिदानीं श्रद्धयेदमनुतिष्ठतां गुणमननुतिष्ठताञ्च दोषमाह–ये मे मतमिति द्वाभ्याम्। इदं पूर्वश्लोके कर्मविषयं मम मतं नित्यं श्रुतिस्मृतिभिर्निर्णीतं

श्रुतिमा भनेको छ- 'अन्तः.....दोषवानीषिताऽपि।' अर्थात् मनुष्यहरूको हृदयमा प्रवेश गरेर परब्रह्म उनीहरूको शासन गर्ने वाला हुन। ती सबैको आत्मा हुन। त्यही(परब्रह्म) त्यस मनुष्यबाट जसलाई यस लोकबाट माथि लैजाने इच्छा हुन्छ राम्रो कर्म गराउँदछ। उही(परब्रह्म) त्यस मनुष्य जसलाई यस लोक बाट तल झार्ने इच्छा हुन्छ, नराम्रो कर्म गराउँदछ। त्यो पुण्य पाप गराएर पनि दोषको भागी हुँदैन, किनकी शासनकर्त्ता हो। यस्तो सैकडौं श्रुतिहरूबाट यो कुरा सिद्ध छ कि सबै जीवहरूको कर्त्तव्य परमेश्वरको अधीन छ र परमेश्वरमा अर्पण बुद्धिले गरिएको कर्ममा दोषको लेश मात्र पनि रहँदैन। यस्तो आफ्नो मत भगवान्‌ले पछाडिको श्लोकमा स्थापित गर्नुभएको छ। अब अगाडिका दुई श्लोकहरूमा यस मतमा श्रद्धा गरेर कर्म गर्नेहरूका गुण र कर्म

सनातनं तुभ्यमुपदिष्टं, ये केऽपि मानवाः कर्ममात्राधिकरिणः श्रद्धावन्तः भगवतोक्तं शास्त्रनिर्णीतिवैतदिति विश्वासवन्तः अनसूयन्तः 'असूया दोषारोपो गुणेष्ववि' सा चेह 'निराशीर्निर्ममो भूत्वा युद्धयस्वे'ति काममममताहीनं विधाय तस्य प्रयोजनशून्ये युद्धे प्रवर्त्तनं न समीचीनमिदं मतमित्येवं रूपतामकुर्वन्तोऽनुतिष्ठन्ति, तेऽपि कर्मभिः शुभाशुभैर्मुच्यन्त ।

नगर्नेहरूका दोष बताउनु हुन्छ। हे अर्जुन! श्रुतिस्मृतिहरू द्वारा निश्चित र सनातन कर्म विषयक आफ्नो मतलाई मैले तिमीलाई उपदेश दिएँ। जुन कुनै पनि कर्ममात्रको अधिकारी मनुष्य श्रद्धाको साथ अर्थात् यो विश्वास गरेर कि भगवान्ले भन्नुभएको मत नै दोषारोपण गरिएको असंग कर्महरूलाई गराउँदछ, त्यो पनि शुभाशुभ कर्महरूबाट छुट्दछ। दोषारोपण गर्नु यहाँ यस प्रकार हो कि जस्तो भगवान्ले जुन भन्नुभयो कि 'निराशीर्निर्ममो युध यस्व' यहाँ ममताहीन र कामनाहीन भएर उपदेश गरी प्रयोजनशून्य युद्धमा अर्जुनलाई लगाउनु भगवान्को लागि उचित भएन, इत्यादि।

-★-★-★-

## ये त्वेदभ्यसूयन्तो नानुतिष्ठन्ति मे मतम् ।
## सर्वज्ञानविमूढांस्तान्विद्धि नष्टानचेतसः ॥

**परन्तु जुन मनुष्य मलाई दोषारोपण गर्दै मेरो यस मतको अनुसार चल्दैनन् ती मूर्खहरूलाई तिमी सम्पूर्ण ज्ञानहरूमा मोहित र नष्ट भएको नै मान॥३२॥**

ये तु एतन्मम मतं अभ्यसूयन्तो दोषारोपं कुर्वन्तो नानुतिष्ठन्ति नानुवर्त्तन्ते तान्सर्वज्ञानविमूढान् सर्वकर्मज्ञाने विशेषतो मूढान् यतोऽचेतसोऽशुद्धचित्तान्नष्टन् सदा संसारिणो विद्धि जानिहि।

जुन मान्छेहरू यस मेरो मतमा दोषारोपण गर्दै यसको अनुसरण गर्दैनन् ती अशुद्ध चित्त भएकाहरू, सबै कर्म ज्ञानले हीन अनभिज्ञलाई नष्ट नै जान्नु। अर्थात् उनीहरूलाई सदा संसारी संझिनु॥३२॥

-★-★-★-

## सदृशं चेष्टते स्वस्याः प्रकृतेर्ज्ञानवानपि ।
## प्रकृतिं यान्ति भूतानि निग्रहः किं करिष्यति ॥

**सबै प्राणी प्रकृतिमा प्राप्त हुन्छन् अर्थात् आफ्नो स्वभावको परवश भएर कर्म गर्दछ। ज्ञानवान् पनि आफ्नो प्रकृतिको अनुसार चेष्टा गर्दछ। फेरि यसमा कसैको हठ के गर्दछ॥३३॥**

नन्वेवं शास्त्रप्रतिपादितं तव मतं सर्वे कुतो नानुतिष्ठन्ति शास्त्ररूपाज्ञाप्रतिकूलाः कथं भवन्तीत्यपेक्षायामाह–सदृशमिति। प्रकृतिर्हि पूर्वजन्मकृतगुणानुकूलं शुभाशुभ–कर्मसंस्कारेणेह जन्मन्यभिव्यक्त स्वभावविशेषस्तस्याः स्वस्याः प्रकृतेः स्वभावस्य सदृशं स्वभावानुकूलमिति यावत् ज्ञानवानपि वेदस्मृतिपुराण–शब्दार्थज्ञानवानपि चेष्टते, किं पुनर्वक्तव्यं मूर्खः प्रकृतेः सदृशं चेष्टत इति ? तस्मात् भूतानि सर्वे प्राणिनः प्रकृतिमुक्तरूपां यान्ति प्राप्नुवन्ति स्वभावस्य वशे भवन्तीत्यर्थः। निग्रहः शास्त्रीयाज्ञा किं करिष्यति। अनादिविषयवासनादूषितचेतसां सर्वकाम–त्यागपूर्वकमय्यर्पणबुद्धिर्न जायते इत्यर्थः।

यदि यस्तो कुरा हो भने जस्तो कि हजुर भन्नुहुन्छ त सबै शास्त्रहरूबाट प्रतिपादित हजुरको मतको अनुकूल मान्छेहरू किन हिंड्दैनन्? शास्त्रको आज्ञाको प्रतिकुल किन हिंड्दछन्? यस प्रश्नको उत्तर भगवान् दिनुहुन्छ- पूर्वजन्ममा गरिएको कर्मको गुणहरूको अनुकूल शुभ र अशुभ कर्मको संस्कारद्वारा यस जन्ममा प्रकट भएको जुन स्वभाव हुन्छ त्यसैलाई प्रकृति भनिन्छ। वेद, स्मृति, पुराणको शब्दार्थको जानकार पनि यस आफ्नो प्रकृतिको अनुरूपनै हिंड्दछ। अर्थात् जस्तो त्यसको प्रकृति छ त्यस्तो नै कर्म गर्दछ, भने फेरि मूर्खहरूको विषयमा त के नै भन्नु पर्दछ र? ती त आफ्नो प्रकृतिको अनुकूल नै हिंड्नेछन्। यसैले जीवमात्र आफ्नो प्रकृतिको वा स्वभावको वशमा हुन्छ। यस्तो अवस्थामा निग्रह वा शास्त्रको आज्ञा के नै गर्न सक्दछ र? भाव यो हो कि अनादि विषयवासनाले दूषित चित्तभएकाहरूको सबै कामना त्याग पूर्वक मलाई कर्म अर्पण गर्ने बुद्धि हुँदैन। अर्थात् सर्वकामनाहरू लाई छोडेर आफ्नो कर्मलाई ती मलाई नै अर्पण गर्न सक्दैनन्॥३३॥

-★-★-★-

**इन्द्रियस्येन्द्रियस्यार्थे रागद्वेषौ व्यवस्थितौ।**
**तयोर्न वशमागच्छेत्तौ ह्यस्य परिपन्थिनौ॥**

**इन्द्रिय-इन्द्रियको अर्थमा अर्थात् प्रत्येक इन्द्रियको विषयमा राग र द्वेष लुकेर बसेका छन्। मनुष्यले ती दुवैको वशमा हुनुहुँदैन, किनकी ती दुबै नै यसको कल्याणमार्गमा विघ्न गर्ने महान् शत्रु हुन्॥३४॥**

यद्येवं सर्वे प्रकृतिं यान्ति तर्हि प्रकृतिशून्यो न कोऽप्यस्ति। तथात्वे गुरुशास्त्रोपदेशस्य वैयर्थ्यं प्रसज्येतेत्यत आह- इन्द्रियस्येति। इन्द्रियस्येति वीप्सया श्रोत्रादिज्ञानेन्द्रियस्य वागादिकर्मेन्द्रियस्य च अर्थे शब्दादिविषये वचनादौ कर्मणि च रागद्वेषौ व्यवस्थितौ। स्वानुकूले मधुरादौ रागः कामः, प्रतिकूले परुषादौ द्वेषः क्रोधः इति प्राचीन-वासनानुसारेण सर्वेषां व्यवस्थितौ स्वभावसिद्धौ। गुरुशास्त्रोपदेशस्तु तयो रागद्वेषयोर्वशं न गच्छेदित्येवं ततो निवर्त्तयति। किमर्थं ? हि यस्मात्तौ रागद्वेषौ अस्य मुमुक्षोः परिपन्थिनौ पथिकस्योत्पथनयनेन सर्वस्वहारि चौरवत् ज्ञानभक्तिरूपमोक्षमार्गात्प्रच्याव्यापथे विषयप्राप्तिसाधने नीत्वा तत्राऽसक्तं कृत्वा मोक्षसाधनसर्वस्वहारिणौ। तत्र यथा राजभटः पथिकं चौरवशं प्राप्नुवन्तं दृष्ट्वा ततो प्रति-वार्य्य सुमार्गे प्रवर्त्तयति, तथा शास्त्राचार्योपदेशो विषये रागद्वेषवशं गच्छन्तं मुमुक्षुं ततो वारयित्वा मोक्षप्राप्तिहेतुभूते परमेश्वराराधने सुमार्गे प्रवर्त्तयति । अतो न गुरुशास्त्रो-पदेशस्य वैय्यर्थम्॥३४॥

**यदि सबैजना प्रकृतिको वशमा छन् र कुनै पनि त्यसबाट रहित वा स्वतन्त्र छैन भने त गुरु र शास्त्रको उपदेश व्यर्थ भयो यस शंकाको उत्तर भगवान् यस प्रकार दिनुहुन्छ-**

**आँखा, कान आदि ज्ञानेन्द्रियहरूको र वाक् आदि कर्मेन्द्रियहरूको आफ्नो शब्दादि विषयहरूमा र वचनादि कर्महरूमा रागद्वेष स्वभावले नै सिद्ध छ। अर्थात् आफ्नो अनुकूल कोमल र मीठो वस्तुहरूमा राग वा प्रेम र आफ्नो प्रतिकूल कठिन र नमिठो वस्तुहरूमा द्वेष वा क्रोध स्वभावैले अर्थात् प्राचीन वासनाको अनुसार सबैलाई हुन्छ। गुरु र शास्त्रको उपदेश यही हो कि यी रागद्वेषहरूको वशमा मनुष्य पर्नुहुँदैन। किनकी यी रागद्वेष, सर्वस्व हरण गर्ने चोरको जस्तो, मुमुक्षु पथिकलाई भ्रष्ट गरेर ज्ञान, भक्तिरूप मोक्षको मार्गबाट झारिदिन्छन्, र विषयको प्राप्तिको साधनरूप नराम्रो बाटो मा हिंडाएर र त्यसमा आसक्ति उत्पन्न गराएर मोक्षको साधनरूप सर्वस्व हरण गर्दछन्। जस्तो राजाको पुलिस, बाटो हिंड्नेलाई चोरको वशमा परेको देखेर त्यसलाई त्यस बाटो बाट हटाएर राम्रो बाटो देखाउँदछ, त्यस्तै गरी शास्त्र र आचार्यको उपदेश राग र द्वेषको वशमा भईरहेका मोक्षार्थिहरूलाई त्यसबाट हटाएर वा रोकेर मोक्षप्राप्तिको कारणरूप परमेश्वरको आराधनाको राम्रो बाटोमा लगाउँदछन्। यसैले गुरु र शास्त्रहरूको उपदेश व्यर्थ होईन॥३४॥**

-★-★-★-

**श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।**
**स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः॥**

**राम्रो सँग आचरण गरिएको अर्काको धर्मभन्दा गुणरहित आफ्नो धर्म नै अति उत्तम हो। आफ्नो धर्ममा त मर्नु पनि कल्याणकारक छ र अर्काको धर्मले भय (डर,त्रास) दिन्छ॥३५॥**

ननु शास्त्राचार्योपदेशेनासन्मार्गान्निवृत्तस्येश्वराराधनाय निर्हिंसकसात्त्विकयदृच्छालाभसंतोषवन्यान्नादि जीवनरूपो मुनिधर्म एव श्रेयानिति। स्वधर्मः स्ववर्णाश्रमनिबन्धनः शास्त्रविहितोयो धर्मः स विगुणोऽपि कियद्गुणहीनोऽपि सुष्ठु सर्वाङ्गतयाऽनुष्ठितात्परधर्मादन्यवर्णाश्रमोद्देशेन विहिताद्धर्मात् श्रेयान् प्रशस्यतरः, अतः स्वधर्मे स्थितस्य

**यहाँ यो शंका हुन सक्दछ कि गुरु र शास्त्रको उपदेश असत् मार्गबाट हटाएर ईश्वराराधनको लागि निर्हिंसक र सात्विक धर्ममा लगाउनु हो। यसले यथा लाभ सन्तोष को आश्रय लिएर बनको अन्नादिहरूले मुनिहरूको जस्तो जीवन धारण गर्नु नै श्रेष्ठ लाग्दछ। फेरि हिंसा युक्त राजस र तामस युद्धमा जुन क्षत्रियहरूको धर्म हो, त्यसमा प्रवृत्त हुनाले के लाभ? यसैको निराकरण भगवान् अब गर्नुहुन्छ-**

**आफ्नो वर्णाश्रमको शास्त्र विहित धर्म कर्म गुणवाला हुँदा**

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

निधनमरणमपि श्रेयः, अतिशयेन प्रशस्यम्। कस्मात् परधर्मे जीवनादपि यतः परधर्मो भयावहः परस्यान्यस्यान्येनानुष्ठितः शास्त्रीयोऽपि धर्मः तद्रुचिरपि पापवत् भयावहः नरकादिभवं तत्फलमावहति प्रापयतीति तथा 'पर्युदस्तो हि यो यस्माच्छास्त्रीयादपि कर्मणः। न स तत्राधिकारी स्याद्दानादौ दीक्षितो यथेति शास्त्रनियमात्॥३५॥

अथवा त्यसको सांगोपांग आचरण गर्न नसक्दा पनि पूर्णरूपले र सुचारू रीतिले प्रतिपालित अरुवर्णहरूको विहित धर्मभन्दा अधिक श्रेष्ठ हुन्छ। यसैले आफ्नो धर्ममा स्थित भएर मर्नु पनि अरुको धर्ममा रहेर बाँच्नुभन्दा श्रेष्ठ हुन्छ। यसको कारण यो हो कि अर्काको धर्मले भय दिन्छ किनकी अर्काको धर्म मा रुचि, पापको नै समान, नरकमा पुर्‍याउनेवाला हो। शास्त्र पनि भन्दछ कि- 'पर्युदस्तो.......यथा॥'
अर्थात् जस्तो जुन पुरुष शास्त्र सम्मत कर्म छोडिदिन्छ भने त्यो दीक्षित भए पनि दानादि कर्ममा अधिकारी हुन सक्दैन॥३५॥

-★-★-★-

## अर्जुन उवाच

**अथ केन प्रयुक्तोऽयं पापं चरति पूरुषः।**
**अनिच्छन्नपि वार्ष्णेय बलादिव नियोजितः॥**

**अर्जुन भन्दछन्-हे कृष्ण! त्यसो हो भने फेरि यो मनुष्य स्वयं न चाहँदा-न चाहँदै जबर्जस्ती लगाईएको जसरी कसबाट प्रेरित भएर पापको आचरण गर्दछ॥३६॥**

'परमधर्मो भयावह? इत्युक्तं तेन नरकादिभयहेतुः पाप सूचितम्। इदानीं पापाचारस्य हेतुजिज्ञासुरर्जुन उवाच-अथेति। अथ शब्दः प्रश्नान्तरे। परधर्मरुचिर्भयावहेति त्वदुक्तं मयाऽवधारितं किञ्चिदन्यत्पुच्छामीत्यर्थः हे वार्ष्णेय! परधर्मरुच्युपलक्षितं नरकादिफलकं पापं कर्त्तुमनिच्छन्नपि केन प्रयुक्तः प्रेरितोऽयं पुरुषः पापं चरति आचरति। तत्रापि बलादिव नियोजितः इति मे ब्रूहि इति शेषः।

अरुको धर्म भयावह हुन्छ, त्यसले नरकादिको भय हुन्छ, यो जानेर अर्जुन पापाचारको कारण जान्ने इच्छा ले सोध्दछन् कि हे भगवन्! परधर्ममा रुचि भयावह छ, यो त मैले बुझें। अब अर्को कुरा सोध्दैछु। त्यो यो हो कि मनुष्य नरकादि फलवाला पापहरू गर्नमा इच्छा नभएर पनि कोद्वारा प्रेरित भई त्यस्तो कर्म गर्दछन्। यस्तो लाग्दछ कि कोही त्यस मनुष्यलाई जबर्जस्ती ती पाप कर्महरूमा लगाउँदछ। यस कुरालाई मसँग भन्नुहोस॥३६॥

-★-★-★-

## श्रीभगवानुवाच

**काम एष क्रोध एष रजोगुणसमुद्भवः।**
**महाशनो महापाप्मा विद्ध्येनमिह वैरिणम्॥**

**श्रीभगवान् भन्नुहुन्छ- रजोगुणबाट उत्पन्न भएको यो काम नै क्रोध हो, यो धेरै खानेवाला अर्थात् भोगहरूबाट कहिल्यै नअघाउने र ठूलो पापी हो, यसैलाई नै तिमी यस विषयमा शत्रु भनेर जान्नु॥३७॥**

एवं पृष्टो 'ध्यायतो विषयानि'त्यादिना 'संगात्संजायते काम' इत्युक्त 'इन्द्रियस्येन्द्रिस्यार्थे' इत्यत्र रागशब्देनाभिहितः काम एव पापाचारहेतुर्महाञ्छत्रुरित्युत्तरं श्रीभगवानुवाच। यस्त्वया पापाचरणे प्रयोजकः पृष्टः स एव इन्द्रियार्थे रागपर्यायः काम एव। ननु क्रोधोऽपि हि साद्यनर्थहेतुरुक्त इति चेत्सत्यं?

अर्जुन ले यस्तो सोधेपछि भगवान् पापचारको कारण कामलाई नै, जसलाई राग पनि भनिन्छ भन्नुहुन्छ, सबै अनर्थहरूको मूल र ठूलो शत्रु हो। यस भन्दा पहिले पनि 'ध्यायतो०' इत्यादि श्लोकहरूमा यस कामको उल्लेख गरिसक्नु भएको छ। भगवान् भन्नुहुन्छ कि त्यो काम नै जसको नाम राग पनि हो, पाप कर्महरूको प्रायोजक हो। त्यही मनुष्यलाई पाप कर्ममा लगाउँदछ। यहाँ यो

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

सोऽपि न ततो भिन्नः, किन्तु 'क्रोध एष' इति काम एव केनचित्प्रतिहतः क्रोधरूपेण परिणमते। अतः क्रोधोऽपि काम एव। कामजय एव क्रोधजयः। त तज्जये पृथक् प्रयत्नः कर्त्तव्य इति भावः। तज्जयोपायदर्शनाय तत्कारणमाह– रजोगुण समुद्भव इति। रजोगुणात्सम्यगुद्भवति उत्पद्यते इति रजोगुणसमुद्भवः। एतेन सत्त्वगुणवृद्ध्या रजोऽभि–भवद्वारेण कामजयो भवेदिति सूचितं, तस्य दुर्जयतामा–महाशन इति। महदशनं यस्य बहुधनधान्यस्त्रीराज्यला–भेऽपि हविषाऽग्निरिवबर्द्धते न तु शाम्यति। अतएव महापाप्मा केनचित्निवारितः क्रोधात्मना परिणमय्य पितृभ्रातृगुर्वादिहिंसनमपि दोषमगणय्य कारयति। अत एनमिह श्रेयोमार्गे वैरिणं विद्धि॥३७॥

शंका हुन सक्दछ कि क्रोध पनि त हिंसादि अनेक अनर्थहरूको कारण भनिएको छ भने त्यसलाई किन छोडिदिनुहुन्छ? यसको उत्तर दिंदै भगवान् भन्नुहुन्छ कि क्रोध कामदेखि भिन्न होईन। बरु काम नै रोकावट भएपछि क्रोधमा बदलिन्छ। यसैले कामलाई जीते पछि क्रोधलाई जित्न यत्न गरिरहनु पर्दैन। अब कामलाई जीत्ने उपाय भन्नको लागि त्यसको कारण उल्लेख गर्नुहुन्छ–

यो काम रजोगुणबाट उत्पन्न हुन्छ। यसको आशय यो हो कि सत्वगुणको वृद्धि गरेर रजोगुणलाई दबाएमा कामलाई जीत्न सकिन्छ। फेरि कामको दुर्जयता भन्नुहुन्छ– यो काम धेरै पेटू छ अर्थात् धेरै धन, धान्य, स्त्री, राज्य इत्यादि पाएर पनि यसको पेट भरिंदैन, बरु जस्तो आगोमा हविष्य हाल्दा त्यो प्रज्वलित हुन्छ, निभ्दैन, त्यस्तै धन धान्य पाउनाले यो काम शान्त हुनुको साटो बढ्दै जान्छ। यसैले यो धेरै पापी छ। काँही कसैले रोक्यो भने क्रोधको रूपधारण गरेर, माता-पिता, भ्राता, गुरु आदिको पनि यो हिंसा गर्दछ र दोषको पर्वाह गर्दैन। यसैले यसको श्रेय वा मोक्ष मार्गको शत्रु जान्नु॥३७॥

–★–★–★–

**धूमेनाव्रियते वह्निर्यथादर्शो मलेन च।**
**यथोल्बेनावृतो गर्भस्तथा तेनेदमावृतम्॥**

**जसरी धूवाँबाट अग्नि र मैलो ले दर्पण छोपिन्छ तथा जसरी तन्तुहरूले गर्भलाई ढाकिरहन्छ, त्यसरी नै त्यस कामको द्वारा यो ज्ञान ढाकिईरहेको हुन्छ॥३८॥**

तस्य वैरित्वम् दृष्टान्तैरुपपादयति–धूमेनेति। यथा धूमेन वह्निराव्रियते, आच्छाद्यते यथा वा दर्शो मलेन, यथा च उल्वेन गर्भवेष्टनेन चर्मणा जरायुणा गर्भ आवृतः, तथा तेनेदमावृतम्।

दृष्टान्तहरूको द्वारा कामलाई देखाउनु हुन्छ–

जसरी धूँवा बाट अग्नि, मैलबाट दर्पण, र छालाको झिल्लीले गर्भ छोपिईरहन्छ, त्यसै प्रकार यस कामबाट पनि ज्ञान ढाकिएको छ॥३८॥

–★–★–★–

**आवृतं ज्ञानमेतेन ज्ञानिनो नित्यवैरिणा।**
**कामरूपेण कौन्तेय दुष्पुरेणानलेन च॥**

**हे अर्जुन! यस अग्निको समान कहिल्यै पूर्ण न हुनेवाला कामरूप ज्ञानिहरूको नित्य वैरीको द्वारा मनुष्यको ज्ञान ढाकिएको छ॥३९॥**

तदिदं शब्दार्थं स्वयमेव वदन् दार्ष्टान्तं स्पष्टयति– आवृतमिति। एतेन कामरूपेण ज्ञानिनो नित्यवैरिणा धर्मभूतं ज्ञानमावृतं, कामरूपेण किं रूपेण? हे कौन्तेय! दुःपूरेण दुःखेन पूर्यते इति दुःपूरस्तेन अनलेन चेति। च इवार्थे। अनलेन वह्निवेत्यर्थः। यथानलो हविषा न पूर्य्यते, तथाऽयं विषयभोगेन न पूर्य्यते इत्यर्थः। अज्ञस्य तु विषभोगकाले कामः

अब माथिको श्लोकमा जुन 'इदम्' शब्द आयो, त्यसको अर्थ स्वयं गर्दै दृष्टान्त(उपमेय) लाई भगवान् स्पष्ट गर्नुहुन्छ–

यो काम ज्ञानिहरूको नित्य वैरी हो। यसले उनीहरूको धर्मभूत ज्ञानलाई छोपेको छ। यो काम अग्निको जस्तो दुःपूर छ। अर्थात् जस्तो अग्निमा कति नै हविष्य हालियोस तर कहिले पनि पूरा हुँदैन, त्यसै प्रकार यस कामरूपी अग्निमा जतिसुकै विषयभोग रूपी हवि हालियोस, तर त्यसको पेट भरिंदैन। विषयको भोग समयमा अज्ञानीहरूलाई यो काम सुख दिनेवाला जस्तो लाग्दछ, तर परिणाम मा अर्थात् केवल जब ती त्यसको दुःख भोग्न

सुखहेतुत्वेन प्रिय एव प्रतीयते, परिणामे दु:खानुभवकाले वैर्य्यनुभूयते। ज्ञानीतु भोगसमयेऽप्येनं दु:खमेव जानाति, किं पुन: परिणामेऽतो ज्ञानिनो नित्यवैरिणेत्युक्तम्।

लाग्दछन् तब नै ती त्यसलाई आफ्नो शत्रुको समान अनुभव गर्न थाल्दछन्। तर ज्ञानी त विषयभोगको समयमा पनि कामलाई बैरी नै मान्दछन्, भने फलभोगको समयमा त मान्ने नै भए। यसैले काम ज्ञानीहरूको नित्य वैरी हो, यस्तो भन्नुभयो॥३९॥

-★-★-★-

**इन्द्रियाणि मनो बुद्धिरस्याधिष्ठानमुच्यते।**
**एतैर्विमोहयत्येष ज्ञानमावृत्य देहिनम्॥**

**इन्द्रिय,मन र बुद्धि- यी सबै यसको वासस्थान भनिन्छ। यो काम यी मन बुद्धि र इन्द्रियहरूको द्वारा नै ज्ञानलाई छोपिदिएर जीवात्मालाई मोहित गर्दछ॥४०॥**

एवम्भूतस्य वैरिण: कामस्य अननायाधिष्ठानमाह– इन्द्रियाणीति। एतैरिन्द्रियमनोबुद्धिभिरेष काम: ज्ञानं यथार्थानुभवमावृत्य देहिनं विमोहयति। विवेक नाशयित्वा सुखदु:खाभिनिवेशे योजयति। वस्तुस्वरूपान्यथा ज्ञानं मोह:, तथा च कामविमोहित: पुरुष: दु:खहेतुमपि विषयं सुखमेव मत्वा तत्प्राप्तावेव सर्वथा यतते॥४०॥

यस्तो वैरी कामलाई नाश गर्नको लागि त्यसको अधिष्ठान अथवा बस्ने ठाँऊ बताउनु हुन्छ- यिनै(मन,बुद्धि आदि)को द्वारा ज्ञानको यथार्थ अनुभवलाई ढाकेर यो मनुष्यमा मोह उत्पन्न गराउँदछ। अर्थात् उनीहरूको विवेक को नाश गरेर अयथार्थ ज्ञान उत्पन्न गरेर उनीहरूलाई सुख दुःखको अनुभवमा लगाउँदछ। वस्तुको यथार्थ स्वरूपभन्दा अन्यथा वा उल्टो ज्ञानलाई नै मोह भनिन्छ। र कामले मोहित पुरुष दुःखको हेतुलाई पनि सुखको नै विषय मानेर त्यसको प्राप्तिको लागि सदा सबै प्रकारले प्रयत्न गर्दछ॥४०॥

-★-★-★-

**तस्मात्त्वमिन्द्रियाण्यादौ नियम्य भरतर्षभ।**
**पाप्मानं प्रजहि ह्येनं ज्ञानविज्ञाननाशनम्॥**

**यसैले हे अर्जुन! तिमी पहिले इन्द्रियहरूलाई वशमा गरेर यस ज्ञान र विज्ञानलाई नाश गर्ने महान् पापी कामलाई अवश्य नै बलपूर्वक मारिदेऊ॥४१॥**

अधिष्ठाननिरूपणं तन्निगहपूर्वकं कामजयार्थमेव तदेवाह– तस्मादीति। यस्मादिन्द्रियाधिष्ठित एव कामोविमोहकस्तस्माद्धे भरतर्षभ। त्वमादाविन्द्रियाणि नियम्य विषयेभ्यो निवर्त्य ततो ज्ञानविज्ञाननाशनं ज्ञानं गुरुशास्त्रोपदेशजं विज्ञानेमननानन्तरनिदिध्यासनजं तयोर्नाशनमत एव पाप्मानं सर्वपापहेतु त्वात्पापरूपमेनं कामं प्रजहि प्रकर्षेण नाशय। यथा पुनर्नोद् भवेदित्यर्थ:।

कामको अधिष्ठान यसैले बताउनु भयो कि त्यसको निग्रह गरेर कामलाई जित्न सकियोस। भगवान् यसै कुराको वर्णन गर्नुहुन्छ–
इन्द्रियहरूमा अधिष्ठित भएर नै काम मोहलाई उत्पन्न गर्दछ। यसैले हे अर्जुन! तिमि आरम्भमा यी इन्द्रियहरूलाई विषयबाट रोकेर तत्त्वज्ञान र विज्ञानको नाशक, अतएव सबै पापहरूको कारण हुनाले पाप रूप, कामलाई राम्रो सँग नष्ट गर, जसले यो फेरि उत्पन्न नहोस। ज्ञान त्यो हो जुन गुरु र शास्त्रको उपदेशले पैदा हुन्छ र विज्ञान त्यो हो जुन उपदेशलाई मनन गरे पछि निदिध्यासन(ध्यान) द्वारा उत्पन्न हुन्छ॥४१॥

-★-★-★-

**इन्द्रियाणि पराण्याहुरिन्द्रियेभ्य: परं मन:।**
**मनसस्तु परा बुद्धिर्यो बुद्धे: परतस्तु स:॥**

**इन्द्रियहरूलाई स्थूल शरीरभन्दा पर यानी श्रेष्ठ, बलवान् र सूक्ष्म भन्दछन्; यी इन्द्रियहरूभन्दा पर मन छ, मन भन्दा पनि**

**पर बुद्धि छ र जो बुद्धिभन्दा पनि अत्यन्त पर छ त्यो आत्मा हो ॥४२ ॥**

एवं ज्ञानविज्ञानविरोधिकामनाशने द्वारभूतेन्द्रियनियमनमुक्तमिदानीं ज्ञानविरोधेऽधिष्ठानभूतानीन्द्रियाणि क्रमतः प्रधानानि प्रदर्श्य सर्वप्रधानभूतं कामं हन्यादित्युपदिशन्नुपसंहरति–इन्द्रियाणीति द्वाभ्याम्। ज्ञानवरणे इन्द्रियाणि पराणि प्रधानकारणान्याहुः। यतः इन्द्रियेषु विषयप्रवणेषु आत्मनि ज्ञानं न जायते। इन्द्रियेभ्यः परंमनः इन्द्रियेषूपरतेष्वपि मनसि विषयप्रवणे नात्मनि ज्ञानं प्रकाशते। मनसस्तु पराबुद्धिः मनसि विषयविमुखे सत्यपि विपरीताध्यवसायवत्यां बुद्धौ सत्यां नात्मज्ञान प्रकाशते। यो बुद्धेः परतस्तु सः स पूर्वोक्तः कामः यत इन्द्रियादिषु बुद्धिपर्यन्तेषु ज्ञानविरोधिषूत्तरोत्तरप्रधानभूतेषु कभञ्चिद्विषयेभ्यः उपरेतेष्वपि रजोगुणसमुद्भवोऽनादिसूक्ष्माभिलाषरूपः कामः मनोबुद्धो विषयसंकल्पाध्यवसायिन्यौ विधायात्मज्ञानमाच्छादयति। अतो बुद्धेः परः सर्वज्ञानविरोधिप्रधानभूतो वैरी स काम एवेत्यर्थः । केचित् यस्तु बुद्धेः परस्तत्साक्षित्वेनावस्थितः सर्वान्तरः स आत्मा विमोहयतिदेहिनमिति। देहिशब्दोक्त आत्मा स इति परामृश्यते इत्येवं व्याख्यायन्ते, तदसंगतम्। व्यवहितस्य देहिनः परामर्शासम्भवात्। 'पाप्मानं प्रजहिह्येनं, जहि शत्रुं महाबाहो कामरूपमि'ति पूर्वोत्तरश्लोकयोः कामस्यैव प्रकृतत्वात् न ह्यनन्तरोक्तं विहाय व्यवहितस्य परामर्शं पण्डिताः कुर्वन्तीत्यलं विस्तरेण ॥४२ ॥

ज्ञान र विज्ञानको विरोधि कामको नाशका लागि त्यसको द्वारभूत इन्द्रियहरूको नियमन भन्नुभयो। अब ज्ञान को विरोधको आश्रयभूत इन्द्रियहरूको क्रमले प्रधानता देखाएर सबै भन्दा प्रधान कामलाई नष्ट गर्नुपर्दछ, यस्तो दुई श्लोकहरूमा उपदेश गरेर यो अध्याय समाप्त गरिन्छ–

ज्ञानलाई आवृत्त गर्नमा इन्द्रियहरू नै प्रधान कारण हुन्, किनकी जब सम्म इन्द्रियहरू विषयको तर्फ नै उन्मुख रहन्छन् तब सम्म आत्मा मा ज्ञानको प्रकाश हुँदैन। इन्द्रियहरू भन्दा पर मन छ। यसैले इन्द्रियहरू यदि विषयहरू बाट हटे भने पनि यदि मन त्यतै लागेको छ भने आत्मामा ज्ञानको प्रकाश हुँदैन। फेरि मन भन्दा पर बुद्धि छ। यसैले मन विषयहरूबाट अलग भए पनि बुद्धि मा विपरीत अध्यवसाय(निश्चय) हुँदा आत्मामा ज्ञानको प्रकाश हुँदैन। र जुन बुद्धिभन्दा पनि पर छ, त्यो पहिले भनिएको काम हो। किनकी उत्तरोत्तर प्रधानभूत इन्द्रियहरूबाट आरम्भ गरेर बुद्धि पर्यन्त जो ज्ञानका विरोधि छन्, ती कुनै तरीकाले विषयहरूबाट उपरत होउन पनि, अर्थात् हटे पनि रजोगुणले उत्पन्न अनादि, र सूक्ष्म अभिलाष रूप काम विषयक संकल्प र निश्चयलाई मन र बुद्धि को विषयमा अवश्य लगाएर आत्मज्ञानलाई आच्छादित गर्दछ, अतएव बुद्धिभन्दा पनि सबै ज्ञानको विरोधी प्रधानभूत काम नै हो।

कोही कोही 'सः' को अर्थ काम नगरेर, जो बुद्धि भन्दा पर अर्थात् त्यसको साक्षी सबैको अन्तर्यामी परमात्मा नै देही शब्दबाट भनिने जीवात्मालाई मोह गराउँदछ, यस्तो अर्थ गर्दछन्। तर यो उनीहरूको भूल हो, किनकी देही या आत्माको यहाँ प्रसंग नै छैन। पूर्वको श्लोकमा काम को नै उल्लेख छ, तर अरु परको श्लोकमा पनि त्यसैको । यसैले बीचको श्लोकमा अर्कै विषय आत्मा आईपुग्नु ठीक लाग्दैन। पण्डितहरू अनन्तरमा(समीप पूर्वक मा) भनिएको विषयलाई छोडेर व्यवहित विषयको परामर्श(विचार) गर्दैनन् ॥४२ ॥

–★–★–★–

**एवं बुद्धेः परं बुद्ध्वा संस्तभ्यात्मानमात्मना।**
**जहि शत्रुं महाबाहो कामरूपं दुरासदम्॥**

**यस प्रकार बुद्धिभन्दा पर अर्थात् सूक्ष्म, बलवान् र अत्यन्त श्रेष्ठ आत्मालाई जानेर र बुद्धिको द्वारा मनलाई वशमा गरेर हे महाबाहो! तिमी यस कामरूप दुर्जय शत्रुलाई मारिदेऊ॥४३॥**

एवं ज्ञातस्वरूपाधिष्ठानबलस्य शत्रोर्हनने प्रयतितव्यमिति द्रढयति–एवमिति। एवमुक्तप्रकारेण बुद्धेः परं सूक्ष्मं वासनारूपं प्रधानं वैरिणं बुद्ध्वा आत्मानं मन आत्मना सात्त्विक्या बुद्ध्या संस्तभ्य कामावशगं कृत्वा मनोबुद्धिभ्यां वियुक्तं निर्बलं सन्तं कामरूपं शत्रुं जहिम्। हे महाबाहो! महान्तौ बाहू यस्य त्वं शत्रुनिग्रहणे समर्थः। यद्यपि दुरासदं दुःखेनासादनीयम् दुर्निग्राह्यमिति यावत् तथापि मयि सर्वाणि कर्माणि संन्यस्याध्यात्मचेतसेत्युक्तं सज्ञानं मदुपासनं तदेव महाबाहुद्वयं तेन बलान्निगृह्य जहि नाशयेत्यर्थः। इन्द्रियाद्यधिष्ठानं त्याजयेति वा॥४३॥

'ज्ञानसाधनभूतोऽपि कर्मयोगोऽधिकारतः।
स्वप्रसादाय निष्कामः प्राधान्येनेह कीर्त्तितः॥'

यस प्रकार शत्रुको स्वरूप, अधिष्ठान र बललाई जानेर त्यसको नाशमा लाग्नु पर्दछ। यसै आशयलाई दृढ गर्नुहुन्छ–

यस प्रकार बुद्धि भन्दा परको सूक्ष्म वासनालाई नै प्रधानशत्रु जानेर र सात्त्विक बुद्धिद्वारा मनलाई रोकेर अर्थात् मनलाई कामको वशबाट छुटाएर र यस रीतिले मन बुद्धिबाट त्यसलाई अलग गरेर कामरूप शत्रुलाई निर्बल बनाएर जीत।

यहाँ अर्जुनलाई 'महाबाहो' सम्बोधन यस अर्थले गर्नुहुन्छ कि तिमी ठूला बाहु(पाखुरा)वाला हौ, यसैले तिमी शत्रुलाई जित्न समर्थ छौ। यद्यपि यस कामरूप शत्रुलाई जीत्नु धेरै गाह्रो र दुष्कर छ, तथापि मलाई सबैकर्महरू अर्पण गरेर अध्यात्म बुद्धिद्वारा र पछाडि भनिएका ज्ञानको साथ मेरो उपासना रूप दुई ठूला बलवती भुजाहरूले शत्रुलाई पक्रेर उनीहरूको नाश गर, अथवा त्यसको अधिष्ठान इन्द्रियादिबाट अलग गरिदेऊ॥४३॥

श्रीभगवान्‌ले आ-आफ्नो अधिकार अनुसार निष्काम कर्मयोग को नै यस तेस्रो अध्यायमा प्रधानताले उपदेश दिनुभयो। यो निष्काम कर्मयोग नै ज्ञानको साधन हो र भगवान्‌को प्रसन्नताको कारण हो। यही नै यस अध्यायको तात्पर्य हो।

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां कर्मयोगो नाम तृतीयोऽध्यायः॥३॥**

--★--★--★--

ॐ श्रीपरमात्मने नमः

# अथ चतुर्थोऽध्यायः

## श्रीभगवानुवाच

**इमं विवस्वते योगं प्रोक्तवाहनमव्ययम् ।**
**विवस्वान्मनवे प्राह मनुरिक्ष्वाकवेऽब्रवीत् ॥**

श्रीभगवान्ले भन्नुभयो– मैले यस अविनाशी योग सूर्यसँग भनेको थिए; सूर्यले आफ्नो पुत्र वैवस्वत मनुसँग भने र मनुले आफ्नो छोरा राजा इक्ष्वाकुसँग भने ॥१ ॥

तृतीययाध्यायेऽमृदितकषायस्य मुमुक्षोः सहसा ज्ञानयोगेऽनधिकारात् ज्ञानवद्भ्रंशशंकावर्जितः कर्मयोग एव श्रेयोऽर्थः कार्यः। ज्ञानयोगाधिकारिणोऽपि फलकर्त्तृत्वत्यागपूर्वकं लोकसंग्रहायकर्मैव कर्त्तव्यमिति निर्णीतम्। इदानीं चतुर्थाऽध्याये कर्मयोगस्यैव ज्ञानानुसंधानप्रकारं ज्ञानफलकत्वं कर्मस्वरूपं तद्भेदांश्च वक्तुं श्रेष्ठजनाधिकारिकत्वेन परम्पराप्राप्तमित्युक्तकर्मयोगं प्रशंसन् श्रीभगवानुवाच– इममित्यादित्रिभिः। योऽयं कर्मयोगस्तुभ्यं मयोदितः, स त्वां युद्धेप्रोत्साहनायैवाधुनिकः प्रोक्त इति न मन्तव्यम्, किन्तु जगद्रक्षणाय मन्वन्तरादौ जगद्यात्रानिर्वाहकाय विवस्वते सूर्याय परम श्रेयः साधनतयेममेवाव्ययं योगमहं प्रोक्तवान्। विवस्वान्सूर्यो मनवे स्वपुत्राय सत्यव्रतायप्राह। मनुर्वैवस्वत इक्ष्वाकवे ज्येष्ठाय स्वपुत्रायाव्रवीत्।

**तेस्रो अध्यायमा यो भनिसकिएको छ कि मोक्षार्थी जसको पाप धोईएको छैन अर्थात् जो संसारी छ, ज्ञानको अधिकारी सहसा हुन सक्दैन। त्यसको लागि, ज्ञानवत् भ्रष्ट हुने शंकाले वर्जित, कर्मयोग नै श्रेष्ठ छ र त्यसले त्यही नै गर्नुपर्दछ। फेरि यो निर्णय पनि गर्नुभयो कि, ज्ञान योगको अधिकारीले पनि लोकसंग्रहको लागि त्यसको फल र कर्त्तापनको भावले रहित भएर कर्म गर्नु नै कर्त्तव्य हो। अब चौथो अध्यायमा यो भन्नुहुन्छ कि कर्म नै ज्ञान अनुसन्धानको बाटो हो र त्यसैको फल ज्ञान हो। फेरि कर्मको स्वरूप र त्यसको भेदहरूलाई पनि भन्नुहुनेछ। अब यस पहिलो श्लोकमा कर्मयोगको प्रशंसा गर्दै यो भन्नुहुन्छ कि त्यो परम्पराले प्राप्त छ र पूर्वमा श्रेष्ठ मनुष्य त्यसको अधिकारी भईसकेका छन्।**

**भगवान्ले भन्नुभयो– हे अर्जुन! तिमी यो नसोच्नु कि यो कर्मयोग आधुनिक हो र मैले केवल तिमीलाई युद्ध गर्नमा उत्साह दिनको लागि नै यसलाई भनेको हो। मन्वन्तरको आरम्भमा जगत्को रक्षाको लागि परम कल्याणको साधनरूप यस अव्यय कर्मयोगलाई मैले जगत्-यात्रालाई चलाउने विवस्वान् सूर्यलाई भनेको थिएँ। विवस्वान् सूर्यले आफ्नो पुत्र वैवस्वत मनुलाई र मनुले आफ्नो ज्येष्ठ पुत्र इक्ष्वाकुलाई यस कर्मयोगको उपदेश गरेका थिए॥१॥**

–★–★–★–

**एवं परम्परप्राप्तमिमं राजर्षयो विदुः।**
**स कालेनेह महता योगो नष्टः परन्तपः॥**

**हे परन्तप अर्जुन! यस प्रकार परम्परादेखि प्राप्त भएको त्यो योगलाई महर्षिहरूले जाने; तर त्यसको पछि त्यो योग धेरै समय देखि यस पृथ्वीलोकमा लुप्तप्राय भयो॥२॥**

एवमुक्तप्रकारेण शिष्टपरम्पराप्राप्तमिमं योगं राजर्षयो राजानश्च ते ऋषयश्च निमिसगरादिप्रभृतयो विधिना पित्रादिप्रोक्तं विदुः। अतोऽनादिवेदमूलत्वेनानादिरयमित्यभिप्रायः स एव महाप्रभावोऽयं योगः महता कालेनाधिकारिबुद्धिमान्द्याद्विच्छिन्नसंप्रदायतयेह लोके नष्टोदर्शनं यातः।

**माथि भनिएको रीतिले शिष्ट परम्पराद्वारा प्राप्त यस योगलाई निमि, सगर इत्यादि राजर्षिहरूले आफ्नो पिता इत्यादिबाट जाने। भन्नुको तात्पर्य यो कि यो कर्म योग वेद मूलक छ, यसैले अनादि छ। यो महा प्रभाव भएको कर्मयोग धेरै समय बितिसकेकोले र यसको अधिकारी मन्दबुद्धि हुनाले यस लोकबाट लुप्त भयो अर्थात् यसको सम्प्रदाय नष्ट भएको छ॥२॥**

–★–★–★–

## स एवायं मया तेद्य योगः प्रोक्तः पुरातनः।
## भक्तोऽसि मे सखा चेति रहस्यं ह्येतदुत्तमम्॥

**तिमी मेरो भक्त र प्रिय सखा हौ, यसैले त्यही नै पुरातन योग आज मैले तिमीलाई भनेको छु; किनकी यो धेरै नै उत्तम रहस्य हो अर्थात् गुप्त राख्नयोग्य विषय हो॥३॥**

यः पुरा विवस्वते प्रोक्त स एवायं पुरातनो योगो मयाऽद्य ते तुभ्यं प्रोक्तः। यतस्त्वं मे भक्तः सखा चासि अतएवोक्तः, नान्यस्मै प्रोक्त इत्यर्थः। अन्यस्मै कुतो नोक्तोऽत आह–हि यतः। एतज्ज्ञानमुत्तमं रहस्यं, अनधिकारिणो गोपनीयमित्यर्थः।

जुन कर्मयोगलाई मैले धेरै पहिले विवस्वान् सूर्यसँग भनेको थिएँ, त्यही पुरातन कर्मयोगलाई आज मैले तिमीलाई भने, कारण कि तिमी मेरो भक्त तथा मित्र हौ। अरु सँग भन्दिन कारण यो छ कि कर्मयोग को ज्ञान धेरै उत्तम रहस्यवाला छ अनधिकारीहरूबाट यसलाई लुकाएर राख्नु पर्दछ॥३॥

–★–★–★–

## अर्जुन उवाच
## अपरं भवतो जन्म परं जन्म विवस्वतः।
## कथमेतद्विजानीयां त्वमादौ प्रोक्तवानिति॥

**अर्जुनले सोधे– तपाईंको जन्म त अहिलेको हो र सूर्यको जन्म धेरै पहिलेको हो अर्थात् कल्पको आदिमा भईसकेको थियो। भने म यस कुरालाई कसरी जान्नु कि तपाईंले नै कल्पको आदिमा सूर्यलाई यो योग भन्नुभएको थियो॥४॥**

इमं विवस्वते योगं प्रोक्तवानहमिति भगवतो वचः सर्वेश्वरत्वेन (सर्वकारणत्वेन) प्रकृतिकालकर्मादि–नियन्तृत्वेनावस्थितस्य परस्य ब्रह्मणः स्वेच्छया वसुदेव–गृहेवतीर्णस्य जीवेष्वसम्भाविताश्चर्यरूपानेकचरितैर्ज्ञाता–नुभावोऽर्जुनः सम्भावितं जानन्नपि अनादिपापवासनादू–षितमतीनां भगवति वासुदेवे विपरीतभावनावतां तत्रेतर सजातीयजन्मकर्मबुद्धिमपाकरणाय भगवज्जन्मकर्मयाथात्म्यं भगवन्मुखेनैव निर्णाययितुमुक्तमसम्भावितमिव मन्वानोऽर्जुन उवाच–अपरमिति । अपरमर्वाचीनमस्मज्जन्मसमकालं वसुदेवगृहे भवतो जन्म प्रसिद्धं, परं प्राक्कालिकं मन्वादौ विवस्वतो जन्म, तस्मात्तवार्वाचीनत्वान्मनुष्यत्त्वाच्च प्राची–नाय देवाय विवस्वते त्वमादौ प्रोक्तवानेतत्कथमहं विजानीयां कथं सम्भायेयमित्यर्थः।

भगवान्को यस वचनमा 'पूर्वमा मैले यस कर्मयोगलाई विवस्वान् सूर्य सँग भनेको थिएँ' अर्जुनलाई पूरा विश्वास छ कि किनकी उनी जान्दछन् कि भगवान् सर्वेश्वर हुनुहुन्छ, प्रकृति, काल र कर्मादिको नियन्ता हुनुहुन्छ, परब्रह्म हुनुहुन्छ र आफ्नो इच्छाले वसुदेवको घरमा अवतार लिनुभएको छ। फेरि यिनलाई भगवान्को धेरै नै, अरु जीवहरूमा सम्भव नहुने, आश्चर्यरूप चरित्रहरूको अनुभव पनि छ। तर यो संझेर कि अनादि पापवासनाहरूले दूषित बुद्धिवाला मनुष्य भगवान् वासुदेवमा विपरीत भावना गर्नेछन् र यो संझिनेछन् कि भगवान् पनि हामी जस्तै जन्म–कर्मवाला हुन्, अर्जुनभगवान्को मुखबाट नै उहाँको जन्म कर्मको यथार्थ तत्त्वनिर्णय गराउनको लागि माथि भनिएको वचनहरूलाई असम्भव जस्तो मान्दै भने। हे भगवन्! हजुरको जन्म त अर्वाचीन हो। हजुरले त वसुदेवको घरमा जन्म लिनुभएको हो र हामीहरूको समकालिन हुनुहुन्छ र विवस्वान् सूर्यको जन्म सृष्टिको आरम्भमा भएको थियो। अर्वाचीन र मनुष्य भएर हजुरले प्राचीन र देवता विवस्वान्लाई सृष्टिको आरम्भमा उक्त कर्मयोगको उपदेश कसरी दिनुभयो, यो त असम्भव जस्तो लाग्दछ। यसलाई हामी कसरी सम्भव संझिने॥४॥

–★–★–★–

**श्रीभगवानुवाच**

**बहूनि मे व्यतीतानि जन्मानि तव चार्जुन।**
**तान्यहं वेद सर्वाणि न त्वं वेत्थ परन्तप॥**

**श्रीभगवान् भन्नुहुन्छ- हे परन्तप अर्जुन! मेरा र तिम्रा धेरै जन्म भैसकेका छन्। ती सबै जन्महरूलाई तिमी जान्दैनौ तर म जान्दछु॥५॥**

अर्जुनाभिप्रायज्ञ उक्तसन्देहनिरासाय श्रीभगवानुवाच- बहूनीति। मे मम जन्मानि देहेनविर्भावरूपाणि बहूनि व्यतीतानि अभूवन् तव च चकारादन्येषामपि जीवानां हे अर्जुन! तानि आत्मनोऽन्येषां च सर्वाणि जन्मानि अहं सर्वज्ञो वेद जानामि, अनावृतज्ञानत्वात्।

अर्जुनको अभिप्रायलाई जान्ने भगवान्ले उनको सन्देह हटाउनको लागि भन्नुभयो- हे अर्जुन! लीलार्थ विग्रह धारणरूप मेरो धेरै जन्म भयो। तिम्रो तथा अरु जीवहरूको पनि धेरै जन्म भए। (च बाट अन्य जीवहरूको बोध हुन्छ)। हे परन्तप! म आफ्नो र अर्काको सबै जन्मको कुरा जान्दछु, किनकी म सर्वज्ञ हूँ, र मेरो ज्ञान अनावृत अर्थात् ढाकिएको छैन। तिमी आफ्नो जन्मको पनि कुरा जान्दैनौ, किनकी अरुको कुरा त के गर्नु, तिम्रो ज्ञानपनि ढाकिएको छ॥५॥

-★-★-★-

**अजोऽपि सन्नव्ययात्मा भूतानामीश्वरोऽपि सन्।**
**प्रकृतिं स्वामधिष्ठाय सम्भवाम्यात्ममायया॥**

**म अजन्मा र अविनाशीस्वरूप हुँदाहुँदै तथा सम्पूर्ण प्राणिहरूको ईश्वर भएर पनि आफ्नो प्रकृतिलाई अधीन गरेर आफ्नै योगमाया द्वारा प्रकट हुन्छु॥६॥**

तव जन्मन्यपि ज्ञानावरणं नास्ति चेत्तर्हि कथं जन्मेत्यपेक्षायामाह-अज इति। अजोऽपि सन् जीववत्कर्मनिमित्त-जन्माऽपूर्वदेहग्रहणं तद्रहितोऽपि सन्, अव्ययात्मा पूर्वदेह-वियोगरहितोऽपि सन्, भूतानां सर्वेषां प्राणिनामीश्वरो नियन्ताऽपि सन्, स्वां प्रकृतिं स्वभावमसंगत्वाजेयत्वान-तिक्रमणीयत्वावार्यत्वादि स्व स्वभावमधिष्ठाय आत्ममायया मीयते कार्यमनयेति माया ज्ञानं संकल्पो वा 'माया वयुनं ज्ञानमि'ति निघण्टुकोशात्। तथा च प्रकृतिं स्वामधिष्ठाय स्वस्वभावमरित्यज्यात्मसंकल्पेन सम्भवामि सम्यक् लो-कहितं कुर्वन्नाविर्भवामि। 'अजायमानो बहुधा व्यजाये'ति श्रुतिरप्याह। तथा भगवद्विग्रहप्रकारोऽपि श्रुतिनिर्णीत एव। 'आनन्दरूपममृतं यद्विभाति, आदित्यवर्णं तमसः परस्तात्, हिरण्यकेशः हिरण्यश्मश्रुः आप्रणखात्सुवर्णः, यदात्मको

हजुरको जन्ममा ज्ञानको आवरण हुँदैन, अर्थात् हजुरको जन्म हुँदा खेरि हजुरको ज्ञानको आवरण हुँदैन भने त हजुरको जन्म कसरी हुन्छ? अर्जुनको यसै प्रश्नको अपेक्षामा भगवान् भन्नुहुन्छ- म अज हूँ अर्थात् जीवहरूको जस्तो कर्मभोग्नको लागि मेरो जन्म हुँदैन, न म उनीहरूको जस्तो अपूर्व देह नै धारण गर्दछु। फेरि अ अव्ययात्मा हूँ अर्थात् जीवहरूको जस्तो मेरो पूर्व देहको वियोग हुँदैन। फेरि म सबै जीवहरूको ईश्वर अर्थात् नियन्ता हूँ। यस्तो हुँदा पनि म आफ्नो प्रकृति अर्थात् स्वभावको अधिष्ठान गरेर अर्थात् आफ्नो स्वभावलाई नछोडिकन आफ्नो माया अर्थात् संकल्पको द्वारा लोकहितको लागि प्रकट हुन्छु। 'प्रकृति' ले यहाँ भगवान्को असंगत्व अर्थात् आसक्तिको अभाव, अजेयत्व अर्थात् कसैद्वारा पनि नजितिनु, अनतिक्रमणीयत्व अर्थात कुनैबाट उहाँको अतिक्रमण नहुनु र अवार्यत्व अर्थात् कसैबाट उहाँ नरोकिनु इत्यादि स्वभाव जान्नु। 'माया' को अर्थ ज्ञान वा संकल्प हो। किनकी निघन्टु कोशमा लेखिएको छ 'मायां वयनुं ज्ञानम्'। भगवान् प्रकट हुनुमा श्रुतिमा भनिएको छ-'अजायमानो बहुधा व्यजायत' अर्थात् अजन्मा भएर पनि धेरै पल्ट धेरै प्रकारले जन्म लिन्छ। भगवान्को विग्रह वा स्वरूपको विषयमा पनि श्रुतिको यस प्रकारको निर्णय छ- 'जो आनन्द र अमृत रूपले प्रकाशित हुन्छ। सूर्यको वर्णवाला

भगवांस्तदात्मिका व्यक्तिः। किमात्मको भगवान्? ज्ञानात्मक ऐश्वर्यात्मकः, तमेकं गोविन्दं सच्चिदानंद-विग्रहमित्यादि श्रुतिभ्यो ज्ञेयः एवं च सर्वज्ञः सर्वशक्तिः सर्वेश्वरोऽजहत्स्वरूपगुणशक्तिरेव सच्चित्प्रकाशनन्द-विग्रहेण स्वसंकल्पेनैवाविर्भवामीति न मेऽसंभावितोक्तिरिति भावः। केचित्तु प्रकृतिं स्वामधिष्ठाय मम वैष्णवीं त्रिगुणात्मिकां यस्या वशे सर्वं जगद्वर्त्तते तया मोहितः सन् स्वमात्मानं वासुदेवं न जानाति तां प्रकृतिं स्वात्ममायाम-धिष्ठाय वशीकृत्य सम्भवामि देहवानिव जात इव आत्मनो मायया न परमार्थतः, लोकवदिति व्याख्यायन्ते। तदुक्तश्रुतिविरुद्धत्वात् 'जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्वतः' इति वक्ष्यमाणभगवद्वाक्यविरोधाच्चोपेक्षणीयं त्रिगुणात्मिकमायाकृतजन्मकर्मणोर्दिव्यत्वासम्भवात्। किञ्चभगवद्विग्रहस्य त्रिगुणमायिक त्वांगीकारे भौतिकत्वं मिथ्यात्वं चाप्यंगीकृतं स्यात्। तथात्वे दोष उक्तो वृहद्वैष्णवे। 'यो वेत्ति भौतिकं देहं कृष्णस्य परमात्मनः स सर्वस्माद् बहिष्कार्यः श्रौतस्मार्त्तविधानतः। मुखं तस्यावलोक्यापि स चैलं स्नानमचरेत्' श्रीमद्भागवतेऽ 'अस्यापि देववपुषो-मदनुग्रहस्य स्वेच्छामयस्य न तु भूतमयस्य कोऽपी'ति तस्माच्छ्रुतिस्मृतिहासपुराणाविरोधायास्मदुक्तार्थ एवास्तिके-रंगीकार्यं इत्यलं विस्तरेण।

र प्रकृतिभन्दा पर, स्वर्णको समान केश भएको, स्वर्णको समान चम्किलो दाह्री भएको र जसको नङ् पर्यन्त पूरै शरीर स्वर्णको तुल्य छ। जस्तो रूप भगवान्‌को छ त्यसैरूपको उहाँको विग्रह पनि छ। भगवान्‌को रूप कस्तो छ? भगवान् ज्ञान र ऐश्वर्यरूप हुनुहुन्छ। उहाँको एक विग्रह सत्, चित्, आनन्द रूप हो हामी नमस्कार गर्दछौं। यस्तो सर्वज्ञ, सर्वशक्ति, सर्वेश्वर म (भगवान्) आफ्नो गुण शक्तिलाई नछोडिकनै आफ्नो संकल्पले सत्, चित्, आनन्द स्वरूप विग्रहको द्वारा प्रकट हुन्छु। यसमा केही असंभावना छैन।'

केही मान्छेहरूको मत छ कि 'प्रकृति' को यहाँ अर्थ त्रिगुणात्मिका वैष्णवी प्रकृति हो जसको वशमा यो सारा संसार छ र जसले मोहित भएर भगवान् वासुदेव आफुले आफुलाई नै जान्नुहुन्न। त्यसै प्रकार प्रकृति वा मायालाई अधिष्ठान वा वशमा गरेर, त्यसको आश्रय लिएर, भगवान् पनि साधारण शरीरी वा जीव को जसरी पैदा हुने गर्नुहुन्छ। तर यो व्याख्या ठीक होईन, किनकी पूर्वमा उद्धृत श्रुतिहरूको अर्थसँग यसको विरोध हुन्छ। फेरि भगवान् जो अगाडी यो भन्नुहुन्छ कि 'जन्म कर्म च मे दिव्यं यो वेत्ति तत्त्वत' अर्थात् मेरा जन्म र कर्म दिव्य छ। यस वाक्यले पनि यस व्याख्याको विरोध हुन्छ। किनकी त्रिगुणात्मिका मायाकृत जन्म र कर्म दिव्य हुन सक्दैन। किन्तु भगवान्‌को विग्रहलाई त्रिगुणात्मिका मायाद्वारा उत्पन्न मान्नाले यो पनि मान्नु पर्छ कि भगवान् को विग्रह भौतिक हो र यसैले मिथ्या हो। यस्तो मान्नाले ठूलो दोष हुन्छ जस्तो कि धर्मशास्त्र पुराणादिमा लेखिएको छ बृहद् वैष्णवमा लेखिएको छ- 'जो मनुष्य परमात्मा श्रीकृष्णको शरीरलाई भौतिक तत्त्ववाला जान्दछ र मान्दछ, त्यो श्रौतस्मार्त कर्मको सबै विधिहरू बाट निकालि दिन योग्य छ। र त्यसको मुख देख्दा पनि सवस्त्र स्नान गर्नुपर्दछ। महा भारतमा पनि भनिएको छ-'यस कृष्ण परमात्माको शरीर पंच भौतिक होईन। श्रीभागवतमा लेखिएको छ- 'अस्यापि देव०' तात्पर्य कि मेरो शरीर स्वेच्छामय हो, भौतिक होईन। यी सबै श्रुति, स्मृति, इतिहास, पुराणको वचनहरूबाट यो सिद्ध छ कि प्रथम भनिएको अर्थ नै ठिक छ किनकी पूर्वोक्त शास्त्र वचनहरूसँग विरोध हुँदैन र यसै अर्थलाई आस्तिकहरूले मान्नु पर्दछ॥६॥

-★-★-★-

## यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत।
## अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम्॥

**हे भारत! जहिले-जहिले धर्मको नाश र अधर्मको वृद्धि हुन्छ, त्यहिले-त्यहिले म आफ्नो रूपको रचना गर्दछु अर्थात् साकाररूपले मनुष्यहरूको सम्मुख प्रकट हुन्छु॥७॥**

भवतु तवानादित्वाद्विवस्वानाद्युपदेष्टृत्वं स्वेच्छया निर्विकारत्वेनैव जन्म चेति। तथाऽपि बहूनीत्युक्तत्वात्

माने कि हजुर अनादि भएको कारण विवस्वान् आदिको उपदेष्टा हुनुहुन्छ र हजुर आफ्नो इच्छाले नै विकार रहित दिव्य जन्म ग्रहण गर्नुहुन्छ, तर यो जो आफुले भन्नुभयो कि मेरा धेरै जन्म भए सो

कदा कदा जन्मेत्यपेक्षायामाह–यदा यदेति। न मे जन्मकालनियमोऽस्ति यदायदा हि यस्मिन्नेव युगे धर्मस्य परमश्रेयप्राप्तिहेतुभूतस्य भद्धक्तिलक्षणस्य ग्लानिर्हानिर्भ–वति। तत्प्रतिपक्षस्य चाधर्मस्य अभ्युत्थानमभिवृद्धिर्भवति। तदा तदाऽहमुक्तप्रकारेणात्मानं सृजामि आविर्भवामीत्यर्थः। न चात्र धर्मशब्देन वेदोदितवर्णाश्रमनिबन्धनः सामान्य–धर्मो विवक्षितः, कथमन्यथा व्याख्यायते ? इति वाच्यं, तदानीं सामान्यवर्णाश्रमधर्मस्य हान्यभावात्। किन्तु भगवद्भक्तिविरोध्यसुरराजन्यबाहुल्येन भागवतधर्मस्यो–च्छिन्नप्राय एवावतारः। एवमेव धरण्याह ब्रह्मवैवर्ते। ‘कृष्णभक्ति विहीना ये ये च तद्भक्तनिन्दकाः। तेषां महापातकिनामशक्ता भारवाहन’ इति। अतएव ‘परित्राणाय साधूनां विनाशाय च दुष्कृतामि’ति। ‘अनन्येनैव योगेन मां ध्यायन्त उपासते। तेषामहं समुद्धर्त्ता मृत्युसंसारसागरात्’ इत्यादिनाबहुशो वक्ष्यमाणत्वात्। धर्मस्वरूपं स्वयमेवोक्तं श्रीभागवते ‘सत्त्वाद् वृद्धाद्भवेद्धर्मः पुंसो मद्भक्तिलक्षणः। धर्मो मद्भक्तिकृत्प्रोक्तं’ इत्यादिना। ‘धर्मः स्वनुष्ठितः पुंसो विष्वक्सेनकथासु यः। नोत्पादयेद्यदि रतिं श्रम एव हि केवलम्’ इत्यनेन भक्तिहीनस्य केवलधर्मस्याकिञ्चित्करत्वाभिधानात्।

हजुरका ती जन्म कहिले भए? यस प्रश्नको अपेक्षामा भगवान् भन्नुहुन्छ– मेरो जन्म हुनमा कालको कुनै नियम हुँदैन। जुन जुन युगमा परमश्रेय अर्थात् मोक्षको प्राप्तिको कारणभूत मद्भक्तिलक्षणयुक्त भागवत धर्मको हानी हुन्छ, र त्यसको विरोधी अधर्मको वृद्धि हुन्छ, तब तब म पछि गईसकेका श्लोकहरूका रीतिले, आफ्नो सृजना गर्दछु अर्थात् अवतार लिन्छु।

यहाँ धर्म शब्दले वेदमा भनिएको वर्णाश्रम सम्बन्धी सामान्य धर्मलाई नसंझिनु। किनकी जुन समय भगवान्ले अवतार लिनुभएको थियो त्यस समय वर्णाश्रम धर्मको अभाव थिएन किन्तु भगवद्भक्त विरोधी राक्षस राजाहरूको अत्याचार बढेर भागवतधर्म नष्ट हुनाले नै अवतार भएको थियो। ब्रह्मवैवर्त पुराणमा पृथ्वीको यस्तो वचन छ– ‘कृष्णभक्तिविहिना० (मूलटीका मा हेर्नु)’ अर्थात् कृष्णभक्तिले हीन र उहाँको भक्तको निन्दक महापातकि को भार वहन गर्नमा म असमर्थ छु। यसैले भगवान् पनि अगाडी भन्नुहुनेछ ‘परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्’ अर्थात् साधुहरूको रक्षा र पापीहरूको नाश गर्नको लागि। फेरि ‘अनन्येनैव योगेन मां ध्यायन्त०(मूलमा हेर्नु)’ अर्थात् जो अनन्य योगले मेरो ध्यान र मेरो उपासना गर्दछन् उनीहरूलाई म मृत्युरूप संसार सागरबाट उद्धार गर्दछु। अगाडी अरु पनि भगवान्को यस्तो धेरै वचनहरू छन्। धर्मको स्वरूप भगवान्ले स्वयं श्रीमद्भागवतमा भन्नुभएको छ–‘सत्त्वाद्वृद्धाद्०’ (मूलमा हेर्नु) अर्थात् सत्त्वगुणको वृद्धिले मेरो भक्ति लक्षण युक्त धर्म हुन्छ। धर्म त्यही हो जुन मेरो भक्तिले युक्त हुन्छ अर्थात् जसले मेरो भक्ति बनोस त्यही मुख्य धर्म हो। फेरि भगवान्ले धर्मलाई अकिञ्चित् अर्थात् धेरै तुच्छ फलभएको भन्नुभएको छ। यथा ‘धर्मः स्वनुष्ठितः पुंसो०’(मूलमा हेर्नु) अर्थात् जुन धर्मको आचरणले विष्वक्सेन अर्थात् भगवान्को कथामा प्रेम उत्पन्न हुँदैन त्यस धर्मको आचरण गर्नु केवल श्रम उठाउनु नै हो॥७॥

–★–★–★–

## परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्।
## धर्मसंस्थापनार्थाय सम्भवामि युगे युगे॥

**सज्जनहरूको उद्धार गर्नको लागि तथा दुष्ट–पापीहरूका विनाश गर्नका लागि र धर्मको राम्रो सँग स्थापना गर्नको लागि म युग–युग मा प्रकट हुने गर्दछु॥८॥**

जन्मप्रयोजनमाह–परित्राणायेति। साधवः समदर्शिनो मद्भक्ताः, तथोक्तं भागवते यमेनान्वयव्यतिरेकाभ्यां ‘ये सा–धवः समदृशो भगवत्प्रपन्नास्तान्नोपसीदत हरेर्गदयाऽगुप्तान् नैषां वयं न च वयः प्रभवाम दण्डे तानानयध्वमसतोऽकृ–तविष्णुकृत्यानि’त्यादिना। तेषां साधूनां प्रह्लादादीनां

भगवान् अब आफ्नो जन्म लिने प्रयोजन भन्नुहुन्छ– प्रह्लाद इत्यादि साधुहरूको सबै प्रकारले रक्षा गर्नको लागि, भक्तिको विरोधी हिरण्यकशिपु, कंस शाल्व इत्यादिलाई नाश गर्नको लागि र भगवद्धर्मलाई संस्थापन गर्नको लागि म युग युग मा अवतार लिन्छु।

साधु त्यसलाई भनिन्छ जो भगवद्भक्त र समदर्शी होस। श्रीमद्भागवतमा यम ले अन्वय–व्यतिरेक वाक्यहरू द्वारा साधुको

परित्राणाय सर्वतो रक्षणाय दुष्कृतां भक्तिविरोधिनां हिरण्यकशिपुकंसमगधपौण्ड्रकचैद्यशाल्वादीनां विनाशाय च धर्मस्य भागवतस्य सम्यक् स्थापनाय युगे युगे संभवामि ॥८॥

लक्षण यसरी भनेका छन्-'ये साधवः......विष्णुकृत्यान्(मूलमा हेर्नु) अर्थात् हे मेरा दूतहरू! जो साधु भगवान्को दास र समदर्शी छन्, उनीहरूलाई न पक्रिनु। ती भगवान्को गदाले सधैं रक्षित हुन्छन्। उनीहरूलाई म अथवा तिमीहरू दण्ड दिन सक्दैनौं। तिमीहरू ती असत् अर्थात् दुष्टहरूलाई पक्रेर ल्याओ जसले विष्णुको सेवा गरेनन्॥८॥

-★-★-★-

**जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः।**
**त्यक्त्वा देहे पुनर्जन्म नैति मामेति सोऽर्जुन॥**

**हे अर्जुन! मेरो जन्म र कर्म दिव्य अर्थात् निर्मल र अलौकिक छन्-यस प्रकार जो मनुष्य तत्त्वले जान्दछ, त्यो यस शरीरलाई त्यागेर फेरी जन्म लिंदैन र मलाई नै प्राप्त गर्दछ॥९॥**

एवंभूतस्वजन्मकर्मज्ञातुः फलमाह-जन्मकर्म चेति। सर्वज्ञस्य सर्वेश्वरस्य सर्वकारणस्य मे मम जन्म त्रिगुणमायाऽस्पृष्टनित्यसिद्धं सच्चिदानन्दविग्रहेण स्वेच्छया आविर्भावरूपं, कर्म च भक्तपरित्राणमभक्तवि- नाशनं च दिव्यमप्राकृतं तत्त्वतः परमार्थबुद्ध्या यो वेत्ति हे अर्जुन! सः पुरुषः देहं स्थूलं तद्धेतुभूतं सूक्ष्मं त्यक्त्वा पुनर्जन्म नैति, न प्राप्नोति। किन्तु मां मुक्तप्राप्यं सत्यज्ञानानन्दस्वरूपं परब्रह्म भगवन्तं वासुदेवमेवैति प्राप्नोति मद्भावं प्राप्नोति।

भगवान् आफ्नो जन्म र कर्मको ज्ञानको फल भन्नुहुन्छ-

हे अर्जुन! म सर्वज्ञ, सर्वशक्ति, सर्वेश्वर र सर्वकारणको जन्म त्रिगुण मायाले रहित नित्य सिद्ध छ र सच्चिदानन्दरूप विग्रहको साथ आफ्नो इच्छाले हुन्छ। भक्तहरूको रक्षा र अभक्त अर्थात् दुष्टहरूको नाश गर्नु मेरो कर्म हो। यो मेरो कर्म दिव्य र अप्राकृत हो। मेरो जन्म र कर्मको यथार्थ ज्ञान जसलाई छ त्यो स्थूल शरीर र त्यसको कारणभूत सूक्ष्म शरीरलाई छोडेर फेरि जन्म लिंदैन। किन्तु मुक्तप्राप्य, सत्य ज्ञान र आनन्दरूप परब्रह्म भगवान् म वासुदेवलाई प्राप्त हुन्छ अर्थात् मेरो भावलाई प्राप्त गर्दछ॥९॥

-★-★-★-

**वीतरागभयक्रोधा मन्मया मामुपाश्रिताः।**
**बहवो ज्ञानतपसा पूता मद्भावमागताः॥**

**पहिले पनि जसको राग, भय र क्रोध सर्वथा नष्ट भईसकेका थिए र जो मै मा अनन्यप्रेमपूर्वक स्थित थिए, यस्ता मेरा आश्रित रहने धेरै भक्त उपर्युक्त ज्ञानरूप तपले पवित्र मेरै स्वरूपलाई प्राप्त गरिसके॥१०॥**

मामेतीत्युक्तं तत्र त्वत्प्राप्तौ त्वज्ज्ञाने च साधनान्तरमपेक्षितं न वा? प्राप्तिः स्वरूपैक्येन भेदेन वा? तादात्म्येन वेत्यपेक्षायामाह-वीतरागेति। रागःस्त्रीपुत्रादिस्नेहः, भयं भयानुबन्धि कर्म, क्रोधः किञ्चिद्वस्त्विच्छाविघातके चित्तविकारः। वीता विशेषतो गता रागभयक्रोधा येभ्यस्ते शुद्धदेहेन्द्रियमनस्का इत्यर्थः। एतेन ज्ञानसाधनमुक्तम्।

अब यहाँ यस्तो शंका गर्दछन् कि भगवान्ले जो भन्नुभयो कि मलाई प्राप्त गर्दछ भने हजुरको प्राप्तिमा र हजुरको ज्ञानमा कुनै अरुनै साधनको आवश्यकता छ कि छैन? फेरि प्राप्ति भएपछि स्वरूपको एकता हुन्छ कि हुँदैन, अर्थात् जब हजुरको प्राप्ति हुन्छ भने जीव र हजुरको स्वरूपमा बिलकुल एकता हुन्छ वा भेद बस्दछ। वा तादात्म्य हुन्छ? अर्थात् जीव हजुरको नै आत्मा वा प्रकृतिवाला हुनजान्छ कि क्याहो?

यिनै शंकाहरूको र प्रश्नको उत्तर भगवान् दिनुहुन्छ-

विशेषरूपले निक्लिएको राग अर्थात् स्त्री, पुत्रादि सँग प्रेम, भय अर्थात् भय उत्पन्न गर्नेवाला कर्म, क्रोध अर्थात् इच्छा मा विघात परेर उत्पन्न चित्तविभ्रम जुन मान्छेहरूको, सारांश कि राग, भय, क्रोधबाट जो बिल्कुल रहित छन् याने जसको देह, इन्द्रिय, मन इत्यादि शुद्ध छन्। (यी गुणहरूबाट ज्ञानको साधन

अतो मन्मया मदात्मका वासुदेवात्मका वयमिति जातनिश्चयाः 'एतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो! इन्द्रियाणि मनो बुद्धिः सत्त्वं तेजो बलं धृतिः। वासुदेवात्मकान्याहुः क्षेत्रं क्षेत्रज्ञ एव चे'त्यादि श्रुतिस्मृतिभ्यः। एवम्भूताः मामुपाश्रिताः उक्तस्वरूपं मामे-वार्चनवन्दनध्यानैः सेवितवन्तः न तु देवान्तरभक्ताः। एतेन स्वप्राप्तिसाधन सूचितम्। एवम्भूता बहवो भक्ताः ज्ञानतपसा मज्जन्मकर्मविषयकज्ञानमेव तपः, सर्वकर्मभर्जकं ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते'इति वक्ष्यमाणत्वात्। तेन पूता निरस्ताऽज्ञानतत्कार्य-शुभाशुभवासनाः, सन्तो मद्भावमागताः, मम यो भावः अपरिच्छन्नज्ञानानन्दवत्त्वे सत्यप्राकृतप्रकाशानन्दविग्रह-वत्त्वं, समागताः प्राप्ताः। स्वरूपभेदे सति 'सर्वं ह पश्यः पश्यती'ति मुक्तौ सार्वज्ञयोगोक्तेः, सार्वज्ञादिधर्माविर्भावेन विग्रहसाम्येन चाभेदं तादात्म्यलक्षणं भेदाभेदं प्राप्ता इत्यर्थः। भेदसहिष्णुरभेदस्तादात्म्यमिति भगवत्पत-ञ्जल्युक्ततादात्म्यलक्षणसमन्वयात्। एवं साधर्म्यवचनेन मुक्तौ स्वरूपैक्यवादः केवलभेदवादश्च बहुवचनेनात्मैक्य-वादश्च स्पष्टं निरस्तः।

भनिएको हो, अर्थात् ज्ञानप्राप्तिको यिनै साधन हुन्), उक्त कारणहरूले रागादि रहित ती ज्ञानी मनुष्य मन्मया अर्थात् मदात्मक हुन्छन्। तात्पर्य उनीहरूलाई यो पक्का निश्चय हुनजान्छ कि हामी वासुदेवात्मक छौं, या वासुदेव हाम्रा आत्मा हुन्। यस विषयमा श्रुति, स्मृति प्रमाण छन्, जस्तो- 'एतदात्म्यमिदं सर्वं०(मूलमा हेर्नु)' अर्थात् यो सबै जगत्लाई भगवदात्मक छ, त्यो सत्य हो। त्यो (भगवान्) आत्मा हो। त्यो (भगवान्) तिमी हौ अर्थात् त्यो तिम्रो अन्तरात्मा हो, हे श्वेतकेतु! फेरि-'इन्द्रियाणि......एव च॥(पूरा मूलमा हेर्नु) अर्थात् इन्द्रियहरू, मन, बुद्धि, सत्त्व, तेज, बल, धृति, क्षेत्र अर्थात् भोग्य सहित ब्रह्माण्डबाट आरम्भ गरेर शरीर सम्म को सबै अचेतन पदार्थ, काल इत्यादि र क्षेत्रज्ञ अर्थात् भोक्ता चेतन तत्त्व सबै वासुदेवात्मक छन्, अर्थात् वासुदेव उनीहरू सबैका आत्मा हुन। मन्मया भएपछि मनुष्य हाम्रो पूजा, वन्दना र ध्यानले मेरो सेवा गर्दछन्, अर्थात् अन्य देवताहरूको भक्त हुँदैनन्। यसद्वारा भगवान्ले आफ्नो प्राप्तिको साधन भन्नुभयो, अर्थात् मेरो सेवा मेरो प्राप्तिको साधन हो यो बताउनु भयो।

यस अवस्थालाई प्राप्त गरेका धेरै भक्तहरू ज्ञानरूपी तपले पवित्र भएर अर्थात् सबै कर्महरूको भर्जक मेरो जन्म कर्मको यथार्थ ज्ञान नै जसको तप हो किनकी, भगवान् अब अगाडी भन्नुहुनेछ कि 'ज्ञानाग्निः सर्वकर्माणि भस्मसात् कुरुते' अर्थात् ज्ञानरूप अग्नि सबै कर्महरूलाई भस्म गर्दछ। यस्तो पवित्र तपद्वारा, अज्ञानको कार्यरूप, भक्तहरूको शुभ र अशुभ वासनाहरू नष्ट हुन्छन् र ती पवित्र भईजान्छन्। यस्तो भएपछि ती मेरो भावलाई प्राप्त हुन्छन्। मेरो भावको मतलब यो हो कि उनीहरूको ज्ञान र आनन्दमेरो नै समान बिना सीमाको हुनजान्छ र यस्तो भए पछि उनीहरूलाई मेरो शरीरको समान अप्राकृत, प्रकाश र आनन्द स्वरूप विग्रहको प्राप्ति हुन जान्छ। तर स्वरूपमा भेद बनिरहन्छ। स्वरूप भेद भएपनि मुक्ति अवस्थामा श्रुति जीवको सर्वज्ञता प्रतिपादन गर्दछिन्। यथा- 'सर्वं ह पश्यः पश्यति' अर्थात् द्रष्टा अर्थात् मुक्त जीव सबैलाई देख्दछ अर्थात् सर्वज्ञ हुन्छ। यसैले सर्वज्ञता आदि धर्मको आविर्भाव हुनाले र दिव्य विग्रहको समानता हुनाले मुक्ति अवस्थामा जीव र परमेश्वरमा अभेद छ र यस प्रकार जीवलाई भेद र अभेदवाला तादात्म्य लक्षणवाला अर्थात् भेदाभेद सम्बन्ध प्राप्त हुन्छ। तादात्म्य केलाई भनिन्छ? भगवान् पतञ्जलि यसको उत्तर दिनुहुन्छ कि 'भेदसहिष्णुरभेदस्तादात्म्यम्' अर्थात् भेदलाई सहनेवाला अभेदलाई तादात्म्य भनिन्छ। यस प्रकार साधर्म्य वचनले मुक्ति अवस्थामा स्वरूप ऐक्यको र केवल भेदवादको र बहुवचन को व्यवहारद्वारा आत्मा को एकवादको खण्डन गर्नुभयो। सबै भन्नुको सारांश यो निक्लियो कि मुक्ति अवस्थामा जब मेरो भक्त मेरो समान धर्मलाई प्राप्त हुन्छ भने स्वरूपले त उनीहरूमा भेद रहन्छ, किनकी ती अणु हुन, र म परिच्छेद शून्य विभु हूँ, तर यस कुराले कि ती मेरो समान अप्राकृति शरीरवाला र अप्रतिहत वा बिना रोकावटको ज्ञान भएका हुन्छन् उनीहरू मा र मेरो मा यो अभेद पनि छ॥१०॥

-★-★-★-

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः॥**

**हे अर्जुन! जुन भक्त मेरो जस्तो प्रकारले भजन गर्दछ, म पनि त्यसको त्यस्तै प्रकारले भजन गर्दछु; किनकी सबै मनुष्य सबै प्रकारले मेरो नै मार्गको अनुसरण गर्दछन्॥११॥**

ननु यदि ज्ञानतपसा पूतानां निष्कामभक्तानामेवात्मभावं ददासि, नान्येषां सकामभक्तानां तर्हि त्वय्यपि वैषम्यं स्यादित्याशंक्याह–ये यथेति। ये भक्ता यथा येन प्रकारेण सकामतया निष्कामतया च मां प्रपद्यन्ते उपासते तांस्तथैव तदीप्सितफलदानप्रकारेण भजामि, अनुगृह्णामि। तत्रापि न केवलमात्मभक्तानेवापि तु अन्यदेवभक्तानप्यनुगृह्णामि। यतः सर्वशः सर्वप्रकारेण इन्द्रादिदेवानपि भजन्तो मनुष्या मम सर्वात्मभूतस्य वासुदेवस्य वर्त्म भजनमार्गमनुवर्त्तन्ते 'यमिन्द्रमाहुर्वरुणं यमाहुः स ब्रह्मा स शिवः सेन्द्र सोऽक्षरः परमः स्वराडि'त्यादिश्रुतेः 'यदाह वसुधा सर्वं सत्यमेत–द्दिवौकसः। अहं भवो भवन्तश्च सर्वे नारायणात्मका'इति वैष्णवे। तस्माद्यं कञ्चिदपि भजतां कर्मफलदाता सर्वात्मा भगवान्वासुदेव एवेति फलितं, 'फलमत उपपत्तेरि'ति न्यायात्।

अब यहाँ शंका गरिन्छ कि यदि ज्ञानरूपी तपले पवित्र र कामना रहित भक्तलाई नै हजुर आत्मभाव दिनुहुन्छ र कामनावाला भक्तलाई दिनुहुन्न भने त हजुरमा पनि विषमताको दोष उपस्थित हुनेछ? यस शंकाको उत्तर भगवान् यहाँ दिनुहुन्छ–

जुन कुनै भक्त मेरो सेवा जसरी गर्दछन्, अर्थात् सकाम वा निष्काम भावले, गर्दछ म त्यसलाई त्यसै अनुसार मनवाञ्छित फल दिएर त्यसमा अनुग्रह गर्दछु। केवल आफ्नो नै भक्तमा मात्रै होईन, अरु देवताहरूको भक्तमाथि पनि कृपा गर्दछु किनकी सबै प्रकारले इन्द्रादि अन्य देवताहरूको उपासना गर्नेहरू मेरो नै भजनको मार्गमा हिंड्दछन् अर्थात् मेरो नै पूजा गर्दछन् किनकी म सर्वात्मा हूँ। यसैले कुनै पनि देवताको उपासना गर्नेवालाको कर्मफलको दाता सर्वात्मा भगवान् वासुदेव म नै हूँ।

भगवान् सबै देवताहरूको अन्तरात्मा हुन् यस मा श्रुति प्रमाण छ यथा– 'यमिन्द्रमाहुर्वरुणं०'(पूरा मूलमा हेर्नु) अर्थात जसलाई इन्द्र भनिन्छ, जसलाई वरुण भनिन्छ, जसलाई यम भनिन्छ, त्यही ब्रह्मा हो, त्यही शिव हो, त्यही इन्द्र हो, त्यही अक्षर हो, त्यही परम स्वतन्त्र हो। फेरी विष्णुपुराणमा पनि लेखिएको छ–'यदाह वसुधा०' (पूरा मूलमा हेर्नु) अर्थात् हे देवताहरू, जुन पृथ्वीले भनिन् त्यो सबै सत्य हो। म , शिवजी र तिमी सबै नारायणात्मक हौं अर्थात् नारायण नै हामी सबैको अन्तरात्मा हुन्। यसले जुन माथि भनिएको छ त्यसको फल यो निस्कियो कि कुनै पनि देवताको भजन गर्नेलाई त्यसको कर्मफल दिने सबैको अन्तरात्मा भगवान् वासुदेव नै हुन्, यस विषयमा 'फलमत उपपपत्तेः' यो व्यास सूत्र पनि प्रमाण छ॥११॥

–★–★–★–

**काङ्क्षन्तः कर्मणां सिद्धिं यजन्त इह देवताः।**
**क्षिप्रं हि मानुषे लोके सिद्धिर्भवति कर्मजा॥**

**यस मनुष्यलोकमा कर्मको फल चाहने मान्छे देउताहरूको पूजा गर्ने गर्दछन्; किनकी उनीहरूलाई कर्मबाट उत्पन्न हुने सिद्धि चाँडै प्राप्त हुन्छ॥१२॥**

एवं चेत्तर्हि सर्वे जना निष्कामा भूत्वा मोक्षार्यं साक्षात्त्वामेव कुतो नाश्रयन्ते इत्यत आह–कांक्षन्त इति। कर्मणां सिद्धिं धनस्त्रीपुत्रपश्वादिप्राप्तिरूपां सिद्धिं कांक्षन्त इति। कर्मणां सिद्धिं धनस्त्रीपुत्रपश्वादिप्राप्तिरूपां सिद्धिं कांक्षन्तो

यदि यस्तो कुरा हो भने त सबै जना निष्काम भएर मोक्षको लागि हजुरको नै शरणमा किन आउँदैनन्? यसको उत्तर भगवान् दिनुहुन्छ–

यस कर्माधिकारी मनुष्य लोकमा कर्महरूको सिद्धि अर्थात् धन, स्त्री, पुत्र, पशु आदिको प्राप्तिको लागि मान्छेहरू इन्द्रादि

वाञ्छन्तः प्राय इह कर्माधिकारिणि मनुष्यलोके देवता इन्द्रादीनेव यजन्ते, ननु साक्षान्मां भजन्ते। कुतः? हि यस्मात्कर्मजा सिद्धिः देवताराधनं कर्म क्षुद्रफलं क्षिप्रं शीघ्रं भवति। ज्ञानफलो मोक्षस्तु न शीघ्रं भवति तस्यानेकजन्म-साधनसिद्धिलभ्यत्वात्। 'अनेकजन्मसंसिद्धस्ततो याति परां गतिमि'ति वक्ष्यति। अतस्तेषां मुमुक्षाभावात् क्षुद्रफल-दा देवता एव यजन्ते, न साक्षान्मामाश्रयन्ते इति भावः।

देवताहरूको पूजा गर्दछन्, साक्षात् मेरो होईन। किनकी, देवतारा-धन रूप कर्मबाट उत्पन्न क्षुद्र फल शीघ्र नै प्राप्त हुन्छ, र ज्ञानको फल मोक्ष शीघ्र प्राप्त हुँदैन। मोक्षको सिद्धि अनेक जन्महरूको साधनले प्राप्त हुन्छ, जस्तो कि अगाडी गएर भनिनेछ। 'अनेक जन्म संसिद्धिस्ततो याति परां गतिम्' अर्थात् अनेक जन्महरू पछि ज्ञानको सिद्धि हुन्छ र तब परागति वा मोक्षको प्राप्ति हुन्छ। सारांश यो कि मनुष्यहरूलाई मोक्षको इच्छा छैन, केवल क्षुद्र फलको इच्छा छ। यसैले ती मेरो शरणमा न आएर क्षुद्रफल दिने देवताहरूलाई भज्दछन्॥१२॥

-★-★-★-

## चातुर्वर्ण्यं मया सृष्टं गुणकर्मविभागशः।
## तस्य कर्तारमपि मां विद्ध्यकर्तारमव्ययम्॥

**ब्राह्मण, क्षत्रिय, वैश्य र शुद्र-यी चारै वर्णहरूको समूह, गुण र कर्महरूको विभागपूर्वक मेरो द्वारा रचिएको हो। यस प्रकार त्यस सृष्टि-रचनादि कर्मको कर्ता भएर पनि म अविनाशी परमेश्वरलाई तिमी वास्तवमा अकर्ता नै जान्नु॥१३॥**

ननु केचिदेव साक्षात्त्वां भजन्ते नतु सर्वे, तर्हि तेऽन्यदेवता-भक्ता विषमस्वभावाः केन सृष्टाः, कस्येदं वैषम्यमिति चेत्तत्राह-चातुर्वर्ण्यमिति। चत्वारो वर्णा एव चातुर्वर्ण्यं स्वार्थे ष्यञ्। मयेश्वरेण सृष्टमुत्पादितं, कथं? गुणकर्मविभागशः गुणविभागेन कर्मविभागेन चेत्यर्थः। तत्र सत्त्वप्रधाना ब्राह्मणास्तेषां सात्त्विकानि शमदमादीनि कर्माणि। सत्त्वोपसर्जनरजःप्रधानाः क्षत्रियास्तेषां च तादृशानि शौर्यतेजोयुद्धादीनि कर्माणि। तमउपसर्जनरजःप्रधाना वैश्यास्तेषां च तादृशानि कृष्यादीनि कर्माणि। रजउपसर्जनतमःप्रधानाः शूद्रास्तेषां च तादृशानि त्रैवर्णिकशुश्रुषादीनि कर्माणि। तस्य विषमस्वभावस्य चातुर्वर्ण्यस्य कर्त्तारमपि मामकर्त्तारं वैषम्य कर्त्तृत्वशून्यं विद्धि। कुतः? यतोऽव्ययं स्वरूपगुणशक्तिविग्रहान्य-थाभावरहितं निर्विकारमित्यर्थः॥१३॥

यहाँ यो शंका हुन सक्दछ कि यदि कुनै-कुनै साक्षात् हजुरको नै भजन गर्दछन् सबै होईन, फेरि यी विषमस्वभाववाला अन्य देवताहरूको पूजकलाई कसले सृजना गरेको हो? अर्थात् गिने चुनेका मान्छेहरू हजुरलाई भज्दछन् र बाँकी सबै मनुष्य अन्यदेवको उपासक छन् यस विषमताको दोषी को हो? यस शंकाको उत्तर दिनुहुन्छ- चारै वर्णहरूलाई मैले(ईश्वरले) नै गुण र कर्मको विभाग गरेर सृजेको हो। अर्थात् जसमा सतोगुण प्रधान भयो त्यो ब्राह्मण भयो, र त्यसको शम, दम आदि सात्त्विक कर्म भयो। सतोगुण केहि दबिएको र रजोगुण प्रधानभएकाहरू क्षत्रिय भए। र उनीहरूको वीर्य, तेज युद्धादिक राजसी कर्म भयो। तम केहि दबिएको र रज प्रधानवाला वैश्य भए र उनीहरूको काम पनि त्यस्तै नै भयो, जस्तो खेती, वाणिज्य इत्यादि गर्नु। र रज केहि दबिएको र तम प्रधानवाला शूद्र भए र तीनै वर्णहरूको सेवा गर्नु त्यसको कर्म भयो। यी पृथक् स्वभावभएका चारै वर्णहरूको सृष्टिकर्त्ता म नै हूँ। तर म मा कर्त्तापनको विषमता छैन किनकी म अव्यय अर्थात् स्वरूप, गुण, शक्ति र विग्रहबाट विकार हीन छु। अर्थात् यस सृष्टिको कर्त्ता हुनाले मेरो स्वरूप, गुण, शक्ति र विग्रहमा कुनै प्रकारको व्यय वा विकार पैदा हुँदैन, यसैले मलाई यसको कर्त्ता भएपनि अकर्त्ता र विषमताले शून्य जान्नु॥१३॥

-★-★-★-

## न मां कर्माणि लिम्पन्ति न मे कर्मफले स्पृहा।
## इति मां योऽभिजानाति कर्मभिर्न स बध्यते॥

**कर्मको फलमा मेरो स्पृहा छैन, यसैले मलाई कर्म लिप्त गर्दैनन्-यस प्रकार जो मलाई तत्त्वले जान्दछ, त्यो पनि कर्मले बाँधिदैन॥१४॥**

एतत्कुतस्तत्राह-न मामिति। कर्माणि विविध

हजुर सृष्टिको कर्त्ता भएर पनि अकर्त्ता यस्तो किन? यसको उत्तर

जगत्सृष्ट्यादीनि तन्निमित्तानुगुणकर्त्तारं सर्वज्ञं मां न लिम्पन्ति, तद्वैषम्यजन्यपुण्यपापानि न स्पृशन्तीत्यर्थः। अयं भावः, यथा ब्रीह्याम्रकण्टक्यादीनां विषमाणामुत्पत्तौ पर्जन्यस्यासाधारणकारणत्वेऽपि वैषम्यस्य तत्तद्बीजवृत्तित्वेन न पर्जन्ये तत्प्रसक्तिः। तथैवोत्तमाधमगुणकर्मविशिष्ट–सौम्यक्रूरस्वभावसुखिदुःखिविविधजीवसृष्टौ तत्फलदाने च वासुदेवस्य भगवतोऽसाधारण कारणत्वेपि वैषम्यस्य तत्तद्बीजात्मकानादिकर्मनिष्ठत्वेन परमेश्वरे भगवति न वैषम्यनैर्घृण्यप्रसक्तिरिति। तथा चाह भगवान्सूत्रकारः। 'वैषम्यनैर्घृण्ये न सापेक्षत्वादि'ति। तत्र हेतुमाह–नमे कर्मफले स्पृहेति। यथा आत्मबन्धुमित्राणां सुखस्पृहया सुखहेतुकं कर्मकुर्वन्ति, स्ववैरिदुःखस्पृहया तथाभूतं कर्म कुर्वन्ति, न तथोक्तमाधमसुखदुःखविशिष्टप्राणिसर्ज–नात्मककर्मणां मे फले स्पृहाऽस्ति, आप्तकामत्वात्। न किञ्चित्फलोद्देशेन करोमीत्यर्थः। इति उक्त प्रकारेण जगत्सृष्ट्यादेः कर्त्तारमकर्त्तारं तत्कर्मसंगरहितं च यो मां साक्षात् जानाति स कर्मभिः क्रियमाणैर्न बध्यते।

दिनुहुन्छ। भाँति-भाँतिको जगत्को सृष्टि आदि कर्म मलाई, जो उनीहरूको निमित्त गुणानुकूल जगत्लाई सृजनागर्नेवाला र सर्वज्ञ हूँ, छुँदैन अर्थात् सृष्ट्यादिको विषमता र निर्घृणताको पाप पुण्य मसँग टाँसिदैन। यस्तो भन्नुको भाव यो हो कि जस्तो जौ गहूँ इत्यादि अन्न, आँप, केरा इत्यादि फल र अनेक थरिको काँडादार वृक्षहरूको उत्पत्तिमा वर्षा असाधारण कारण हो, किनकी त्यसको बिना यी सबै पैदा हुन सक्दैनन्, तर यस्तो हुँदा पनि उनीहरूको विषमताको दोषको भागी जल हुन सक्दैन, किनकी विषमता तिनीहरू को आ-आफ्नो बीजमा रहन्छ, त्यसै प्रकारको विभिन्नतायुक्त, जीवको सृष्टि गर्न मा र तिनीहरूलाई कर्मानुसार फल दिनमा (म) भगवान् वासुदेव असाधारण कारण हूँ, तर विषमताको कारण अनादि कर्मरूप बीजमा स्थित भएको ले त्यस विषमता र निर्घृणताको दोष उनी मलाई छुँदैन। भगवान् सूत्रकार व्यासले पनि भन्नुभएको छ यथा- 'वैषम्यनैर्घृण्ये न सापेक्षत्वात्'। यसको अर्थ ठीक त्यही हो जो माथि लेखिएको छ।

भगवान् भन्नुहुन्छ कि यस्तो हुने कारण यो हो कि जस्तो साधारण मान्छे आफ्नो र बन्धु-बान्धवहरूको सुखको निमित्त सुखदिने कर्महरू गर्दछन् र आफ्नो शत्रुहरूलाई दुःख पुर्‍याउने चेष्टाले उनीहरू दुःख पुर्‍याउने कर्महरू गर्दछन् त्यस्तो मेरो कर्महरूमा मलाई केहि पनि वाञ्छा या मनोरथ हुँदैन। अर्थात् उत्तम, अधम, सुखी दुःखी जीवहरूको सृष्टि गर्नमा मलाई कुनै फलको आकांक्षा पनि छैन, किनकी म पूर्णकाम हूँ। भन्नुको तात्पर्य यो कि कुनै फलको उद्देश्यले म कर्म गर्दिन। यस प्रकार जगत्को सृष्टिकर्त्ता भएर पनि म अकर्त्ता हूँ र त्यस सृष्टिकर्म मा आसक्तिहीन हूँ। यस्तो जो मलाई जान्दछ त्यो मनुष्यको वर्त्तमानमा गरिएको कर्म अर्थात् क्रियमाण कर्म बाँध्दैनन्। (क्रियमाण यसैले भनेको हो कि प्रारब्धकर्म नभोगीकन छुट्दैनन्)॥१४॥

–★–★–★–

## एवं ज्ञात्वा कृतं कर्म पूर्वैरपि मुमुक्षुभिः।
## कुरु कर्मैव तस्मात्त्वं पूर्वैः पूर्वतरं कृतम्॥

**पूर्वसमयमा मुमुक्षुहरूले पनि यसै प्रकार जानेर नै कर्म गरेका छन्। यसैले तिमी पनि पूर्वजहरूले सदादेखि गर्दै आएको कर्महरू नै गर॥१५॥**

तस्मात्फलितमाह–एवमिति। यथा फलस्पृहाराहित्येन पर–मेश्वरोजगत्सृष्ट्यादीनि महान्त्यपि कर्माणि कुर्वन्न बध्यते, तथा कर्त्तृत्वाभिमानतत्फलेच्छाराहित्येन यथाऽधिकारं वि–धिना कृतं कर्म बन्धकं न भवतीत्येवं ज्ञात्वा पूर्वैरपि मुमुक्षु–भिर्मनुजनकादिभिः कर्म कृतम्। यस्मादेवं तस्मात्त्वमपि मुमुक्षुः पूर्वैः कृतं पूर्वतरं शिष्टपरम्परागतं कर्मैव कुरु।

जस्तो फलको आकांक्षाले रहित भएको कारण जगत्को सृष्टि आदिको ठूलो कर्म गरेर पनि परमेश्वर त्यस कर्मबाट बाँधिनुहुन्न, त्यस्तै कर्त्तापनको अहंकार छोडेर, फलको इच्छाले रहित भएर शास्त्रोक्त विधिले गरिएको यथाधिकार कर्म बाँध्नेवाला हुँदैन। यस्तो संझेर मनु, जनक आदि पहिलेका मोक्षार्थीहरू ले कर्म गरेका छन्। यसैले तिमी पनि मुमुक्षुहरूबाट पूर्वमा गरिएको र शिष्ट परम्परागत कर्महरूलाई गर॥१५॥

–★–★–★–

**किं कर्म किमकर्मेति कवयोऽप्यत्र मोहिताः।**
**तत्ते कर्म प्रवक्ष्यामि यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात्॥**

**कर्म के हो? र अकर्म के हो? यस प्रकारको निर्णय गर्न बुद्धिमान पुरुष पनि मोहित हुनजान्छ। यसैले त्यो कर्मतत्त्व म तिमीलाई राम्रो सँग सम्झाएर भन्दछु, जसलाई जानेर तिमी अशुभबाट अर्थात् कर्मबन्धन बाट मुक्त हुन्छौ॥१६॥**

ननु कर्मैव कर्त्तव्यं चेत्त्वद्वचनादेव करिष्यामि, परन्तु कर्मणि कश्चित्सन्देहोऽस्ति। किं? यतः पूर्वैः पूर्वतरं कृतमित्युदा–हरसीत्यत आह–किं कर्मेति। मुमुक्षुणाऽनुष्ठेयं कर्म किं स्वरूपं? अकर्म च किमत्र कर्माकर्मज्ञानविषये कवयो विद्वांसोऽपि मोहितास्तन्निर्णयकर्त्तुमशक्ताः यथावन्न जानन्ति। यस्मात्कर्मादि ज्ञानं दुर्घटं, तत्तस्मात्ते तुभ्यं कर्म अकर्म च प्रवक्ष्यामि। यत्कर्माकर्मस्वरूपं ज्ञात्वा अशुभात् संसारान्मोक्ष्यसे।

यदि कर्म गर्नु नै छ भने त हजुरको आज्ञाले गर्ने नै छु, तर कर्ममा केहि सन्देह जस्तो लाग्दछ, किनकी कर्मको विषयमा हजुरले यही भनेर छोडिदिनु भयो कि जस्तो पूर्वमा शिष्टहरूले गरे यसै गरी कर्म गर। अर्जुनको यस शंकाको उत्तर भगवान् दिनुहुन्छ–

मुमुक्षुहरू द्वारा गर्न योग्य कर्मको कस्तो स्वरूप छ र अकर्मको पनि कस्तो स्वरूप छ? यस कर्म र अकर्मको विषयलाई जान्नमा विद्वान्हरू पनि मोह मा पर्दछन्, अर्थात् कर्म र अकर्मको यथार्थरूप विद्वान् पनि निर्णय गर्न सक्दैनन्, किनकी कर्म इत्यादिको ज्ञान दुर्घट छ। यसैले म तिमी सँग कर्म र अकर्मको विषयमा भन्दछु। यस कर्म अकर्मको स्वरूपलाई जानेर तिमी अशुभबाट छुट्नेछौ अर्थात् संसारबाट छुटकारा पाउने छौ॥१६॥

–★–★–★–

**कर्मणो ह्यपि बोद्धव्यं बोद्धव्यं च विकर्मणः।**
**अकर्मणश्च बोद्धव्यं गहना कर्मणो गतिः॥**

**कर्मको स्वरूप पनि जान्नु पर्दछ र अकर्मको स्वरूप पनि जान्नु पर्दछ तथा विकर्मको स्वरूप पनि जान्नु पर्दछ; किनकी कर्मको गति गहन छ॥१७॥**

ननु शरीरेन्द्रियव्यापारः कर्म तदभावः क्रियाशून्यत्व–मकर्मेति सर्वजनप्रसिद्धं, कथमत्र कवयोऽपि मोहिता इत्युक्तमिति चेत्तत्राह–कर्मण इति। हि निश्चयेन कर्मणः शास्त्रविहितस्य शरीरेन्द्रियव्यापारस्यापि तत्त्वं बोद्धव्य–मस्ति। विकर्मणः प्रतिषिद्धस्यापि तत्त्वं बोद्धव्यमस्ति। अकर्मणः क्रियाऽभावस्य तूष्णीमासीनस्यापि तत्त्वं बोद्धव्यमस्ति। यतो गहना कर्मणो गतिः कर्मण इत्युपलक्षणं कर्माकर्मविकर्मणां तत्त्वं दुर्विज्ञेयमित्यर्थः॥१७॥

शरीर इन्द्रिय आदिको व्यापारलाई कर्म भन्दछन्, र क्रिया शून्यता लाई अकर्म भन्दछन्। यो त सबै जना जान्दछन्। यसमा विद्वानलाई मोह किन हुन्छ? यसको उत्तर दिनुहुन्छ–

शास्त्रविहित शरीर, इन्द्रिय आदि व्यापारको तत्त्वलाई निश्चयरूपले जान्नु पर्दछ। प्रतिषिद्ध कर्महरूको तत्त्व पनि जान्नु पर्दछ। अकर्म अर्थात् क्रियाको अभाव अर्थात् चुप लागेर बस्नुको पनि तत्त्व जान्नु पर्दछ, किनकी कर्मको गति धेरै गहन अर्थात् दुर्बोध छ (कर्मद्वारा यहाँ कर्म, विकर्म र अकर्म सबैलाई संझिनु पर्दछ)॥१७॥

–★–★–★–

**कर्मण्यकर्म यः पश्येदकर्मणि च कर्म यः।**
**स बुद्धिमान्मनुष्येषु स युक्तः कृत्स्नकर्मकृत्॥**

**जुन मनुष्य कर्ममा अकर्म देख्दछ र जुन अकर्ममा कर्म देख्दछ, त्यो मनुष्यमा बुद्धिमान हो र त्यो योगी सम्पूर्ण कर्म गर्नेवाला हो॥१८॥**

तदेव कर्मादीनां तत्त्वं कृपयाऽऽह–कर्मणीति। कर्मणि

पूर्वोक्त कर्मादिको तत्त्व भगवान् कृपा गरेर भन्नुहुन्छ–

भगवदाराधनलक्षणे किञ्चिदंगवैगुण्येऽपि अकर्म प्रत्यवायापादकं कर्मेदं न भवतीति यः पश्येत्, तथाभूतस्य कर्मणः सत्त्वशुद्धिपूर्वकज्ञानद्वारेण मोक्षहेतुत्वाद्‌बन्धकत्वाभावादकर्मैव जानीयादित्यर्थः। 'नेहाभिक्रमनाशोऽस्ति प्रत्यवायो न विद्यते'-इत्युक्तत्वात्। अकर्मणि योग्यतायां सत्यां विहिताकरणे तूष्णीं भावे कर्म यः पश्येत्, प्रत्यवायापादकत्वेन बन्धकं यः पश्येदित्यर्थः। 'कर्मेन्द्रियाणि संयम्य य आस्ते मनसा स्मरन्नि'त्यादिना मिथ्याचारः स उच्यते'इत्युक्तत्वात्। चकारेण केवलकर्मनिष्ठस्य यथा वृन्ताकमसूरादिभक्षणनिषिद्धाचरणे दोष एव। भगवदाराधकस्य कथं चित्केनचिद्दत्तभगवत्प्रसादमिश्रिततद्भक्षणं चेन्न दोष इति विकम्रणोऽपि तत्त्वं सूचितम्। तथा चोक्तं श्रीभागवते। 'स्वपादमूलं भजतः प्रियस्य त्यक्तान्यभावस्य हरिः परेशः। विकर्म यच्चोत्पतितं कथं चिद्धुनोति सर्व हृदि सन्निविष्ट'इति। एवं कर्माकर्मादितत्त्वज्ञंस्तौति-स इति। यः कर्मादिस्वरूपतत्त्वज्ञः स पुरुषः मनुष्येषु सर्वेषु बुद्धिमान् सम्यग्ज्ञानवाञ्छ्रेष्ठ इत्यर्थः। किञ्च स युक्तः योगयुक्तः, स एव कृत्स्नकर्मकृत्। कृत्स्नफलहेतुकर्मकर्त्ता सर्वकर्मफलानां तत्रैवान्तर्भावादित्यर्थः।

जो मनुष्य भगवान्‌को आराधना रूप लक्षणवाला कर्महरूमा कोही अंग वैगुण्य अर्थात अंगको खण्डन भए पनि अकर्म देख्दछ कि दोष उत्पन्न गर्नेवाला कर्महरूको यस मा अभाव छ। भाव यो हो कि यस्तो आराधना रूप कर्महरूलाई, सत्त्व शुद्धि पूर्वक ज्ञानद्वारा मोक्षको हेतु संझि र उनीहरूमा बाँध्ने शक्तिको अभाव देखेर उनीहरूलाई अकर्म नै संझिन्छ, जस्तो कि भगवान्‌ले पहिले पनि भन्नुभएको छ, 'नेहाभिक्रमनाशोऽस्ति प्रत्यवायो न विद्यते'। र अकर्ममा अर्थात् योग्यता भएर पनि विहित कर्महरूलाई नगरी चुपलागेर बस्नमा जो कर्म देख्दछ, अर्थात् यो संझिन्छ कि यो अकर्म वा चुप बस्नु पनि पाप वा दोष पैदा गर्नेवाला हुनाले बाँधनेवाला हो जस्तो भगवान्‌ले पहिले पनि भन्नुभएको थियो-'कर्मेन्द्रियाणि संयम्य य आस्ते मनसा चरन्', 'मिथ्याचारः स उच्यते'। 'च' को अर्थ यो हो कि केवल कर्मनिष्ठ पुरुषलाई भ्यान्टा, मुसुरो आदिको भक्षण गर्नमा दोष हुन्छ, तर भगवान्‌को आराधना गर्नेलाई कुनै प्रसादको साथमा यी निषिद्ध अन्नलाई दियो भने र उसले त्यो खायो भने कुनै दोष लाग्दैन। यसले विकर्मको तत्त्व सूचित गर्‌यो। श्रीमद्भागवतमा पनि यस्तै भनेको छ- 'स्वपादमूलं .......सन्निविष्ट॥' अर्थात परेश हरि ती आफ्ना भक्तहरूको हृदयमा बसेर जो उहाँको चरणसेवा गर्दछन् उहाँका प्रिय छन् र अरु देवताहरूमा भाव राख्दैनन्, उनीहरूबाट यदि कुनै प्रकार विकर्म बनिहाल्यो भने उनीहरू द्वारा गरिएको विकर्मलाई भगवान् नाश गरिदिनुहुन्छ। अब कर्म अकर्म आदि जान्नेहरूको स्तुति गर्नुहुन्छ- कर्म अकर्मादि को तत्त्वलाई जान्नेवाला पुरुष सबै मनुष्यहरूमा बुद्धिमान् अर्थात् ज्ञानवान् र श्रेष्ठ छ। र त्यही योगयुक्त हो र त्यही सबै कर्महरू गर्नेवाला हो॥१८॥

-★-★-★-

## यस्य सर्वे समारम्भाः कामसङ्कल्पवर्जिताः।
## ज्ञानाग्निदग्धकर्माणं तमाहुः पण्डितं बुधाः॥

**जसको सम्पूर्ण शास्त्रसम्मत कर्म बिना कामना र संकल्पको हुन्छन् तथा जसको समस्त कर्म ज्ञाानरूप अग्निको द्वारा भष्म भईसकेका छन्,त्यस महापुरुषलाई ज्ञानीहरू पनि पण्डित भन्दछन्॥१९॥**

उक्तप्रकारेण कर्माकर्मादिज्ञातुर्बुद्धिमत्त्वं यदुक्तं तदेवोपपादयति यस्येति। यस्य मुमुक्षोः सर्वे समारम्भा नित्यनैमित्तिकभगवज्जन्मकर्मोत्सवादिसम्बन्धिनः सम्यगारम्भाः कामसंकल्पवर्जिताः, काम्यन्त इति कामाः फलानि तत्संकल्पवर्जिता भवन्ति, तं बुधाः पण्डितं ज्ञानिनमाहुः। यतो ज्ञानाग्निदग्धकर्माणम्, उक्तप्रकारैः कर्मभिर्निर्मलीभूतेऽन्तकरणे जातो यो ज्ञानरूपोऽग्निस्तेन दग्धानि फलादान्यपि भर्जितान्नवत्फलोत्पादनानर्हीभूतानि कर्माणि यस्य तमित्यर्थः॥१९॥

माथि जो कर्म र अकर्मको तत्त्वलाई जान्नेहरूको बुद्धिमत्ता भनिएको छ त्यसको यहाँ समर्थन गर्नुहुन्छ। जुन मोक्षको इच्छा भएको पुरुषको नित्य नैमित्तिक कर्म तथा भगवान्‌को जन्म र कर्म को उत्सव आदिसँग सम्बन्ध राख्ने कर्म सम्यक् रूपले आरम्भ गर्ने गरिन्छ र फल संकल्पले शून्य छ, अर्थात् फलको आकांक्षाले रहित छ, त्यसैलाई पण्डितहरू ज्ञानी भन्दछन्। किनकी उक्त प्रकारको कर्महरूबाट अन्तःकरण निर्मल भएपछि जुन ज्ञानरूप अग्नि उत्पन्न हुन्छ त्यो फल दिनेवाला कर्मलाई पनि जलाई दिन्छ। अर्थात् जुन भुटेको अन्नमा अंकुर निस्कदैन र डढेको कपडाले बाँध्न सकिदैन त्यस्तै नै यी ज्ञानिहरूलाई फल दिनेवाला कर्म पनि फल उत्पन्न गर्दैनन्॥१९॥

-★-★-★-

## त्यक्त्वा कर्मफलासङ्गं नित्यतृप्तो निराश्रयः।
## कर्मण्यभिप्रवृत्तोऽपि नैव किञ्चित्करोति सः॥

**जुन पुरुष सबै कर्महरूमा र उनीहरूको फलासक्ति लाई सर्वथा त्यागेर संसारको आश्रयबाट रहित भएको छन् र परमात्मामा नित्य तृप्त छन्, त्यो कर्ममा लागिपरे पनि वास्तवमा केहि गर्दैन॥२०॥**

एतेन निष्कामस्य ज्ञानिनः पूर्वकर्मविनाश उक्तः। इदानीं क्रियमाणकर्मणामश्लेषमाह–त्यक्त्वेति। कर्मणि तत्फले च आसंगं फलकर्तृत्वाभिमानं त्यक्त्वा नित्येन स्वरूपानन्देन तृप्तः, निराश्रयः देहाद्यर्थमाश्रयणीयरहितो यः स शास्त्रीये लौकिके वा कर्मणि आभिमुख्येन प्रवृत्तोऽपि किञ्चित्कर्म न करोति, न तेन श्लिष्यते इत्यर्थः।

पछाडिको श्लोक मा यो भनियो कि कामनाहीन ज्ञानिहरूको पूर्वमा गरिएको संचित कर्महरूको विनाश हुन्छ। अब यहाँ यो भन्नुहुन्छ कि यी ज्ञानिहरूको क्रियमाण कर्म अर्थात् वर्त्तमान वा भविष्यत्मा गरिने कर्म पनि छुन सक्दैन अर्थात् यीनिहरूमा दोष पैदा गर्न सक्दैनन् या उनीहरूलाई बाँध्न सक्दैनन्। कर्महरू र उनीहरूको फलमा आसक्ति हीन भएर अर्थात् फलको कर्त्तृत्वमा अभिमान छोडेर र आफ्नो आत्मस्वरूपको आनन्दमा तृप्त र देहादिको निर्वाहका लागि आश्रयहीन भएर जो मनुष्य शास्त्रोक्त वा लौकिक कर्ममा प्रवृत्त हुन्छन्, त्यो कुनै पनि कर्म गर्दैन अर्थात् त्यसबाट गरिएको कर्म त्यसलाई छुदैनन्, ती कर्महरूले त्यो लिप्त हुँदैन॥२०॥

–★–★–★–

## निराशीर्यतचित्तात्मा त्यक्तसर्वपरिग्रहः।
## शारीरं केवलं कर्म कुर्वन्नाप्नोति किल्बिषम्॥

**जसले अन्तःकरण र इन्द्रियहरू सहित शरीरलाई जितेको छ र जसले सबै भोगहरूको सामग्री परित्याग गरेको छ, यस्तो आशारहित पुरुष केवल शरीर- सम्बन्धी गरेर पनि पापमा पर्दैन॥२१॥**

यद्येवं तर्हि–निराशीरिति। निर्गता आशिषः कामना यस्मात्स तथा यतं वशीकृतं चित्तमात्मा सेन्द्रियो देहश्च येन सः, त्यक्तः सर्वपरिग्रहः संग्रहो येन स, केवलं शारीरं शरीर–सम्बन्धिमात्रं नित्यावर्जनीयं कर्म कुर्वन् किल्विषं पापं नाप्नोतीति किमु वक्तव्यमित्यर्थः।

यदि यस्तो हो भने कामना रहित मनुष्य जसले चित्त र आत्मालाई, इन्द्रियहरू र शरीरलाई आफ्नो वशमा गर्‍यो र संग्रह गर्न जसले छोडिदियो त्यो केवल शरीर सम्बन्धी नित्य र अवर्जनीय कर्महरूलाई गर्दै पापमा प्राप्त हुँदैन, यसमा शंका गर्ने कुनै ठाँउ छैन॥२१॥

–★–★–★–

## यदृच्छालाभसन्तुष्टो द्वन्द्वातीतो विमत्सरः।
## समः सिद्धावसिद्धौ च कृत्वापि न निबध्यते॥

**जो बिना इच्छाले आफैं प्राप्त भएको पदार्थमा सधैं सन्तुष्ट रहन्छ तथा जसले कसैको इर्ष्या गर्दैन, जो हर्ष शोक आदि द्वन्द्वबाट सर्वथा अतीत छ-यस्तो सिद्धि र असिद्धिमा सम रहनेवाला कर्मयोगि कर्म गरेर पनि त्यसबाट बन्धनमा पर्दैन॥२२॥**

ननु स्यादेवं केवलशारीरकर्मस्पर्शाभाव इति, यदि पुनः पूर्वाभ्यासेन कर्मविशेषं कुर्याच्चेत्तर्हि तेन बध्येतेति चेत्तत्राहयदृच्छेति। इच्छा प्रयत्नं विनैव येन केन चिदप्रेरिता या चित्तेन भोगप्राप्तिर्यदृच्छा तयैव यो लाभः स

यदि यस्तो शंका छ कि केवल शरीर सम्बन्धी कर्म यस्तो मनुष्यलाई छुदैन तर पूर्वको अभ्यासले यदि कोही कुनै कर्मविशेषलाई गर्दछ भने यो कर्म त्यसलाई जरूर बाँध्नेछ। यसको उत्तर यहाँ दिनुहुन्छ–

इच्छाको बिना नै, जसो तसो गरी प्राप्त भएको अन्न–वस्त्रादि

यदृच्छालाभः वस्त्रान्नादिस्तेन सन्तुष्टः, यदि न प्राप्नुयात्तदा द्वन्द्वातीतः, द्वन्द्वानि क्षुत्पिपासाशीतोष्णवातवर्षादीनि अतीतस्तत्प्राप्तावकातरः। किञ्च विमत्सरः, परस्य भोजनादिप्राप्तौ स्वस्याप्राप्तौ चासहनताशून्यः। अत एव सिद्धावसिद्धौ च लाभालाभे च हर्षविषादरहितः। एवं वृत्तिर्ज्ञानावस्थितो विद्वान् स्वार्थं किञ्चित्कर्म न करोति, किन्तु केन चित्स्वहिताय याचितश्चेत्सर्वज्ञत्वात्परार्थ भगवत्सम्बन्धि यज्ञादिकं विशेषकर्म कृत्वाऽपि न निबध्यते बन्धनं न प्राप्नोति। केचित्तु इमं श्लोकं त्यक्तसर्वपरिग्रहस्य यतेः शरीरस्थित्यर्थं याचनादिप्राप्तौ सत्यायामचितादिना शरीरस्थितिं कुर्यादिति नियमपरतया व्याख्याय यतेरकर्तृत्वसाधनायां तेनैव किञ्चिद्भिक्षाटनादिकं कर्म करोति लोकव्यवहारसामान्यदर्शने, नतु लौकिकैरारोपितकर्तृत्वे भिक्षाटनादौ कर्मणि कर्त्ता भवति। स्वानुभवे तु शास्त्रप्रमाणजनितेनाकर्त्तैव सः। एवं पराध्यारोपितकर्तृत्वं शरीरस्थितिमात्रप्रयोजनं भिक्षाटनादिकं कर्म कृत्वाऽपि न निबध्यते । बन्धहेतोः कर्मणः सहेतुकस्य ज्ञानाग्निदग्धत्वादिति वदन्ति, तत्पौनरुक्तिदोषादसंगतम्, तस्य पूर्वश्लोकेनैव सिद्धत्वाद्यतः शरीरस्थितिमात्रप्रयोजनं भिक्षाटनादिकं कर्मेति पूर्वोक्तशारीरान्न किञ्चिद्विशिष्यते। अस्य वैयर्थ्यं प्रसज्येत। किञ्च यतिपरत्वे उत्तरश्लोकद्वयसंगतिर्विरुध्येत। तत्र "यज्ञायाचरतः कर्मे"त्युक्तत्वात्, यतेर्यज्ञादिकर्मानधिकारात्। तस्मान्न संन्यासिपरमिदं प्रकरणं वक्तुं शक्यमनुपपन्नत्वात्। किन्तु निष्कामज्ञानिभक्तपरमेवोपपद्यते, इत्यलं प्रासंगिकेन।

**भोगहरूले संतुष्ट र कुनै भोग न पाईंदा द्वन्द्वले रहित अर्थात् भोक, प्यास, जाडो, गर्मी, हावा, पानी इत्यादि सँग द्वन्द्व हुँदा कातरता शून्य र मत्सरले रहित, अर्थात् कसैलाई अलिकति खानेकुरा मिलोस र आफुलाई त्यो पदार्थ नमिलोस, त्यस्तो अवस्थामा डाहशून्य र यी कारणहरूले सिद्धि असिद्धि मा र लाभ अलाभमा हर्ष विषाद रहित जो ज्ञानी मनुष्य छ, त्यो आफ्नो स्वार्थको लागि कुनै काम गर्दैन। किन्तु यदि कुनै अर्को आफ्नो हितको लागि उसलाई यज्ञादि कर्म गर्न भन्यो भने, सर्वज्ञ हुनाले यज्ञादि कर्म गरेर, अर्थात् परहितको लागि भगवत् सम्बन्धी यज्ञादि विशेष कर्महरूलाई गरेर पनि त्यो ज्ञानी मनुष्य बन्धनमा पर्दैन्।**

**कुनै मान्छे सबै प्रकारको परिग्रह त्याग्नेवाला यतिहरू अर्थात् संन्यासीहरूलाई शरीर धारणको लागि मागेर भिक्षा आदि मिल्दा पनि अयाचित भावले शरीरधारण गर्नु पर्दछ, यस नियमको अनुकूल यस श्लोकको व्याख्या गरिन्छ। लोक व्यवहारको दृष्टिमा भिक्षाटन आदि कर्म संन्यासी गर्दछ, तर त्यो कर्मको कर्त्ता मानिदैन। संसारमा जो त्यसलाई भिक्षाटन आदि कर्मको कर्त्ता मान्दछ, त्यो ठीक होईन। किनकी शास्त्रमा प्रमाणले उत्पन्न आफ्नो अनुभवमा त्यो अकर्त्ता नै हो। यस प्रकार अरुबाट कर्त्ता मानिए पनि केवल शरीर धारणमात्रको लागि भिक्षा आदिको कर्म गर्दा पनि त्यो कर्मको बन्धनमा पर्दैन। भन्दछन् कि सहेतुक बन्धनको कारण जुन सहेतुक कर्म छ त्यो ज्ञानको अग्निले ध्वस्त हुन्छ। यो कथन पुनरुक्ति हुनाले असंगत छ। किनकी यो कुरा पूर्वको श्लोकहरूले सिद्ध छ। किनकी शरीर धारणमात्रको लागि भिक्षाटन आदि कर्म पूर्वोक्त शरीर सम्बन्धी कर्मभन्दा केहि विशेषता राख्दैन। यसैले पूर्व श्लोक व्यर्थ हुनजान्छ। अरु पनि यस श्लोकलाई यति परत्व लगाउँदा उत्तरको दुई श्लोकहरूको संगति विरुद्ध हुनजान्छ। त्यहाँ 'यज्ञको लागि कर्म' यस्तो भनिएको छ र संन्यासीलाई यज्ञादि कर्म गर्न गराउन कुनै अधिकार छैन। यसैले यो प्रकरण संन्यासीको लागि होईन, किन्तु निष्काम ज्ञानी भक्तको लागि नै उपयुक्त हुन्छ, यसैले यस प्रसंगलाई अब बढाउनु व्यर्थ छ॥२२॥**

–★–★–★–

## गतसङ्गस्य मुक्तस्य ज्ञानावस्थितचेतसः।
## यज्ञायाचरतः कर्म समग्रं प्रविलीयते ॥

**जसको आसक्ति सर्वथा नष्ट भएको छ, जो देहाभिमान र ममताले रहित छ, जसको चित्त निरन्तर परमात्माको ज्ञानमा बस्दछ–यस्तो मनुष्यको सम्पूर्ण कर्म भलीभाँति विलिन हुन्छ॥२३॥**

कृत्वाऽपि न निबध्यत इत्युक्तं तत्र हेतुमाह–गतसंगस्येति। कर्मणि स्वफलोद्देशरहितस्य अत एव मुक्तस्य अन्यै रागद्वेषविवर्जितस्य तयो ज्ञानेऽवस्थितं निश्चलं चेतो यस्य

पछाडि भनियो कि मत्सरहीन मनुष्य कर्म गरेर पनि त्यसबाट बाँधिदैन। त्यसको कारण यहाँ बताउनु हुन्छ–

जसलाई कर्ममा आफ्नो कुनै फलको उद्देश्य हुँदैन, अर्थात् कर्मको फलको प्राप्तिमा आसक्ति छैन, र यसैले रागद्वेष रहित छ, र ज्ञानमा जसको बुद्धि स्थित छ र जो यज्ञ अर्थात् विष्णुको

तस्य यज्ञाय विष्णुप्रीत्यर्थं आचरतः सांगोपांग विधिपूर्वकं कर्मानुष्ठानं कुर्वतः समग्रं निःशेषं प्रविलीयते तस्मै पुण्यदा-नायापि योग्यो न भवति। कुतस्तद्वैगुण्यजन्यप्रत्यवायाय भवेदित्यर्थः। यद्यपि "कर्त्ता कारयिता चैव प्रेरकश्चा-नुमोदकः। सुकृते दुःष्कृते चैव चत्वारः समभागिन"इति कर्त्तुरपि समफलत्वमुक्तम्। तथापि फलोद्देशेनैव कुर्वतस् तत्सम्बन्धो नैवंविधस्येति भावः॥२३॥

प्रीतिको लागि विधिपूर्वक साङ्गोपाङ्ग कर्महरूलाई गर्दछ, त्यसको सबै कर्म विशेषरूले विलिन हुन्छ, र जब उनलाई आफ्नो पुण्यकर्मको फल मिल्दैन, तब कर्ममा विगुणता हुनाले जो पाप वा दोष हुन्छ त्यसको भागी ती कसरी हुन सक्दछन्? यद्यपि तल लेखिएको स्मृति वाक्यको अनुसार कुनै कामको कर्त्ता पनि अरुको बराबर नै फलको भागी हुन्छ, तर फलको उद्देश्यले जहाँ कर्म गरिदैन त्यहाँ यो नियम लागु हुँदैन। स्मृति वाक्य-"कर्त्ता.... समभागिनः॥" अर्थात् राम्रो र नराम्रो सबै काम गर्नेवाला, गराउनेवाला, प्रेरणा वा उत्साह दिनेवाला र अनुमोदन गर्नेवाला यी चारै बराबरको फलभागी हुन्छन्॥२३॥

-★-★-★-

**ब्रह्मार्पणं ब्रह्म हविर्ब्रह्माग्नौ ब्रह्मणा हुतम्।**
**ब्रह्मैव तेन गन्तव्यं ब्रह्मकर्मसमाधिना॥**

**जसको यज्ञमा अपर्ण अर्थात् स्त्रुवा आदि पनि ब्रह्म हो र हवन गर्न योग्य द्रव्य पनि ब्रह्म हो तथा ब्रह्मरूप कर्ताको द्वारा ब्रह्मरूप अग्निमा आहुति दिने क्रिया पनि ब्रह्म हो-त्यस ब्रह्मकर्ममा स्थित रहेका योगीद्वारा प्राप्त गर्न योग्य फल पनि ब्रह्म हो॥२४॥**

एवमुक्तविधस्य योगिनः समग्रकर्मप्रविलय उक्तस्तत्र कथमाकांक्षायां ज्ञानावस्थितचेतस इति पदस्य व्याख्यारूपं सांगस्य यज्ञस्य ब्रह्मात्मकतानुसन्धानप्रकारमाह-ब्रह्मार्पणमिति। अर्प्यतेऽनेनेति अर्पणं श्रुगादि मन्त्रादि च ब्रह्मात्मकत्वाद्ब्रह्मैव। हविरग्नौ प्रक्षेपणीयं द्रव्यं ब्रह्मैव, ब्रह्माग्नौ ब्रह्मभूतेऽग्नौ ब्रह्मणा कर्त्रा यजमानेन हुतं प्रक्षेपणक्रियापि ब्रह्मैव, तथाऽर्पणसम्प्रदानभूतदेवाताऽप्य-नुन्धेया। तथा च कर्त्ता कर्म करणकधिकरणं सम्प्रदानं क्रिया च सर्वं ब्रह्मैवेत्यर्थः। एवं ब्रह्मात्मकं कर्मणि समा-धिस्तत्त्वानुसन्धानं यस्य स ब्रह्मकर्मसमाधिस्तेन ब्रह्मैव गन्तव्यं प्राप्त्यं फलं नतु स्वर्गादिनश्वरफलमित्यर्थः।

उक्त प्रकारको योगीको सबै कर्म विलीन हुन्छन्, यो कसरी हुन्छ? यसको उत्तरमा 'ज्ञानावस्थितचेतसः'को व्याख्यारूप अंगहरूको साथ यज्ञको ब्रह्मात्मकता को रीतिले निरूपण गर्नुहुन्छ।

श्रुवा र मन्त्रादि जसको द्वारा हवन गरिन्छ, त्यो ब्रह्मात्मक हुनाले ब्रह्म नै हो। हवि अर्थात् अग्निमा हाल्ने वस्तु पनि ब्रह्म नै हो। ब्रह्मभूत अग्निमा ब्रह्मभूत यज्ञकर्त्ताबाट गरिएको प्रक्षेपणको क्रिया पनि ब्रह्म नै हो। यसै प्रकार जुन देवताको निमित्त हवि दिईन्छ त्यो पनि ब्रह्म नै हो। भन्नुको तात्पर्य यो कि यज्ञको कर्त्ता, कर्म, करण, अधिकरण, सम्प्रदान र क्रिया सबै ब्रह्म नै हुन्। यस्तो ब्रह्मात्मक कर्ममा जसको समाधि वा तत्त्वानुसन्धान छ, त्यो मनुष्य ब्रह्मलाई नै प्राप्त गर्दछ। स्वर्गादि नश्वर फल त्यसलाई मिल्दैन॥२४॥

-★-★-★-

**दैवमेवारे यज्ञं योगिनः पर्युपासते।**
**ब्रह्माग्नावपरे यज्ञं यज्ञेनैवोपजुह्वति॥**

**अरु कुनै योगिहरू देउताहरूको पूजनरूप यज्ञको नै सम्पूर्ण प्रकारले अनुष्ठान गर्ने गर्दछन् र अन्य कुनै योगिहरू परब्रह्म परमात्मारूप अग्निमा अभेददर्शन- रूप यज्ञको द्वारा नै आत्मरूप यज्ञको हवन गर्दछन्॥२५॥**

एवं सांगस्य यज्ञरूपकर्मणो ब्रह्मात्मकतानुसन्धानेनानुष्ठान-तुर्ब्रह्मप्राप्तिरूपफलमिदानीं तस्यैव श्रैष्ठ्यप्रदर्शनाय अधिकारीभेदेनापरान्बहुविधान्यज्ञानाह-दैवमित्याद्यष्टभिः। केवला इन्द्रादयो देवा इज्यते पूज्यन्ते यस्मिन्स दैवस्तं

अङ्ग सहित यज्ञरूप कर्मलाई ब्रह्मात्मक संझेर त्यसलाई गर्नेलाई त्यस कर्मको फलस्वरूप ब्रह्म प्राप्ति हुन्छ। यो भनेर अब यस्तो यज्ञको श्रेष्ठता देखाउनको लागि अधिकारी भेदले अरु धेरै प्रकारको यज्ञहरूको वर्णन अगाडीका श्लोकहरूले गर्नुहुन्छ-अरु योगीहरू जो ज्ञानहीन र केवल कर्मनिष्ठ छन्, ती दैवयोग अर्थात्

यज्ञमपरे योगिनो ज्ञानहीनाः केवल-कर्मनिष्ठाः पर्य्युपासते सम्यगनुतिष्ठन्ति। अपरे योगिनः किञ्चिज्ज्ञानविशिष्ट-कर्मनिष्ठा ब्रह्माग्नौ ब्रह्मरूपत्वेनाभिमतेऽग्नौ यज्ञं यज्ञद्रव्यं हविर्यज्ञेन यज्ञसाधनेन श्रुगादिना जुह्वति प्रक्षिपन्ति। अग्निमात्रे ब्रह्मबुद्धयस्ते, नतु कर्तृकर्मादिकारककलापेऽतस्तेषां पूर्वोक्ताद्ब्रह्मार्पणादिबुद्धिमतोऽवरत्वमिति भावः।

**जुन यज्ञमा केवल इन्द्रादि देउताहरूको मात्रै पूजा हुन्छ, गर्दछन् र अन्य योगीहरू जो केहि ज्ञानविशिष्ट भएर पनि कर्मनिष्ठ नै छन् ती ब्रह्माग्निमा अर्थात् ब्रह्मरूप अग्निमा यज्ञको साधन श्रुवा आदिले हवि अर्थात् यज्ञद्रव्यलाई हाल्दछन्। भन्नुको तात्पर्य यो कि केवल अग्निमात्रमा यिनीहरूको ब्रह्मबुद्धि छ, कर्त्ता, कर्म इत्यादि क्रियाकलाप मा छैन। यसैले पूर्वमा भनिएको ज्ञानिहरू भन्दा ये तल्लो श्रेणिका हुन्॥२५॥**

-★-★-★-

## श्रोत्रादीनीन्द्रियाण्यन्ये संयमाग्निषु जुह्वति ।
## शब्दादीन्विषयानन्य इन्द्रियाग्निषु जुह्वति ॥

अन्य योगीजन श्रोत्र आदि समस्त इन्द्रियहरूलाई संयमरूप अग्निमा हवन गर्ने गर्दछन् र अरू कुनै योगीहरू शब्दादि विषयहरूलाई इन्द्रियरूप अग्निहरू मा हवन गर्ने गर्दछन्॥२६॥

तेभ्यः श्रेष्ठानाह-श्रोत्रादीनीति। अन्ये निवृत्तिधर्मनिष्ठा ब्रह्मज्ञानाप्तिकामा ज्ञानपरिपन्थिभूतानि श्रोत्रादीनीन्द्रियाणि तत्तत्संयमरूपेष्वग्निषु जुह्वति, इन्द्रियाणां विषयेभ्येनियमन परास्तिष्ठन्तीत्यर्थः। अन्ये प्रवृत्तिधर्मनिष्ठाः सन्ततिवृद्धि-कामा विषयभोगसमये हविष्ट्वेन भावितान् शब्दादीन्वि-षयानग्नित्वेन भावितेषु इन्द्रियेषु जुह्वति, यज्ञरूपकेण विष-यानुभवे वर्त्तन्त इत्यर्थः।

**माथि भनिएको योगिहरू भन्दा श्रेष्ठ योगिहरूको वर्णन गर्दछन्- अरु योगी जो निवृत्ति धर्ममा निष्ठ र ब्रह्मज्ञान प्राप्त गर्ने इच्छा भएकाहरू छन्, ज्ञानमार्गका लुटेराहरू, कान, आँखा आदि इन्द्रियहरूलाई संयमरूप अग्नीमा हवन गर्दछन् अर्थात् इन्द्रियहरूलाई विषयबाट रोक्नमा निरत रहन्छन्। अरु दोस्रो जो प्रवृत्ति धर्ममा निष्ठ छन् र संतति बढ़ाउने इच्छा भएका छन्, विषयभोगलाई हवि मानेर र इन्द्रियहरूलाई अग्नि संझेर विषयहरूलाई इन्द्रियहरूमा हवन गर्दछन्। अर्थात् विषयानुभवलाई यज्ञरूप संझेर त्यसमा प्रवृत्त हुन्छन्॥२६॥**

-★-★-★-

## सर्वाणीन्द्रियकर्माणि प्राणकर्माणि चापरे ।
## आत्मसंयमयोगाग्नौ जुह्वति ज्ञानदीपिते॥

**अरु योगीहरू इन्द्रियहरूको सम्पूर्ण क्रियाहरू र प्राणहरूको समस्त क्रियाहरूलाई ज्ञानले प्रकाशित आत्मसंयमयोगरूप अग्निमा हवन गर्ने गर्दछन्॥२७॥**

तेभ्योऽपि श्रेष्ठाधिकारिण आह-सर्वाणीति। अपरे पूर्वमेव नियमितज्ञानेन्द्रियत्वाद्बाह्यविषयासक्तिशून्याः योगिनः सर्वाणीन्द्रियकर्माणि वाक्पाणिपादपायूपस्थानां कर्मेन्द्रियाणां वचनादानगमनोत्सर्गानन्दाख्यानि कर्माणि प्राणकर्माणि च पञ्चप्राणानां कर्माणि तत्र प्राणस्योद्ध्वर्गमनम्,अपानस्याधोगमनं, व्यानस्य विष्वक्शरीरे गमनाकुञ्चनप्रसारणानि, उदानस्य पीताशितान्नाद्युद्गारकरणं समानस्याशितपीतान्नादेः सर्वत्र शरीरेसमीकरणम्। एतानि

**माथि भनिएको योगीहरू भन्दा पनि श्रेष्ठ अधिकारीको वर्णन अब गर्नुहुन्छ- अरु योगीहरू जो पहिले देखि नै ज्ञानेन्द्रियहरूलाई नियमन गरेर बाहिरको विषयबाट आसक्ति शून्य भएका छन्, ती सबै इन्द्रिय र प्राणादिको कर्मलाई, आत्मसंयम रूपी योगको अग्निमा, त्यसलाई ज्ञानले प्रज्वलित गरेर, हवन अर्थात् ध्यानको योग्यता प्राप्त गर्नु नै योगरूपी अग्नि हो। अग्नि यसैले भनियो कि सबै अशुभहरूलाई जलाउने यसमा शक्ति छ। यसै अग्निलाई ज्ञानले प्रज्वलित गरेर माथि भनिएको योगी त्यसमा सबै इन्द्रिय र प्राणहरूको कर्मलाई हवन गर्दछन्। तात्पर्य कि आफ्नो ध्येयलाई सम्यक्रूपले निश्चय गरी त्यसैमा आफ्नो मनलाई निश्चल गरेर**

आत्मसंयमयोगाग्नौ आत्मनो मनसः संयमो वृत्त्यन्तरवै-मुख्यपूर्वकमात्मप्रवणीकरणं ध्यानयोग्यतासम्पादनं स योग एव सर्वाशुभदाहकत्वादग्निस्तस्मिन् ज्ञानदीपिते ज्ञानेन प्रज्वलिते जुह्वति। ध्येयं सम्यङ्निश्चित्य तस्मिन्मनोनिश्चीकर्तुं इन्द्रियप्राणकर्माणि त्याजयन्तीत्यर्थः।

इन्द्रिय र प्राणको कर्महरूलाई छोडिदिन्छन्। इन्द्रियहरूको कर्म यी हुन्- वाक्को बोल्नु, हातको लिनु-दिनु, गोडाको हिंड्नु, पायुको मल त्याग गर्नु, र उपस्थको आनन्द अनुभव गर्नु। प्राणादिको कर्म यी हुन्- प्राणवायु माथि जानु, अपान वायु तल आउनु, व्यानवायुले शरीरलाई फैलाउनु समेट्नु इत्यादि। उदानवायुको खाई-पिई गरेको अन्नको डकार आउनु, समान वायुको खाएको पिएको अन्नादिलाई शरीरमा सबै ठाउँमा बराबर रूपले पुर्याउनु॥२७॥

-★-★-★-

**द्रव्ययज्ञास्तपोयज्ञा योगयज्ञास्तथापरे ।**
**स्वाध्यायज्ञानयज्ञाश्च यतयः संशितव्रताः॥**

**अन्य कति पुरुषहरू द्रव्यसम्बन्धी यज्ञ गर्नेवाला छन्, कति त तपस्यारूप यज्ञ गर्नेवाला छन् तथा अर्का कतिपय योगरूप यज्ञ गर्नेवाला छन् त्यस्तै कति त अहिंसादि तीक्ष्णव्रतले युक्त यत्नशील पुरुष स्वाध्यायरूप ज्ञानयज्ञ गर्नेहरू छन्॥२८॥**

किञ्च-द्रव्ययज्ञा इति केचिद्द्रव्ययज्ञाः स्वधर्मतो द्रव्यार्जनं कृत्वा पात्रे प्रतिपादनदेवार्चनहोमवापीकूपतडागादिषु प्रयुञ्जति ते द्रव्ययज्ञा केचित्तपोयज्ञाः। कृच्छ्रचान्द्रायणादि तप एव यज्ञो येषां ते तपस्विनः। तथाऽपरे योगयज्ञाः यमनियमासनप्राणायामप्रत्याहारधारणाध्यानसमाधय इत्यष्टांगो योग एव यज्ञस्तन्निष्ठाः। स्वाध्यायो वेदाध्ययनमेव यज्ञो येषां ते स्वाध्याययज्ञा, वेदवेदान्तार्थाभ्यासनिष्ठा ज्ञानयज्ञाः यतयः यत्नशीलाः संशितव्रताः सम्यक् शितानि तीक्ष्णीकृतानि दृढानि व्रतानि येषां ते व्रतयज्ञाः।

अरु पनि भिन्न प्रकारको योगीहरूको वर्णन हुन्छ- अर्का प्रयत्नशील र दृढव्रतवाला कुनै योगी द्रव्ययज्ञ गर्दछन्, अर्थात् आफ्नो ध र्मबाट द्रव्य कमाएर सत्पात्रमा दान गर्दछन्, जस्तो देवार्चन, कुवा, पोखरी इत्यादि खनाउनु, या हवन गर्नु । कुनै तपरूप यज्ञ नै गर्दछन्, अर्थात् कृच्छ्र चान्द्रायणादि व्रतहरू गर्दछन्। कुनै योगरूपी यज्ञको नै अनुष्ठान गर्दछन्, अर्थात् यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, ध्यान, धारणा र समाधि यी योगको आठै अंगहरूमा निरत रहन्छन्। कुनै वेदाध्ययनरूपी यज्ञलाई गर्दछन् र कसैलाई वेदान्तको अर्थको अभ्यासमा नै निष्ठा छ, यिनीहरूको लागि ज्ञान नै यज्ञ रूप हुन्छ अर्थात् ती ज्ञानयज्ञ गर्नेवाला हुन्। कुनै संशित व्रत योगी छन् अर्थात् जसले आफ्नो व्रतलाई राम्रो सँग तीक्ष्ण नाम दृढ गरेका छन् यी व्रत यज्ञवाला हुन्॥२८॥

-★-★-★-

**अपाने जुह्वति प्राणं प्राणेऽपानं तथापरे। प्राणापानगती रुद्ध्वा प्राणायामपरायणाः॥**
**अपरे नियताहाराः प्राणान्प्राणेषु जुह्वति। सर्वेऽप्येते यज्ञविदो यज्ञक्षपितकल्मषाः॥**

**कतिपय योगीजन अपानवायुमा प्राणवायुको हवन गर्ने, र प्राणवायुमा अपानवायुको हवन गर्ने गर्दै प्राण र अपानको गतिलाई रोकेर प्राणायामपरायण हुनजान्छन्,अन्य कतिपय नियमित आहार गर्ने (प्राणायामपरायण पुरुषहरू) प्राण र अपानको गतिलाई रोकेर प्राणमा प्राणको नै हवन गर्दछन्, यी सबै साधकहरू यज्ञको द्वारा पापको नाश गरिदिने र यज्ञको जानकार हुन्॥२९-३०॥**

प्राणायामयज्ञमाह-अपान इति सार्धेन। अपानेऽधेवृत्तौ प्राणमूर्द्ध्ववृत्तिं जुह्वति पूरकं कुर्वन्ति। प्राणेऽपानमिति रेचकं कुर्वन्ति। किं कृत्वा प्राणापानयो गती रुद्ध्वा कुम्भकं कृत्वेत्यर्थः। नतु पूरकान्तरं रेचकमिति भावः। एवं च पूरककुम्भकरेचकैः प्राणायामपरायणा अपरे योगिनः

अब प्राणायाम यज्ञ भन्नुहुन्छ- अरु प्राणायाममा निष्ठ योगी प्राणवायुलाई अपानमा हवन गरेर अर्थात् पूरक गरेर फेरि अपानलाई प्राणमा हवन गर्दछन्, अर्थात् रेचक गर्दछन्। र दुबैको बीचमा प्राण र अपान दुबैको गतिलाई रोक्दछन् अर्थात् कुम्भक गर्दछन्। भन्नुको प्रयोजन कि पहिले पूरक गरेर तब कुम्भक गर्दछन् र अन्तमा रेचक गर्दछन्। फेरि अरु योगी आहारको

प्राणायामयज्ञं कुर्वन्तीत्यर्थः। अपरे योगिनो नियताहारा आहारनियमाभ्यासनिष्ठाः सन्तो योगाभ्यासेऽन्त-रायकरान्प्राणान् ज्ञानकर्मात्मकानि द्विविधानीन्द्रियाणि प्राणेषु ऊर्द्ध्वाधोगतिनियमनेन मध्ये स्थिरीकृतेषु जुह्वति, कुम्भक एव, न पृथक्।

एवमेते द्वादशयज्ञा दर्शिता इदानीमेषां यज्ञविदां फलमाह- सर्वेऽपीति। एते पूर्वोक्ताः सर्वेऽपि यज्ञान् विदन्ति जानन्ति, विन्दन्ति लभन्त इति वा यज्ञविदो यज्ञज्ञातारः कर्तारो वा यज्ञैः पूर्वोक्तैः क्षपितं नाशितं कल्मषं यैस्ते यज्ञक्षपितकल्मषाः।

नियम मा अभ्यास निष्ठ भएर योगाभ्यासमा अन्तराय वा अड्चन गर्ने प्राणहरूलाई अर्थात् ज्ञानेन्द्रिय र कर्मेन्द्रियलाई प्राणवायु अर्थात् बाहिर र भित्र जाने वायुलाई रोकेर बीचमा स्थिर गरिएको प्राणवायुमा हवन गर्दछन् अर्थात् इन्द्रियहरूको वृत्तिलाई कुम्भकमा राखेर त्यसको लय गर्दछन्। यो पनि कुम्भक प्राणायाम नै हो। अर्को होईन।

यस प्रकार बाह्र प्रकारको यज्ञलाई भन्नुभयो। अब यी यज्ञहरूलाई जान्नुको फल भन्नुहुन्छ- पूर्वमा भनिएको सबै योगी यज्ञहरूलाई जान्दछन् वा यज्ञ गर्दछन्-भन्नुको मतलब यो हो कि ती यज्ञहरूलाई जान्ने अथवा गर्ने हुन्। फेरि पूर्वमा भनिएको विभिन्न प्रकारको यज्ञहरूलाई गरेर तिनीहरूको पाप नाश भएको छ॥२९-३०॥

-★-★-★-

**यज्ञशिष्टामृतभुजो यान्ति ब्रह्म सनातनम्।**
**नायं लोकोऽस्त्ययज्ञस्य कुतोऽन्यः कुरुसत्तम॥**

**हे कुरुश्रेष्ठ अर्जुन! यज्ञबाट बचेको अमृतको अनुभव गर्नेवाला योगीजन सनातन परब्रह्म परमात्मालाई प्राप्त गर्दछन्। र यज्ञ नगर्ने पुरुषको लागि यो लोक नै सुखदायक छैन, भने परलोक कसरी सुखदायक हुन सक्दछ?॥३१॥**

यज्ञानुष्ठानानन्तरः कालो यज्ञशिष्टशब्दवाच्यः तस्मिन् काले भोज्यं यदन्नादि तदमृतं भुञ्जते इति यज्ञशिष्टामृतभुजः, ते सर्वेऽपि सत्त्वशुद्धिपूर्वकज्ञानप्राप्ति- द्वारेण सनातनं ब्रह्म यान्तीत्यवैष्णवपक्षे व्याख्यानम्। वैष्ण- वपक्षे तु पूर्वोक्तयज्ञैर्निष्कामतयाऽनुष्ठितैः क्षपितपूर्वकल्मषा यज्ञो विष्णुस्तच्छिष्टं तद्भुक्तावशिष्टं विष्णुनिवेदितान्न- मित्यर्थः। तदेवामृतं भुञ्जत इति यज्ञशिष्टामृतभुजस्ते सनातनं ब्रह्म यान्ति। तथोक्तं स्कान्दे नारायणेन ब्रह्माणम्प्रति। 'भोक्तव्यं मम चोच्छिष्टं मम भक्तिपरायणैः। पवित्रकरणं पुत्र! पापिनामपि मुक्तिदम्। ममाशनस्य शेष च यो भुनक्ति दिने दिने। सिक्थे सिक्थे भवेत्पुण्यं चान्द्रायणशतं सुते'ति। अन्यथा दोषमाह तत्रैव 'अवशिष्टं यथोच्छिष्टं भक्तानां भोजनद्वयम्। नान्यद्वै भोजनं भुक्त्वा चान्द्रायणं चरेत्। अनर्पयित्वा यो भुङ्क्ते अन्नपानादिकं च यत्। शुनो विष्टासमं चान्नं पानं च मदिरासममि'ति। वक्ष्यति च भगवान्स्व-यमपि। 'यत्करोषि यदश्नासी'त्यादिना। तत्फलं च 'शुभाशुभफलरेवं भक्ष्यसे कर्मबन्धनैरि'ति। तस्माद्विष्णव-नर्पितस्य भोज्यस्य कुतो वा तद्भुञ्जतां ब्रह्मप्राप्तिरिति सङ्क्षेपः।

यज्ञानुष्ठान पछिको समयलाई यज्ञशिष्ट भन्दछन्। यस कालमा जुन भोजनादिक गरिन्छ त्यो अमृत हो यस्तै यज्ञान्तकालमा भोजनरूपी अमृत खानेहरू, सत्त्वको शुद्धि भएकोले, ज्ञान प्राप्त गरेर सनातन ब्रह्मलाई प्राप्त गर्दछन्। यस श्लोकको यो व्याख्या अवैष्णव पक्षमा घट्दछ। वैष्णव पक्षको व्याख्या यस्तो छ- पूर्वोक्त प्रकारको यज्ञहरूलाई कामना रहित भएर गर्नाले योगीहरूको सबै पाप नाश हुन्छन् र यज्ञ रूप विष्णुलाई निवेदन गरिएको अन्न(प्रसाद) लाई खानाले ती सनातन ब्रह्मलाई प्राप्त गर्दछन्। स्कन्द पुराणमा नारायणले ब्रह्माको प्रति यस्तो भनेका छन्-

'भोक्तव्यं ......... सुत॥' अर्थात हे पुत्र! मेरो भक्तिमा परायण मान्छेहरूले मेरो उच्छिष्ट भोजन गर्नु पर्दछ। किनकी मेरो उच्छिष्ट भोजन पवित्र गर्नेवाला र पापीहरूलाई पनि मुक्ति दिनेवाला छ। जो मनुष्य मेरो भोजनबाट बचेको प्रसादलाई नित्य खाने गर्दछ त्यसलाई, हे पुत्र! प्रतिग्रास मा सय चन्द्रायण व्रत गरेको पुण्य हुन्छ। मलाई अर्पण नगरिएको अन्न भोजन गरेको दोष पनि त्यसै स्थान मा भनिएको छ- यथा, अवशिष्टं ......मदिरासममि॥' अर्थात् भक्तहरूको लागि दुई प्रकारको भोजन छन्, मेरा भोजनबाट बचेको या मेरो जुठो। उनीहरूका लागि अर्को भोजन छैन। अर्को प्रकारको भोजन गरेर चान्द्रायण व्रत गर्नु पर्दछ। मलाई अर्पण नगरिकन जो अन्नपानादिक गर्दछ, त्यसको त्यो अन्न कुकुरको विष्ठाको समान र पानी मदिराको समान हुन्छ। भगवान् स्वयं पनि अगाडी गएर यस विषयमा 'यत्करोषि यदश्नासि' इत्यादि श्लोकमा भन्नुहुनेछ र त्यसको फल 'शुभाशुभफलैरेवं मोक्ष्यसे कर्मबन्धनैः' को श्लोकमा भन्नुहुन्छ। संक्षेपमा अर्थ यो भयो कि विष्णुलाई अर्पण नगरिएको भोजनमा अमृतत्व कहाँबाट आओस

एवं यज्ञानुष्ठाने गुणमुक्त्वा तदभावे दोषमाह–नायमिति। पूर्वोक्तानां यज्ञानां मध्ये यस्य कोऽपि यज्ञो नास्ति, सोऽयज्ञस्तस्यायमल्पसुखो मनुष्यलोकोऽपि नास्ति। कुतोऽन्यो विशिष्टसुखः परलोको हे कुरुसत्तमेति॥३१॥

र त्यसैले त्यस भोजन गर्नेवालालाई ब्रह्मको प्राप्ति कहाँबाट होओस अर्थात् कदापि हुन सक्दैन।

यज्ञको अनुष्ठानको गुणहरू भनेर अब यज्ञ नगर्नुको दोषलाई आधा श्लोकमा देखाउनु हुन्छ– हे कुरुहरूमा श्रेष्ठ, पूर्वमा भनिएको यज्ञहरूमा कुनै यज्ञलाई पनि जो मनुष्य गर्दैन त्यो अयज्ञ मनुष्य यस अल्प सुखवाला लोकलाई पाउँदैन अर्थात् भोग्दैन। विशेष सुखवाला परलोकलाई प्राप्त गर्नु त परै को कुरा भयो॥३१॥

–★–★–★–

## एवं बहुविधा यज्ञा वितता ब्रह्मणो मुखे ।
## कर्मजान्विद्धि तान्सर्वानेवं ज्ञात्वा विमोक्ष्यसे॥

**यसै प्रकार अरू पनि धेरै प्रकारको यज्ञ वेदको वाणीमा विस्तारले भनिएको छ। ती सबैलाई तिमी मन, इन्द्रिय र शरीरको क्रियाद्वारा सम्पन्न हुने जान, यस प्रकार तत्त्वले जानेर उनीहरूको अनुष्ठानद्वारा तिमि कर्मबन्धनबाट सर्वथा मुक्त हुनेछौ॥३२॥**

उक्तयज्ञानां प्रमाणापेक्षायां वैदिकत्वमाह–एवमिति। एवमुक्तप्रकारेण बहुविधा बहुप्रकारा यज्ञा ब्रह्माणो वेदस्य मुखे पूर्वकाण्डे वितता विस्तृताः। वेदद्वारेणैव ते ज्ञेयाः। वेदादेव वैदिकैः परम्परयावगन्तव्या इत्यर्थः। तान्सर्वान् कर्मजान् कायिकवाचिकमानसकर्मसमुद्भवान् विद्धि जानीहीति। कर्मणामनित्यत्वेनात्मस्वरूपस्य च नित्यत्वान्न नित्यत्वान्न नित्यसम्बन्धः, इत्येवं ज्ञात्वा विमोक्ष्यसे कर्ममयसंसारादित्यर्थः॥३२॥

पहिले भनि सकिएको यज्ञहरूको प्रमाण स्वरूप वैदिकता देखाउनु हुन्छ– पहिले भनिसकेको धेरै थरीको यज्ञ ब्रह्म अर्थात् वेदको मुखमा अर्थात् पूर्वकाण्डमा जसलाई पूर्व मीमांसा काण्ड भन्दछन् विस्तृत छ। वेदकै द्वारा तिनलाई जान्न सकिन्छ अर्थात् वैदिकहरूसँग परम्परागत बाटो बाट यिनीहरूलाई जान्नु पर्दछ। यी सबै यज्ञहरूलाई कायिक, मानसिक र वाचिक कर्महरूबाट उत्पन्न जान्नु। भन्नुको भाव यो हो कि कर्म अनित्य छ र आत्मस्वरूप नित्य छ यसैले नित्य आत्मस्वरूपको यी अनित्य कर्महरूसँग नित्य सम्बन्ध छैन। यस्तो जानेर तिमी यस कर्ममय संसारबाट मोक्ष पाउने छौ॥३२॥

–★–★–★–

## श्रेयान्द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परन्तप ।
## सर्वं कर्माखिलं पार्थ ज्ञाने परिसमाप्यते॥

**हे परन्तप अर्जुन! द्रव्यमय यज्ञको अपेक्षा ज्ञानयज्ञ अत्यन्त श्रेष्ठ छ, तथा यावन्मात्र सम्पूर्ण कर्म ज्ञानमा समाप्त हुन जान्छन्॥३३॥**

सर्वेषां तुल्यवन्निर्देशात् ज्ञानयज्ञस्यापि तदन्तर्गण–नात्तत्साम्यापत्तिं वारयन्नाह–श्रेयानिति। हे परन्तप! द्रव्यमयाद्दैवादिरूपात्तदुपलक्षिताज्ज्ञानहीनादल्पफल–कात्सर्वस्माद्यज्ञाज्ज्ञानयज्ञः श्रेयान् प्रशस्यतरः। तत्र हेतुः। सर्वं कर्म सांगोपांगमखिलं हेतुफलसहितं ज्ञाने तत्त्वपदार्थस्वरूपगुणसम्बन्धविषयकानुभवे परिसमाप्यते, अन्तर्भवतीति 'सर्वं ह पश्यः पश्यति सर्वमाप्नोति सर्वश'

पछाडी सबै यज्ञहरूको एकसाथ गणना गरिदिईयो। ज्ञानयज्ञको पनि त्यसैमा गणना भयो, यसले ज्ञानयज्ञ पनि सबैको बराबर नै न संझिईयोस यसैले यसलाई अरु यज्ञहरू भन्दा श्रेष्ठता देखाउनु हुन्छ–

हे अर्जुन! द्रव्यमय आदि जति पनि यज्ञ छन्, ती ज्ञानहीन हुनाले अल्पफल दिनेवाला हुन्, यसैले ती सबै यज्ञहरू भन्दा ज्ञान यज्ञ श्रेष्ठ छ। यसको कारण यो हो कि हेतु र फलको साथ सबै कर्महरूको अन्त ज्ञान मा नै हुन्छ अर्थात् 'तत्' र 'त्वं' पदार्थ(ब्रह्म र जीव) को स्वरूप र गुण सम्बन्धी अनुभव मा नै सबै कर्म आफ्नो कारण र फलको साथ अन्त हुनजान्छन्। श्रुति पनि यस्तै भन्दछिन् यथा– 'सर्वं ....सर्वश' अर्थात् देख्नेवाला(मुक्त)

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

इति श्रुतेः। श्रीभागवतेऽपि। 'तपस्तीर्थं जपो दानं पवित्राणीतराणि च। नालंकुर्वन्ति तां सिद्धिं या ज्ञानकलया कृते'ति ॥३३॥

सबैलाई देख्दछ र सबै प्रकारले सबैलाई पाउँदछ। फेरि श्रीमद्भागवतमा पनि लेखिएको छ–'तपस्तीर्थं ....ज्ञानकलया कृता॥' अर्थात् जति सिद्धि ज्ञानको एक कलाले हुन्छ, त्यति तप, तीर्थ, जप, दान या पवित्र कर्महरूले हुँदैन॥३३॥

–★–★–★–

**तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया ।**
**उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्त्वदर्शिनः॥**

**त्यस ज्ञानलाई तिमि तत्त्वदर्शी ज्ञानीहरू सँग गएर सम्झिनु, उनीहरूलाई दण्डवत्-प्रणाम गर्नाले, उनीहरूको सेवा गर्नाले,र कपट छोडेर प्रश्न गर्दा ती परमात्मतत्त्वलाई राम्रो सँग जान्ने ज्ञानी महात्मा तिमीलाई त्यस तत्त्वज्ञानको उपदेश गर्नेछन्॥३४॥**

एवम्भूतज्ञानप्राप्तिः केनोपायेन स्यादित्यपेक्षायामाह–तद्विद्धीति। तत्सर्वकर्मविलक्षणं सर्वफलदं ज्ञानं विद्धि लभस्व, उक्तज्ञानवतां प्रणिपातेन श्रद्धाभक्तिपूर्वकदण्ड–वत्प्रणामेन। ततश्च कोऽहं? किंस्वरूपः? कथं बद्धोऽसि? कथं वा मुच्येयं? को वा मे नियन्तेत्यादिपरिप्रश्नेन बहुवि–धसन्देहविषयेण प्रश्नेन सेवया शुद्धभावेन शुश्रुषया च प्रसादाभिमुखा ज्ञानिनः शास्त्रजन्यपरोक्षानुभववन्तः, तत्त्वदर्शिनः शास्त्रार्थभूततत्त्वसाक्षात्काराश्रयास्ते तुभ्यं ज्ञानं जीवेश्वरस्वरूपयाथात्म्यमुपदेक्ष्यन्ति,समीचीनयुक्तिप्रमाणैः सन्देहनिवर्त्तनेन सम्पादयिष्यन्ति। तत्त्वदर्शिभिरेवोपदिष्टे ज्ञाने सर्वंकर्मान्तर्भवति, न त्वन्योपदिष्टे इत्यर्थः। एतेन 'तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठमि'ति श्रुत्यर्थो दर्शितः। बहुवचनं चात्र यद्येकस्माद् गुरोः सम्यगानालाभश्चेत्तर्ह्यन्यस्मात्तत्त्वदर्शिन उक्तरीत्यैवो–पादेयम्। तत्रापि सन्देहावशेषेऽन्यस्माद् ग्राह्यमित्येतदर्थम्। एकस्मादेव कृतार्थतायां नेतरापेक्षेति विवेकः॥३४॥

यस प्रकारको ज्ञानको प्राप्ति कसरी हुन सक्दछ त्यसैलाई भन्नुहुन्छ, सबै कर्महरू भन्दा विलक्षण र सबै फल दिने त्यस ज्ञानलाई प्राप्त गर। कसरी प्राप्त गर्ने त्यो कुरा बताउनु हुन्छ–

त्यस ज्ञानलाई जान्नेहरूलाई श्रद्धा भक्तिपूर्वक दण्डवत प्रणाम गरेर, फेरि यी सबै संन्देहको विषयको प्रश्न सोधेर- म को हूँ? म कसरी बाँधिएको छु? मेरो स्वरूप केहो? म कसरी छुट्दछु? मेरो नियन्ता को हो? इत्यादि । शुद्धभावले सेवाको द्वारा प्रसन्न भएपछि, उत्पन्न परोक्ष विषयहरूको अनुभववाला ती ज्ञानी पुरुष जसले शास्त्रार्थभूत तत्त्वहरूको साक्षात्कार गरेका छन्, ती तिमीलाई जीव र ईश्वरको यथार्थ स्वरूपको उचित युक्ति र प्रमाणको साथ उपदेश गर्नेछन् र यस बारेमा तिम्रो संन्देहलाई हटाउने छन्। तत्त्वदर्शिहरूको द्वारा उपदेश गरिएको ज्ञानबाट कर्महरूको अन्त हुन्छ, अरुको उपदेशले हुँदैन। यस श्लोक भन्दा तल लेखिएको श्रुतिको अर्थ देखाईएको छ 'तद्विज्ञानार्थं.....ब्रह्मनिष्ठम्।' अर्थात् परमात्माको स्वरूप गुणादिलाई विशेष जान्न को लागि र केहि पनि भएन भने हातमा समिधा लिएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुको समीपमा जाऊ। तत्त्वदर्शी शब्दमा बहुवचन यसैले व्यवहार गरिएको छ कि यदि एक गुरुबाट पूर्ण रीतिले ज्ञान लाभ हुन सकेन भने पूर्वोक्त रीति भन्दा दोस्रै तत्त्वदर्शी गुरुको समीप मा जानु। त्यसमा पनि सन्देह बाँकी भयो भने तेस्रो मा जानु। यदि एक बाट नै ठीक ज्ञान प्राप्त भयो भने अर्को को अपेक्षा नगर्नु॥३४॥

–★–★–★–

**यज्ज्ञात्वा न पुनर्मोहमेवं यास्यसि पाण्डव।**
**येन भूतान्यशेषेण द्रक्ष्यस्यात्मन्यथो मयि॥**

**यसलाई जानेर तिमी फेरि यस प्रकार मोहमा प्राप्त हुँदैनौ तथा हे अर्जुन! जुन ज्ञानको द्वारा तिमी सम्पूर्ण भूतहरू(चराचर)लाई निःशेषभावले पहिले आफुमा र पछि म सच्चिदानन्दघन परमात्मामा देख्नेछौ॥३५॥**

एवम्भूतमाहात्म्यस्य ज्ञानस्येहापि यत्फलं तद्दर्शयति–

यस्तो माहात्म्यवाला ज्ञानको यहाँ नै अर्थात् यस संसारमा जुन

यदिति। यत्तत्त्वदर्शिभिरुपदिष्टं ज्ञानं ज्ञात्वा सम्यगवधार्य्य पुनर्मोहमन्तः करणविभ्रमम्, 'यानेव हत्वा न जिजीविषाम' इत्याद्युक्तप्रकारेण न यास्यसि प्राप्स्यसि। कुतस्तत्राह येन ज्ञानेन भूतानि बन्धुसुहृदादीनि अशेषेण देवमनुष्यतिर्य्यग्न्तानि सर्वाणि आत्मनि त्वम्पदार्थे द्रक्ष्यसि। आत्मतुल्यताय ज्ञास्यसि। वैषम्यं तु प्रकृतिकार्यशरीरनिष्ठम्। आत्मा तु ज्ञानस्वरूपत्वेन सर्वत्र देहेषु सम एवातो न मत्तः कश्चिद्विलक्षणोऽस्तीति निश्चेष्यसीत्यर्थः। अथोऽनन्तरं सर्वात्मनि तत्पदार्थे वासुदेवे भगवति सर्वाणि भूतान्यशेषेण द्रक्ष्यसि। आत्मानां सर्वेषां मदात्मकत्वमदधीनत्वमद्व्याप्यत्वमदाधेयत्वादिना बन्धे मोक्षे च मत्तोऽन्यत्रावस्थित्यभावादित्यर्थः॥३५॥

फल हुन्छ त्यसलाई भन्नुहुन्छ–

तत्त्वको जानकार वा द्रष्टाद्वारा उपदेश दिईएको ज्ञानलाई भलिभाँति धारण गरेर तिमीलाई फेरि यस्तो मोह वा अन्तःकरणको भ्रम हुँदैन, जस्तो कि 'यानेव हत्वा न जिजीविषामः' इत्यादि भनेर तिमीले प्रकट गरेका छौ। मोह किन हुँदैन यसको कारण भन्दछु– यस ज्ञान ले बन्धु, सुहृत् आदि, देव, मनुष्य तिर्यक् पर्यन्त सबैलाई तिमी आफ्नो आत्मा वा त्वम्पदार्थमा देख्नेछौ। अर्थात सबैमा आत्माको तुल्यता जान्नेछौ र यो संझिने छौ कि एक अर्को भन्दा विषमता वा पृथक्ता केवल शरीरबाट जो प्रकृतिको कार्य हो, सम्बन्ध राख्दछ। तात्पर्य कि आत्मा मा विषमता हुँदैन। विषमता केवल प्रकृतिको कार्यरूप शरीरमा नै हुन्छ। आत्मा ज्ञानस्वरूप हुनाले सबै देहमा बराबर हुन्छ। यसैले मेरो आत्मामा केहि विलक्षणता छैन, यस्तो तिमी निश्चय गरेर जान्ने छौ। यसको पछि सबै प्राणीलाई अशेषरूपले म भगवान् वासुदेवमा जुन तत्पदार्थ हुँ, देख्नेछौ। किनकी सबै आत्मा(जीव) मेरो नै आत्मक हुन याने उनीहरू सबैको अन्तरात्मा म नै हूँ। ती मेरो अधीन छन्, ती मबाटै व्याप्त छन्, ती मेरो नै आधारले स्थित छन् यसैले बन्ध (संसार) र मोक्ष दुबै दशामा ती म मा नै छन् अर्थात् मभन्दा पृथक् हुन सक्दैनन् किनकी उनीहरूलाई म बिना बस्ने अर्को ठाऊँ छैन॥३५॥

–★–★–★–

**अपि चेदसि पापेभ्यः सर्वेभ्यः पापकृत्तमः।**
**सर्वं ज्ञानप्लवेनैव वृजिनं सन्तरिष्यसि॥**

**यदि तिमी अरु सबै पापीहरू भन्दा पनि धेरै पाप गर्नेवाला हौ भने पनि तिमी ज्ञानरूप नौका द्वारा निःसन्देह सम्पूर्ण पाप–समुद्रबाट पार जानेछौ॥३६॥**

अन्यदपि ज्ञानमहात्म्यं शृण्वित्याह–अरि चेदिति। अपिचेच्छब्दौ कदा चित्सम्भावनापरौ। ज्ञानमाहात्म्यद्योतनायाऽसम्भावितमप्यर्थमङ्गीकृत्योच्यते। यद्यपि सर्वपापेभ्यः पापकारिभ्यः पापकृत्तमस्त्वमसि, तथाऽपि सर्वं वृजिनं पापं ज्ञानप्लवेनैव ज्ञानरूपपोतेनैव सम्यक् तरिष्यसि अतिक्रमिष्यसि॥३६॥

अरु पनि ज्ञानको माहात्म्य सुन। ज्ञानको माहात्म्य देखाउनको लागि असम्भव कुरालाई पनि सम्भव गरेर भन्नुहुन्छ–

यदि कदाचित् यो असम्भव कुरो पनि सम्भव होओस कि तिमी सबै पापगर्नेहरू भन्दा पनि महापाप गर्ने भए पनि यस ज्ञानरूपी डुंगाको द्वारा ती आफ्ना सबै पापहरूलाई सम्यक् रूपले पार गरेर जानेछौ॥३६॥

–★–★–★–

**यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।**
**ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥**

**किनकी हे अर्जुन! जसरी प्रज्वलित अग्नि ईंन्धनलाई भस्ममय गरिदिन्छ त्यसरी नै ज्ञानरूप अग्नि सम्पूर्ण कर्महरूलाई भस्ममय गरिदिन्छ॥३७॥**

ननु यथा प्लवेन तरणे समुद्रनाशो न भवति, तथा ज्ञानप्लवेन

डुंगाद्वारा समुद्र पार गरेर जाँदा पनि समुद्रको नाश हुँदैन, त्यस्तो

कर्मणामपि नाशो न स्यादित्याशक्याऽऽह–यथेति। यथा समिद्धः प्रज्वलितोऽग्निः एधांसि काष्ठानि भस्मसात्कुरुते, हे अर्जुन तथा ज्ञानाग्निः सर्वकर्माणि प्रारब्धभिन्नानि पापपुण्यरूपाणि भस्मसात्कुरुते॥३७॥

नै ज्ञानरूपी डुंगाबाट कर्मरूपी समुद्रको नाश हुन सक्दैन यस्तो शंकाको उत्तर यहाँ दिनुहुन्छ–

जस्तो प्रज्वलित अग्नि काठलाई खरानी पारिदिन्छ, त्यस्तै नै हे अर्जुन! ज्ञानरूपी अग्नि प्रारब्ध कर्महरूलाई छोडेर अरु सबै पाप पुण्यरूप कर्महरूलाई भष्म गरिदिन्छ॥३७॥

–★–★–★–

**न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते ।**
**तत्स्वयं योगसंसिद्धः कालेनात्मनि विन्दति॥**

**यस संसारमा ज्ञानको समान पवित्र गर्ने निःसन्देह केही पनि छैन। त्यस ज्ञानलाई धेरै समयबाट कर्मयोगको द्वारा शुद्धान्त करण भएको मनुष्य आफैं नै आत्मामा पाऊँदछ॥३८॥**

अतएव–न हीति। ज्ञानेन सदृशं पवित्रं पावनमिहजगति नहि विद्यते। एवंभूतज्ञानमाशु किं नोपजायते इत्यत आह–तत्स्वयमिति। तज्ज्ञानं महता कालेन योगसंसिद्धः योगेन पूर्वोक्तकर्मयोगेन यथाविध्यनुष्ठितेन संसिद्धः योग्यतामापन्नः पुरुषः स्वयमेवात्मनि स्वान्तर्विन्दते लभते॥३८॥

यसैले ज्ञानको जतिको पवित्र यस संसारमा अर्को कुनै पदार्थ छैन। तब यस्तो ज्ञान झटपट किन पैदा हुँदैन त? यसको उत्तरमा भन्नुहुन्छ, कि त्यो ज्ञान धेरै समयम पूर्व भनिएको कर्मयोगको यथाविधि अनुष्ठान गरेर योग्यता प्राप्त गरेको पुरुषलाई आफ्नो आत्मामा स्वयं प्राप्त हुन जान्छ॥३८॥

–★–★–★–

**श्रद्धावाँल्लभते ज्ञानं तत्परः संयतेन्द्रियः ।**
**ज्ञानं लब्ध्वा परां शान्तिमचिरेणाधिगच्छति॥**

**जितेन्द्रिय, साधनपरायण र श्रद्धावान् मनुष्य ज्ञानलाई प्राप्त गर्दछ तथा ज्ञानलाई प्राप्त गरेपछि त्यो ढिलो नगरी तत्काल नै भगवत्प्राप्तिरूप परमशान्तिमा प्राप्त हुन्छ॥३९॥**

ननु कालेन योगसंसिद्ध स्वयमेवज्ञानं लभते चेत्तर्हि पूर्वोक्त–गुर्वभिगमनप्रणिपातादेरप्रयोजकत्वं स्यादित्याशंकानिरासार्थं ज्ञानाधिकारिणं विशिनष्टि–श्रद्धावानिति । योगसंसिद्धः स्वयं ज्ञानं लभते इति सत्यं, तथाऽपि स किंगुणविशि–ष्टोऽभिप्रेतस्तं शृणु, श्रद्धावानिति। गुरुशास्त्रोक्तवाक्यार्थे एवमेवायमित्यास्तिक्यबुद्धिः श्रद्धा, तद्वान्। न चैतावत्त्व–मेवापि तु तत्परः गुरूपासनशास्त्राभ्यासयोः सदोद्युक्तः। तद्विरोधिनिरासार्थमाह–संयतेन्द्रिय इति। श्रद्धावत्त्वेऽपि इन्द्रियचाञ्चल्यं चेद्गुरुशास्त्रसेवादिपरता न स्यादतः सम्यग्यतानि वशीकृतानीन्द्रियाणि येन स एव ज्ञानं लभते, नान्यः। तस्मात्पूर्वं निष्कामकर्मयोगानुष्ठानेनान्तःकरण–

कर्मयोगको द्वारा योग्यता सम्पन्न पुरुष जब समय पाएर स्वयं ज्ञान प्राप्त गर्दछ भने त गुरु भएठाऊँ जानु, उहाँलाई नमस्कार गर्नु इत्यादि जो भनिसकिएको छ, त्यसको के जरूरत? यस शंकाको उत्तर यहाँ दिनको लागि यहाँ ज्ञानाधिकारीको विशेषणहरूलाई भन्नुहुन्छ–

कर्मयोगको द्वारा योग्यता सम्पन्न पुरुष स्वयं ज्ञान प्राप्त गर्दछ यो सत्य हो, तर पुरुषले कुन कुन गुणहरूले युक्त हुनुपर्दछ त्यसलाई सुन। सबै भन्दा पहिले त्यसले श्रद्धावाला हुनु पर्दछ, अर्थात् गुरु र शास्त्रको वाक्यमा आस्तिक्य बुद्धि हुनुपर्दछ, जुन कुरा गुरु र शास्त्र जस्तो भन्दछन् त्यसलाई बिना संकल्प विकल्पको नै ठीक त्यस्तै मान्नु। दोस्रो यो कि गुरु र शास्त्रमा रत हुनु अर्थात् गुरुको उपासना र शास्त्रको अभ्यासमा सदा नै उद्योगी हुनु। अब यी गुणहरूको विरोधी गुणहरूलाई हटाएर राख्नको लागि भन्नुहुन्छ– ज्ञानाधिकारी पुरुषले संयतेन्द्रिय हुनु पर्दछ। किनकी श्रद्धवान् भएर पनि इन्द्रियहरूको चंचलताको कारण त्यो गुरु र शास्त्रको सेवादिमा तत्पर हुन सक्दैन। यसैले इन्द्रियहरूलाई

शुद्ध्या श्रद्धादिसम्पत्त्या ज्ञानलाभः स्यादिति सर्वं निरवद्यम्। एवं साधनपरम्परया ज्ञानं लब्ध्वाप्राप्य विक्षेप–हेतुकर्मात्मिकाविद्यानाशेन परां मुक्तिलक्षणामचिरेणैवा–धिगच्छति प्राप्नोति॥३९॥

वशमा गर्नु ज्ञानाधिकारी पुरुषको लागि अत्यन्त आवश्यक छ। यस्तो नै पुरुष ज्ञान लाभ गर्दछ। अर्को होईन। यसले यो कुरा सिद्ध भयो कि पहिले निष्काम कर्म गरेर अन्तःकरण को शुद्धिद्वारा श्रद्धादि सम्पत्ति प्राप्त गरेर विक्षेपको कारण कर्मात्मिका अविद्या(अज्ञान)को नाश हुनाले मुक्ति लक्षणवाला परा शान्ति अविलम्ब प्राप्त गर्दछ॥३९॥

–★–★–★–

## अज्ञश्चाश्रद्दधानश्च संशयात्मा विनश्यति ।
## नायं लोकोऽस्ति न परो न सुखं संशयात्मनः॥

**विवेकहीन र श्रद्धारहित संशययुक्त मनुष्य परमार्थबाट अवश्य भ्रष्ट हुन्छ। यस्तो संशययुक्त मनुष्यको लागि न यो लोक छ, न परलोक नै छ र न सुख नै छ॥४०॥**

एवं श्रद्धाभक्तिमतः सद्गुरूपदेशाल्लब्धज्ञानस्य मोक्षफलमुक्त्वा तदभाववतोऽज्ञस्य विनाशमाह–अज्ञश्चेति। अज्ञो गुरूपदिष्टतत्त्वज्ञानशून्यः। तत्र हेतुः अश्रद्दधानः पूर्वोक्तलक्षणश्रद्धाशून्यः। तत्रापि हेतुः–संशयात्मेति। द्वौ च–शब्दौ पुनरर्थकौ तथा हि अज्ञोऽपि सद्गुरूपदिष्टेन केन चित्सुगमोपायेन मुच्येत। पुनरश्रद्दधानः श्रद्धाहीनत्वादुपायं नानुतिष्ठति, तदनुष्ठानाभावेऽपि दृढसत्संगेन कथं चिच्छ्रद्धीयेत। पुनः संशयात्मा संशयाः फलसाधनोपास्यधर्मगुरुशास्त्रादिविषयभेदेनानेकधा, तत्र परं श्रेयः मोक्षः? स्वर्गादि वा? साधनं ज्ञानं कर्म वा? तत्प्राप्त्यर्थं विष्णुराराध्य? रुद्रेन्द्रविनायकशक्त्यादिर्वा? धर्मो वैष्णवः श्रेष्ठः? इतरो वा? गुरुर्निष्किञ्चनो धनाढ्यो वा? गुरुवचनं सत्यमसत्यं वा? शास्त्रं वेदान्तमन्यद्वेत्या–दिसंशयेष्वात्मा मनो यस्य, न त्वेकस्मिन्निश्चये, अतो न सत्संगनिष्ठो भवति, किन्त्वितस्ततो धावति। तस्मादेव विनश्यति, श्रेयोमार्गाद् भ्रश्यति। यतः संशयात्मनः पुरुषस्यायं मनुष्यलोको नास्ति, धर्मार्जनविवाहादौ सम्यक् प्रवृत्त्यभावात्। परलोकोऽपि नास्ति, तत्साधन–

यस प्रकार श्रद्धाभक्तिवालालाई सद्गुरुको उपदेश ले प्राप्त ज्ञानको फल मोक्ष मिल्दछ, यस्तो भनियो। अब यो भन्नुहुन्छ कि जसलाई श्रद्धा भक्ति छैन, ती अज्ञ विनाश तर्फ जान्छन्। जो अज्ञ छन् अर्थात् गुरुको द्वारा उपदेश गरिएको तत्त्वज्ञान बाट शून्य छन्, यसको कारण यो हो कि पूर्वमा भनिएको लक्षणवाला श्रद्धाले रहित छन्, र उनीहरू श्रद्धा रहित हुनुको कारण यो हो कि उनीहरूको आत्मा लाई संशयले घेरेको छ, यस्तो संशयात्मा मनुष्य श्रेयमार्ग बाट भ्रष्ट हुन्छन्। यहाँ 'च' शब्द दुई पल्ट पुनः अर्थात फेरिको अर्थमा आएको छ। अज्ञ पनि सद्गुरुको उपदेशले कुनै सुगम उपाय पाएर बन्धनबाट छुट्न सक्दछ। फेरि श्रद्धा हीन पुरुष श्रद्धाको अभावले कुनै उपाय गर्दैन, तर कुनै उपायको अनुष्ठान नगर्दा पनि यदि दृढ सत्संग भयो भने त त्यसलाई अलिकति भएपनि श्रद्धा उत्पन्न हुन सक्दछ। फेरि कति मनुष्य संशय वा सन्देहले घेरिएको आत्मावाला छन्, अर्थात् उनीहरूलाई फल, साधन, उपास्य, धर्म, गुरु, शास्त्रादिको विषयमा संशय छ, जस्तो फलको बारेमा जसलाई यो संशय हुन्छ कि श्रेयको साधन कर्म हो या ज्ञान? उपास्यको विषयमा यो सन्देह हुन्छ कि फल प्राप्तिको लागि विष्णुको आराधना गर्नु पर्ने हो या रुद्र, इन्द्र, गणेश, शक्ति इत्यादि अन्य देवता देवीहरूको? धर्मको विषयमा यो सन्देह हुन्छ कि वैष्णव धर्म सर्वश्रेष्ठ हो या अरु कुनै धर्म? गुरुको विषयमा यो सन्देह हुन्छ कि गुरु दरिद्र राम्रो हो या धनाढ्य र गुरुको वचन सत्य हो या झुटो? शास्त्र विषयमा यो सन्देह हुन्छ कि शास्त्रहरूमा वेदान्त श्रेष्ठ हो या अरु कुनै शास्त्र? यस प्रकार अनेक प्रकारको सन्देहले जसको मनलाई घेरेका छन्, त्यसलाई एउटा कुनै कुराको निश्चय हुँदैन। यसैले उनीहरूको सत्संगमा पनि निष्ठा हुँदैन र ती यताउति भौंतारिई रहन्छन्। यसैले उनीहरूको नाश हुन्छ अर्थात् ती श्रेय पथ अर्थात् कल्याणको मार्गबाट तल झर्दछन्। संशययुक्त मन भएकालाई यो मनुष्यलोक पनि हुँदैन किनकी धर्म, अर्जन, विवाहादि सबै चीजमा संशय

धर्माननुष्ठानात्। न च सुखं कस्मिंश्चिदपि निश्चययाभावात्। कुतो मोक्ष इति भावः। एवं चाज्ञस्येत्यादिविशेषण–त्रयमेकस्यैव बोध्यमन्यथा "भिद्यते हृदयग्रन्थिरि"त्यादि श्रुतेः "अज्ञसर्वज्ञभक्तानां गतिर्गम्यो भवानि"ति स्मृतेश्च विरोधः स्यात्॥४०॥

भएकोले उनीहरूको त्यसमा पूर्ण प्रवृत्ति हुँदैन। यस्तो मनुष्यले परलोक पनि पाउँदैनन् किनकी संशयको कारण परलोक प्राप्तिको साधन धर्मको अनुष्ठान उसले गर्दैन; र सबैमा अनिश्चयको कारण संशयात्माहरूलाई सुख पनि हुँदैन। भन्नुको मतलब यो हो कि यस्ता मान्छेहरूलाई मोक्ष कसरी हुन सक्दछ अर्थात् कहिल्यै पनि हुन सक्दैन। यस प्रकार अज्ञादि तीनै विशेषणहरूले एकै मनुष्यको बोध हुन्छ। पृथक्-पृथक् मनुष्यको विशेषण होईन, यस्तो मान्नाले तल लेखिएको श्रुति र स्मृतिसँग विरोध हुन्छ। श्रुति-'भिद्यते हृदयग्रन्थिः।' स्मृति-'अज्ञसर्वज्ञभक्तरलरं गतिर्गम्यो भवान्'॥४०॥

–★–★–★–

**योगसन्न्यस्तकर्माणं ज्ञानसञ्छिन्नसंशयम् ।**
**आत्मवन्तं न कर्माणि निबध्नन्ति धनञ्जय॥**

**हे धनञ्जय! जसले कर्मयोगको विधिले समस्त कर्महरूलाई परमात्मामा अर्पण गरिदिएको छ र जसले विवेकद्वारा समस्त संशयहरूको नाश गरिदिएको छ, यस्तो वशमा गरिएको अन्तःकरण भएको पुरुषलाई कर्मले बाँध्न सक्दैन॥४१॥**

एवं संशयात्मनोऽज्ञस्य सर्वार्थभ्रंशमुक्त्वा सदाचारानुवर्त्तिनो मुमुक्षोर्निश्रेयसाय संशयवारणार्थं पूर्वोक्तक्रमेण कर्मयोगज्ञानयोग(योः) द्वयमेवोपदिशन्नुपसंहरति–योगेति द्वाभ्याम्। योगेन भगवदाराधनलक्षणेन संन्यस्तानि भगवत्यर्पितानि कर्माणि येन तं, तत एव ज्ञानसंशयं, भगवति कर्मार्पणादेव जातं यदात्मनो भगवदधीनत्वज्ञानं तेन छिन्नाः पूर्वोक्ताः संशया यस्य अत एवात्मवन्तं, तत्त्वविषयतयाऽऽवस्थितमनसं कर्माणि विधिप्राप्तानि स्वाभाविकानि वा न निबध्नन्ति, हे धनञ्जय।

संशयले युक्त चित्त भएको अज्ञको सर्वार्थ भ्रंश हुन्छ, यस्तो भनेर अब सदाचारको पालन गर्ने मुमुक्षुहरूको कल्याणका लागि र संशय हटाउनको लागि क्रमैले पूर्वमा भनिएको कर्मयोग र ज्ञानयोग दुबैको उपदेश दुई श्लोकहरूमा गरेर अध्यायको समाप्ति गर्नुहुन्छ।

जसले भगवान्‌को आराधना रूप लक्षणवाला योगको द्वारा आफ्नो सबै कर्महरूलाई भगवान्‌मा समर्पित गरिदिएको छ भगवान्‌मा कर्महरूलाई अर्पण गरेर 'म भगवान् वासुदेवको अधीन छु', यस्तो ज्ञान जसलाई उत्पन्न भएको छ र त्यस ज्ञानको द्वारा जसको सबै संशय नाश भएको छ र यसैले जो आत्मवान् छन् अर्थात् जसको मन तत्त्वको विषयमा स्थित छ त्यसैलाई, हे अर्जुन, विधि वा स्वभावले गरिएको कर्म बाँध्दैनन्॥४१॥

–★–★–★–

**तस्मादज्ञानसम्भूतं हृत्स्थं ज्ञानासिनात्मनः।**
**छित्त्वैनं संशय योगमातिष्ठोत्तिष्ठ भारत॥**

**यसैले हे भरतवंशी अर्जुन! तिमी हृदयमा स्थित यस अज्ञानजनित आफ्नो संशयको विवेकज्ञानरूप तरवारद्वारा काटेर समत्वरूप कर्मयोगमा स्थित होऊ र युद्धको लागि ऊठ॥४२॥**

यस्माद्देवं तस्मादज्ञानात्सम्भूतं समुत्पन्नं हृत्स्थं "स्वान्तं हृन्मानसं मन"–इति कोशात्। हृदि मनसि स्थितं सर्वार्थभ्रंशहेतुमेनं संशयम् आत्मनो ज्ञानाऽसिना मयोपदिष्टेनात्मविषयकज्ञानरूपखड्गेन छित्वा योगं मयोपदिष्टं निष्कामकर्म आतिष्ठ, यथाधिकारमाचर।

किनकी यस्तो यसैले हो कि हे क्षत्रिय श्रेष्ठ! भरतकुलमा उत्पन्न अर्जुन! तिमी अज्ञानबाट उत्पन्न मनमा स्थित, यस संशयलाई मैले उपदेश गरेको आत्मज्ञानरूपी तरवारले काटेर निष्काम कर्म रूपी योगलाई जसको मैले उपदेश दिएको छु, गर। अर्थात् आफ्नो

भारतेति सम्बोधनेन भरतवंशोद्भवस्य क्षत्रियश्रेष्ठस्य तव युद्धमेव कर्मेति सूचितम्। तस्मादुत्तिष्ठ तदेव कुर्वित्यर्थः।
ज्ञानोपायतयाऽसङ्गकर्मनिष्ठा यथार्हतः।
हरिणा भक्तसंसारच्छेदायेहोपशिक्षिता॥

**अधिकारको अनुसार कर्महरूलाई गर। 'भारत' सम्बोधन गर्नुको भाव यो हो कि तिमी भरतकुलमा उत्पन्न भएका हौ, यसैले युद्ध गर्नु तिम्रो प्रधान कर्म हो। अतः तिमी उठ अर्थात् त्यही गर॥४२॥**

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा–टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां ज्ञानकर्मसन्न्यासयोगो नाम चतुर्थोऽध्यायः॥४॥

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ पञ्चमोऽध्यायः

## अर्जुन उवाच

**सन्न्यासं कर्मणां कृष्ण पुनर्योगं च शंससि।**
**यच्छ्रेय एतयोरेकं तन्मे ब्रूहि सुनिश्चितम्॥**

**अर्जुन भन्दछन्- हे कृष्ण! तपाईं कर्मको संन्यासको र फेरि कर्मयोगको प्रशंसा गर्नुहुन्छ। यसैले यी दुबैमा जुन एउटा मेरो लागि निश्चित कल्याणकारक साधन छ, त्यसैलाई भन्नुहोस॥१॥**

पूर्वाध्याये कर्मयोगमवश्यकर्त्तव्यतयोक्त्वा ज्ञाननिष्ठस्य कर्मनिरपेक्षत्वमभिधायान्ते पुनः कर्मयोगमेव भगवानुपदिष्टवान्। तत्र मुमुक्षुणां कर्मज्ञानयोर्युगपदेकेनानुष्ठानासंभवात् द्वयोर्मध्ये किं श्रेयोऽनुष्ठानर्मीति सन्दिहानोऽर्जुन उवाच-संन्यासमिति। हे कृष्ण स्वभक्तपापकर्षक! "निराशीर्यतचित्तात्मा त्यक्तसर्वपरिग्रह" इत्यादिना "श्रेयान् द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परंतप! सर्वं कर्माखिलं पार्थ ज्ञानेपरिसमाप्यते" इत्यादिना च कर्मणां संन्यासं सम्यङ् न्यस्यन्ते समाप्यन्ते कर्माणि यत्रेति संन्यासः ज्ञानयोगस्तं शंससि, "ज्ञानासिना शंसयं छित्वा योगमातिष्ठेति" च पुनर्योगं कर्मानुष्ठान। तथा चैकेन मुमुक्षुणा द्वयोरेकदाऽनुष्ठानं न संभवति विरुद्धत्वात्। अतस्तयोः कर्मज्ञानयोर्मध्ये यदेकं श्रेयः श्रेष्ठं सुनिश्चितं स्यात्तन्मे मह्यं ब्रूहि॥१॥

पहिलेको अध्यायहरूमा कर्मयोग अवश्य नै गर्नुपर्दछ, यस्तो भनेर हजुरले यो भन्नुभयो कि ज्ञाननिष्ठ पुरुषलाई कर्मयोगको अपेक्षा रहँदैन र अन्तमा फेरि कर्मयोगको नै उपदेश गर्नुभयो। अब यो कि मोक्षको इच्छा भएका पुरुष कर्मयोग र ज्ञानयोग दुबैको एक साथ अनुष्ठान गर्न सक्दैनन्, यसैले दुबैमा कुन अनुष्ठान श्रेष्ठ छ यस्तो सन्देह गर्दै अर्जुन भगवान्लाई भन्दछन्-
हे कृष्ण! अर्थात् हे आफ्ना भक्तका पापलाई हर्ने! 'निराशीर्यतचित्तात्मा व्यक्तसर्व परिग्रहः' इत्यादि बाट र श्रेयान्द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परन्तप।' 'सर्व कर्माखिलपार्थ ज्ञाने परिसमाप्यते' इत्यादिबाट पनि कर्महरूको सन्यास अर्थात् ज्ञानयोगको हजुरले बड़ाई गर्नुभयो। फेरि ज्ञानासिना संशयं क्षित्वा योगमातिष्ठ' ले योग अर्थात् कर्मयोगको प्रशंसा गर्नुभयो। तर एक मुमुक्षुको लागि ज्ञान योग र कर्मयोगको अनुष्ठान एकै पटक गर्न असम्भव छ। किनकी दुबै एक अर्काको विरोधी हुन। यसैले कर्म र ज्ञान यी दुबैमा जुन निश्चित रूपले श्रेष्ठ छ, त्यसको नै हजुर मसँग भन्नुहोस॥१॥

-★-★-★-

## श्रीभगवानुवाच

**सन्न्यासः कर्मयोगश्च निःश्रेयसकरावुभौ ।**
**तयोस्तु कर्मसन्न्यासात्कर्मयोगो विशिष्यते ॥**

**श्रीभगवान्ले भन्नुभयो- कर्मसंन्यास र कर्मयोग- यी दुबै परम कल्याणगर्नेवाला हुन्; तर ती दुबैमा पनि कर्मसंन्यास भन्दा कर्मयोग साधनमा सुगम हुनाले श्रेष्ठ छ॥२॥**

इत्येवं प्रश्नस्योत्तरं श्रीभगवानुवाच-संन्यास इति। संन्यासः ज्ञानयोगः कर्मयोगश्चेत्युभौ निःश्रेयसकरौ। तयोस्तु कर्मसन्यासाज्ज्ञानयोगात् कर्मयोगो विशिष्यते श्रेष्ठो भवति॥२॥

अर्जुनको प्रश्नको उत्तर भगवान् दिनुहुन्छ-
संन्यास(ज्ञान) र कर्मयोग दुईटै कल्याण गर्नेवाला हुन्। तर यी दुबैमा ज्ञानयोग भन्दा कर्मयोग नै श्रेष्ठ छ अर्थात् कर्म नगर्नु भन्दा कर्म गर्नु नै राम्रो हो॥२॥

-★-★-★-

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**ज्ञेयः स नित्यसन्न्यासी यो न द्वेष्टि न काङ्क्षति ।**
**निर्द्वन्द्वो हि महाबाहो सुखं बन्धात्प्रमुच्यते॥**

**हे अर्जुन! जुन पुरुष न कसैसँग द्वेष गर्दछ र न कसैको आकाङ्क्षा गर्दछ, त्यो कर्मयोगी सदा संन्यासी नै मानिन योग्य छ; किनकी राग-द्वेषादि द्वन्द्वबाट रहित पुरुष सुखपूर्वक संसारबन्धनबाट मुक्त हुन्छ॥३॥**

उक्तार्थे हेत्वपेक्षायां कर्मयोगिनः संन्यासित्वं वदन्, तद्धर्मान्निर्दिशति-ज्ञेय इति। य आत्मज्ञानाय कर्माणि कुर्वन् तद्व्यतिरिक्तं किञ्चिन्न काङ्क्षति। अत एव किमपि न द्वेष्टि, स नित्यसंन्यासी नित्यज्ञाननिष्ठो ज्ञेयः। हि यतो निर्द्वन्द्वः, रागद्वेषादिद्वन्द्वशून्यः। एवंभूतः सुखमनायासेनैव बन्धात्प्रमुच्यते।

माथि भनिएको कुरामा हेतु(कारण) बताउनको लागि कर्मयोगीलाई नै संन्यासी भन्दै त्यसको धर्म बताउनुहुन्छ-

कर्मयोगी आफ्नो आत्मज्ञानको लागि कर्म गर्दछ, त्यसको अतिरिक्त अरु कुनै पनि वस्तु को आकांक्षा गर्दैन। यसैले यो कसै सँग द्वेष पनि गर्दैन। यस्तो कर्मयोगीलाई नै नित्य संन्यासी या नित्य ज्ञाननिष्ठ संझिनु पर्दछ किनकी त्यो राग-द्वेष आदि द्वन्द्वबाट रहित छ। यस्तो पुरुष परिश्रम नै नगरीकन बन्धनबाट छुट्दछ॥३॥

-★-★-★-

**साङ्ख्ययोगौ पृथग्बालाः प्रवदन्ति न पण्डिताः।**
**एकमप्यास्थितः सम्यगुभयोर्विन्दते फलम्॥**

**उपर्युक्त संन्यास र कर्मयोगलाई मूर्खहरू पृथक्-पृथक् फल दिनेवाला भन्दछन पण्डितहरू होईन। किनकी दुईओटै मध्ये एउटामा पनि सम्यक् प्रकारले स्थित पुरुष दुईओटैको फलरूप परमात्मालाई प्राप्त हुन्छ॥४॥**

ननु कर्मयोगो कथं संन्यासी स्यात्कर्मज्ञानयोः फलभेदात्स्वरूपभेदाच्च पृथगेव तावित्याशंक्याह-साङ्ख्ययोगाविति। साङ्ख्यं ज्ञानयोगः, योगः कर्मयोग इमौ पृथग्भूतौ भिन्नफलकाविति बाला अविद्वांसः प्रवदन्ति, नतु पण्डिताः। यतः सांख्ययोगयोर्मध्ये एकमपि सम्यगास्थितः उभयोः फलमात्मज्ञान विन्दते लभते।

यहाँ यो शंका हुन सक्दछ कि कर्मयोगी संन्यासी कसरी हुन सक्दछ? किनकी दुबैको फल र स्वरूपमा पनि भिन्नता छ। यसैले दुबै अलग अलग हुन्। यस शंकाको उत्तर भगवान दिनुहुन्छ-

सांख्य अर्थात् ज्ञानयोग, योग अर्थात् कर्मयोग पृथक् पृथक् हुन्। यिनीहरूको फल बेग्ला-बेग्लै छ। यस्तो अनपढ मान्छेले भन्दछ, विद्वान यस्तो भन्दैनन्। किनकी सांख्य र योगमा कुनै एउटा मात्र पनि पूर्णरूपमा प्राप्त भयो भने दुईटैको फल जो आत्मज्ञान हो त्यो मिल्दछ॥४॥

-★-★-★-

**यत्साङ्ख्यैः प्राप्यते स्थानं तद्योगैरपि गम्यते।**
**एकं साङ्ख्यं च योगं च यः पश्यति स पश्यति॥**

**ज्ञानयोगिहरूद्वारा जुन परमधाम प्राप्त गरिन्छ, कर्मयोगिहरूद्वारा पनि त्यहि परमधाम प्राप्त गरिन्छ। यसैले जुन पुरुष ज्ञानयोग र कर्मयोगलाई फलरूपमा एक देख्दछ त्यसले नै यथार्थ देख्दछ॥५॥**

उक्तार्थं विवृणोति-यत्सांख्यैरिति। सांख्यैर्ज्ञाननिष्ठैर्यत् स्थानं स्थीयतेऽस्मिन्निति स्थानमात्मस्वरूपं प्राप्यते, तदेव योगैः कर्मयोगनिष्ठैरपि भगवदर्पणबुद्ध्याः कृतैः कर्मभिर्ज्ञानद्वारेण गम्यते। तस्मादेकफलत्वेनैकं सांख्यं योगं च यः पश्यति स पश्यति। स एव पण्डितो न त्वन्य इत्यर्थः॥५॥

माथि भनिएकोलाई स्पष्ट गर्नुहुन्छ। ज्ञानयोग बाट जुन स्थान प्राप्त हुन्छ अर्थात् जुन आत्मस्वरूप ज्ञानयोगबाट मिल्दछ त्यही कर्मयोगबाट पनि पाईन्छ, अर्थात् भगवान्मा समर्पित बुद्धिद्वारा गरिएको कर्मबाट पनि ज्ञान मार्फत आत्मस्वरूपको प्राप्ति हुन्छ। यसैले एक फलवाला भएकोले दुबैलाई अर्थात् ज्ञानयोग र कर्मयोगलाई जो एउटै देख्दछ अथवा जान्दछ त्यही नै यथार्थ रूपले जान्दछ अर्थात् त्यही नै पण्डित हो॥५॥

-★-★-★-

**सन्न्यासस्तु महाबाहो दु:खमाप्तुमयोगत:।**
**योगयुक्तो मुनिर्ब्रह्म नचिरेणाधिगच्छति॥**

**परन्तु हे अर्जुन! कर्मयोगको बिना संन्यास अर्थात् मन, इन्द्रिय र शरीरको द्वारा हुने सम्पूर्ण कर्ममा कर्तापनको त्याग हुन ६ ोरै कठिन छ र भगवत्स्वरूप- लाई मनन गर्नेवाला कर्मयोगी परब्रह्म परमात्मालाई शीघ्र प्राप्त गर्दछ॥६॥**

ननु यदि कर्मयोगस्यापि ज्ञानयोद्वारेणैवात्मस्वरूप- प्राप्तिस्तर्हि प्रथमतो ज्ञानयोग एव कुतो नानुष्ठीयते इति चेत्तत्राह-संन्यासस्त्विति। संन्यासो ज्ञानयोगस्तु अयोगत: कर्मयोगानुष्ठानादृते दु:खमाप्तुं प्राप्तुमशक्य इत्यर्थ:। चित्तशुद्ध्यभावेन ज्ञाननिष्ठाया अपायसम्भवात्। योगयुक्त: निष्कामकर्मयोगयुक्त: शुद्धान्तकरणत्वान्मुनिर्मननशील: ब्रह्म नचिरेणाल्पकालेनैवाधिगच्छति प्राप्नोति। निर्दोष- समत्वादिना ब्रह्मसमानधर्मो भवतीत्यर्थ:।

यदि कर्मयोगले पनि आत्म प्राप्ति ज्ञानयोगको द्वारा नै हुन्छ भने ज्ञानयोगको अनुष्ठान सुरुदेखि नै किन नगर्नु? यसको उत्तर भगवान् यहाँ दिनुहुन्छ-

हे बलिया पाखुरा भएका अर्जुन! कर्मयोगको अनुष्ठान नगरीकन ज्ञानयोग धेरै दु:खले प्राप्त हुन्छ अर्थात् प्राप्त हुँदैन। कारण यो हो कि चित्त शुद्धिको अभावमा ज्ञाननिष्ठावाला मनुष्यको अपाय अर्थात् नाश हुन सक्दछ। निष्काम कर्मयोग युक्त मननशील पुरुषलाई त्यसको अन्त:करण शुद्ध भएकोले ब्रह्म शीघ्र नै प्राप्त हुन जान्छ। अर्थात् त्यो पुरुष निर्दोष भएको ले त्यसमा समता आदिको भाव हुनाले ब्रह्मको समान धर्मवाला हुन्छ॥६॥

-★-★-★-

**योगयुक्तो विशुद्धात्मा विजितात्मा जितेन्द्रिय:।**
**सर्वभूतात्मभूतात्मा कुर्वन्नपि न लिप्यते॥**

**जसको मन आफ्नो वशमा छ, जो जितेन्द्रिय एवं विशुद्ध अन्त:करणवाला छ र सम्पूर्ण प्राणिहरूको आत्मरूप परमात्मानै जसको आत्मा हो, यस्तो कर्मयोगि कर्म गर्दै रहेर पनि लिप्त हुँदैन॥७॥**

ननु ब्रह्मण: सर्वत्र समत्वं जगत्सृष्ट्यादिकर्तृत्वेऽपि निर्लेपत्वं च शास्त्रसिद्धं, कर्मणि वर्त्तमानस्य जीवस्य कथं तत्समानधर्मत्वमिति चेत्तत्राह-योगयुक्त इति। फल- सङ्कल्पशून्यं भगवदाराधनरूपं शास्त्रीयं कर्म योगशब्दे- नोच्यते, तेन युक्त: पुरुषो योगयुक्तस्तत एव विशुद्धात्मा रजस्तमोऽभिभवेनसत्त्ववृद्ध्या विमलीकृत आत्मा मनो येन स:। तत एव जितेन्द्रिय: स्ववशीकृतसर्वबाह्येन्द्रिय:। एतेभ्यो हेतुभ्य: सर्वसुहृतसर्वात्मवल्लभो भवतीत्याह सर्वभूतात्मभूतात्मेति। सर्वभूतानां देवमनुष्यादीनामात्मभूत आत्मवल्लभ आत्मा स्वरूपं यस्य स तथा सर्वप्रियाचरण इत्यर्थ: स सर्वकर्माणि कुर्वन्नपि न लिप्यते अत: सर्वभूतसमत्वं निर्लेपत्वं च ब्रह्मसमानधर्मत्वञ्च सिद्धम्। अन्यथा "ब्रह्मभूत: प्रसन्नात्मा न शोचति न काङ्क्षति। सम: सर्वेषु भूतेषु मद्भक्ति लभते पराम्" इति वक्ष्यमाणा

ब्रह्म सबै तिर सम हुनु र जगतको सृष्टि आदि गर्नेवाला भएर पनि निर्लेप हुनु शास्त्रद्वारा सिद्ध छ; तर कर्ममा वर्त्तमान जीव त्यसको समान धर्मवाला कसरी हुन सक्दछ? स प्रश्नको उत्तर भगवान् यहाँ दिनुहुन्छ-

फलको संकल्पले शून्य भगवत् आराधन रूप शास्त्रीय कर्मलाई योग भनिन्छ। यस्तो योग युक्त पुरुष विशुद्धात्मावाला हो। अर्थात् रजोगुण र तमोगुणलाई दबाएर सतोगुणलाई बढाउनाले त्यसको आत्मा(मन) विमल हुन जान्छ। यसैले यस्तो पुरुष विजितात्मा हुन्छ, अर्थात् त्यो अहंकार र त्यसको कार्यभूत क्रोधलाई जित्दछ, यसैले त्यो जितेन्द्रिय अर्थात् वाह्य इन्द्रियहरूलाई जित्नेवाला हुन्छ। यी कारणहरूले त्यो सर्वप्रिय र सर्ववल्लभ बन्दछ। त्यो सबैप्राणीको अर्थात् देव, मनुष्यादिको आत्म बल्लभ वा प्रिय आचरण गर्नेवाला हुन्छ। तात्पर्य यो कि त्यसको आचरण सर्वप्रिय हुन जान्छ। यस्तो पुरुष सबै कर्महरू गरेर पनि निर्लेप हुन्छ। यस प्रकार त्यो सबै जीवहरूमा सम बुद्धि युक्त, निर्लेप र ब्रह्मको समान धर्मवाला सिद्ध भयो। यस्तो न मान्नाले पछि गएर भगवान् जो भगवान् भन्नुहुनेछ कि "ब्रह्मभूत: प्रसन्नात्मा न शोचति न काङ्क्षति। सम: सर्वेषु भूतेषु मद्भक्ति लभते पराम्॥" अर्थात् ब्रह्मभूत पुरुष न सोच्दछ, न आकांक्षा गर्दछ। सबै प्राणीहरूमा समता

ब्रह्मभूतस्य भक्तिलाभोक्तिर्विरुध्येत। तस्मादुक्तार्थ एव साधुरित्यलम् ॥७॥

राख्दै मेरो पराभक्ति पाउँदछ; त्यसबाट यस भगवत् उक्तिको विरोध पर्न जानेछ यसैले यहाँ जुन अर्थ भनियो त्यही नै ठिक हो ॥७॥



**नैव किञ्चित्करोमीति युक्तो मन्येत तत्त्ववित् । पश्यञ्शृण्वन्स्पृशञ्जिघ्रन्नश्नन्गच्छन्स्वपञ्श्वसन् ॥**
**प्रलपन्विसृजन्गृह्णन्नुन्मिषन्निमिषन्नपि । इन्द्रियाणीन्द्रियार्थेषु वर्तन्त इति धारयन् ॥**

**तत्त्वलाई जान्ने सांख्ययोगी त देख्ने, सुन्ने, छुने, सूँघ्ने, खाने, हिंड्ने, सुत्ने, श्वास लिने, बोल्ने, त्याग्ने, ग्रहण गर्ने तथा आँखालाई खोल्ने र बन्द गर्ने गरेर पनि सबै इन्द्रियहरू आफ्नो-आफ्नो काममा लागिरहन्छन् यस्तो प्रकारले सम्झेर निःसन्देह यस्तो मान्नु कि म केहि पनि गर्दिन ॥८-९ ॥**

एवम्भूतः परमार्थदर्शी यावज्जीवः कथं वर्त्तेतेत्यपेक्षायां तद्विवेकबुद्धिं शिक्षयति-नैवेतिद्वाभ्याम्, युक्तः समाहित-चित्तः तत्त्ववित्परमार्थदर्शी। चक्षुरादिज्ञानेन्द्रियैर्वागादि-कर्मेन्द्रियैः प्राणादिभिश्च दर्शनादिवचनादिश्वसनादिषु तत्तत्क्रियासु क्रियमाणासु इन्द्रियाणि वाह्यान्तःकरणान्येव इन्द्रियार्थेषु स्वस्वविषयेषु वर्त्तन्ते इति धारयन् बुद्ध्या निश्चिन्वन्नहं नैव किञ्चित्करोमीति मन्येत जानीयात्। तत्र दर्शनश्रवणस्पर्शनघ्राणाशनानि चक्षुःश्रोत्रत्वग्घ्राणरसनानां व्यापाराः। गमनं पादयोः, प्रलापो वाचः, विसर्गः पायोः, सुखमुपस्थस्य, ग्रहणं हस्तयोरिति पञ्चकर्मेन्द्रियाणां व्यापाराः। श्वसन्निति प्राणादिपञ्चकव्यापारस्योपलक्षणम्। उन्मेषणनिमेषणे कूर्माख्यस्य प्राणस्य, स्वापोऽन्तःकर-णस्येत्यर्थक्रमेण विवेकः। पाठक्रमादर्थक्रमो बलीयान्। इमे व्यापारा मम स्वरूपनिरूपिता न भवन्ति। किन्तु प्रकृतिकार्यभूतेन्द्रियप्राणादीनामेवेति जानन्निरभिमान-तयाऽऽयुःशेषं क्षपयेदिति भावः ॥८-९ ॥

यस प्रकारको परमार्थदर्शी जब सम्म बाँच्दछ तब सम्म कसरी व्यवहार गर्दछ यस प्रश्नको अपेक्षा मा परमार्थदर्शीको विवेक बुद्धिलाई दुईश्लोकहरू मार्फत भन्नुहुन्छ- स्थिर वा सावधान चित्तयुक्त परमार्थको लाई जान्ने पुरुष आफ्नो बुद्धिले यो निश्चय गरेर कि आँखा आदि ज्ञानेन्द्रियद्वारा, वाक् आदि कर्मेन्द्रियहरू बाट, प्राणादिसँग दर्शन आदि, भाषण आदि र निस्स्वास आदि कर्महरू गरिरहेका इन्द्रियहरू बाहिर र भित्रको करण हुन् र आ-आफ्नो विषयमा रम्दछन्, यो संझिन्छ कि म केही गर्दिन। देख्नु, सुन्नु, छुनु, सुँघ्नु, भोजन गर्नु, आँखा, कान, छाला, नाक, जिब्रो को व्यापार हो। फेरि हिड्नु गोडाको, बोल्नु वाणीको, उत्सर्ग गर्नु गुदाको, सुखको अनुभव गर्नु जननेन्द्रियको, पक्डिनु हातको व्यापार हो। यसै प्रकार प्राणादि पञ्चवायुको व्यापार श्वास लिनु आदि हो। सुत्नु अन्तःकरणको व्यापार हो। आँखाको परेलाहरू चिम्म गर्नु र खोल्नु कूर्म नाम गरेको प्राणको व्यापार हो। त्यो परमार्थलाई जान्ने पुरुष यो संझिन्छ कि यी व्यापार मेरो स्वरूप मा छैन। यी प्रकृतिका कार्यभूत इन्द्रियहरू र प्राणहरूका व्यापार हुन्। यस्तो जानेर(वा मानेर) त्यो अभिमान रहित भएर आफ्नो बचेको जीवनलाई भोग्दछ ॥८-९ ॥



**ब्रह्मण्याधाय कर्माणि सङ्गं त्यक्त्वा करोति यः ।**
**लिप्यते न स पापेन पद्मपत्रमिवाम्भसा ॥**

**जुन पुरुष सबै कर्महरूलाई परमात्मामा अर्पण गरेर र आसक्तिलाई त्यागेर कर्म गर्दछ भने त्यो पुरुष जलमा कमलको पत्ता जसरी पापले लिप्त हुँदैन ॥१० ॥**

भवत्वेवम्भूतस्य विशुद्धात्मनो जितेन्द्रियस्य कर्मनिर्लेपत्वम्, उक्तलक्षणहीनस्यान्यस्य कथं कर्माऽलेपः स्यादित्यत आह-ब्रह्मणीति। ब्रह्मणि भगवति वासुदेवे आधाय समर्प्य

यस प्रकार को विशुद्ध आत्मावाला र जितेन्द्रिय पुरुषको कर्म निर्लेपता हुन सक्दछ, तर यी लक्षणहरूले हीन पुरुष कर्मले अलेप कसरी रहन सक्दछ? यसको उत्तर दिनुहुन्छ-

ब्रह्ममा अर्थात् भगवान् वासुदेवमा अर्पण गरेर र त्यसको

संगं फलाभिलाषं त्यक्त्वा केवलं भगवदाज्ञापालनात्मक–भजनबुद्ध्या यः कर्माणि करोति, स देहेन्द्रियवानपि तत्प्रयुक्तकत्तृत्वाभिमानरूपेण बन्धहेतुना पापेन न लिप्यते। यथा पद्मपत्रमम्भसि स्थितमपि अम्भसा न लिप्यते, तद्वत्॥

फलको अभिलाषा छोडेर केवल भगवान्‌को आज्ञाको पालन संझेर र भजन बुद्धिले जुन कर्महरूलाई गर्दछ त्यो देह र इन्द्रियवाला भएर पनि त्यसबाट उत्पन्न, बन्धको कारण, कर्त्ताको अभिमान रूप पाप बाट लिप्त हुँदैन जस्तो कि पानीमा रहेर पनि कमलको पत्ता पानीमा लिप्त हुँदैन॥१०॥

–★–★–★–

**कायेन मनसा बुद्ध्या केवलैरिन्द्रियैरपि।**
**योगिनः कर्म कुर्वन्ति सङ्गं त्यक्त्वात्मशुद्धये॥**

**कर्मयोगी ममत्वबुद्धिरहित केवल इन्द्रिय, मन, बुद्धि र शरीरद्वारा पनि आसक्तिलाई त्यागेर अन्तःकरणको शुद्धिको लागि कर्म गर्दछन्॥११॥**

उक्तार्थमेव शिष्टाचारेण द्रढयति–कायेनेति। कायेन मनसा बुद्ध्या केवलैः स्वाभाविकविषयासक्तिशून्यैरिन्द्रियैरपि फलसङ्गं त्यक्त्वा आत्मशुद्धये चित्तशुद्ध्यर्थं योगिनः कर्म कुर्वन्ति॥

माथि भनिएको अर्थलाई शिष्टहरूको आचरणले दृढ गर्नुहुन्छ–

योगीहरू पनि चित्तको शुद्धिका लागि फलको आसक्ति छोडेर शरीर, मन, बुद्धि र स्वाभाविक विषयासक्ति शून्य इन्द्रियहरूले कर्म गर्दछन्। भाव यो कि योगी आत्म शुद्धिको लागि, स्वर्गादि फलको कामना छोडेर, शरीरले साष्टांग प्रणामादि कर्म, मनले भगवानको रूपादिको ध्यान आदि, बुद्धिले तत्त्व निश्चयादि र प्राकृत् विषय शून्य इन्द्रियहरूबाट श्रवण कीर्त्तनादि गर्दछ॥११॥

–★–★–★–

**युक्तः कर्मफलं त्यक्त्वा शान्तिमाप्नोति नैष्ठिकीम्।**
**अयुक्तः कामकारेण फले सक्तो निबध्यते॥**

**कर्मयोगी कर्मको फललाई त्यागेर भगवत्प्राप्तिरूप शान्तिलाई प्राप्त गर्दछ र सकामपुरुष कामनाको प्रेरणाले फलमा आसक्त भएर बाँधिन्छ॥१२॥**

फलासक्तिरेव बन्धहेतुरित्यन्वयव्यतिरेकाभ्यामाह–युक्त इति। युक्त ईश्वराज्ञायां निरतः कर्मणां फलं त्यक्त्वा कर्माणि कुर्वन् नैष्ठिकीं शान्तिं मोक्षं प्राप्नोति। अयुक्तः कर्मसु ईश्वरप्रीत्यर्थमेवेति बुद्धिशून्यः कामकारेण कामतः प्रवृत्त्या मम फलसाधकमिदमहं करोमीति फले सक्तो निबध्यते। तैरेव कर्मभिः संसारे बन्धं प्राप्नोतीत्यर्थः॥१२॥

फलमा आसक्ति नै बन्धनको कारण हो, यसलाई अन्वय व्यतिरेकको रीतिले भन्नुहुन्छ– युक्त अर्थात् ईश्वर आज्ञामा निरत पुरुष, कर्महरूको फललाई छोडेर, उनीहरूलाई गर्दै मोक्षलाई प्राप्त गर्दछ। अयुक्त अर्थात् कर्म ईश्वरको प्रीतिको लागि नै गरिन्छ– यस बुद्धिले शून्य पुरुष काममा प्रवृत्त भएर, अर्थात् यो कर्मले मलाई यो फल दिन्छ, यसैले म यसलाई गर्दछु– यस्तो बुद्धिले कर्महरू गर्दै गर्दा त्यसको फलले बाँधिन्छ। अर्थात् यस्तै नै मनुष्य कर्मले संसारमा बन्धन प्राप्त हुन्छ॥१२॥

–★–★–★–

**सर्वकर्माणि मनसा सन्न्यस्यास्ते सुखं वशी।**
**नवद्वारे पुरे देही नैव कुर्वन्न कारयन्॥**

**अन्तःकरण जसको वशमा छ यस्तो सांख्ययोगको आचरण गर्नेवाला पुरुष न गर्दै र न गराउँदै जस्तो गरेर पनि नौ द्वारवाला शरीररूप घरमा सबै कर्मलाई मनबाटै त्यागेर आनन्दपूर्वक सच्चिदानन्दघन परमात्माको स्वरूपमा स्थित रहन्छ॥१३॥**

एवमयुक्तः कर्मस्वभिमानाद्देहेन्द्रियकर्मभिर्बध्यते इत्युक्तं,

यस प्रकार अयुक्त पुरुष कर्महरूमा अभिमान गर्नाले देह र

ज्ञानी तु देहे वर्त्तमानोऽपि देहेन्द्रियकर्मभ्यो विलक्षण एवेत्याह सर्वकर्माणीति। वशी स्ववशेकृतचित्तेन्द्रियः नित्यनैमित्तिकादीनि सर्वाणि कर्माणि अनादिकर्मात्मिकाऽविद्याकृतप्रकृतिसम्बन्धस्तज्जन्यदेहेन्द्रियनिमित्तकमिदं कर्त्तृत्वं, न केवलस्वरूपप्रयुक्तमिति विवेकयुक्तेन मनसा संन्यस त्यक्त्वा नवद्वारे नेत्रकर्णनासिकामुखपायूपस्थात्मकनवद्वारवति देहात्मके पुरे पुरवदहम्भाववर्जिते देही देहाश्रयभूतोऽहमिति विवेकवान्न तु अज्ञवद्देहाभिन्नः सुखं यथा स्यात्तथाऽऽस्ते। सुखत्वे हेतुः –नैव कुर्वन्न कारयन्निति। इतमहं करोमीत्यहङ्काराभावात्स्वयं नैव कुर्वन्, अन्यत्र देहपर्यन्ते ममकाराभावान्नैव कारयन्नास्तेऽतो न बध्यते इति भावः॥

इन्द्रियहरू द्वारा गरिएको कर्मद्वारा बाँधिन्छ, यस्तो माथि भन्नुभयो। अब यो भन्नुहुन्छ कि ज्ञानी देहमा बसेर पनि देह र इन्द्रियहरूको कर्मले विलक्षण छ। जसले चित्त र इन्द्रियहरूलाई वशमा गरेको छ, त्यो नित्य नैमित्तिक सबै कर्महरूलाई, यो संझेर कि अनादि कर्मात्मिका अविद्याले गरिएको कार्य प्रकृति(माया)को सम्बन्धाको कारण, देह र इन्द्रियहरूका निमित्त यो कर्त्तापन हो, अर्थात् बद्धावस्थामा जीवको कर्त्तापन मायाको गुणहरूको संसर्गले गरिएको छ केवल स्वरूप युक्त कर्त्तव्य होईन यसले यी मेरो स्वरूप सँग केहि सम्बन्ध राख्दैनन्, यस्तो विवेकयुक्त मनले छोडेर, नौ द्वारवाला शरीरमा सुख पूर्वक बस्दछ। आँखा, कान, नाक, मुख, गुदा र जननेन्द्रिय यी नै शरीरमा नौ ढोकाहरू हुन्। यस शरीरमा अहं भाव छोडेर र यो विवेक राख्दै कि म देहको आश्रयभूत छु र अज्ञहरूको जस्तो देहलाई आफुभन्दा अभिन्न न मान्दै, जीव शरीरमा सुखले बस्तछ। सुखले बस्ने कारण बताउनुहुन्छ। यो म गर्दछु, यस्तो अहंकार नहुनाले त्यो स्वयं पनि केहि गर्दैन र देह सम्ममा आफ्नो पन नरहनाले त्यो कोही सँग केहि गराउँदैन पनि। भाव यो कि यसैले त्यो कर्महरू बाट बाँधिदैन॥१३॥

–★–★–★–

## न कर्तृत्वं न कर्माणि लोकस्य सृजति प्रभुः।
## न कर्मफलसंयोगं स्वभावस्तु प्रवर्तते॥

**परमेश्वर मनुष्यहरूको न त कर्तापनको, न कर्महरूको र न कर्मफलहरूको संयोगको नै रचना गर्नुहुन्छ; तर स्वभाविक नै भईरहन्छ॥१४॥**

ननूक्तलक्षणो विवेकी कर्मभिर्न बध्यते। अज्ञस्तुकामकारेण शुभाशुभकर्मभिर्बध्यत इत्युक्तं, तत्र कस्य गुणः कस्य वा दोषः? प्रयोजककर्त्रीश्वरायत्तकर्त्तृत्वात्सर्वस्य लोकस्य। "एष एव साधु कर्म कारयति ते यमेभ्यो लोकेभ्य उन्निनीषते, एष एवासाधु कर्म कारयति तं यमेभ्यो लोकेभ्योऽधो निनीषते" इत्यादिश्रुतेः प्रयोजककर्त्तुरीश्वरस्यैव वैषम्यं, तस्यैव पुण्य पापसम्बन्धः स्यादित्याशङ्कावारणायाह- कर्तृत्वमिति-द्वाभ्याम्। प्रभुः परमेश्वरः लोकस्य जनस्य "लोकस्तु भुवने जने" इति कोशात्। कर्त्तृत्वं शुभाशुभानि कर्माणि च न सृजति। नापि कर्मफलसंयोगं सम्बन्धं सृजति। किन्तु लोकस्य स्वभावः, अनादिकर्मात्मिकाऽविद्यानिरूपित-

उक्त लक्षण युक्त विवेकी पुरुष कर्महरूबाट बाँधिदैन। अज्ञ पुरुष फलको आकांक्षाले गरिएको शुभ र अशुभ कर्महरूबाट बाँधिन्छ। यी दुबै दोषहरू कसको हो र गुण कसको? सबै मनुष्यहरूलाई कर्ममा लगाउनेवाला त ईश्वर छन् र यसैले कर्महरूको(कर्तृत्व) उनैको अधीन छ। यस विषयमा श्रुति प्रमाण छ। यथा- "एष एव साधु कर्म कारयति ते यमेभ्यो लोकेभ्य उन्निनीषते, एष एवासाधु कर्म कारयति तं यमेभ्यो लोकेभ्योऽधो निनीषते" अर्थात् ईश्वर नै तिनीहरूबाट राम्रो कर्म गराउँदछ जस-जसलाई यो लोकबाट लैजाने इच्छा गर्दछ। त्यही उनीहरूबाट निन्दितकर्म गराउँदछ जस-जसलाई यो लोकबाट तल झारिदिने इच्छा गर्दछ।

यस प्रकारको प्रायोजक कर्त्ता ईश्वरमा नै विषमता छ। त्यसैको पाप पुण्यसँग सम्बन्ध छ। यस शंकाको निवारण गर्नको लागि भगवान् भन्नुहुन्छ कि परमेश्वर कर्त्तापनलाई र शुभाशुभ कर्महरूलाई सृजना गर्दैनन् र कर्मफलको संयोगलाई पनि सृजना गर्दैनन्। यो मनुष्यको स्वभावले नै हुन्छ। अनादि कर्मात्मिका अविद्याले निरूपित स्वभाव नै कर्त्तापन आदिको रूपमा प्रवृत्त

प्रकृतिः कर्तृत्वादिना प्रवर्त्तते, तदनुसारेणैवेश्वरः कर्मसु प्रवर्तयति। न त्वपूर्पकर्तृत्वादिकमुत्पादयतीत्यर्थः॥

हुन्छ। त्यस स्वभावको अनुकुल नै ईश्वर कर्महरूमा प्रवृत्त गराउँदछ। भाव यो कि ईश्वर अपूर्व कर्त्तापन इत्यादि पैदा गर्दैन। जसको जस्तो अनादि कर्महरूबाट उत्पन्न स्वभाव हुन्छ ईश्वर त्यसलाई त्यसको अनुकूल कर्ममा नै लगाउँदछ॥१४॥

–★–★–★–

## नादत्ते कस्यचित्पापं न चैव सुकृतं विभुः।
## अज्ञानेनावृतं ज्ञानं तेन मुह्यन्ति जन्तवः॥

**सर्वव्यापी परमेश्वर पनि न कसैको पापकर्मलाई र न कसैको शुभकर्मलाई नै ग्रहण गर्दछ; तर अज्ञानको द्वारा ज्ञान छोपिएको छ, त्यसैबाट सबै अज्ञानी मनुष्य मोहित भईरहेकाछन्॥१५॥**

अत एव–नादत्त इति। विभु परमेश्वरः कस्य चिज्जीवस्य पापं सुकृतं चैव नादत्ते। तयोः स्वभावानुसारेण कार–यिताऽपि पापपुण्यभाङ्नभवतीत्यर्थः ननु जीवानां प्रयोजक ईश्वरो यदि कत्तृत्वकर्माणि न सृजति, पापादि नादत्ते चेत्तर्हि कथं बन्धनहेतुकर्म कुर्वन्तीत्यतआह–अज्ञानेनेति। अनादिकर्मात्काज्ञानेन स्वाभाविकं(धर्मभूतं) ज्ञानमावृतं, तेन हेतुना जन्तवो मुह्यन्ति। अज्ञानेनावृत ज्ञानत्वाज्जीवा मोहमन्यथा ज्ञानं प्राप्नुवन्ति। अनिष्टे इष्टबुद्ध्या प्रवर्त्तन्ते। भगवति वैषम्यं पुण्यपापं च कल्पयन्तीत्यर्थः॥१५॥

यसैले भगवान् कुनै जीवको पाप वा पुण्य ग्रहण गर्नुहुन्न। अर्थात् जीवहरूको कर्मानुसार उनीहरू बाट कर्म गराएर पनि भगवान् ती कर्महरूको पाप पुण्य को भागी हुँदैनन्। किनकी भगवान् आप्तकाम र परिपूर्ण छन्। अब यहाँ यो शंका हुन्छ कि यदि ईश्वर जुन जीवको प्रायोजक छ, कर्त्तापन सृजना गर्दैन र पाप इत्यादि पनि ग्रहण गर्दैन भने जीव कर्महरूलाई जो बन्धनको कारण छन्, किन गर्दछ? यस शंकाको उत्तर दिनुहुन्छ- अनादि कर्मात्मक अज्ञानले जीवको स्वभाविक धर्मभूत ज्ञान छोपिएको छ, यसैले जीवलाई मोह उत्पन्न हुन्छ अर्थात् अन्यथा वा झुटो ज्ञान हुन्छ। तात्पर्य कि स्वाभाविक ज्ञान छोपिए पछि जीवलाई अनिष्टमा इष्ट बुद्धि उत्पन्न हुन्छ र त्यो भगवान्मा विषमता र पुण्य पापको परिकल्पना गर्दछ॥१५॥

–★–★–★–

## ज्ञानेन तु तदज्ञानं येषां नाशितमात्मनः।
## तेषामादित्यवज्ज्ञानं प्रकाशयति तत्परम्॥

**तर जुन मनुष्यको त्यो अज्ञान परमात्माको तत्त्वज्ञानद्वारा नष्ट गरिदिईसकिएको छ, त्यसको त्यो ज्ञान सूर्यको जस्तै त्यस सच्चिदानन्दघन परमात्मालाई प्रकाशित गरिदिन्छ॥१६॥**

स्यादेतत्तथाऽप्यनाद्यज्ञानावृतज्ञानाः सर्वेऽपि कुतो न मुह्यन्ति। यतो मोहहीना अपि केचिद्दृश्यन्त इत्यपेक्षायां "सर्वं कर्माखिलं पार्थ! ज्ञाने परिसमाप्यत" इति पूर्वोक्तं ज्ञानं तत्र हेतुरित्याह–ज्ञानेनेति। अज्ञानेनावृतज्ञानेष्वपि सर्वात्मसुयेषां भगवत्कृपाकटाक्षविषयभूतानां जीवात्मनां वेदान्ततत्त्वसाक्षात्कारवद्गुरुसदनपूर्वकतदुपदिष्टशास्त्रार्थ–मननिदिध्यासनाभ्यासजनितेन आत्मनो देहेन्द्रियादि–विविक्तात्मस्वरूपविषयेण मनोवृत्तिरूपेण ज्ञानेन तज्ज्ञाना–

यदि यस्तो कुरा हो भने त अनादि अज्ञानले ज्ञान छोपिएको हुँदा सबै जना मोहमा प्राप्त किन हुँदैनन्? कतिपय मोह हीन पनि देखा पर्दछन्। यसमा उनीहरूको ज्ञान कारण हो, जसको विषयमा भगवान्ले पहिले भन्नुभएको थियो कि 'सर्वं कर्माखिलं पार्थ ज्ञाने परिसमाप्यते' यसै कुरालाई स्पष्ट गर्नुहुन्छ–
सबै आत्माहरू वा जीवहरूको ज्ञान अज्ञानले छोपिएको भएपनि तिनीहरू मध्ये जुन जीवहरूमा भगवान्को कृपाकटाक्ष हुन्छ ती वेदान्त-तत्त्वको साक्षात्कार गर्ने गुरुभए ठाऊँ पुगेर उहाँले गर्नुभएको उपदिष्ट शास्त्रार्थको मनन र निदिध्यासन गर्दछन् र त्यस अभ्यासले उत्पन्न देह इन्द्रिय आदिबाट पृथक् पृथक आत्मस्वरूप विषयक मनोवृत्ति रूप ज्ञानको द्वारा त्यस ज्ञानलाई आवरण गर्नेवाला अनादि कर्म संचय रूप अज्ञानको नाश गर्दछन्।

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

वरणमनादिकर्मसञ्चयरूपमज्ञानं नाशितं, तेषां तद्धर्मभूतं स्वाभाविकं ज्ञान कर्तृपरं देहेन्द्रियादिभ्योऽत्यन्तविलक्षणं चैतन्यं त्वम्पदार्थस्वरूपं कर्म आदित्यवदुदयमात्रेणैव प्रकाशयति। अन्यदपीष्टानिष्टबन्धमोक्षहेतुभूतं सर्वं वस्तु प्रकाशयतीत्यतो न मुह्यन्तीत्यर्थः। अत्र तेषामादित्यवज्ज्ञानं प्रकाशयतीत्यज्ञाननाशानन्तरमप्यात्मनां बहुत्वाभिधानादुपाधिसम्बन्धगन्धस्यापि वक्तुमशक्यत्वादेकात्मवादिनः स्पष्टं भगवता निरस्ताः। "तेषामादित्यवज्ज्ञानमि"ति षष्ठ्या ज्ञानस्य स्वरूपाद्भेदनिर्देशात्तत्सम्बन्धाभिधानाच्च ज्ञातृज्ञानयोः प्रभाप्रभावतोरिव धर्मिधर्मभावसिद्ध्या स्वरूपातिरिक्तज्ञानानङ्गीकारिणो गुणगुणिनोरैक्याङ्गीकारिणश्च निरस्ता ज्ञेयाः। एतेन बद्धावस्थायां सङ्कुचितप्रभस्य घटावृतदीपस्येव कर्मनिर्मितस्थूलसूक्ष्मदेहेन धर्मभूतज्ञानस्यैव सङ्कोचः, न त्वात्मस्वरूपान्यथभावः।मोक्षदशायां घटात्मकावरणध्वंसे दीप्रभाप्रकाशवत् सकारणलिङ्गशरीरध्वंसे धर्मभूतज्ञानस्यैव विकाशो, नतु स्वरूपान्तरापत्तिरित्यपि सूचितम्। "यथोपानखननात् क्रियते न जलान्तरम्। सदेव नीयते व्यक्तिमसतः सम्भवः कुतः। यथा न क्रियते ज्योत्स्ना मलप्रक्षालनान्मणेः। तथा हेयगुणध्वंसादवबोधादयो गुणाः। प्रकाश्यन्ते न जन्यन्ते नित्या एवात्मनो हि ते॥१६॥

**उनीहरूको यो धर्मभूत स्वाभाविक ज्ञान, देह इन्द्रिय आदि भन्दा अत्यन्त विलक्षण, कर्त्ता र चैतन्य त्वं पदार्थलाई, अर्थात् आत्माको स्वरूपलाई सूर्यको जस्तो प्रकाशित गर्दछ र बन्ध र मोक्षको कारणभूत सबै वस्तुहरूलाई पनि प्रकाशित गर्दछ। भाव यो कि यस कारणबाट यस्ता मान्छे मोहमा प्राप्त हुँदैनन्। यहाँ भगवान्ले 'तेषामादित्यवज्ज्ञानं प्रकाशयति' अर्थात् त्यसको ज्ञान सूर्यको जस्तो प्रकाश गर्दछ, यो भनेर अज्ञानको नाश भएपनि आत्माहरू धेरै हुनु भनियो। अज्ञानको नाश र ज्ञानको प्रकाश को पछि उपाधिको सम्बन्धको गन्धमात्र पनि रहँदैन अर्थात् आत्माहरूको बहुलता उपाधि भेदले हो यहाँ यस्तो कुराको चर्चा पनि छैन। यसैले भगवान्ले स्पष्टरूपले एकात्मवादको खण्डन गर्नुभयो। फेरि 'तेषामादित्यवज्ज्ञानम्' मा षष्ठीको व्यवहार गरेर यो भन्नुभयो कि ज्ञानको आत्माको स्वरूप सँग भेद छ र त्यसको सम्बन्ध पनि छ र यसैले जस्तो प्रभा र अरु प्रभावाला मा धर्म र धर्मी भावको सम्बन्ध छ त्यसै प्रकार ज्ञान र ज्ञानवाला(आत्मा)मा धर्म धर्मी भावको सम्बन्ध छ। यस्तो भन्नाले आत्म स्वरूप भन्दा अतिरिक्त ज्ञानको स्थिति नमान्नेहरूका, र गुण र गुणी को एकता हुन्छ, यस्तो मान्नेवालाको खण्डन हुनजान्छ। यसले यो सिद्ध भयो कि जस्तो घैलामा लुकाएको दीयोको उज्यालो(प्रकाश) केवल संकुचित हुन्छ, त्यसै प्रकार बद्धवस्थामा कर्मद्वारा निर्मित स्थूल सूक्ष्म देहबाट आत्माको केवल धर्मभूत ज्ञानको संकोच हुन्छ। त्यसको आत्म स्वरूपमा कुनै अन्यथा भाव वा परिवर्त्तन हुँदैन। फेरि जसरी घैला फुटेपछि दीयोको प्रभा प्रकाश गर्न थाल्दछ, त्यसै प्रकार मोक्षको अवस्थामा कारण सहित लिङ्ग वा सूक्ष्म शरीरको नाश भए पछि आत्माको धर्मभूत ज्ञानको विकाश हुन्छ, त्यसको शरीरमा रूपान्तर हुँदैन। भनिएको पनि छ- "यथोपानखननात् क्रियते न जलान्तरम्। सदेव नीयते व्यक्तिमसतः सम्भवः कुतः। यथा न क्रियते ज्योत्स्ना मलप्रक्षालनान्मणेः। तथा हेयगुणध्वंसादवबोधादयो गुणाः। प्रकाश्यन्ते न जन्यन्ते नित्या एवात्मनो हि ते॥" अर्थात् जलाशय खनेर कुनै नयाँ जल उत्पन्न गरिँदैन। सत् बाट नै कुनै चिज प्रकट हुन्छ, असत् बाट प्रकट हुनु कसरी सम्भव हुन सक्दछ। जस्तो मणिको मैलोलाई धोएर त्यसमा चमक पैदा गरिँदैन, त्यस्तै नै हेय गुणहरूको नाश भएपछि राम्रो गुण पैदा गरिँदैन, ती केवल प्रकाशित गरिन्छ। आत्मा मा ती नित्य रहन्छन् किनकी ती आत्माको नित्य धर्मभूत गुण हो॥१६॥**

-★-★-★-

**तद्बुद्धयस्तदात्मानस्तन्निष्ठास्तत्परायणाः ।**
**गच्छन्त्यपुनरावृत्तिं ज्ञाननिर्धूतकल्मषाः॥**

**जसको मन तद्रूप भईरहेको छ, जसको बुद्धि तद्रूप भईरहेको छ र सच्चिदानन्दघन परमात्मामा नै जसको निरन्तर एकीभावले स्थिति छ, यस्ता तत्परायण पुरुषहरू ज्ञानको द्वारा पापरहित भएर अपुनरावृत्ति- लाई अर्थात् परमगतिलाई प्राप्त गर्दछन्॥१७॥**

आत्मस्वरूपप्रकाशे सति-तद्बुद्धय इति। तस्मिन्नात्मस्व-

**आत्मस्वरूपको प्रकाश हुँदा खेरि के हुन्छ? त्यसको वर्णन गर्नुहुन्छ।**

रूपे व्यवसायात्मिकाबुद्धिर्येषां ते तथा तदात्मानः विषयान्तरनिरासेन तत्प्रवणमनसः तन्निष्ठास्तच्चिन्तनाभ्यासनिरताः, तत्परायणास्त्वम्पदार्थस्वरूपमेव परमयनमाश्रयो येषां ते, तेन ज्ञानेन निर्द्धूतकल्मषा निःशेषेण ध्वस्तानादिपापाः सन्तोऽपुनरावृत्तिं यथा प्रागज्ञानावृतत्वेन संसारे वर्त्तन्ते, न तथा पुनः संसारे वर्त्तन्ते। अपि तु विषमाकारेऽशेषदोषवत्यपि संसारे परिशुद्धात्मदर्शनेन संसारधर्मास्पृष्टस्वभावा एव भवन्तीत्यर्थः ॥१७॥

**आत्म स्वरूपमा निश्चयात्मिका बुद्धिवाला, मनलाई अन्य विषयबाट** हटाएर आत्म स्वरूपमा लगाउनेवाला, त्यसै आत्म स्वरूपको चिन्तामा सदा लागेको र आत्म स्वरूप त्वं पदार्थमा परायण र आत्म ज्ञानको द्वारा सबै पापहरूबाट छुटेका मनुष्य संसारको आवागमनबाट, जुन पूर्वमा अज्ञानले ढाकिएर बसेको कारण हुन्थ्यो, छुट्दछन् र यस विषम आकार र अगणित दोष भएको संसारमा रहेर पनि आत्म दर्शन प्राप्त गर्ने कारण, संसारको धर्मबाट अछुत स्वभाववाला हुन्छन् अर्थात् संसारको धर्म उनीहरूलाई छुँदैनन्॥१७॥

-★-★-★-

**विद्याविनयसम्पन्ने ब्राह्मणे गवि हस्तिनि।**
**शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः॥**

**ती ज्ञानीहरू विद्या र विनययुक्त ब्राह्मणमा तथा गाई, हात्ती, कुकुर र चण्डालमा समदर्शी हुन्छन्॥१८॥**

एतदेवोपपादयति–विद्येति। विद्या शास्त्रार्थज्ञानं विनयं विनीतत्वं ताभ्यां संपन्ने ब्राह्मणे सात्त्विके सर्वप्राण्युत्तमे, गवि पशौ धेन्वां वृषभे वा संस्कारहीने मध्यमे राजसे हस्तिनि, तामसे शुनि च श्वपाके चाण्डाले चात्यन्ततामसेऽत्यन्ताधमे चेत्यादिष्वत्यन्तविषमाकारेष्वपि पण्डितास्तत्त्वयाथात्म्यविदः समदर्शिनः, सममातमस्वरूपं पश्यन्त्येवं शीलाः। उत्तमाधमादिवैषम्यं प्रकृतिकार्यदेहनिष्ठं, न त्वात्मसु। आत्मनां स्वरूपं तु ज्ञानस्वरूपत्वेन सदा सर्वत्र दोषास्पृष्टतया सममित्येवं दर्शनशीला भवन्तीत्यर्थः॥

माथि भनिएको विषयलाई फेरि बताउनु हुन्छ–

शास्त्रार्थ ज्ञान र विनयले युक्त, र सबै प्राणीहरूमा उत्तम, सात्त्विक ब्राह्मणमा, गाई वा साँढेमा, संस्कारहीन राजस हात्तीमा, तामस स्वभाववाला र अत्यन्त नीचमा, यद्यपि यी एक अर्का भन्दा बिल्कुल विषम आकार वाला हुन्, तर पनि यथार्थ तत्त्वलाई जान्ने एकै दृष्टि राख्दछ अर्थात् सबैमा आत्माको समानता जानेर एकै नै दृष्टिले हेर्दछ। ती संझिन्छन् कि उत्तम, अधम आदि रूप विषमता प्रकृतिको कार्यरूप देहमा स्थित छ आत्मा मा होईन। ज्ञान स्वरूप भएको ले सबै समयमा र ठाऊँमा यी दोष आत्मालाई छुन सक्दैनन् यसैले आत्मा को स्वरूप बराबर समान छ, यस्तो पण्डितहरू संझिन्छन्॥१८॥

-★-★-★-

**इहैव तैर्जितः सर्गो येषां साम्ये स्थितं मनः।**
**निर्दोषं हि समं ब्रह्म तस्माद्ब्रह्मणि ते स्थिताः॥**

**जसको मन समभावमा स्थित छ, त्यसैको द्वारा यस जीवित अवस्थामा नै सम्पूर्ण संसार जीतिएको छ, किनकी सच्चिदानन्दघन परमात्मा निर्दोष र सम छ, यसैले ती सच्चिदानन्दघन परमात्मामा नै स्थित छन्॥१९॥**

ननु कज्जलागारस्थस्य कज्जलस्पर्शावश्यकत्ववत्संसारे स्थितानां तद्धर्मस्पर्शावश्यम्भावात्कथं विषमाकारसंसारसम्बन्धाभाव इति चेत्तत्राह–इहैवेति। तैः पुरुषैरिहैव संसार एव प्रारब्धशेषेण वर्त्तमानत्वेऽपि सर्गः संसारो जितः

गाजलको कोठीमा बस्नेलाई गाजल अवश्य लाग्दछ नै। त्यसै प्रकार संसारमा स्थित मनुष्यलाई संसारको धर्मको स्पर्श हुनु आवश्यक छ। तब विषम आकारवाला संसारमा सम्बन्धको अभाव कसरी हुन्छ? भगवान् यसको उत्तर दिनुहुन्छ–

ती पुरुषहरूबाट यहाँ अर्थात् संसारमा प्रारब्ध शेष भएपनि संसार जितियो अर्थात् तिरस्कृत गरिएको छ। मतलब यो कि

तिरस्कृतः। स्वात्मसु स्प्रष्टुमनर्हः कृतः इति यावत्। तैः कैः येषामुक्तप्रकारेण सर्वात्मसाम्ये स्थितं मनः। हि यस्मान्निर्दोषं समं ब्रह्म यथा सर्वचेतनाचेतनेषु तदन्तर्यामितया वर्त्तमानमपि ब्रह्म निर्दोषं तद्धर्मास्पृष्टमेवात एव समं, तथोत्तममध्यमाधमदेहेषु वर्त्तमानमपि देह-धर्मास्पृष्टमेवात्मस्वरूपं "कूटस्थोऽक्षर उच्यते" इति वक्ष्यमाणावाक्याच्च निर्दोषत्वादेव सर्वत्र समम्। यस्माद्ब्रह्मवदात्मनां स्वरूपं समं, तस्मात् साम्ये ये स्थिता ब्रह्मण्येव ते स्थिताः। एतेन विषमाकारदर्शिनामेव संसार-धर्मभागित्वं, न तु ब्रह्मभूतात्मस्वरूपदर्शिनामिति समा-धानमुक्तम्। ब्रह्मणि स्थितिर्हि संसारजयः, राजान्तिके स्थितस्य चौरादिजयवदिति भावः॥१९॥

उनीहरूको आत्मालाई संसार छुन सक्दैन। कस्ता पुरुषलाई संसारको हेय पदार्थ छुन सक्दैन? यसको उत्तर दिनुहुन्छ- कि उनीहरूलाई जसले माथि भनिएको रीतिले सर्वात्माहरूको समतालाई आफ्नो मनमा निश्चय गरेका छन्। कारण कि जसरी दोष रहित र समता युक्त ब्रह्म चेतन र अचेतन सबैको अन्तर्यामी रूपले स्थित भएर पनि निर्दोष र उनीहरूको गुणहरूबाट अछुत अर्थात् समता युक्त बनिरहन्छ त्यसै प्रकार उत्तम, मध्यम र अधम देहहरूमा स्थित पनि आत्मा ती देहरूको धर्मले अछुत रहन्छ र कूटस्थ हुनाले निर्दोष छ। श्रुतिमा पनि यहि भनेको छ-'अविनाशी वा अरेऽमयमात्माऽनुच्छित्ति धर्मा' अर्थात् यो आत्मा नाश हुनेवाला होईनयसैोक धर्मको पनि नाश हुँदैन। स्वयं भगवान्‌ले पनि यस आत्माको विषयमा भन्नुभएको छ कि 'कूटस्थोऽक्षर उच्यते' अर्थात् यो अक्षर अर्थात् अविनाशी जो आत्मा छ त्यो कूटस्थ हो। यी सबै वचनहरूले यो सिद्ध हुन्छ कि आत्मा निर्दोष हुनाले सबैमा बराबर छ। किनकी ब्रह्मको जस्तो आत्माको पनि स्वरूप सम छ यसैले साम्यमा जुन स्थित छ, अर्थात् जसलाई यो ज्ञान छ कि आत्मा सबै देहहरूमा सम छ, ती ब्रह्ममा नै स्थित छन्। यसले यो सामाधान गरियो कि संसारमा विषम आकारलाई देख्नेहरूनै संसारको धर्मको भागी हुन्छन्, आत्म स्वरूपलाई ब्रह्ममय देख्ने लाई होईन। पूर्वोक्त भनिएको रीतिको अनुसार ब्रह्ममा स्थित रहनु पनि संसारलाई जय गर्नु भयो जस्तै कि राजाको समीपमा स्थित हुनु नै चोर आदिलाई जय गर्नुको समान हो॥१९॥

-★-★-★-

## न प्रहृष्येत्प्रियं प्राप्य नोद्विजेत्प्राप्य चाप्रियम् ।
## स्थिरबुद्धिरसम्मूढो ब्रह्मविद् ब्रह्मणि स्थितः॥

**जुन पुरुष प्रियको प्राप्ति हुँदा हर्षित हुँदैन र अप्रियको प्राप्ति हुँदा उद्विग्न हुँदैन, त्यो स्थिरबुद्धि, संशयरहित, ब्रह्मवेत्ता पुरुष सच्चिदानन्दघन परब्रह्म परमात्मामा एकीभावले नित्य स्थित छ॥२०॥**

एवं समस्वरूपात्मदर्शनरूपा ब्रह्मस्थितिः संसारजय-हेतुरिति निर्णीतमिदानीं मुमुक्षुणा तदर्थमेव यतितव्यमित्यु-पदिशति न प्रहृष्येत्, अहो भाग्यमिति प्रफुल्लितो न भवेदित्यर्थः। तथाऽप्रियमननुकूलं प्राप्य नोद्विजेत्, विषादं न कुर्यात्। ततश्च स्थिरबुद्धिः शनैः शनैरात्मज्ञानद्वारेण संसारदुःखं तरिष्यामीति दृढव्यवसायः। अत एवासम्मोहः, दुःखपरिणामकेऽनात्मवस्तुनि सुखहेतुरिदमित्यन्तःकरण-कविभ्रमो मोहस्तद्रहितः। ततस्तत्त्वज्ञोपदेशेन ब्रह्मविद्भूत्वा

यो निर्णय गरि सकियो कि आत्मा सम छ र सम स्वरूप आत्म दर्शन रूप जो ब्रह्ममा स्थित छ त्यही नै संसारको माथि विजय पाउनुको कारण हो। अब यो उपदेश दिनुहुन्छ कि मुमुक्षुहरूले त्यसैको लागि यत्न गर्नुपर्दछ। संसार माथि जय पाउने इच्छाभएका मुमुक्षुलाई आफ्नो प्रिय पदार्थलाई, अर्थात् मनको अनुकुल भोजन, कपडा, बस्ने घर, वचन इत्यादि पाएर खुशी हुनु हुँदैन, अर्थात् यो भनेर कि 'वाह मेरो भाग्य' प्रफुल्लित हुनु हुँदैन। त्यसै प्रकार अप्रिय अर्थात् मनको प्रतिकूल पूर्वमा भनिएको वस्तुहरूलाई पाएर, उद्विग्न हुनु हुँदैन, अर्थात् दुःख मान्नु हुँदैन। त्यस पछि बुद्धिलाई यस कुरा मा दृढ गर्नुपर्दछ कि आत्मज्ञानको बाटोबाट बिस्तारै-बिस्तारै म संसार दुःखलाई पार गर्नेछु, अर्थात् यस्तो आफ्नो विश्वास दृढ गर्नुपर्दछ। यसैले मोह रहित भईजानु, अर्थात् दुःखदायी अनित्य वस्तु सुखको कारण हो, यस्तो जो

ब्रह्मणि स्थित:, ब्रह्मवन्निर्दोषसमस्वरूपे आत्मनि निरतो भवेदिति भाव:॥२०॥

अन्त:करणमा भ्रम स्थित छ, त्यसबाट मुक्त हुनु। यस पछि तत्त्वलाई जान्ने, गुरुको उपदेशले ब्रह्मलाई जानेर ब्रह्ममा नै स्थित हुनु। भन्नुको भाव यो हो कि ब्रह्मको समान निर्दोष र समरूपवाला आत्मा मा सदा निरत रहनु॥२०॥

-★-★-★-

**बाह्यस्पर्शेष्वसक्तात्मा विन्दत्यात्मनि यत्सुखम् ।**
**स ब्रह्मयोगयुक्तात्मा सुखमक्षयमश्नुते॥**

**बाहिरको विषयमा आसक्तिरहित अन्त:करणवाला साधक आत्मामा स्थित जुन ध्यानजनित सात्त्विक आनन्द छ, त्यसैलाई प्राप्त गर्दछ, तदनन्तर त्यो सच्चिदानन्दघन परब्रह्म परमात्माको ध्यानरूप योगमा अभिन्नभावले स्थित पुरुष अक्षय आनन्दको अनुभव गर्दछ॥२१॥**

ननु सर्वजनेप्सितशब्दस्पर्शादिविषयसुखासक्तस्य ब्रह्मणि स्थितिर्न सम्भवति, बाह्यसुखविमुखाच्चेद् ब्रह्मणि रत: किं सुखं विन्देतेति चेत्तत्राह–बाह्यस्पर्शेष्विति। श्रोत्रादीन्द्रियै: स्पृश्यन्त इति स्पृशा: शब्दादिविषयास्ते बाह्येन्द्रियविषयत्वाद्बाह्यास्तेष्वसक्तात्मा अनासक्तचित्तो विगततृष्ण इति यावत्। आत्मनि अन्त:करणे यदुपशम–रूपमनन्तसुखं शास्त्रे उक्तं तद्विन्दति लभते। तदुक्त मोक्ष–धर्मे। "यच्च कामसुखं लोके यच्च दिव्यं महत्सुखम्। तृष्णाक्षयसुखस्यैते नार्हत: षोडशीं कलामि"ति। ततश्च प्रकृतिवियुक्तपरिशुद्धात्मस्वरूपं ब्रह्म तस्य योगो निरन्तर–चिन्तनाभ्यासस्तत्र युक्त आत्मा मनो येन स ब्रह्मयोग–युक्तात्मा। अथवा ब्रह्म परमात्मा तेन योग: प्रत्यगात्म–नस्तादात्म्यसम्बन्धस्तत्र युक्तस्तदनुसन्धानाभ्यासे नियुक्त आत्मा अन्त:करणं येन स तथा अक्षयसुखमश्नुते प्राप्नोति। "आत्मानं चेद्विजानीयादयमस्मीति पुरुष: किमिच्छन् कस्य कामाय शरीरमनुसंज्वरेदि"ति श्रुते:॥२१॥

सबै मान्छहरू भन्दा इच्छित शब्द स्पर्शादि विषयसुखमा आसक्त पुरुषको ब्रह्ममा स्थिति हुन सक्दैन। यदि बाहिरी सुखबाट विमुख भई त्यो ब्रह्ममा रत भयो भने त्यसलाई कुन सुख मिल्दछ? यसैको उत्तर दिनुहुन्छ–

बाह्येन्द्रियको शब्द स्पर्शादि विषयहरूमा जसको चित्त आसक्त छैन अर्थात् जो त्यसमा तृष्णा रहित छ, त्यसलाई आफ्नो अन्त:करणमा त्यो सुख मिल्दछ, जुन उपशम रूपी(विषयको विरागबाट उत्पन्न) सुखको उल्लेख शास्त्रहरूले गरेका छन्, यथा मोक्ष धर्म–"यच्च ......कलाम्॥" अर्थात् जो संसारमा कामनाको सुख छ र जो स्वर्गमा दिव्य महासुख छ, त्यो तृष्णाको नाशले जुन सुख उत्पन्न हुन्छ त्यसको सोह्रौं भागको एक भाग बराबर पनि हुँदैन। यो महाभारतको मोक्ष पर्वको वचन हो।

जसले प्रकृति भन्दा वियुक्त, परिशुद्ध आत्मस्वरूप ब्रह्म–चिन्तनको अभ्यासमा मनलाई लगाएको छ अर्थात् जसले ब्रह्मसँग योग अर्थात् जीवात्माको परमात्मा सँग तादात्म्य(भेदयुक्त अभेद) सम्बन्धको अनुसन्धानको अभ्यासमा अन्त:करणलाई लगाएको छ, त्यो पुरुष अक्षय सुखलाई प्राप्त गर्दछ। श्रुतिमा भनेको छ–"आत्मानं ..... शरीरमनुसंज्वरेत्॥" अर्थात् यदि आत्मालाई यो यस्तो छ, भनेर जान्यो भने पुरुष कुन इच्छाले र कुन कामको लागि आफ्नो शरीरलाई तपाउनु॥२१॥

-★-★-★-

**ये हि संस्पर्शजो भोगा दु:खयोनय एव ते।**
**आद्यन्तवन्त: कौन्तेय न तेषु रमते बुध:॥**

**जुन यी इन्द्रिय तथा विषयको संयोगले उत्पन्न हुने सबै भोग छन्, यद्यपि विषयी पुरुषलाई सुखरूप जस्तो लाग्दछ र पनि दु:खको नै हेतु हुन र आदि–अन्तवाला अर्थात् अनित्य छन्। यसैले हे अर्जुन! बुद्धिमान् विवेकी पुरुष त्यसमा रमण गर्दैन॥२२॥**

ननु बाह्यविषयानासक्तिपूर्वकात्मन्यक्षयसुखमश्नुते इति सत्यं, तथाऽपि प्रथमतो बाह्यविषयानासक्तिरेव कथं

यो कुरा ठिकै हो कि बाहिरको विषयमा अनासक्ति हुनाले आत्मा वा अन्त:करणमा अक्षय सुख अनुभूत हुन्छ तर बाहिरको विषयमा

स्यादित्याशङ्क्य तेषु दोषदर्शनादित्याह–ये हीति। हि यस्मात् ये संस्पर्शजा विषयेन्द्रियसम्बन्धजा भोगा ऐहिकामुष्मिकास्ते सर्वेऽपि दुःखयोनयः परिणामे दुःखहेतवो भवन्ति। तथाभूता अपि न स्थिराः, किन्त्वाद्यन्तवन्तः। तस्मात् हे कौन्तेय! तेषु बुधो विवेकी न रमते, तेषु प्रीतिं न कुरुते इत्यर्थः।

अनासक्ति हुन्छ कसरी? यस प्रश्नको उत्तरमा विषयसुखको दोषहरूलाई देखाउनु हुन्छ- किनकी विषय र इन्द्रियहरूको सम्बन्धले उत्पन्न यस लोक र परलोकको सबै भोग अन्तमा दुःख पैदा गर्दछन् र आरम्भ र अन्त भएका हुन्, अर्थात् स्थिर छैनन्, यसैले हे अर्जुन! पण्डितहरू वा विवेकीजन त्यसमा प्रीति गर्दैनन्॥२२॥

–★–★–★–

**शक्नोतीहैव यः सोढुं प्राक्शरीरविमोक्षणात् ।**
**कामक्रोधोद्भवं वेगं स युक्तः स सुखी नरः॥**

**जुन साधक यस मनुष्यशरीरमा, शरीरको नाश हुनुभन्दा सुरू-सुरूमा नै काम-क्रोधले उत्पन्न हुने वेगलाई सहन गर्न समर्थ हुन्छ, त्यही पुरुष योगी हो र त्यही नै सुखी हो॥२३॥**

एवमक्षयसुखहेतुशुद्धातनिष्ठाया दृढीकरणाय विषयसुखस्य दुःखहेतुत्वमभिधाय मुमुक्ष्वनुग्रहाय पूर्वोक्तमपि श्रेयोमार्गे प्रधानप्रतिक्षं स्मृत्वा तन्निवारणाय पुनर्निर्दिशति शक्नोतीति। दर्शनश्रवणादिना गुणबुद्ध्या हृद्यतिसक्तशब्दस्पर्शरूपादिमद्वस्तुविषयकप्रीत्यतिशयात्मकोऽभिलाषः कामः, तथा प्रतिकूलदर्शनश्रवणादिना दोषबुद्ध्या हृद्यारूढाप्रियवस्तुविषयकद्वेषविशेषनिमित्तकोऽभिज्वलनात्मकोऽन्तःकरणपरिणामः क्रोधस्ताभ्यामुद्भवो नदीवेगवदनिवार्य्यो देहेन्द्रियविकारो वेगस्तं शरीरविमोक्षणात्प्राक् यावच्छरीरपातमिहैव साधनाऽवस्थायामेव यः सोढुं निवर्त्तयितुं शक्नोति समर्थो भवति, स युक्तः, उक्तात्मज्ञानयुक्तः। स सुखी, स एव नरः पुरुषार्थार्हः। नान्यस्तद्वेगे पतित्वाऽत्मानमुद्धर्त्तुं समर्थ इत्यर्थः॥२३॥

अक्षय सुखको कारण शुद्ध आत्म निष्ठामा दृढ गर्नको लागि विषय सुखलाई दुःखको कारण भन्नुभयो। अब मुमुक्षुहरूमा कृपा दर्शाउनको लागि कल्याणमार्गको रोकावटलाई भनेर त्यसलाई हटाउने उपदेश दिनुहुन्छ-
दर्शन श्रवणादिको द्वारा गुण बुद्धिले शब्दादि विषयहरूमा जो अतिशय अभिलाषा हृदयमा उत्पन्न हुन्छ त्यसैलाई काम भन्दछन्। प्रतिकूल दर्शन श्रवणादि द्वारा दोष बुद्धिले अप्रिय वस्तुहरूमा जुन द्वेष उत्पन्न भएर अन्तःकरणमा अभिज्वलनात्मक वा जलाउनेवाला परिणाम उपस्थित हुन्छ त्यसैलाई क्रोध भनिन्छ। यी काम, क्रोध बाट उत्पन्न, नदीको वेगको समान अनिवार्य देहेन्द्रियहरूको विकार वा वेगलाई जुन शरीर छुट्नु भन्दा पहिले नै यहाँ अर्थात् साधन अवस्थामा नै, सहन सक्दछ अर्थात् त्यसलाई निवारण गर्न सक्दछ, त्यही पुरुष पहिले भनिएको आत्मज्ञानले युक्त हो, त्यही पुरुष सुखी हो, र त्यही मोक्ष पाउन योग्य छ। भन्नुको मतलब यो हो कि अरु कुनै काम क्रोधको वेगमा परेर त्यसबाट आफुलाई निकाल्न सक्दैन॥२३॥

–★–★–★–

**योऽन्तः सुखोऽन्तरारामस्तथान्तर्ज्योतिरेव यः ।**
**स योगी ब्रह्मनिर्वाणं ब्रह्मभूतोऽधिगच्छति॥**

**जुन पुरुष अन्तरात्मामा नै सुखी छ, आत्मामा नै रमण गर्दछ र जुन आत्मज्ञानी छ, त्यो सच्चिदानन्दघन परब्रह्मपरमात्माको साथ एकीभावलाई प्राप्त सांख्ययोगी शान्त ब्रह्मलाई प्राप्त गर्दछ॥२४॥**

अथ कामक्रोधवेगसहनानन्तरमात्मसाक्षात्कारं प्रति यदन्तरङ्गसाधनं तदाह–य इति। योऽन्तःसुखोऽन्तरात्मानुभव एव सुखं यस्य सोऽन्तः सुखः, न तु विषयानुभवे, अन्तरेवारामः क्रीडा यस्य, नतु वहिः पुत्रकलत्रादिषु,

काम क्रोधको वेगलाई सहे पछि आत्म साक्षात्कारको जुन अन्तरङ्ग साधन छ, त्यसलाई बताउनु हुन्छ-

जसलाई अन्तरात्माको अनुभवमा सुख छ, विषयको अनुभवमा होईन, जो अन्तरात्मा मा नै क्रीडा गर्दछ, बाहिरको स्त्री पुत्र आदिको

तथाऽन्तर्ज्योतिर्दृष्टिः प्रकाशो वा यस्य, न तु बाह्यविषयेषु इन्द्रियैर्वा, स योगी ध्यानयोगसम्पन्नः ब्रह्मभूतः मायादोष-शून्यः सन् ब्रह्मनिर्वाणं विक्षेपशून्यं परिशुद्धात्मस्वरूपमधिगच्छति प्राप्नोति ॥

विषयमा होईन र जसको अन्तर्दृष्टि छ बाहिरको विषयहरूमा होईन व जसको भित्रैबाट प्रकाश हुन्छ, इन्द्रियको द्वारा होईन, त्यही योगी, अर्थात् ध्यान योग सम्पन्न पुरुष, मायादोष शून्य भएर, विक्षेप रहित, परिशुद्ध आत्म स्वरूपलाई प्राप्त गर्दछ ॥ २४ ॥

-★-★-★-

**लभन्ते ब्रह्मनिर्वाणमृषयः क्षीणकल्मषाः ।**
**छिन्नद्वैधा यतात्मानः सर्वभूतहिते रताः ॥**

**जसको सबै पाप नष्ट भईसकेका छन्, जसको सबै संशय ज्ञानको द्वारा हटिसकेको छ, जो सम्पूर्ण प्राणिहरूको हितमा रत छ जसको जीतेको मन निश्चलभावले परमात्मामा स्थित छ, ती ब्रह्मवेत्ता पुरुष शान्त ब्रह्मलाई प्राप्त हुन्छ ॥ २५ ॥**

उक्तसाधनप्रक्रियया बहवो विवेकिनः स्वरूपं प्राप्नुवन्तीत्याह-लभन्त इति । प्रथमतो निष्कामकर्मानुष्ठानेन क्षीणं कल्मषं येषां ते, छिन्नं द्वैधं संशयो येषां ते यतात्मानः आत्मन्येव नियमितमनसः। ततश्च सर्वभूतानां हिते रताः कृपालवः ऋषयः सूक्ष्मदर्शिनः मन्त्रद्रष्टारो वा यथोक्तं ब्रह्म निर्वाणं लभन्ते ॥२५ ॥

भनिएको साधन प्रकृया द्वारा धेरै विवेकी पुरुष स्वस्वरूपलाई प्राप्त गर्दछन्, यसैलाई भन्नुहुन्छ-

पहिले निष्काम कर्म गरेर जसको पाप क्षीण भएको छ, र संशय नष्ट भईसकेको छ, र जो आत्मा मा नै मन लगाई रहन्छन्, र सबै प्राणिहरूको हित गर्नेवाला अर्थात् कृपालु छन्, यस्तो सूक्ष्मदर्शी एवं मन्त्रलाई देख्ने ऋषिहरू माथि भनिएको ब्रह्म निर्वाण अर्थात् परिशुद्ध आत्म स्वरूपलाई प्राप्त गर्दछन् ॥ २५ ॥

-★-★-★-

**कामक्रोधवियुक्तानां यतीनां यतचेतसाम् ।**
**अभितो ब्रह्मनिर्वाणं वर्तते विदितातमनाम् ॥**

**काम-क्रोधले रहित, जीतेको चित्त भएका, परब्रह्मपरमात्माको साक्षात्कार गरेका ज्ञानी पुरुषको लागि चारैतिर शान्त परब्रह्म परमात्मा नै परिपूर्ण छन् ॥ २६ ॥**

तेभ्योऽपि केचिद्विशिष्टाः शीघ्रफलभाज इत्याह-कामक्रोधवियुक्तानामिति। उक्तस्वरूपाभ्यां कामक्राधाभ्यां वियुक्तानां तत्परित्यागिनामत एव यतीनां यत्नशीलानां संयतचित्तानां विदितात्मनां ज्ञातात्मतत्त्वानामभितः साक्षादिहैव ब्रह्मनिर्वाणं मोक्षो वर्त्तते ॥२६ ॥

माथि भनिएका ऋषिहरू भन्दा पनि शीघ्र फल पाउनेवाला कुनै-कुनै विशेष पुरुष हुने गर्दछन्। उनीहरूकै विषयमा यहाँ भन्नुहुन्छ- पहिले भनिएको लक्षणवाला काम क्रोधबाट वियुक्त अर्थात् काम क्रोधलाई छोडिदिने, संयत चित्त भएको र आत्म तत्त्वलाई जान्ने यतिहरू अर्थात् यत्नशीलहरूलाई यहाँ नै मोक्ष मिल्दछ। अर्थात् उनीहरूका लागि यहाँ नै मोक्ष छ ॥ २६ ॥

-★-★-★-

**स्पर्शान्कृत्वा बहिर्बाह्यांश्चक्षुश्चैवान्तरे भ्रुवोः । प्राणापानौ समौ कृत्वा नासाभ्यन्तरचारिणौ ॥**
**यतेन्द्रियमनोबुद्धिर्मुनिर्मोक्षपरायणः । विगतेच्छाभयक्रोधो यः सदा मुक्त एव सः ॥**

**बाहिरको विषयभोगलाई चिन्तन नगरिकन बाहिर नै निकालेर र नेत्रको दृष्टिलाई भृकुटीको बीचमा स्थित गरेर तथा नासिकामा विचरणगर्ने प्राण र अपानवायु- लाई सम गरेर, जसको इन्द्रिय, मन र बुद्धि जितिएको छ, यस्तो मोक्ष परायण मुनि इच्छा, भय र क्रोधले रहित भएको छ भने त्यो सदा मुक्त छ ॥ २७-२८ ॥**

पूर्वं मोक्षान्तरङ्गोपायतया "स योगी ब्रह्मनिर्वाणमि"त्यनेन

मोक्षको अन्तरङ्ग उपायमा 'स योगी ब्रह्मनिर्वाणम्' ले ध्यान योगको

सूचितं ध्यानयोगं विस्तरेण निरूपयितुं सफलमिह सूत्रवत्सङ्क्षिप्याऽऽह–स्पर्शानिति द्वाभ्याम्। स्पर्शान् स्पर्शोपलक्षितान् शब्दस्पर्शरूपरसगन्धान् पञ्चविष–यान्बाह्यान्बहिर्भवान् श्रोत्रचक्षुरादिद्वारेणान्तःप्रविष्टान् पुनस्तच्चिन्तनपरित्यागेन बहिरेव कृत्वा चक्षुश्च दृष्टिम्भ्रुवोरन्तरे मध्ये कृत्वा अत्यन्तनिमीलने हि निद्रात्मको लयो भवेत्। प्रसारणे तु बाह्यविषयसंसर्गेण विक्षेपो भवेत्। एतद्दोषद्वयपरिहाराय किञ्चिन्निमीलनेन दृष्टिं नासाग्रे विन्यस्य उच्छ्वासनिःश्वासगतिभ्यां नासाभ्यन्तरचारिणौ प्राणापानौ उभयगतिनिरोधेन समौ कृत्वा कुम्भकेन वशी–कृत्येत्यर्थः। अनेनोपायेन यताः संयता इन्द्रियमनोबुद्धयो यस्य, मोक्ष एव परमयनं प्राप्यं यस्य अत एव विगतेच्छा–भयक्रोधः य एवम्भूतो मुनिः स यदा फलकाल इव सा–धनकालेऽपि मुक्त एव, संसारदोषास्पृष्ट एवेत्यर्थः॥

**सूचना दिनुभयो। त्यस योगलाई विस्तारले भन्नको लागि यहाँ त्यसलाई त्यसको फलको साथ सूक्ष्म रूपले सूत्रको जस्ता दुई श्लोकहरू मार्फत भन्नुहुन्छ–**

**आँखा, कान, नाक आदि द्वारा भित्र आएका बाहिरको स्पर्श, श्रवण आदि विषयहरूको चिन्तनलाई छोडेर र यस प्रकार उनीहरूलाई बाहिर नै राखेर, आँखालाई आँखीभुईंको बीचमा राखी, (बीचमा राख्नु यसैले भन्नुभयो कि त्यस्तो गर्नाले आँखा न बिल्कुल प्रसारित हुन्छन्, जसले बाहिरी विषयहरूको संसर्गले विक्षेप उत्पन्न हुन्छ र न बिल्कुलै बन्द हुन्छ जसले निद्रात्मक लय उपस्थित होस।) यस प्रकार आँखालाई अलिकति खुला राखेर नाकको अग्रभागमा लगाउनु। उछ्वास,(सास फेर्नु) निश्वास(सास लिनु) को रूपमा नाक भित्र चल्ने प्राण र अपान दुबै वायुलाई कुम्भकले रोकेर अर्थात् वशमा गरेर, मन, इन्द्रिय, बुद्धिको जसले संयम गरेको छ र जसको मोक्ष नै परम साधन हो र जो इच्छा, भय क्रोधले रहित छ, त्यो मुनि सदा अर्थात् साधनकाल मा पनि फलकाल को समान मुक्त हुन्छ अर्थात् संसारको दोष उसलाई छुँदैनन्॥२७–२८॥**

–★–★–★–

## भोक्तारं यज्ञतपसां सर्वलोकमहेश्वरम्।
## सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति॥

**मेरो भक्त मलाई सबै यज्ञ र तपहरू भोग गर्ने, सम्पूर्ण लोकहरूको ईश्वरहरूका पनि ईश्वर तथा सम्पूर्ण भूत–प्राणिहरूको सुहृद् अर्थात् स्वार्थरहित दयालु र प्रेमी, यस्तो तत्त्वले जानेर शान्तिलाई प्राप्त गर्दछ॥२९॥**

एवमुक्तानां यज्ञादिकर्मतपोज्ञानयोगानां समरूपात्मदर्शनं संसारधर्मासङ्गत्वं च फलमुक्तं, तच्च न स्वान्तन्त्र्येणापि तु सर्वफलदातुरीश्वरस्य भगवतस्तथात्वज्ञानद्वारेणेत्याह–भोक्तारमिति। यज्ञानां तपसां च श्रद्धाप्रीतिपूर्वकं समर्पितां भोक्तारं पालनाभ्यवहारकर्त्तारं, सर्वलोकमहेश्वरं सर्वेषां लोकानां लोकेश्वराणामपीश्वरं, सर्वभूतानां प्राणिनां सुहृदं हितेच्छुं मां ज्ञात्वा शान्तिं संसारबन्धात्मकविक्षेपनिवृत्तिरूपां दशामृच्छति प्राप्नोति। स्वस्वरूपज्ञानप्रकारं तु पञ्चद–शेऽध्याये सम्यग्वक्ष्यति॥२९॥ साधनं कर्म ज्ञानादि कृपया हरिणोदितम्। समदर्शी यतो भूत्वा पराज्ञाने ततोऽर्हति॥

**यज्ञादि कर्म, तप, ज्ञान, योग सबैको फल समरूप आत्मदर्शन र संसारको धर्मबाट असंग रहनु भन्नुभयो। अब यो भन्नुहुन्छ कियज्ञादि कर्महरूलाई वा तप, ज्ञान, योग इत्यादिलाई स्वतन्त्र रूपले फल दिने शक्ति छैन। सबैको फल दिनेवाला अरु ईश्वरहरूको पनि ईश्वर जो भगवान् हुनुहुन्छ उहाँको यथार्थ ज्ञानको द्वारा नै यी फल दिन सक्दछन्, यसैलाई भन्नुहुन्छ– श्रद्धा र प्रीति पूर्वक समर्पित यज्ञ र तपहरूको भोक्ता अर्थात् पालन र व्यवहार गर्नेवाला म नै हूँ। सबै लोकहरूको ईश्वरहरूका ईश्वर पनि म नै हूँ। सबै प्राणिहरूको हितेच्छु म नै हूँ। यस्तो प्रकारको जो मलाई जान्दछ त्यो शान्तिलाई अर्थात् संसारको बन्धात्मक विक्षेपबाट निवृत्ति अवस्थालाई प्राप्त गर्दछ। आफ्नो स्वरूप ज्ञानको रीतिलाई पन्ध्रौं अध यायमा पूर्णरूपले भन्नेछु॥२९॥ यस पाँचौ अध्यायमा श्रीभगवान्ले कृपा गरेर आत्मज्ञानको प्राप्तिको साधन कर्म, ज्ञानादिको उपदेश गर्नुभयो। यसको अनुष्ठानले जीव समदर्शी भएर परमात्माको ज्ञानको अधिकारी हुन्छ।**

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा–टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां कर्मसन्न्यासयोगो नाम पञ्चमोऽध्यायः॥५॥

––★––★––★––

ॐश्रीपरमात्मने नमः

# अथ षष्ठोऽध्यायः

## श्रीभगवानुवाच

**अनाश्रितः कर्मफलं कार्यं कर्म करोति यः।**
**स सन्न्यासी च योगी च न निरग्निर्न चाक्रियः॥**

**श्रीभगवान्ले भन्नुभयो– जुन पुरुष कर्मफलको इच्छा नगरी गर्नयोग्य कर्म गर्दछ, त्यो संन्यासी तथा योगी हो र केवल अग्निको त्याग गर्ने मात्र संन्यासी होईन तथा केवल क्रियाहरूको त्याग गर्ने मात्र पनि योगी होईन॥१॥**

पञ्चमेऽध्याये कर्मयोगो ज्ञानयोगश्च संप्रशंसं निरूपितः। तदन्तरङ्गो ध्यानयोगस्तदन्ते सङ्क्षेपेण द्वाभ्यां श्लोकाभ्यां निरूपितः। तद्विस्ताराथं षष्ठाध्यायारम्भः। तत्र तावत् "सर्वकर्माणि मनसा संन्यस्यास्त" इत्यादिना सर्वकर्मत्या–गेन संन्यासाख्यज्ञानयोगविधानाद्धीतत्वेनकर्मत्याज्यमिति शङ्कावारणाय कर्मयोगस्य संन्यासरूपत्वेनोपादेयतामभि–धास्यन् श्रीभगवानुवाच अनाश्रित इति। कर्मणां फलं स्वर्गादिकमनाश्रितोऽनपेक्षमाणः सन् कार्यमवश्य–कर्त्तव्यतया विहितं कर्म नित्यनैमित्तिकरूपं यः करोति, स संन्यासी च ज्ञानयोगनिष्ठश्च। योगी च कर्मयोगनिष्ठश्च। अत एव न निरग्निः, अग्निसाध्यकर्मत्यागी न भवति। च चाक्रियः, अग्निनिरपेक्षक्रियाहीनाश्च न भवति। अथवा निरग्निरक्रियश्च संन्यासी योगी च न मन्तव्यः किन्तु सर्वकर्मफलत्यागपूर्वककर्मानुष्ठाय्येव संन्यासी योगी च मन्तव्यः तस्योभयनिष्ठा सिद्धिरिति भावः॥१॥

पंचम अध्यायमा प्रशंसाको साथ कर्मयोग र ज्ञानयोगको निरूपण गर्नुभयो, र उनीहरूका अन्तरङ्ग ध्यानयोगलाई पनि दुईश्लोक द्वारा संक्षेपमा भन्नुभयो। अब यस छैटौं अध्यायमा ध्यानयोगको विस्तारले वर्णन गर्नुहुनेछ। 'सर्व कर्माणि मनसा संन्यस्यास्ते' इत्यादि सर्वकर्म त्याग द्वारा संन्यास नामक ज्ञानयोगको विधान गर्नुभयो। यसले यो शंका हुन सक्दछ कि कर्मयोग त्यस भन्दा हीन छ र छाडिदिन योग्य छ। यसै शंकालाई हटाउनको लागि कर्मयोगलाई संन्यास रूपले ग्रहण गर्नुको वर्णन गर्द भगवान् भन्नुहुन्छ– कर्महरूका स्वर्गादि फलहरूमा अनाश्रित वा अनपेक्ष भएर जो अवश्य कर्त्तव्य र यसैले विहित, नित्य, नैमित्तिक रूप कर्महरूलाई गर्दछ, त्यो संन्यासी हो, अर्थात् ज्ञानयोग निष्ठ हो, र त्यही योगी अर्थात् कर्मयोग निष्ठ पनि हो यसैले त्यो अग्निसाध्य कर्महरूलाई छोड्नेवाला हुँदैन र ती क्रियाहरूले पनि हीन हुँदैन, जसलाई गर्नको लागि अग्नि को आवश्यकता हुँदैन। अथवा यसको यो मतलब कि अग्निबाट साध्य कर्महरूलाई छोड्नाले र अर्कै कर्मलाई छोड्नाले कुनै संन्यासी या योगी मानिन सक्दैन; तर कर्मको फललाई छोडेर कर्मगर्नेवाला नै संन्यासी र योगी मानिन सक्दछ; किनकी यस्तो पुरुषको दुबै निष्ठा अर्थात् ज्ञाननिष्ठा र कर्मनिष्ठा सिद्ध हुन्छ॥१॥

–★–★–★–

**यं सन्न्यासमिति प्राहुर्योगं तं विद्धि पाण्डव।**
**न ह्यसन्न्यस्तसङ्कल्पो योगी भवति कश्चन॥**

**हे अर्जुन! जसलाई 'संन्यास' यस्तो भनिन्छ,त्यसैलाई तिमी योग भन्ने जान्नु।किनकी संकल्पको त्याग नगर्ने कुनै पनि पुरुष योगी हुँदैन॥२॥**

उक्तार्थमेवोपपादयति–यं संन्यासमिति। "प्रकर्षेणाहुः न्यास एवात्परे च यदि"त्यादिः श्रुतयः। तं योगं फलकर्तृत्वाभि–मानत्यागपूर्वकविहितकमानुष्ठानं विद्धि हे पाण्डव! एवम्भूतं कर्मैव संन्यासं जानीहीत्यर्थः।कुत ?इत्यपेक्षायां हि यस्मात्। असंन्यस्तसङ्कल्पः, न संन्यस्तः त्यक्तः सङ्कल्पो येन सः कश्चन कश्चिदपि योगी न भवतीत्यर्थः॥२॥

माथि भनिएकै कुरालाई समर्थन गर्नुहुन्छ–

हे अर्जुन! जसलाई शास्त्रहरूले संन्यास भनेका छन् त्यसैलाई योग अर्थात् फल र कर्त्तापनको अभिमान छोडेर विहित कर्महरूको अनुष्ठान जान्नु। अर्थात् यस्तो नै कर्मलाई संन्यास जान्नु। यसको कारण यो हो कि त्यो पुरुष जसले संकल्प छोडेको छैन, त्यो कहिल्यै पनि योगी हुन सक्दैन॥२॥

–★–★–★–

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

**आरुरुक्षोर्मुनेर्योगं कर्म कारणमुच्यते।**
**योगारूढस्य तस्यैव शमः कारणमुच्यते॥**

**योगमा आरूढ़ हुने इच्छाभएका मननशील पुरुषको लागि योगको प्राप्तिमा निष्कामभावले कर्म गर्नु नै कारण भनिएको छ र त्यही योगारूढ़ मनुष्यको जुन सर्वसंकल्पहरूको अभाव छ, यानि कि शान्ति छ, त्यही कल्याणमा हेतु भनिन्छ॥३॥**

एवं चेत्तर्हि यावज्जीवं कर्मैव कर्त्तव्यतयाऽभिप्रेतं किमित्यत आह–आरुरुक्षोरिति। योगं ज्ञानयोगमारुरुक्षोः आरोढुं प्राप्तुमिच्छोर्मुनेरुक्तस्वरूपं कर्म तत्प्राप्तौ कारणमुच्यते। ज्ञानयोगारूढस्य तस्यैव शमः कर्मनिवृत्तिर्ध्यानपरिपाके कारणमुच्यते। यावदात्मसाक्षात्कारान्तरङ्गस्य योगस्य प्राप्तिस्तावत्कर्म कार्यमित्यर्थः॥

यदि यस्तो कुरा हो भने त के यो मतलब हो कि जन्मभरी कर्म गरिरहनु? यसको उत्तर दिनुहुन्छ- ज्ञानयोगको प्राप्तिको इच्छावाला मुनिको लागि निष्काम कर्म ज्ञान योगको प्राप्तिको कारण भनिएको छ। ज्ञानयोगलाई प्राप्त गरेका मुनिहरूका लागि, कर्मको निवृत्ति, ध्यान परिपक्व हुनमा कारण भनिएको छ। भन्नुको मतलब यो हो कि आत्म साक्षात्कारको अन्तरङ्ग उपाय, ध्यानयोगको जब सम्म प्राप्ति हुँदैन, तब सम्म कर्म गर्नु पर्दछ। ध्यान योगको प्राप्ति भएपछि कर्महरूको आवश्यकता पर्दैन, किनकी ध्यानयोग मा तिनीहरू विक्षेप गर्नेवाला हुन्॥३॥

–★–★–★–

**यदा हि नेन्द्रियार्थेषु न कर्मस्वनुषज्जते ।**
**सर्वसङ्कल्पसन्न्यासी योगारूढस्तदोच्यते॥**

**जुन बेला न त इन्द्रियहरूको भोगमा र न कर्ममा नै आसक्त हुन्छ, त्यस कालमा सर्वसंकल्पहरूको त्यागी पुरुष योगारूढ़ भनिन्छ॥४॥**

कर्माचरन्कदा योगारूढो भवतीति चेच्छृणु–यदा हीति। यदा यस्मिन्काले इन्द्रियार्थेसु शब्दादिविषयेषु तत्साधनभूतेषु कर्मसु च न सज्जते, ममैते भोग्या एतदर्थं मया प्रयतितव्यमित्यभिनिवेशं न करोति। हि यस्मात्सर्वसङ्कल्पसंन्यासी सर्व (सङ्कल्प) फलभोगविषयांस्तत्साधनकर्मविषयांश्च सङ्कल्पान् संन्यसितुं त्यक्तुं शीलं यस्य स तदा योगारूढ उच्यते॥४॥

कर्महरूलाई गर्दै पुरुष कहिले योगारूढ हुन्छ? त्यसैलाई अब भन्नुहुन्छ-

जतिबेला शब्दादि विषयहरूमा र त्यसको साधनभूत कर्महरूमा त्यो मनोयोग गर्दैन, अर्थात् प्रवृत्त हुँदैन र त्यो यो संझिदैन कि यी मेरा भोग्य हुन् र उनीहरूलाई प्राप्त गर्न मैले प्रयत्न गर्नु पर्दछ, र त्यो यसैले कि त्यसले सबै फल भोगको विषय सम्बन्धी र उनीहरूको साधनभूत कर्म विषय संकल्पहरूलाई छोडिदिएको छ, तब त्यो योगलाई प्राप्त गर्नेवाला भनिन्छ एवं बुझ्न सकिन्छ॥४॥

–★–★–★–

**उद्धरेदात्मनात्मानं नात्मानमवसादयेत् ।**
**आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः॥**

आफ्नो द्वारा आफ्नो संसार–समुद्रबाट उद्धार गर्नु र आफुलाई अधोगतिमा न धकेल्नु; किनकी मनुष्य आफु नै आफ्नो मित्र हो र आफुनै आफ्नो शत्रु पनि हो॥६॥

एतेन विषयासक्तिस्तद्विरक्तिश्च संसारपाततदुद्धरणहेतुभूते इति बुद्ध्वा स्वहितं कुर्यादित्याह–उद्धरेदिति । आत्मना विषयाननुसक्तेन मनसा आत्मानं जीवं समुद्धरेत्। विषयासक्त्या संसारे पतन्तं दोषबुद्ध्या तत्परित्यागेनोद्ध्र्वं

यस विषयमा आसक्तिलाई संसारमा पतनको र विषयबाट विरक्तिलाई संसारबाट उद्धार को कारण जानेर बुद्धि द्वारा आफ्नो हितको कुरा गरोस। यसैलाई भन्नुहुन्छ-

विषयबाट विरागयुक्त मनको द्वारा आत्मा अर्थात् जीवको उद्धार गर्नु अर्थात् विषयमा आसक्ति भयो भने संसारमा पर्नु

नयेदित्यर्थः। नावसादयेत्–विषयासक्त्या संसारसमुद्रे न मज्जयेत्। हि यस्मादात्मैव मन एवात्मनो बन्धुर्हितकारी संसारादुद्धारकः, नान्यो भ्रात्रादिः। आत्मैव मन एवात्मनो रिपुरहितकारी, नान्यः॥

पर्दछ यस दोष बुद्धिद्वारा विषयासक्तिलाई छोडेर, आफुलाई मास्तिर लैजाओस। विषयमा आसक्ति गरेर आत्मालाई संसार समुद्रमा नडुबाओस। कारण कि मन नै आत्माको हितकारी हो अर्थात् संसारबाट उद्धार गर्नेवाला हो, दोस्रा भाई, पुत्रादि होईन, र मन नै आफ्नो शत्रु पनि हो अरु कोही होईन॥५॥

–★–★–★–

**बन्धुरात्मात्मनस्तस्य येनात्मैवात्मना जितः ।**
**अनात्मनस्तु शत्रुत्वे वर्तेतात्मैव शत्रुवत्॥**

**जुन जीवात्माद्वारा मन र इन्द्रियसहित शरीर जीतिएको छ, त्यो जीवात्माको त त्यो नै आफ्नो मित्र हो र जसको द्वारा मन र इन्द्रियसहित शरीर जीतिएको छैन भने त्यो आफुले आफुलाई नै आफ्नो शत्रु जस्तो गर्दछ॥६॥**

कथम्भूतस्यात्मन आत्मा बन्धुः, कथम्भूतस्यात्मन आत्मा–रिपुरित्युच्चते–बन्धुरिति। येन पुरुषेणात्मनैव स्वेनैवात्मा स्वमनो विषयेभ्यो जितो निवर्त्तितः तस्यात्मा मन एव बन्धुर्हितकारी। अनात्मनोऽजितमनसः पुरुषस्यात्मैव विषयासक्तं स्वकीयं मन एव शत्रुवत् स्वस्य शत्रुत्वे संसारबन्धहेतुत्वे वर्त्तेत। तदुक्तं श्रीपराशरेण। "मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः। बन्धाय विषयासक्तं मुक्तं निर्विषयं स्मृतमि"ति॥

कसरी आत्माहरूको आत्मा(मन) बन्धु हो र कसरी आत्माहरूको आत्मा(मन) शत्रु हो? यसैलाइ भन्नुहुन्छ– जुन पुरुषले आफ्नो मनलाई जितेको छ, अर्थात् विषयहरूबाट हटाएको छ, त्यसै आत्मजित् पुरुषको मन त्यसको बन्धु वा हितकारी हो र जसले आफ्नो मनलाई जितेको छैन, त्यसको विषयमा आसक्त मन त्यसको शत्रुको समान, त्यसलाई संसारको बन्धनमा पारिदिनको लागि सदा निरत रहन्छ। श्रीपराशरजीले पनि (विष्णुपुराणमा) यस्तो नै भन्नुभएको छ। जस्तै कि–'मन एव.....स्मृतम्॥' अर्थात् मन नै मनुष्यको बन्धन र मोक्षको कारण हो, विषयमा आसक्त मन बन्धनको कारण हो, र विषयबाट रहित मन मोक्षको कारण हो॥६॥

–★–★–★–

**जितात्मनः प्रशान्तस्य परमात्मा समाहितः ।**
**शीतोष्णसुखदुःखेषु तथा मानापमानयोः॥**

**जाडो-गर्मी र सुख-दुःखादिमा तथा मान र अपमानमा जसको अन्तःकरणको वृत्तिहरू शान्त छ, यस्तो स्वाधीन आत्माभएका पुरुषको ज्ञानमा सच्चिदानन्दघन परमात्मा सम्यक् प्रकारले स्थित छ अर्थात् त्यसको ज्ञानमा परमात्मा बाहेक अन्य केहि हुँदैहुँदैन॥७॥**

जितमनसः पुरुषस्य स्वबन्धुत्वं प्रतिपाद्य तत एव यैर्धर्म–विशेषैर्योगारूढता सम्पद्यते तद्वैशिष्ट्यं प्रतिपादयन्पूर्वोक्तं योगारूढत्वं स्मारयति–जितात्मन इति द्वाभ्याम्। प्रागु–क्तेन्द्रियानासक्तस्य शीतोष्णसुखदुःखेषु मनस उद्वेगहेतुषु सत्स्वपि तथा हर्षक्षोभहेत्वोर्मानापमानयोः सतोरपि जितात्मनः विकारशून्यमनसः। अत एव प्रशान्तस्य सुख–दुःखादिहेतुषु पुरुषेषु रागद्वेषवर्जितस्य परमात्मा मनो–बुद्ध्यादिभ्यः परमः स्वयम्प्रकाशस्वरूप आत्मा सम्यगा–हितः सुखरूपेणावस्थितो भवति। अथवा उक्तप्रकारेण प्रशान्तस्य परं केवलमात्मा समाहितो भवति,नान्यस्य॥७॥

जुन मनुष्यले मनलाई जितेको छ त्यसको मन आफ्नो बन्धु हो, यस्तो प्रतिपादन गरेर त्यो मनुष्य जुन विशेष धर्मद्वारा योगको भर्‍याङ्मा चढ्दछ त्यस धर्मको विशेषता देखाउँदै पूर्वोक्त योगारूढतालाई दुईश्लोकहरू बाट स्मरण गराउनु हुन्छ। पहिले नै भनिसकिएको इन्द्रियहरूमा आसक्तिहीन पुरुष, मनको उद्वेगको कारण, गर्मी, जाडो, सुख, दुःख भएपनि तथा हर्ष र क्षोभको कारण, मान र अपमान हुँदा पनि, विकार शून्य मनवाला हुन्छन्, अर्थात् त्यसको मनमा विकार पैदा हुँदैन। यसैले ती शान्त चित्तवाला हुन्छन्, अर्थात् उनीहरूको सुख-दुःखको कारण जो जीव छ त्यस जीवको प्रति उसलाई राग द्वेष हुँदैन। यस्तो पुरुषहरूको परमात्मा अर्थात् मन, बुद्धि आदिभन्दा श्रेष्ठ र स्वयं प्रकाश रूप आत्मा सदा सुखले रहन्छ, अथवा यो पनि हुनसक्दछ कि–परम अर्थात् केवल प्रशान्त चित्तवालाको नै आत्मा सुखले रहन्छ, अरुको होईन॥७॥

–★–★–★–

**ज्ञानविज्ञानतृप्तात्मा कूटस्थो विजितेन्द्रियः।**
**युक्त इत्युच्यते योगी समलोष्टाश्मकाञ्चनः॥**

**जसको अन्तःकरण ज्ञान-विज्ञानले तृप्त छ, जसको स्थिति विकाररहित छ, जसको इन्द्रिय राम्रोसँग जीतिएको छ र जसको लागि माटो, ढुंगा र स्वर्ण समान छ, यस्तो योगी युक्त अर्थात् भगवत् प्राप्त छ, यस्तो भनिन्छ॥८॥**

ततश्च ज्ञानेति। ज्ञानं शास्त्रोपदेशजन्यं, विज्ञानमुपदिष्टार्थस्य मनननिदिध्यासनाभ्यासेन भ्रमनिरासपूर्वकयथाऽवस्थितात्मस्वरूपानुभवः, ताभ्यां तृप्तः बाह्यार्थनिराकाङ्क्ष आत्मा चित्तं यस्य (तथा) सः। कूटस्थो यस्यां कस्यामप्यवस्थायां यथा कथञ्चित् यदृच्छया सङ्गे जातेऽपि निर्विकारः। अत एव विजितेन्द्रियः देहधारणहेतुभूतान्नपानाछादनादिमिष्टकटुस्निग्धरूक्षमृद्वमृद्वादिषु प्राप्तेषु प्रीतिद्वेषाभावाद्विनिवर्त्तितानीन्द्रियाणि येन सः, अत एव समलोष्टाश्मकाञ्चनः। समानि मृत्पिण्डपाषाणसुवर्णानि यस्य स तथा तेषु हेयोपादेयबुद्ध्यभावात् स योगी युक्तो योगारूढ इत्युच्यते॥

शास्त्रको उपदेशले उत्पन्न ज्ञानद्वारा र त्यस उपदेशको मनन र निदिध्यासनको अभ्यास बाट भ्रम रहित, तथा अवस्थित आत्म स्वरूपको अनुभव रूप विज्ञान द्वारा, र बाहिरको विषयहरूको आकांक्षाले हीन, आत्मबल वाला पुरुष, जसको आत्मा ज्ञान र विज्ञानले नै तृप्त रहन्छ, जो कूटस्थ छ, अर्थात् कुनै पनि संगति परेमा वा कुनै पनि अवस्था मा रहेमा विकार रहित रहन्छ र यसै कारणबाट जसले इन्द्रियहरू माथि विजय पाएको छ, अर्थात् देह धारणको हेतुभूत, वस्त्रादि राम्रो नराम्रो भए पनि, र जसको लागि माटो, ढुंगा र सुन बराबर नै छ, त्यही योगी योगारूढ अर्थात् योगको मार्गमा पुगेको भनिन्छ॥८॥

-★-★-★-

**सुहृन्मित्रार्युदासीनमध्यस्थद्वेष्यबन्धुषु।**
**साधुष्वपि च पापेषु समबुद्धिर्विशिष्यते॥**

**सुहृद्, मित्र, वैरी, उदासीन, मध्यम, द्वेष्य र बन्धु-गणमा, धर्मात्माहरूमा र पापीहरूमा पनि समानभाव राख्ने अत्यन्त श्रेष्ठ हुन्छ॥९॥**

एतस्मादपि विशिष्टो भवतीत्याह-सुहृदिति। सुहृत् स्वसम्बन्धोपकाराद्यनपेक्ष्य हितासंशी, मित्रं स्नेहेन हितोपकारकः, अरिः सनिमित्तं निर्निमित्तं वाऽपकारकर्त्ता, उदासीनः हिताहितानकाङ्क्षकः, मित्रारिभाववर्जितो वा, विवदमानयोरुभयोरप्युपेक्षको वा, मध्यस्थो विविदमानयोर्हिताकाङ्क्षी, द्वेष्यः स्वभावतोऽनिष्टेप्सुः, बन्धुः सम्बन्धापेक्षोपकारकः, साधवः सदाचाराः, पापा दुराचारा, एतेषु समारागद्वेषशून्या बुद्धिर्यस्य स विशिष्यते, पूर्वोक्तादपि विशिष्टो भवति॥

माथि भनिएको योगी भन्दा पनि धेरै विशेषतायुक्त योगी को वर्णन गर्नुहुन्छ। जो सुहृत् अर्थात् त्यस पुरुषमा जो सम्बन्ध र उपकारको अपेक्षा न गरीकनै हित गर्दछ, मित्रमा अर्थात् स्नेहले हित गर्नेवालामा, शत्रुमा, अर्थात् मतलब बेमतलब अपकार गर्नेवालामा, उदासीनमा अर्थात् त्यस पुरुषमा जो न हित नै चाहन्छ न अहित नै र जो शत्रुता र मित्रता दुबै भावले रहित छ, मध्यस्थमा अर्थात् त्यस पुरुषमा जो झगड़ा गर्नेवाला दुबै दलको उपेक्षा गर्दछ वा दुबैको हितको आकांक्षा गर्दछ, द्वेषीमा अर्थात् स्वभावले नै नराम्रो गर्ने इच्छा वालामा, बन्धु अर्थात् सम्बन्धको कारण हित गर्नेवालामा, सदाचारीहरूमा र दुराचारीहरूमा सम बुद्धि अर्थात् रागद्वेषले शून्य बुद्धि राख्दछ, त्यो पूर्वमा वर्णित योगी भन्दा विशिष्ट(श्रेष्ठ) मानिन्छ॥९॥

-★-★-★-

**योगी युञ्जीत सततमात्मानं रहसि स्थितः।**
**एकाकी यतचित्तात्मा निराशीरपरिग्रहः॥**

**मन र इन्द्रियको सहित शरीरलाई वशमा राख्ने, आशारहित र संग्रहरहित योगी एक्लै एकान्तमा बसेर आत्मालाई निरन्तर परमात्मामा नै लगाउनु ॥१०॥**

एवं योगारूढस्य लक्षणमुक्तमिदानीं तस्य साङ्गं योगं विधत्ते– योगी युञ्जीतेत्यारभ्य स योगी परमो मत इत्यन्तेन ग्रन्थेन। योगी योगारूढः सततमहरहर्योगसमये आत्मानं मनो युञ्जीत, युक्तं कुर्वीत स्वस्वरूपानुभवार्थं समाहितं कुर्या–दित्यर्थः। रहसि विक्षेपहेतुजनवर्जिते गिरिगुहादौ देशे स्थितः,एकाकी जनान्तरवर्जितः, यतचित्तात्मा। यतं चित्त–मात्मा देहश्च येन निराशीर्वस्त्वन्तरमात्रे निस्पृहः, अत एवापरिग्रहः संग्रहशून्यः ॥१०॥

**योगारूढको लक्षण भनिसक्नु भयो। अब अङ्गहरूको साथ योगको वर्णन गर्नुहुन्छ–**

**योगको मार्गमा हिंडेको पुरुष सदा प्रतिदिन योग गर्ने समय आफ्नो मनलाई आत्म स्वरूपको अनुभवमा युक्त गर्नु अर्थात् लगाउनु। बाधा गर्ने मनुष्यहरू द्वारा वर्जित, पहाड़को कन्दरा(गुफा) आदि एकान्त स्थानमा बसेर, एक्लै जहाँ कोही पनि अर्को नहोस, चित्त र शरीरलाई काबूमा ल्याएर र दोस्रा वस्तुहरूमा स्पृहाहीन भएर यसै कारण संग्रह–शून्य भएर योगमा लाग्नु ॥१०॥**

–★–★–★–

## शुचौ देशे प्रतिष्ठाप्य स्थिरमासनमात्मनः। नात्युच्छ्रितं नातिनीचं चैलाजिनकुशोत्तरम् ॥
## तत्रैकाग्रं मनः कृत्वा यतचित्तेन्द्रियक्रियः। उपविश्यासने युञ्ज्याद्योगमात्मविशुद्धये ॥

**शुद्ध भूमिमा, जसको माथि क्रमैले कुश, मृगछाला र वस्त्र बिच्छाईएको छ, जुन न धेरै अग्लो छ न धेरै होचो छ, यस्तो आफ्नो आसनलाई स्थिर गरेर त्यस आसनमा बसेर चित्त र इन्द्रियहरूको क्रियालाई वशमा राख्दै मनलाई एकाग्र गरेर अन्तःकरणको शुद्धिको लागि योगको अभ्यास गर्नु ॥११–१२॥**

तत्र तावत्तदुपयोग्यासनमाह–शुचाविति द्वाभ्याम्। शुचौ अशुचिभिर्म्लेच्छादिभिः संसर्गवर्जिते अशुचिवस्तुभिस्स्पृष्टे च स्वभावसंस्कारादिना शुद्धे देशे आत्मनः आसनं प्रतिष्ठाप्य प्रकर्षेण स्थापयित्वा,कथम्भूतं स्थिरमचलं नात्युच्छ्रितं, नात्युच्चं,न चातिनीचं, चैलं शुद्धवस्त्रम्, अजिनं मृगादिचर्म, ते कुशेभ्य उत्तरे यस्मिन् तत्, भूमौ कुशमयं, तदुपरि मृगचर्म, तदुपरि वस्त्रमित्येवं रूपमित्यर्थः। तत्र तस्मिन्नासने उपविश्य एकाग्रं विक्षेपरहितं मनः कृत्वा यताः संयता उपरताश्चित्तस्येन्द्रियाणां च क्रिया येन सः। आत्मविशुद्धये बन्धविमुक्तये योगं युञ्ज्यात् अभ्यसेत् ॥

**अब योगको उपयुक्त आसनलाई बताउनु हुन्छ–**

**म्लेच्छादिहरूको संसर्गले वर्जित, अपवित्र वस्तुहरूको स्पर्शले रहित, र स्वभाव संस्कारादिले शुद्ध ठाऊँमा, आफ्नो आसनलाई ठिक सँग जमाउनु। यो आसन हल्लिने डुल्ने नहोस, न धेरै अग्लो होस, न धेरै होचो, र पृथ्वीमा कुश, त्यसभन्दा माथि मृगचर्म र त्यसभन्दा माथी शुद्ध वस्त्र विछाएको होस। यस्तो आसनमा बसेर मनलाई विक्षेप रहित गरेर तथा चित्त र इन्द्रियहरूका क्रियाकलापलाई संयत गरेर, आत्माको शुद्धिको लागि अर्थात् बन्धनबाट आत्मालाई छुटाउन को लागि योगको अभ्यास गर्नु ॥११–१२॥**

–★–★–★–

## समं कायशिरोग्रीवं धारयन्नचलं स्थिरः।
## सम्प्रेक्ष्य नासिकाग्रं स्वं दिशश्चानवलोकयन् ॥

**शरीर, सिर र घाँटीलाई समान एवं अचल धारण गरेर र स्थिर भई, आफ्नो नासिकाको अग्रभागमा दृष्टि जमाउँदै, अन्य दिशाहरूलाई नहेरी– ॥१३॥**

एवमासनमुक्त्वा ध्यानोपयोगिशरीरधारण

**आसनको विषयमा भनेर अब योगको उपयोगी शरीर(आसनमा**

प्रकारमाह–सममिति। कायोऽत्र देहमध्यभागो विवक्षितः, शिरोग्रीवेति पृथग्ग्रहणात्। कायशिरोग्रीवं सममवक्रम–चलमकम्पं धारयन्, स्थिरः दृढः सन् स्वकीयं नासाग्रं सम्प्रेक्ष्य दिशश्चानवलोकयन्नासीतेत्युत्तरेणान्वयः॥

बस्दा कसरी बस्ने) धारणको तरिका लाई भन्नुहुन्छ–

शिर, ग्रीवा(घाँटी) र शरीको बीच भागलाई सीधा र अचल राखेर, दृढ भएर, नाकको अगाडीको भाग(अर्थात् नाकको टुप्पो)लाई हेर्दै र अरु दिशामा नहेरिकन, स्थिर भएर बस्नु॥१३॥

–★–★–★–

## प्रशान्तात्मा विगतभीर्ब्रह्मचारिव्रते स्थितः।
## मनः संयम्य मच्चितो युक्त आसीत मत्परः॥

**ब्रह्मचारीको व्रतमा स्थित, भयरहित तथा भलिभाँति शान्त अन्तःकरणवाला सावधान योगी मनलाई रोकेर म(भगवान्) मा चित्त लगाएउनु र मेरो परायण भएर स्थित हुनु॥१४॥**

प्रशान्त आत्मा चित्तं यस्य, विगतभीरकुतश्चिद्भयः। ब्रह्मचारिव्रते ब्रह्मचर्ये स्थितः। उपस्थस्य संयमो ब्रह्मचर्यं, तच्चाष्टविधमैथुनत्यागादष्टविधं–तच्चोक्तं "स्मरणं कीर्त्तनं केलिः प्रेक्षणं गुह्यभाषणम्। सङ्कल्पोऽध्यवसायश्च क्रियानिवृत्तिरेव च॥ एतन्मैथुनमष्टाङ्गं प्रवदन्ति मनीषिणः। विपरीतं ब्रह्मचर्यमेतदेव प्रकीर्त्तितमि"ति। तस्मिन् स्थितः सन्मन संयम्य विषयेभ्यस्तद्वृत्तीः प्रत्याहृत्य, मय्येव चित्तं यस्य स मच्चितस्तथा मत्परः,अहमेवानन्दघनः परः पुरु–षार्थो यस्य स मदेकविषयचित्तवृत्तिभिर्युक्त आसी–तोपविशेत्॥१४॥

बिल्कुल शान्त चित्त, डरले रहित, ब्रह्मचर्यमा स्थित हुनु ,(उपस्थको संयमलाई ब्रह्मचर्य भनिन्छ, त्यो भनेको आठ प्रकारका मैथुनबाट बच्नुलाई भनिन्छ जसमा- स्त्रीको याद गर्नु, कुरा गर्नु, हाँसखेल गर्नु, हेर्नु, त्यस सम्बन्धी गुप्त कुरागर्नु, त्यसैको (प्रयास) संकल्प गर्नु र प्रत्यक्ष मैथुन) मनको वृत्तिलाई विषयहरूबाट फेरेर म तिर चित्त लगाई, र म आनन्दघनलाई नै आफ्नो परमपुरुषार्थ संझेर युक्त हुनु, अर्थात् म मा नै आफ्नो चित्तको वृत्ति लगाएर बस्नु॥१४॥

–★–★–★–

## युञ्जन्नेवं सदात्मानं योगी नियतमानसः।
## शान्तिं निर्वाणपरमां मत्संस्थामधिगच्छति॥

**वशमा गरेको मनभएको योगी यस प्रकार आत्मालाई निरन्तर म परमेश्वरको स्वरूपमा लगाउँदै म मा रहने परमानन्दको पराकाष्ठारूप शान्तिलाई प्राप्त गर्दछ॥१५॥**

एवं योगमभ्यसतो योगिनः फलमाह–युञ्जन्नेवमिति। एवमुक्तप्रकारेण परमात्मनि भगवति मयि सदाऽऽत्मानं मनो युञ्जन्समाहितं कुर्वन्। नियतं निरुद्धं मानसं वृत्तिनिरो–धेन मन एव निरुध्यतेऽतो नियतमानसः सन् शान्तिं संसारोपरतिरूपां निर्वाणपरमां निर्वाणं मोक्षः परमो यस्यां तां मत्संस्थां मन्निष्ठामधिगच्छति प्राप्नोति॥

यस्तो योगको अभ्यास गर्नेवाला योगीको लाभलाई भन्नुहुन्छ। उक्त प्रकारले म परमात्मा भगवान्मा आफ्नो आत्मा(मन) लाई सदा लगाएर र मनको वृत्तिहरूलाई विषयहरूबाट रोक्दै योगी संसारबाट विरागरूप म मा निष्ठावाला शान्ति प्राप्त गर्दछ जसको परमफल मोक्ष हो, अर्थात् यस्तो योगी मोक्ष प्राप्त गर्दछ॥१५॥

–★–★–★–

**नात्यश्नतस्तु योगोऽस्ति न चैकान्तमनश्नतः ।**
**न चाति स्वप्नशीलस्य जाग्रतो नैव चार्जुन॥**

**हे अर्जुन! यो योग न त धेरै खानेको र न त बिल्कुलै नखानेको तथा धेरै सुत्नेको र न सधैं जागै बस्नेको सिद्ध हुन्छ ॥१६॥**

एवं महाफल योगमभिधाय तत्साधनावशिष्टमाहार नियममाह–नात्यश्नत इति द्वाभ्याम्। अत्यश्नतः अत्यन्तमधिकं भुञ्जानस्य योगो ध्याननिष्ठा न भवति। एकान्तमत्यन्तमनश्नतोऽभुञ्जानस्यापि योगो नास्ति। तथाऽतिनिद्राशीलस्याऽतिजाग्रतश्च योगो नास्ति॥

यस प्रकार महाफलवाला योगलाई भनेर त्यसको अवशिष्ट साधन, भोजनादि को, दुई श्लोकहरूमा वर्णन गर्नुहुन्छ।

धेरै भोजन गर्नेवाला लाई योग अर्थात् ध्याननिष्ठा हुँदैन र बिल्कुलै न खानेलाई पनि ध्याननिष्ठा हुँदैन। धेरै सुत्नेलाई र बिल्कुलै नसुत्नेलाई पनि योग (सिद्ध) हुँदैन॥१६॥

–★–★–★–

**युक्ताहारविहारस्य युक्तचेष्टस्य कर्मसु ।**
**युक्तस्वप्नावबोधस्य योगो भवति दुःखहा॥**

**दुःखहरूको नाशक योग त यथायोग्य आहार–विहार गर्नेको तथा यथायोग्य कर्म गर्नेवालाको र यथा योग्य सुत्ने तथा जाग्नेको नै सिद्ध हुन्छ॥१७॥**

तर्हि कीदृशस्य योगो भवतीत्यपेक्षायामाह–युक्तेति। आहारो भोजनं, विहारो विक्रमणं, तौ युक्तौ नियतपरिमाणे यस्य तस्य। तथोक्तं योगशास्त्रे "द्वौ भागौ पूरयेदन्नैस्तोयेनैकं प्रपूरयेत्। वायोः सञ्चारणार्थाय चतुर्थमवशेषयेदि"ति। तथा युक्ता नियता कर्मसु चेष्टा यस्य, तथा युक्तौ स्वप्नावबोधौ निद्राजागारौ यस्य तस्य दुःखनाशको योगो निष्पन्नो भवति॥

(यदि माथि कै कुराको आधार मा भन्दा) फेरि कस्ता प्रकारका पुरुषलाई योग अर्थात् ध्याननिष्ठा हुन्छ त्यसैलाई नै भन्नुहुन्छ। जसको आहार विहार नित्य परिमाणले हुन्छ। योगशास्त्रमा भनेको छ–"द्वौ ..... चतुर्थमवशेषयेत्॥" अर्थात् (पेटको) दुईभाग अन्नले भर्नु, एक भागलाई पानीले भर्नु, र वायुको संचालनका लागि चौथो भागलाई खाली छोडिदिनु। फेरि जुन पुरुषको कर्ममा चेष्टा नियत मात्रामा हुन्छ र जसको सुत्नु र जागा रहनु पनि उपयुक्त अर्थात् नियत परिमाण मा छ भने त्यसैलाई दुःखको नाश गर्ने योग सिद्ध हुन्छ॥१७॥

–★–★–★–

**यदा विनियतं चित्तमात्मन्येवावतिष्ठते।**
**निःस्पृहः सर्वकामेभ्यो युक्त इत्युच्यते तदा॥**

**वशमा गरेको चित्त जतिखेर आफ्नो स्वरूपमा नै स्थित हुन्छ र स्वयं सम्पूर्ण पदार्थबाट निःस्पृह हुनजान्छ त्यस बेला त्यो योगी हो भनेर भन्न सकिन्छ॥१८॥**

एवंनियमवान्पुरुषः कदा निष्पन्नयोगो भवतीत्यपेक्षायामाह–यदेति। यदा यस्मिन् काले नियतं विषयान्तरवृत्तिशून्यतया विशेषेण संयतं चित्तमात्मन्येवावतिष्ठते निश्चलं भवति, तदा सर्वकामेभ्यो निस्पृहः सन्युक्तः निष्पन्नयोग इत्युच्यते। योगज्ञैरिति शेषः॥१८॥

यस्तो नियमवाला पुरुष योग युक्त कहिले हुन्छ? अब त्यसैलाई भन्नुहुन्छ– जुन बेला अरु विषयहरूमा वृत्ति शून्य हुनाले पुरुषको चित्त संयत भएर आत्मा मा नै स्थित हुन्छ, तब सबै अभिलाषाले (इच्छा) हीन भएर त्यो पुरुष युक्त अर्थात् योग सम्पन्न भनिने गर्दछ, अर्थात् योगलाई जान्नेहरू तब उसलाई योग सम्पन्न भन्दछन्॥१८॥

–★–★–★–

**यथा दीपो निवातस्थो नेङ्गते सोमपा स्मृता ।**
**योगिनो यतचित्तस्य युञ्जतो योगमात्मनः ॥**

**जसरी हावा नचलेको ठाउँमा दियोको लौ हल्लिदैन (चेष्टा रहित हुन्छ), त्यसरी नै योगको अभ्यास गर्दै वशमा गरेको चित्तवाला योगिको चित्तको त्यस्तै उपमा भनिएको छ॥१८॥**

एवं सिद्धयोगयुक्तस्य लक्षणमुक्त्वेदानीं समाधिस्थस्य तस्योपमाऽह–यथेतिं निवातस्थो वातरहिते देशे स्थितो दीपो यथा नेङ्गते न चलति सोपमा स्मृता चिन्तिता योगविद्भिः। कस्य यतचित्तस्य योगिनः संयतान्तःकरणस्य योगं युञ्जतोऽनुतिष्ठत आत्मन आत्मस्वरूपस्य निवातस्थनिश्चय–सुप्रकाशदीपवन्निवृत्तविक्षेपतया निश्चलसुप्रकाशज्ञानात्मा भासते इत्यर्थः॥

सिद्धयोग युक्त पुरुषको लक्षण भनेर अब समाधिस्थ पुरुषको उपमा दिनुहुन्छ। वायु रहित ठाऊँमा जसरी दियो हल्लिने डुल्ने गर्दैन, त्यस्तै नै अन्तःकरणलाई संयत गर्दै र योगमा लागेका योगीको आत्म स्वरूपको पनि त्यही उपमा दिईएको छ। भाव यो कि विक्षेपहरू निवृत्त भईसके पछि तेज युक्त ज्ञानवाला निश्चल आत्मा चम्कन थाल्दछ॥१९॥

–★–★–★–

**यत्रोपरमते चित्तं निरुद्धं योगसेवया ।**
**यत्र चैवात्मनात्मानं पश्यन्नात्मनि तुष्यति॥**

**योगको सेवन गर्नाले जुन अवस्थामा निरुद्ध चित्त उपराम हुन्छ तथा जुन अवस्थामा स्वयं आफुले आफैंलाई देख्दै आफैमा सन्तुष्ट हुन्छ॥२०॥**

एवमेतावता योगसाधनमासनाहारादियोगयुक्तस्य लक्षणोपमे चाभिधायेदानीं सफलं सिद्धयोगं लक्षयति–यत्रेत्यादि सार्धैस्त्रिभिः । यत्र यस्मिन्नवस्थाविशेषे योगसेवया योगाभ्यासेन निरुद्धं चित्तमुपरमते इतरस्मात्। यत्र चावस्थाविशेषे आत्मना शुद्धेन मनसा आत्मानं पश्यन्नन्यनिरपेक्ष आत्मन्येव तुष्यति॥

यहाँ सम्म योगको साधन, आसन, आहारादि र योग युक्त पुरुषको लक्षण र उपमा को विषयमा भन्नुभयो। अब गएर साढ़े तीन श्लोकहरूमा सिद्ध योगलाई, त्यसको फलको साथ देखाउनु हुन्छ–

जुन अवस्था विशेषमा योगको द्वारा चित्त अरु विषयहरूबाट रोकिन्छ र जुन अवस्थामा योगी शुद्ध मनले आफ्नो आत्मालाई निरपेक्ष भावले, अर्थात् अरु नै वस्तुहरूबाट विरक्त भएर, देख्दै आफ्नो आत्मा मा नै संतोष लाभ गर्दछ, त्यसैलाई सिद्धयोग अवस्था भनिन्छ॥२०॥

–★–★–★–

**सुखमात्यन्तिकं यत्तद्बुद्धिग्राह्यमतीन्द्रियम् ।**
**वेत्ति यत्र न चैवायं स्थितश्चलति तत्त्वतः॥**

**जुन सुख आत्यन्तिक, अतीन्द्रिय र बुद्धिग्राह्य छ, त्यस सुखको जुन अवस्थामा अनुभव गर्दछ र जुन सुखमा स्थित भएको यो ध्यान योगी तत्त्वबाट फेरि कहिल्यै विचलित हुँदैन॥२१॥**

आत्मन्येव तोषे हेतुमाह–सुखमिति। यत्र यस्मिन्नवस्था–विशेषे यत्तदतीन्द्रियमिन्द्रियनिर्पेक्षं बुद्ध्यैकग्राह्यम्, आत्यन्तिकं नित्यं सुखं योगी वेत्ति अनुभवति। यत्र यस्मिन् सुखे च स्थितः तत्त्वत आत्मस्वरूपान्नैव चलति॥

आफुमा नै सन्तोष को प्राप्ति गर्दछ यसको कारण बताउनु हुन्छ–

जुन अवस्था विशेषमा इन्द्रियहरूको अपेक्षा नराख्ने र केवल शुद्ध बुद्धिले ग्रहण गर्न योग्य, नित्य सुखलाई योगी अनुभव गर्दछ र जुन सुखमा स्थित भई योगी आत्म स्वरूपबाट डिग्दैन त्यही नै सिद्धयोग अवस्था हो॥२१॥

–★–★–★–

**यं लब्वा चापरं लाभं मन्यते नाधिकं ततः।**
**यस्मिन्स्थितो न दुःखेन गुरुणापि विचाल्यते॥**

**जुन सुख प्राप्त भएपछि त्यस भन्दा अधिक कुनै अर्को सुख छ भन्ने त्यो मान्दैन र जसमा स्थित भएपछि ठूलो दुःख दिएर पनि विचलित गर्न सकिदैन॥२२॥**

अचलनमेव हेतुनोपपादयति–यमिति। यं स्वरूपानुभव–सम्बन्धिसुखरूपं लाभं लब्ध्वा ततोऽधिकमपरं लाभं न मन्यते, तस्यैव निरतिशयत्वज्ञानात्। यस्मिंश्च सुखानुभवार्हे आत्मसक्तमनसोऽवस्थाविशेषे स्थितो योगी गुरुणा मह–ताऽपि शीतोष्णादिदुःखेन विचाल्यते न च्याव्यते इत्यर्थः॥

आत्म स्वरूपमा अचल किन हुन्छ, अब यसको कारण बताउनुहुन्छ–

जुन स्वरूप वा आत्मानुभव सम्बन्धी सुख रूप लाभलाई प्राप्त गरेर त्यसभन्दा पनि कुनै ठूलो लाभ छ, यस्तो त्यो योगी मान्दैन, किनकी त्यसलाई ज्ञान छ कि यो सुख निरतिशय हो अर्थात् यो भन्दा श्रेष्ठ सुख अरु कुनै छैन, यो नै सबैभन्दा ठूलो सुख हो। फेरि जुन सुख अनुभव गर्न योग्य र आत्मा मा आसक्त मतवाला अवस्थामा स्थित भएर त्यो योगी जाडो, गर्मी आदि ठूला दुःखहरूबाट पनि त्यहाँ बाट विचलित गरिंदैन त्यसैलाई सिद्ध योग अवस्था भन्दछन् अर्थात् यस अवस्थामा स्थित योगीलाई ठूला-ठूला दुःखहरू त्यस स्थितिबाट हल्लाउन पनि सक्दैनन्॥२२॥

–★–★–★–

**तं विद्याद् दुःखसंयोगवियोगं योगसञ्ज्ञितम्।**
**स निश्चयेन योक्तव्यो योगोऽनिर्विण्णचेतसा॥**

**जसमा दुखहरूको संयोगको नै वियोग छ त्यसैलाई 'योग' नामले जान्नुपर्दछ। (त्यो योग जुन ध्यान योगको लक्ष्य हो) त्यस ध्यान योगको अभ्यास अल्छी नमानिकन निश्चयपूर्वक गर्नुपर्दछ॥२३॥**

एवं यच्छब्दाभ्यासेन सामान्येनोक्तो योऽवस्थाविशेषस्तं तच्छब्देन परामृश्य दर्शयति–तं विद्यादिति। दुःखशब्देन दुःखोदर्कं विषयेन्द्रियजन्यं सुखमपि गृह्यते, तथा च दुःखसंयोगेन स्पर्शमात्रेणापि वियोगो अयस्मिंस्तमात्मनिर्वृत्तिकं चित्तावस्थाविशेषं योगसञ्ज्ञितं योगशब्दवाच्यं विद्यात् जानीयात्। एवम्भूतो योगो मुमुक्षुणा दृढविश्वासेनानुष्ठेय इत्याह–स इतिं स योगो निश्चयेन उक्तलक्षणेन विश्वासेन योक्तव्यः अभ्यासनीयः। तसिद्धौ विलम्बेसति। योगाभ्यासे सिद्धिसन्देहात्प्रयत्नशैथिल्यं निर्वेदस्तद्रहितेन चेतसा चोक्तव्य इतयर्थः॥२३॥

जुन अवस्था विशेषको विषयमा पहिले देखि नै सामान्य रूपले भनेको छ त्यसैलाई नै अब विशेषरूपले अब दर्शाउनु हुन्छ–

जुन अवस्थामा दुःखको स्पर्श मात्रले पनि वियोग हुन्छ अर्थात् दुःख छोएको सम्म पनि छैन त्यसै आत्मसिद्धि रूप चित्तको अवस्था विशेषलाई योग शब्दले वाच्य संज्ञिनु पर्दछ, अर्थात् त्यसै अवस्थालाई योग भनिन्छ।

यहाँ दुःख शब्दले इन्द्रियजन्य सुखहरूको पनि, जो दुःखको नै गढ़ हुन् र जसमा वास्तविक सुख छैन भन्ने बोध हुन्छ। यस्तो योगको अनुष्ठान मोक्षार्थिहरूले दृढ़ विश्वासको साथमा गर्नुपर्दछ, योगको सिद्धिमा विलम्ब हुनाले प्रयत्नमा शिथिलता आउन दिनु हुँदैन, अर्थात् योगको अभ्यासको सिद्धिमा सन्देह भएको ले प्रयत्नको शिथिलताले रहित चित्तले योगको अभ्यास गर्नुपर्दछ॥२३॥

–★–★–★–

**सङ्कल्पप्रभावान्कामांस्त्यक्त्वा सर्वानशेषतः। मनसैवेन्द्रियग्रामं विनियम्य समन्ततः॥**
**शनैः शनैरुपरमेद्बुद्ध्या धृतिगृहीतया। आत्मसंस्थं मनः कृत्वा न किञ्चिदपि चिन्तयेत्॥**

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**संकल्पले उत्पन्ने हुने सम्पूर्ण कामनाहरूलाई सर्वथा त्याग गरेर र मनैले नै इन्द्रियहरूलाई सबै तिरबाट हटाएर धैर्ययुक्त बुद्धिद्वारा संसारबाट बिस्तारै-बिस्तारै उपराम हुनु र मन (बुद्धि)लाई परमात्माको स्वरूपमा राम्रो सँग लगाउनु अनि अरु केहिको पनि चिन्तन नगर्नु॥२४-२५॥**

पूर्वं योगयुक्तलक्षणे "निस्पृहः सर्वकामेभ्यः" इत्येन सर्वकामत्यागपूर्वकध्याननिष्ठा निर्दिष्टा। इदानीं योगविरोधिप्रधानभूतान् कामान् सहसा त्यक्तुमशक्यान् स्मृत्वा पुनस्तत्त्यागप्रयत्नमुपदिशति-सङ्कल्पेति द्वाभ्याम्। रूपादिमद्वस्तुनो दर्शनादिनाऽज्ञानेन सुखहेतुत्वकल्पनं सङ्कल्पः, ततः प्रभवन्ति ते सङ्कल्पप्रभवा ये कामा विषयाभिलाषा इदं मे भूयादिदं मे प्राप्नुयादित्येवमादिरूपास्तान्योगविरोधिनस्तद्याथात्म्यविचारजन्यदुःखहेतुत्वबुद्ध्या सवासनांस्त्यक्त्वा ततो विषयविमुखीभूतेन मनसैवेन्द्रियग्रामं रूपादिविषयाभिमुख्यस्वभावं चक्षुरादिकरणसमूहं समन्ततः सर्वेभ्यस्तत्तद्विषयेभ्यो विनियम्य-प्रत्याहृत्य शनैरभ्यासक्रमेण नतु सहसा उपरमेत् निवृत्ते भवेत्। उपराममेव दर्शयति-बुध्येति। धृतिर्दुःखे प्राप्तेऽपि स्वनिष्ठायामनिर्वेदेन स्थितिस्तया गृहीता अवश्यकर्त्तव्यतायां दृढीकृता या बुद्धिः योगः कदाचित्प्राप्स्यत्येवेति व्यवसायरूपा तया आत्मसंस्थमात्मन्येव सम्यक् स्थितं निश्चलं मनः कृत्वा बाह्यं किञ्चिदपि न चिन्तयेत्॥

योगयुक्त पुरुषको लक्षणलाई देखाउँदै पहिले पनि भनिएको हो कि 'निस्पृहः सर्वकामेभ्यः' अर्थात् ध्यान निष्ठा सबै कामनाहरूलाई छोडेर मात्रै हुन्छ। अब यो याद गरेर कि कामनाह, जो योगको प्रधान विरोधी छन्, झट्टै छुट्दैनन्, उनीहरूको त्यागको लागि प्रयत्न गर्न दुईश्लोकहरू द्वारा उपदेश दिनुहुन्छ।

अज्ञान बाट, रूप, रस, गन्धवाला वस्तुहरूलाई, हेर्नु, सूँघ्नु इत्यादिक कर्मद्वारा सुखको कारण कल्पना गर्नुलाई नै संकल्प भन्दछन्। सङ्कल्पबाट उत्पन्न सबै कामनाहरूलाई अर्थात् विषयको अभिलाषाहरू लाई, चाहे यस लोक को होस चाहे परलोक को, जस्तो कि 'मेरो यस्तो होस, मलाई यो मिलोस' योगको विरोधी र यथार्थमा दुःखलाई नै उत्पन्न हुने संझेर, त्यसलाई तिनीहरूको वासनाहरूको साथ नै छोडिदिनु। फेरि त्यस पछि विषयबाट विमुख भएको मनको द्वारा, रूपादि विषयहरूको तिर अभिमुख हुने आँखा, कान आदि इन्द्रिय समूहलाई सबै तिरबाट, अर्थात् उनीहरूका आ-आफ्ना विषयहरूबाट हटाएर बिस्तारै-बिस्तारै अभ्यासको बाटो, निवृत्त हुनु। अब निवृत्ति प्राप्तिलाई देखाउनु हुन्छ। दुःख पाए पनि आफ्नो निष्ठामा अनिर्वेद अर्थात् प्रयत्नलाई शिथिल हुन नदिनुलाई धृति भनिन्छ। यस्तो धृतिद्वारा दृढ गरिएको बुद्धिद्वारा, अर्थात् यो विश्वास गरेर कि योग मलाई कुनै न कुनै दिन अवश्य मिल्नेछ र त्यो मेरो अवश्य कर्त्तव्य हो आत्मामा मनलाई निश्चल गरेर, बाहिरको विषयहरूको बारेमा कहिल्यै पनि नसोच्नु॥२४-२५॥

-★-★-★-

**यतो यतो निश्चरति मनश्चञ्चलमस्थिरम्।**
**ततस्ततो नियम्यैतदात्मन्येव वशं नयेत्॥**

**यो अस्थिर चंचल मन जहाँ जहाँ जान्छ त्यहाँ त्यहाँबाट तानेर यसलाई एउटा भगवान्मा नै लगाउनु॥२६॥**

नियुज्यमानं मनो यदि चलेत्तर्हि किं कर्त्तव्यमिति चेत्तत्राह-यत इति। यतो यतः शब्दादिविषयाद्धेतोश्चञ्चलस्वभावतयाऽस्थिरं सत् मनो निश्चरति, यतो यतो यं यं विषयं प्रति निश्चरति निर्गच्छति, ततस्तत एतन्मनो नियम्य आत्मन्येव वशं नयेत् निरुन्ध्यात्॥

विषयहरू तिर बाट रोकेर आत्मामा लगाएको मन यदि यता उती भाग्यो भने के गर्ने? यस प्रश्नको उत्तर दिनुहुन्छ-

शब्दादि विषयहरूको कारण चञ्चल स्वभाववाला मन स्थिर नभएर जुन-जुन विषयहरू तिर दौडिन्छ, ती-ती विषयहरूबाट त्यसलाई झिकेर आत्मा तिरै ल्याउनु॥२६॥

-★-★-★-

**प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम्।**

**उपैति शान्तरजसं ब्रह्मभूतमकल्मषम् ॥**

**निष्पाप र शान्तमन भएको जो रजोगुणी पनि छैन तथा यस्तो ब्रह्मरूप योगीलाई निश्चय नै उत्तम (सात्त्विक) सुख मिल्दछ ॥२७॥**

एवं विषयेभ्य: प्रत्याहृत्यात्मनि वशीकृतमनसो यत्फलं स्यात्तदाह–प्रशान्तमनसमिति। पुन: पुनर्विरोधेन प्रशान्तमात्म (नि)निश्चलं मनो यस्य तम्। तत्र हेतुगर्भितविशेषेणद्वयम्–शान्तरजसम्। शान्तं सर्वकामनामूलं रजो यस्य तत एवाकल्मषं निर्गतसमस्तपापमत एव ब्रह्मभूतं निर्दोषसमरूपमेनं योगि–नमुत्तमं सुखमुपैति प्राप्नोति ॥२७॥

**विषयबाट मनलाई तानेर त्यसलाई आत्माको वशमा गरेको फल अब भन्नुहुन्छ–**

**बारम्बार निरोध गर्नाले आत्मामा निश्चल मनवाला, यसैले शान्त रजोगुणवाला अर्थात् रजोगुण, जुन सबै अभिलाषाहरूको जड़ हो जसमा शान्त भएको छ, यसैले पापहरूबाट रहित र यसैले ब्रह्मको समान निर्दोष समरूपवाला योगी उत्तम सुखलाई प्राप्त गर्दछ ॥२७॥**

–★–★–★–

**युञ्जन्नेवं सदात्मानं योगी विगतकल्मषः।**
**सुखेन ब्रह्मसंस्पर्शमत्यन्तं सुखमश्नुते॥**

**यस प्रकार आफुलाई सधैं परमात्मामा लगाउँदै पापरहित योगी सुखपुर्वक ब्रह्मप्राप्तिरूप अत्यन्त सुखको अनुभव गर्दछ ॥२८॥**

तदभ्यासवतो निरतिशयसुखमाह–युञ्जन्निति। एवमुक्त–प्रकारेण सदाऽऽत्मानं युञ्जन्विगतकल्मष: विशेषेण गतं समस्तप्राचीनकल्मषं यस्य स तथा सन् योगी ब्रह्मसंस्पर्शं ब्रह्मानुभवरूपमत्यन्तं सुखं सुखेनानायासेन अश्नुते प्राप्नोति ॥

**योगको अभ्यास गर्नेलाई निरतिशय सुख प्राप्त हुन्छ। यसैलाई भन्नुहुन्छ–**

**यस प्रकार आफुलाई योगमा लगाउँदै र समस्त प्राचीन पापहरू बाट विशेष रूपले मुक्त भएको योगी ब्रह्मानुभव रूप परम सुखलाई बिना प्रयास कै प्राप्त गर्दछ ॥२८॥**

–★–★–★–

**सर्वभूतस्थमात्मानं सर्वभूतानि चात्मनि ।**
**ईक्षते योगयुक्तात्मा सर्वत्र समदर्शनः ॥**

**सर्वत्र समभाव राख्ने ध्यानयोगले युक्त अन्त:करणवाला योगी आफुलाई सम्पूर्ण प्राणीहरूमा र सम्पूर्ण प्राणीहरूलाई आफुमा देख्दछ ॥२९॥**

अथ सिद्धयोगस्य योगिनो योगविपाकदशाभेदेन चतुर्धा दर्शनमाह–सर्वभूतस्थमित्यादि चतुर्भि: श्लोकै:। योग आत्मयाथात्म्यविचारस्तस्मिन्युक्त आत्मा मनो यस्य स:। सर्वभूतस्थं सर्वेषु भूतेषु प्राणिषु स्थितमात्मानं सर्वाणि च भूतानि आत्मनि स्वस्वरूपे ईक्षते पश्यति। भूतेष्वात्मन आत्मनि च भूतानां दर्शनानुपपत्तिशङ्कावारणाय हेतुगर्भितविशेषणमाह–सर्वत्र समदर्शन इति। सर्वेषु ब्रह्मा–दिस्थावरान्तेषु परस्परं विषमेष्वपि भूतेषु वैषम्यकारिणी–भूतप्रकृतिकार्यदेहादिभ्यो विविक्तं ज्ञानस्वरूपत्वेन ब्रह्मात्म–कत्वेन च समं विशेषरहितं यदात्मनां स्वरूपं तद्विषयकं दर्शनं ज्ञानं यस्य स:, तथा च स्वात्मानोऽन्येषां च देहादि

**योग विपाकको दशा–भेदले सिद्ध योग (प्राप्त गरेका) योगीको चार प्रकार देख्न सकिन्छ भन्ने कुरा चार श्लोकहरू द्वारा वर्णन गर्नुहुन्छ– योग अर्थात् आत्माको याथात्म्य विचारमा मन लगाउने वाला योगी आफ्नो आत्मालाई सबै जीवहरू मा स्थित र सबै भूतहरूलाई आफ्नो आत्मामा देख्दछ। आत्मा मा सबै भूतहरूलाई र सबै भूतहरूमा आत्माको दर्शन कसरी सम्भव हुन सक्दछ? यसै शंकालाई हटाउनको लागि सहेतुक विशेषण भन्नुहुन्छ–**

**त्यो योगी सर्वत्र समदर्शी हुन्छ अर्थात् ब्रह्मादेखि लिएर स्थावर सम्म सबै जीवहरूमा, यद्यपि ती एक अर्काबाट पृथक् छन्, र पनि यो संझेर कि उनीहरूको देहादि सम्बन्धी विषमता प्रकृतिको कार्य रूप हो, तर उनीहरूका आत्मा जुन त्यो विषमता भन्दा पर छ, ज्ञान स्वरूप र ब्रह्मात्मक हुनाले सबैमा विशेषता रहित अर्थात् सम छ, आत्माको स्वरूपको दर्शन पाउँदछ वा आत्मालाई सबैमा देख्दछ। भन्नुको मतलब यो हो कि आफ्नो आत्मा र अर्काको**

विलक्षणशुद्धस्वरूपस्य विशेषाभावादेकस्मिन्नात्मनि ज्ञाते सर्वस्य वस्तुनो ज्ञानं समत्वाद्भवेदेत्यर्थः। देहानामपि प्राकृतत्वाविशेषेण समत्वमविरुद्धम्। एवं च सर्वभूतेषु समत्वेन स्थितमात्मानमात्मनि च स्थितानि सर्वाणि भूतानि पश्यतीति सूपपन्नम्॥२९॥

आत्मालाई देहादि भन्दा विलक्षण, शुद्ध स्वरूप र विशेषता ले रहित जान्दछ। यसैले एक आत्माको ज्ञान भएमा सबै वस्तुहरूको ज्ञान हुन्छ किनकी, सबै आत्माहरू समान हुन्। देहादि पनि यस कुरामा विशेषता रहित समता राख्दछन् कि ती सबै प्रकृति को कार्य हो। यस प्रकार सबै भूतहरूको समत्व सिद्ध हुनाले आफुमा सबै भूतहरूलाई र सबै भूतहरूमा आफुलाई योगीले देख्नु ठीक नै हो॥२९॥

-★-★-★-

## यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति।
## तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति॥

**जुन भक्त सबैमा मलाई देख्दछ र म मा सबैलाई देख्दछ त्यसको लागि म अदृश्य हुँदिन र त्यो मेरो लागि अदृश्य हुँदैन॥३०॥**

केवलात्मसमत्वदर्शिनः सकाशात्सर्वत्र परमात्मदर्शिनः श्रैष्ठ्यमाह-य इति। यो योगारूढस्तत्त्वदर्शी सर्वत्र ब्रह्मादिपशुकीटान्तेषु प्राणिमात्रेषु वासुदेवं भगवन्तं सर्वस्यान्तर्नियन्तारं पश्यति। सर्वं च ब्रह्मादिप्राणिजातं मयि आधारभूते स्वतन्त्रे च आधेयतया नियम्यतया आयत्ततयाऽवस्थितं पश्यति, तस्यैवम्भूतस्य मद्दर्शिनोऽहं न प्रणश्यामि अदृश्यो न भवामि। स च मे न प्रणश्यति, स विद्वान् मम वासुदेवस्य भगवतो न प्रणश्यति न परोक्षी-भवति। अहं कृपया तज्ज्ञानविषयो भूत्वा तं सदा स्वदर्शन योग्यं करोमीत्यर्थः॥३०॥

केवल आत्मालाई सबै भूतहरूमा समान देख्ने योगारूढ पुरुषहरू भन्दा त्यो योगि श्रेष्ठ हो जो सबैमा परमात्मालाई देख्दछ। त्यसैलाई यहाँ भन्नुहुन्छ- जो योगारूढ तत्त्वदर्शी सबै ठाऊँमा, ब्रह्मा देखि लिएर कीट पतङ्ग आदि प्राणीमात्र मा, सबैको भित्रका नियन्ता, म वासुदेव भगवान् लाई देख्दछ र सबै ब्रह्मादि प्राणिमात्र लाई म भित्र, जो उनीहरूका आधार हुँ र स्वतन्त्र हुँ देख्दछ र यो संझिन्छन् कि सबै प्राणी आधेय, नियम्य र आयत्त रूपले म भगवान् मा नै स्थित छन्, अर्थात् उनीहरूको आधार, नियामक र आश्रय म भगवान् वासुदेव नै हुँ, यस्तो योगी बाट म कहिल्यै पनि अदृश्य हुँदिन, अर्थात् त्यो सधैं मलाई देख्दछ र त्यो योगी पनि म भगवान् वासुदेवबाट परोक्ष हुँदैन। भन्नुको मतलब यो कि म कृपा गरी त्यसको ज्ञानको विषय भएर त्यसलाई सदा आफ्नो दर्शनको योग्य बनाउँदछु॥३०॥

-★-★-★-

## सर्वभूतस्थितं यो मां भजत्येकत्वमास्थितः।
## सर्वथा वर्तमानोऽपि स योगी मयि वर्तते॥

**(म मा) एकीभावले स्थित भएको जो भक्तियोगी सम्पूर्ण प्राणिहरूमा स्थित मेरो भजन गर्दछ त्यो त्यसले सबैथोक गरेरपनि म मा नै स्थित हुन्छ॥३१॥**

ततोऽप्यधिकां योगारूढदशामाह-सर्वभूतस्थितमिति। सर्वेषुभूतेषु प्राणिषु परिच्छिन्नेषु स्थितमपरिच्छिन्नतया व्याप्यावस्थितं मां भगवन्तं वासुदेवं व्यापकाद्व्याप्यस्य पृथक्स्थितिप्रवृत्त्यनर्हत्वादेकत्वमभेदमास्थितः सन्सर्वं ममभेदेन पश्यन् यो भजते, सर्वत्र मदात्मकत्वबुद्धिं करोतीत्यर्थः। तथोक्तं विष्णुपुराणे प्रह्लादेन "मय्यन्यत्र तथाशेषभूतेषु भुवनेषु च। तवैव व्याप्तिरैश्वर्यगुणसूचकी

माथि वर्णित योगी भन्दा पनि श्रेष्ठ योगारूढको विषयमा भन्नुहुन्छ- सबै प्राणिहरूमा, अर्थात् परिच्छिन्न वा पृथक् पृथक् प्राणिहरूमा अपरिच्छिन्न (व्यापक) रूपले स्थित म भगवान् वासुदेवलाई यो संझेर कि व्यापक भन्दा व्याप्यको पृथक् स्थिति प्रकृति हुन सक्दैन, यस प्रकार दुबै एक नै हुन्, म मा र मद्वारा व्याप्य प्राणिमात्र मा अभेद मान्दै, र यस प्रकार एकत्वमा स्थित जो सदा मलाई भज्दछ, अर्थात् सबै ठाऊँमा मदात्मक(भगवान् सबैका आत्मा हुन्) बुद्धि गर्दछ त्यो योगी कुनै पनि तरिकाले रहेर पनि, अर्थात् ध्यानयोग गर्दै, कर्मयोगलाई छोड्दै वा आफ्नो इच्छाले कसैगरी गरेर, मेरो अखण्ड अनुभवको द्वारा, मेरो मा नै रहन्छ अर्थात् मसँग त्यसको

प्रभो! सर्वगत्वादनन्तस्य स एवाहमवस्थित" इति। स योगी सर्वथा वर्त्तमानोऽपि ध्यानयोगेन कर्मणा वा कर्मत्यागेन वा स्वेच्छया येन केन प्रकारेण वर्त्तमानोऽप्यखण्डेन मदनुभवेन वर्त्तते, न मतो वियुज्यत इत्यर्थः॥३१॥

वियोग हुँदैन। सबै ठाऊँमा भगवान्‌को व्याप्तिको विषयमा विष्णुपुराणमा प्रह्लादको वचन छ– "मय्यन्यत्र.....अवस्थित॥" अर्थात् हे प्रभो! म मा तथा अन्यत्र सबै जगतमा र अशेष जीवहरूमा ऐश्वर्य गुण प्रकट गर्नेवाला हजुरको नै व्याप्ति छ, किनकी हजुर अनन्त हुनुहुन्छ र यसैल सबै ठाऊँमा हुनुहुन्छ, त्यसै मा म पनि एक हूँ॥३१॥

–★–★–★–

## आत्मौपम्येन सर्वत्र समं पश्यति योऽर्जुन ।
## सुखं वा यदि वा दुःखं स योगि परमो मतः॥

**हे अर्जुन! जो (भक्त) आफुमा जस्तै सबै ठाउँमा मलाई समान रूपले देख्दछ र जसका लागि सुख अथवा दुःखलाई पनि समान छ त्यो परम योगी मानिएको छ॥३२॥**

उक्तेभ्यः सर्वेभ्यः श्रेष्ठयोगिनमाह–आत्मौपम्येनेति। आत्मनः स्वस्योपमा तस्या भाव आत्मौपम्यं तेन स्वसादृश्येन सर्वत्र प्राणिमात्रे सुखं वा दुःखं समं तुल्यं यः पश्यति, स्वस्यानिष्टं यथा नेच्छति नोत्पादयति च तथा परस्याप्यनिष्टं नेच्छति नोत्पादयति च रागद्वेषाभावात्। स योगी आत्मज्ञः परम श्रेष्ठो मतः। अथवा आत्मन अन्येषां आत्मनां ज्ञानस्वरूपत्वेन च साम्यं भगवद्भावापत्तिरेव सर्वेषां परमपुरुषार्थ इत्यनाद्यज्ञानावृतज्ञानत्वेन सर्वे न जानन्ति, भगवत्प्राप्ति–प्रतिबन्धकीभूतपुण्यपापकर्मप्रवाहपतितत्वात् । तेषु कदाचिन्निर्हेतुककृपाकटाक्षविषयीभूतो यो जीवः स तु प्रवृत्तिमार्गे ग्लानिबुद्धिः सत्सङ्गपूर्वकसदा– चार्योपसत्त्या तदुपदिष्टमोक्षसाधनक्रमेण शुद्धान्तःकरणः सन् ध्यानयोगे प्रवृत्तस्तत्परिपाकलब्धात्मपरमात्मयाथात्म्यज्ञानेन नष्ट–सञ्चितक्रियमाणकर्मा प्रारब्धमात्रं भुञ्जान इदं विचारयति, पुण्यपापकार्ययोः सुखदुःखयोरुभयोरपि भगवत्प्राप्ति–प्रतिबन्धकत्वं सुखभोगे पुण्यक्षयो दुःखभोगे पापक्षयो भवति। तथा स्तुतिनिन्दयोर्हर्षविषादद्वारेण पुण्यपापक्षय–हेतुत्वं, तस्मान्मे स्तुतिनिन्दाकारिणो जना न मित्रशत्रुभावेन विषमा भवन्त्यपि तु पुण्यपापरूपसंसारबन्धक्षयहेतुत्वेन सर्वेऽपि हितकारिणः यथा पादशृङ्खलयोः काञ्चनायस–योर्बन्धने विशेषाभावात्ततो मोचकः सर्वेऽपि समा एवेति पश्यति, अत एव सर्वत्रात्मतुल्यत्वेन यथा मम सुखं दुःखं पुण्यपापक्षयकरं तथा सर्वस्येति समं पश्यति॥

अब माथि भनिएको सबै योगीहरू भन्दा श्रेष्ठ योगीको वर्णन गर्नुहुन्छ– हे अर्जुन! आफु समान सबै प्राणिहरूमा दुःख वा सुखलाई बराबर नै संझन्छ, अर्थात् जस्तो आफुलाई दुःख चाहँदैन, न उत्पन्न गर्दछ, त्यस्तै नै अरुलाई पनि दुःख होस भनेर चाहँदैन, न दुःख नै दिन्छ, किनकी त्यो रागद्वेषले रहित छ, त्यो योगि अर्थात् आत्मालाई जान्नेवाला, परमश्रेष्ठ मानिन्छ। अर्थात् भगवत्प्राप्तिमा अड्चन हाल्ने पुण्य पापरूपी प्रवाहमा झरेको कारण, अनादि अज्ञानले ज्ञान छोपिएको कारण सबै जना यो जान्दैनन् कि मेरो र अर्काको आत्मा ज्ञान स्वरूप र ब्रह्मात्मक हुनाले समान छ, र भगवत् भावको प्राप्ति नै परम पुरुषार्थ हो। जस माथि बिना कुनै कारण नै भगवान् को कृपाकटाक्ष हुनजान्छ त्यो प्रवृत्ति मार्गबाट उदास भएर संत्संग पूर्वक गुरुको समीपमा जान्छ, र उनको उपदेशको अनुसार मोक्षको साधन क्रमले आफ्नो अन्तःकरणलाई शुद्ध गरेर ध्यानयोगमा प्रवृत्त हुन्छ। त्यस ध्यान योगको परिपाक वा पूर्णताले आत्मा र परमात्माको याथात्म्य ज्ञान प्राप्त गरेर, र त्यसको द्वारा संचित र क्रियमाण कर्महरूलाई नष्ट गरेर, र प्रारब्धलाई भोग्दै यस्तो विचार गर्दछ कि पुण्य र पापको फल, सुख र दुःख, दुबै नै भगवान्‌को प्राप्तिमा अड्चन हालिदिने हुन, किनकी सुख भोगले पुण्यको क्षय र दुःख भोगले पापको क्षय हुन्छ; र यी स्तुति तथा निन्दा, हर्ष तथा विषादको कारण बनेर, पुण्य र पाप दुबैको नाशक हुन्, यसैले मेरो स्तुति र निन्दा गर्नेहरू, मित्र र शत्रु भावबाट भिन्न–भिन्न होईनन्, बरु पुण्य र पाप रूप संसारको बन्धनको नाशक हुनाले समानरूपले हितकारी हुन्। जस्तो गोडाको बेड़ी काट्नेवाला चाहे त्यो बेड़ी सुनको होस वा फलामको, समान रूपले बन्धन बाट छुटाउनेवाला हुन्छन्। यसैले सबैको आत्मालाई समान संझिने कारण जस्तो मेरो सुख दुःख मेरो पुण्य पापको क्षय गर्नेवाला हुन् त्यस्तै नै सबैको दुःख सुख उनीहरूको पाप पुण्यको नाशक हुन्, यस्तो जो योगी संझिन्छ त्यो परम श्रेष्ठ हो॥३२॥

–★–★–★–

## अर्जुन उवाच

**योऽयं योगस्त्वया प्रोक्तः साम्येन मधुसूदन।**
**एतस्याहं न पश्यामि चञ्चलत्वास्थितिं स्थिराम्॥**

**हे मधुसूदन! हजुरले समता पूर्वक जो यो योग भन्नुभएको छ मन चञ्चल भएको कारण म यस योगको स्थिर स्थिति देख्दिन॥३३॥**

उक्तस्य समत्वदर्शनलक्षणस्य योगस्यासम्भावितत्वं मन्वा-नोऽर्जुन उवाच-योऽयं सर्वत्र समदर्शनरूपः परमो योगः साम्येन वैषम्यहेतुरागद्वेषादिनिराकरणेन त्वया सर्वज्ञेन गुरुणोक्तः, हे मधुसूदन दुर्जनविनाशेन सद्धर्मस्थापक! एतस्य त्वदुक्तस्य मनोनिरोधलक्षणस्य योगस्य स्थिरां स्थितिं दीर्घकालस्थायिनीं न पश्यामि, न सम्भावयामि। तत्र हेतुमाह चञ्चलत्वादिति मनस इति शेषः॥

समत्त्व दर्शन लक्षणवाला योगलाई असम्भव मान्दै अर्जुनले भने-

विषमताको हेतु, रागद्वेषलाई हटाएर समताको द्वारा प्राप्त सर्वत्र समदर्शन रूप यो योग, जसलाई हजुरले, जो मेरो सर्वज्ञ गुरु हुनुहुन्छ, भन्नुभयो, त्यो हे मधुसूदन! अर्थात् दुष्टहरूको नाशगरेर सद्धर्मको संस्थापक! मन चञ्चल भएको कारण, धेरै समयसम्म बस्नेवाला देखिदैन। अर्थात् त्यो योग धेरै समय सम्म बस्न सक्दैन, किनकी मन धेरै चञ्चल छ॥३३॥

-★-★-★-

**चञ्चलं हि मन कृष्ण प्रमाथि बलवद्दृढम्।**
**तस्याहं निग्रहं मन्ये वायोरिव सुदुष्करम्॥**

**किनकी हे कृष्ण! मन धेरै नै चञ्चल, प्रमथनशील अर्थात् आफ्नो स्थितिबाट विचलित गरिदिने, दृढ र बलवान् छ। यसलाई रोक्नु पनि आकाशमा विचरण गर्ने वायुलाई रोक्नु जस्तै अत्यन्त कठिन मान्दछु॥३४॥**

उक्तं मनसश्चञ्चलत्वं सर्वजनप्रसिद्धमेवेति स्फुटयति चञ्चलमिति। चञ्चलं चपलस्वभावं मनः हि प्रसिद्धमेवैतत्। हे कृष्णेति सम्बोधनेन स्वभक्तपापकर्षकस्त्वं ममेदं प्राप्तं मनोनिग्रह रूपदुःखं निरासयेति सूचितम्। पुनः कीदृशं मनः प्रमाथि प्रमथनशीलं देहेन्द्रियाणां क्षोभकं, किञ्च बलवत् अभीष्ट-विषयाभिमुखं सत् ततो निवर्त्तयितुमशक्यम्। किञ्च दृढं विविधविषयवासनानुबद्धतया भेत्तुमशक्यम्। तथा च चञ्चलस्य प्रमाथिनो दृढतया बलवत्तरस्य मनसो निग्रहं दुष्करमहं मन्ये। यथाऽऽकाशे दोधूयमानस्य प्रबलस्य वायोर्घटादिषु निरोधनमशक्यं तथा मनसोऽपीत्यर्थः॥

मनको चञ्चलता सबै मनुष्यहरूलाई थाहा छ यसैलाई भन्नुहुन्छ-

मन चञ्चल स्वभाववाला छ यो सबैलाई नै थाहा छ, हे कृष्ण!(यहाँ कृष्ण सम्बोधन गर्नुको भाव यो हो कि हजुर आफ्ना भक्तहरूको पाप एवं दुःख लाई तान्ने गर्नुहुन्छ मेरो यस मनको अनिग्रहरूप दुःखलाई हटाउनुहोस।) फेरि मन कस्तो छ? प्रमाथी छ अर्थात् इन्द्रियहरूमा क्षोभ उत्पन्न गर्नेवाला हो, बलवान छ अर्थात् इच्छित विषय तिर जब झुक्दछ तब त्यसलाई रोक्नु दुष्कर छ; र दृढ छ, अर्थात् विविध विषय वासनाहरूले बाँधिएको कारण, फुटाउन सकिदैन। यसैले यस्तो मन को निग्रह अर्थात् रोक्नु त्यस्तै नै दुष्कर छ जस्तै आकाशमा बहने प्रबल वायुलाई घैला आदि मा भरेर रोकिराख्नु॥३४॥

-★-★-★-

## श्रीभगवानुवाच

**असंशयं महाबाहो मनो दुर्निग्रहं चलम् ।**
**अभ्यासेन तु कौन्तेय वैराग्येण च गृह्यते॥**

**हे महाबाहु! यो मन धेरै नै चंचल छ र यसलाई नियन्त्रण गर्न पनि धेरै कठिन छ यस्तो तिमीले भन्नु पनि ठिकै हो। तर हे**

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**कुन्तीपुत्र! अभ्यास र वैराग्यको द्वारा यसलाई नियन्त्रण गर्न सकिन्छ॥३५॥**

अथार्जुनवचनोक्तार्थाङ्गीकारपूर्वकं मनोनिग्रहोपायं श्रीभगवानुवाच–असंशयमिति। तत्र तावत्सामान्यजनेन यत् कर्त्तुमशक्यं तत् प्रयत्नवता पुरुषविशेषेण कर्त्तुं शक्यमित्यभिप्रायेण सम्बोधयति हे महाबाहो शत्रुनिग्रहणे महान्तौ बाहू यस्यैवम्भूतस्त्वं मनोरूपशत्रुनिग्रहे समर्थो भविष्यसीति भावः। हे कौन्तेय! चञ्चलत्वादिना वायुवन्मनो दुर्निग्रहं दुःखेनापि गृहीतुमशक्यमिति यद्ब्रवीषि तदसंशयं नास्त्यत्र संशयस्तथाऽपि कातरतां विहाय प्रयत्नेन निग्राह्यमित्याह–अभ्यासेनेति। तुशब्दः प्रयत्नशैशिल्यव्यावृत्तिपरः। अभ्यासेन मनोवृत्तेः शनैः शनैर्विषयवैमुख्यकरणपूर्वकमात्माभिमुखीकरणमभ्यासस्तेन विषयवैमुख्यकरणेऽपि हेतुः–वैराग्येण चेति। आत्मव्यतिरिक्तेषु विषयेषु दोषबुद्ध्युत्पादनेन तदुपेक्षणं वैराग्यं, तेन च गृह्यते वशीक्रियते॥

भगवान् अर्जुनले माथि भनेका वचनलाई अंगीकार गर्दै मनको निग्रह गर्ने उपाय बताउनु हुन्छ–

हे महाबाहु अर्जुन! (महाबाहु भन्नुको मतलब यो हो कि जुन कामलाई साधारण मनुष्य गर्न सक्दैनन्, त्यसलाई प्रयत्न गर्नेवाला विशेष पुरुष गर्न सक्दछ र यसैले तिमी ठूला बाहु भएको हुनाले मनरूपी शत्रुलाई वशमा गर्न समर्थ छौ) चञ्चल, बलवान्, दृढ इत्यादि भएकोले मन, जस्तो कि तिमी भन्दैछौ, वायुको समान कठिनताले वशमा आउनेवाला हो; तर कायरतालाई छोड़ेर प्रयत्नको द्वारा त्यसलाई रोक्नु पर्दछ। 'तु' शब्दको मतलब यो हो कि प्रयत्नमा खुकुलो हुनुहुँदैन। हे कुन्तिपुत्र! मनको वृत्तिलाई विस्तारै विस्तारै विषयबाट हटाएर र आत्मा तिर लगाउने अभ्यास गर्नाले मन वशमा हुन्छ। विषयबाट मन कसरी फिर्दछ? यसको उत्तर दिनुहुन्छ। वैराग्यको द्वारा अर्थात् आत्मा को अतिरिक्त अरु सबै वस्तुहरूमा दोष बुद्धि उत्पन्न गरेर, अर्थात् उनीहरूमा दोष संझेर उनीहरूको उपेक्षा गर्नाले मन उनीहरूको तिर बाट फिर्दछ॥३५॥

–★–★–★–

**असंयतात्मना योगो दुष्प्राप इति मे मतिः।**
**वश्यात्मना तु यतता शक्योऽवाप्तुमुपायतः॥**

**जसले मनलाई पूर्णरूपमा वश गरेको छैन त्यसलाई योग प्राप्त हुन कठिन छ अर्थात् योगी हुन सक्दैन। तर उपायपूर्वक प्रयत्न गर्नेवाला तथा जसले मनलाई वशमा गरेको छ त्यो साधकलाई योग प्राप्त हुन सक्दछ यस्तो मेरो मत छ॥३६॥**

अन्यथाऽन्यस्य न योगप्राप्तिरित्याह–असंयतात्मनेति। असंयतो विषयेभ्यो न निगृहीत आत्मा मनो येन सः, असंयतात्मा तेन पुरुषेण योगः पूर्वोक्तयोगः समत्वदर्शनलक्षणो दुःप्रापः प्राप्तुमशक्य इति मे मतिर्मम सम्मतिः। वश्यात्मना तु, अभ्यासवैराग्याभ्यां वशत्वं प्रापित आत्मा मनो येन स वश्यात्मा तेन यतता प्रयत्नं कुर्वता उपायत उक्तोपायेन योगोऽवाप्तुं शक्यः॥

योग अरु कुनै पनि तरिकाले प्राप्त हुन सक्दैन यसैलाई भन्नुहुन्छ–

जसले विषयबाट आफ्नो मनलाई रोकेको छैन त्यो पूर्वमा भनिएको समत्वदर्शन लक्षणवाला योगलाई प्राप्त गर्न सक्दैन यो मेरो विचार हो। तर त्यो पुरुष जसले अभ्यास र वैराग्यको द्वारा आफ्नो मनलाई वशमा गरेको छ, यत्नको द्वारा माथि भनिएको उपायले, योग प्राप्त गर्न सक्दछ॥३६॥

–★–★–★–

## अर्जुन उवाच

**अयतिः श्रद्धयोपेतो योगाच्चलितमानसः।**
**अप्राप्य योगसंसिद्धिं कां गतिं कृष्ण गच्छति॥**

**हे कृष्ण! जसको साधनामा श्रद्धा त छ तर जसको प्रयत्न शिथिल छ, त्यस्तो साधकको मन (अन्त्य समयमा यदि) योगबाट विचलित भयो भने त्यसलाई योग (योगीको गति) प्राप्त नभई कुन गति प्राप्त हुन्छ॥३७॥**

एवं युञ्जन्नेवमित्यादिनाऽत्यन्तसुखानुभवरूपं सदा

'युञ्जन्नेव' इत्यादि श्लोकहरूले हजुरको द्वारा यो सुनेर कि अत्यन्त

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

परमात्मदर्शनं च योगफलमभ्यासवैराग्याद्युपायेनैव तत्प्राप्ति च भगवतः संश्रुत्य तच्चैवमेवेति निश्चित्य यस्तूक्तयोगे तदुपाये च श्रद्धया प्रवृत्तोऽपि शिथिलप्रयत्नश्चेत्तस्याभ्यासाभावेन योगो न सिद्ध्येत्ततः परागतिः कुतः स्यादिति सन्दिहानोऽर्जुन उवाच–अयतिरिति। यो मुमुक्षुः श्रद्धयोपेतः श्रद्धापूर्वकं योगे प्रवृत्तोऽपि अयतिरल्पयत्नः शिथिलप्रयत्न इत्यर्थः, तथा योगाच्चलितमानसः, अन्तकाले योगादात्मैकाग्र्याच्चलितं मानसं मनो यस्य विषयाभिमुखमना इत्यर्थः, स योगसंसिद्धिं योगस्य ससिद्धिं योगफलं सम्यागात्मदशनमप्राप्य हे कृष्ण! कां गतिं गच्छति॥

सुखानुभव रूप परमात्माको दर्शन योगको फल हो र अभ्यास र वैराग्यरूप उपायको द्वारा नै त्यसको प्राप्ति हुन्छ र त्यसलाई त्यस्तो नै निश्चय मानेर जुन पुरुष त्यस योग र त्यसको उपायमा श्रद्धाको साथ लाग्दछ, तर प्रयत्नको शिथिलताले अभ्यासको अभाव भएको हुँदा यदि त्यसको योग सिद्ध भएन भने त त्यस पुरुषको परागति कसरी हुन्छ? यस्तो सन्देह गर्दै अर्जुन सोध्दछन्-

जो मोक्षार्थी श्रद्धा पूर्वक योगमा प्रवृत्त भएर पनि शिथिल प्रयत्न हुनाले अन्तकालमा योग बाट, अर्थात् आत्माको एकाग्रताबाट हट्दछ र त्यसको मन विषय तिर झुक्दछ। त्यो योगको सिद्धि वा फललाई अर्थात् आत्मदर्शनलाई प्राप्त नगरेर कुन गतिलाई पाउँदछ?॥३७॥

–★–★–★–

**कच्चिन्नोभयविभ्रष्टश्छिन्नाभ्रमिव नश्यति ।**
**अप्रतिष्ठो महाबाहो विमूढो ब्रह्मणः पथि॥**

**हे महाबाहु! संसारको चक्करमा नपरेको र परमात्मा प्राप्तिको बाटोबाट पनि विचलित भएको यस प्रकार दुबै तिरबाट भ्रष्ट भएको साधक के छिन्न-भिन्न भएको बादल सरी नष्ट त हुँदैन?॥३८॥**

एतत्प्रश्नाभिप्रायं स्वयमेव विवृणोति–कच्चिदिति। कां गति गच्छतीति कस्ते सन्देह इति चेच्छृणु, प्रथमं योगाय फलाभिसन्धिरहितकर्मानुष्ठानात्स्वर्गादिप्राप्तिसाधनभूतयथावद्यज्ञादिकर्मानुष्ठानाभावान्न स्वर्गादि किमपि फलं प्राप्नोति, अतोऽप्रतिष्ठो निराश्रयः ब्रह्मणः पथि ब्रह्मप्राप्तिमार्गे ज्ञाने विमूढस्तत्साधनभूताद्योगाच्युतः एवमुभयविभ्रष्टः कर्ममार्गाज्ज्ञानमार्गाच्च विभ्रष्टः कच्चिन्नश्यति। तत्र दृष्टान्तः–छिन्नाभ्रमिव। यथा वायुना छिन्नं पूर्वस्मान्मेघाद्भ्रष्टमुत्तरं महान्तं मेघमप्राप्तमभ्रखण्डं मध्य एव विनश्यति, तथा योगभ्रष्टः पूर्वस्मात्कर्ममार्गाद्विच्छिन्नमुत्तरं ज्ञानमार्गमप्राप्तः सन् कर्मफलं च प्राप्तुमयोग्यो विनश्यति किमिति संशयः॥

आफ्नो प्रश्नको मतलब अर्जुन स्वयं साफ गरेर भन्दछन्। कुन गति हुन्छ, यसमा मेरो जुन सन्देह छ, त्यो सुन्नुहोस्-

हे महाबाहु भगवान्। पहिले त त्यस पुरुषले योगको निमित्त फलको इच्छा छोडेर निष्काम कर्मको अनुष्ठान गर्‍यो र यसैले स्वर्गादि प्राप्त गराउने वाला, यज्ञादि कर्महरूलाई गरेन र यस प्रकार त्यो स्वर्गादिको फलबाट बंचित भयो, अर्थात् ती त्यसलाई मिल्दैनन्। त्यताबाट त निराश भयो नै यता ब्रह्म प्राप्तिको मार्ग, ज्ञानमा पनि मूढ़ रोकियो, अर्थात् ब्रह्म प्राप्तिको साधनभूत योगबाट च्युत भयो। अब यो दुबै तिर बाट अर्थात् कर्ममार्ग र ज्ञानमार्ग दुबैबाट भ्रष्ट भयो। अब के यस पुरुषको बादलको टुक्राको जस्तो नाश हुने भयो अर्थात् जस्तो पूर्वमा कुनै मेघबाट विछोडिएको बादलको टुक्रा फेरि कुनै ठूलो मेघसँग मिल्नु भन्दा पहिले नै आकाशमा विलिन हुन्छ, त्यस्तै नै के यो पुरुष पनि पहिले कर्म मार्गबाट बिछोडिएर, पछाडि ज्ञान मार्गलाई पनि प्राप्त नगरी र यस प्रकार दुबैको फल पाउन अयोग्य भएर नष्ट हुन जान्छ॥३८॥

–★–★–★–

**एतन्मे संशयं कृष्ण छेत्तुमर्हस्यशेषतः ।**
**त्वदन्यः संशयस्यास्य छेत्ता न ह्युपपद्यते॥**

**हे कृष्ण! मेरो यस शंकालाई सर्वथा काटिदिनको लागि हजुर नै योग्य अर्थात् समर्थ हुनुहुन्छ किनकी यस**

**शंकालाई काट्ने हजुरको सिवाय अरु कोही हुन नै सक्दैन॥३९॥**

उक्तसंशयच्छेदनाय भगवन्तं प्रार्थयते–एतदिति। हे कृष्ण स्वभक्तकश्मलनाशक! एतन्मे संशयमशेषतस्त्वं छेत्तुमनेतुमर्हसि। यतस्त्वदन्यः त्वत्तः परमेश्वरात्सर्वज्ञात्परमसुहृदोऽन्यः कश्चिदपि ऋषिर्वा देवो वाऽस्य छेत्ता सम्यगुत्तरदानेन नाशयिता न ह्युपद्यते, न सम्भवति। जीवत्वेनासर्वज्ञत्वादिति भावः॥

आफ्नो संशयलाई टाढा भगाईदिनको लागि अर्जुन प्रार्थना गर्दछन्–हे कृष्ण! अर्थात् भक्तहरूका पापको नाशक! मेरो यही नै सन्देह हो। यसलाई पूर्णरीतिले हटाउन हजुर नै योग्य हुनुहुन्छ, किनकी हजुरलाई छोडेर यस संशयलाई हटाउने अर्को कोही हुनै सक्दैन, कारण कि हजुर परमेश्वर, सर्वज्ञ र परम सुहृत् हुनुहुन्छ। ऋषि, देउता आदि अन्य मेरो संन्देहलाई हटाई दिन सक्दैनन् किनकी जीव भएको कारण ती सर्वज्ञ होईनन्॥३९॥

–★–★–★–

## श्रीभगवानुवाच

**पार्थ नैवेह नामुत्र विनाशस्तस्य विद्यते।**
**न हि कल्याणकृत्कश्चिद्दुर्गतिं तात गच्छति॥**

**हे पृथापुत्र! त्यसको न त यो लोकमा न त परलोकमा नै विनाश हुन्छ, किनकी हे प्रिय! कल्याणकारी काम गर्नेवाला कुनै पनि मनुष्यको कहिल्यै दुर्गति हुँदैन॥४०॥**

एवमर्जुनस्य संशयनिरासाय प्रश्नस्योत्तरं श्रीभगवानुवाच–पार्थेत्यादिभिः। हे पार्थ! तस्य त्वदुक्तस्य त्यक्तस्वर्गादिसाधनकर्मणो यथाशक्त्याऽनभिसंहित फलकर्मानुष्ठातुर्योगे प्रवृत्तस्याभ्यासवैराग्यशैथिल्याद्योगाद्भ्रष्टस्य मुमुक्षोरिह लोकेऽमुत्र परलोके वा विनाशो नैव विद्यते, सकामेतरजनवद्दुर्गतिर्न सम्भवति। यथा सकामस्य देवाद्याराधने प्रवृत्तस्य तत्कर्मफलमनवाप्यादावेव कर्मणो भ्रष्टस्येह लोकेऽपकीर्त्तिर्भोगानवाप्तेर्विनाशः। मृतस्य च परत्र पश्वादियोनिप्राप्तिरूपा दुर्गतिर्भवति, न तथाऽस्य योगिन इत्यर्थः। एतत्कुतस्तत्राह–न हीति हि यस्मात्कल्याणकृत् शुभाचरणः कश्चिदपि दुर्गतिमुक्तरूपां लोकद्वयहानिं न गच्छति। अयं तु शास्त्रविहितशुभकारी सर्वोत्कृष्टो न गच्छति। अयं तु शास्त्रविहितशुभकारी सर्वोत्कृष्टो न गच्छतीति किमु वक्तव्यमित्यर्थः। तनोत्यात्मानमिति तत् स एव तातः पिता तद्रूपत्वात्पुत्रोऽपि तात उच्यते शिष्यस्य पुत्रस्थानीयत्वाभिप्रायेण तातेति सम्बोधनं कृपाविशेषद्योतनाय॥

अर्जुनको संशय हटाउनको लागि भगवान् उनको प्रश्नको उत्तर दिनुहुन्छ–

हे पार्थ! त्यस मुमुक्षु पुरुषको, जसको बारेमा तिमीले भनेको छौ, र स्वर्गादिको साधन कर्मलाई छोडेर यथा शक्ति निष्काम कर्महरूको, अनुष्ठान गर्दछ र योगमा प्रवृत्त भई अभ्यास र वैराग्यको शिथिलताको कारण योगबाट भ्रष्ट हुन्छ, त्यस योगीको यस लोकमा अथवा परलोकमा विनाश हुँदैन। कामना भएका इतर पुरुषहरूको जस्तो त्यसको दुर्गति सम्भव छैन। मतलब यो कि जस्तो कामना युक्त पुरुष, देवादिको आराधनामा प्रवृत्त भई, त्यसको कर्मफललाई नपाउनाले कर्मभ्रष्ट हुन्छन्, र यस संसारमा उसको अपकीर्ति हुन्छ, र कर्मफल भोग्न नपाउनु उसको विनाश संझिइन्छ तथा मरे पछि पनि यस्तो पुरुष पशु आदि योनि प्राप्ति रूप दुर्गति भोग्दछन्, त्यस्तो दुर्गति यस योगीको हुँदैन जुन योगीको बारेमा तिमी सोधिरहेको छौ। यसको कारण यो हो कि शुभ आचरण वाला कुनै पनि पुरुषको माथि भनिएको जस्तो दुबै लोकको हानी हुँदैन। र यो योगी त सबै भन्दा उत्कृष्ट छ किनकी शास्त्र विहित शुभकर्महरू को कर्त्ता हो यसैले यसको दुबैलोक को हानी हुँदैन, यसमा सोध्नु नै के पर्छ र? तात पितालाई भनिन्छ। पितारूप हुनाले पुत्र पनि तात भनिन्छ। शिष्य पुत्र स्थानीय हो यसैले अर्जुन माथि कृपा विशेष देखाउनको लागि उसलाई यहाँ भगवान्ले 'तात' भनेर सम्बोधन गर्नुभएको छ॥४०॥

–★–★–★–

**प्राप्य पुण्यकृतां लोकानुषित्वा शाश्वतीः समाः।**
**शुचीनां श्रीमतां गेहे योगभ्रष्टोऽभिजायते॥**

**त्यो योगभ्रष्ट भएपनि पुण्यगर्नेहरूलाई प्राप्त हुने लोकलाई प्राप्त गरेर त्यहाँ धेरै वर्षसम्म बसेर फेरि यहाँ शुद्ध ममता रहित श्रीमान्को घरमा जन्म लिन्छ ॥४१ ॥**

यदि योगभ्रष्टो मृतो दुर्गतिं न गच्छति तर्हि कां गतिं गच्छ–तीत्यपेक्षायामाह–प्राप्येति। श्रद्धया योगे प्रवृत्तः केन चिद–दृष्टेन यादृशभोगाकाङ्क्षया योगाद्भ्रष्टो मृतो योगी सोऽल्पका–लाभ्यस्तस्यापि योगस्य प्रभावात्पुण्यकृतामतिपुण्यकारिणां लोकान्प्राप्य तत्र तद्योग्यान्कल्याणतमान्भोगान्यथेष्टं भोक्तुं शाश्वतीः समाः बहून्सम्वत्सरानुषित्वा वासं कृत्वा तत् सुखभोगे तृप्तस्ततः शुचीनां सदाचारयुक्तानां श्रीमतां धनाढ्यानां गेहे जन्म प्राप्नोति ॥४१ ॥

यदि योग भ्रष्ट पुरुषको मरे पछि दुर्गति हुँदैन भने त्यसको कस्तो चैं गति हुन्छ त? यसैको उत्तर दिनुहुन्छ–
श्रद्धायुक्त भएर योगमा प्रवृत्त, कुनै अदृष्टको फेरले भोगको अभिलाषा भएकोले त्यस योगबाट भ्रष्ट भएको पुरुष मरेपछि केहि समय सम्मको अभ्यासद्वारा गरिएको योगको प्रभावले पनि पुण्य गर्नेवालाहरू को लोकलाई प्राप्त गर्दछ र आफ्नो योग्य कल्याणतम् भोगहरूलाई भोग्नको लागि त्यहाँ धेरै वर्ष सम्म निवास गरेर र त्यहाँको सुख भोगले तृप्त भए पछि सदाचार युक्त धनाढ्यको घरमा जन्म लिन्छ॥४१ ॥

–★–★–★–

## अथवा योगिनामेव कुले भवति धीमताम्।
## एतद्धि दुर्लभतरं लोके जन्म यदीदृशम्॥

**अथवा (वैराग्यवान् योगभ्रष्ट) ज्ञानवान् योगिहरूका कुलमा नै जन्म लिन्छ। यस प्रकार को जो जन्म छ त्यो संसारमा निस्सन्देह दुर्लभ छ॥४२ ॥**

इयमुत्तमभोगाकाङ्क्षया योगभ्रष्टस्य गतिरुक्ता। इदानीं भोगानपेक्षकस्य बह्वभ्यस्तयोगस्य कथञ्चिद्भ्रंशे ततोऽप्यति श्रेष्ठं जन्म भवतीति पक्षान्तरमाह–अथवेति। शास्त्रज्ञान–दार्ढ्येन विषयभोगवासनाशून्यो ज्ञानवैराग्यादिगुणाढ्यः कथञ्चिद्योगाभ्यासाच्चलितश्चेद्भोगवासनाविरहात्पुण्यकृतां लोकान् प्राप्य योगिनां योगाभ्यासवतामेव प्रमादकारण–धनहीनानामेव शुचीनां धीमतां ज्ञानिनां ब्राह्मणानां कुले भवति जायते। न तु श्रीमतां कर्मिणां ब्राह्मणानां राज्ञां वा कुले, यद्यपि शुचीनां श्रीमतां राज्ञां ब्राह्मणानां वा कुलेऽपि जन्म दुर्लभं बहुसुकृतसाध्यत्वाज्ज्ञानमार्गाविरोधित्वाच्च, तथाऽपि सात्त्विकानां धनहीनानां ज्ञानिनां योगाभ्यासवतां ब्राह्मणानां कुले यज्जन्म एतद्धि लोके दुर्लभतरमतिशयेन दुष्प्रापं, सर्वप्रमादकारणशून्यत्वेन मोक्षान्तरङ्गत्वात्॥

माथिको श्लोकमा उत्तम भोगको आकाक्षाले भ्रष्ट भएका योगीको गति भनियो। अब यो भन्नुहुन्छ कि जो मनुष्य भोगहरूको इच्छा नराखीकन पनि र योगको धेरै अभ्यास गरेर पनि योगबाट थोरै भ्रष्ट हुन जान्छ भने त्यसलाई अरु पनि श्रेष्ठ जन्म मिल्दछ।

शास्त्रज्ञानको दृढताद्वारा विषयभोगमा वासना शून्य र ज्ञान, वैराग्य आदि गुणहरूले युक्त पुरुष, यदि योगको अभ्यासबाट केहि विचलित भयो भने पनि भोगको वासनाले रहित भएको कारण पुण्य गर्नेवालाको लोकलाई प्राप्त गरेर, त्यो धनले हीन, योगाभ्यासी र ज्ञानी, पवित्र ब्राह्मणको कुलमा जन्म लिन्छ; धनले युक्त, कर्मयोगमा प्रवृत्त, ब्राह्मण र राजाको कुलमा होईन। यद्यपि पवित्र धनिक राजाहरू वा ब्राह्मणहरूको कुलमा जन्म लिनु पनि दुर्लभ नै हो, किनकी यस्तो जन्म पनि ठूलो पुण्यको फल ले नै हुन्छ जो ज्ञानमार्गको विरोधी छैनन्, तथापि सात्त्विक, धनहीन, योगाभ्यासी र ज्ञानी ब्राह्मणहरूको कुलमा जन्म लिनु यस संसारमा ठूलो नै दुष्प्राप्य हो कारण कि यस्तो कुलमा प्रमादको कारण विद्यमान हुँदैनन्, यसैले यस्तो कुलमा जन्म मोक्षको अन्तरङ्ग अर्थात् समीपी हुन्छ॥४२ ॥

–★–★–★–

## तत्र तं बुद्धिसंयोगं लभते पौर्वदेहिकम्।
## यतते च ततो भूयः संसिद्धौ कुरुनन्दन॥

**हे कुरुनन्दन! त्यहाँ उसलाई पहिले मनुष्यजन्मको साधन–सम्पत्ति अनायासै प्राप्त हुन्छ र त्यसको प्रभावले त्यो**

**साधनको सिद्धिका लागि पुनः (विशेषरूपले) प्रयत्न गर्दछ॥४३॥**

उक्तस्य जन्मद्वयस्य दुर्लभत्वं यतस्तद्दर्शयति-तत्रेति। तत्र द्विविधेऽपि जन्मनि पूर्वदेहे भवं पौर्वदैहिकं सुप्तप्रबुद्ध-वत्तमेवात्मपरमात्मध्यानविषयकबुद्धिसंयोगं लभते। ततस्तल्लाभानन्तरं भूयोऽधिकसंसिद्धौ यतते। यथा पुनरन्तरायहतो न भवति, तथा यत्नं कुरुते॥

**दुबै प्रकारको जन्म दुर्लभ किन छन् त्यसलाई भन्नुहुन्छ-**

**दुबै प्रकारको जन्म लिंदा, पूर्वदेहमा स्थित, आत्म परमात्म ध्यान विषयक बुद्धिलाई, सुतेर उठेको जसरी, त्यो प्राप्त गर्दछ। फेरि त्यो त्यसभन्दा पनि अधिक सिद्धि वा प्राप्तिको लागि यत्न गर्दछ। जसमा फेरि कुनै अन्तराय वा झमेला नहोस, यस्तो उपाय त्यो गर्दछ॥४३॥**

-★-★-★-

## पूर्वाभ्यासेन तेनैव ह्रियते ह्यवशोऽपि सः।
## जिज्ञासुरपि योगस्य शब्दब्रह्मातिवर्तते॥

**त्यो भोगको परवश भएपनि त्यसले पहिलेको मनुष्यमा गरेको अभ्यास साधनको कारण परमात्मा तर्फ नै लाग्दछ किनकी योग(समता) को जिज्ञासु पनि वेदमा भनिएको सकाम कर्महरूको अतिक्रमण गरिदिन्छ॥४४॥**

ननु योगिनां कुले जातस्य भोगव्यवधानाभावाद्भवतु सुप्त-प्रबुद्धवत् झटिति योगे प्रवृत्तिः। श्रीमतां गृहे जातस्य तु बहुभोगजन्यप्रमादसम्भवात्कथं पौर्वदैहिकबुद्धियोगलाभेन योगे प्रवृत्तिरिति चेत्तत्राह-पूर्वाभ्यासेनेति। पूर्वजन्मनि कृतोऽभ्यासः पूर्वाभ्यासस्तज्जन्यसंस्कारेण स योगो-भ्रष्टोऽवशोऽपि बहुकालभोगान्तरायात्स्वयमनिच्छन्नपि ह्रियते, बलात्कारेण स्ववशीक्रियते। भोगवासनाया निवर्त्त्य योग एव प्रवर्त्त्यते। अतो योगस्य जिज्ञासुरपि योगस्वरूपं ज्ञातुमिच्छुरपि नतु प्राप्तयोगः, तथाभूतोऽपि प्राग्जन्मार्जित-योगस्योद्बुद्धज्ञानसंस्कारादिह जन्मनि शब्दब्रह्मातिवर्त्तते, कर्मप्रतिपादकवेदपूर्वभागमतिवर्त्तते वेदोक्तकर्मफलमति-क्रम्य वर्त्तते। कर्माधिकारमुपेक्ष्य ज्ञानाधिकार एव निष्ठां करोतीत्यर्थः॥

**मानिलिउँ कि जसको योगीहरूको कुलमा जन्म भयो त्यो योगको बाधक रूप भोगहरू नहुनाले तुरुन्तै सुतेर उठेको जस्तो गरेर, योगमा प्रवृत्त हुन्छ; तर जसको जन्म धनवान्को घरमा हुन्छ, त्यसलाई त धेरै भोगहरूबाट उत्पन्न प्रमाद हुनु संभव छ, त्यो कसरी पूर्वदेहमा स्थित बुद्धि योगको प्राप्तिको द्वारा योगमा प्रवृत्त हुन सक्दछ? यस शंकाको उत्तर भगवान् यहाँ दिनुहुन्छ-**

**पूर्व जन्ममा गरिएको अभ्यासको संस्कार ले योगभ्रष्ट पुरुष धेरै समय सम्म भोगरूपी रोकावट परेर योगको इच्छा नगरीकन पनि त्यतैतिर(योगाभ्यास तिर) जबर्जस्ती तानिन्छ, अर्थात् भोगवासनाबाट निवृत्त भएर योगमा प्रवृत्त हुन्छ। यसैले योगको स्वरूप जान्ने इच्छा गर्नेवाला पनि पूर्वजन्ममा अर्जित योगको जागेको ज्ञानको संस्कारले यस जन्ममा शब्दब्रह्मले, अर्थात् कर्मको प्रतिपादक वेदको पूर्वभागबाट अलग हुन्छ, अर्थात् वेदले भनेको कर्मको फललाई त्यागिदिन्छ। भन्नुको मतलब यो कि कर्माधिकारको उपेक्षा गरेर ज्ञानाधिकारमा निष्ठा गर्दछ॥४४॥**

-★-★-★-

## प्रयत्नाद्यतमानस्तु योगी संशुद्धकिल्बिषः।
## अनेकजन्मसंसिद्धस्ततो याति परां गतिम्॥

**परन्तु जो योगी प्रयत्नपूर्वक यत्न गर्दछ र जसको पाप सर्वथा नष्ट भएको छ तथा जो अनेक जन्मबाट सिद्ध भएको छ त्यो योगी फेरि परम गतिलाई पाउँदछ॥४५॥**

किं तर्हि कर्मप्रतिपादकवेदातिवर्त्तनात्तस्मिन्नेव जन्मनि सिद्धयोगो भूत्वा मुच्यते जन्मान्तरे वेत्यपेक्षायामाह-प्रयत्नादिति। पूर्वमभ्यास-

**यस्तो योगी कर्मप्रतिपादक वेदको पूर्व भागलाई पार गरेर त्यसै जन्ममा योगको सिद्धि प्राप्त गरेर मुक्त हुनजान्छ वा दोस्रो जन्ममा? यसै प्रश्नको अपेक्षामा भगवान् भन्नुहुन्छ।**

वैराग्यशैशिल्याद्योगभ्रंशात्पुनर्जन्मजातमिदानीं पुनर्जन्म यथा न स्यात्तथा यतितव्यमिति व्यवसायं कृत्वा प्रयत्नात्पूर्व-कृतयत्नादपि प्रकर्षेणाधिकं यतमानोऽतिप्रयत्नं कुर्वन् योगी पूर्वाभ्यस्तयोगसंस्कारवान् तेनैव योगे प्रयत्नविशेषजन्य-पावनत्वेन संशुद्धकिल्बिषः सम्यक् शुद्धानि धौतानि किल्विषाणि योगप्रतिबन्धकान्यनेकजन्मलानि यस्य सः, अत एवानेकैर्जन्मभिः कृतयोगाभ्यासाच्चरमजन्मनि संसिद्धः सम्यक् सिद्धध्यानसम्पन्नः, ततस्तद- नन्तरमेव परां गतिं मुक्तिरूपामुत्कृष्टां गतिं फलं याति, प्राप्नोति ॥४५ ॥

**यो योगी पूर्वमा अभ्यास र वैराग्यको शिथिलताले योगभ्रष्ट भयो र त्यसलाई फेरि जन्म लिनु पर्‍यो। अब फेरि जसमा जन्म लिनु नपरोस त्यस्तो उद्योग गर्नुपर्दछ, यस्तो दृढ निश्चय गरेर पूर्वमा गरेको यत्नभन्दा पनि धेरै यत्न गर्दै त्यो योगी, पूर्वमा अभ्यस्त योगको संस्कारको कारण प्रयत्न विशेष गर्नाले, अनेक जन्महरूको प्रतिबन्धक मलहरूले रहित हुन्छ र यसैले अनेक जन्मको योगाभ्यासको पछि आखिरी जन्ममा पूर्ण रूपले ध्यानको सिद्धि लाभ गरेर मुक्ति रूप श्रेष्ठ गतिलाई प्राप्त गर्दछ॥४५॥**

-★-★-★-

## तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिकः।
## कर्मिभ्यश्चाधिको योगी तस्माद्योगि भवार्जुन॥

**(सकामभाववाला) तपस्विहरू भन्दा योगी श्रेष्ठ हो, ज्ञानिहरू भन्दा पनि योगी श्रेष्ठ हो र कर्मिष्ठहरू भन्दा पनि योगी श्रेष्ठ हो यस्तो मेरो मत छ अतः हे अर्जुन! तिमी योगी बन॥४६॥**

अतः सर्वसाधनेभ्यो योग एवाधिकतरः श्रेयोऽर्थिनोपायदेय इत्याह-तपस्विभ्य इति। तपस्विभ्यः कृच्छ्रचान्द्रायणादि तप एव पुरुषार्थसाधनं विद्यते येषां ते तथा योगी अधिकः श्रेष्ठः ज्ञानं शास्त्रजन्यं परोक्षं तद्वद्भ्योऽपि योगी अधिको मतः। कर्मिभ्यः अग्निहोत्रादिकर्मवद्भ्यश्च योगी अधिको मतस्तस्मात्त्वं योगी भव हे अर्जुन!॥

**कल्याण चाहनेहरूको लागि सबै भन्दा अधिक उपयोगी योग नै हो, यसैलाई भन्नुहुन्छ। कृच्छ्र चान्द्रायण आदि तपरूपी पुरुषार्थको साधन गर्नेवाला तपस्विहरू भन्दा यो योगी श्रेष्ठ हो। शास्त्रजन्य परोक्ष ज्ञानवालाहरू भन्दा पनि यो योगी श्रेष्ठ मानिन्छ। अग्निहोत्रादि कर्महरूलाई गर्नेवाला भन्दा यो योगी श्रेष्ठ छ। यसैले हे अर्जुन! तिमी पनि यस्तै ध्यान सम्पन्न योगी बन॥४६॥**

-★-★-★-

## योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना।
## श्रद्धावान्भजते यो मां स मे युक्ततमो मतः॥

**सम्पूर्ण योगिहरूमा पनि जो श्रद्धावान् भक्त ममा तल्लिन भएको मनले मेरो भजन गर्दछ त्यो मेरो मतमा सर्वश्रेष्ठ योगी हो॥४७॥**

तपस्व्यादिभ्यो योगिनः श्रैष्ठ्यमुक्त्वेदानीं सर्वयोग्युत्कृष्टं योगिनं वदन्नध्यायमुपसंहरति-योगिनामिति। तपस्विकर्मादिभ्यो योगी श्रेष्ठः, योगिनामपि आत्मसमा-धिपराणां हिरण्यगर्भरुद्रेन्द्रादित्याद्याराधनलक्षणयोगवतां च सर्वेषामपि मध्ये जन्मान्तरसहस्रार्जितपुण्यसञ्चयलब्ध सदाचार्योपदेशजनितसर्वज्ञसर्वशक्तिसर्वकारणसर्वकर्मफल-प्रदात्रीश्वरपरमात्मपुरुषोत्तमादिशब्दाभिधेयमदितरदेव-फलसाधनादिष्वतिफल्गुबुद्धिपूर्वकानन्यत्वभावनया मयि

**तपस्वी आदि भन्दा पनि योगी श्रेष्ठ हो, यस्तो भनेर अब योगीहरूमा उत्कृष्ट योगीको वर्णन गर्दै अध्यायको समाप्ति गर्नुहुन्छ।**

**तपस्वी र कर्मी आदि भन्दा योगी श्रेष्ठ हो। आत्म समाधिमा निरत योगी हिरण्यगर्भ, अर्थात् ब्रह्मा, इन्द्र, सूर्य आदिको पूजा रूप लक्षणवाला योगवाला योगी भन्दा श्रेष्ठ हो, र सबै प्रकारको समाहित चित्तवाला योगीहरू भन्दा त्यो योगी श्रेष्ठ हो जो हजारौं जन्मको अर्जित पुण्यको संचयको प्रतापले प्राप्त, सद्गुरुको उपदेशले उत्पन्न, सर्वज्ञ, सर्वशक्तिमान, सर्व कर्मफल लाई दिने, ईश्वर, परमात्मा, पुरुषोत्तम आदि नामले बोलाईने(भनिने) परमानन्दघन म वासुदेवमा, मेरो अतिरिक्त अरु देवताहरूको फल साधनमा तुच्छ बुद्धि पूर्वक, अनन्त भावनाले निरतिशय**

परमानन्दघने भगवति वासुदेवे निरतिशयप्रीतिवशाद्गतेन निविष्टेनान्तरात्मना चित्तेन श्रद्धावान् गुरुशास्त्रोक्तः सर्वाभीष्टप्रदोऽयमेवेति सर्वात्मना मया भजनीय इति विश्वासवान् यो मामीश्वरेश्वरं ज्ञानबलशक्त्यादिनवात्सल्यकारुण्यदयाद्यनन्तकल्याणगुणाब्धि सर्वशरण्यं प्रणतार्त्तिहरं स्वभक्तकामपूर्त्यर्थमेव यदुकुलेऽवतीर्णं वसुदेवसूनुं भजते, अर्चनवन्दनध्यानादिना सततं सेवते समे युक्ततमः, सर्वेभ्यो युक्तेभ्यः समाहितचित्तेभ्यो युक्ततमोऽत्यर्थं समाहितचित्तः श्रेष्ठतमः मे मम परमेश्वरस्य सर्वज्ञस्य मतः निश्चितः। अतस्त्वमपि मदनन्यभक्तो भवेति भावः। तदेवं भगवत्प्राप्त्यन्तरङ्गोपायभगवदनन्यभक्तस्वरूपयुक्ततमत्वलाभाय त्वम्पदार्थभूतप्रकृतिवियुक्तात्मस्वरूपज्ञानं तदङ्गभूतनिष्कामकर्मप्रकार भेदवैराग्येन्द्रियमनोनिग्रहपूर्वक ध्यानयोगाभ्यासोपदेशेनाध्यायषट्कं समापितम्।

कर्मोपशमवैराग्यपूर्वकं योगमुक्तवान्।<br>
अध्याये भगवानस्मिन्परमागतिसाधनम्॥१॥

त्वम्पदार्थो भगवता साधनक्रमयोगतः।<br>
अस्मिन्नध्यायषट्के वै भक्तोत्कर्षश्च वर्णितः॥२॥

प्रीतिको कारण आफ्नो चित्तलाई निवेशित गरेर, गुरु तथा शास्त्रको वचनबाट भगवान् नै सबै अभिष्टलाई प्रदान गर्नेवाला हुन् र तीनै सेवनीय छन्, यस्तो विश्वास गर्दै, म वासुदेवलाई, जो ईश्वरहरूको पनि ईश्वर हूँ, ज्ञान, बल, शक्ति आदि, वात्सल्य, कारुण्य, दया आदि, अनन्त कल्याण गुणहरूको समुद्र हूँ, सबैको शरण्य हूँ, प्रणत पुरुषको दुःखलाई हर्नेवाला हूँ, र आफ्ना भक्तको कामना पूर्ति गर्नको लागि नै यदुकुलमा अवतार लिएको हुँ, भज्दछ, अर्थात् अर्चन, बन्दन, ध्यान आदिले मेरो नै सेवा गर्दछ। यसैले तिमी पनि मेरो नै अनन्य भक्त होऊ॥४७॥

यस प्रकार भगवत्प्राप्तिको अन्तररङ्ग उपाय, भगवान् मा अनन्य भक्तिरूप पूरै योग्यता प्राप्त गर्नको लागि, त्वं पदार्थभूत, प्रकृति भन्दा पृथक्, आत्मस्वरूपको ज्ञान, अरु अंगभूत नाना प्रकारको निष्काम कर्म, वैराग्य, इन्द्रिय, मन निग्रह पूर्वक ध्यान योगको अभ्यासको उपदेश पूर्वक पहिलो षट्क छः अध्याय समाप्त भयो।

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां ज्ञानकर्मसन्न्यासयोगो नाम चतुर्थोऽध्यायःषष्ठोऽध्यायः॥६॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ सप्तमोऽध्यायः

## श्रीभगवानुवाच

**मय्यासक्तमनाः पार्थ योगं युञ्जन्मदाश्रयः ।**
**असंशयं समग्रं यथा ज्ञास्यसि तच्छृणु ॥**

**हे पृथापुत्र! ममा मनलाई आसक्त गरेर मेरो आश्रित भई योगको अभ्यास गर्दै तिमी मेरो जुन समग्ररूपलाई निःसन्देह जसरी जान्दछौ त्यसलाई त्यसै प्रकारले सुन ॥ १ ॥**

तदेव मुमुक्षुणां भगवद्भावापत्तिलक्षणं परमपुरुषार्थं तत्प्राप्त्युपायभूतं तदनन्यभक्तियोगं च वक्तुं तत्साधनभूतं प्राप्तुः प्रत्यगात्मनस्त्वम्पदार्थस्य ज्ञानं निष्कामकर्मोपशमवैराग्ययोगादिसाधनैः प्रथमेनाध्यायषट्केन निरूपितम्। इदानीं भगवद्भक्तियोगं भजनीयं गुणशक्त्यैश्वर्यादिविशिष्टं तत्पदार्थ परब्रह्मभूतवासुदेवस्वरूपं च भक्तभेदांश्च तत्प्रतियोग्यभक्तभेदांश्च निरूपयितुं मध्यमषट्कमारभ्यते। तत्रापि भजनीयस्वरूपं भक्तांश्च निरूपयितुं सप्तमाध्यायारम्भः। तत्र तावत्पूर्वाध्यायान्ते "योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना। श्रद्धावान्भजते यो मां स मे युक्ततमो मत" इत्युक्तम्, तत्र कीदृशं ते स्वरूपं कथं च भक्तस्त्वां त्वद्गतान्तरात्मा भूत्वा त्वां भजेदिति प्रष्टव्यं तदर्जुनेनापृष्टमपि स्वयमेव कृपया निरूपयितुं श्रीभगवानुवाचः–मय्यासक्तमना इति। मयि दोषगन्धास्पृष्टमहिम्नि अतन्तकल्याणगुणशक्त्यैश्वर्याश्रये भगवति वासुदेवे आसक्तं दृढं निबद्धं मनो येन स मय्यासक्तमनाः, पार्थेति सम्बोधनेन पृथाया मद्भक्तायाः पितृस्वसुः पुत्रस्त्वं मेऽनुग्राह्योऽसीति सूचितं, योगं युञ्जन्मनः समाधानं कुर्वन् मदाश्रयः अहमेवेश्वरेश्वर आश्रयो न तु देवमनुष्याद्यन्यः कश्चित्कस्मैचिदर्थाय समाश्रयणीयो यस्य स त्वमेवम्भूतः सन्नसंशयं निःसंशयं यथा समस्तविभूतिवलशक्त्यैश्वर्यादिसहितं मां यथा ज्ञास्यसि, येन ज्ञानेन ज्ञास्यसि तज्ज्ञानं मयोच्च्यमानं शृणु॥

मोक्षार्थीको भगद्भावापत्तिलक्षण परम पुरुषार्थ वा मोक्ष र त्यसको प्राप्तिको उपायभूत अनन्य भक्ति योगको विषयमा भन्नको लागि प्रथम षट्कमा भगवान्ले अनन्य भक्ति योगको साधनभूत प्रत्यगात्मा अर्थात् त्वं पदार्थको ज्ञानको, निष्काम कर्म, निवृत्ति, वैराग्य योगादि साधनहरू निरूपित गर्नुभयो। अब यस बीचको षट्कमा भगद्भक्ति योग, गुण शक्ति ऐश्वर्यादिहरूले युक्त, तत् पदार्थ, परब्रह्मभूत, भजनीय वासुदेव को स्वरूपलाई र भक्तहरूको र अभक्तहरूको भेदलाई भन्नुहुनेछ। यस सातौं अध्यायमा भजनीय भगवान्को र भक्तहरूको निरूपण गरिएको छ। पछाडिको अध्यायमा भगवान्ले यो भन्नुभयो–
"योगिनामपि......मतः ॥"
अब अर्जुन यहाँ सोध्न सक्दछन् कि– हजुरको स्वरूप कस्तो छ? हजुरलाई जानेर र हजुरमा नै आफ्नो अन्तरात्मालाई निवेशित गरेर भक्तले कस्तो तरिकाले हजुरको भजन गर्ने? तर अर्जुनले नसोधिकनै भगवान्ले कृपा गरेर यी प्रश्नहरूको उत्तर दिनुभयो–

हे पार्थ! (अर्जुनलाई यहाँ पार्थ सम्बोधन गरेर भगवान् ले यो सूचित गर्नुभयो कि मेरो पिता वसुदेवको बहिनी पृथाको तिमी छोरो हौ, र दोषको गन्धमात्रले रहित, महिमा युक्त र अनन्त कल्याण गुण, शक्ति र ऐश्वर्यको आश्रय युक्त म वासुदेव भगवान्मा दृढरूपले मनलाई लगाउने वाला हौ) यसैले मेरो अनुग्रह तिमी माथि हुनु उचित नै हो। तिमी आफ्नो मनलाई समाधान गर्दै र मलाई नै आफ्नो आश्रय संझेर अर्थात् यो जानेर कि ईश्वरहरूका ईश्वर भगवान् नै मेरो आश्रय हुन् र यी भन्दा बाहेक अन्य कुनै देउता मनुष्य आदि कुनै पनि प्रयोजनको लागि मलाई आश्रयणीय छैन(होईन), यस्तो मलाई, निःसंशय र समस्त विभूति, बल, शक्ति, ऐश्वर्य आदिको साथ जुन ज्ञानले जान्दछौ, त्यसलाई सुन। अर्थात् जुन ज्ञानको द्वारा मेरो स्वरूपादिको ज्ञान प्राप्त गर्नेछौ त्यो म भन्दछु, तिमी सुन ॥ १ ॥

–★–★–★–

**ज्ञानं तेऽहं सविज्ञानमिदं वक्ष्याम्यशेषतः।**
**यज्ज्ञात्वा नेह भूयोऽन्यज्ज्ञातव्यमवशिष्यते॥**

**तिम्रो लागि म यो विज्ञानसहित ज्ञान सम्पूर्णतः भन्नेछु जसलाई जानेपछि फेरि यस विषयमा जान्नयोग्य अरु केहि बाँकी नै रहँदैन॥२॥**

तदेव ज्ञानं श्रोतारमभिमुखीकरणाय स्तौति–ज्ञानमिति। इदं ज्ञानं शास्त्रीयं सविज्ञानं विज्ञानं स्वानुभवस्तत्सहितमशेषतस्ते तुभ्यमहं वक्ष्यामि। न हीदं साकाङ्क्षमित्याह–यज्ज्ञानं ज्ञात्वा इह श्रेयोमार्गे स्थितस्य मुमुक्षोर्ज्ञातव्यं नावशिष्यते, ज्ञातव्यान्तरनिरपेक्षमित्यर्थः॥

अर्जुनलाई यस ज्ञानको तर्फ अभिमुख गर्नको लागि त्यस (ज्ञान) को प्रशंसा गर्नुहुन्छ– यस समग्र शास्त्रीय ज्ञानलाई, विज्ञान, अर्थात् आफ्नो अनुभवको साथ म तिमीलाई भन्नेछु। जुन ज्ञानलाई जानेर श्रेय मार्गमा स्थित मोक्षार्थीलाई अरु केहि पनि जान्न बाँकी रहँदैन, अर्थात् यस ज्ञानलाई जानेर अरु कुनै जान्न योग्य कुराको अपेक्षा रहँदैन॥२॥

–★–★–★–

**मनुष्याणां सहस्रेषु कश्चिद्यतति सिद्धये।**
**यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः॥**

**हजारौंमा कुनै एउटा सिद्धिको लागि प्रयत्न गर्दछ र ती यत्न गर्ने सिद्धहरूमा कुनै एउटा मात्र मलाई यथार्थरूपले जान्दछ॥३॥**

वक्ष्यमाणं ज्ञानमतिदुर्लभमित्याह–मनुष्याणमिति। मनुष्याः शास्त्रीयाधिकारयोग्यास्तेषां सहस्रेषु कश्चिदेकः सिद्धये आत्मतत्त्वज्ञानाय यतते। यततां यतमानानां सहस्रेषु कश्चिदात्मानं यथा वद्वेत्ति। तादृशानां ज्ञानसिद्धानामपि सहस्रेषु कश्चिन्मां परमात्मानं वेत्ति। मद्विदामपिसहस्रेषु कश्चिदेव मां तत्त्वतः यथाऽवस्थितस्वरूपं वेत्ति। पराभक्तिं विना तत्त्वतो ज्ञानासम्भवात्। "भक्त्यां मामभिजानाति यावान्यश्चास्मि तत्त्वतः" इति वक्ष्यमाणत्वात्॥

अब यो भन्नुहुन्छ कि जुन ज्ञान म भन्दैछु त्यो धेरै ठूलो दुर्लभ छ। शास्त्रीय अधिकारको योग्य हजारौं मनुष्यहरूमा कुनै एक सिद्धि अर्थात् आत्म तत्त्व ज्ञानको लागि यत्न गर्दछ। यस्ता हजारौं ज्ञान सिद्ध अर्थात् आत्म तत्त्वलाई यथार्थ रूपमा जान्नेवाला मध्ये कुनै एउटा म म परमात्मालाई जान्दछ। मलाई जान्नेहरू हजारौं मध्ये कुनै एकजना मेरो यथार्थ स्वरूपलाई जान्दछ। किनकी बिना मेरो पराभक्तिकै यथार्थ ज्ञान हुन सक्दैन, अर्थात् वास्तवमा म जस्तो छु त्यस्तै नै मेरो स्वरूपलाई भक्तिद्वारा नै जान्न सकिन्छ। जस्तो कि भगवान् अगाडी गएर भन्नुहुनेछ। यथा–
"भक्त्यां मामभिजानाति यावान्यश्चास्मि तत्त्वतः॥" ॥३॥

–★–★–★–

**भूमिरापोऽनलो वायुः खं मनो बुद्धिरेव च।**
**अहङ्कार इतीयं मे भिन्ना प्रकृतिरष्टधा॥**

**पृथ्वी, जल, तेज, वायु, आकाश(यी पञ्चमहाभूत) र मन, बुद्धि तथा अहंकार यस प्रकार यी आठ प्रकारको भेदवाला मेरा प्रकृति हुन्॥४॥**

समग्रं मां यथा ज्ञास्यसीति पूर्वमुक्तं, तदेव वक्तुं तावत्प्रकृतिशब्दवाच्यपरापरशक्तिद्वयस्वरूपमाह–भूमिरिति द्वाभ्याम्। भूम्यादिपञ्चशब्दैस्तत्कारणभूतानि गन्धादिपञ्चतन्मात्राणि। गृह्यन्ते, न स्थूलभूतानि। तेषां विकारत्वेन प्रकृतित्वाभावात्। मनःशब्देन तत्कारणभूताहङ्कारो गृह्यते। बुद्धिशब्देन समष्टि बुद्धिर्महत्तत्त्व गृह्यते। अहङ्कारशब्देन तत्कारणं माया।

पूर्वमा मैले यो भने कि जसरी तिमी मलाई सम्पूर्ण रूपले जान्ने छौ, त्यो म तिमलाई भन्ने छु। अब त्यसै लाई भन्ने अभिप्रायले प्रकृति शब्दद्वारा वाच्य, परा र अपरा नामको आफ्नो दुई शक्तिहरूको स्वरूपलाई दुई श्लोकमा पहिले भन्दछु।

भूमि, जल, अग्नि, वायु र आकाशबाट उनीहरूको गन्धादि पाँच तन्मात्राहरूलाई ग्रहण गर्नुपर्दछ, स्थूलाकार भूमि जल आदिलाई होईन, किनकी यी तन्मात्राहरूका विकार हुनाले प्रकृति भन्न सकिंदैन, अर्थात् यी स्थूल रूप जलआदिमा प्रकृतितत्त्वको अभाव छ। मन शब्दको यहाँ अर्थ हो कि मनको कारणभूत

इत्येवमष्टधा भिन्नेयमाकाशादिपञ्चमहाभूतदशेन्द्रियमन इति षोडशविकारादिचराचरस्य जगतः प्रकृतिरुपादानभूता मे मदीया शक्तिरिति विद्धि ॥४ ॥

अहंकार। बुद्धि शब्दले समष्टि बुद्धि, जुन महत्तत्त्व हो, त्यसलाई ग्रहण गर्नुपर्दछ र अहङ्कार शब्दको अर्थ हो माया , जुन अहंकारको कारण हो। यस तरिकाले मेरो प्रकृति आठ प्रकारले विभाजित छ। अर्थात् आकाशादि पञ्च महाभूत, दश इन्द्रियहरू र सोह्रौ मन, यी विकारहरूले युक्त, चर र अचर जगतको उपादानभूत, प्रकृति मेरो शक्ति हो, यस्तो तिमी जान्नु॥४॥

–★–★–★–

## अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम्।
## जीवभूतां महाबाहो ययेदं धार्यते जगत्॥

**यो मेरो अपरा प्रकृति हो र हे महाबाहु! यस अपरा प्रकृतिद्वारा भिन्न जीवरूप बनेको मेरो परा प्रकृतिलाई जान जसको द्वारा यो जगत् धारण गरिन्छ ॥५ ॥**

अष्टधा या प्रोक्ता प्रकृतिः सेयमपराः निकृष्टा जगत्वापरार्थत्वाच्च। इतस्त्वचेतनभूतायाः प्रकृतेरन्यां विलक्षणां स्वरूपतः स्वभावतश्चात्यन्तविजातीयां परां तस्याः भोक्तृतया प्रकृष्टां जीवभूतां चेतनां प्रकृतिं शक्तिं मे मदीयां मदात्मिकां विद्धि। यया जीवभूतया चेतनया क्षेत्रज्ञाख्ययाऽनादिकर्मवशादन्तःप्रविष्टया इदं शरीरादिरूपं क्षेत्रसञ्ज्ञकं जडजातं जगद्धार्य्यते। उभयोर्विष्णुशक्तित्वं विष्णुपुराणे स्पष्टमुक्तम् "विष्णुशक्तिः परा प्रोक्ता क्षेत्रज्ञाख्या तथाऽपरे"ति ॥५ ॥

आठ प्रकारको प्रकृति जुन मैले भने, त्यो जड़ र अर्कैको अर्थमा आउने भएको कारण, निकृष्ट हो। यस अचेतनभूत प्रकृति भन्दा बिल्कुल विलक्षण अर्थात् स्वरूप तथा स्वभावबाट अत्यन्त विजातीय मेरो पराप्रकृति, भोक्ता भएको कारण, मेरो श्रेष्ठ प्रकृति हो। त्यो जीवभूत अर्थात् चेतन स्वरूप हो। यस प्रकृतिलाई मेरो वा मदात्मिका शक्ति जान्नु। यसै जीवभूत, चेतन स्वरूप, क्षेत्रज्ञ नाम भएको र अनादि कर्म वश भित्र पसेको, शक्ति द्वारा नै शरीरादिरूपी क्षेत्र नाम जडमय जगत् धारण गरिन्छ। दुबैलाई नै विष्णुको शक्ति भएको कुरा स्पष्ट रूपले विष्णु पुराणमा वर्णित छ। यथा- "विष्णुशक्तिः परा प्रोक्ता क्षेत्रज्ञाख्या तथाऽपरा।"
अर्थात् विष्णुको दुई शक्ति भनिएको छ, क्षेत्रज्ञ नामको परा शक्ति र अर्को अपरा शक्ति॥५॥

–★–★–★–

## एतद्योनीनि भूतानि सर्वाणीत्युपधारय।
## अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयस्तथा॥

**सम्पूर्ण प्राणीहरूको उत्पत्तिमा अपरा र परा यी दुबै प्रकृतिहरूको संयोग नै कारण हो यस्तो तिमी बुझ। म सम्पूर्ण जगत्को प्रभव तथा प्रलय हूँ॥६ ॥**

स्वमीयप्रकृतिद्वयकार्यत्वात्सर्वजगतः स्वकार्यत्वमाह एतदिति। एते जडचेतने क्षेत्रक्षेत्रज्ञसञ्ज्ञके प्रकृती योनी कारणभूते येषां तान्येतद्योनीनि चराचराणि सर्वाणि भूतानि प्राणवन्ति शरीराणि इत्युपधारय, जानीहि। तत्राचेतनप्रकृतिः स्वरूपपरिणामेन चेतनरूपा तु स्वकर्मणा निमित्तेन तेषु प्रविश्य भोक्तृत्वेनाधारत्वेन च योनिः। न हि जीवं विना देहानां स्थितिर्वृद्धिश्च सम्भवति, ते च मदीये शक्तिरूपे,

सम्पूर्ण जगत् भगवान्ले माथि भन्नुभएको दुबै प्रकृतिको कार्य हो यसैले पूरै जगत्लाई भगवान्को कार्य भनेर संझिनु पर्दछ। यसैलाई यहाँ भन्नुहुन्छ-
सबै चर र अचर तथा प्राणवाला शरीर यिनै जड़ र चेतन, क्षेत्र र क्षेत्रज्ञ नाम गरेका दुबै प्रकृतिबाट उत्पन्न हुन्, यस्तो तिमी जान्नु, अर्थात् दुबै प्रकृतिहरूनै सबै भूतहरूका कारण हुन्। यीनिहरूमा अचेतन प्रकृतिको स्वरूप परिणाम द्वारा र अचेतन प्रकृति आफ्नो कर्मको वश भएको कारण, उनीहरू(भूतहरूमा) प्रवेश गरेर, उनीहरूका भोक्ता र आधार हुनाले उनीहरूको योनि वा कारणभूत हुन्, किनकी जीव को बिना देहको स्थिति वा

शक्तेः शक्तिमतः पृथक् स्थितिप्रवृत्त्यनर्हत्वात् मदधीने, शक्तिमत्येव पर्य्यवस्यति। अतोऽहमेव कृत्स्नस्य जगतः प्रभवः, प्रभवत्यस्मादिति प्रभवः परमकारणमित्यर्थः। तथा प्रलयः प्रलीयतेअस्मिन्ननेनेति वा प्रलयः संहारस्थानं, संहारको वा कर्त्ता संहर्त्ता चाहमेवेत्यर्थः ॥६ ॥

वृद्धि हुन सक्दैन। यी दुबै प्रकृतिहरू मेरा शक्तिहरू हुन् र शक्तिको स्थिति र प्रवृत्ति शक्तिमान वा शक्तिवाला भन्दा पृथक् हुन सक्दैन। यसैले यी शक्तिहरू मेरो अधीन छन्। शक्तिको कार्य शक्तिमानको कारण नै पूर्ण हुन्छ। यसैले सम्पूर्ण जगत्को म परम कारण हूँ। र प्रलय पनि हूँ। अर्थात् मद्वारा नै वा म मा नै जगत्को प्रलय हुन्छ। भन्नुको मतलब यो कि यो जगत् मेरो शक्तिहरू परा र अपरा प्रकृतिबाट उत्पन्न हुन्, यसैले यस जगत्को परम कारण वा कर्त्ता र संहारक म नै हूँ॥६ ॥

-★-★-★-

**मत्तः परतरं नान्यत्किञ्चिदस्ति धनञ्जय।**
**मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव॥**

**हे धनञ्जय! मेरो सिवाय यस जगत्को अर्को कुनै अलिकति पनि कारण तथा कार्य छैन । जस्तो धागोको उनिएको मणिको दाना जस्तै यो सम्पूर्ण जगत् मै मा ओतप्रोत छ ॥७ ॥**

सर्वजगद्योनिभूतप्रकृतिद्वयाधिष्ठातृत्वादात्मनः सर्वोत्तमत्वं सर्वाधारत्वं चाह-मत्त इति। यतः सर्वजगद्योनी भूते चेतना-चेतने मदाश्रये, तस्मान्मत्तः सर्वेश्वारात्परतरं श्रेष्ठं जगत्कारणभूतं स्वतन्त्रं किञ्चिदपि वस्तु नास्ति हे धनञ्जय! "न तत्स-मश्चाभ्यधिकश्च दृश्यते। स कारणं कारणाधिपाधिपः, सर्वस्य वशी सर्वस्येशानः, स विश्वकृद्विश्वकृदात्मयोनिः, प्रधानक्षेत्रज्ञपतिर्गुणेश"इत्यादिश्रुतिभ्यः "कृष्ण एव हि लोकानामुत्पत्तिरपि चाप्ययः। कृष्णस्य हि कृते भूतमिदं विश्वं चराचरामि"ति स्मृतेश्च। सर्वस्याश्रयोऽप्यहमे-वेत्याह-मयीति। सर्वमिदं चिज्जडजातं जगत् सर्वस्यात्मत-याऽवस्थिते मयि प्रोतमाश्रितम्। तत्र दृष्टान्तः-सूत्रे मणिगणा इवेति। यथा मणीनां स्थितिप्रवृत्ती सूत्राधीने तथा सर्वस्य स्थितिप्रवृत्ती मदधीने। "यच्चकिञ्चिज्ज-गत्यस्मिन्दृश्यते श्रूयतेऽपि वा। अन्तर्बहिश्च तत्सर्वं व्याप्य नारायणः स्थित"इति श्रुतेः। "बुद्धिर्मनो महद्वायुस्तेजोऽम्भः खं मही च या। चतुर्विधं च यद्भूतं सर्वं कृष्णे प्रतिष्ठितमि"ति स्मृतेश्च ॥

सबै जगत्को योनिभूत, दुबै प्रकृतिहरूका अधिष्ठाता भएको कारण अब यहाँ भगवान् आफ्नो सर्वोत्तमता र सबैको आधार भएको कुरा भन्नुहुन्छ- हे अर्जुन! सम्पूर्ण जगत्को योनि, चेतन र अचेतन प्रकृति, मेरो नै आश्रित छन्, यसैले म सर्वेश्वर भन्दा श्रेष्ठ जगत्मा अर्को कोही वस्तु छैन। अर्थात् म भन्दा पर जगत्को कारणभूत र स्वतन्त्र केहि पनि छैन। श्रुति र स्मृति पनि यसै कुराको पुष्टि गर्दछन्। यथा श्रुति- "न ....प्रधानक्षेत्रज्ञपतिर्गुणेशः" इत्यादि। (अर्थात् भगवान्को समान वा उहाँ भन्दा अधिक कोही पनि देखिदैन। उहाँ कारणाधिपाधिपहरूका पनि कारण हुन्। सबै जना उहाँकै वशमा हुनुहुन्छ। उहाँ सबैको मालिक हुनुहुन्छ। विश्वको स्वयं कर्त्ता र आफ्नो स्वयं कारण हुन्। प्रकृति र क्षेत्रज्ञ वा जीवहरूका पति र गुणहरूका स्वामी हुनुहुन्छ)। स्मृति- "कृष्ण. ....चराचरम्॥" अर्थात् यस जगत्को कृष्ण नै कर्त्ता र संहर्त्ता हुन्। यो चराचर जगत् उनैको द्वारा बनाईएको हो। अब भगवान् भन्नुहुन्छ कि सबैको आश्रय पनि म नै हुँ। यो सम्पूर्ण चेतन जड़ जगत्को मैं मा स्थित छन्, किनकी म सबैको आत्मा हुँ। यसलाई उदाहरण द्वारा संझाउँछु। जस्तो मणिहरूको स्थिति र प्रवृत्ति सूत्र वा डोरीको अधिन छ त्यस्तै नै सबै जगत्को पनि स्थिति र प्रवृत्ति मेरो नै अधिन छ। यसमा श्रुति र स्मृतिको वचन प्रमाण छ-

श्रुति-"यच्चकिञ्चिज्जगत्यस्मिन्दृश्यते...स्थितः॥"

अर्थात् यस जगत्मा भएको जति केहि पनि देखिन्छ वा सुनिन्छ त्यो सबैमा बाहिर र भित्रबाट व्याप्त भएर नारायण विराजमान हुनुहुन्छ। स्मृति-"बुद्धिर्मनो.....प्रतिष्ठितम्॥" अर्थात् बुद्धि, मन, महत्तत्त्व, वायु, अग्नि, जल, आकाश, पृथ्वी र चारै प्रकारको जीव,(स्वेदज, अण्डज, उद्भिज, योनिज यी चारप्रकारका जीव छन्।) सबै मा कृष्ण प्रतिष्ठित छन्॥७॥

-★-★-★-

**रसोऽहमप्सु कौन्तेय प्रभास्मि शशिसूर्ययोः।**
**प्रणवः सर्ववेदेषु शब्दः खे पौरुषं नृषु॥**

**हे कौन्तेय! जलमा रस, चन्द्रमा र सूर्यको प्रकाश, सम्पूर्ण वेदमा वर्णित ॐकार, आकाशमा शब्द र मनुष्यमा पुरुषार्थ म नै हूँ॥८॥**

एवं सर्वात्मत्वादात्मनः सर्वरूपतां दर्शयितुं सर्ववस्तुसार-रूपतामाह-रसोऽहमित्यादिपञ्चभिः। हे कौन्तेय! अप्सु सारभूतो रसो रसतन्मात्रारूपेणापामाश्रयोऽहं स्थितः। तथा शशिसूर्ययोः प्रभाऽहस्मि, तयोः प्रकाशरूपेण स्थितः। सर्ववेदेषु वैखरीरूपेणाविर्भूतेषु तन्मूलभूतः प्रणव ओंकारोऽहमस्मि। नृषु पुरुषेषु पौरुषं पुरुषसारभूतं यतः पुरुषत्वख्यातिः सोऽमित्यर्थः॥८॥

सबैको आत्मा हुनाले भगवान् सर्वरूप छन्। अब आफ्नो सर्वरूपतालाई देखाउनको लागि, उहाँ(भगवान्) यहाँ यो भन्नुहुन्छ कि सबै वस्तुहरूको साररूप म नै हूँ।
हे अर्जुन! जलको सारभूत रसको आश्रय रसतन्मात्रा रूपले म नै हूँ। फेरि सूर्य र चन्द्रमा को प्रभा म नै हूँ अर्थात् प्रकाश रूपले त्यसमा म नै छु। संस्कृतरूप ले आविर्भूत सबै वेदहरूको मूल ॐकार म नै हूँ। आकाशमा स्थित शब्द, शब्दतन्मात्रा रूपले म नै हूँ। मनुष्यहरू को पौरुष, जसले ती पुरुष भनिन्छन्, म नै हूँ॥८॥

-★-★-★-

**पुण्यो गन्धः पृथिव्यां च तेजश्चास्मि विभावसौ।**
**जीवनं सर्वभूतेषु तपश्चास्मि तपस्विषु॥**

**पृथ्वीमा गन्ध, आगोमा तेज(जलाउने शक्ति), सम्पूर्ण प्राणीहरूमा जीवनशक्ति, तपस्विहरूका तपस्या म नै हूँ॥९॥**

पुण्यः सुरभिवविकृतो गन्ध सर्वपृथिव्याः सारभूतो गन्ध तन्मात्राख्यः पृथिव्यां व्याप्तोऽहं, चकारोऽवादिषु पुण्य-रसादिसमुच्चयार्थः किञ्च विभावसौ वह्नौ यत्तेजः स्वाभाविकसर्वदहनप्रकाशन सामर्थ्यं तदप्यहमस्मि। सर्वभूतेषु प्राणिषु जीवनं प्राणधारणमायुस्तदप्यहमस्मि। तपस्विषु तपःप्रधानेषु वानप्रस्थादिषु यत्तपः शीतोष्णावि-द्वन्द्वसहनसामर्थ्यं तदहमस्मि॥९॥

पृथ्वीमा त्यसको सारभूत विकार रहित जो गन्ध छ, त्यो गन्ध तन्मात्रा रूपले म नै हूँ, अर्थात् म गन्ध रूपले पृथ्वीमा व्याप्त छु। 'च' द्वारा जलको सारभूत पुण्य रसादिको बोध हुन्छ। अग्निमा तेज अर्थात् त्यसको स्वभाविक सबैलाई जलाउने र प्रकाश गर्ने शक्ति पनि म नै हुँ। सबै प्राणीहरूको जीवन अर्थात् प्राण धारण वा आयु पनि म नै हूँ। तप गर्ने वानप्रस्थादिकहरूको जुन तप अर्थात् जाड़ो, गर्मी, भोक, प्यास इत्यादि द्वन्द्वहरूलाई सहने शक्ति छ, त्यो पनि म नै हूँ॥९॥

-★-★-★-

**बीजं मां सर्वभूतानां विद्धि पार्थ सनातनम्।**
**बुद्धिर्बुद्धिमतामस्मि तेजस्तेजस्विनामहम्॥**

**हे पार्थ! सम्पूर्ण प्राणीहरूको अनादि बीज(मूल) मलाई नै जान्नु। बुद्धिमान्हरूमा बुद्धि र तेजस्विहरूमा तेज पनि म नै हूँ॥१०॥**

किञ्च बीजमिति। सर्वेषां स्थावरजङ्गमानां भूतानां बीजं कारणं सनातनं नित्यं सर्वकार्येष्वनुस्यूतं हे पार्थ! मां विद्धि, मद्विभूतिं जानीहित्यर्थः। तथा बुद्धिस्तत्त्वविवेचनरूपा प्रज्ञा तद्वतां सा बुद्धिरहमस्मि, तदभावे पशुत्वाविशेषात्। "ज्ञानेन हीनाः पशुभिः समाना" इति सनत्सुजातवचनात्। तेजस्विनां यत्तेजः पराभिभवनसामर्थ्यं तदहमस्मि॥

हे कौन्तेय! स्थावर र जंगम जीवहरूको नित्य, सनातन र सबै कार्यहरूमा पसेको कारण मलाई जान। मतलब कि यी सबै जीवहरूलाई मेरो विभुति संझिनु। बुद्धिमानहरूको जो तत्त्व विवेचनी बुद्धि छ, जसको अभावमा मनुष्य पशुको समान मानिन्छ, जस्तो कि सनत्सुजातको वचन छ कि 'ज्ञानेन हीनाः पशुभिः समानाः' अर्थात् ज्ञानले हीन पशुको समान हो, त्यो बुद्धि म नै हूँ। तेजस्वीहरूको तेज अर्थात् अरुलाई पराभव गर्ने शक्ति म नै हूँ॥१०॥

-★-★-★-

**बलं बलवता चाहं कामरागविवर्जितम्।**
**धर्माविरुद्धो भूतेषु कामोऽस्मि भरतर्षभ॥**

**हे भरतश्रेष्ठ! बलवान्हरूमा काम र रागले रहित बल म नै हूँ र प्राणिहरूमा धर्मको विरुद्ध नभएको काम म नै हूँ॥११॥**

किञ्च बलमिति। कामोऽप्राप्ते वस्तुनि इदं मे भूयादिति तत्प्राप्त्यभिलाषः, अभिलषितेऽर्थे प्राप्तेऽपि इदं सदा तिष्ठेन्न कदापि क्षीयतामिति राजसश्चित्तरञ्जनात्मको रागस्ताभ्यां वर्जितं बलवतां सात्त्विकं स्वधर्मानुष्ठानरूपं बलमहमस्मि। धर्मो वेदविहितः सदाचाररूपस्तेनाविरुद्धोऽनुकूलो भूतेषु प्राणिषु कामः शास्त्रसम्मतः स्त्रीपुत्रवित्तादिविषयो योऽभि-लाषः सोऽहमस्मि हे भरतर्षभ!॥

अप्राप्त वस्तु मलाई मिलोस, यस प्रकारको अप्राप्त वस्तु प्राप्तिको अभिलाषालाई काम भनिन्छ। अभिलषित वस्तु प्राप्त हुँदा, ती सधैं स्थिर रहुन्, तिनीहरूको कहिल्यै नाश नहोस, यस प्रकारको जुन चित्तमा उनीहरूको प्रति भाव हुन्छ त्यसलाई राग भनिन्छ। यस्ता काम र रागले रहित बलशालिहरूको बल अर्थात् सात्त्विक स्वधर्मानुष्ठान रूप बल म हूँ। फेरि धर्म नाम वेद विहित, सदाचार रूप धर्मको अनुकूल, प्राणिहरूमा जो स्त्री पुत्रवित्तादि विषयको शास्त्र सम्मत नाम अभिलाषा हो, त्यो म नै हूँ॥११॥

-★-★-★-

**ये चैव सात्त्विका भावा राजसास्तामसाश्च ये।**
**मत्त एवेति तान्विद्धि न त्वहं तेषु ते मयि॥**

**जति पनि सात्त्विक, राजस, तामस भाव छन् ती सबै मबाटै हुन्छन् यसप्रकारले उनीहरूलाई संझ। तर ती ममा र म तिनीहरूमा छैन॥१२॥**

किं बहुना सर्वभावानामहमेव कारणमित्याह-ये चेति। ये चान्येऽपि सात्त्विका भावाश्चित्तपरिणामाः शमदमादयः, येच राजसा हर्षादयः, ये च तामसाः शोकमोहप्रमादयः, प्राणिनां स्वानादिकर्मवशाज्जायन्ते तान्सर्वान्मत्त एव जाता-नीति विद्धि, तत्तत्कर्मानुसारादिमदनुभावितान्विद्धीत्यर्थः। ननु हेतुभूतस्य तवापि ते स्युरिति चेन्नेत्याह-न त्वहमिति। तु शब्दो वैलक्षण्यद्योतनार्थः। तेषां मत्तो जातत्वेऽपि अहं तु तेषु न वर्त्ते जीववत्तदधीनोऽहं न भवामीत्यर्थः ते तु मयि मदधीनतया मयि वर्त्तन्ते। अथवा सात्त्विका भावा देवा राजसा मनुष्यास्तामसास्मिर्यगादयो मत्त एव जातास्तेषु नाहं वर्त्ते, कार्यार्थं लीलार्थं वा तेषु कृतावतारोऽप्यहं अजहद्गुणशक्तिमत्वात्तत्सजातीयो न भवामीत्यर्थः। ते तु मदधीनस्थितिकत्वात्सदा मयि वर्त्तन्ते इत्यर्थः। अतश्चे-तनाचेतनात्मकमखिलं जगन्मत्त एवोत्पद्यते मय्येव प्रलीयते

विशेष कहाँ सम्म भनौं, सबै भावहरूको कारण म नै हूँ। यसै कुरालाई यहाँ भगवान् संझाउनुहुन्छ-
जुन दोस्रै शम, दम आदि चित्त परिणाम स्वरूप सात्त्विक भाव, हर्ष शोक आदि राजस भाव र शोक,मोह, प्रमाद आदि तामस भाव आफ्नो अनादि कर्म वश प्राणिहरूमा उत्पन्न हुन्छन्, ती सबै मबाट नै उत्पन्न भएका हुन्, यस्तो मान अर्थात् यी भावहरूलाई उनीहरूको अनादि कर्मानुसार म नै पैदा गर्दछु।
यहाँ यो शंका गर्न सकिन्छ कि यदि यी सात्त्विक, राजस र तामस भाव हजुरबाटै उत्पन्न हुन् भने यी सबै भाव उनीहरूको कारणभूत हजुरमा पनि हुन सक्दछन्, अर्थात् हजुर पनि यिनीहरूका वशमा आउन सक्नुहुन्छ। यस शंकाको निराकरण गर्नुहुन्छ-
'तु' शब्द विलक्षणता लाई जनाउँछ अर्थात् म ती भावहरूको कारण भएर पनि त्यस मा छैन। अर्थ यो कि जीवहरूका समान म ती भावहरूका अधीनमा छैन। ती मेरो अधीन भएका कारण म मा स्थित छन्।
यस श्लोक को अर्को अर्थ यो पनि हुन सक्दछ। यथा- सात्त्विक भाव भएका देउता, राजस भाव भएका मनुष्य, र तामस भाव भएका तिर्यक् आदि योनिवाला जीव सबै नै मबाट उत्पन्न हुन्; म तिनीहरू मा होईन। भाव यो कि कार्य वा लीलाको लागि उनीहरूमा अवतार लिएर पनि, आफ्नो गुण र शक्तिलाई न छोड्ने कारण, उनीहरूको सजातीय हुँदिन; तर बरु उनीहरूको स्थिति मेरो

मय्येवावतिष्ठते च। कारणावस्थायां कार्यावस्थायां च कारणत्वेनाश्रयत्वेन स्वतन्त्रत्वेन चाहमेव परतरो न मत्तोऽन्यत्किमपि वस्तु गुणशक्त्यादिभिः परमस्तीति सिद्धम् ॥१२॥

अधीन छ। यसैले ती म मा रहन्छन। अतएव चेतनात्मक र अचेतनात्मक सम्पूर्ण जगत् मबाटै उत्पन्न हुन्छ, म मा नै प्रलय हुन्छ र म मा नै स्थिर रहन्छ। कारण र कार्य दुबै अवस्थामा आफ्नो कारणत्व, आश्रयत्व र स्वतन्त्रता को कारण म नै सबैभन्दा श्रेष्ठ हूँ। गुण, शक्ति आदिमा म भन्दा श्रेष्ठ अरु कुनै पनि वस्तु छैन, यो कुरा सिद्ध भयो ॥१२॥

-★-★-★-

**त्रिभिर्गुणमयैर्भावैरेभिः सर्वमिदं जगत्।**
**मोहितं नाभिजानाति मामेभ्यः परमव्ययम्॥**

**यी तीनै गुणरूपभावहरूले मोहित यो सम्पूर्ण जगत्(प्राणीमात्र) यी गुणहरूबाट अतीत अविनाशी मलाई जान्दैनन्॥१३॥**

नन्वेवं सर्वेश्वरं सर्वनियन्तारं सर्वकारणं दोषास्पृष्टं स्वतन्त्रत्वामयं जनः कुतो न जानाति, जानाति चेत्कथं संसारी भवतीत्यपेक्षायामाह–त्रिभिरिति। एभिः पूर्वोक्तैस्त्रिभिस्त्रिविधैर्गुणमयैर्भावैः सत्त्वादिगुणकार्यभूतैर्बुद्धीन्द्रियशरीरैर्हर्षलोभकामक्रोधादिभिश्च सर्वमिदं जगत् जीवजातं मोहितमाच्छादितज्ञानं सत् मां नाभिजानाति, सर्वेषां प्रवर्तकः स्वतन्त्रः कश्चिदीश्वरोऽस्तीति सामान्यतया जानदपि साक्षात्परब्रह्मैव परवैकुण्ठाधिपः स्वभक्तहितायावतीर्णो वासुदेव इति मां न जानाति। कथं भूतं मामेभ्यो गुणमयभावेभ्यः परं तेभ्यो विलक्षणं तैरस्पृष्टमित्यर्थः। अत एवाव्ययं व्ययरहितं कदाचिदपि गुणशक्त्याद्यन्यथाभावशून्यमित्यर्थः। एवम्भूतगुणशक्त्यादिमतो मम साक्षाज्ज्ञानाभावान्नोक्तत्रिगुणमयभावहेतुमायाऽतिक्रमस्तत एव न संसारोपरम इति भावः॥

यस्तो सबैका नियन्ता, सबैका कारण, सबै दोषहरूबाट रहित र स्वतन्त्र हजुरलाई मनुष्य किन जान्दैन? र यदि हजुरलाई जान्दछ भने संसारी किन हुन जान्छ? यस प्रश्नको अपेक्षामा भगवान् भन्नुहुन्छ–
पूर्वमा भनेको तीनै प्रकारको गुणमय भावहरूबाट, अर्थात् सत्वादि गुणहरूको कार्यभूत, बुद्धि, इन्द्रिय, शरीर, हर्ष, लोभ, काम, क्रोधादिले यो सम्पूर्ण जगत्, जीव समूह मोहित छ अर्थात् त्यसको ज्ञान ढाकिएको छ। यसै कारण ती मलाई जान्दैनन्। सबैको प्रवर्त्तक र स्वतन्त्र कुनै ईश्वर छ, यस्तो साधारण ज्ञान राखेर पनि यो जगत् मलाई यस्तो जान्दैन कि म साक्षात् परब्रह्म र पर वैकुण्ठको मालिक हूँ र मैले आफ्ना भक्तहरूका हितका लागि वसुदेवको पुत्र भएर अवतार लिएको छु। यो जगत् मलाई, यी गुणमय भावहरू बाट पर अर्थात् विलक्षण वा उनीहरूबाट अस्पृष्ट, र अव्यय अर्थात् मेरो गुण शक्ति कहिल्यै पनि मसँग विलग हुँदैनन्, यस्तो जान्दैन। भन्नुको भाव यो कि गुण शक्ति आदिले युक्त, मेरो साक्षात् ज्ञानको अभावले उक्त त्रिगुणमय भावको हेतु, मायालाई, जीव पार गर्न सक्दैन, यसैले त्यो संसारी बनिरहन्छ ॥१३॥

-★-★-★-

**दैवी ह्येषा गुणमयी मम माया दुरत्यया।**
**मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते॥**

**किनकी मेरो यो गुणमयी दैवी मायाबाट पार पाउन अत्यन्त कठिन छ। जो केवल मेरो मात्र शरण पर्दछन् ती यस मायालाई पार गर्दछन्॥१४॥**

ननु "गौरनाद्यन्तवती जनित्री भूतभाविनी। सितासिता च रक्ता चे"त्यादिश्रुतेर्मायायागुणप्रवाहस्यानाद्यन्तत्वाभिधानात्तन्मोहितानां जीवानामस्वातन्त्र्येण तत्परिहर्त्तुमशक्यत्वात्न्न कदाऽपि कस्यापि मायाऽतिक्रमः स्यादित्याशङ्क्यासाधारणं मायातरणोपायमाह–दैवीति। "एको देवः सर्वभूतेषु

'गौरनाद्यन्तवति जनित्री भूतभाविनी सितासिता च रक्ता च' यस वेदको वचन द्वारा मायाको गुणहरूको प्रवाहलाई आदि र अन्त्य हीन भनिएको छ। यस कारण त्यसबाट मोहित जीव स्वतन्त्रता रहित हुनाले त्यसलाई छोड्न असमर्थ भई त्यसलाई कहिल्यै पनि पार गर्न सक्दैन। यस्तो शंका भएकोले भगवान् मायालाई तर्ने असाधारण उपाय बताउनु हुन्छ।

गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा। कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेताः केवलो निर्गुणश्चे"ति श्रुतिप्रतिपादितस्य देवस्य स्वतो द्योतमानस्य चिदानन्दघनस्य कर्मनियन्तुः सर्वव्यापकत्वेऽपि चेतनाचेतनजगद्गुणदोषसम्बन्धवर्जितस्यातिशयसाम्यशून्यस्य भगवतो नियम्यभूता दैवी एषा त्रिगुणमयकार्यद्वारा सर्वप्रत्यक्षा गुणमयी, सत्त्वरजस्तमोगुणमयात्मिका मम परमेश्वरस्य सर्वशक्तेः सर्वकार्य्योत्पादनशक्तिर्मायाशब्दवाच्या। "मायां तु प्रकृतिं विद्यान्मयिनं तु महेश्वरमि"तिश्रुतेः। दुरत्यया ममानुग्रहमन्तरेणोपायसहस्त्रैरपि दुस्तरा, हि निश्चितमेतत्तथापि 'नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान्। तद्योयोदेवानां प्रत्यबुध्यत स एव तदभवत्तथर्षीणां तथा मनुष्याणिमि'त्यादिश्रुतिभ्योऽनन्ता एव जीवास्तेषां मध्ये ये केचिन्मामेव सर्वेश्वरं सर्वज्ञं सर्वशक्तिं मायानियन्तारं प्रपद्यन्ते स्वपुरुषार्थाभिमानं च विहाय साधनसाध्यरूपं निश्चित्य सर्वात्मना भजन्ते, आनुकुल्यसङ्कल्पादिकार्पण्यां तां षड्विधां शरणागतिं मयि कुर्वन्तीत्यर्थः। त एवैतां मम मायां तरन्ति वर्जयन्तीत्यर्थः। न त्वन्ये, अवधारणस्योभयत्र सम्बन्धात्- "ये प्रपन्ना हृषीकेशं न ते मुह्यन्ति मानवाः। भये महति मग्नानां त्राता नित्यं जनार्दन॥" इति भीष्मपर्वणि वचनं, वामने प्रह्लादश्चाह "ये संश्रिता हरिमनन्तममध्यमाद्यं नारायणं सुरगुरुं शुभदं वरेण्यम्। शुद्धं खगेन्द्रगमनं कमलालयेशं ते धर्मराजभवनं न विशन्ति धीरा"इति॥

जुन देवको बारेमा श्रुतिमा यो भनेको छ- "एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा। कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेताः केवलो निर्गुणश्च॥" अर्थात् त्यो देव एक, सबै जीवहरूमा निविष्ट, सर्वव्यापी, सबै जीवहरूको अन्तरात्मा, कर्मको अध्यक्ष, सबै जीवहरूको अधिष्ठान, साक्षी, चेतन, केवल अर्थात् अद्वितीय र निर्गुण छ यस्तो स्वयं प्रकाशमान, चित्, आनन्दघन, कर्मको नियन्ता, सबैमा व्यापक भएर पनि चेतन र अचेतन जगत्को गुण दोषले रहित, र आफुभन्दा बढेर समानता राख्नेहरूबाट रहित, म सर्वज्ञ र शक्तिशाली परमेश्वरको वशवर्त्तिनी यो दैवी, त्रिगुणमाय कार्य द्वारा प्रत्यक्ष हुनेवाली र यसैले सत्त्व, रज, तम गुणमयात्मिका शक्ति, जो सबै कार्यहरूलाई उत्पन्न गर्नेवाली हो, माया भनिन्छ। यसमा श्रुतिको प्रमाण भनिन्छ। यथा- 'मायां तु प्रकृतिं विद्यान्मायिनं तु महेश्वरम्' अर्थात् मायालाई प्रकृति र भगवान्को मायी अर्थात् मायावाला वा मायाको स्वामी जान्नु। यस मायालाई मेरो अनुग्रहको बिना हजारौं अरु उपाय गरे पनि पार पाउन दुष्कर छ। यस्तो भए पनि अर्थात् यस मायालाई पार गर्न दुष्कर छ, यस्तो भएर पनि अनन्त जीवहरूमा जो कोही म सर्वेश्वर, सर्वज्ञ, सर्व शक्तिमान र मायाको नियन्ता को शरणमा आउँदछ अर्थात् आफ्नो पुरुषार्थको अभिमान र अरु साधनहरूलाई छोडेर मलाई नै साधन र साध्य संझेर भज्दछ, तात्पर्य यो कि आनुकूल्य संकल्पादि, कार्पण्यान्त छः प्रकारको शरणागति मसँग गर्दछ भने त्यही नै मेरो यस मायालाई तर्दछ अर्थात् छोड्दछ, अर्को होईन। यस श्लोकमा 'हि' र 'एव' यो दुई अवधारण छ यसको भाव यो हो कि जो मायापति भगवान्को शरणागति ग्रहण गर्दछन् भगवान् कृपा गरेर उनीहरूबाट नै माया छुटाई दिनुहुन्छ, अरु बाट होईन। यसको प्रमाणमा महाभारतको भीष्म पर्वको वचन छ-"ये......जनार्दन॥" अर्थात् जो भगवान्को शरण मा आउँदछन् ती मनुष्य मोहमा पर्दैनन्। ठूलो भयंकर भय मा डुबेकालाई जनार्दन नित्य रक्षा गर्नुहुन्छ। वामन पुराणमा प्रह्लादको पनि यस्तै वचन छ। यथा- ये ..........धीराः॥"
अर्थात् जो धीर पुरुष अन्त एवं मध्य रहित, आदिभूत, नारायण, देउताहरूको गुरु, शुभदाता, वरेण्य, शुद्ध, गरुड़गामी, कमलालयको ईश भगवान्को शरणमा जान्छन् उनीहरूले धर्मराजको भवनमा जानुपर्दैन॥१४॥

-★-★-★-

## न मां दुष्कृतिनो मूढाः प्रपद्यन्ते नराधमाः।
## माययापहृतज्ञाना आसुरं भावमाश्रिताः॥

**मायाले जसको ज्ञान अपहरण गरेको छ (अर्थात् नष्ट गदिएको छ) ती आसुर भावको आश्रय लिने र मनुष्यहरूमा धेरै नीच तथा पापकर्म गर्ने मूढ़ मनुष्य मेरो शरणमा आउँदैनन्॥१५॥**

यद्येवं तर्हि सर्वेऽपि शास्त्राचार्यद्वारेण सर्वानर्थहेतोर्मायायास्तारकं भगवन्तमेव निश्चित्य किन्न प्रपद्यन्ते इत्यपेक्षायां

यदि यस्तो कुरा हो भने त शास्त्र र आचार्यको द्वारा हजुर नै मायाबाट, जुन सबै अनर्थहरूको कारण हो, छुटाईदिनेवाला निश्चय

दुःकृतयोगादित्याह–न मामिति। दुष्कृतिनोऽनादिपाप- सञ्चयवत्त्वान्मां न प्रपद्यन्ते, ईश्वरेश्वरं ज्ञात्वा सर्वात्मना न भजन्ते। ते च दुष्कृततारतम्याच्चतुर्विधाः मूढा नरराधमा माययाऽपहृतज्ञाना–आसुरं भावमाश्रिता इति। तत्र शास्त्रप्रतिपादितमपि भगवत्तत्त्वं बुद्धिमान्द्याज्ज्ञातुमनर्हाः प्राकृतेष्वेव देहेन्द्रियेषु रता मूढाः। ये च शास्त्रप्रतिपादितं भगवत्तत्त्वं श्रोतुं ज्ञातुं बुद्धिमन्तोऽपि मदाश्रयणेऽश्रद्दधानाः प्राकृतविषयासक्तास्ते नराधमाः, सम्यक्शास्त्रनिर्णीतमपि मत्स्वरूपगुर्णश्वर्य्यविषयं ज्ञानं दुष्कृतबाहुल्यान्मय्य- सम्भावना जनिता तद्विपरीतार्थप्रतिपादकयुक्तिरूपा कपटपर्यार्या माया, तयाऽपहृतं नाशितं ज्ञानं येषां ते माययाऽपहृतज्ञानाः। ये चानादितो मद्विमुखा मत्स्वरूपगुणैश्वर्यमाश्रिताः त एते उत्तरोत्तरं पापबहुलाः॥१५॥

गरेर हजुरको नै शरणमा मान्छे किन आउँदैनन्? यस प्रश्नको उत्तरमा भगवान् यहाँ दिनुहुन्छ–अनादि पाप संचयको कारण ती दुष्कर्मी मेरो शरणमा आउँदैनन् अर्थात् मलाई ईश्वरहरूका पनि ईश्वर संझेर मेरो सबै प्रकारले भजन गर्दैन। दुष्कर्मको तारतम्यले मनुष्य चार प्रकारका हुन्छन्, यथा- मूढ, नराधम, मायाद्वारा अपहृत ज्ञानवाला र आसुरी भाववाला। मूढ ती हुन् जो शास्त्रद्वारा प्रतिपादित पनि भगवत्तत्त्वलाई बुद्धिमान्द्यको कारण जान्नमा अयोग्य छ र प्राकृत देह, इन्द्रिय आदि मा सदा रत रहन्छ। नराधम ती हुन् जो शास्त्रद्वारा प्रतिपादित भगवत्तत्त्वलाई सुन्न जान्नमा बुद्धिमान भएर पनि मेरो शरणमा अश्रद्धा गर्दछन् र प्राकृत विषयहरूमा आसक्त हुन्छन्। तेस्रो ती हुन् जो शास्त्रद्वारा पूर्णतया निर्णीत पनि मेरो स्वरूप, गुण र ऐश्वर्य विषयक ज्ञानलाई दुष्कृतिको अधिकताले म मा सबै असम्भव मान्दछन् र उल्टो कुरा साबित गर्नको लागि विपरीत भावनाबाट उत्पन्न युक्ति रूप कपट गर्दछन्। यसै कपटलाई माया भनिन्छ र यसै मायाले उनीहरूको ज्ञानलाई नष्ट गरिदिएको छ। र चौथा ती हुन् जो अनादि कालबाटै मसँग विमुख छन्। यी मेरो स्वरूप, गुण र ऐश्वर्य विषयक दृढ़तर ज्ञानलाई पनि अंगीकार गर्दैनन् बरु मसँग र मेरा भक्तसँग द्वेष गर्दछन्। यी आसुरी वा राक्षसी भावलाई प्राप्त भएका छन्। यी चारैमा उत्तरोत्तर पापको अधिकता छ॥१५॥

-★-★-★-

## चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन।
## आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभः॥

**हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! पवित्र कर्म गर्ने अर्थार्थी, आर्त, जिज्ञासु र ज्ञानी अर्थात् प्रेमी यी चारप्रकारको मनुष्य मेरो भजन गर्दछन् अर्थात् मेरो शरण मा आउँदछन्॥१६॥**

ये तु पुण्यकर्माणस्ते श्रद्धाप्रीतियुक्ता मां भजन्त इत्याह–चतुर्विधा इति। सुकृतिनः पूर्वजन्मसुकृतसञ्चयो विद्यते येषु ते जना मां भजन्ते, तेऽपि सुकृततारतम्याच्चतुर्विधाः, हे अर्जुन! तत्र शत्रुव्याध्याद्यापदा ग्रस्त आर्त्तः। स यदि पूर्वं कृतपुण्यश्चेत्तर्हि तदार्त्तिनिवृत्तिमिच्छन्मां भजते, अन्यथा दुर्गारुद्रविनायकभैरवादीन्भजते। आर्त्तो यथा जरासन्धा कारागृहीतो राजसमूहः द्युतसभायां वस्त्राकर्षणे द्रौपदी, ग्राहगृहीतो गजेन्द्रश्च वृकासुरात्पलायमानो रुद्रश्च। जिज्ञासुस्तत्त्वज्ञानार्थी मुमुक्षुः, यथा विदेहरहूगणयदुमुचुकुन्दादिः

जो पुण्य कर्मवाला हुन्, ती मलाई श्रद्धा र प्रीतिपूर्वक भज्दछन्। यसै कुरालाई भगवान् यहाँ भन्नुहुन्छ।

जुन मान्छेहरूको पूर्वजन्मको सुकृत संचित छ, ती मलाई भज्दछन्। हे अर्जुन! ती आफ्नो सुकृतको तारतम्यले चार प्रकारका छन्। पहिला तीन अर्थात् आर्त्त, जिज्ञासु र अर्थार्थी कामनावाला छन् र चौथा ज्ञानी कामना रहित र एक निश्चय वाला हुन्।

शत्रु, व्याधि आदि दुःखबाट त्रसित छन्, ती आर्त्त भनिन्छन्। यस्तो पुरुष, यदि त्यसले पूर्वमा पुण्य गरेको छ भने आफ्नो दुःखको निवृत्तिको लागि मलाई नै भज्दछ र यदि पूर्व पुण्य गरेको छैन भने दुर्गा, रुद्र, विनायक, भैरव आदिलाई भज्दछ। यस्ता आर्तहरूका उदाहरण यी हुन्- जरासन्धको कारागारमा वन्दीभएका राजागण, जुवाको सभामा वस्त्र तानिदै गरिएकी द्रौपदी, ग्राहले खुट्टा च्यापेको गजेन्द्र, वृकासुरको डरले भाग्दै गरेका रुद्र।

। अर्थार्थी भोगैश्वर्यविशिष्टपदभ्रष्टस्तल्लिप्सुर्मां भजते। यथेन्द्रो ध्रुवः सुग्रीवो विभीषणश्च। एते त्रयोऽपि स्वाभीष्टं प्राप्य मद्भजनात्क्रमेण मायां तरन्ति। ज्ञानी च सम्यङ् निर्णीतात्मपरमात्मतत्त्वविवेकज्ञः, स च निष्काम एव तीर्णमायः सन् मामेव परमप्राप्यं जानन् भजते। यथा सनकादिर्नारदशुकप्रह्लादभीष्मोद्धवादिः॥१६॥

जिज्ञासु त्यो मोक्षार्थी हो, जो तत्त्व ज्ञानलाई जान्न इच्छुक छ। जस्तै जनक, रहूगण, यदु, मुचुकुन्द आदि। अर्थार्थी त्यो हो जो भोग ऐश्वर्यले युक्त पदबाट भ्रष्ट भएर त्यस पदलाई चाहन्छ र यसैले मलाई भज्दछ। जस्तै इन्द्र, ध्रुव, सुग्रीव, विभिषण आदि। यी तीनै आफ्नो अभीष्टलाई पाएर मेरो भजन गरेर मायालाई पार गर्दछन्।ज्ञानी त्यो हो, जसले पूर्वरीतिले निर्णीत आत्म-परमात्म-तत्त्व विवेकको जानकारी प्राप्त गरेको छ। त्यो कामना रहित भएर मायालाई पार गर्दै र मलाई नै परम प्राप्य संझेर मेरो भजन गर्दछ, जस्तो सनकादि, नारद, शुक, प्रह्लाद, भीष्म, उद्धव आदि॥१६॥

-★-★-★-

**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः॥**

**ती चार प्रकाको भक्तहरूमा ममा निरन्तर लागेको अनन्य भक्तिवाला ज्ञानी अर्थात् प्रेमी भक्त नै श्रेष्ठ हो किनकी प्रेमी भक्तलाई म अत्यन्तै प्रिय छु र त्यो भक्त पनि मलाई अत्यन्तै प्रिय छ॥१७॥**

तेषां मध्ये ज्ञानी श्रेष्ठ इत्याह-तेषामिति। तेषां चतुर्विधानां मध्ये ज्ञानी तत्त्वज्ञानवान्विशिष्यते, सर्वोत्कृष्टो भवतीत्यर्थः। कुतः? यतो नित्ययुक्तः मयि भगवति सदाऽविच्छेदेनावेशितचेताः। किञ्च यथा सकामः पुरुषः स्त्रीपुत्राद्यात्मीयवर्गे नित्यावेशितमना अपि राजाद्यन्यं भजते, न तथाऽयं किञ्चिदन्यं भजते। किन्तु-एकभक्तरिति। देवान्तरसाधनान्तरफलान्तरसम्बन्धान्तरनिरासेन सर्वदैव-साधनफलसम्बन्धरूपे एकस्मिन् समाभ्यधिकशून्ये भगवति चिदानन्दघने मय्येव मद्विषयिकैव भक्तिरर्चनवन्दनकीर्तन ध्यानादिभजनं यस्य सः "भजनं भक्तिरित्युक्तं वाङ्मनः कायकर्मभिः। भज इत्येष वै धातुः सेवायां परिकीर्तितः॥ तस्मात्सेवा बुधैः प्रोक्ता भक्तिशब्देन भूयसि"ति स्मृतेः। हि यस्माज्ज्ञानिनोऽहमत्यर्थं प्रियः, अनवधिकप्रीतिविषयः। तथैवोक्तं विष्णुपुराणे प्रह्लादेन "या प्रीतिविवेकानां विषयेष्व-नपायिनि। त्वामनुस्मरतः सा मे हृदयान्नापसर्पतु"। श्रीपराशरोऽप्याह "स त्वासक्तमतिः कृष्णे दंश्यमानो

यी चारै प्रकारका मध्ये ज्ञानी श्रेष्ठ हो, यसैलाई भन्नुहुन्छ-

यी चारै मा तत्त्वलाई जान्नेवाला ज्ञानी सर्वोत्कृष्ट हो। किनकी त्यो नित्य युक्त छ अर्थात् अविच्छिन्न रूपले म भगवान् मा आफ्नो चित्त लगाईरहन्छ, र जस्तै सकामी पुरुष आफ्नो पुत्र, स्त्री आदि आत्मीय वर्गमा नित्य मन लगाई रहे पनि राजा आदिको सेवा गर्दछ, त्यस्तो यो ज्ञानी गर्दैन। त्यो एक भक्तिवाला हुन्छ, अर्थात् अर्कै देउता, अर्कै साधन, अर्कै फल र अर्कै सम्बन्ध भन्दा हटेर सबै देउता, साधन, फल र सम्बन्ध रूप एक म चिदानन्दघन भगवान्, मा जो भन्दा ठूलो वा जसको समान दोस्त्रे कोही छैन, भक्ति गर्दछ। भक्ति गर्नुको मतलब हो कि त्यो मेरो अर्चन, बन्दन, कीर्त्तन, ध्यान आदि गर्दछ। स्मृतिको वचन छ कि-
"भजनं ......भूयसी॥" अर्थात् वचन, मन, शरीर र कर्मद्वारा भजन गर्नुलाई भक्ति भनिन्छ। भज धातुको अर्थ जस बाट भक्ति बनेको छ, सेवा गर्नु हो।। यसैले भक्ति शब्दको अर्थ पण्डितहरू सेवा गर्नु नै भन्दछन् जसरी म ज्ञानीहरूलाई अत्यन्त प्रिय छु अर्थात् म भन्दा धेरै प्रीति उनीहरूलाई अर्को विषयमा छैन। यसै प्रकारको विष्णुपुराणमा प्रह्लादको वचन छ- "या..... हृदयान्नापसर्पतु॥" अर्थात् विषयमा जो गाढ़ा प्रीति अविवेकीहरूलाई हुन्छ त्यस्तो नै गाढ़ा प्रीति हजुरलाई स्मरण गर्दै मेरो हृदयबाट न निस्कियोस अर्थात् हजुरमा प्रीति बनिरहोस।

पराशरजी ले पनि विष्णुपुराणमा प्रह्लादको विषयमा भनेका छन् कि- "स ......तत्स्मृत्याल्हादसंस्थित॥"

अर्थात् त्यो प्रह्लाद कृष्णमा आसक्तमति थियो, यसैले धेरै ठूलो साँपले डस्दा पनि भगवान्‌को स्मरण को आह्लाद मा निरत भएकाले आफ्नो शरीरलाई जानेनन्।अर्थात साँपको डसाई र त्यस बाट

महोरगैः। न विवेदात्मनो गात्रं तत्स्मृत्याल्हादसंस्थित" इति। स च ज्ञानी तथैव ममाप्यतिप्रियः। "यथा त्वं सह पुत्रैश्च यथा रुद्रो गणैः सह। यथा श्रियाभियुक्तोऽहं तथा भक्तो मम प्रिय" इतिश्रुतेः। "नास्य भक्तात्प्रियतरो लोके कश्चन विद्यते" इति मोक्षधर्मे नारायणवचनाच्च॥१७॥

हुने दुःख लाई त्यसले जानेन। श्रुति मा भनेको छ- "यथा.....प्रिय॥" अर्थात् जस्तो तिमी(ब्रह्मा) आफ्ना पुत्रहरूका साथ, रुद्र आफ्ना गणहरूका साथ र म लक्ष्मीको साथ युक्त(प्रेममा डुबेर) बस्दछु त्यस्तो नै मेरो भक्त मलाई अति प्रिय छ।

फेरि मोक्षधर्ममा नारायणको वचन छ, यथा- "नास्य.....विद्यते" अथात् भगवान्‌लाई यस जगत्‌मा आफ्ना भक्त भन्दा अधिक प्यारा अरु कुनै वस्तु छैन॥१७॥

-★-★-★-

## उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम्।
## आस्थितः स हि युक्तात्मा मामेवानुत्तमां गतिम्॥

**पहिले भनिएको सम्पूर्ण चारै प्रकारका भक्त धेरै उदार(श्रेष्ठ भाववाला) हुन्। तर प्रेमी त मेरो नै स्वरूप हो यो मेरो मत हो। किन भने त्यो मसँग अभिन्न हुन्छ तथा म(भगवान्)भन्दा श्रेष्ठ अर्को कुनै गति छैन भनि ममा नै दृढ भाव राख्दछ॥१८॥**

एवं चेत्तर्हि किमार्त्तादयस्त्रिविधा भक्तास्तेऽप्रिया अधमा इति चेत्तत्राह-उदारा इति। एते आर्त्तादयः सर्व एव उदारा वदान्याः, जन्मान्तरेषु बहुपुण्यानि कृतवन्तः। न ह्यल्पपुण्यैर्मद्भक्ता भवन्ति। "जन्मान्तरसहस्रेषु तपोदान-समाधिभिः। नराणां क्षीणपापानां कृष्णे भक्तिः प्रजायते" इति वचनात्। अन्यथा मद्भक्ता न भवेयुः, किन्तु रुद्रादित्य-विनायकादिदेवभक्ता भवेयुस्तदपेक्षया मम भक्ताः सकामा अपि श्रेष्ठा मद्भजनादेव शनैर्निष्कामा भूत्वा मोक्षार्हा भवन्ति। "न मे भक्तः प्रणश्यति, तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम्। ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते" इत्यादिना वक्ष्यमाणत्वात्। ज्ञानी तु आत्मैव मनोदेहो वेति मे मम मतं सम्मतं, न ह्यात्मनोऽधिकः कश्चिदपि प्रियो भवति। हि यस्मात्स युक्तात्मा एकान्ती भक्तो मामेवानुत्तमां न ह्युत्तमां विद्यते यस्यास्तामनुत्तमां गतिं गम्यते इति गतिः प्राप्यं फलमाश्रित इत्यर्थः॥१८॥

यदि यस्तो कुरा हो भने के आर्त्त, जिज्ञासु, अर्थार्थी यी तिनै प्रकार का भक्तहरू अप्रिय र अधम छन्? भगवान् उत्तर दिनुहुन्छ कि होईन, यस्तो कुरो होईन। आर्त आदि सबै नै उदार अर्थात् श्रेष्ठ हुन् र यी जन्मान्तरमा धेरै पुण्य गरेका छन्, कारण कि अल्प पुण्य गरेर कोई पनि मेरो भक्त हुन सक्दैन। भनिएको पनि छ कि-'जन्मान्तरसहस्रेषु .....प्रजायते॥' अर्थात् हजारौं जन्मको तप, दान, समाधि बाट जब मनुष्यहरूको पाप क्षीण हुन्छ, तब कृष्णको भक्ति उब्जिन्छ। अतएव पूरा पुण्य नभएकोले मनुष्य मेरो भक्त हुन सक्दैन, किन्तु रुद्र, सूर्य, गणेश आदि देउताहरूको भक्त हुन्छ। यी अन्य देव भक्तहरू भन्दा मेरो सकाम भक्त पनि श्रेष्ठ हो, किनकी मेरो भजनले बिस्तारै बिस्तारै निष्काम भएर त्यो मोक्षको योग्य हुन पुग्दछ। भगवान् अगाडि गएर भन्नुहुनेछ कि- 'न मे भक्तः प्रणश्यति' 'तेषां ....ते॥' अर्थात्- मेरो भक्तको नाश हुँदैन। सदा युक्त भएर प्रीति पूर्वक भजन गर्नेवालालाई म बुद्धियोग दिन्छु जसबाट त्यो मलाई प्राप्त गर्दछ। तर ज्ञानी त मेरो आत्मा वा मन वा देह नै हो, यही मेरो मत हो। र आत्मा भन्दा अ-धिक कसैलाई कुनै चिज प्रिय हुँदैन। यसको कारण यो हो कि त्यो मेरो एकान्त भक्त मलाई नै आफ्नो श्रेष्ठ गति(फल) संझेर मेरो नै भरोसा गर्दछ र मलाई नै परमप्राप्य फल संझिन्छ॥१८॥

-★-★-★-

## बहूनां जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते।
## वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः॥

**अनेकौं जन्म पछि अन्तिम जन्ममा अर्थात् मनुष्य जन्ममा सबैथोक परमात्मा नै हो भनेर जो प्रेमी भक्त मेरो शरण हुन्छ त्यस्तो महात्मा अत्यन्त दुर्लभ हुन्छ॥१९॥**

ज्ञानी भक्तस्त्वतिदुर्लभ इत्याह-बहुनामिति। न ह्यल्पसु-कृतजन्मना मत्प्रपत्तिनिष्ठा भवति, किन्तु बहूनां पुण्याचार-

ज्ञानीभक्त धेरै नै दुर्लभ छ। यसैलाई भन्नुहुन्छ-

थोरै जन्मको पुण्यले मेरो शरणमा निष्ठा हुँदैन। धेरै जन्म सम्म पुण्य गरेमा अन्तमा अर्थात् चरम जन्ममा ज्ञानी पुरुष मेरो शरणमा

विशिष्टजन्मनामन्ते चरमजन्मनि ज्ञानवान्सन्मां प्रपद्यते साधन फलसम्बन्धरूपं निश्चित्य निरतिशयप्रेम्णा भजते। ज्ञानस्य स्वरूपमाह–वासुदेवः सर्वमिति। "सर्वं खल्विदं ब्रह्म तज्जलानिति शान्त उपासीते"ति श्रुतेर्यथा तज्जत्वात् तल्लत्वादत्तदनत्वात्सर्वस्य जगतो ब्रह्मत्वं तथा "योऽयं तवागतो देव समीपं देवतागणः। स त्वमेव जगत्सृष्टा यतः सर्वगतो भवान्। सर्वगत्वादनन्तस्य स एवाहम–वस्थित"इत्यादिवाक्येभ्यो वासुदेवस्य सर्वगतत्वात्सर्व–रूपत्वमित्येवम्भूतज्ञानवान्स महात्मा महाविवेकसम्पन्न आत्मा बुद्धिर्यस्यातः सुदुर्लभः, मनुष्याणां कोटिष्वपि कश्चिदेव स्यादिति भावः। तथोक्तं श्रीभागवते "मुक्तानामपि सिद्धानां नारायणपरायणः। सुदुर्लभः प्रशान्तात्मा कोटिष्व–पि महामुने॥"इति॥

आउँदछ अर्थात् मलाई नै साधन, फल र सम्बन्ध रूप निश्चय गरेर निरतिशय प्रेमले मलाई नै भज्दछ। अब ज्ञानको स्वरूप भन्नुहुन्छ। संपूर्ण जगत् वासुदेव नै हो। श्रुतिमा पनि भनेको छ– 'सर्वं....उपासीत' अर्थात् यो सबै ब्रह्म हो, किनकी त्यसैबाट उत्पन्न हुन्छ, र त्यसैमा लय हुन्छ र त्यसैमा स्थित छ। शान्त भएर मुमुक्षु यस प्रकार उपासना गर्नु। जस्तो यस श्रुति वाक्य मा ब्रह्मबाटै उत्पन्न, ब्रह्ममा नै लय र ब्रह्मद्वारा नै त्यसको चेष्टा हुने कारण सबै जगत् ब्रह्म हो, त्यस्तै नै तल लेखिएको स्मृति वाक्यहरूमा सर्वगत हुनाले वासुदेवलाई सर्वस्वरूप भनिएको छ–

स्मृतिवाक्य– "योऽयं ......एवाहमवस्थित॥" हे देव! हजुरको नजिकै जुन यी देवतागण आएका छन् यिनीहरू हजुर नै हो किनकी जगत्को सृष्टा हजुर सर्वगत हुनुहुन्छ। अनन्त भगवान् सर्वगत हुनाले हामी पनि त्यही नै हौं। वासुदेवको विषयमा यस्तो ज्ञान सम्पन्न महाविवेकी महात्मा धेरै नै दुर्लभ छ। अर्थात् करोडौं मनुष्यहरूमा कतै गएर यस्तो मनुष्य पाईन्छ। श्रीमद्भागवतमा पनि यहि कुरा भनिएको छ– "मुक्तानामपि .....महामुने॥" अर्थात् हे महामुने! करोडौं मुक्तसिद्धहरूमा पनि नारायणपरायण र प्रशान्त आत्मावाला मनुष्य पाउन दुर्लभ छ॥१९॥

–★–★–★–

**कामैस्तैस्तैर्हृतज्ञानाः प्रपद्यन्तेऽन्यदेवताः।**
**तं तं नियममास्थाय प्रकृत्या नियताः स्वया॥**

**अनेकथरिका कामनाले गर्दा ज्ञान नाश भएका मनुष्य आफ्नो प्रकृति अर्थात् स्वभावले नियन्त्रित भई अनेक थरिका देउताहरूलाई, ती देउताहरू सँग सम्बन्धित नियमहरू धारण गर्दै तिनीहरूकै शरणमा जान्छन्॥२०॥**

तदेवमार्तादिचतुर्विधभक्तेषु ज्ञानिनो दुर्लभत्वकथनादुत्कर्ष उक्तः। इतरेषां त्रयाणामपि क्रमेण निष्कामत्वपूर्वकज्ञानद्वारा क्रमेण मोक्षभागित्वमुक्तमिदानीं स्वभक्तानामेवोत्कर्षद्योत–नाय ये राजसतामसबहुलाः सुकृतहीनाः प्राचीनक्षुद्रकामवासना–निबद्धहृदयास्ते भगवद्व्यतिरिक्तिदेवताराधनपरा भूत्वा संसरन्तीत्याह–कामैरिति चतुर्भिः। तैस्तैरनादिवासना–नुसारिभिः स्त्रीपुत्रवित्तवशीकरणमोहनस्तम्भनशत्रुमार–णोच्चाटनादिविषयैः कामैरमिलाषैर्हृतमपहृतं भगवतः सर्वेश्वराद्वैमुख्योतपादनपूर्वकं तत्तदभिलाषपूरकत्वेनाभि–मतान्यदेवताऽभिमुखीकृतं ज्ञानं ज्ञानकरणमन्तःकरणं येषां तेऽन्यदेवताः श्रीभगवतो वासुदेवादन्याः स्वतः शुद्धिहीनाः कालविद्रुता रजस्तमःप्रधानाः तं तं नियमं तत्तद्देवतासम्ब–न्धिनियमं व्रतदीक्षाचिह्नविधारणतन्मन्त्रस्तोत्रजपादिरूपं तत्तन्त्रेऽभिहितमास्थाय दृढबुद्ध्याऽऽश्रित्य प्रपद्यन्ते, अर्चन

आर्त्त आदि चार प्रकारको भक्तहरूमा ज्ञानीको दुर्लभता वर्णन गर्दै त्यसको उत्कर्ष पनि देखाउनु भयो। फेरि यो पनि भन्नुभयो कि अरु तीन प्रकारका भक्तहरू बिस्तारै बिस्तारै निष्काम पूर्वक ज्ञानद्वारा मोक्षको भागी हुन्छन्। अब आफ्ना भक्तहरूको उत्कर्ष देखाउनको लागि चार श्लोकहरू द्वारा यो भन्नुहुन्छ कि जो राजस–तामस प्रधान र सुकृतहीन पुरुष छ र प्राचीन क्षुद्र कामवासनाहरूले जसको हृदय बाँधिएको छ त्यो मलाई छोडेर अन्य देवताहरूको आराधनामा तत्पर भएर संसार–यात्रा गर्दछन्।

अनादि विषय वासनाको अनुसार स्त्री, पुत्र, धन, वशीकरण, मोहन, स्तम्भन, शत्रुमारण, उच्चाटन आदि अभिलाषाहरूले जुन मनुष्यको ज्ञान, अर्थात् ज्ञानको कारण अन्तःकरण, अपहृत भएको छ अर्थात् यी कामनाहरू जसको अन्तःकरणलाई सर्वेश्वर म भगवान्बाट विमुख गराएर ती ती अभिलाषाहरूको पूर्तिको लागि अन्य देवताहरू प्रति अभिमुख गर्दछन्, त्यो मनुष्य म भगवान्लाई छोडेर अर्कै स्वतः शुद्धि हीन, कालको भयले भाग्दै गरेका, रज र तम प्रधान देवताहरूका नियम अर्थात् तन्त्रमा भनिने व्रत, दीक्षा, चिह्न धारण, मन्त्र, स्तोत्र, जप आदिमा दृढ बुद्धिले स्थित भएर उनीहरूका शरण मा जान्छ। भाव यो हो कि उनैको अर्चन,

स्तवनप्रदक्षिणनमस्कारादिलक्षणभजनेन तदाश्रिता भवन्तीत्यर्थः। तत्रापि स्वया स्वकीयया प्रकृत्या पूर्वाभ्याससंस्कारजन्य स्वभावेन नियता वशीकृता इत्यर्थः॥

स्तवन, प्रदक्षिणा, नमस्कार आदि रूप भजन द्वारा उनीहरूकै आश्रित हुन्छ, किनकी ती पनि आफ्नो पूर्व अभ्यासको संस्कारले उत्पन्न स्वभावको वशीभूत भएर रहन्छन्॥२०॥

-★-★-★-

**यो यो यां यां तनुं भक्तः श्रद्धयार्चितुमिच्छति।**
**तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम्॥**

**जुन भक्त जुन-जुन देउताहरूको श्रद्धापूर्वक पूजन गर्न चाहन्छ, त्यस त्यस देउताहरूमा नै म त्यसको श्रद्धालाई दृढ़ बनाई दिन्छु॥२१॥**

ननु "सर्वदेवमयो हरिरि"ति वचनात्सर्वदेवमयस्य हरेरेव सर्वदेवतामूर्त्तयस्तासां मध्ये मां कञ्चिदपि देवतामूर्त्ति भजतस्तद्द्वारेण हरिभक्तिः स्यादिति नाशासनीयमित्याह- यो यो यामिति। अन्यदेवताभक्तानां मध्ये यो यो भक्तः यां यां तनुं देवतामूर्ति श्रद्धया अर्चितुमर्चयितुमिच्छति, तदर्थं प्रवर्त्तते तस्य तस्य कामिनो भक्तस्य तामेव देवताविषयां श्रद्धां पूर्ववासनानुरूपामचलां दृढां विदधामि साधयामि तत्रैव नियोजयामि, नतु स्वविषयां श्रद्धां कारयामीत्यर्थः॥

यहाँ यो शंका हुन सक्दछ कि यस वचनको अनुसार कि 'सर्वदेवमयो हरि' अर्थात् भगवान् सर्वदेवमय हुन् सबै देवताहरूका मूर्त्ति हरिका नै मूर्त्ति हुन् र यसैले कुनै पनि देवता को भजन गर्नाले भगवान् को भक्ति हुन सक्दछ। यस शंकाको उत्तरमा भगवान् भन्नुहुन्छ कि यस्तो आशा गर्नु व्यर्थ छ। किनकी अन्य देवताहरूका भक्तमा जो जो जुन जुन देवताको मूर्त्तिलाई श्रद्धाको साथ पूजाको इच्छा गर्दछ र त्यसमा प्रवृत्त हुन्छ त्यस त्यस कामनायुक्त भक्तको उहि उहि देवता विषयक पूर्व वासनानुरूप श्रद्धालाई दृढ़ गराउँदछु। मतलब यो कि म उहि उहि देवतामा त्यसलाई लगाउँदछु। मेरो विषयमा त्यसको श्रद्धा गराउँदिन॥२१॥

-★-★-★-

**स तया श्रद्धया युक्तस्तस्याराधनमीहते।**
**लभते च ततः कामान्मयैव विहितान्हि तान्॥**

**मैले दृढ़ गरिदिएको श्रद्धाले युक्त भएर त्यो मनुष्य त्यस देउताको सकामभाव पूर्वक उपासना गर्दछ र त्यसको त्यो कामना पूरा पनि हुन्छ तर त्यो कामना पूर्ति मद्वारा नै गरिएको हो॥२२॥**

ततश्च स कामी भक्तस्तया मद्विहितया देवताविषयया श्रद्धया युक्तस्तस्या देवतातन्वा राधनमाराधनमीहते करोति। ततो देवतातन्वाः सकाशात्कामानभिलषितान्विषयान्पूर्वं सङ्कल्पितांल्लभते च। ननु त्वदितरदेवताभक्तस्य तत्प्रसा- दात्स्वेष्टसिद्धौ तस्या देवतायाः स्वातन्त्र्यं सिद्धं, तर्हि किं ते वैशिष्ट्यं? यतस्तवाराधनस्यैव श्रैष्ठ्यं स्यादिति चेत्तत्राह- मयैव विहितानिति। सर्वकर्मफलप्रदात्रा तत्तद्देवताऽन्तर्या- मिणा मयैव विहितांस्तदाराधनानुसारं निर्मितान् नहि देवतानां स्वातन्त्र्येण फलदाने शक्तिः। हि प्रसिद्धमेतश्छास्त्रे "कर्मा- ध्यक्षः सर्वभूताधिवास" इति वेदे "एकस्त्वमस्य लोकस्य

यो कामनायुक्त भक्त मैले विधान गरेको त्यस श्रद्धाले युक्त भएर त्यसै देवताको आराधना गर्दछ र त्यसै बाट पूर्वमा संकल्पित अभिलषित पदार्थलाई पाउँदछ।

अब यहाँ यो शंका छ कि यदि अन्य देवताहरूका भक्त उनीहरूका प्रसादले आफ्नो इष्ट सिद्धि प्राप्त गर्दछन् भने, त यी देवता स्वतन्त्र छन् भने हजुरको विशेषता नै के भयो र हजुरको आराधना गर्नमा कुन चैं श्रेष्ठता हुन्छ र? यसै शंकालाई हटाउँदै भगवान् भन्नुहुन्छ कि यी देवता कर्मको फल दिनमा स्वतन्त्र शक्तिवाला होईनन्। म बाट विधान गरिएको फलहरूलाई अर्थात् जुन फलहरूलाई मैले ती देवताहरूका अनुसार निर्माण गरेको छु, त्यो मात्रै फल दिन सक्दछन् किनकी म उनीहरूको अन्तर्यामी भएको कारण सर्वकर्म को फलदाता हूँ। यो कुरा वेदमा पनि प्रसिद्ध छ। यथा-'कर्माध्यक्षः सर्वभूताधिवासः' अर्थात् भगवान् कर्मको अध्यक्ष र सबै जीवहरूमा स्थित हुनुहुन्छ। शास्त्र पनि यस कुरालाई अनुमोदन गर्दछ जस्तै-"एकस्त्वमस्य ... तुभ्यम्॥" अर्थात् हजुर एक मात्र यस लोक को स्त्रष्टा, संहारकर्त्ता, अध्यक्ष

स्रष्टा संहारकस्तथा। अध्यक्षश्चानुमन्ता च गुणमायाविवर्जितः। लोकयात्राप्रसिद्ध्यर्थं स्रष्टब्रह्मादिरूपिणे। इज्य–फलात्मने तुभ्यमि"त्यादिसात्त्वततन्त्रे "सकलफलप्रदो हि विष्णुरि"त्यादिशास्त्रे भगवत एव फलप्रदत्वं प्रसिद्धम्॥

र अनुमन्ता हुनुहुन्छ। गुण र मायाबाट विवर्जित हुनुहुन्छ। लोकयात्राको लागि सृजना गरिएका ब्रह्मा आदि रूप र यज्ञको फलस्वरूप हुनुहुन्छ। सास्वत्तन्त्रमा पनि लेखिएको छ कि 'सकलप्रदो हि विष्णुः' अर्थात् सकल फल दिने एकमात्र विष्णु हुन्, यस प्रकार भगवान् नै सकल फलको दाता हुनुहुन्छ यो कुरा शास्त्रमा प्रसिद्ध छ॥२२॥

–★–★–★–

**अन्तवत्तु फलं तेषां तद्भवत्यल्पमेधसाम्।**
**देवान्देवयजो यान्ति मद्भक्ता यान्ति मामपि॥**

**परन्तु ती अल्पबुद्धिहरूलाई ती देउताहरूका आराधनाको फल पनि अन्तमय (नाशवान्) नै मिल्दछ। ती देउताहरूका पूजा गर्ने मनुष्यहरू पनि उनै देउताहरूलाई प्राप्त गर्दछन् तर मेरा भक्तहरू मलाई नै प्राप्त गर्दछन्॥२३॥**

स्यादेतदन्यदेवभक्ता अपि त्वद्दत्तानेव कामान्देवेभ्यो लभन्त इति। एवमपि न तेषां काऽपि क्षतिः फलसिद्धेरविशेषाद–तस्तेभ्यस्त्वद्भक्तानां को विशेष इति चेत्तत्राह–अन्तवदिति। तु शब्दो महद्विशेषं दर्शयति। अल्पमेधसां मन्दप्रज्ञत्वेन तत्त्वविवेचनेऽकुशलानां तेषां तत्तद्देवताभक्तानां तदेव विशेषाराधनजं फल तदध्यक्षेण मया दत्तमपि साक्षान्मदारा–धनाभावादन्तवद्विनाश्येव भवति। कुतः ?यती देवानिन्द्रा–दीन्ये यजन्ते ते देवयजस्तानेवान्तवतः कालविद्रुतान् देवान्यान्ति प्राप्नुवन्ति। यद्युपास्यभूता देवा एवान्तवन्तस्तर्हि तद्दत्तं फलमन्तवद्भवेदिति किमु वक्तव्यमिति भावः। मद्भक्तास्तु अपिशब्दातप्रथमं मत्प्रसादात्कामानपि प्राप्नु–वन्ति पश्चान्मद्भजनप्रभावान्निष्कामा भूत्वा मामनन्तस्व–रूपगुणमहिमानं यान्ति प्राप्नुवन्ति। अतः सकामा अपि मद्भक्ता अन्य देवताभक्तवन्न संसरन्तीति महान्विशेषः॥

यो कुरा होस कि अन्य देवताहरूका भक्त पनि हजुरले नै दिएको फललाई ती देवताहरूबाट पाउँदछन् तर यसमा उनीहरूको हानी चैं के भयो र, किनकी फल सिद्धि त उनीहरूलाई हुन्छ, भने हजुरका भक्त र ती देवताहरूका भक्तमा के नै फरक भयो र? यस प्रश्नको उत्तरमा भगवान् भन्नुहुन्छ। 'तु' शब्दको व्यवहारले भगवान्ले आफ्ना भक्तहरू र अन्य देवताहरूका भक्तमा महान् विशेषता बताउनु भयो। मन्द बुद्धि हुनाले कारण तत्त्वको विवेचनमा अकुशल अन्य देवताहरूको भक्तहरूलाई आ–आफ्ना देवताहरूको आराधनबाट उत्पन्न फल मेरो द्वारा पाए पनि साक्षात् मेरो आराधनाको अभावले ती फल विनाशी हुन्छन् अर्थात् चिरस्थायी हुँदैनन्। यसको कारण यो हो कि इन्द्रादि देवताहरूलाई पूजा गर्नेहरू उनै अन्त हुने र कालको भयले भाग्ने देवताहरूलाई प्राप्त गर्दछन् र जब उनीहरूका उपास्य देउताहरू नै अन्तवाला हुन् अर्थात् कुनै काल खण्डमा ती देउताहरूको नाश हुन्छ भने तब उनीहरूले दिएको फल पनि अन्तवाला अथवा नाशवान् हुन्छ, यस मा भन्नु नै के छ र? मेरो भक्त यी अन्य देवभक्त भन्दा विलक्षण छ। यी मेरा भक्त मेरो प्रसादले आफ्ना सम्पूर्ण अभिलाषाहरूलाई पनि प्राप्त गर्दछन्। पछि मेरो भजनको प्रभावले निष्काम भएर ती मलाई नै, जो अनन्तस्वरूप गुणवाला हूँ, पाउँदछन्। (अपि शब्दको भाव यही हो)। मतलब यो कि कामनायुक्त भएपनि मेरा भक्त अन्य देवभक्तहरूका समान संसारको चक्करमा पर्दैन्। यही नै उसको विशेषता हो॥२३॥

–★–★–★–

**अव्यक्तं व्यक्तिमापन्नं मन्यन्ते मामबुद्धयः।**
**परं भावमजानन्तो ममाव्ययमनुत्तमम्॥**

**बुद्धिहीन मनुष्य मेरो परम, अविनाशी र सर्वश्रेष्ठ भावलाई नजानेर अव्यक्त अर्थात् मनबुद्धि आदि इन्द्रियहरू भन्दा पर सच्चिदानन्दघन परमात्मा मलाई, मनुष्य झैं शरीरधारण गर्नेवाला मान्दछन्॥२४॥**

यद्देवं त्वदाराधनमेव सर्वोत्तमं चेत्तर्हि सर्वोऽपि लोको

यदि हजुरको आराधना नै सर्वोत्तम हो भने मनुष्य अन्य देवहरूलाई

देवान्तरं हित्वा अनन्तफलदं देवदेवं सर्वेश्वरं त्वामेव निश्चित्य किमिति न भजतीत्यत आह–अव्यक्तमिति। "यं न देवा न मुनयो न चाहं न च शङ्करः। जानन्ति परमेशाख्यं तद्विष्णोः परमं पदमि"ति वचनात् ब्रह्मशिवाद्यगोचर ईश्वरेश्वरः सर्वैर्ब्रह्मादिभिः स्वाभीष्टलाभाय कर्मभिराराधितः परमकारुण्यादाश्रितवत्सलतवाच्च सर्वलोकहितायाजहत्स्वस्वरूपगुणशक्तिरेवाहं वसुदेवगृहेऽवतीर्ण इत्येवमव्ययं परं सर्वोत्कृष्टमत एवानुत्तमं मम भावं प्रादुर्भावमजानन्तोऽबुद्धयः सद्गुर्वाश्रयणाभावान्मज्ज्ञानार्हबुद्धिहीना इतः पूर्वमव्यक्तमनभिव्यक्तमिदानीं कर्मविशेषाद्वसुदेवगृहे व्यक्तिमापन्नं जन्म प्राप्तं क्षत्रियसजातीयं कञ्चिज्जीवविशेषं मन्यन्ते, नतु परमेश्वरमतो न मां कर्मभिराराधयन्ति। किन्तु मनुष्यबुद्ध्या मां विहायेन्द्रादिदेवानेवाराधयन्तीत्यर्थः॥

छोडेर हजुरलाई नै, अनन्त फलदाता, देवहरूका पनि देव र सर्वेश्वर निश्चय गरेर, हजुरको नै पूजा किन गर्दैनन्? यस प्रश्नको उत्तर भगवान् यहाँ दिनुहुन्छ। 'यं न देवा न मुनयो न चाहं न च शंकरः। जानन्ति परमेशस्य तद्विष्णोः परमं पदम्', जसलाई न देवता, न मुनि, न शंकर र न म अर्थात् ब्रह्मा नै जान्दछौं, तीनै परमेश्वरको यो परमपद वा स्थान हो। यस्ता, ब्रह्मा शिवादिबाट अगोचर, ईश्वरहरूका पनि ईश्वर, ब्रह्मादिक सबै बाट आफ्नो अभीष्ट प्राप्तिको लागि आराधित म, परम करुणाको वशमा भएर, आश्रितहरू माथि वत्सलताको कारण र सबै लोकहरूको हित का लागि आफ्नो स्वरूप गुणशक्तिहरूलाई नछोडिकनै वसुदेवको घर मा अवतार लिएको हूँ। यस्तो मेरो अव्यय, सर्वोत्कृष्ट र उत्तम(सर्वश्रेष्ठ) भाव अर्थात् जन्मलाई नजानेरै मूढ़हरू सद्गुरुको आश्रयको अभावले, मलाई जान्न योग्य बुद्धिले हीन भएर यस्तो संझिन्छन् कि यस समयको पूर्वमा म अव्यक्त (अप्रकट) थिएँ र कर्मविशेषको वशमा भएर वसुदेवको घरमा जन्म लिएको हूँ। मलाई तिनीहरू क्षत्रिहरूकै सजातीय कुनै जीवविशेष नै मान्दछन्, मलाई परमेश्वर मान्दैनन्। यसैले कर्मद्वारा मेरो आराधना गर्दैनन्। म मा मनुष्य बुद्धि भएको कारण ती, मलाई छोडेर इन्द्रादि देवहरूको पूजा गर्दछन्॥२४॥

–★–★–★–

**नाहं प्रकाशः सर्वस्य योगमयासमावृतः।**
**मूढोऽयं नाभिजानाति लोको मामजमव्ययम्॥**

**जो मूढ़ मनुष्यहरू मलाई अज र अविनाशी भनेर (दृढ़भावले) मान्दैनन् तिनीहरूका सामुन्ने योगमायाद्वारा ढाकिएको म प्रकट हुन्न॥२५॥**

ननु सर्वयोगिध्येयस्य दिव्याप्राकृताद्भूताविष्कृतरूपस्य शङ्खचक्रगदादिदिव्यायुधधारिणश्चतुर्भुजस्य श्रीवत्सकौस्तुभवनमालाकिरीटकुण्डलादिदिव्यलक्ष्मवतो ब्रह्मरुद्रादिजयिनो मन्मथगर्वापहारिणो युद्धे त्रिनयनसहस्राक्षादिजेतुर्नरकासुरजरासन्धपौण्ड्रकचेदिपादिसंहर्त्तुः सर्वदेवासुरमनुष्येष्वसम्भावितपराक्रमस्य सर्वेश्वरस्य तव ज्ञानं सर्वेषां कुतो न जायते, इत्यपेक्षायामाह। सर्वजीवविजातीयस्वरूपगुणैश्वर्योऽप्यहं सर्वस्य लोकस्य जनस्याहं न प्रकाशः, अप्राकृतेन स्वेन रूपेण प्रकटो न भवामि। किन्तु कस्य चिदेव स्वानन्यभक्तस्य प्रकटो भवामि। तथोक्तं नारायणीयाख्याने श्वेतद्वीपपतिनां नारदं प्रति– "एकतश्च द्वितश्चैव त्रितश्चैव महर्षयः। इदं मे समनुप्राप्ता मम दर्शनलालसाः॥ न च मां ते ददृशिरे नतु द्रक्ष्यति कश्चन। ऋते ह्येकान्तिकं चैषां त्वं चैवैकान्तिको ममे"ति॥

सबै योगिहरूको ध्येय, दिव्य, अप्राकृत रूपवाला, शंख, चक्र, गदादि दिव्य आयुधहरूलाई धारण गर्ने, चतुर्भुज, श्रीवत्स, कौस्तुभ, वनमाला, किरीट, कुण्डल आदि दिव्य चिह्नहरूले युक्त ब्रह्मा रुद्रादिलाई जय गराउने वाला, कामदेवको गर्वलाई गरण गर्ने, युद्धमा शिव इन्द्रादिलाई जित्ने, नरकासुर, जरासन्ध, पौण्ड्रक, शिशुपाल आदिलाई मार्ने, सबै देवता, राक्षस, मनुष्यहरूबाट पराक्रम को थाह नपाईने, सबै ईश्वरहरू का ईश्वर हजुरको ज्ञान सबैलाई किन हुँदैन? यसै प्रश्नलाई लक्ष्य गरेर भगवान् भन्नुहुन्छ– सबै मध्ये विजातीय स्वरूप, गुण र ऐश्वर्यवाला म सबैको सामुन्ने आफ्नो अप्राकृत (दिव्य) स्वरूपबाट प्रकट हुँदिन तर कुनै आफ्नो अनन्य भक्तको सामुन्ने आफ्नो अप्राकृत रूपलाई प्रकट गर्दछु। नारायणीय आख्यान मा नारदजीको प्रति श्वेतद्वीपपतिको यस्तो वचन छ– "एकतश्च....मम॥" अर्थात् एकत्, द्वित्, त्रित् महर्षिहरू म भएठाऊँ आए, तर तिनीहरूलाई मैलै देख्न सकिन अर्थात् कुनै पनि मलाई देख्न सक्दैन। केवल त्यही मात्र मलाई देख्न सक्दछ जो मेरो एकान्त भक्त हो। तिमी नै मेरो एकान्त भक्त हौ। यस्तो हुने कारण बताउनु हुन्छ। योग अर्थात् मेरो संकल्प र त्यसको अधीन भएर जो माया(योगमाया)

तत्र हेतुमाह–योगमायासमावृत्त इति। योगो मत्सङ्कल्पस्त–दधीना माया योगमाया मनुष्यसमानरूपता, तया अयम–भक्तलोको मां यथाऽवस्थितदिव्याप्राकृतरूपं न जानात्विति मदिच्छावशवर्तिन्या मायारूपजवनिकया समावृत: सम्य–गच्छन्न: न दर्शनमुपगच्छामि। तया योगमायया मूढ आवृ–तज्ञानोऽयं मद्भक्तव्यतिरिक्त: सर्वोऽपि लोको मामजं जीववत्कर्मनिमित्तजन्मशून्यं स्वेच्छया लीलार्थमाविर्भूत–मव्ययमजहत्स्वरूपगुणशक्तिकं नाभिजानाति, साक्षात्पर–मेश्वरोऽयमिति न जानाति। किन्तु मनुष्यविशेषमेव मन्यते॥

अर्थात् मनुष्यको समानरूपता, त्यसले अभक्तहरू मेरो यथार्थ दिव्य र अप्राकृत स्वरूपलाई जान्दैनन्। त्यस प्रकारको मेरो इच्छाको वशवर्त्ती मायारूपी पर्दाबाट पूर्णरूपले आच्छादित भएकोले म मान्छेहरूको दर्शनको विषय हुँदिन। त्यस योगमायाद्वारा मूढ़ भएर अर्थात् ज्ञानाच्छादित भई, केवल मेरा भक्तहरू बाहेक अरु सबै जना म अजन्मालाई जीवहरूको समान कर्मनिमित्त जन्मबाट शून्य, स्वइच्छाले लीलाको निमित्त अवतरित र अनन्तस्वरूप, गुण, शक्तियुक्त जान्दैनन् अर्थात् मलाई साक्षात् परमेश्वर संझिदैनन्। ती यहि मात्र जान्दछन् कि यी कृष्ण पनि एउटा मान्छे नै हुन्॥२५॥

–★–★–★–

## वेदाहं समतीतानि वर्तमानानि चार्जुन।
## भविष्याणि च भूतानि मां तु वेद न कश्चन॥

**हे अर्जुन! जुन प्राणी भूतकालमा भैसकेका छन् तथा जुन वर्तमानमा छन् र जुन भविष्यमा हुनेछन् ती सबै प्राणीहरूलाई त म जान्दछु तर मलाई मेरो भक्तको सिवाय अरु कोही पनि जान्दैन॥२६॥**

योगमायासमावृतोऽहं लोकस्य न प्रकाश इत्युक्तमिदानीं मायाया नियन्तुर्मम तया कथञ्चित्कदाचिदपि न ज्ञानावरणं किन्तु तद्वश्यानामेवत्यतो मां न जानन्तीत्याह–वेदाहमिति। अहं परमेश्वर: स्वयोगमायया सर्वान् जीवान् व्यामोहयन्नपि स्वयं सर्वदाऽप्रतिबद्धज्ञान: समतीतानि बहुकालतो विनष्टानि वर्त्तमानानि च भविष्याणि चेति कालत्रयवर्त्तीनि भूतानि स्थारवजङ्गमानि सर्वाणि वेद, जानामि हे अर्जुन! अतोऽहं सर्वदाऽखण्डज्ञानत्वात्सर्वज्ञ:। मां तु सर्वदा सर्वत्र विद्यमानमपि मायावश्य: कश्चन कोऽपि मद्भक्तिवर्जितो न वेद, अतो मायामोहिततवान्मां न प्रायेण भजत इत्यर्थ:॥

योगमायाद्वारा घेरिई रहेका कारण मलाई मान्छे देख्न सक्दैनन् यो कुरा पूर्वका दुई श्लोकहरू द्वारा भनेर आएको हो। अब यहाँ यो भन्नुहुन्छ कि मायाको नियन्ता भएको कारण त्यस मायाद्वारा मेरो ज्ञानको कहिल्यै पनि र अलिकति पनि आवरण हुँदैन, तर मायाको अधीन रहने जीवहरूको ज्ञानावरण हुन्छ। यसैले जीवहरू मलाई जान्दैनन्। आफ्नो योगमाय द्वारा जीवहरूलाई मोह गर्दै म स्वयं सर्वदा ज्ञानावरणहीन भई धेरे समय देखि विनष्ट, वर्तमान र भविष्यमा जो हुन्छन् अर्थात् भूत, भविष्य, वर्त्तमान, तीनै कालमा स्थित सबै स्थावर जंगम आदि जीवहरूलाई जान्दछु। हे अर्जुन! यसैले सर्वदा अखण्डज्ञान भएको कारण म सर्वज्ञ छु। म सर्वदा सर्वत्र विद्यमान छु, तर पनि मायाको वशमा भएको कारण मेरो भक्तिले शून्य कुनै पनि जीव मलाई जान्दैन। मतलब यो कि माया बाट मोहित भएको कारण मान्छेहरू प्राय: मलाई भज्दैनन्॥२६॥

–★–★–★–

## इच्छाद्वेषसमुत्थेन द्वन्द्वमोहेन भारत।
## सर्वभूतानि सम्मोहं सर्गे यान्ति परन्तप॥

**हे भारत! हे शत्रुतापन अर्जुन! इच्छा(राग) र द्वेषले उत्पन्न हुने द्वन्द्व–मोहले मोहित सम्पूर्ण प्राणी संसारमा अनादि काल देखि नै सम्मोह अर्थात् जन्म–मरण (को चक्र)मा परिरहेका छन्॥२७॥**

तदेवं जीवानां भगवत्तत्त्वज्ञानाभावे मायाया हेतुत्वमुक्तं, पुनस्तदज्ञानदार्ढ्ये तत्कार्यस्य हेतुत्वमाह–इच्छाद्वेषस–मुत्थेनेति। इच्छाऽनुकूलविषये राग:, द्वेष: प्रतिकूलविष–

जीवहरूले भगवत्तत्त्वलाई न जान्नुमा माया(भगवत् संकल्प) नै कारण हो, यस्तो भन्नुभयो। अब यो भन्नुहुन्छ कि त्यस ज्ञानलाई दृढ गर्नमा त्यसै मायाको कार्य नै कारण हो।

येऽप्रीतिस्ताभ्यां पूर्वपूर्वकजन्मन्यभ्यस्ताभ्यां समुत्थेन सम्यगुत्पन्नेन शीतोष्णसुखदु:खादिरूपद्वन्द्वनिमित्तेन मोहेन अहं सुखी अहं दु:खीत्यादिविपर्ययरूपेण सर्वभूतानि प्राणिन: सर्गे स्थूलदेहोत्पत्तौ सत्यां सम्मोहं विभ्रमं सुखदु:खादिविशिष्टे नश्वरे देहे एवात्माभिमानं यान्ति प्राप्नुवन्ति। नतु देहाद्यतिरिक्तमात्मानं जानन्ति, कुतो मां सर्वान्तर्यामिणं हे परन्तप! अतो रागद्वेषजन्यसम्मोहा-भिभूतान्त:करणा: प्राणिनो मां सर्वेश्वरं न जानन्त्यतो न भजन्ते ॥

आफ्नो अनुकूल विषयमा रागलाई नै इच्छा भन्दछन् र प्रतिकूल विषयमा अप्रीतिलाई द्वेष भन्दछन्। पूर्वजन्महरू मा अभ्यास गरेको इच्छा द्वेषहरूको द्वारा उत्पन्न, जाडो-गर्मी, सुख दु:ख आदि रूप द्वन्द्वको लागि मोह, अर्थात् म सुखी छु, यस्ता विपर्यय, सबै जीवहरूलाई स्थूल देह उत्पत्ति भए पछि विभ्रम पैदा गर्दछ। अर्थात् जीवलाई सुख दु:खले युक्त नाश हुने शरीरमा आत्माभिमान हुनजान्छ। त्यो आफुलाई अर्थात् आफ्नो आत्मालाई देह भन्दा पृथक् जान्दैन र जब आफ्नो आत्मालाई नै जान्दैन भने म कि, जो सबैको अन्तर्यामी हुँ के जान्दछ? यस प्रकार राग द्वेषले उत्पन्न मोहले अभिभूत अन्त:करणवाला जीव म सर्वेश्वरलाई न जानेर मेरो भजन गर्दैनन्॥२७॥

-★-★-★-

## येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम्।
## ते द्वन्द्वमोहनिर्मुक्ता भजन्ते मां दृढव्रता:॥

**तर जुन पुण्यकर्मा मनुष्यहरूको पाप नष्ट भईसकेको छ ती द्वन्द्वमोहले रहित भई दृढ़व्रती भएर मेरो भजन गर्दछन्॥२८॥**

ननु यदि सर्ग एव सर्वभूतानि सम्मोहं यान्ति चेत्कथं तर्हि केचित्त्वां भजन्तो दृश्यन्त इत्यत आह:-येषामिति। येषां तु पूर्वजन्मसुकृतपुण्यकर्मणां जनानां सुकृतकार्यभूतोत्तम-जन्मवतां पूर्वजन्मकृतपुण्यबलाज्जन्मत एव ज्ञानप्रति-बन्धकं पापमन्तगतमन्तमवसानं प्राप्तं नष्टमित्यर्थ:। ते निष्कामा: सन्तो रागद्वेषनिमित्तेन द्वन्द्वमोहेन विपर्ययज्ञानेन निर्मुक्ता नि:शेषेण मुक्तास्तत्त्वज्ञानार्हा दृढव्रता: सन्तो मां सर्वज्ञं सर्वकारणं सर्वेश्वरं सर्वकर्मफलप्रदातारमाश्रित-वात्सल्यजलधिं भजन्ते, सर्वात्मना सेवन्ते॥

यदि संसारमा सबै जीव मोह मा नै प्राप्त हुन्छन् भने त कुनै हजुरको भजन गर्दै गरेका कसरी देखिन्छन्? भगवान् यसको उत्तर दिनुहुन्छ।

जो मनुष्यले पूर्व जन्ममा सुकृत गरेको छ र त्यसैको बलले उत्तम जन्म पाएका छन्, र ज्ञानको प्रतिबन्धक पाप जसको नाश भएको छ तीनै पापरहित पुरुष, रागद्वेषले उत्पन्न द्वन्द्व मोहबाट छुटेर यस प्रकार तत्वज्ञानको योग्य बनेर, दृढ़व्रत भई सर्वज्ञ, सबैको कारण, सबैको ईश्वर, सबैको कर्मको फलदाता र आश्रितहरू का लागि वात्सल्यको समुद्र, मलाई नै भज्दछन् अर्थात् सबै प्रकारले मेरो सेवा गर्दछन्॥२८॥

-★-★-★-

## जरामरणमोक्षाय मामाश्रित्य यतन्ति ये।
## ते ब्रह्म तद्विदु: कृत्स्नमध्यात्मं कर्म चाखिलम्॥

**बुढ्यौली र मृत्युबाट मुक्ति पाउनको लागि जो मनुष्य मेरो आश्रय लिएर प्रयत्न गर्दछ त्यो त्यस ब्रह्मलाई अर्थात् मलाई, सम्पूर्ण अध्यात्मलाई र सम्पूर्ण कर्महरूलाई जान्दछ॥२९॥**

ततस्ते भगवन्तं भजमाना ज्ञातव्यविशेषान्विज्ञाय कृतार्था भवन्तीत्याह-जरामरणेति। जरामरणयोर्मोक्षाय निरासाय मां भजतां यथेष्टफलदातारमाश्रित्य शरणं गत्वा ये यतन्ति यतन्ते फलाभिसन्धिशून्यानि मत्प्रीणाय कर्माणि कुर्वन्ति, ते शुद्धान्त:करणा: सन्त: तद्ब्रह्म विदु:, कृत्स्नमध्यात्मं च विदु:। कर्म चाखिलं विदु:॥

यस्ता मान्छेहरू भगवान्को भजन गर्दै जान्नयोग्य कुराहरूलाई जानेर कृतार्थ हुन्छन्। यसै कुरा लाई यहाँ भन्नुहुन्छ-

जरा र मरणावस्थाबाट मोक्ष पाउनको लागि मलाई, जो कि भजन गर्नेहरूलाई यथेष्ट फलको दाता हूँ, आश्रय गरेर अर्थात् मेरो शरणमा आएर जो फलको आकांक्षाले शून्य र मेरो प्रीतिको लागि कर्महरू गर्दछन् ती शुद्धान्त:करण भई त्यस ब्रह्मलाई , सबै अध्यात्म(वेदान्त)लाई र सबै कर्मलाई जान्दछन्॥२९॥

-★-★-★-

**साधिभूताधिदैवं मां साधियज्ञं च ये विदुः।**
**प्रयाणकालेऽपि च मां ते विदुर्युक्तचेतसः॥**

**जो मनुष्य अधिभूत तथा अधिदैव र अधियज्ञको सहित मलाई जान्दछ, त्यो ममा चित्त लगाउने मनुष्य अन्तकालमा पनि मलाई नै जान्दछ अर्थात् प्राप्त हुन्छ॥३०॥**

अन्यानपि वेतृत्र्ह्नन्समुचीय तद्वेदनफलं वदन्नध्यायमुपसंहरति-साधिभूताधिदैवमिति। अधिभूतेनाधिदेवेन च तथा अधियज्ञेन च सह मां येऽर्थार्थिनो ज्ञानिनो वा विदुः, ते सर्वे प्रयाणकालेऽपि मरणसमयेऽपि स्वप्राप्यफलानुगुणं मां विदुः। ब्रह्माध्यात्माधिभूतादिशब्दानामर्थमनन्तराध्यायेऽर्जुनप्रश्नपूर्वकं श्रीभगवानेव वक्ष्यति॥ स्वैश्वर्यं भक्तश्रैष्ठ्यं च बन्धमोक्षादिकारणम्। स्वभक्तकृपयैवेह सप्तमे हरिणोदितम्॥

अरु जान्न योग्य वस्तुहरूको पनि उल्लेख गरेर र तिनीहरूलाई जान्नुको फल भन्दै यस अध्यायको समाप्ति गर्नुहुन्छ।

अधिभूत, अधिदैव र अधियज्ञको साथ मलाई जो अर्थार्थी वा ज्ञानी जान्दछन् ती सबै मरणकालमा पनि आफ्नो प्राप्य फलको अनुरूप नै मलाई जान्दछन्।

ब्रह्म, अध्यात्म, अधिभूत, आदि शब्दहरूको अर्थ अर्जुनद्वारा सोधिएपछि भगवान् अगाडिको अध्यायमा भन्नुहुनेछ॥३०॥

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां ज्ञानविज्ञानयोगो नाम सप्तमोऽध्यायः॥७॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथाष्टमोऽध्यायः

## अर्जुन उवाच

**किं तद्ब्रह्म किमध्यात्मं किं कर्म पुरुषोत्तम।**
**अधिभूतं च किं प्रोक्तमधिदैवं किमुच्यते॥**

**हे पुरुषोत्तम! त्यो ब्रह्म के हो? अध्यात्म के हो? कर्म के हो? अधिभूत कसलाई भनिन्छ? र अधिदैव भनेर केलाई भनिन्छ? ॥१॥**

पूर्वाध्यायान्ते यथाधिकारिज्ञेया ब्रह्माध्यात्मादिसप्तपदार्था भगवता निर्दिष्टास्तद्व्याख्यारूपोऽयमष्टमाध्याय आरभ्यते। तत्र निर्दिष्टमात्रान्मुमुक्षुभिर्ज्ञातव्यान् ब्रह्माध्यात्मादिपदार्थान् बुभुत्सुरर्जुन उवाच– किं तद्ब्रह्मेति द्वाभ्याम्। जरामरणमोक्षाय भगवन्तं त्वामाश्रित्य यतमानानां ज्ञातव्यतयोक्तं तद्ब्रह्म किं ?किमध्यात्मम्, आत्मानं देहमधिकृत्य तस्मिन्प्राधान्यतया तिष्ठत्यध्यात्मं किं विवक्षितं ?तथा कर्म चाखिलमित्यत्र कर्म किं कीदृशं विवक्षितं ?त्वं सर्वज्ञो जानासि नान्य इति सम्बोधयति–पुरुषोत्तम इति। अधिभूतं च किं प्रोक्तं भूतान्याकाशादीन्यधिकृत्य यत्कार्यं तदधिभूतशब्देनोच्यते किं वाऽन्यत्? अधिदैवं किमुच्यते देवानामधिष्ठातृ इन्द्रादि किमन्यद्वा? ॥

पूर्व अध्यायको अन्तमा भगवान्ले डेढ़ श्लोकहरूमा यथाधिकार पुरुषहरू द्वारा जान्न योग्य अध्यात्म आदि सात पदार्थहरूलाई संक्षेपमा भन्नुभयो। यस आठौं अध्यायमा उनै पदार्थहरूको व्याख्या गर्नुहुन्छ। पछाडि जुन ब्रह्म, अध्यात्म आदि पदार्थहरूको भगवान्ले केवल निर्देश गर्नुभयो, मुमुक्षुहरूको जान्न योग्य, ती पदार्थहरूलाई राम्रोसँग जान्नको लागि अर्जुनले भगवान्सँग सोधे। पहिला दुई श्लोकमा अर्जुनका प्रश्न छन्। हे पुरुषोत्तम!(पुरुषोत्तम भनेर भगवान्लाई सम्बोधन गर्नुको यो अर्थ हो कि हजुर सर्वज्ञ हुनुहुन्छ र मेरो प्रश्नको उत्तर हजुर नै दिन सक्नुहुन्छ अरु होईन) हजुरको आश्रय गरेर यत्नशील पुरुषहरूलाई जरामरणबाट छुटकारा पाउनको लागि जुन ब्रह्मलाई जान्नुपर्दछ त्यो ब्रह्म के हो? जो आत्मा अर्थात् शरीर माथि अधिकार गरेर त्यसमा प्रधानताले स्थित छ त्यो अध्यात्म के हो? यत्नशील पुरुषहरूको द्वारा जान्न योग्य कर्म के हो? अधिभूत के हो? आकाशादि भूतहरूमाथि अधिकार गरेर जुन कार्य हुन्छ त्यो नै अधिभूत भनिन्छ वा अर्को कुनै? अधिदैव कसलाई भन्दछन्? देवताहरू माथि अधिकार गर्ने इन्द्रादिकलाई नै अधिदैव भनिन्छ अथवा अन्य कसैलाई? ॥१॥

–★–★–★–

**अधियज्ञः कथं कोऽत्र देहेऽस्मिन्मधुसूदन।**
**प्रयाणकाले च कथं ज्ञेयोऽसि नियतात्मभिः॥**

**त्यसै गरी अधियज्ञ भनेको को हो? र त्यो यस देहमा कसरी रहन्छ? हे मधुसूदन! वशीभूत अन्तःकरण द्वारा अन्तिम समयमा हजुरलाई कसरी जान्न सकिन्छ? ॥२॥**

अधियज्ञः यज्ञेऽधिकृतः यदुद्देशेन यज्ञो निर्वर्त्यते स तत्सम्प्रदानभूतोऽत्रास्मिन्यज्ञाधिकारिजने क इन्द्रादिदेवविशेषो वा सर्वाधिष्ठाता सर्वात्मा परमेश्वरो वा ?परमेश्वरश्चेत्सोऽस्मिन्देहे तद्बहिर्वा ?स चाधियज्ञः कथं केन प्रकारेण तस्याधियज्ञतेत्यर्थः। दैत्यराजनाशकस्य तदैतत्संशयनिवारणं किय–

हे मधुसूदन! (मधुसूदन सम्बोधन गर्नुको अभिप्राय यो हो कि हजुर मधुनामको दैत्यराजलाई मार्नेवाला हुनुहुन्छ यसैले मेरो संशयलाई टाढा भगाउनु हजुरको लागि केहि मुश्किल कुरा होईन।) जसको उद्देश्यले यज्ञ गरिन्छ त्यो यज्ञको सम्प्रदान अधिकारी को हो? इन्द्रादि कुनै खास देउता यज्ञाधिकारी हुन् वा स्वयं सर्वात्मा परमेश्वर नै? यदि स्वयं परमेश्वर नै अधियज्ञ हुन भने त यज्ञकर्त्ताको शरीर भित्र अन्तर्यामीरूपले छन् वा बाहिर? फेरि

दित्याशयेन सम्बोधयति–मधुसूदनेति। प्रयाणकाले मरणसमये नियतात्मभिः संयतचित्तैः कथं ज्ञेयोऽसि॥

उहाँको अधियज्ञता कुन प्रकारको हो? जसले आफ्नो चित्तलाई जीतेको छ, ती प्राण छुट्ने समय आफुले आफैंलाई कसरी जान्न सक्दछ? ॥२॥

–★–★–★–

**श्रीभगवानुवाच**

**अक्षरं ब्रह्म परमं स्वभावोऽध्यात्ममुच्यते।**
**भूतभावोद्भवकरो विसर्गः कर्मसञ्ज्ञितः ॥**

**परम अक्षर नै ब्रह्म हो र परा प्रकृति(जीव)लाई अध्यात्म भनिन्छ। प्राणीहरूको स्थितिलाई प्रकट गर्ने त्यागलाई कर्म भनिन्छ॥३॥**

अर्जुनप्रश्नामुत्तरं क्रमेण त्रिभिः श्लोकैः श्रीभगवानुवाच, तत्र तावत्त्रयाणामुत्तरमेमेनाह–अक्षरमिति। अक्षरं न क्षरति न विनश्यतीत्यक्षरं क्षेत्रज्ञसमष्टिरूपं "अविनाशी वाऽरेऽय–मात्मे"ति श्रुतेः "अव्यक्तमक्षरे लीयते अक्षरं तमसि लीयते" इत्यादिश्रुतेश्चाक्षरशब्दवाच्यं बद्धक्षेत्रज्ञस्वरूपं निर्दिष्टं, परमाक्षरं तु प्रकृतिवियुक्तात्मस्वरूपं ब्रह्मशब्दार्थतयाऽत्र ज्ञेयं, प्रकृतिवियुक्तस्य धर्मभूतज्ञानविकाशाद्ब्रह्म–वत्सार्वज्ञ्योगादित्यर्थः। यद्यपि "एतद्वैतदक्षरं गार्गि! ब्राह्मणा अभिवदन्ती"त्यादिश्रुतौ अक्षरशब्देन परमात्माऽपि निर्दिष्टस्तथाऽप्यत्र परमात्मा नोच्यते "द्वाविमौ पुरुषौ लोके क्षरश्चाक्षर एव च। क्षरः सर्वाणि भूतानि कूटस्थोऽक्षर उच्यते॥" "उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृत" इत्यादिना भगवता स्वयमेवाक्षरात्परमात्मनो भेदेन वक्ष्यमाणत्वात्। स्वभावः प्रकृतिः आत्मानं जीवात्मानम–धिकृत्य कार्यकारणकर्तृत्वादिहेतुत्वेन वर्त्तमानोऽध्यात्म–शब्देनोच्यते "कार्यकारणकतृत्वे हेतुः प्रकृतिरुच्यते" इति वक्ष्यमाणवचनात्। बुद्धीन्द्रियभूतसूक्ष्मरूपेण परिणतः

भगवान् अर्जुनको प्रश्नको उत्तर क्रमशः तीन श्लोकहरूमा दिनुहुन्छ। यस श्लोकमा अर्जुनको पहिलो तीन प्रश्नको उत्तर छ।

जीवको समष्टि वा समूहलाई अक्षर भनिन्छ किनकी त्यसको नाश हुँदैन। आत्मा अविनाशी हुनमा श्रुति नै प्रमाण छ, यथा 'अविनाशी वाऽरेअयमात्मा' अर्थात् यो आत्मा अविनाशी हो। तर श्रुतिले 'अक्षर' शब्दले बद्ध जीवको निर्देश गरेको छ( यथा 'अव्यक्तमक्षरे लीयते, अक्षरं तमसि लीयते' अर्थात् प्रकृति अक्षर वा बद्धजीवमा लीन हुन्छ र अक्षर तम(अन्धकार) मा लीन हुन्छ), यसैले यस श्लोकमा 'परमं अक्षरं' भन्नुभयो। परम अक्षर भन्नुको तात्पर्य यो हो कि प्रकृति-सम्बन्धले छुटकारा पाएका शुद्ध आत्मस्वरूप लाई नै ब्रह्म भन्दछन्, बद्धजीव समूहलाई होईन। प्रकृति-वियुक्त हुनाले शुद्ध आत्मस्वरूपको धर्मभूत ज्ञान को विकास हुन्छ र यसैले त्यो ब्रह्मकै समान सर्वज्ञता आदि गुणवाला हुन जान्छ। यद्यपि 'अक्षर' शब्दले श्रुति परमात्माको पनि बोध गराउँदछ, यथा 'एतद्वेतदक्षरं गार्गि ब्राह्मणा अभिवदन्ति' अर्थात् ब्राह्मणहरू यस अक्षर ब्रह्मको प्रतिपादन गर्दछन् तथापि यहाँ यसको अर्थ परमात्मा होईन, किनकी पन्धौं अध्यायमा भगवान् स्वयं भन्नुहुनेछ कि परममात्मा अक्षर भन्दा भिन्न छ, यथा "द्वाविमौ पुरुषौ लोके क्षरश्चाक्षर एव च। क्षरः सर्वाणि भूतानि कूटस्थोऽक्षर उच्यते॥" "उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृत॥" अर्थात् लोकमा दुई पुरुष प्रसिद्ध छन्, एक क्षर र अर्को अक्षर। सबै भूतहरूलाई क्षर भनिन्छ र सबै भूतहरूमा अचल रूपले स्थित आत्मालाई अक्षर भनिन्छ। र यी दुबै भन्दा विलक्षण जो उत्तम पुरुष छ त्यसलाई नै परमात्मा भनिन्छ।

अध्यात्म कसलाई भनिन्छ? अब यस प्रश्नको भगवान् दिनुहुन्छ। स्वभाव(प्रकृति)लाई नै अध्यात्म भन्दछन् किनकी स्वभाव नै कार्य कारण र कर्त्तृत्व(कर्त्तापन)को आदि हेतु भएर जीवात्मा माथि अधिकार गरेर स्थित छन्। भगवान् को वचन नै यसमा प्रमाण छ। किनकी अगाडी गएर भगवान्ले स्वयं भन्नुभएको छ कि 'कार्यकारणकर्त्तृत्वे हेतुः प्रकृतिरुच्यते अर्थात्

प्रकृत्याख्य: स्वभावश्चेतनाधिष्ठितोऽत्राध्यात्मशब्दवाच्य इत्यर्थ:। तदुभयं प्राप्यतया च मुमुक्षुभिर्ज्ञातव्यम्। भूतानां स्थावरजङ्गमादिभेदभिन्नानां भाव उत्पत्ति: उद्भवो वृद्धिस्तौ भावोद्भवौ करोति यो विसर्ग इन्द्रादिदेवतोद्देशेन द्रव्यत्याग-लक्षणो यज्ञदानादिरूप: स कर्मसञ्ज्ञित: "अग्नौ प्रस्ताहुति: सम्यगादित्यमुपतिष्ठति। आदित्याज्जायते वृष्टिर्वृष्टेरन्नं तत: प्रजे"ति स्मृते:। सोऽपि पुनरावृत्तिहेतुत्वाद्धेयतया मुमुक्षुभिर्ज्ञातव्य:॥३॥

कार्य कारण र कर्त्तापन को हेतु प्रकृति अर्थात् स्वभाव नै हो। भन्नुको भाव यो हो कि बुद्धि र इन्द्रियको सूक्ष्मरूप धारण गरेर स्वभाव सबै जीवहरू माथि अधिकार गरेर बसेको हुनाले नै यसलाई अध्यात्म भन्दछन्। यी दुबै अर्थात् परम अक्षर र अध यात्ममा पहिलो ग्रहण गर्न योग्य र अर्को छोड्न योग्य छ यस्तो मुमुक्षुहरूले जान्नु पर्दछ। जो यज्ञ इन्द्रादि देवताहरूको लागि अग्निमा द्रव्यादि हवन गरेर वा दान दिएर गरिन्छ र जसबाट स्थावर जंगम आदि भूतहरूको उत्पत्ति र वृद्धि हुन्छ त्यसैलाई कर्म भनिन्छ। यस मा स्मृति प्रमाण छ, यथा "अग्नौ प्रस्ताहुतिः सम्यगादित्यमुपतिष्ठति। आदित्याज्जायते वृष्टिर्वृष्टेरन्नं ततः प्रजा॥" अर्थात् 'अग्निमा हवन गरिएको आहुति सूर्यलाई पुग्दछ, सूर्यबाट वर्षा हुन्छ, वर्षाबाट अन्न उत्पन्न हुन्छ र अन्नबाट प्रजा उत्पन्न हुन्छ।' यो कर्म संसारमा बारम्बार ल्याउनेवाला हो। यसैले मोक्ष चाहनेहरूले यसलाई हेय अर्थात् छोड्न योग्य संझिनु पर्दछ॥३॥

-★-★-★-

**अधिभूतं क्षरो भाव: पुरुषश्चाधिदैवतम्।**
**अधियज्ञोऽहमेवात्र देहे देहभृतां वर॥**

**हे देहधारीहरूमा श्रेष्ठ अर्जुन! क्षर अर्थात् नाशवान् पदार्थहरू अधिभूत हुन्। पुरुष अर्थात् हिरण्यगर्भ गर्भ ब्रह्मा अधिदैव हुन् र यस देहमा अन्तर्यामी रूपले रहने म नै अधियज्ञ हुँ॥४॥**

ततस्त्रयाणां प्रश्नानामुत्तरमाह-अधिभूतमिति। अधिभूत-शब्दनिर्दिष्ट: क्षरो भाव:, क्षरतीति क्षरो विनाशी यो भाव:, वियदादिभूतपरिणामविशेषस्तदाश्रय: शब्दस्पर्शादिर्गुणाश्च ऐहिक आमुष्मिकश्च सर्वोऽपि क्षरणस्वभाव:। भूतमात्रम-धिकृत्य भवत्यधिभूतमित्युच्यते। पुरुषो हिरण्यगर्भ: समष्टि जीवात्मा सर्वजीवाभिमानी- ''स वै शरीरी प्रथम: स वै पुरुष उच्यते। आदिकर्त्ता स भूतानां ब्रह्माऽग्रे समवर्त्तते"इति श्रुते:॥ दैवतानि दिग्वातार्कवरुणाश्विनाख्यानि अधिकृत्य सर्वेषां श्रोत्रादिकरणान्यनुगृह्णातीत्यधिदैवतमुच्यते। अधियज्ञ: यज्ञाधिष्ठाता सर्वकर्मप्रवर्त्तक: अत्रास्मिन्यजमानदेहेऽन्तर्यामितया वर्त्तमानोऽहमेवाधियज्ञशब्दनिर्दिष्ट:। यज्ञो हि देहनिर्वर्त्यत्वेन देहायत्तो दृष्टचर:, देहश्च सजीवो मदायत्तस्थितिप्रवृत्ति-

अर्जुनको चौथो, पाँचौ र छैटौं प्रश्नको उत्तर भगवान् यस श्लोकमा दिनुहुन्छ।हे देहभृताम्वर! अर्थात् देहधारिहरूमा श्रेष्ठ अर्जुन (अर्जुनलाई यस प्रकार सम्बोधन गर्नुको भाव यो हो कि तिमी देहधारिहरू मा श्रेष्ठ भएको कारण मलाई, जस्तो म यहाँ आफ्नो बारेमा भन्नेछु, जान्नको लागि योग्य छौ।) क्षर भावलाई अर्थात् नाश हुने स्वभावलाई अधिभूत भन्दछन् किनकी आकाशादि पंचभूतको परिणाम अर्थात् कार्य र उनीहरूका शब्द, स्पर्शादिगुण नश्वर हुन्, चाहे यी यस लोकको हुन् चाहे परलोक(स्वर्ग)को। भन्नुको मतलब यो हो कि यस क्षर भावको अधिकार भूतमात्र माथि छ यसैले यो अधिभूत(भूतहरू माथि अधिकार गरेर स्थित रहने) भनिन्छ।जीव समष्टि(समूह)को अभिमानी हिरण्यगर्भ, सूर्य-मण्डलमध्यवर्ती ब्रह्मालाई पुरुष भनिन्छ (श्रुति प्रमाण-"स वै शरीरी प्रथमः सर्व पुरुष उच्यते। आदिकर्त्ता स भूतानां ब्रह्माग्रे समवर्त्तते॥" अर्थात् ब्रह्मा नै सबै भन्दा पहिले भए, उनैले नै सबैभन्दा पहिले शरीरधारण गरे, उनै सबै जीवहरूका आदि कर्त्ता हुन्, उनैलाई पुरुष भनिन्छ।) यिनै ब्रह्मा अधिदैवत भनिन्छन् किनकी दिक्, वायु, सूर्य, वरुण, अश्विनीकुमारादि नामवाला देवताहरू माथि अधिकार गरेर सबै जीवहरूका आँखा, कान आदि इन्द्रियहरूलाई आफ्नो आफ्नो कामको शक्ति प्रदान गर्नुभयो। भनाई को मतलब हो ती सबैमा यिनको अधिकार छ यसैले यिनै अधिदैवत हुन्। यज्ञकर्त्ता यजमानको शरीरमा, यज्ञको मालिक

कत्वान्मत्प्रवर्त्त्यस्तस्मादहमधियज्ञः। अथवाऽधियज्ञः सर्वयज्ञाधिष्ठाता सर्वयज्ञफलदाता चात्रास्मिन्यज्ञाभिमानीन्द्रा-दिदेवतादेहेऽन्तर्यामितया वर्त्तमानः सर्वयज्ञफलप्रदाता तद्भोक्ता चाहमेवेति हे देहभृतांवर! सर्वप्राणिश्रेष्ठ त्वंमा बोद्धुमर्हसीति सम्बोधनाभिप्रायः इत्यैश्वर्यार्थिनां ज्ञातव्यतयाऽधिभूतादिपदार्था व्याख्याताः॥

सबै कर्महरूलाई गराउनेवाला र अन्तर्यामिरूपले स्थित म नै अधि यज्ञ हूँ। भगवान् अधियज्ञ हुनु दुई तरिकाले जान्न सकिन्छ। एक त यो कि सबै यज्ञ देह को आधीन छ किनकी बिना देह यज्ञ हुनै सक्दैन र जीव युक्त देह भगवान्को आधीन छ त्यसको स्थिति प्रवृत्ति उनै माथि अवलम्बित छ र यस प्रकार भगवान् अधियज्ञ हुनुभयो। दोस्रो यो कि यज्ञको अभिमानी अर्थात् जसको निमित्त यज्ञ गरिन्छ, इन्द्रादि देवताहरूका शरीरमा अन्तर्यामी रूपले भगवान् नै स्थित हुनुहुन्छ र यस प्रकार उहाँ नै सबै यज्ञहरूका फल दिनेवाला एवं भोक्ता हुनुहुन्छ र यसै तरिकाले उहाँ अधियज्ञ प्रमाणित हुनुहुन्छ। ऐश्वर्यलाई चाहनेहरू का लागि भगवान्ले अधिभूतादि पदार्थहरूको व्याख्या गर्नुभयो। यस मा अधिभूतलाई जान्नु संसारबाट वैराग्यको लागि अधिदैवलाई जान्नु कर्मको शुद्धि र अधियज्ञको ज्ञान निरभिमानता को लागि हो॥४॥

-★-★-★-

## अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम्।
## यः प्रयाति स मद्भावं याति नास्त्यत्र संशयः॥

**जो मनुष्य अन्तकालमा भए पनि मेरो स्मरण गर्दै शरीर छोडेर जान्छ, त्यो मेरो स्वरूपलाई नै प्राप्त हुन्छ, यसमा केहि सन्देह छैन॥५॥**

सप्तमप्रश्नस्योत्तरमाह-अन्तकाले चेति। अन्तकाले प्राणवियोगसमये मामेव वासुदेवं भगवन्तं सर्वाभिलाषपूरकं स्मरन्सन् कलेवरं मुक्त्वा यः प्रयाति स मद्भावं याति, मम यो भावो यथोक्ताधियज्ञादिरूपस्तं सत्यज्ञानानन्दस्वरूपं, वा यथा मामनुसन्धत्ते तथाविधाकारं प्राप्नोतीत्यर्थः। अत्र संशयो नास्ति। एतेनान्तकाले कथं ज्ञेयोऽसीत्यस्योत्तरं व्याख्यातम्॥५॥

अर्जुनको सातौं अर्थात् अन्तको प्रश्नको यो कि, अन्त समयमा हजुर कसरी जानिनुहुन्छ, उत्तर भगवान् यस श्लोकमा दिनुहुन्छ। जो मनुष्य प्राण छुट्ने समयमा सबै अभिलाषाहरू पूर्ण गर्नेवाला म भगवान् वासुदेवलाई स्मरण गर्दै आफ्नो शरीरलाई छोड्दछ त्यो मेरो भावलाई नै प्राप्त गर्दछ यसमा केहि पनि संशय छैन। भन्नुको भाव यो कि पछाडि भनिएको अधियज्ञादि रूपलाई वा सत्य, ज्ञान, आनन्छस्वरूपलाई वा मेरो जस्तो प्रकारको स्वरूपलाई स्मरण गर्दै मनुष्य शरीर छोड्दछ, त्यो त्यही स्वरूपलाई प्राप्त गर्दछ॥५॥

-★-★-★-

## यं यं वापि स्मरन्भावं त्यजत्यन्ते कलेवरम्।
## तं तमेवैति कौन्तेय सदा तद्भावभावितः॥

**हे कुन्तीपुत्र! मनुष्य मर्नेबेला (अन्तिम समयमा) जुन जुन भावको स्मरण गर्दै शरीर छोड्दछ त्यो त्यस अन्तिम समयको भावले सधैं भावित हुँदै उसै-उसैलाई नै प्राप्त गर्दछ। अर्थात् मर्नेबेलामा जुन कुरा संझिदै मर्दछ अर्को पल्ट त्यही योनि प्राप्त गर्दछ॥६॥**

अन्तकाले न केवलं मामेव स्मरतो मत्प्राप्तिः, किन्तु यं कञ्चित्स्मरतस्तत्प्राप्तिरेव नियतेत्याह- यं मिति। यं यं भावं देवराजादिविशेषं वा अन्यदपि यत्किञ्चिद्वा स्मरंश्चिन्तयन्नन्ते प्राणत्यागकाले कलेवरं त्यजति, तं तमेव स्मर्य्यमाणं भावमेति प्राप्नोति। तत्तत्स्मरणे हेतुमाह-सदा

अन्तकालमा केवल मेरो नै स्मरण गर्नेवाला लाई मेरो प्राप्ति हुन्छ त्यो कुरा मात्र होईन अपितु जुन कुनै पनि भावलाई अन्त समयमा स्मरण गर्दै देह छोड्दछ त्यसलाई त्यही भाव(रूप-आकार) को प्राप्ति हुन्छ। अब यसैलाई यहाँ भन्नुहुन्छ। जुन-जुन भाव अर्थात् इन्द्रादि विशेषको अथवा अरु कुनै पनि अर्को विषयको, मर्नेबेला स्मरण गर्दै जो शरीर छोड्दछ त्यो उहि स्मरण गरेको भावलाई

तद्भावभावित इति। सदा सर्वस्मिन्काले तस्य भावस्य भावो भावना अनुचिन्तनं तेन भावितो वासितान्तःकरणः॥

प्राप्त हुन्छ। यसको कारण यो हो कि सदा त्यसै विषयको चिन्ताले त्यसको अन्तःकरण त्यस्तै नै हुन जान्छ र यसैले त्यो उहि भावलाई प्राप्त गर्दछ॥६॥

-★-★-★-

## तस्मात्सर्वेषु कालेषु मामनुस्मर युध्य च।
## मय्यर्पितमनोबुद्धिर्मामेवैष्यस्यसंशयम् ॥

**यसैले तिमी प्रत्येक क्षण मेरो स्मरण गर र युद्ध पनि गर मलाई मन र बुद्धि अर्पण गर्ने तिमी निश्चय मलाई नै प्राप्त गर्नेछौ॥७॥**

एवं सामान्यविषयभावनाविशेषात्तत्तत्प्राप्तिर्नियतेत्यतो मत्प्राप्त्यर्थं मुमुक्षुस्त्वं मत्स्मरणमेव कुर्वित्याह-तस्मादिति। यस्मात्सर्वकालाभ्यस्तविषय एवान्त्यकाले मनोनिष्ठा भवति, तस्मात्सर्वेषु मां सर्वेश्वरं सर्वाभीष्टप्रदं निरन्तर-मनुस्मर, अनुचिन्तय। मत्स्मरणविरोधिपापनिरासाय युध्य च। श्रुतिस्मृतिविहितं वर्णाश्रमोचितं युद्धादिकं नित्यनैमित्तिकं कर्म च कुर्वित्यर्थः। एवं नित्यनैमित्तिक-कर्मानुष्ठानेनाशुद्धिक्षयान्मयि सर्वेश्वरे अर्पिते मनोबुद्धी येन त्वया स त्वं सर्वदा मच्चिन्तनपरः सत्मामेवैष्यसि प्राप्स्यसि। असंशयो नास्त्यत्र संशयः॥

समान्य विषयहरूका भावनाविशेषले पनि त्यो त्यो विषयको प्राप्ति निश्चित छ यसैले मोक्षको इच्छावाला तिमीलाई, हे अर्जुन! मलाई प्राप्त गर्नको लागि सदा मेरो नै स्मरण गर्नुपर्दछ। यसैलाई भन्नुहुँदैछ।

मर्नेबेला सधैं गरिआएको अभ्यस्त विषयमा नै मनको निष्ठा हुन्छ यसैले सबै समयमा मलाई नै स्मरण गर, किनकी म सबैको ईश्वर र सबै अभिलषित पदार्थलाई दिनेवाला हूँ। मेरो स्मरणको विरोधी पापहरूलाई निर्मूल गर्नको लागि पनि लड़, अर्थात् श्रुतिस्मृतिविहित आफ्नो वर्णाश्रमको अनुसार युद्ध आदि नित्य नैमित्तिक कर्महरूलाई पनि गर। यी कर्महरू गर्नाले तिम्रो पापको नाश हुनेछ र त्यतिखेर तिमी आफ्नो मन बुद्धि म सर्वेश्वरमा अर्पण गर्न सक्नेछौ, र सदा मेरो नै चिन्तन गर्दै मलाई अवश्य नै पाउने छौ। यसमा केहि संशय छैन॥७॥

-★-★-★-

## अभ्यासयोगयुक्तेन चेतसा नान्यगामिना।
## परमं पुरुषं दिव्यं याति पार्थानुचिन्तयन्॥

**हे पार्थ! अभ्यासयोगले युक्त र अन्यको चिन्तन नगर्ने (भन्नाले अन्यत्र मन नडुलाउने) चित्तले परम दिव्य पुरुषको चिन्तन गर्दै शरीर छोड्ने मनुष्य त्यसै दिव्य पुरुषलाई प्राप्त गर्दछ॥८॥**

तदेवमर्जुनप्रश्नानामुत्तरमुक्त्वा प्राप्तिप्रकारं चाभिधायेदानीं योगिन उपासनप्रकारं वक्तुं तत्तदनुगुणं प्राप्यमाह-अभ्यासेति। अभ्यासोऽहरह उचितेषु सर्वेषु कालेषु उपास्यस्वरूपगुणादेर्मनसा संशीलनम्, स एव योगः समाधिस्तेन युक्तेन तत्रैवाभिनिविष्टेन अत एव नान्यगामिना स्व-ध्येयान्नान्यं विषयं गन्तुं शीलमस्य तेन चेतसा परमं पुरुषं परमेश्वरं दिव्यं द्योतनात्मकमादित्यमण्डल-मध्यस्थमनु चिन्तयन् हे पार्थ! याति प्राप्नोति॥

अर्जुनको प्रश्नको उत्तर दिई र आफ्नो प्राप्तिको बाटो बताएर भगवान् अब योगीहरूको उपासना रीति र त्यसको अनुकूल प्राप्य विषयलाई बताउनु हुन्छ।

प्रतिदिन यथोचित कालमा आफ्नो उपास्य देवको स्वरूप, गुण आदिको मनले चिन्तन गर्ने अभ्यासरूप योग वा समाधिमा लागेको र आफ्नो ध्येय भन्दा अन्यत्र नजाने निश्चल चित्तले दिव्य अर्थात् सूर्य मण्डलमध्यस्थ प्रकाशमय परमपुरुष परमेश्वरको चिन्तन गर्नेवाला योगी त्यसलाई प्राप्त गर्दछ॥८॥

-★-★-★-

**कविं पुराणमनुशासितारमणोरणीयांसमनुस्मरेद्यः।**
**सर्वस्य धातारमचिन्त्यरूपमादित्यवर्णं तमसः परस्तात्॥**

**जो सर्वज्ञ, अनादि, सबैमाथि शासन गर्ने, सूक्ष्म भन्दा पनि अत्यन्त सूक्ष्म, सबैको धारण पोषण गर्ने, अज्ञान भन्दा अत्यन्त पर, सूर्यको झैं प्रकाश-स्वरूप अर्थात् ज्ञानस्वरूप यस्तो अचिन्त्य स्वरूपको चिन्तन गर्दछ॥९॥**

पुनस्तमेव प्राप्यं पुरुषं विशिनष्टि द्वाभ्याम्-कविमिति। कविं सर्वज्ञं, पुराणं पुरातनम्, अनुशासितारं सर्वस्य जगतो नियन्तारम्-अणोरणीयांसम्। अणुपरिमाणकाज्जीवादेरपि तद्व्यापकत्वात्सूक्ष्मतरमित्यर्थः। सर्वस्य धातारम्-सर्वस्य जगत आधारं पोषकञ्च। अचिन्त्यमहिमत्वादि यदित्थ-मित्येवं चिन्तितुमनर्हं रूपं यस्य तम्, आदित्यवत्सकल-जगत्प्रकाशो वर्णः प्रकाशो यस्य तं, तमसः परस्तात्। तमः शब्दवाच्यप्रकृतिकालाभ्यां परस्तादत्यन्तभिन्नमित्यर्थः॥

फेरि दुई श्लोकहरूमा उहि प्राप्त गर्न योग्य परमपुरुषको विशेषणहरू लाई बताउनु हुन्छ। त्यो परमेश्वर सर्वज्ञ, पुरातन, सबै जगत्को शासक, अणुपरिणामवाला जीवहरूका भित्र पनि व्यापक भएको कारण अणु भन्दा पनि सूक्ष्म या सानो, सबै संसारको आधार र पोषक, अचिन्त्यरूप अर्थात् जसको महिमाको विषयमा यो भन्न सकिदैन त्यो यस्तो नै छ वा यति नै छ अथवा अन्य वस्तुहरूको उपमा दिएर जसलाई संझिन सकिंदैन, सूर्यको समान सकल जगत्लाई प्रकाशित गर्ने तेजले युक्त, र तम अर्थात् प्रकृति र काल भन्दा बिल्कुल भिन्न, यस्ता परमपुरुषलाई (मर्नेबेला कसरी प्राप्त गर्ने त्यो कुरा तलको श्लोकमा बताउनुहुन्छ।)॥९॥

-★-★-★-

**प्रयाणकाले मनसाचलेन भक्त्या युक्तो योगबलेन चैव।**
**भ्रुवोर्मध्ये प्राणमावेश्य सम्यक् स तं परं पुरुषमुपैति दिव्यम्॥**

**त्यो भक्तियुक्त मनुष्य अन्त समयमा अचल मनले र योगबलको द्वारा भृकुटीको मध्यमा प्राणलाई राम्रो सँग स्थापित गरेर शरीर छोड्दछ भने त्यस परम दिव्य पुरुषलाई नै प्राप्त हुन्छ॥१०॥**

एवभूतं पुरुषं प्रयाणकाले भक्त्या युक्तो योगबलेन समा-धिबलेन च युक्तः सम्यक् सुषुम्णामार्गेण भ्रुवोर्मध्ये प्राणमावेश्य अत एवाचलेन निश्चलेन चेतसा योऽनुस्मरेत्स तं परं पुरुषं दिव्यं प्रकाशरूपमुपैति प्राप्नोति॥

मर्नेबेला भक्ति र समाधिबलले युक्त भई र प्राणहरूलाई सुषुम्णा मार्गबाट आँखीभुईंहरूका बीचमा राखेर र यसै कारण निश्चल मनले जो मनुष्य स्मरण गर्दछ त्यो त्यस प्रकाशरूप दिव्य परमेश्वरलाई प्राप्त गर्दछ॥१०॥

-★-★-★-

**यदक्षरं वेदविदो वदन्ति विशन्ति यद्यतयो वीतरागाः।**
**यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति तत्ते पदं सङ्ग्रहेण प्रवक्ष्ये॥**

**वेदका ज्ञाताहरू जसलाई अक्षर भन्दछन्, वीतराग यति जसलाई प्राप्त गर्दछन् र साधक जसको प्राप्तिको इच्छा गर्दै ब्रह्मचर्यको पालन गर्दछन् त्यो पद म तिम्रो लागि संक्षेपमा भन्नेछु॥११॥**

सामान्यं योगमुक्त्वेदानीं योगशिरोयोगं वक्तुं प्रतिजानीते-यदक्षरमिति। यदक्षरं वेदविदो ब्राह्मणा वदन्ति। "एतद्वै तदक्षरं गार्गि! ब्राह्मणा अभिवदन्ति, अस्थूलमनण्वह्रस्वम-दीर्घमित्यादिवचनैः प्रतिपादयन्ति। यत् वीतरागा निर्वृत्त-

पछाडिका श्लोकहरूमा सामान्य योगको वर्णन गरेर अब यहाँ श्रेष्ठयोगलाई भन्ने प्रतिज्ञा गर्नुहुन्छ-
वेदज्ञहरू जसलाई अक्षर भन्दछन् अर्थात् तल लेखिएको र अरु वचनहरूले जसको प्रतिपादन गर्दछन्, यथा-'एतद्वै तदक्षरं गार्गि ब्राह्मणाः अभिवदन्ति, अस्थूलमनण्वह्रस्वमदीर्घम्', अर्थात् हे गार्गि! वेदको जानकार ब्राह्मणहरू यस अक्षरलाई यो (ब्रह्म) न स्थूल न

सर्वविषयस्पृहा यतयो यत्नशीला विशन्ति, स्वस्यात्मानं नियामकं परमाधाररूपं साक्षादनुभूय प्रकृतिसम्बन्धविनिर्मुक्ताः सन्तस्तदात्मीयतन्नियम्यतद्व्याप्यतदाधेयतया पृथक् स्थितिप्रवृत्त्यनर्हास्तिष्ठन्ति। यदिच्छन्तो यज्ज्ञातुमिच्छन्तो ब्रह्मचर्यं चरन्ति, तत् पद्यते गम्यते इति पदं प्राप्यं ते तुभ्यं सङ्ग्रहेण सङ्क्षेपेण प्रवक्ष्ये, तत्प्राप्त्युपायं कथयिष्यामीत्यर्थः॥

अणु, न ह्रस्व छ, न त दीर्घ भन्दछन्। यस्तो फेरि जुन अक्षर वा ब्रह्ममा, सबै विषयहरूका इच्छाले रहित यत्नशील पुरुष प्रवेश गर्दछन् अर्थात् यस्ता यत्नशील पुरुष आफ्नो आत्मा(अन्तरात्मा), नियामक, व्यापक, परमाधार रूप भगवान्को साक्षात् अनुभव गरेर, प्रकृतिको सम्बन्ध बाट छुट्दछन् र तब आफुलाई भगवान्को आत्मीय, नियम्य, व्याप्य र आधेय संझेर भगवान् भन्दा पृथक् स्थिति प्रवृत्ति नभएको अनुभव मा स्थित रहन्छन्। फेरि जुन ब्रह्मलाई जान्ने इच्छाले ब्रह्मचर्य धारण गर्दछन् त्यसैलाई प्राप्त गर्न योग्य ब्रह्मको प्राप्तिको उपाय म तिमीलाई संक्षेप मा भन्नेछु॥११॥

-★-★-★-

**सर्वद्वाराणि संयम्य मनो हृदि निरुध्य च ।**
**मूर्ध्न्याधायात्मनः प्राणमास्थितो योगधारणम्॥**

**इन्द्रियहरूको सम्पूर्ण द्वारहरूलाई रोकेर मनलाई हृदयमा निरोध गरी तथा आफ्नो प्राणहरूलाई शिरमा (ब्रह्माण्ड)मा स्थापित गरेर योगधारण गर्नुपर्दछ॥१२॥**

तमेव प्रतिज्ञातमुपायं साङ्गमाह द्वाभ्याम्-सर्वेति। सर्वद्वाराणि श्रोत्रचक्षुरादीन्द्रियद्वाराणि संयम्य बाह्यविषय-ग्रहणायोग्यानि कृत्वा मनश्च हृदि निरुध्य बाह्यविषय-सङ्कल्पशून्यं सम्पाद्य सर्वबाह्यक्रियाहेतुं प्राणं मूर्द्धिर्न भ्रूमध्यादुपरि ब्रह्मरन्ध्रे सुषुम्णामार्गेणावेश्य आत्मनो योगधारणां समाधिस्थैर्यमास्थितः सन्॥

अब दुई श्लोकहरूबाट प्रतिज्ञात उपायहरूलाई साङ्गोपाङ्ग सहित भन्नुहुन्छ। नाक, कान, आँखा आदि सबै इन्द्रियद्वारहरू संयमित गरेर अर्थात् बाहिरको विषयलाई ग्रहण गर्न अयोग्य बनाएर, मनलाई हृदयमा रोकेर, अर्थात् बाहिरको विषयहरूमा संकल्प रहित गरेर र सबै बाहिरी क्रियाहरूका कारण रूप प्राणलाई सुषुम्ना मार्गबाट दुई आँखीभुईंको बीच भन्दा ठिक माथिको ब्रह्मरन्ध्रमा ल्याएर र समाधिमा स्थित हुनु॥१२॥

-★-★-★-

**ओमित्येकाक्षरं ब्रह्म व्याहरन्मामनुस्मरन् ।**
**यः प्रयाति त्यजन्देहं स याति परमां गतिम्॥**

**(त्यस पछि) जो साधक 'ॐ' यस एक अक्षर ब्रह्मको मानसिक जप र मेरो स्मरण गर्दै शरीरलाई छोडेर जान्छ त्यसले परम गति प्राप्त गर्दछ॥१३॥**

ओमित्येकमक्षरं ब्रह्मवाचकत्वाद्ब्रह्म व्याहरन्नुच्चरन् तद्वाच्यभूतं परं ब्रह्म मामनुस्मरन् मूर्द्धन्या नाड्या देहं त्यजन् यः प्रयाति प्रकर्षेणार्चिरादिमार्गेण याति, स परमामुपनि-षत्प्रतिपाद्यं गतिं प्राप्य यथोपासनं मां प्राप्नोति॥

(त्यस पछि) 'ॐ' यस एक अक्षरलाई, जो ब्रह्मको वाचक हुनाले ब्रह्म नै हो जप्दै र म परब्रह्मलाई, जो कि ॐकारको वाच्य हूँ, स्मरण गर्दै जो मनुष्य मूर्धानाड़ी द्वारा शरीरलाई छाड्दछ भने त्यो अर्चिरादि मार्गबाट गएर उपनिषदहरूको द्वारा प्रतिपाद्य गतिलाई, अर्थात् मलाई आफ्नो उपासनाको अनुसार परमधाममा प्राप्त गर्दछ॥१३॥

-★-★-★-

**अनन्यचेताः सततं यो मां स्मरति नित्यशः।**
**तस्याहं सुलभः पार्थ नित्ययुक्तस्य योगिनः॥**

**हे पार्थ! अन्यत्र मन नडुलाउने जो मनुष्य मेरो नित्य निरन्तर स्मरण गर्दछ, त्यस नित्य-निरन्तर ममा**

**लागेका योगिको लागि म पनि सुलभ हुन्छु॥१४॥**

एवं सामान्ययोगिनो गतिरुक्ता। इदानीं भगवदनन्यभक्तस्य योगिन: प्राप्तिप्रकारमाह–अनन्यचेता इति। नान्यस्मिन् चेतो यस्य सोऽनन्यचेता य: सततं निरन्तरमतिशयप्रेम्णा निरतिशयप्रियं मां स्मरति, तस्य नित्ययुक्तस्य नित्यं मद्योगं काङ्क्षमाणस्य निरतिशयमत्प्रियस्य योगिनोऽहमन्यैर–चिन्त्यस्वरूपगुणैश्वर्योऽपि वात्सल्यकारुण्यसौहार्दादिगुण–परवशतया स्वभक्तदु:खवियोगाद्यसहमान: सुलभ: सुखेनैव प्राप्य:। एतेन मदन्यभक्तिहीनानां सर्वोपायवतामपि ब्रह्मलोकादिमत्समानैश्वर्यावधिफलावाप्तियोग्यत्वेऽपि नाहं सुलभो, भक्त्यैकवश्यस्वभावात् "शृण्वन्तोऽपि बहवो यं न विद्यु:, नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा वृणुते तनुं स्वामि"ति श्रुते: "भक्तिरेवैनं दर्शयति भक्तिरेवैनं वर्द्धयति। भक्तिवश: पुरुषो भक्तिरेव भूयसी"त्यादेश्च ॥१४॥

**माथिका श्लोकहरूमा साधारण योगीको गति भनियो। अब यस श्लोकमा भगवान्‌को अनन्य भक्त योगीको गति भनिन्छ अर्थात् यस्तो योगी भगवान्‌लाई कसरी पाउँदछ त्यो भन्नुहुन्छ। हे अर्जुन! जसको मन अनन्य भावले म मा नै छ र जो सदा मलाई नै आफ्नो सबैभन्दा अधिकप्यारो संझेर मेरो प्रेमले स्मरण गर्दछ, यस्तो आफ्नो अतिशय प्रेमी योगीलाई म सर्वदा सुलभ हुन्छु किनकी त्यो मसँग नित्य योग वा मिलन चाहन्छ। भन्नुको मतलब यो कि अचिन्त्य रूप, गुण, ऐश्वर्यवाला भएर पनि वात्सल्य, कारुण्य, सौहार्द आदि गुणहरूको वशीभूत भएको कारण म आफ्नो भक्तहरूको वियोग र दु:ख आदि सहन सक्दिन र यसैले म उसलाई तुरुन्तै सुलभ हुन्छु। यसैले मेरो अनन्य भक्तिले विहीन पुरुष जतिसुकै उपाय गरोस फेरि पनि मलाई प्राप्त गर्न सक्दैन। भलै उसलाई(भक्तिविहीन पुरुषलाई) ब्रह्मलोक आदि सम्मको अथवा मेरो समान ऐश्वर्यशाली लोकहरूलाई प्राप्त गर्ने योग्यता हुन्छ तर म उसलाई सुलभ हुँदिन। यसको कारण म केवल एक भक्तिमात्र ले वशमा हुन सक्दछु अरु कुनै उपायले हुँदिन। यसमा श्रुति प्रमाण छ, यथा–"शृण्वन्तोऽपि.....भूयसी॥" अर्थात् भक्ति नै यस (परब्रह्मलाई) देखउँद छ। भक्ति नै यसलाई बढाउँछ। पुरुष परब्रह्म भक्तिको नै वशमा छ यसैले भक्ति नै सर्वश्रेष्ठ साधन हो॥१४॥**

–★–★–★–

## मामुपेत्य पुनर्जन्म दु:खालयमशाश्वतम् ।
## नाप्नुवन्ति महात्मान: संसिद्धिं परमां गता: ॥

**महात्माहरू मलाई प्राप्त गरेर दु:खालय अर्थात् दु:खको घर र अशाश्वत अर्थात् निरन्तर फेरिने पुनर्जन्मको चक्रमा पर्दैनन् किनकी तिनीहरू परम सिद्धिलाई प्राप्त गरिसकेका हुन्छन् अर्थात् उनीहरू- लाई परम-प्रेमको प्राप्ति भईसकेको हुन्छ ॥१५॥**

ननु यथा त्वदनन्यभक्तस्य भवान्सुलभस्तथाऽन्य–देवादिभक्तानामन्येऽपि सुलभा: "यं यं वाऽपि स्मरन्भावं त्यजत्यन्ते कलेवरम्। तं तमेवैती"त्युक्तत्वात्। एवं चेत्तर्ह्यन्यदेवादिफलप्राप्तेभ्योऽन्यभक्तेभ्यस्त्वद्भक्तानां को विशेष इति चेत्तत्राह–मामिति। मां सर्वेश्वरमानन्दघनं प्राप्य पुनरखिलगर्भवासादिदु:खालयं दु:खगृहमशाश्वतमस्थिरं जन्म प्राकृतदेहसम्बन्धं नाप्नुवन्ति। यतो महात्मान: महाविवेकसम्पन्नान्त:करणा अत्यर्थमत्प्रियत्वेन मत्प्रसाद–कारणानि मदेकाराधनानि कर्माणि कृत्वा मदनुग्रहादेव परमां सर्वोत्कृष्टां संसिद्धिं मद्भावात्मिकां मुक्तिं गता प्राप्ता: ॥१५॥

जस्तो हजुरका अनन्य भक्तहरूलाई हजुर सुलभ हुनुहुन्छ त्यस्तै नै अन्य देवताहरूका भक्तलाई ती देवताहरू सुलभ छन् किनकी हजुरले नै भन्नुभएको छ कि 'यं यं वापि स्मरन्भावं त्यजत्यन्ते कलेवरम्। तम् तमेवैति।' यदि यस्तो कुरा हो भने अन्य देवभक्तहरू भन्दा हजुरका भक्तहरूको विशेषता नै के रह्यो र? यसै शंकाको उत्तरमा भगवान् यसै श्लोकमा दिनुहुन्छ।
म सर्वेश्वर र आनन्दघनलाई प्राप्त गरेपछि मेरा भक्तहरूलाई फेरि सम्पूर्ण गर्भवास आदि आदि दु:खहरूको घर विनाशी जन्म लिनु पर्दैन अर्थात् उनीहरूको फेरि प्राकृत देह सँग सम्बन्ध हुँदैन। यसको कारण यो हो कि महात्माहरू अर्थात् महाविवेकले भरिएको अन्त:करणवाला पुरुष मलाई आफ्नो अत्यन्त प्रिय जानेर मेरो नै आराधना सम्बन्धी कर्महरू गरेर मेरो अनुग्रहले नै परमश्रेष्ठ भगवद्भावात्मक मुक्तिलाई प्राप्त गरिसकेका छन्॥१५॥

–★–★–★–

**आब्रह्मभुवनाल्लोकाः पुनरावर्तिनोऽर्जुन ।**
**मामुपेत्य तु कौन्तेय पुनर्जन्म न विद्यते॥**

**हे अर्जुन! ब्रह्मलोक सम्म सबै लोकहरू पुनरावर्ती हुन् अर्थात् त्यहाँ पुगे पछि फेरि फर्केर आउनु पर्दछ; तर हे कौन्तेय! मलाई प्राप्त गर्‍यो भने पुनर्जन्म हुँदैन॥१६॥**

मदनन्यभक्तिहीनास्तु विविधधर्मानुष्ठानाद्ब्रह्मलोकपर्यन्तं प्राप्ता अपि पुनरावर्त्तन्त इत्याह–आब्रह्मेति। आब्रह्मभुवनात् ब्रह्मणो भुवनं ब्रह्मलोकस्तमभिव्याप्य सर्वे लोकास्तत्रस्था जनास्तद्भोगावसाने पुनरावर्त्तिनो भवन्ति हे अर्जुन!। तेभ्यः स्वभक्तानां तु शब्देन महद्वैलक्षण्यं द्योतयति। मां सर्वेश्वरं सत्यसङ्कल्पं निखिलजगदुत्पत्तिकारणं दोषास्पृष्टमाहात्म्यं भगवन्तमुपेत्य प्राप्य ये निर्वृत्ता हे कौन्तेय! तेषां जन्म न विद्यते॥१६॥

जो मेरा अनन्य भक्त छैनन् ती विविध प्रकारको धर्मानुष्ठानहरू द्वारा ब्रह्मलोक सम्म पुगेर पनि फेरि फर्केर आउँदछन् अर्थात् फेरि जन्म लिनु पर्दछ। यसै कुरालाई यहाँ भन्नुहुन्छ।

हे अर्जुन! ब्रह्माको लोक सम्म पुगेका मनुष्य पनि त्यहाँको भोग अन्त भएपछि फेरि संसारमा फर्केर आउँदछन्। (यस श्लोकमा 'तु' शब्दको प्रयोग गरेर भगवान्ले आफ्नो भक्तिले हीन पुरुषहरू भन्दा आफ्नो भक्तहरूको महत् विलक्षणता देखाउनु भयो।) तर जो (मेरो भक्त) सर्वेश्वर, सत्यसंकल्प, सकल जगत् को कर्त्ता र दोषहरूको स्पर्शले रहित, मलाई प्राप्त गर्दछन् र ती फेरि जन्म धारण गर्दैनन्॥१६॥

–★–★–★–

**सहस्त्रयुगपर्यन्तमहर्यद्ब्रह्मणे विदुः।**
**रात्रिं युगसहस्त्रान्तां तेऽहोरात्रविदो जनाः॥**

**जो मनुष्य ब्रह्माको एकहजार चतुर्युगीवाला एक दिनलाई र एक हजार चतुर्युगीवाला एक रात्रीलाई जान्दछन् ती मनुष्य ब्रह्माको दिन र रातका जानकार हुन॥१७॥**

ब्रह्मभुवनावधिगतानां लोकानां पुनरावर्त्तित्वे हेतुं कालपरिच्छिन्नत्वं दर्शयति–सहस्त्रयुगपर्यन्तमिति। सहस्त्रं युगानि पर्यन्तोऽवसानं यस्य तत् ब्रह्मणो यदहस्तद्ये विदुः, तथा युगसहस्त्रमन्तो यस्यास्तां रात्रिं च ये विदुस्ते जना अहोरात्रविदः, बहुज्ञाः कालज्ञत्वात्। ये तु दिवाकरगत्यैवाहरादि जानन्ति, न ते तथाऽहोरात्रविदः, अल्पज्ञा इत्यर्थः। अयम्भावः मनुष्याणां यद्वर्षं तद्देवानामहोरात्रं भवति, तादृशैरहोरात्रैः पक्षमासादिक्रमेण द्वादशभिर्वर्षसहस्त्रैः ससन्ध्यं चतुर्युगं भवति। तथाविधं चतुर्युगसहस्त्रं ब्रह्मणोऽहर्दिनं भवति, तत्परिमाणिका च रात्रिस्तादृशैरहोरात्रैः पक्षमासादिक्रमेण वर्षशतं ब्रह्मणो द्विपरार्द्धसञ्ज्ञकं परमायुर्भवति। अतः कालपरिच्छिन्नत्वेन तस्याप्यनित्यत्वात्तलोकगतानां पुनरावृत्तिर्युक्तैव। तथा तदधस्तान्महर्लोकादिगतानां पुनरावृत्तिर्बोध्या॥

जो मेरा अनन्य भक्त छैनन् ती ब्रह्मलोक सम्म पुगेर पनि फेरि फर्केर आउँदछन्। यसको कारण यो हो कि ब्रह्मलोक सम्मका सबै लोकहरू कालद्वारा परिच्छिन्न छन् अर्थात् कालका अधीन छन्। यसैलाई यहाँ भन्नुहुन्छ। ब्रह्माको को सहस्त्र युगको अवधिवाला दिन र त्यति नै अवधिवाला रात्रीलाई जो जान्दछन् ती अहोरात्रविद्(दिनरात लाई जान्ने) भनिन्छन्, अर्थात् काललाई जान्ने हुनाले ती बहुज्ञ हुन्। सूर्यको गतिले हुने दिन रातलाई जो जान्दछन् ती कुनै पनि प्रकार कालज्ञ होईनन् अर्थात् ती अल्पज्ञ हुन्। यस श्लोकको भाव यो हो कि मनुष्यहरूको एक वर्ष देवताहरूको एक दिन रातको बराबर हुन्छ। यस्तो (देवताहरूको) दिन रातले बनेका पक्ष, महिना आदि क्रमले बाह्र हजार वर्षको संन्ध्या सहित चार युग हुन्छन्। यस्तो चारहजार युगको ब्रह्माको एक दिन हुन्छ र त्यति नै परिणाममा उनको रात्री पनि हुन्छ। यसै प्रकारको दिनरातले बनेका, पक्ष, महिना आदि क्रमले शय वर्षको द्विपरार्ध संज्ञक ब्रह्माको आयु हुन्छ। यस प्रकार ब्रह्मा र उनको लोक कालको अधीन छन् अर्थात् उनको पनि एक न एक दिन निश्चित आयु पूरा भएपछि अन्त हुन्छ। र जब ब्रह्मा नै र उनको लोकको अन्त छ भने उनको लोकलाई प्राप्त गरेकाहरू ले फेरि त्यहाँबाट फर्केर आउनु पर्दछ, यसमा के नै भन्नु पर्छ र? अर्थात् यस्तो हुनु त स्वाभाविक नै हो। र जब ब्रह्मलोकमा पुगेकाहरू कै यस्तो दशा छ भने त्यस लोक भन्दा तलका महर्लोक आदि लोकहरू मा पुगेकाहरू आउनु त निश्चित नै छ॥१७॥



–★–★–★–

**अव्यक्ताद्व्यक्तय: सर्वा: प्रभवन्त्यहरागमे ।**
**रात्र्यागमे प्रलीयन्ते तत्रैवाव्यक्तसञ्ज्ञके ॥**

**ब्रह्माको दिन प्रारम्भ हुँदा अव्यक्त (ब्रह्माको सूक्ष्म- शरीर) बाट सम्पूर्ण शरीर उत्पन्न हुन्छन् र ब्रह्माको रात्री सुरु भएपछि त्यस अव्यक्त (ब्रह्माको सूक्ष्म शरीर-) मा नै सम्पूर्ण शरीर लीन हुन जान्छन् ॥ १८ ॥**

एवं कालपरिच्छिन्नत्वेन ब्रह्मलोकादिमहर्लोकान्तर्वर्त्तिनां पुनरावृत्तिर्निरूपिता। इदानीं स्वर्गादिलोकत्रयस्य ब्रह्मणोऽहर्निशयोरुत्पत्तिप्रलयावाह-अव्यक्तादिति। इहाव्यक्तशब्देन प्रकृतिपरिणामरूपं ब्रह्मण: शरीरमभि-धीयते, अहरागमे ब्रह्मण: प्रबोधसमये अव्यक्ताद् ब्रह्मणो देहात् व्यक्तय: जीवानां देहेन्द्रियभोग्यभोगस्थानरूपा: प्रभवन्ति। तत्तत्कर्मफलभोगायाभिव्यज्यन्ते। रात्र्यागमे तस्य स्वापकाले यतोऽव्यक्तात्सम्भूतास्तत्रैवाव्यक्तसञ्ज्ञके प्रजापतिशरीरे प्रलीयन्ते ॥१८ ॥

माथि यो निरूपण गरियो कि ब्रह्मलोक देखि लिएर महर्लोक सम्मका सबै लोकहरू कालका अधीनमा छन् र यसैले ती लोकहरू सम्म पुगेका मनुष्यले फेरि फर्केर संसारमा आउनु पर्दछ। अब यस श्लोकमा यो भन्नुहुन्छ कि स्वर्गादि तीनै लोकहरूको उत्पत्ति र प्रलय ब्रह्माको दिन र रात को आरम्भ मा हुन्छ। यहाँ अव्यक्त शब्दको अर्थ प्रकृतिको परिणाम स्वरूप ब्रह्माको शरीर हो। ब्रह्माको दिनको आरम्भमा अर्थात् उनी जागा हुने समयमा उनको शरीरबाट देह, इन्द्रियहरू, भोग्य र भोग्यस्थान प्रकट हुन्छन्, अर्थात् उनको(जीवको) कर्मफल भोगको लागि आविर्भूत(प्रकट) हुन्छन्। तात्पर्य यो कि जुन जीवको जस्तो कर्म हुन्छ, त्यसलाई त्यस कर्मको फल भोग्नको लागि त्यस्तो नै शरीर धारण गर्नुपर्दछ। फेरि ब्रह्माको रात्रीको आरम्भमा, अर्थात् उनको शयनकालमा सबै जीव उनको शरीरमा प्रवेश गर्दछन् अर्थात् जुन ब्रह्माको शरीरबाट ती प्रकट हुन्छन्, त्यसैमा तिनीहरूको प्रलय हुन्छ ॥ १८ ॥



**भूतग्राम: स एवायं भूत्वा भूत्वा प्रलीयते।**
**रात्र्यागमेऽवश: पार्थ प्रभवत्यहरागमे ॥**

**हे पार्थ! त्यही यो प्राणी समुदाय बारम्बार उत्पन्न हुँदै प्रकृतिको परवश भई ब्रह्माको दिनमा उत्पन्न हुन्छन् र ब्रह्माको रात्री समयमा लीन हुन्छन् ॥ १९ ॥**

ननु ये प्राणिन: प्रलीयन्ते तेषां कृतकर्महानि: स्यात्, ये चोत्पद्यन्ते तेषामकृताभ्यागम: स्यादित्याशङ्कां वारयन् जन्ममरणादिदु:खात्मकेन संसारेणालमिति वैराग्यजननायाह-भूतग्राम इति। भूतानां चराचरप्राणिनां ग्राम: समूहो य: पूर्वस्मिन्कल्पे आसीत्स एवायमेतस्मिन्कल्पेऽहरागमे भूत्वा भूत्वा पुन: पुनर्देवमनुष्यादिषूत्पद्य रात्र्यागमे प्रलीयते, हे पार्थ! पुनरवश: कर्मतन्त्रोऽहरागमे प्रभवति, प्रकर्षेण जायते प्रतिकल्पं न तस्य भेद इत्यर्थ:। "सूर्याचन्द्रमसौ धाता यथापूर्वमकल्पयद्दिवं च पृथिवीं चान्तरिक्षमथो स्वरि"ति श्रुते:। एवमुपरितना ब्रह्मलोकपर्यन्ता लोका ब्रह्मा च ब्रह्मणो वर्षशतातमकाऽऽयुषोऽन्ते महाप्रलये

यहाँ यो शंका हुन्छ कि जुन जीवहरूको प्रलय हुन्छ उनीहरूले गरेका कर्मको नाश हुनेछ र जो जीव पैदा हुनेछ त्यसलाई नगरेको कर्मको भोग भोग्नु पर्नेछ। यस शंकालाई हटाउनको लागि भगवान् भन्नुहुन्छ- हे अर्जुन! पहिलो कल्पमा जुन जीवहरूको समूह थियो त्यही जीव समूह यस कल्पमा ब्रह्माको दिन आरम्भ भएपछि फेरि पैदा हुन्छ, अर्थात् देव, मनुष्य आदि को रूप धारण गर्दछ र ब्रह्माको रात्रि आरम्भमा त्यसको प्रलय हुन्छ। फेरि पूर्वकालिन कर्मको वशमा भएको कारण ब्रह्माको दिन आरम्भमा पैदा हुन्छ। यस प्रकार प्रत्येक कल्पमा जीव समूहको भेद हुँदैन। यस मा श्रुति नै प्रमाण छ-"सूर्याचन्द्रमसौ .....स्व:॥" अर्थात् ब्रह्माले सूर्य, चन्द्रमा, आकाश, पृथ्वी, अन्तरिक्ष र स्वर्गलोक लाई जस्ता यी पूर्वकालमा थिए त्यस्ता नै बनाए। यस प्रकार ब्रह्मलोक सम्मका सबै लोकहरू र ब्रह्मा पनि आफ्नो सय वर्षको आयु पूरा गरेपछि महाप्रलयको समयमा पृथ्वीआदिको लयको क्रमले म

पृथिव्यादिलयक्रमेण सर्वे परमात्मनि मय्येव लीयन्ते। सुबालोपनिषद्याम्नायते पृथिव्यप्सु प्रलीयते, आपस्तेजसि प्रलीयन्ते, तेजो वायौ प्रलीयते, वायुराकाशे प्रलीयते, आकाश इन्द्रियेषु, इन्द्रियाणि तन्मात्रेषु, तन्मात्राणि भूतादौ प्रलीयन्ते, भूतादिर्महति, महानव्यक्ते अव्यक्तमक्षरे, अक्षरं तमसि, तमः परे देवे एकी भवती"ति। तस्मात्परमात्म–लोकव्यतिरिक्तस्य कृत्स्नस्य लोकस्योत्पत्तिप्रलयवत्त्वात्तत्तल्लोकं प्राप्तानां हरिभक्तिहीनानां पुनरावृत्तिरवर्जनीया। भगवन्तं प्राप्तानां तु न पुनरावृत्तिशङ्काऽपीति सिद्धम्॥

**परमात्मामा लीन हुन जान्छन्। सुवालोपनिषद् मा पनि यहि कुरा भनिएको छ, यथा–"पृथिव्यप्सु .... भवति॥" अर्थात् पृथ्वी जलमा, जल तेजमा, तेज वायुमा, वायु आकाशमा, आकाश इन्द्रियहरूमा, इन्द्रियहरू तन्मात्राहरूमा, तन्मात्राहरू भूतादिमा, भूतादिहरू महत्मा, महत् अव्यक्तमा, अव्यक्त अक्षरमा र अक्षर तममा लीन हुन्छ। र तम आफुमा लीन भएका सबैका साथमा परब्रह्ममा लीन हुन्छ। यसैले परमात्माको लोकलाई छोडेर अरु सबै लोकहरूको उत्पत्ति र प्रलय हुन्छ। यसैले हरिभक्तिले हीन मनुष्यहरूको जो ती लोकहरूलाई प्राप्त गर्दछन् फेरि फर्केर आउनु अर्थात् जन्म लिनु अनिवार्य छ। यसले यो सिद्ध भयो कि भगवान्लाई प्राप्त गरेका जीवहरूलाई फेरि फर्केर आउन र जन्म धारण गर्नमा केहि पनि शंका गर्न सकिदैन॥१९॥**

–★–★–★–

## परस्तस्मात्तु भावोऽन्योऽव्यक्तोऽव्यक्तासनातनः।
## यः स सर्वषु भूतेषु नश्यत्सु न विनश्यति॥

**तर त्यस अव्यक्त(ब्रह्माको सूक्षशरीर–) भन्दा अन्य विलक्षण अनादि अत्यन्त श्रेष्ठ भावरूप जो अव्यक्त(ईश्वर) छ, त्यो सम्पूर्ण प्राणीहरू नष्ट भएपनि नष्ट हुँदैन॥२०॥**

प्रकृतिवियुक्तात्मस्वरूपं तु जन्ममरणादिभाववर्जितं हिरण्यगर्भादपि श्रेष्ठं तत्प्राप्तानामपि पुनरावृत्तिर्न भवतीत्याह–पर इति द्वाभ्याम्। तस्मात्पूर्वोक्ताच्चराचरभूत–ग्रामकारणाद्धिरण्यगर्भाख्यादव्यक्तात्प्रकृतिसंसृष्टात्परः प्रकृतिवियुक्ततयोत्कृष्टो भावोऽन्यो भिन्नः अव्यक्तः, शास्त्रमन्तरेण केनचित्प्रमाणेन न व्यज्यत इत्यव्यक्तः, सनातनः सदैकरूपतया नित्यः। नित्यत्वमेव साधयति–य इति। एतादृशो यो भावः स सर्वेषु भूतेषु स्थावरजङ्गमेषु नश्यत्सु न विनश्यति विनाशमभावं न प्राप्नोति॥

**प्रकृतिले रहित शुद्ध आत्म स्वरूप, जन्म, मरण इत्यादि भावहरूले रहित भएको कारण हिरण्य गर्भ, अर्थात् ब्रह्मा भन्दा पनि श्रेष्ठ छ, र जसले यस्तो आत्म स्वरूपलाई प्राप्त गरिसकेका छन् ती यस संसारमा फेरि फर्केर आउँदैनन् यसै कुरालाई दुई श्लोकहरूमा भन्नुहुन्छ। चराचर भूतसमूहको कारण, प्रकृति सम्बन्ध युक्त हिरण्य गर्भ नामक अव्यक्त भन्दा भिन्न, र प्रकृति वियुक्त भएको कारण त्यसभन्दा श्रेष्ठ जुन अन्य भाव अर्थात् शुद्ध आत्म स्वरूप छ त्यो शास्त्रहरूलाई छोडेर अरु कुनै प्रमाणहरू द्वारा जान्न सकिदैन। यसैले यसलाई अव्यक्त भनिन्छ। त्यो भाव नित्य छ र सदा एक रूपले स्थित रहन्छ किनकी सबै स्थावर जंगमादि भूतहरूको नाश भएपनि त्यस अव्यक्त भावको नाश हुँदैन॥२०॥**

–★–★–★–

## अव्यक्तोऽक्षर इत्युक्तस्तमाहुः परमां गतिम्।
## यं प्राप्य न निवर्तन्ते तद्धाम परमं मम॥

**त्यसैलाई नै अव्यक्त र अक्षर भनेर भनिएको छ तथा त्यसैलाई नै परम गति भनिएको छ र जसलाई प्राप्त गरेर जीव फेरि संसारमा फर्केर आउँदैन, त्यही नै मेरो परमधाम हो॥२१॥**

योऽव्यक्तोऽतीन्द्रियो भावोऽक्षर इत्युक्तः "अक्षरं ब्रह्म परमसि"त्यत्र मयैवोक्तः। "ये त्वक्षरमनिर्देश्यमव्यक्तं पर्युपासते, कूटस्थोऽक्षर उच्यते" इत्यादौ वक्ष्यमाणश्चं तं वेदविदः परमां गतिमाहुः। प्रकृतिसंसृष्टाज्जीवात्परमा–

**जुन अव्यक्त अर्थात् इन्द्रिय भन्दा परको भावलाई अक्षर भनिएको छ यथा–'अक्षरं ब्रह्म परमं' फेरि अगाडीका अध्यायहरूमा पनि भगवान्ले जुन भावलाई अक्षर भन्नुभएको छ–"ये ..उच्यते" त्यस भावलाई वेदलाई जान्नेहरू श्रेष्ठ गति भन्दछन्। अर्थात् प्रकृति मा बाँधिएका जीव भन्दा यो भाव परमश्रेष्ठ हो किनकी यस भावमा**

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

मुत्कृष्टां स्वस्वरूपत्वाद्गतिं प्राप्यभूतामाहुः "स्वेन रूपेणाभि–निष्पद्यते" इत्यादिना। यमक्षरं प्रकृतिवियुक्तात्मस्वरूपं प्राप्य पुनर्न निवर्त्तन्ते। संसारायेति शेषः। तच्छद्धात्मस्वरूपं मम परमं धाम निवासस्थानं, यद्यपि प्रकृतिसंसृष्ट आत्माऽपि मम मूर्त्तेर्निवासस्थानं तदनुग्रहायैव। "अङ्गुष्ठमात्रः पुरुषो मध्य आत्मनि व्यवस्थितः, य आत्मनि तिष्ठन्नात्मनोऽन्तरो यमात्मा न वेद, यस्यातमा शरीरमि"त्यादिश्रुतिभ्यः, "सर्वस्य चाहं हृदि सन्निविष्ट"इति वक्ष्यमाणत्वाच्च। तथाऽपि प्रकृतिवियुक्तात्मस्वरूपं ततः श्रेष्ठं नित्यं धाम गृहमित्यर्थः॥

जीव आफ्नो स्वरूपमा प्राप्त हुन्छ। जस्तो श्रुतिमा भनेको छ 'स्वेन रूपेणाभिनिष्पद्यते' अर्थात् (जीव) आफ्नो रूपलाई पाउँदछ।

प्रकृतिबाट वियुक्त जुन आत्म स्वरूपलाई पाएर जीव फेरि संसारमा फर्कदैन, त्यो शुद्ध आत्म स्वरूप मेरो निवास स्थान हो। यद्यपि प्रकृतिले युक्त आत्मा पनि मेरो मूर्ति रहने स्थान हो किनकी म त्यस माथि अनुग्रह गर्न चाहन्छु। यस मा श्रुति प्रमाण–"अङ्गुष्ठमात्रः....शरीरम्" अर्थात् अंगुष्ठको समान सानो पुरुष आत्माको मध्यमा स्थित छ। जो आत्मामा स्थित भएर पनि आत्मा भन्दा पृथक् छ। जसलाई आत्मा जान्दैन। जसको आत्मा नै शरीर हो। अगाडीको अध्यायमा पनि भगवान् भन्नुहुने छ कि "सर्वस्य चाहं हृदि सन्निविष्ट" अर्थात् सबैको हृदयमा म प्रविष्ट भएको छु) तथापि प्रकृतिबाट वियुक्त आत्मा नै मेरो परम श्रेष्ठ र नित्य निवास स्थान हो॥२१॥

–★–★–★–

**पुरुषः स परः पार्थ भक्त्या लभ्यस्त्वनन्यया ।**
**यस्यान्तःस्थानि भूतानि येन सर्वमिदं ततम्॥**

**हे पार्थ! सम्पूर्ण प्राणी जसको अन्तर्गत छन् र जसबाट यो संसार व्याप्त छ त्यो परम पुरुष परमात्मालाई त अनन्य भक्तिद्वारा मात्रै प्राप्त गर्न सकिन्छ॥२२॥**

एवमक्षरशब्दाभिहितस्य क्षेत्रज्ञस्य परमगतित्वाभिधानात्प–रमात्मनैक्यशङ्का सा भूदित्येतदर्थं "प्रधानक्षेत्रज्ञपतिर्गुणेशः। अक्षरात्परतः परः, तमीश्वराणां परमं महेश्वरं तं देवतानां परमं च दैवतं न तत्समश्चाभ्याधिकश्च दृश्यते। नित्यौ नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान् यमेवैष वृणुते तेन लभ्यः। भेदव्यपदे– शाच्चान्यः। अधिकं तु भेदनिर्देशात्। पारं परं विष्णुरपार– पारः परः परेभ्यः परमार्थरूपी। सब्रह्मपारः परपारभूतः परः पराणामपि पारपारः" इत्यादिश्रुतिस्मृतिसूत्रैः सिद्धं प्रत्यगात्मनः परमेश्वरस्य स्वाभाविकं भेदं स्पष्टयति–पुरुष इति। हे पार्थ! अनन्यया देवतान्तरफलान्तराभिसन्धिशून्यया भक्त्या लभ्यस्तु स पुरुषः परः पूर्वोक्ताद्विलक्षणः। स कः? यस्यान्तःस्थानि अन्तर्वर्त्तीनि सर्वभूतानि पृथक् स्थितिप्रवृत्त्यनर्हाणि तिष्ठन्तीत्यर्थः। येन सर्वात्मना इदं विश्वं

माथिको श्लोकमा अक्षरलाई परम गति भनेको छ। यसले यस्तो शंका हुन सक्दछ कि यस मायाले वियुक्त जीव मा र परमात्मा मा अभिन्नता वा एकता छ। यसै शंकालाई हटाउनको लागि भगवान् यस श्लोकलाई भन्नुहुन्छ। अक्षर(जीव) मा र परमात्मा मा स्वभावले नै भिन्नता छ। यसमा श्रुति, स्मृति र पुराण प्रमाण छन्, यथा–"प्रधानक्षेत्रज्ञपतिर्गुणेशः।" अर्थात परब्रह्म माया र जीवको स्वामी र गुणहरूको ईश हो। "अक्षरात्परतः परः", अर्थात् परमात्मा जीव भन्दा धेरै श्रेष्ठ छ। 'तमीश्वराणां.....दैवतम्' अर्थात् परब्रह्म ईश्वरहरूका परम महाईश्वर र देवताहरूको परम देवता हो। 'न तत्समश्चाभ्याधिकश्च दृश्यते' अर्थात् परब्रह्म को बराबर कोहि छैन, भने त्यस भन्दा ठूलो कोहि छैन यसमा त भन्नु नै के छ र? 'नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान् यमेवैष वृणुते तेन लभ्यः(यी अंशहरूको अर्थ पहिले नै लेखि सकिएको छ) 'भेदव्यपदेशाच्चान्यः' अर्थात् जीव र ब्रह्ममा भेद भनिएको छ यसले ती एक अर्को सँग भिन्न छन्। 'अधिकं तु भेदनिर्देशात्' अर्थात् जीव र ब्रह्ममा भेद हुनाले ब्रह्म जीवभन्दा श्रेष्ठ हो। "पारं ..... पारपारः" । भाव यो कि विष्णु भगवान् जो परब्रह्म हुन् ती परमार्थ रूप हुन् र सबैभन्दा श्रेष्ठ र पर हुन्। माथि लेखिएको श्रुति, स्मृति, सूत्र र पुराणादि वचनहरूले यो प्रमाणित गर्दछ कि जीव र ब्रह्ममा स्वभाविक भेद छ। यसै भेदलाई भगवान् स्पष्ट गर्नुहुन्छ। हे अर्जुन! देवान्तर र फलान्तरको कामनाले शून्य, अनन्य भक्ति द्वारा जो पुरुष अर्थात् परमात्मा छ, त्यो प्रकृति वियुक्त प्रत्यगात्मा अर्थात् जीव भन्दा पृथक् र श्रेष्ठ छ। त्यो

ततं व्याप्तम्। तं मां प्राप्तानामपुनरावृत्तिः “मामुपेत्यः पुनर्जन्म दुःखालयमशाश्वतम्। नाप्नुवन्ति महात्मान” इत्यादिनोक्तैव ॥२२॥

परमपुरुष को हो? त्यो उहि हो जसको भित्र सबै भूत स्थित छन् अर्थात् जससँग पृथक् यी भूतहरूको स्थिति प्रवृत्ति हुन नै सक्दैन र त्यो उहि हो जो यस विश्व ब्रह्माण्डमा व्याप्त छ। यस्तो म ब्रह्मलाई प्राप्त गरेर फेरि यस संसारमा फर्किनु पर्दैन जस्तो कि भनि सकिएको छ यथा– “मामुपेत्यः ....महात्मानः” ॥२२॥

–★–★–★–

## यत्र काले त्वनावृत्तिमावृत्तिं चैव योगिनः।
## प्रयाता यान्ति तं कालं वक्ष्यामि भरतर्षभ॥

**परन्तु हे भरतश्रेष्ठ! जुन काल अर्थात् मार्गमा शरीर छोडेर गएका योगी अनावृत्तिमा प्राप्त हुन्छन् अर्थात् पछि फर्केर आउँदैनन् र जुन मार्गबाट गएकाहरू आवृत्ति अर्थात् पछि फर्केर आउँदछन् त्यस काललाई अर्थात् दुबै मार्गहरूका बारे मा भन्दछु॥२३॥**

तदेवमक्षरात्मानं प्राप्ताः परमपुरुषं भगवन्तं प्राप्ताश्च पुनरिह संसारे नावर्त्तन्ते। अन्ये तु पुनरावर्त्तन्त इत्युक्तम्। तत्र केन मार्गेण गता नावर्त्तन्ते, केन गता पुनरावर्त्तन्ते इत्यपेक्षायां देवयानं पितृयानं चेति मार्गद्वयं वक्तुं प्रतिजानिते–यत्रेति। प्राणोत्क्रमणानन्तरं यत्र यस्मिन्काले प्रयाता योगिनोऽनावृत्तिं यान्ति,यस्मिँश्च काले प्रयाता आवृत्तिं यान्ति तं कालं वक्ष्यामि भारतेत्यन्वयः। अत्र कालशब्देनाहरादिसंवत्सरान्तकाला–भिमानिनीभिरातिवाहिकदेवताभिर्गन्तव्यो मार्ग उपलक्ष्यते। अग्निज्योतिषोः कालवाचित्वाभावाद्देवयानमार्गप्रतिपादक–श्रुतौ “संवत्सरादादित्यमादित्याच्चन्द्रमसमि”त्यादिदेवता–वाचकेनैवोपसंहारात्, पूर्वापरदेवतावाचकपदसाहचर्या–दहरादीनामपि कालाभिमानिदेवतापरत्वं युक्तम्। तथा च यस्मिन्कालाभिमानिदेवतोपलक्षितमार्गे प्रयाता योगिनः द्विविधा ज्ञानिनः कर्मिणश्च यथाक्रममनावृत्तिमावृत्तिं च यान्ति तं मार्गं वक्ष्यामित्यर्थः॥

अक्षर अर्थात् आत्मालाई र परमपुरुष भगवान्लाई जसले प्राप्त गरेका छन् ती फेरि यस संसारमा फर्केर आउँदैनन्। अरुहरू चैं फर्केर संसारमा आउँछन्। यी कुराहरू पछाडिका श्लोकहरूमा भनिएको छ। जुन मार्गबाट गएकाहरू फर्किंदैनन् र जुन मार्गबाट गएकाहरू फर्केर आउँदछन् ती दुबै मार्ग (देवयान र पितृयान)को वर्णन गर्नुहुन्छ।

हे अर्जुन! प्राण छुटे पछि जुन बेला अर्थात् मार्गमा प्रयाण गर्ने ज्ञानयोगी फेरि फर्केर संसारमा आउँदैन र जुन बेला (मार्ग)मा जाने कर्मयोगी ले फर्केर संसारमा आउनु पर्दछ ती काल(मार्ग) हरूलाई अब म भन्दैछु। यहाँ काल(बेला) शब्दले दिन देखि लिएर वर्ष सम्मको समयका अभिमानी पुर्याउने देवताहरूको मार्गको विधान गरिएको छ। अग्नि र ज्योति काल वाचक नहुनाले र देवयान मार्गलाई बताउने यस श्रुति मा ‘संवत्सरादादित्यम् आदित्याचन्द्रमसि’ देवता वाचक उपसंहार भन्दा पहिले तथा पछि देवता वाचक पद साथै भएकाले दिन आदिको कालाभिमानि देवता लाई नै संज्ञिनु ठिक हो। मतलब यो कि कालाभिमानी देवताले देखाएको जुन मार्गबाट जाने योगी, ज्ञानी र कर्मीको क्रमशः पुनर्जन्म हुँदैन या हुन्छ त्यस मार्गलाई भगवान्ले यहाँ बाट भन्नुहुन्छ॥२३॥

–★–★–★–

## अग्निर्ज्योतिरहः शुक्लः षण्मासा उत्तरायणम्।
## तत्र प्रयाता गच्छन्ति ब्रह्म ब्रह्मविदो जनाः॥

**(जुन मार्गमा) प्रकाशस्वरूप अग्निको अधिपति देउता, शुक्लपक्षको अधिपति देउता र छः महिनावाला उत्तरायणको देउता छन् त्यस मार्गबाट शरीर छोडेर गएका ब्रह्मवेत्ता पुरुष (पहिले ब्रह्मलोकलाई प्राप्त गरेर पछि ब्रह्माको साथै) ब्रह्मलाई प्राप्त गर्दछन्॥२४॥**

प्रतिज्ञायतोः तत्र तावदपुनरावृत्तिमार्गमाह–अग्निरिति। अग्निरिति। अग्निर्ज्योतिः शब्दाभ्यां “तेऽर्चिषमभिसम्भवन्ती”ति श्रुत्युक्तार्चिराभिमानिनी देवतोपलक्ष्यते, तथाऽहरभिमानिनी

माथि प्रतिज्ञा गरेको दुई मार्गहरूमा जुन मार्गबाट गएकाहरूको मुक्ति हुन्छ र यसैले संसारमा फकेर आउँदैनन् त्यस मार्गको यहाँ वर्णन गर्नुहुन्छ।

यहाँ अग्नि र ज्योति शब्दले ‘तेऽर्चिषमभिसम्भवन्ति’ यस श्रुतिमा

शुक्लपक्षाभिमानिनी षण्मासा उत्तरायणाभिमानिनी देवतो-पलक्ष्यते। एतच्छ्रुत्युक्तानां सम्वत्सराद्यभिमानिनीदेवता-नामुपलक्षणार्थं, तथा च श्रुति: "तद्य इत्थं विदुर्ये चेमेऽरण्ये श्रद्धां तप इत्युपासते तेऽर्चिषमभिसम्भवन्ति अर्चिषोऽह: अह्न आपूर्य्यमाणपक्षमापूर्य्यमाणपक्षाद्याषड्डुङेति मासांस्तान् मासेभ्य: सम्वत्सरं सम्वत्सरादादित्यमादित्याच्चन्द्रमसं चन्द्रमसो विद्युतं तत्पुरुषोऽमानव: स एतान्ब्रह्म गमयति एष देवपथो ब्रह्मपथ एतेन प्रतिपद्यमाना इमं मानवावर्त्तं नावर्त्तन्त" इति छान्दोग्ये। तत्र देवयानमार्गे प्रयाता ब्रह्मविदो जना ब्रह्म गच्छन्ति॥

भनिएको अर्चिको अभिमानी देवगणको बोध हुन्छ। र त्यसै प्रकारले दिनले दिनको अभिमानी देवताको, शुक्लपक्षले त्यस पक्षको अभिमानी देवताको र छ: महिना उत्तरायणले त्यस को अभिमानी देवताको बोध हुन्छ। छान्दोग्य उपनिषद्मा यो श्रुति आउँदछ, यथा-"तद्य...नावर्त्तन्ते।" अर्थात् जसले यस प्रकार जानेका छन् र जंगलमा बसेर तप अर्थात् ब्रह्मको श्रद्धा पूर्वक उपासना गर्दछन् ती अर्चिलाई प्राप्त गर्दछन्, अर्चि भन्नाले दिन र दिनले पूरा पक्ष, पूरै पक्षले छ: महिनाको उत्तरायण, ती महिनाहरूले वर्ष, वर्षले सूर्य, सूर्यले चन्द्रमा, चन्द्रमाले विद्युत्, त्यहाँबाट अमानुष पुरुष त्यस ब्रह्मलोकको सीमा, विरजा नदी सम्म पुर्‍याउँछ। यहि देवपथ ब्रह्म पथ हो। यस पथबाट गएका यस मानवावर्त्तमा अर्थात् संसारमा आउँदैनन्। यस देवयान मार्गमा गएका ब्रह्मज्ञानी ब्रह्मलाई प्राप्त गर्दछन्। यस श्रुतिमा संवत्सर आदिले त्यसको अभिमानी देवताको उपलक्षण हो॥२४॥

-★-★-★-

## धूमो रात्रिस्तथा कृष्ण: षण्मासा दक्षिणायनम्।
## तत्र चान्द्रमसं ज्योतिर्योगी प्राप्य निवर्तते॥

**(र जुन मार्गमा) धूमको अधिपति देउता, रात्रिको अधिपति देउता र कृष्णपक्षको अधिपति देउता तथा छ: महिनावाला दक्षिणायनको अधिपति देउता छन् त्यस मार्गबाट शरीर छोडेर गएको योगी (सकाम मनुष्य) चन्द्रमाको ज्योतिलाई प्राप्त भएर फर्केर आउँदछ अर्थात् जन्म-मरणमा पर्दछ॥२५॥**

पुनरावृत्तिमार्गमाह-धूम इति। अत्रापिशब्देन धूममार्गा-भिमानिनो देवता रात्र्यादिशब्दैश्च तत्तत्कालाभिमानिन्यो देवता उपलक्ष्यन्ते। एतदपि पितृलोकाकाशादीनामुप-लक्षणम्। तत्र तस्मिन् पितृयानपथि प्रयात: योगी इष्टापूर्त्ता-दिपुण्यकर्मकारी जन: चान्द्रमसं ज्योतिस्तदुपलक्षितं स्वर्गलोकं प्राप्य तत्र पुण्यकर्मफलं भुक्त्वा पुनर्निवर्त्तते। तथा च श्रुति: "अथ य इमे इष्टापूर्त्ते दत्तमित्युपासते ते धूममभिसम्भवन्ति धूमाद्रात्रिं रात्रेरपरपक्षमपरपक्षा-द्यान्षड्दक्षिणैति मासांस्तानेति सम्वत्सरमभिप्राप्नुवन्ति मासेभ्य: पितृलोकं पितृलोकादाकाशमाकशाच्चन्द्रमसमेष सोमो राजा तद्देवानामन्नं तं देवा भक्षयन्ति तस्मिन्यावत्सम्पातमुषित्वाऽथैतमेवाध्वानं पुनर्निवर्त्तन्ते, यथेतमाकाशमाकाशाद्वायुं वायुभूत्वा धूमो भवति धूमो भूत्वाऽभ्रं भवत्यभ्रं भूत्वा मेघो भवति मेघो भूत्वाप्रवर्षति त इह व्रीहिर्वायवा ओषधिवनस्पतयस्तिलमाषा इति जायन्ते यो यो ह्यन्नमत्ति यो रेत: सिञ्चति तद्भूय एव भवति"

अब आवृत्ति मार्ग अर्थात् पुनर्जन्म दिनेवाला मार्गको वर्णन गर्नुहुन्छ। यहाँ पनि धूम भन्नाले धूमाभिमानी देवता तथा रात्री शब्दले त्यस-त्यस मार्गको अभिमानी देवताहरू भनेर जान्नु पर्दछ। यो मार्ग पितृलोक, आकाश आदिको पनि बोधक हो यद्यपि यसको नाम श्लोकमा दिईएको छैन। इष्टापूर्त्तादि शुभकर्महरू गर्नेवाला योगी पितृयान मार्गबाट गएर चन्द्रमाको ज्योतिले उपलक्षित स्वर्गलोकलाई प्राप्त गर्दछ र त्यहाँ आफुले गरेका इष्टपूर्त्तादि पुण्य कर्महरूको फल भोगेर फेरि यस संसारमा फर्केर आउनु पर्दछ, यसमा श्रुति प्रमाण छ, यथा-"अथ ....भवति" अर्थात् जो इष्टपूर्त्तादि शुभकर्म गर्दछन् ती धूममार्गलाई प्राप्त गर्दछन्, धूमबाट रात्री, रात्रीबाट कृष्णपक्ष, कृष्ण पक्षबाट छ: महिना दक्षिणायन र ती महिनाहरूले वर्षलाई प्राप्त गर्दछन्। फेरि पितृलोक, पितृलोक बाट आकाश, आकाशबाट चन्द्रमा। यो राजा सोम अर्थात् चन्द्रमा ती देवताहरूको अन्न हो। देवता त्यसलाई खान्छन्। त्यसमा अर्थात् स्वर्गमा जब सम्म कर्मफलको भोग समाप्त हुँदैनन् तब सम्म बसेर त्यसै मार्गबाट फर्किन्छन्। आकाशमा आउँछ, आकाशबाट वायु, वायुबाट बनेर धूम हुन्छ, धूम भएर अभ्र, अभ्र भएर मेघ हुन्छ, मेघ भएर बर्सिन्छ। ती नै धान या जौ, घासँ पात, तिल र माष हुन्छन्। जो जो अन्न खान्छन् त्यसको वीर्य बन्दछ। जब पुरुष स्त्रीमा वीर्य त्याग गर्दछ, र यस प्रकार ती फेरि जन्म लिन्छन्। सम्पातको अर्थ हो कि जब सम्म कर्मफल भोग रहन्छ

सन्पतत्यनेनेति सम्पातः कर्मतत्फलभोगो यावत्तावदुषित्वा आकाशादिक्रमेण धूममार्गमेव निवर्त्तत इत्यर्थः। "प्राप्यान्तं कर्मणस्तस्य यत्किञ्चेह करोति यः। तस्माल्लोकात्पुन-रेत्यस्मै लोकाय कर्मणे, तद्य इह रमणीयचरणा रमणीयां योनिमापद्येरन् ब्राह्मणयोनिं वा क्षत्रिययोनिं वा वैश्ययोनिं वाऽथ य इह कपूयचरणाः कपूयां योनिमापद्येरन् श्वयोनिं वा सूकरयोनिं वे"ति। तस्मादावृत्तिमार्गादितस्मात्पूर्वोक्तो नित्यसुखरूपोऽनावृत्तिमार्ग एव मुमुक्षुणा प्रार्थ्य इति भावः॥

तब सम्म स्वर्गमा बसेर फेरि आकाशादि क्रमले धूम मार्गमा नै फर्केर आउँदछन्। भनेको पनि छ- "प्राप्यान्तं....सूकरयोनिं वा" अर्थात् जे केहि यहाँ गर्दछ त्यस कर्मको अंत हुन्छ, तब फेरि त्यसलोकबाट यसलोकमा कर्म गर्नका लागि आउँदछ। उनीहरूमा जो राम्रो आचरणवाला भए ती सुन्दर योनि जस्तो-ब्राह्मण योनि, क्षत्रिय योनि वा वैश्य योनिलाई प्राप्त गर्दछन् र जो नराम्रो आचरणवाला छन् ती नराम्रो योनि जस्तो कुकुरको योनि, सुँगुरको योनि वा चाण्डालको योनिलाई प्राप्त गर्दछन्। यसले पुनर्जन्म को मार्गबाट पहिले भनिएको पुनर्जन्म नहुनेवाला मार्ग नै नित्य सुखदायि छ, र मुमुक्षुहरूलाई पनि त्यही नै प्रार्थनीय छ॥२५॥

-★-★-★-

**शुक्लकृष्णे गती ह्येते जगतः शाश्वते मते।**
**एकया यात्यनावृत्तिमन्ययावर्तते पुनः॥**

**किनकी शुक्ल र कृष्ण यी दुबै गतिहरू अनादिकाल देखि नै जगत्(प्राणिमात्र) को साथ सम्बन्ध राख्ने मानिएको छ। यिनीहरूमा एउटा गतिमा जानेहरूले फर्किएर आउनु पर्दैन र अर्को गतिमा जानेहरूले पुनः फर्किएर आउनु पर्दछ॥२६॥**

उक्तौ मार्गौ नित्यतया निरूपयन्नुपसंहरति-शुक्लकृष्णे इति। शुक्ला अर्चिरादिका प्रकाशमयत्वात्, कृष्णा धूमादिका तमोमयत्वात् एते गती मार्गौ ज्ञानाधिकारिणः कर्मा-धिकारिणश्च द्विविधस्य जगतः शाश्वते, अनादीमते। शास्त्रज्ञैरिति शेषः। तयोरेकया शुक्लया कश्चिदधिकारी अनावृत्तिं यातिं अन्यया कृष्णया पुण्यकर्मा पुनरावर्त्तते॥

उक्त दुबै मार्गहरूको नित्यता बताउँदै उपसंहार गर्नुहुन्छ। प्रकाशमय भएकोले अर्चि आदि शुक्ल र तमोमय हुनाले धूम आदि कृष्ण यी नै दुई प्रकारको संसारमा अनादि मार्ग शास्त्रलाई जान्नेहरूले भनेका छन्। शुक्ल मार्ग ब्रह्म विद्याको ज्ञानाधिकारी मनुष्यहरूको हो र कृष्णमार्ग कर्माधिकारी मनुष्यहरूको। यी दुबै मार्ग मध्ये शुक्ल मार्गबाट जो कोहि पनि जान्छन् त्यसको पुनर्जन्म हुँदैन र अर्को अर्थात् कृष्णमार्ग बाट गएका पुण्यात्माहरूको पुनर्जन्म हुन्छ॥२६॥

-★-★-★-

**नैते सृती पार्थ जानन्योगी मुह्यति कश्चन।**
**तस्मात्सर्वेषु कालेषु योगयुक्तो भवार्जुन॥**

**हे पार्थ! यी दुबै मार्गहरूलाई जान्ने कुनै पनि मनुष्य मोहित हुँदैन,अतः हे अर्जुन! तिमी सबै समयमा योगयुक्त होऊ॥२७॥**

उक्तस्य मार्गद्वयस्य ज्ञानफलं दर्शयन्योगमेव दृढीकरोति-नैते इतिं एते सृतो मार्गौ हे पार्थ! परमपदप्राप्तये एका संसारावर्त्त-नायापरेति जानन् हेयोपादेयतया विवेचयन् योगी ज्ञाननिष्ठो ध्याननिष्ठो वा कश्चन कश्चिदपि न मुह्यति, पुनरावृत्तिनियतं स्वर्गादिफलं पुरुषार्थतया न प्रत्येति। यस्मादेवं तस्मादपुन-रावृत्तये हे अर्जुन त्वं सर्वेषु कालेषु योगयुक्तो ज्ञाननिष्ठो ध्याननिष्ठो वा भव॥

माथि भनेको दुबै मार्गको ज्ञान फल देखाउँदै योगलाई नै सुदृढ गर्नुहुन्छ। हे अर्जुन! यी दुबै मार्ग मध्ये एक परमपद प्राप्तिको लागि, र अर्को संसारमा फर्केर आउनको लागि हो यस प्रकार दुबै मार्गहरूलाई जान्दै र छोड्ने तथा ग्रहण गर्ने योग्यता विचार गर्दै कुनै पनि ज्ञाननिष्ठ योगी, स्वर्गादि सुखलाई पुरुषार्थ संझेर त्यसमा कहिले पनि मुग्ध हुन सक्दैन, अर्थात् पुनर्जन्मको कारण हुनाले स्वर्गादि सुखमा पनि कहिल्यै पनि पुरुषार्थ रूप नित्यबुद्धि वा विश्वास गर्न सक्दैन। जब यस्तो कुरा छ भने हे अर्जुन! संसार बंधनबाट छुट्नके लागि सदा ध्यानयोगी बन वा ज्ञानयोगी बन, किनकी यी दुबै योग अर्चिरादि मार्गबाट जानको लागि आवश्यक छ॥२७॥

-★-★-★-

**वेदेषु यज्ञेषु तपः सु चैव दानेषु यत्पुण्यफलं प्रदिष्टम्।**
**अत्येति तत्सर्वमिदं विदित्वा योगी परं स्थानमुपैति चाद्यम्॥**

**भक्तहरू यस अध्यायमा वर्णित विषयलाई जानेर वेदहरूमा, यज्ञहरूमा, तपस्याहरूमा तथा दानमा जो-जो पुण्यफल भनिएका छन् ती सबै पुण्यफल- हरूको अतिक्रमण गरेर आदि स्थान परमात्मालाई प्राप्त गर्दछ॥२८॥**

तदेवमध्यायद्वयोक्तशास्त्रार्थद्वयोक्तशास्त्रार्थनिर्णयस्य फलं वदन्नध्यायमुपसंहरति-वेदेष्विति। स्वध्यायविधिना गुरुशुश्रूषणपूर्वकसम्यगधीतेषु वेदेषु यज्ञेषु साङ्गोपाङ्गतया श्रद्धया सम्यगनुष्ठितेषु तपस्सु शारीरमानसवाङ्मयेषु सम्यक् श्रद्धया सुतप्तेषु दानेषु देशे काले सुपात्रे च श्रद्धया प्रतिपादितेषु यत् पुण्यफलं प्रदिष्टं सुकृतस्य फलं निर्दिष्टं शास्त्रेण तत्सर्वमत्येति, अतिक्रम्यात्यल्पमेतदिति निश्चये-नोपेक्ष्य तदुत्कृष्टानन्तफलमेति। किं कृत्वा इदमध्यायद्व-योक्तं भगवदैश्वर्याख्यसप्तप्रश्ननिर्णयार्थं विदित्वा सम्यग-वधार्य्यानुष्ठाय च योगी ज्ञाननिष्ठो ध्याननिष्ठो वा भूत्वा परमुत्कृष्टं सर्वयोगिप्राप्यं स्थानं पारमेश्वरमाद्यं सनातनमुपैति प्राप्नोति॥ "नियमेन यतः सर्वमानन्देनाततं जगत्। तमहं नियमानन्दं परमात्मानमाश्रये॥

यस प्रकार दुबै अध्यायको शास्त्रार्थको फल निर्णयलाई भन्दै अध्यायलाई समाप्त गर्नुहुन्छ। स्वाध्याय विधिले गुरुको सेवा गरेर वेद पढ्नुको, श्रद्धाले सांगोपांग राम्रो सँग यज्ञ गर्नुको, शरीर, मन र वचनले श्रद्धा पूर्वक तप गर्नुको, देश, पात्र र कालको विचार गरेर दिएको दानको जो पुण्य फल भनिएको छ अर्थात् सुकृतको जुन फल शास्त्रले बताएको छ, ती सबै फलहरूलाई पनि ध्यान योगी वा ज्ञाननिष्ठ योगी पार गर्दछ अर्थात् पुण्य फल धेरै थोरै र नाशवान् छ, यो संझेर त्यो भन्दा उत्कृष्ट फललाई प्राप्त गर्दछ। के गरेर? उत्तर दिनुहुन्छ कि गत दुबै अध्यायहरूमा भनेको भगवान्को ऐश्वर्य स्वरूप सातै प्रश्नका निर्णयको राम्रो सँग अर्थ संझेर, र तदनुरूप अनुष्ठान गरेर योगी ज्ञाननिष्ठ वा ध्याननिष्ठ भएर परमेश्वरको योगीगम्य र श्रेष्ठ सनातन स्थानलाई प्राप्त गर्दछ॥२८॥

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां अक्षरब्रह्मयोगो नामाष्टमोऽध्यायः॥८॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ नवमोऽध्यायः

## श्रीभगवानुवाच

**इदं तु ते गुह्यतमं प्रवक्ष्याम्यनसूयवे।**
**ज्ञानं विज्ञानसहितं यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात्॥**

**श्रीभगवान्ले भन्नुभयो- यो अत्यन्त गोपनीय विज्ञानसहित ज्ञान दोषदृष्टिरहित तिम्रो लागि अझै राम्रो सँग भन्दछु, जसलाई जानेर तिमी अशुभ अर्थात् जन्म-मरणरूप संसारबाट मुक्त हुनेछौ॥१॥**

पूर्वं सप्तमाष्टमाध्याययोर्भगवदैश्वर्यं भक्तविशेषा भक्त्यैव संसारोत्तरणपूर्वकभगवत्प्राप्तिस्तत्प्रकारनिर्धारणं प्राप्तौ ज्ञानयोगध्यानयोगयोरसाधारणोपायत्वं तद्वतोऽर्चिरादिगत्या परमपदप्राप्तिस्तदभाववतः संसारावृत्तिरिति प्रतिपादितम्। इदानीं भगवत्तत्त्वज्ञानस्य स्वरूपं निरूपयितुं भक्तेश्चासा-धारणं प्रभावं द्योतयितुं नवमाध्याय आरभ्यते। तत्र तावत् ज्ञानमाहात्म्यमभक्तनिन्दां च व्यञ्जयितुं श्रीभगवानुवाच-इदं त्विति। इदं गुह्यतमम्। गुह्यं धर्मज्ञानं ततो देहादिव्यतिरि-क्तात्मज्ञानं गुह्यतरं, ततोऽपि परमात्मज्ञानमतिरहस्यत्वाद् गुह्यतमं भक्त्यन्वितं परमात्मविषयकं ज्ञायते स्वरूपया-थात्म्यमनेनेति ज्ञानं विज्ञानसहितम् उपास्योपासनगतवि-शेषज्ञानसहितमनसूयवे मयि दोषारोपणमकुर्वते ते तुभ्यं वक्ष्यामि। यज्ज्ञानं वक्ष्यमाणमनुष्ठानपर्यन्तं ज्ञात्वा अशु-भात्संसारान्मत्प्राप्तिविरोधिनः सर्वस्माद्विमोक्ष्यसे॥

सातौं र आठौं अध्यायहरूमा भगवान्को ऐश्वर्य, भक्तविशेष, भक्तिले नै संसारबाट उद्धार भएर भगवान्लाई प्राप्त गर्नु, त्यसको प्रकारको निश्चय, भगवान्लाई प्राप्त गर्नमा ज्ञानयोग र ध्यानयोग नै असाधारण उपाय हुनु र त्यस उपायलाई गर्नेहरूलाई अर्चिरादि गतिबाट परमपद पाउनु तथा त्यस उपायलाई न अपनाउनेलाई पुनर्जन्म हुने कुरा भन्नुभएको छ। अब भगवान् तत्त्व सम्बन्धी ज्ञानको स्वरूप निरूपण गर्ने र भक्तिको असाधारण प्रभाव देखाउन नवौं अध्याय प्रारम्भ गर्नुहुन्छ। त्यसमा पहिले ज्ञानयोगको महत्त्व र आफ्ना अभक्तहरूको निन्दा प्रकट गर्नको लागि भगवान् भन्नुहुन्छ- गुह्य अर्थात् जुन गुप्त धर्मज्ञान छ त्यसभन्दा देहादिबाट भिन्न आत्मज्ञान गुह्यतर अर्थात् धेरै गुप्त छ र त्यो भन्दा पनि रहस्य वा गोपनीय भएको कारण परमात्माको जो ज्ञान छ त्यो गुह्यतम नाम अत्यन्त गुह्य छ। यस्तो अभियुक्त परमात्माविषयक यथार्थ ज्ञानलाई, विज्ञान सहित अर्थात् उपास्य परमात्मा र त्यसको उपासना आदि को विशेष ज्ञान सहित, म मा अलिकति पनि दोष नदेख्ने, तिमीसँग म भन्दछु। जुन अगाडी भनिने ज्ञानलाई अनुष्ठान सम्म जानेर मेरो प्राप्तिको बाधक अशुभ अर्थात् संसारबाट अथवा सबै पापहरूबाट छुटकारा पाउने छौ॥१॥

-★-★-★-

**राजविद्या राजगुह्यं पवित्रमिदमुत्तमम्।**
**प्रत्यक्षावगमं धर्म्यं सुसुखं कर्तुमव्ययम्॥**

**यो विज्ञानसहित ज्ञान अर्थात् समग्ररूप सम्पूर्ण विद्याहरूको राजा र सम्पूर्ण गोपनीयहरूको राजा हो। यो अति पवित्र तथा अतिश्रेष्ठ हो र यसको फल पनि प्रत्यक्ष हुन्छ। यो धर्ममय छ, अविनाशी र गर्नमा पनि धेरै सुगम छ अर्थात् यसलाई प्राप्त गर्न धेरै सजिलो छ॥२॥**

किञ्च राजविद्येति। विद्यानां राजा राजविद्या सर्वाऽविद्या-तत्कार्यनाशकत्वात्। तथा राजगुह्यं गुह्यानां राजा तत्तथा सर्वगुह्येषु श्रेष्ठं मदनुग्रहं विना जन्मसहस्रेणापि बहुभिरज्ञा-तत्वाद्। "उपसर्जनं पूर्वमि"त्यनेन विद्याशब्दस्य पूर्वनि-

अरु पनि, यो ज्ञान विद्याहरूको राजा हो, किनकी सबै अविद्याहरू र त्यसका कार्यहरूका नाशक छ तथा राजगुह्य हो, अर्थात् सबै रहस्यहरूको गोपनीय भन्दा पनि गोपनीय छ किनकी मेरो कृपाको बिना हजारौं जन्ममा पनि कसैबाट जान्न सकिदैन। यद्यपि

पतार्हत्वेऽपि राजदन्तादित्वात्पर निपातः। पवित्रमिद-मुत्तमम्। प्रायश्चित्तान्यपि पापानि नाशयन्त्यतस्तानि पवित्राणि, तथाऽपि यत्किञ्चिन्नाशितमपि तत्सूक्ष्मरूपेण तिष्ठत्येव। यतः पुनः पुरुषस्य पापे प्रवृत्तिर्जायते, इदं तु अनेकजन्मसहस्रसञ्चितानां पापानां स्थूलसूक्ष्मावस्थानां सर्वेषां निरवशेषेण नाशकमतः सर्वोत्तमं पावनमिदमेव। प्रत्यक्षावगमम्। अवगम्यते इत्यवगमो विषयः प्रत्यक्षभूतोऽवगमो विषयो यस्य तत्तथा, भक्तिरूपतापन्नेन ज्ञानेनोपास्यमानोऽहं तदानीमेवोपासितुः प्रत्यक्षतामुपगच्छामीत्यर्थः। ततश्च धर्म्यं धर्मादनपेतं धर्मो हि श्रेयःसाधनम्, इदं तु जन्मान्तरसहस्रेष्वनुष्ठितनिष्कामकर्मलभ्यत्वात्स्वरूपेणापि श्रेयोरूपम्, अत्यर्थमत्प्रियत्वेन मद्दर्शनापादकतया परमश्रेयोरूपमत्प्राप्तिसाधनमित्यर्थः। तर्हि दुःसम्पाद्यं स्यान्, नत्याह सुसुखं कर्त्तुम्। सद्गुरुपदेशजनितसम्यग्व्यवसायसहकृतकर्मार्पणादिना सुखं यथा स्यात्तथोपादेयमित्यर्थः। एवमप्यव्ययं कर्मकाण्डवकिञ्चिदङ्गवैगुण्ये सति प्रत्यवायापादकतया स्वरूपतः फलतो वा विनाशि न भवतीत्यव्ययमक्षयं मत्प्राप्तिरूपं फलं साधयित्वाऽपि न क्षीयत इत्यव्ययमिति वाऽर्थः॥

**प्रायश्चित पनि पापनाशक हुनाले पवित्र भए पनि प्रायश्चित द्वारा नाश गरिएका पापहरूको केहि अंश सूक्ष्म रूपले बसि नै हाल्छ। यसैले पुरुषको मनमा फेरि पनि पापको प्रवृत्ति हुन जान्छ। तर यो ज्ञान अनेक हजारौं जन्मको सञ्चित स्थूल, सूक्ष्म सबै प्रकारको पापहरूलाई पूर्ण नष्ट गरिदिन्छ। यसैले सर्वोत्तम पवित्र यही नै हो। यसको विषय प्रत्यक्ष छ अर्थात् भक्तिरूपमा प्राप्त ज्ञानले उपासित भएर म त्यसै समय उपासना गर्नेको सामुन्ने प्रत्यक्ष हुन्छु। पुनः यो ज्ञान धर्मयुक्त हो। धर्म कल्याणको साधन हो। यो हजारौं जन्मान्तरमा पनि गरिएको निष्काम कर्मको फलले प्राप्त भएको कारण कल्याणरूप त छँदैछ, अर्थात् मेरो अति प्रिय हुनाले र मेरो दर्शनको कारण भएकोले परम कल्याणरूप अर्थात् मेरो प्राप्तिको साधनरूप हो। यहाँ यो शंका हुन सक्दछ कि यदि यो ज्ञान यस्तो छ भने, त धेरै दुःखले प्राप्त हुने होला। यस शंकालाई हटाउनको लागि भगवान् भन्नुहुन्छ कि यति भएर पनि यो सुखले प्राप्त हुन योग्य छ, अर्थात् सद्गुरुको उपदेशले उत्पन्न सम्यक् निश्चयका साथ कृत् कर्महरूलाई भगवान्मा अर्पण गर्नाले नै सुख पूर्वक प्राप्त हुन जान्छ। यस्तो भएर पनि यो अव्यय छ अर्थात् कर्मकाण्डको समान कुनै अंगमा दोष भए पछि पनि यसमा प्रत्यवाय, प्रायश्चित वा पापको लेश छैन र यसैले फलले वा स्वरूपले विनाशी पनि छैन अर्थात् सदा अक्षय छ अथवा अक्षय हुनाले मेरो प्राप्ति गराएर पनि यो सदा नै बनि रहन्छ, नष्ट हुँदैन। यस्तो यो ज्ञान हो॥२॥**

-★-★-★-

**अश्रद्दधानाः पुरुषा धर्मस्यास्य परन्तप।**
**अप्राप्य मां निवर्तन्ते मृत्युसंसारवर्त्मनि॥**

**हे परन्तप! यस धर्मको महिमा माथि श्रद्धा नराख्ने मनुष्य मलाई प्राप्त नभएर मृत्युरूप संसारको मार्गमा फर्किन्छ अर्थात् बारम्बार जन्मिने-मर्ने गरिरहन्छन्॥३॥**

ननु यदीदं परमश्रेयःसाधनत्वेन सुकरत्वेन च सर्वोत्कृष्टं चेत्तर्हि सर्वेऽपीदमेवानुष्ठाय कुतो न मुच्यन्ते? किमर्थं संसारिणो भवन्तीति चेत्तत्राह-अश्रद्दधाना इति। अस्य भक्तिसहितज्ञानलक्षणस्य परमधर्मस्येति कर्मणि षष्ठी, इमं धर्मश्रद्दधानाः पुरुषाः पापबाहुल्येन दूषितान्तकरणतया लघुत्वेन मन्यमाना मोक्षार्थमुपायान्तरेण कथञ्चिद्यतमाना अपि मद्वाक्ये विश्वासाभावान्मद्विमुखाः सन्तो मामप्राप्य मृत्युसंसारवर्त्मनि मृत्युक्ते संसारवर्त्मनि जन्ममरणात्मकस्य संसारस्य वर्त्मनि मार्गे मद्भक्तिहीने केवलकर्मादौ साधने निवर्त्तन्ते, नितरां वर्त्तन्ते सर्वदा परिभ्रमन्तीत्यर्थः॥

**यदि यो ज्ञान परम श्रेयको साधन हो र सुलभ भएकोले सर्वश्रेष्ठ छ भने किन त सबैजना यसको अनुष्ठान गरेर मोक्ष पाउँदैनन्। यस भक्तिसहित ज्ञानलक्षणवाला परम धर्म तिर श्रद्धा नराख्ने अर्थात् पापको अधिकताले दुष्ट-हृदय भएर यसलाई सानो उपाय संझिनेहरू, अरु नै उपायहरूद्वारा मोक्ष प्राप्त गर्नका लागि यत्न गर्दै रहेर पनि, मेरो कुरामा विश्वास नराखी, मसँग विमुख भई, जब मलाई पाउँदैनन् तब जन्ममरणमूलक यस संसारको मार्गमा नै, मेरो भक्तिले हीन भएर केवल कर्म आदि साधनहरूमा भौंतारिई रहन्छन्॥३॥**

-★-★-★-

**मया ततमिदं सर्वं जगदव्यक्तमूर्तिना ।**
**मत्स्थानि सर्वभूतानि च चाहं तेष्ववस्थितः ॥**

**यो सबै संसार मेरो निराकार स्वरूपले व्याप्त छ, सम्पूर्ण प्राणी ममा स्थित छन्; तर म तिनीहरूमा स्थित छैन ॥४॥**

एवं वक्तव्यतया प्रतिज्ञातं ज्ञानं निर्दिश्य श्रेयोऽनुबन्धित–याऽन्वयव्यतिरेकाभ्यां तत् स्तुत्वा श्रोतारमभिमुखीकृत्य निरूपयति–मयेति द्वाभ्याम्। इदं चेतनाचेतनात्मकं सर्वं जगत् अव्यक्तमूर्त्तिना अव्यक्ता इन्द्रियागोचरा मूर्त्तिर्यस्य तेनान्तर्यामिरूपेण मया ततं व्याप्तम्। मत्स्थानि मय्येव सर्वकारणकारणे आधेयतया स्थितानि सर्वाणि भूतानि स्थावरजङ्गमानि मत्तोऽन्यत्र स्थितिप्रवृत्त्यनर्हत्वान्मद–धीनस्थितिप्रवृत्तिकान्येवेत्यर्थः। "योऽसौ सर्वेषु भूतेष्वा–विश्य भूतानि विदधाती"ति श्रुतेः– "बुद्धिर्मनो महद्वायुस्ते–जोऽम्भः खं मही च या। चतुर्विधं च यद्भूतं सर्वं कृष्णे प्रतिष्ठितमि"ति ॥ सभापर्वणि सहदेववचनात्। एवं चेत्तव कुत्र स्थितिरिति स्वाधारो वक्तव्य इति चेत्तत्राह–न चाहं तेष्ववस्थितः। अहं तेषु भूतेष्ववस्थितो न भवामि। यथाऽहं सर्वाधारस्तथा न मे कश्चिदाधारः, स्वाधार एवाहं नान्या–धीनस्थितिप्रवृत्तिक इत्यर्थः। तथा छान्दोग्ये प्रश्नोत्तराभ्यां निर्णीतं भूमविद्यायां "स भगवः कस्मिन्प्रतिष्ठते इति स्वमहिम्नि यदि वा न स्वमहिम्नीति गो अश्वमहिमेत्या–चक्षते हस्तिहिरण्यदासभार्याक्षेत्राण्यायतनानीति नाहमेवं ब्रवीमीति होवाच ह्यन्यो ह्यस्मिन्प्रतिष्ठित इति स एवाधस्तात्स एवोपरिष्टात् स पश्चात्स पुरस्तात् स दक्षिणतः स उत्तरतः स एवेदंसर्वमि"ति ॥

यस प्रकार प्रतिज्ञात ज्ञानको विषयमा अन्वय अर्थात् त्यसको गुण कथन र व्यतिरेक अर्थात् त्यसको अभावमा दोष कथन द्वारा त्यो ज्ञानको बड़ाई गरी र यस प्रकार अर्जुनलाई आफुतिर आकर्षित गरेर दुई श्लोकहरू द्वारा त्यस ज्ञानको निरूपण गर्नुहुन्छ। यस चेतन र अचेतन संसारमा अव्यक्त अर्थात् इन्द्रियहरूबाट अगोचर मूर्त्तिद्वारा(अन्तर्यामी रूपले) म व्याप्त भईरहेको छु। सम्पूर्ण कारणहरूका कारण मेरो आधारमा सबै स्थावर जंगम जीव आध ेय भईरहन्छन्, किनकी मबाट अलग्गै कुनै वस्तु रहन नै सक्दैनन्। सबै वस्तुको स्थिति प्रवृत्ति मेरो नै आधीन घ। श्रुतिमा पनि यो कुरा नै भनिएको छ। यथा–'योऽसौ सर्वेषु भूतेष्वाविश्य भूतानि विदधाति' अर्थात् त्यो (ब्रह्म) सबै जीवहरूमा बसेर उनीहरूलाई धारण गर्दछ। सभा पर्वमा सहदेवले पनि भनेका छन्– "बुद्धिर्मनो ...प्रतिष्ठितम्॥ अर्थात् बुद्धि, मन, महत्, वायु, तेज, जल, पृथ्वी, आकाश सहित अन्य चार प्रकारका जीव सबै नै कृष्णमा नै प्रतिष्ठित छन्। यदि यस्तो कुरा हो भने हजुर कहाँ बस्नुहुन्छ? हजुरको आधार के हो? यसको उत्तरमा भगवान् भन्नुहुन्छ कि म ती जीवहरूमा रहन्न। जस्तो म सबैको आधार हूँ त्यस्तो मेरो आधार कोही पनि छैन। स्वतन्त्र भएको कारण मेरो आफ्नो आधार म नै हूँ। मेरो स्थिति प्रवृत्ति अरुको अधीन मा छैन। म आफ्नै अधिनमा छु। छान्दोग्य उपनिषद्को भूमविद्यामा प्रश्नोत्तरको रूपमा लेखिएको छ– "स.....एवेदंसर्वमि" अर्थात् त्यो भगवान् कसमा प्रतिष्ठित छ? त्यसको आधार के हो? त्यो आफ्नो महिमा मा प्रतिष्ठित छ वा छैन? उत्तर पाईन्छ कि, उहाँ महिमा संसारको महिमा बराबर घोड़ा, हात्ती, सुर्वण, दास, दासी, स्त्री, खेतबारीले सूचित हुँदैनन्, न ती अरुमा प्रतिष्ठित नै छन् किनकी माथि तल, पूर्व पश्चिम, उत्तर दक्षिण सबै ठाऊँ मा प्रतिष्ठित छन् र सर्वव्यापक हुनाले सबैका एकमात्र आधार उहाँ नै हो ॥४॥

–★–★–★–

**न च मत्स्थानि भूतानि पश्य मे योगमैश्वरम्।**
**भूतभृन्न च भूतस्थो ममात्मा भूतभावनः ॥**

**तथा ती प्राणीहरू पनि ममा स्थित छैनन् र मेरो यस ईश्वर–सम्बन्धी योग–सामर्थ्य लाई हेर। सम्पूर्ण प्राणीहरूलाई उत्पन्न गर्ने र प्राणीहरूलाई धारण, भरण–पोषण गर्ने मेरो स्वरूप ती प्राणीहरूमा स्थित छैन ॥५॥**

किञ्च न च मत्स्थानीति। मयि स्थितान्यपि भूतानि न च स्थितानि पात्रे घृतादिवन्मयि संसक्तानि न भवन्ति,

म मा स्थित भएर पनि जीवमात्र पात्रमा घ्यूको समान टाँसिएका छैनन्, किनकी म असङ्ग छु। वेदमा पनि भनिएको छ–'असंगोह्ययं

ममासङ्गत्वात्। "असङ्गो ह्ययं पुरुष"इति श्रुतेः। नन्वेवं चेत्तर्हि उक्तं व्यापकत्वमाश्रयत्वं च कथं सम्भावनीयं स्यादित्यत आह–पश्येति। मे परमेश्वरस्यैश्वरमसाधारणं योगमचिन्त्यशक्तिप्रभावं पश्य, अन्यत्रासम्भावितत्वेऽपि अघटितघटनापटीयस्त्वसामर्थ्यरूपं ममाचिन्त्यशक्तियोगेन न किमप्यसम्भावनीयमित्यर्थः। तदेवोपपादयति–भूतभृदिति। विभर्त्ति धारयति पोषयति वा तथा भूतोऽप्यहं न च भूतस्थो, यथा जीवो देहं धारयन्पालयन्वा तदहङ्कारेण तत्संसक्तो भवति, अहं तु भूतानां धारणपोषणकर्त्ताऽपि अहङ्काराभावात्तत्संसक्तो न भवामीत्यर्थः। असङ्गत्वे कथं कार्योत्पत्तिरिति चेत्तत्राह–ममात्मा। सङ्कल्पलक्षण आत्मा मन एव भूतानां भावन उत्पादकः। "सोऽकामयत बहु स्यां प्रजायेये"ति श्रुतेः॥

पुरुषः' अर्थात् त्यो पुरुष (परमात्मा) निःसङ्ग छ, कसैबाट लिप्त छैन। यदि यस्तो कुरा हो भने त व्यापकत्व(सबैमा हुनु) र आश्रयत्व(सबैको आधार हुनु), जो पछाडि भनिसकिएको छ, कसरी सिद्ध हुन्छ? यसको उत्तरमा भगवान् भन्नुहुन्छ कि, यही नै त म परमात्माको असाधारण ईश्वरता हो। मेरो यस विलक्षण योग अर्थात् अचिन्त्यशक्तिको प्रभावलाई हेर। अन्य ठाउँमा यस्तो कुरो नघटे पनि अघटन घटना-कुशल सामर्थ्य भएकोले मसँग केहि पनि असम्भव छैन। यसै कुरालाई फेरि स्पष्ट पार्नुहुन्छ। जीवहरूलाई धारण गर्नेवाला वा पोषण गर्नेवाला भएर पनि म तिनीहरूमा स्थित छैन। जस्तो जीव शरीरलाई धारण वा पालन गरेर अहंकारयुक्त भई त्यसमा संसक्त हुनजान्छ तर म त्यस्तो हुँदिन। भाव यो कि सबै प्राणीहरूलाई म धारण वा पालन त गर्छु तर म तिनीहरूमा अहंकारयुक्त भई आसक्त हुन्न, तिनीहरू सँग टाँसिन्न। यदि कुनै शंका गर्दछ कि असंग भएकोले हजुरबाट कार्य कसरी उत्पन्न हुन्छ त यसको उत्तर यो दिनुहुन्छ कि संकल्पलक्षणवाला मेरो आत्मा अर्थात् मन नै जीवहरूको उत्पादक हो। श्रुतिमा पनि भनेको छ- 'सोऽकामयत बहुस्यां प्रजायेय' अर्थात् त्यसले इच्छा गऱ्यो कि म धेरै होऊँ। यस्तो इच्छाले नै सृष्टि भयो॥५॥

–★–★–★–

## यथाकाशस्थितो नित्यं वायुः सर्वत्रगो महान् ।
## तथा सर्वाणि भूतानि मत्स्थानीत्युपधारय॥

**जस्तै सर्वत्र विचरण गर्ने महान् वायु नित्य नै आकाशमा स्थित रहन्छ यस्तै नै सम्पूर्ण प्राणी ममा स्थित हुन्छन्; यस्तो तिमी मान्नु॥६॥**

असंसक्तयोरप्याधारधेयभावं दृष्टान्तेनाह–यथेति। अवकाशात्मके आकाशे नित्यं स्थितो वायुः सर्वत्रगः सर्वत्रोद्ध्वाधस्तिर्यक् गच्छति, महान्महत्परिमाणकः। एवम्भूतोऽपि यथाऽकाशे न संश्लिष्यते, असङ्गतवात्। तथाऽसङ्गस्वभावे मयि संश्लेषं विनैव सर्वाणि भूतानि स्थावरजङ्गमरूपाणि स्थितानि मदायत्तस्थितिप्रवृत्तिकानीतयुपधारयेत्येवं मम सर्वाधारत्वमसङ्गत्वं च विजानीहीत्यर्थः॥६॥

आधार र आधेय भाव बिना संश्लेष कै पनि हुन सक्दछ, यसलाई उदाहरण द्वारा बताउनु हुन्छ। अवकाशात्मक आकाशमा स्थित वायु सबै ठाऊँमा, अर्थात् तल माथि सोझो बाङ्गो बहन्छ र परिमाण मा धेरै ठूलो छ, तर असंगगुणवाला हुनाले आकाशमा टाँसिदैन। त्यस प्रकार किनकी म असंग गुणवाला हूँ, सबै स्थावर जंगम जीव म मा स्थित भएर पनि अर्थात् मेरो नै अधीन तिनीहरूको स्थिति प्रवृत्ति भएर पनि मसँग टाँसिएका छैनन्, यस्तो बुझ्नु। भाव यो कि म सर्वाधार भएर पनि असंग स्वभाववाला हुनाले प्राणिहरूको गुणदोषहरूबाट अस्पृष्ट छु॥६॥

–★–★–★–

## सर्वभूतानि कौन्तेय प्रकृतिं यान्ति मामिकाम् ।
## कल्पक्षये पुनस्तानि कल्पादौ विसृजाम्यहम्॥

**हे कौन्तेय! कल्पहरू क्षय भएपछि (महाप्रलयको समयमा) सम्पूर्ण प्राणी मेरो प्रकृतिलाई प्राप्त गर्दछन् र कल्पहरूका आदिमा (महासर्गको समयमा) म फेरि तिनीहरूको रचना गर्दछु॥७॥**

ननु स्यादेतत्तथाऽपि भवान्भूतानां निमित्तकारणमुपादानं वा?

यदि यस्तो कुरा हो भने कि जगत्को कारण भएर पनि हजुर

निमित्ततवे घटादीनां कुलालस्येवाधारत्वमनुपपन्नमुपादानत्वे यथा पृथिव्यां स्थितानां तत्कार्याणां घटादीनां तत्रैव लयः, पुनस्तत एवोपत्तिर्विकारत्वेन प्रसिद्धा, तथा त्वयि स्थितानां भूतानां त्वय्येव लयः, पुनस्त्वत्त एव परिणामेनोत्पत्तिः स्यात्तथात्वे तव परिणामित्वापत्त्या कथमसङ्गत्वमिति चेत्तत्राह–सर्वभूतानीति। सर्वाणि भूतानि स्थावरजङ्गमात्म–कानि कल्पक्षये प्रलयसमये हे कौन्तेय! मामिकां मन्नियम्यभूतां शक्तिं प्रकृतिं त्रिगुणात्मिकां मायां यान्ति, तत्र सूक्ष्मरूपेण जीयन्त इत्यर्थः। पुनस्तानि कल्पादौ सर्गकाले विसृजामि। प्रकृत्यैक्यापन्नानि ततो नामरूपविभागेन व्यक्तिकरोमि, अहं सर्वशक्त्याश्रयः परमेश्वरः। एवञ्च मच्छक्तिभूतायाः प्रकृतेरेवोत्पद्यन्ते, तत्रैव प्रलीयन्ते, स्थितिकालेऽपि तत्रैव तिष्ठन्ति अत एव नच मत्स्थानि भूतानीत्युक्तम्, शक्तेः शक्तिमतः पृथक्स्थितिप्रवृत्त्यभावादभेदविक्षया शक्तेः कार्यस्य शक्तिमतोऽप्यभिधानं मुख्यमेवातः शक्तिद्वारेण सर्वभूतोपादानत्वं तदुपादाने कारणान्तरापेक्षणान्निमित्तत्वं ममैव सिद्धं, प्रकृतिरूपाया मच्छक्तेर्जडत्वेन स्वरूपाभेदा–सम्भवात्परिणामादीनां तद्गतत्वमेव, शक्तिविक्षेपलक्षण–परिणामाङ्गीकारात्। तस्मादचिन्त्ययोगमायेश्वरस्य मम स्वशक्त्यैव जगदुपादानत्वमाधारत्वं लयस्थानत्वं तद्धर्मास्पृष्टत्वं चेति सर्वमविरुद्धम्॥

त्यससँग असंग हुनुहुन्छ भने हजुर जगत् को निमित्त कारण हो वा उपादान? यदि हजुर निमित्त कारण हो भने कुमालेको समान हजुर पनि सृष्टिको आधार हुन सक्नुहुन्न। र यदि हजुर उपादान कारण हो भने तब पृथ्वीमा स्थित, त्यसको कार्य घटादिको उत्पत्ति र फेरि त्यसैमा लय हुनु जसरी त्यसको विकार(परिणाम) संज्ञिईन्छ, त्यसरी नै हजुरमा स्थित जीवहरूको हजुरमा नै लय हुन्छ र हजुरबाट नै विकारद्वारा उत्पत्ति हुन्छ भने विकारी भएको कारण हजुर असंग कसरी हुन सक्नुहुन्छ? यस शंकाको उत्तरमा भगवान् भन्नुहुन्छ कि हे अर्जुन! कल्पक्षयमा अर्थात् प्रलयकालको बेला स्थावर जंगम आदि सबै जीव मेरो नियम्यभूत शक्ति, प्रकृतिलाई अर्थात् त्रिगुणात्मिका मायालाई प्राप्त गर्दछन्, अर्थात् सूक्ष्मरूपले त्यसमा लीन हुन्छन्। फेरि उनीहरूलाई नै सृष्टिको समयमा उत्पन्न गर्दछु अर्थात् प्रलयमा प्रकृति सँग एकाकारलाई प्राप्त गरेका भूतलाई नाम र रूपको विभागले प्रकट गर्दछु। म सर्व शक्तिमान् परमेश्वर हूँ र मेरो शक्ति रूपी प्रकृति द्वारा नै जीव उब्जिन्छन् र त्यसैमा लय हुन्छन् र स्थितिकालमा त्यसैमा वर्त्तमान् रहन्छन्। यसैले 'न च मत्स्थानि भूतानि' भनिएको हो। किनकी शक्तिमान् बाट शक्ति अलग बस्नै सक्दैन यसैले अभेदोपचार द्वारा शक्तिको कार्यलाई शक्तिमान्को कार्य भनिन्छ अतः आफ्नो शक्तिद्वारा सबै जीवहरूको उपादान कारण र त्यस उपादानमा अरुको अपेक्षा नभएको कारण निमित्त कारण पनि म नै हूँ। यस प्रकार म नै जगत्को अभिन्न निमित्तोपादान कारण सिद्ध भएँ। प्रकृतिरूप मेरो शक्ति जड़ भएको कारण चेतनको साथ स्वरूपको एकता असम्भव छ यसैले परिणाम (विकार) आदि प्रकृति गत हुन्। किनकी शक्तिको विस्तारलाई नै म परिणाम मान्दछु, यसबाट अचिन्त्य योगमाया को स्वामी जो म हूँ त्यसको आफ्नो शक्तिद्वारा जगत्को उपादान, आधार, लयस्थान हुनु र तिनीहरूका धर्मबाट अलग रहनु आदि सबै कुरा सिद्ध भयो॥ ७॥

–★–★–★–

## प्रकृतिं स्वामवष्टभ्य विसृजामि पुनः पुनः।
## भूतग्राममिमं कृत्स्नमवशं प्रकृतेर्वशात्॥

**प्रकृतिको वशमा भएर परतन्त्र भएका यी सम्पूर्ण प्राणीसमुदायलाई (कल्पको प्रारम्भमा) म आफ्नो प्रकृतिलाई वशमा गरेर बारम्बार रचना गर्दछु॥८॥**

उक्तार्थमेव स्पष्टयति–प्रकृतिमिति। स्वां स्वकीयां विचित्र–परिणामार्हां त्रिगुणमयीं प्रकृतिमचेतनशक्तिमवष्टभ्य कार्योत्पादनेच्छया स्वेक्षणविषयां कृत्वाष्टधा परिणमय्य इमं चतुर्विधं देवतिर्यङ्मनुष्यस्थावरादिरूपं प्रकृतेर्वशात्प्रा–चीनकर्मनिमित्ततत्तत्स्वभावबलादवशं परतन्त्रं कृत्स्नं भूतग्रामं पुनः पुनः सृष्टिसमये विसृजामि॥

माथि भनिएको विषयलाई नै यहाँ स्पष्ट गरेर भन्नुहुन्छ।

विचित्र परिणामवाला आफ्नो त्रिगुणमयी अचेतन शक्तिलाई संसारको उत्पत्तिको लागि आफ्नो इच्छानुकूल आठ विभागहरूमा विभक्त गरेर देव, पशु-पक्षी, मनुष्य, स्थावर आदि चार प्रकारका जीवहरूलाई जो प्रकृतिवश अर्थात् पुराना जन्ममा गरिएको कर्महरूको स्वभाव बलले पराधीन बनेका छन्, बारम्बार सृष्टिको बेला तिनीहरूको रचना गर्दछु॥८॥

–★–★–★–

**न च मां तानि कर्माणि निबध्नन्ति धनञ्जय ।**
**उदासीनवदासीनमसक्तं तेषु कर्मसु ॥**

**हे धनञ्जय! ती (सृष्टि-रचना आदि) कर्महरूमा अनासक्त र उदासीन झैं हुने भएको हुँदा मलाई ती कर्म बाँध्न सक्दैनन्॥ ९ ॥**

नन्वेवं विषमसृष्ट्यादीनि कर्माणि कुर्वतस्तव जीववद् बन्धः कुतो न स्यादित्याशङ्क्याह-न चेति।विषमरूपाण्यपि तानि सृष्ट्यादीनि कर्माणि मां निबध्नन्ति हे धनञ्जय! तत्र हेतुगर्भितविशेषणमाह-उदासीनवदिति। उदासीनवदासीनं न केवलमुदासीनं कर्त्तृत्वानुपपत्तेः। उदासीनवद्भावेऽपि हेतुः-असक्तं तेषु कर्मस्विति। तेषु जगत्सर्जनानुग्रहनिग्रहादिषु कर्मसु असक्तमासक्तिशून्यमाप्तकामत्वात्। आप्तकामस्यैव कर्मस्वनासक्तिर्भवति। आसक्तस्यैव कर्माणि बन्धमापादयन्तीत्यर्थः॥

यस प्रकार विषम आदि सृष्टिहरू गरेर पनि हजुरलाई अन्य जीवहरूका समान बन्धन किन हुँदैन। यस शंकाको उत्तरमा भगवान् भन्नुहुन्छ कि हे अर्जुन! यी विषम सृष्टिरचना आदि कर्म मलाई बाँध्न सक्दैनन्। किनकी म उदासीन को जस्तो भएर बस्दछु। 'उदासीन जस्तो' भन्नुभयो, 'उदासीन' होईन किनकी त्यस्तो भनेको भए उहाँ सृष्टिकर्त्ता हुन सक्नु हुन्नथ्यो। यस्तो भन्नमा यो पनि कारण हो कि संसारको सृष्टि, निग्रह, अनुग्रह आदि कामहरूमा म आसक्तिशून्य छु किनकी म आप्तकाम अर्थात् पूर्ण मनोरथवाला हूँ। आप्तकामहरूको लागि कार्य बन्धनकारक हुँदैनन्। आसक्त अर्थात् रागीहरू नै बन्धनमा पर्दछन्। जो पूर्णकाम छन् तिनीहरूलाई कुनै कुराको इच्छा नै रहँदैन, यसैले उसको इच्छारहित कार्य बन्धक हुन सक्दैनन्। कार्य उनीहरूलाई नै बन्धक हुन सक्दछन् जसलाई ती कार्यहरूमा राग वा आसक्ति हुन्छ॥ ९ ॥

-★-★-★-

**मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम् ।**
**हेतुनानेन कौन्तेय जगद्विपरिवर्तते ॥**

**प्रकृतिले मेरो अध्यक्षतामा चराचरसहित सम्पूर्ण जगत्को रचना गर्दछ। हे कुन्तिनन्दन! यसै हेतुले जगत्को अनेक प्रकारले परिवर्तन भईरहन्छ॥ १० ॥**

एकस्यैव कर्त्तृत्वमुदासीनत्वं चेति परस्परविरोधपरिहारार्थमाह-मयेति। अध्यक्षेणाधिष्ठात्रानियन्त्रा च मयेक्षिता प्रकृतिस्त्रिगुणात्मिका माया सचराचरं जगत्प्रसूयते, उत्पादयति। अनेन मत्सन्निधानेन हेतुना हे कौन्तेय! जगदुक्तस्वरूपं विपरिवर्त्तते, पुनः पुनर्जायते। अतो न कश्चिद्विरोधः॥

एक भगवान् नै जगत्को कर्त्ता हुनु र उदासीन भएर पनि रहनु यो परस्पर विरोधी कुरा कसरी सम्भव हुन सक्दछ? यस शंकालाई हटाउनको लागि भगवान् भन्नुहुन्छ कि अधिष्ठाता र नियामक रूपबाट मेरो दृष्टिपातले (संकल्प ले) प्रकृति अर्थात् त्रिगुणात्मिका माया नै यस चराचर जगत्लाई उत्पन्न गर्दछ। यसै मेरो समीपताको कारण हे अर्जुन! पछाडि भनिएको स्वरूपवाला संसार बारम्बार सृष्टिको आदि मा पैदा हुन्छ। यसले कर्त्ता भएर पनि म उदासीन हुनुमा कुनै विरोध हुँदैन॥ १० ॥

-★-★-★-

**अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम्।**
**परं भावमजानन्तो मम भूतमहेश्वरम्॥**

**मूर्खहरू मेरो सम्पूर्ण प्राणीहरूको महान् ईश्वररूप श्रेष्ठभावलाई नजानेर मलाई मनुष्यशरीरको आश्रित मानेर अर्थात् साधारण मनुष्य मानेर मेरो अवज्ञा गर्दछन्॥ ११ ॥**

एवम्भूतं परमेश्वरं सर्वाधिष्ठातारं सर्वनियन्तारं सर्वज्ञं

सर्वज्ञ, सर्वेश, सर्वनियामक, सबैको कारण भएर पनि निर्दोष,

सर्वकारणत्वेऽपि दोषास्पृष्टस्वभावं त्वमाश्रित्य किमिति सर्वे न मुच्यन्त इत्यत आह–अवजानन्तीति। मूढा अनादि–पापबाहुल्येन मत्स्वरूपादिविषयकाज्ञानावृतत्वान्मोहमापन्ना विपरीतज्ञाना मां भूतमहेश्वरं सर्वजगज्जन्मादिकारणं दोषास्पृष्टस्वभावं सर्वकर्मफलदं मुक्तोपसृप्यं वासुदेवमव–जानन्ति, साक्षात्परमेश्वरोऽयमिति न मन्यन्तेऽतो नाद्रियन्ते इत्यर्थः। तेषामवज्ञाने भ्रमकल्पितं हेतुमाह–मानुषीं तनुमाश्रितमिति। कारुण्यादिगुणपरवशतया सर्वेषां समा–श्रयणीयत्वाय भक्तानुग्रहाय च स्वेच्छया मनुष्याकारमाश्रितं मनुष्यतया प्रतीयमानं प्राकृत मानुषसमं मन्यन्ते। ततो भ्रान्त्या मुषितज्ञाना मम परं भावं कारुण्यादिगुणेक्षया भक्ता–भिलाषपूरणाय मनुष्यत्त्वाद्याकारेणाविर्भवनरूपं परं तात्पर्य्यमजानन्तो मनुष्यमात्रभावनयेतरसजातीयं मत्वा नाश्रयन्त्यतो न मुच्यन्त इत्यर्थः॥

यस्तो हजुर परमेश्वरको नै आश्रय गरेर सबै जना किन मुक्त हुँदैनन्? यसको उत्तरमा भगवान् भन्नुहुन्छ कि–अनादिकाल देखिको पापको बाहुल्यताले मेरो स्वरूप–सम्बन्धी अज्ञानको कारण जो मूढ़ बनेका छन् अर्थात् मोहमा प्राप्त भएको ले जसलाई उल्टो ज्ञान भएको छ ती, निर्दोष स्वभाववाला, सबै कर्महरूका फलदाता, सकल जगत्‌को जन्मादि को कारण, मुक्त मनुष्यहरूका प्राप्य मलाई वसुदेवको छोरो संझेर मेरो अवज्ञा गर्दछन् अर्थात् म साक्षात् परमेश्वर हूँ यस्तो संझिदैनन् वा मान्दैनन्। यस अवज्ञा वा अनादरको भ्रमकल्पित कारणलाई अब भन्नुहुन्छ। करुणा आदि गुणहरूका वशमा भई सर्वाश्रय भएको र भक्तहरूलाई अनुग्रह गर्नका लागि आफ्नो इच्छाले मनुष्यको शरीर धारण गरेको हुनाले, मनुष्यको समान देखिएको मलाई यस्ता मान्छेहरू साधारण वा प्राकृत मनुष्य नै मान्दछन्। मतलब कि यस्ता मान्छेहरू यस भ्रमले अज्ञानी बनेर, अर्थात् दयापरवश भक्तका अभिलाषा पूर्ण गर्नको लागि मनुष्य शरीर धारण गर्ने तात्पर्यलाई न संझिएर, साधारण मनुष्यको भाँति नै मलाई मान्दछन्। यसैले मेरो आश्रय ग्रहण गरेर मुक्त हुँदैनन्॥११॥

–★–★–★–

**मोघाशा मोघकर्माणो मोघज्ञाना विचेतसः।**
**राक्षसीमासुरीं चैव प्रकृतिं मोहिनीं श्रिताः॥**

**जो आसुरी, राक्षसी र मोहिनी प्रकृतिको मात्रै आश्रय लिन्छन् यस्ता अविवेकी मनुष्यहरूको सबै आशाहरू व्यर्थ हुन्छन्, सबै शुभकर्म व्यर्थ हुन्छन् र सबै ज्ञान पनि व्यर्थ हुन्छ॥१२॥**

ततस्ते मदवज्ञानजनितमहादुरिताः सर्वपुरुषार्थविधुराः क्रूर स्वभावा नरकार्हा इत्याह–माघाशा इति। मामुपेक्ष्य चण्डी–भैरवगजाननादय एवास्मद्वाञ्छितं दास्यन्तीत्येवम्भूता मोघा निष्फला आशा येषां ते मोघाशा मत्प्रेरणं विना देवतान्तरस्य किञ्चित्फलदाने सामर्थ्याभावात्, अत एव मोघानि व्यर्थानि श्रममात्रशेषाणि कर्माण्यग्निहोत्रादीनि देवतान्तराराधनादीनि च येषां ते मोघकर्माणः। "फलमतः उपपत्तेरि"ति शास्त्रात् कर्मणां जडानां फलदाने शक्त्यभावात्फलदातुर्भगवतो विमुखत्वात्। तथा मोघं परमेश्वराप्रतिपादकं कुतर्कशास्त्र–जनितं ज्ञानं येषां ते मोघज्ञानाः। सर्वत्र हेतुः–विचेतस इति। चित्ताधीशवासुदेवचिन्ताशून्यत्वाद्विक्षिप्तचित्ताः प्रमादिन इत्यर्थः। अत एव राक्षसीं तामसीं हिंसाद्वेषबहुलामासुरीं च काममदमात्सर्यदर्पादिप्रधानां मोहिनीं धर्मज्ञानविवेक–मोहकर्त्रीं प्रकृतिं योनिं स्वभावं वा श्रिता भवन्तीति शेषः।

तब तिनीहरू पूर्वोक्त प्रकारले मेरो अवज्ञा गरेको हुनाले महापापी बनेर सबै पुरुषार्थले रहित क्रूर स्वभावका भएर नारकी हुन्छन्। यसैलाई यहाँ भन्नुहुन्छ। मेरो उपेक्षा गरेर अन्य देवी, भैरव, गणेश आदि देउता नै मेरो मनोरथ पूर्ण गर्नेछन्, उनीहरूले यस्तो आशा गर्नु व्यर्थ छ, किनकी ती देउताहरूको अन्तर्यामी रूपले स्थित मेरो इच्छाको बिना कुनै पनि देउता केहि दिन सक्दैन। यसैले यस्ता मान्छेका लागि अग्निहोत्रादि कर्म र अन्य देउताको पूजा आदि कर्म पनि व्यर्थ छ। वेदान्तसूत्र मा भनिएको छ कि–"फलमतः उपपत्तेः" अर्थात् एक ब्रह्म नै जीवहरूलाई आफुले गरेको कर्मको फल आ–आफ्नो अधिकारानुसार दिन्छन् र दोस्त्रो कुनै दिन सक्दैनन्, यो कुरा शास्त्र सिद्ध छ। यस सूत्रको अनुसार जड़ कर्मको फल दिनमा असमर्थ छ, र यस्तो मान्छे फलदायक भगवान् सँग विमुख छन् यसैले उनीहरूको कर्म फल रहित हुन्छन् र फेरि परमेश्वरलाई असिद्ध गर्नेवाला, कुतर्किहरूका शास्त्रको ज्ञान पनि व्यर्थ छ। यी सबैको कारण यो हो कि चित्तको स्वामी वासुदेवको चिन्तन नगर्नाले ती प्रमादि हुन्छन्। यसैले ती तामसयुक्त, हिंसा–द्वेषवाला राक्षसी, काम, मद, मात्सर्य, गर्ववाला आसुरी प्रकृति तथा धर्म, ज्ञान, विवेकलाई हरण गर्नेवाला मोहक

अथवा एवम्भूताः सन्तो मामवजानन्तीति पूर्वेणैवान्वयः। तेषां विशेषफलं च-'ममातमपरदेहेषु प्रद्विषन्तोऽभ्य-सूयकाः। तानहं द्विषतः क्रूरान्संसारेषु नराधमान्॥ क्षिपाम्य-जस्रमशुभानासुरीष्वेव येनिषु। आसुरीं योनिमापन्ना मूढा जन्मनि जन्मनि॥ माप्रप्यैव कौन्तेय! ततो यान्त्यधमां गतिमि"ति वक्ष्यते। अतो व्यर्थजीवनास्ते उपेक्षणीयाः। तथा महाभारते श्रीनारदेनोक्तं सभापर्वणि- कृष्णं कमलपत्राक्षं नार्चयिष्यन्ति ये नराः। जीवन्मृतास्तु ते ज्ञेया न सम्भाष्याः कदाचनेति॥ तथा वामने प्रह्लादेनोक्तम्-वृथा व्रतं वृथा यज्ञा वृथा वेदा वृथा श्रुतम्। वृथा तपश्च कीर्त्तिश्च यो द्वेष्टि मधुसूदनमि"ति॥ श्रीभागवतेऽपि-धिग्जन्मनस्त्रिवृद्विद्यां धिग्वृतं धिग्बहुज्ञताम्। धिक्कुलं धिाक्रियादाक्ष्यं विमुखा ये त्वधोक्षजे॥ स्कान्दे "स कर्त्ता सर्वधर्माणां भक्तो यस्तव केशव!। स कर्त्ता सर्वपापानां यो न भक्तस्तवाच्युत!। निःशेषधर्मकर्त्ता वाऽप्यभक्तो निरयं व्रजेदि"ति॥

स्वभावमा प्राप्त हुन्छन्। अथवा यस्तो भएर तिनीहरू मेरो अवज्ञा वा अनादर गर्दछन्। यसको विशेषफल सोह्रौं अध्यायमा भन्नुहुनेछ, यथा- "ममातमपरदेहेषु ......गतिम्॥" अर्थात् मेरो तथा आफु भन्दा दोस्रोको जो निन्दा गर्नेवाला र अरुसँग डाह गर्नेवाला छन् ती क्रूर अधम मनुष्यहरूलाई म आसुरी योनिमा बारम्बार जन्म दिन्छु। यसले ती मूढ़हरू मलाई प्राप्त नगरेर अधम गतिमा जान्छन्। यसले गर्दा उनीहरूको जीवन व्यर्थ छ र ती उपेक्षा गर्न लायक छन्। महाभारतको सभापर्वमा श्रीनारदजी ले भन्नुभएको छ- "कृष्णं .....कदाचनेति॥" अर्थात् जो मनुष्य कमल-लोचन भगवान् श्रीकृष्णलाई पूज्दैनन् ती जिउँदै भएपनि मरेका हुन्। तिनीहरू सँग कहिल्यै बोल्नु पनि हुँदैन।वामन पुराणमा प्रह्लादजीको वचन छ- "वृथा ....मधुसूदनम्॥" अर्थात् त्यस मनुष्यको यज्ञ गर्नु, वेदशास्त्र पढ्नु तप गर्नु र कीर्त्ति हुनु सबै व्यर्थ छ, जो कृष्ण सँग द्वेष गर्दछ। भगवतमा पनि लेखिएको छ- "धिग्....त्वधोक्षजे॥" अर्थात् उनीहरूको तीनै वेदको विद्यालाई, व्रतलाई, बहुज्ञतालाई, कुललाई, क्रिया गर्ने कुशलतालाई धिक्कार छ जो श्रीकृष्णसँग विमुख रहन्छन्।स्कन्दपुराणमा पनि भनिएको छ-"स ..... व्रजेत्॥"अर्थात् हे केशव! त्यो सबै धर्महरूलाई गर्नेवाला हो जो हजुरको भक्त छ, र त्यो सबै पापहरूको कर्त्ता हो जो हजुरको भक्त छैन। सबै धर्मलाई गरेर पनि जो अभक्त छ त्यो नरकमा (जान्छ)पर्दछ॥१२॥

-★-★-★-

**महात्मानस्तु मां पार्थ दैवीं प्रकृतिमाश्रिताः।**
**भजन्त्यनन्यमनसो ज्ञात्वा भूतादिमव्ययम्॥**

**परन्तु हे पार्थ दैवी प्रकृतिको आश्रित अनन्यमन भएका महात्माहरू मलाई सम्पूर्ण प्राणिहरूको आदि र अविनाशी संझेर मेरो भजन गर्दछन्॥१३॥**

तर्हि के सफलजन्मानः श्लाघ्या इत्यपेक्षायामाह-महात्मान इति। महान् जन्मान्तरसहस्रार्जितपुण्यसञ्चयैर्विध्वस्तस-मस्तपापतया क्षुद्रकामाद्यनभिभूतः परमतत्त्वविचारार्हत्वा-दुदार आत्मा चित्तं येषां ते महात्मानस्ते तु "अभयं सत्त्व-संशुद्धिरि"त्यादिना वक्ष्यमाणां दैवीं सात्त्विकीं प्रकृति-माश्रिता अत एवान्यस्मिन्मद्व्यतिरिक्ते वस्तुनि नास्ति मनो येषां तेऽनन्यमनसो भूतादिं सर्वजगत्कारणम् अव्ययम-जहत्स्वरूपगुणशक्तिकं स्वानन्यभक्तानुग्रहार्थं यथाभक्ता-भिलाषपूर्त्यर्थं मनुष्यासमानाकारेणावतीर्णं मां भजन्ति॥

तब फेरि कसको जन्म सफल र प्रशंसनीय छ? यसको उत्तर दिनुहुन्छ-

हे अर्जुन हजारौं जन्मको पुण्यसंचयले जसको आत्मा(चित्त) सबै पापहरू नाश भएको कारण क्षुद्र कामादि विकारहरूका वशमा छैन र परम तत्त्वलाई विचार्नाले उदार छ यस्तो महात्मा 'अभयं सत्व संशुद्धि' इत्यादिले अगाडी गएर भनिने दैवी (सात्त्विकी) प्रकृतिलाई ग्रहण गरेर, मेरो अतिरिक्त कुर्न अर्कोमा मन नलगाई, सम्पूर्ण जगत्को कारण, आफ्नो गुण, स्वरूप र शक्तिले युक्त, भक्तहरूमा अनुग्रह गर्न तथा उनीहरूका अभिलाषा पूर्ण गर्नेको लागि मनुष्य रूपमा अवतीर्ण, म सर्वेश्वरलाई भज्दछन्॥१३॥

-★-★-★-

**सततं कीर्तयन्तो मां यतन्तश्च दृढव्रताः।**

## नमस्यन्तश्च मां भक्त्या नित्युक्ता उपासते॥

**नित्य–निरन्तर मतिर लागेका मनुष्यहरू दृढव्रती भएर लगनपूर्वक साधनामा लागेका हुन्छन् र प्रेमपूर्वक कीर्तन गर्दै तथा मलाई नमस्कार गर्दै निरन्तर मेरो उपासना गर्दछन्॥१४॥**

तेषां भजनप्रकारमाह–सततमिति । अत्यर्थमतिप्रियतया मत्स्वरूपगुणनामाभिनिविष्टान्तःकरणमद्गुणलीलाविशेष–द्योतकनामानि स्मृत्वा पुलकितसर्वाङ्गा हर्षगद्गद्कण्ठा माधव मुकुन्द मधुसूदन कृष्ण वासुदेवेत्येवमादीनि नामानि स्तोत्रप्रबन्धादीनि च सततं सर्वदा कीर्त्तयन्तः, यतन्तश्च मत्प्रसादासाधारणकारणभूतेषुमदर्चनवन्दननर्त्तननमस्कार–लीलानुकरणादिकर्मसु यतमानाः, भजनान्तरागतविक्षेप–सहमाना विक्षेपहेतूंस्वसम्बन्धिनोऽप्युपेक्षमाणा इत्यर्थः। भक्त्या निरतिशयप्रेमणा नमस्यन्तश्च "पद्भ्यां दोर्भ्यां च जानुभ्यामुरसा शिरसा दृशा। मनसा वचसा चेति प्रणामोऽष्टाङ्ग ईरित" इत्युक्तप्रकारेणाष्टङ्गैर्मन्मन्दिराजिरादिषु दण्डवत्प्रणामं कुर्वन्तो नित्ययुक्ताः क्षणमात्रमपि मद्वियोग–मसहमाना मामुपासते, मत्सेवनैकजीवना भवन्तीत्यर्थः॥

अब आफ्ना भक्तहरूको भजन गर्ने तरिकालाई भन्नुहुन्छ। मेरो भक्त म मा अत्यन्त प्रेम भएकोले मेरो, स्वरूप, गुण, तथा नाममा मन लगाईरहन्छन्। मेरो गुण र लीलाको सूचक नामहरू लिएर रोमाञ्चित भई गद्गद् कण्ठले माधव, मुकुन्द, कृष्ण आदि नाम जप्दछन् तथा स्तोत्र प्रबन्ध आदिको सदा कीर्त्तन गर्दछन्। मेरो प्रसन्नताको मुख कारणभूत मेरो पूजा, नमस्कार, नाच्नु, गाउनु, लीलाको अनुसरण आदि कर्महरूमा लागेका ती भजनमा आउने विघ्नबाधाहरूको, यहाँ सम्म कि मेरो पूजादिको बाधक आफ्ना सम्बन्धिहरूको पनि उपेक्षा गरिदिन्छन् र अत्यन्त प्रेमले मेरो मन्दिरको आँगनमा साष्टांग दण्डवत नमस्कार गर्दै क्षणभरको लागि पनि मेरो वियोग सहन सक्दैनन् अर्थात् मेरो सेवा शुश्रूषा नै उनीहरूको जीवन बन्दछ। नमस्कारको अर्थ यो हो कि– "पद्भ्यां दोर्भ्यां च जानुभ्यामुरसा शिरसा दृशा। मनसा वचसा चेति प्रणामोऽष्टाङ्ग ईरित॥" अर्थात् हात, गोडा, जङ्घा, छाति, शिर, नेत्र, मन र वचन ले जो प्रणाम गरिन्छ त्यसलाई नै अष्टांग प्रणाम भनिन्छ॥१४॥

–★–★–★–

## ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते ।
## एकत्वेन पृथक्त्वेन बहुधा विश्वतो मुखम्॥

**अन्य साधकहरू ज्ञानयज्ञको द्वारा एकीभावले (अभेदभावले) मेरो पूजा गर्दै मेरो उपासना गर्दछन् र अरु पनि कतिपय साधक आफुलाई पृथक् मानेर चारैतिर मुख भएको मेरो विराट् रूपको अर्थात् संसारलाई मेरो विराट्रूप मानेर सेव्यसेवक भावले मेरो अनेक प्रकारले उपासना गर्दछन्॥१५॥**

तेभ्योऽपि विशिष्टा महात्मानो मामुपासत इत्याह–ज्ञानयज्ञेनेति। अन्येऽपि महात्मानो मामुपासते। किं कुर्वन्तो ? ज्ञानयज्ञेन। चकारात्पूर्वोक्तैः कीर्त्तनादिभिश्च। यजन्तः पूजयन्तः। ज्ञानप्रकारमाह–एकत्वेन पृथक्त्वेनति। सर्वाभेदेन सर्वभेदेन चेत्यर्थः। तदेवोपपादयति–बहुधा विश्वतो मुखमिति। विश्वतो मुखं विश्वान्तर्यामिणमेकत्वेन, बहुधा बहुप्रकारं व्यष्ट्यन्तर्यामिणं बहुत्वेन तद्वैलक्षण्येन च। तथाहि "सर्वं खल्विदं ब्रह्म तज्जलानिति। आत्मैवेदं सर्वं, वासुदेवः सर्वमिति सकलमिदमहं च वासुदेवः परमपुमान् परमेश्वरः स एकः सर्वगत्वादनन्तस्य स एवाहमवस्थित" इत्यादिश्रुतिस्मृत्यभिहितसर्वचेतना–

माथि भनिएको मान्छेहरू भन्दा पनि ठूला महात्मा मेरो कसरी उपासना गर्दछन् त्यो भन्दछु। यी महात्माहरू पहिले भनिएको कीर्तन आदिको अलावा ज्ञानयज्ञले पनि मलाई सबैभन्दा भिन्न तथा सबैसँग अभिन्न अर्थात् भिन्नाभिन्न संझदै, अनेक प्रकारले मेरो पूजा गर्दछन्। यस प्रकारको उपासना गर्ने प्रमाण श्रुति स्मृति आदि मा धेरै पाईन्छ। यथा–'सर्वं खल्विदं ब्रह्म तज्जलान्' अर्थात् यो सम्पूर्ण जगत् ब्रह्मात्मक हुनाले ब्रह्म नै हो। 'आत्मैवेदं सर्वम्' अर्थात् यो सबै आत्मा नै हो। 'वासुदेव सर्वमिति' अर्थात् वासुदेव नै सबैथोक हुन्। 'सकलमिदमहं ....एवाहमवस्थितः' अर्थात् परमपुरुष परमेश्वर ती वासुदेव एक नै हुन्। ती अनन्त र सर्वगत हुन। त्यो भनेको म नै हूँ। यी सबै श्रुतिपुराण वाक्यहरूबाट सबै चेतन–अचेतन जगत्को आत्मा भएको हुनाले विश्वरूप मलाई जानेर र "नित्यो.....बाह्यः" अर्थात् त्यो (ब्रह्म) नित्यमा पनि नित्य हो, चेतनको पनि चेतन हो, धेरैमा एक हो, जो कामनाहरूलाई

चेतनजगदात्मकत्वेन विश्वरूपं सन्तं मामेकत्वेनावगत्य "नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान्, यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष ते आत्माऽन्तर्याम्यमृतः, वायुर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बहिश्च, सूर्य्यो यथा सर्वलोकस्य चक्षुर्न लिप्यते चाक्षुषैर्बाह्यदोषैः, एकस्तथा सर्वभूतान्तरात्मा न लिप्यते लोकदुःखेन बाह्य" इत्यादिश्रुतिभ्यो बहुधा बहुरूपं सन्तमपि मां तद्धर्म्मास्पृष्टस्वभावतया पृथक्त्वेन सर्वचेतना-चेतनजगतोऽत्यन्तवैलक्षण्येनोपासते इत्यर्थः॥

पूर्ण गर्दछ, जो पृथ्वीमा रहेर पनि पृथ्वी भन्दा अन्तर(टाढै) छ, जसलाई पृथ्वी जान्दिनन्, पृथ्वी जसको शरीर हो, जो पृथ्वीको अन्तरात्मा हो र उसलाई नियमन गर्दछ, त्यही तिम्रो पनि अन्तर्यामी र अमृत आत्मा हो। एव वायु संसारमा वर्त्तमान भएर जस्तो प्रत्येक रूपको प्रति समान बन्दछ त्यस्तै नै सबै जीवहरूको अन्तरात्मा परमेश्वर प्रत्येक रूपको समान हुन्छ। सूर्य जस्तो सबै लोकहरूको नेत्र भएर पनि बाहिरी नेत्रको दोषहरूले दूषित हुँदैन, त्यस्तै नै सबैलोक को अन्तरात्मा परमेश्वर बाहिरको लोकहरूको दोषले लिप्त हुँदैन। इत्यादि श्रुतिहरूबाट बहुरूप भए पनि उनीहरूको धर्मले रहित मलाई सबै चेतनाचेतन जगत् भन्दा पृथक् जानेर मेरो उपासना गर्दछन्॥१५॥

-★-★-★-

**अहं क्रतुरहं यज्ञः स्वधामहमौषधम्।**
**मन्त्रोऽहमहमेवाज्यमहमग्निरहं हुतम्॥**

**(हे अर्जुन!) क्रतु, यज्ञ, स्वधा, औषधि, मन्त्र, घ्यू, अग्नि र हवनरूप क्रिया सबै म नै हुँ॥१६॥**

उक्तमात्मनो बहुप्रकारत्वं प्रपञ्चयति-अहमित्यादि चतुर्भिः। क्रतुः श्रौतोऽग्निष्टोमादिरहमेव। यज्ञो स्मार्त्तो महायज्ञाख्योऽप्यहमेव। स्वधा पितृगणपुष्टिदायिनी अहम्। औषधं चाहमेव। अहमेव मन्त्रो याज्या पुरोऽनुवाकादिः। आज्यं होमसाधनमहमेव अग्निराहवनीयादिरहमेव। हुतं होमश्चाहमेव॥

आफुलाई जो अनेक भन्दै आउनु भएको छ त्यसै अनेकता लाई चार श्लोकहरूबाट देखाउनु हुन्छ। श्रुति प्रतिपादित अग्निष्टोम आदि यज्ञ म नै हूँ। स्मृति प्रतिपादित महायज्ञ पनि म नै हूँ। पितृहरूलाई पुष्टि दिने स्वधा पनि म नै हूँ। म नै औषधि हूँ। 'याज्या पुरोऽनुवाक्' आदि मन्त्र म नै हूँ। होम आदिको साधन घ्यू आदि पनि म नै हूँ। आहवनीय अग्नि पनि म नै हूँ। र म नै होम हूँ॥१६॥

-★-★-★-

**पितामहस्य जगतो माता धाता पितामहः।**
**वेद्यं पवित्रमोङ्कार ऋक्साम यजुरेव च॥**

**त्यसै गरेर जान्नयोग्य पवित्र ॐकार, ऋग्वेद, सामवेद, यजुर्वेद, पनि म नै हुँ, यस सम्पूर्ण जगतको पिता, धाता, माता, पितामह पनि हुँ॥१७॥**

किञ्च-पितेति। अस्य जगतः पितृत्वादिषु वर्त्तमानोऽहमेव। अत्र धातृशब्दो मातृपितृव्यतिरिक्ते उत्पत्तिप्रयोजके जनविशेषे वर्त्तते। वेद्यं ज्ञेयं वस्तु पवित्रं पावनमोङ्कारः प्रणवोऽहमेव। ऋगादिवेदाश्चाहमेव॥

यस जगत्को पिता, माता, धारणकर्त्ता र पितामह म नै हूँ। जान्न योग्य पवित्र ॐकार पनि म नै हूँ। ऋक्, साम र यजुर्वेद पनि म नै हूँ॥१६॥

-★-★-★-

**गतिर्भर्ता प्रभुः साक्षी निवासः शरणं सुहृत्।**
**प्रभवः प्रलयः स्थानं निधानं बीजमव्ययम्॥**

**अरु पनि जस्तो कि गति, भर्ता, प्रभु, साक्षी, निवास, आश्रय, सुहृद्, उत्पत्ति, प्रलय, स्थान, निधान (भण्डार) तथा अविनाशी बीज पनि म नै हुँ॥१८॥**

गतिर्गम्यते इति गतिः फलं स्वर्गलोकादिः। भर्त्ता पोषको धारयिता वा प्रभुर्नियन्ता। साक्षी साक्षाच्छुभाशुभकर्मद्रष्टा। निवासः निवासस्थानं, शरणमिष्टप्रापकतयाऽनिष्टनिवार-कतया रक्षकः। सुहृत् हिताशंसी, प्रभवः प्रकर्षेण भवति कार्यमनेनेति प्रभवः स्रष्टा। प्रलीयतेऽनेनेति प्रलयः संहर्त्ता। तिष्ठत्यस्मिन्निति स्थानमाधारः, निधीयते भोगाऽयोग्यतया क्षिप्यतेऽस्मिन्निति निधानं प्रलयस्थानं, तथाऽव्ययं बीजं परं व्ययरहितं तत्तत्कारणं तत्सर्वमहमेव॥

पुण्य कर्महरूबाट प्राप्य फल स्वर्ग आदि म नै हूँ। पालक वा धारक म नै हूँ। नियन्ता र शुभाशुभ कर्मलाई देख्ने म नै हूँ। निवास स्थान र इच्छित वस्तुको प्राप्ति कारक र अनिष्ट निवारक हुनाले शरण अर्थात् रक्षक म नै हूँ। सबैको हितकारी, उत्पत्ति गर्नेवाला, संहारक, आधार, निधान अर्थात् भोगको योग्य कर्म नगर्नाले जसमा हालियोस त्यो खजाना अर्थात् प्रलयस्थान र अविनाशी बीज अर्थात् सबैको कारण म नै हूँ॥१८॥

-★-★-★-

**तपाम्यहमहं वर्षं निगृह्णाम्युत्सृजामि च।**
**अमृतं चैव मृत्युश्च सदसच्चाहमर्जुन॥**

**हे अर्जुन! (संसारको हितका लागि) म नै सूर्यरूपले तातिन्छु, म नै पानीलाई सोसेर वर्षारूपले बरसाईदिन्छु, अरु त के भनौ अमृत र मृत्यु तथा सत् र असत् पनि म नै हुँ॥१९॥**

आदित्यरूपेण ग्रीष्मेऽहमेव तपामि तापयामि। वर्षं पूर्ववृष्ट्यवशिष्टं रसं पृथिव्या निगृह्णामि शोषयामीत्यर्थः। तमेव निगृहीतं रसं पुनर्बहुगुणमुत्सृजामि च। अमृतं प्राणिनां जीवनं चाहमेव। मृत्युः प्राणिनां विनाशश्चाहम्। सदसच्च स्थूलं सूक्ष्मं चैतत्सर्वमहमेव हे अर्जुन! एवं सर्वात्मानं मामेव ज्ञात्वा यथाधिकारमेकधा बहुधा च मामेवोपासते इति पूर्वोक्तमुपसंहृतम्॥

सूर्यरूपले गर्मीका दिनहरूमा म नै तपाउँछु। र पहिलेको वर्षामा बचेको रसलाई पृथ्वीबाट म नै सोस्दछु। त्यसै ग्रहण गरेको रसलाई फेरि धेरै परिणाम मा छोड्दछु अर्थात् बरसाउँछु। प्राणिहरूको जीवन र मरण म नै हूँ। हे अर्जुन! स्थूल र सूक्ष्म सबै म नै हूँ। यस प्रकार मलाई नै सर्वात्मा संझेर, यथाधिकार अनेक रूपले मेरो उपसना महात्माहरू गर्ने गर्दछन्। पूर्वमा भनिएको उपासना विधिलाई यहाँ समाप्त गर्नुहुन्छ॥१९॥

-★-★-★-

**त्रैविद्या मां सोमपाः पूतपापा यज्ञैरिष्ट्वा स्वर्गतिं प्रार्थयन्ते।**
**ते पुण्यमासाद्य सुरेन्द्रलोकमश्नन्ति दिव्यान्दिवि देवभोगान्॥**

**तीनै वेदहरूमा भनिएको सकाम अनुष्ठानलाई गर्नेहरू र सोमरसलाई पिउने जो पापरहित मनुष्य यज्ञहरूद्वारा (इन्द्ररूपमा) मेरो पूजन गरेर स्वर्ग-प्राप्तिको प्रार्थना गर्दछन् ती पुण्यको फलस्वरूप पवित्र इन्द्रलोकलाई प्राप्त गरेर त्यहाँ स्वर्गको देउताहरूका दिव्य भोगहरू भोग्दछन्॥२०॥**

तदेवं भगवन्तमवजानतामभक्तानां राक्षस्यादिप्रकृतिनिरूप-णेन तदनुरूपं फलमप्यर्थादुक्तम्। ततो ज्ञानभक्तिनिष्ठानां महात्मनां भक्तानां दैवीप्रकृतिनिरूपणेन भगवदनुग्रहफलं ज्ञेयमिदानीं ये न भगवद्विरोधिनो न वा भक्ताः, किन्तु स्वर्गादिफलकामुकाः केवलेन्द्रादिदेवभक्तास्तेषामिहामुत्र

यस प्रकार भगवान्को निरादर गर्ने अभक्तहरूको राक्षसी आदि प्रवृत्तिको कारण, तदनुरूप फल पाउनु भन्नुभयो। फेरि ज्ञानभक्तनिष्ठ महात्मा भक्तहरूको, दैवीप्रकृति भएको कारण, भगवान्को कृपारूपी फल प्राप्त हुने कुरा पनि भनि सक्नुभयो। अब जो न त भगवान्को विरोधी छन् न भक्त नै छन् किन्तु स्वर्गादि फल पाउनको इच्छाले इन्द्रादि देउताहरूका उपासक

गतागतमेव फलमित्याह–द्वाभ्याम्–त्रैविद्या इति। ऋग्यजुः सामाख्यास्तिस्रो विद्याः स्वाभीष्टार्थबोधिका येषां ते त्रिविद्यास्त्रिविद्याः। वेदत्रय्युक्तकर्मनिष्ठा, नतु त्रिविद्याशिरस्कोपनिषन्निष्ठा इत्यर्थः। वेदत्रयविहितैर्यज्ञैरग्निष्टोमादिभिर्वस्तुतो मामिन्द्रादिरूपमिष्ट्वा तथा मामजानन्तः केवलमिन्द्रादिबुद्ध्या पूजयित्वा यज्ञशेषं सोमं पिवन्तीति सोमपास्तत एव पूतपापाः स्वर्गादिविरोधिपापान्निर्मुक्ताः सन्तः स्वर्गगतिं स्वर्गप्राप्तिमेव गतिं यज्ञफलं ये प्रार्थयन्ते, ते पुण्यफलरूपं सुरेन्द्रलोकमासाद्य दिवि स्वर्गे दिव्यान् दिवि भवान् देवसम्बन्धिभोगानश्नन्ति भुञ्जते॥

छन् उनीहरूलाई यहाँ त्यहाँ आवागमन रूप नै प्राप्त हुन्छ, यसैलाई यहाँ दुईश्लोक द्वारा भन्नुहुन्छ। जसको निष्ठा वेदको शिरोभाग उपनिषद्हरूमा छैन, तर जो वेदत्रयमा भनेको कर्ममा नै श्रद्धा राख्दछन्, ती ऋक्, यजु, साम नामक तीन वेदहरूमा भनिएको अग्निष्टोम आदि कर्महरू द्वारा इन्द्रादि रूपमा मेरो पूजा गर्नेहरू मलाई सबैका अन्तर्यामी हुनाले सबैदेव रूप नजानेर केवल इन्द्र आदि संझेर पूजा गर्दछन्, ती सोमलतालाई पिसेर त्यसको रसले होमगरी र यज्ञ शेष रसलाई पिएर स्वर्गादिको विरोधी पापहरूबाट मुक्त भई केवल स्वर्गको प्राप्ति मात्र चाहन्छन्।यसतो मान्छेहरू आफुले गरेको कर्मको पुण्यफल स्वरूप इन्द्रलोकलाई प्राप्त गरेर त्यहाँ देउताहरूको दिव्य भोगहरू भोग्दछन्॥२०॥

–★–★–★–

**ते तं भुक्त्वा स्वर्गलोकं विशालं क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति।**
**एवं त्रयीधर्ममनुप्रपन्नाः गतागतं कामकामा लभन्ते॥**

**तिनीहरू त्यस विशाल स्वर्गलोकको भोगहरूलाई भोगेर पुण्य क्षीण भएपछि मृत्युलोकमा आउँदछन्, यस प्रकार तीनै वेदमा भनिएको सकाम धर्मको आश्रय लिएका भोगको कामना गर्ने मनुष्यहरू आवागमनमा प्राप्त हुन्छन॥२१॥**

ततश्च–ते तं भुक्त्वेति। ते स्वर्गकामा इह यज्ञोद्भूतपुण्येन यत्प्रार्थितं तं विशालं विस्तीर्णं स्वर्गलोकं तज्जन्यं सुखं भुक्त्वा तद्भोगप्रापके पुण्ये क्षीणे सति पुनः पुण्योपचयाय मर्त्यलोकं कर्मभूमि प्रविशन्ति, पुनर्गर्भवासादिदुःखानुभवपूर्वकं पुनरेवमुक्तप्रकारेण त्रयीधर्मं वेदत्रय्यया प्रतिपादितं धर्ममनुप्रपन्ना अनुसृताः कामकामाः कामान्भोगान्कामयमाना गतागतं लभन्ते। कर्म कृत्वा तत्फलभोगाय स्वर्गं यान्ति। तत्र तत्सुखं भुक्त्वा क्षीणपुण्यास्ततः पुनरिहागत्य कर्म कुर्वन्तीत्येवं जन्ममरणरूपसंसार प्रवाहमनिशमनुभवन्तीत्यर्थः॥

स्वर्गको इच्छा भएका मनुष्यहरू यज्ञको पुण्यले प्राप्त, धेरै ठूलो स्वर्ग र त्यहाँको सुखलाई भोगी, त्यस भोगलाई दिने पुण्य क्षीण भएपछि, फेरि पुण्य बटुल्नका लागि यस कर्मभूमि संसारमा जन्म लिन्छन्। फेरि गर्भवास आदि को प्रबल दुःखलाई उठाउँदै ऋक्, यजु, साममा भनिएको कर्मकाण्ड द्वारा प्रतिपादित धर्मको अनुष्ठानलाई, भोग प्राप्तिको इच्छाले गर्दछन्। यस प्रकार यिनीहरू आवागमन मा नै परिरहन्छन्। अर्थात् कर्म गरेर त्यसको फल भोग्नको लागि स्वर्ग जान्छन्। त्यहाँ सुख भोगेर पुण्य क्षीण भएपछि फेरि संसारमा आएर कर्म गदर्कछन्। यस प्रकारले जन्म मरणरूप संसारमा यी सदा दुःख भोगिनै रहन्छन्॥२१॥

–★–★–★–

**अनन्याश्चिन्तयन्तो मां ये जनाः पर्युपासते।**
**तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम्॥**

**जो अनन्य भक्त मेरो चिन्तन गर्दै राम्रो सँग मेरो उपासना गर्दछन्, मेरो भक्तिमा निरन्तर लागेको ती भक्तहरूका योगक्षेम (अप्राप्तको प्राप्ति र प्राप्तको रक्षा) (गर्ने जिम्मेवारी) म उठाउँदछु॥२२॥**

एवं सकामाः संसरन्तीत्युक्तं, निष्कामा मद्भक्तास्तु मदनुग्रहात्सर्वपुरुषार्थभाजो भवन्तीत्याह–अनन्या इति। न विद्यतेऽन्यो मद्व्यतिरिक्तः प्राप्य उपास्यो वा येषां तेऽनन्या मां

यस प्रकार सकामी नै जन्म लिन्छन् र जो मेरो निष्काम भक्त छन्, ती मेरो कृपाले नै सबै पुरुषार्थ लाभ गर्दछन्। यो नै यहाँ भन्नुहुन्छ। जो अरुको उपासना छोडेर मलाई नै परमप्राप्य वा उपास्य, देवहरूका देव मानेर मेरो उपासना गर्दछन् अर्थात् मेरो अनन्य

परमप्राप्यं देवदेवं चिन्तयन्तो ये जनाः पर्य्युपासते, परि सर्वतो देहेन्द्रियान्तःकरणैः सेवन्ते, तेषां नित्याभियुक्तानां नित्यमनवरतमादरेण मयि मनोऽभियुञ्जतां योगं मत्प्राप्ति-पर्यन्तस्य सर्वपुरुषार्थस्य प्रापणं, क्षेमं तत्संरक्षणं पुनस्तद-पायशङ्कावर्जनमित्यर्थः, अहमेव वहामि प्रापयामीत्यर्थः॥

भक्त मन, वचन, कर्मले मेरो नै सेवा गर्दछन्, यस्ता निरन्तर आदरले मलाई मन समर्पित गरेकाहरूको योगक्षेमलाई म नै वहन गर्दछु। योग को अर्थ हो भगवत्प्राप्ति पर्यन्त सबै पुरुषार्थहरू प्राप्ति, र क्षेमको अर्थ हो प्राप्त भएकाको रक्षा। भन्नुको मतलब यो हो कि आफ्ना अनन्य उपासकहरूलाई भगवान् नै सबैथोक प्राप्त गराई दिनुहुन्छ र प्राप्त गराईदिएको चीजहरूको रक्षा पनि भगवान् नै गर्नुहुन्छ॥२२॥

-★-★-★-

## येऽप्यन्यदेवता भक्ता यजन्ते श्रद्धयान्विताः।
## तेऽपि मामेव कौन्तेय यजन्त्यविधिपूर्वकम्॥

**हे कौन्तेय! जो पनि भक्त(मनुष्य) श्रद्धापूर्वक अन्य देउताहरूको पूजा गर्दछन् ती पनि मेरो नै पूजा गर्दछन् तर तिनीहरूको त्यो पूजा अविधि पूर्वक हुन्छ॥२३॥**

ननु देवताऽन्तरस्यापि त्वदात्मकत्वात्त्वद्रूपत्वमेवा-तस्तद्भक्ता अपि त्वामेव भजन्ते। तथा च किं तेषां वैगुण्यं यतस्ते गतागतं लभन्त इत्याशङ्क्याह-येऽपीति। यथा मद्भक्ताः साक्षान्मामेव यजन्ते, तथा येऽपिजना अन्यदेवता-भक्ताः श्रद्धयोपेताः संतस्ता एवेन्द्रादिदेवता यजन्ते। तेऽपि हे कौन्तेय! देवतादिदेहेऽपि मामेव यजन्तीति सत्यम् अपि त्वविधिपूर्वकं यथाऽवस्थितवस्त्वज्ञानेनानुष्ठानमवि-धिपूर्वकमिन्द्राद्यन्तर्यामिणं मामज्ञात्वा मदुद्देश्याभावेन केवलानिन्द्रादीन्यजन्तीत्यर्थः॥

अन्य देउताहरू पनि त त्वदात्मक हुनाले हजुर कै रूप हुन्। यसैले उनीहरूलाई पूजागर्नेहरू पनि त हजुर कै पूजक भए। भने फेरि तिनीहरू कुन विगुणता वा दोषको कारण संसार चक्रमा घुमिरहन्छन्? यस शंकाको उत्तर दिनुहुन्छ। जस्तो मेरा भक्त साक्षात् मेरो नै पूजा गर्दछन्, त्यस्तै अन्य देउताहरूका भक्त श्रद्धाले इन्द्रादि देउताहरूको पूजा गर्दछन्। ती पनि देउताहरूको देहमा सर्वात्मा रूपले वर्त्तमान मेरो नै पूजा गर्दछन, यो ठीक हो। तर यथावस्थित वस्तुको अज्ञानले उनीहरूको पूजा अविधि पूर्वक हो। अर्थात् इन्द्रादिरूप मा अन्तरात्मा रूपले मलाई नसंझि ती देउताहरूलाई केवल इन्द्रादि संझेर नै पूजन गर्दछन्। त्यस पूजामा मेरो उद्देश्य गर्दैनन्। यसैले तिनीहरूको यस्तो दशा छ, अर्थात् ती संसार चक्रमा घुमिरहन्छन्॥२३॥

-★-★-★-

## अहं हि सर्वयज्ञानां भोक्ता च प्रभुरेव च।
## न तु मामभिजानन्ति तत्त्वेनातश्च्यवन्तिते॥

**किनकी सम्पूर्ण यज्ञको भोक्ता र स्वामी पनि म नै हुँ; परन्तु ती मलाई तत्त्वपूर्वक जान्दैनन्, यसैले तिनीहरूको पतन हुन्छ॥२४॥**

तेषामविधिपूर्वकयजनं तत्फलं च स्पष्टयति-अहं हीति हिरवधारणे। सर्वेषां यज्ञानां तत्तद्देवताऽऽत्मनाऽहमेव भोक्ता प्रभुश्च स्वामी च। तत्र तत्र यज्ञफलदाता चाहमेव। एवं सर्वकर्मकर्तृदेवताऽध्यक्षं मां ते सकामास्तु तत्त्वेन नाभि-जानन्ति। अतः कर्मफलं भुक्त्वा तद्भोगान्ते च्यवन्ति, पुनर्देहग्रहणाय धूममार्गेणावर्त्तन्ते। नतु साक्षान्मामेव तत्त्वेन, देवतासु वा मामेवान्तर्यामिणं यजन्तश्च्यवन्तीति भावः॥

ती सकाम पुरुषहरूको विधिरहित पूजन र त्यसको फललाई भन्नुहुन्छ। सबै यज्ञहरूलाई ती-ती देउताहरूको आत्मा रूपले म नै भोग गर्नेवाला हूँ, उनीहरूका स्वामी हूँ र ती यज्ञका फलदाता पनि म नै हूँ। यस प्रकार कामना युक्त, अन्य देउताहरूका भक्त, सबै कर्महरूलाई गर्नेवाला र देउताहरूको अध्यक्ष मलाई सही-सही जान्दैनन्। यिनीहरू न मलाई साक्षात् देउताहरूको अन्तरात्मा संझेर नै मेरो पूजा गर्दछन्। यसैले यिनीहरू संसार चक्रमा परि रहन्छन्, अर्थात् आफ्नो कर्मको फल भोगेर फेरि धूममार्गबाट संसारमा फर्केर आउँदछन्॥२४॥

-★-★-★-

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**यान्ति देवव्रता देवान्पितॄन्यान्ति पितृव्रताः।**
**भूतानि यान्ति भूतेज्या यान्ति मद्याजिनोऽपि माम्॥**

**(सकामभावले जुन) देउताहरूको पूजा गर्दछन मरेपछि ती मनुष्यहरू तिनै देउताहरूलाई प्राप्त गर्दछन्। जस्तै पितृको पूजन गर्नेहरू पितृलाई, भूत- प्रेतको पूजन गर्नेहरू भूत-प्रेतलाई प्राप्त हुन्छन्। तर मेरो पूजन गर्नेहरू मलाई नै प्राप्त गर्दछन्॥ २५॥**

ननु देवतान्तराराधकानां च्युतिरेव भवति चेत्तर्हि "सहयज्ञाः प्रजाः सृष्ट्वा पुरोवाच प्रजापतिः। अनेन प्रसविष्यध्वमेष वोऽस्त्विष्टकामधुक्। देवान्भावयताऽनेन ते देवा भावयन्तु वः। परस्परं भावयन्तः श्रेयः परमवाप्स्यथे"ति पूर्वं कथं देवताऽन्तराराधनं फलसहितमुपदिष्टमित्याशङ्क्य नाहं देवताऽऽराधनं निष्फलं ब्रवीमि। किन्तु यथा देवतानुरूप-मेव फलं भवतीत्याह यान्तीति। देवेष्विन्द्रादिषु व्रतं नियमो भक्तिर्वा येषां ते देवव्रताः। अथवा तेष्वेवेज्यबुद्धयस्ते तानेव देवविशेषान्यान्ति, प्राप्नुवन्ति। पितृव्रताः पितृष्वग्निष्वा-तादिष्वेवेज्यबुद्ध्या नियमान्वितास्तानेव पितॄन्यान्ति। भूतेज्या भूतेषु यक्षरक्षोविनायकमातृगणादिषु इज्या पूज्य-बुद्धिर्येषां ते तथा तद्यजननिष्ठास्तानि भूतान्येव यान्ति। एवं सत्त्वाधिका रजोऽकारश्चैते त्रिविधा देवव्रतादयः स्वस्वाराध्यदेवपितृभूतानुग्रहीतास्तत्तत्समानैश्वर्यसामीप्य-सारूप्यसायुज्यद्येकतरं भावं सर्वं वाऽपि प्राप्य तत्तद्भोगा-वसाने तैः सह मर्त्यलोके पतन्तिं मद्याजिनो मां साक्षाद्भग-वन्तं यष्टुं शीलं येषां ते तु सात्त्विका दैवीसम्पदमाश्रिता अनादिनिधनं कर्मक्लेशविपाकाद्य स्पृष्टस्वभावं समस्ते-तरविलक्षणानन्तासंख्येयनित्यैश्वर्यशक्तिकमनवधिका-तिशयानन्दं मामेव यान्ति, न पुनश्च्यवन्तीत्यर्थः। अतोऽन्य-देवभक्तेभ्यो मद्भक्तानां महान्विशेष इति भावः॥

यदि अन्य देउताहरूका पूजक पुनः जन्म नै धारण गर्दछन् भने फेरि- "सहयज्ञाः .......परमवाप्स्यथ॥" भनिकन आउनुभएको छ, त्यसमा अन्य देउताहरूको फल सहित उपासना किन भनिएको छ? यस शंकाको उत्तर दिनुहुन्छ। भगवान् भन्नुहुन्छ कि म अन्य देउताहरूको उपासनालाई निष्फल भन्दिन, तर देउताहरूको अधिकारानुसार त्यस उपासनाको क्षुद्र फल नै हुन्छ, यही भनेको हो। इन्द्रादि देउताहरूको भक्त इन्द्रादिलाई नै पाउँदछन्। पितृभक्त अग्ष्विाता आदि पितृगणलाई नै पाउँदछन्। यक्ष, रक्ष, विनायक, मातृगणका पूजक उनीहरूलाई नै पाउँदछन्। यस प्रकार सत्त्व, रज र तमोगुणवाला आ-आफ्नो गुणहरूको अधिकताको अनुसार आ-आफ्ना आराध्यदेव, पितृ, भूत आदिको उपासनाले उनीहरूको अनुग्रह प्राप्त गरेर आफ्नो उपास्य देवको अनुरूप ऐश्वर्य, सामीप्य, सारूप्य, सायुज्य आदि भावहरूमा कुनै एउटा या सबैलाई पाएर भोगको अन्तमा फेरि उनीहरूका साथै संसारमा गिर्दछन्। तर मेरो भक्ति गर्नेवाला दैवीसम्पत्ति युक्त, अनादि कारण, कर्म क्लेश विपाकादिले रहित, सबैभन्दा विलक्षण, अनन्त, असंख्य र नित्य ऐश्वर्य र शक्तिले युक्त, निःसीम आनन्द रूप मलाई नै प्राप्त गर्दछन्। र फेरि ती जन्म धारण गर्दैनन्। अन्य देउताहरूका भक्त भन्दा मेरा भक्तको यही नै ठूलो विशेषता हो॥ २५॥

-★-★-★-

**पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति ।**
**तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः॥**

**जो भक्त पत्र, पुष्प, फल, जल आदि यथासाध्य एवं अनायास प्राप्त वस्तुलाई प्रेमपूर्वक मलाई अर्पण गर्दछ भने त्यस ममा तल्लीन भएको भक्तद्वारा प्रेमपूर्वक दिएको उपहार (भेट) लाई म खान्छु पनि अर्थात् स्वीकार गर्दछु॥ २६॥**

किञ्च देवतान्तरभजने तद्भक्तानां महान्प्रयासो मद्भक्तानां तु मदुपासनेऽतिसौकर्य्यमित्याह-पत्रमिति। अनायासलभ्यं

अर्को कुरा यो पनि हो कि देउताहरूको सेवा गर्नमा उनीहरूका भक्तलाई ठूलो प्रयत्न गर्नुपर्दछ तर मेरा भक्तलाई मेरो सेवामा धेरै

पत्रं नवपल्लवं दुर्वाङ्कुरादिपुष्पं वा तोयं वाऽन्यत्किञ्चिद्वस्तु यः कश्चिदपि पुमान्मे मह्यं परमेश्वरायाप्तकामाय भक्त्या निरतिशयप्रीत्या सर्वं त्वदीयमेव, न मम किञ्चिदिति त्वदनन्यभक्तोऽहं त्वदीयमेव तुभ्यं समर्पयामि। पूर्णकामस्त्वं केवलं मदनुग्रहायाङ्गीकुरुष्वेति प्रार्थनया प्रयच्छति। तस्य प्रयतात्मनः शुद्धमनसः प्रकर्षेण मदर्चने यतमनस इति वा तत्तथाविधभक्त्युपहृतमहं सर्वेश्वरोऽवाप्तसमस्तकामोऽप्य-खिलब्रह्माण्डनायकोऽपि ब्रह्मेशेन्द्राद्याराधनाशक्योऽपि भक्ताधीनस्वभावत्वादश्नामि। तथोक्तं–मोक्षधर्मे नारायणी-याख्याने। "यद्ब्रह्मा ऋषयश्चैव स्वयं पशुपतिश्च यत्। शेषाश्च विबुधश्रेष्ठा दैत्यदानवराक्षसाः॥ नागाः सुपर्ण-गन्धर्वाः सिद्धा राजर्षयश्चये। हव्यं कव्यं च सततं विधियुक्तं प्रयुञ्जते॥ कृत्स्नं तु यस्य देवस्य चरणावुपतिष्ठते। याः क्रियाः सम्प्रयुक्ताश्च ह्येकान्तिगति बुद्धिभिः। ताः सर्वाः शिरसा देवः प्रतिगृह्णाति वै स्वयमि"ति॥

सुगमता छ। यही भन्नुहुन्छ। बिना परिश्रमले नै पाएको तुलसीपत्र, दुबो आदि, फल फूल, जल आदि वस्तु कुनैले म आप्तकामलाई भक्ति पूर्वक अर्थात् निरतिशय प्रेमले यस प्रकार अर्पण गर्दछ कि सबै वस्तु भगवान्को नै हो, मेरो होईन, म हजुरको अनन्य भक्त हजुरको चीज हजुरलाई नै अर्पण गर्दछु, हजुर पूर्णकाम हुनुहुन्छ, केवल मलाई दया गर्नका लागि नै स्वीकार गर्नुहवस, यस्तो प्रार्थना गरेर जसले दिन्छ, त्यो शुद्ध चित्तवाला, मेरो पूजामा लागिपरको भक्तको द्वारा भक्तिपूर्वक दिएको ती सबै चीजहरूलाई म, सर्वेश्वर, पूर्णकाम, अखिल ब्रह्माण्डको नायक र ब्रह्मादिबाट अगम्य हुँदा पनि भक्ताधीन भएको कारण ग्रहण गर्दछु। जस्तो कि मोक्षधर्मको नारायणीय आख्यानमा भनिएको छ–

"यद्ब्रह्मा ......स्वयम्॥"

अर्थात् ब्रह्मा, ऋषि, स्वयं शिव, बाँकी अरु श्रेष्ठ देउता, दैत्य, दानव, राक्षस, नाग, गन्धर्व, सिद्ध, राजर्षि जो हव्य कव्य विधि सहित भगवान्लाई दिन्छन, उनीहरू सबै ती भगवान्को चरणमा पुग्दछन् र जुन क्रियाहरू एकान्त गति र बुद्धिले गरिन्छ उनीहरू सबैलाई भगवान् सादर आफ्नो शिरले ग्रहण गर्नुहुन्छ॥२६॥

–★–★–★–

## यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत्।
## यत्तपस्यसि कौन्तेय तत्कुरुष्व मदर्पणम्॥

**हे कुन्तिपुत्र! तिमी जे गर्दछौ, जे पनि भोजन गर्दछौ, जुन सुकै यज्ञ गर्दछौ र जे पनि दान दिन्छौ तथा जुन सुकै तप गर्दछौ त्यो सबै मलाई अर्पण गरिदेऊ॥२७॥**

अहो महान् भक्तेः प्रभावो यतो महाविभूतिपतिरनन्तकोटि-ब्रह्माण्डनायकोऽपि भवान् भक्त्याऽर्पितमतिफल्गुपत्रपुष्पा-द्यपि अश्नाति।हन्त तर्हि भक्तस्यासाधारणं धर्मं वद येनाहमपि त्वद्भक्तः स्यामित्यत आह–यत्करोषीति। यत्स्वाभाविकं लौकिकं किञ्चित्कर्म तथा यद्देहधारणार्थमश्नासि, यज्जुहोसि वैदिकं होमकर्म करोषि। तथा यद्ददासि। यत्तपस्यसि। उपलक्षणमे-तत्सर्वेषां नित्यनैमित्तिककर्मणाम्। तथा च यत्किञ्चित्स्वभाव-प्राप्तमाहारविहारेक्षणादिकं, यच्च शास्त्रविहितं होमदानव्रत स्नानादिकं सर्वं कर्म मदर्पणं मय्यर्पितं यथा स्यात्तथा कुरुष्व। कर्मकर्तृत्वमुपायमुपेयं च सर्वंमय्येवार्पयित्वा निर्भरत्वभवन-पूर्वकं स्वस्यैहिकामुस्मिकस्य सर्वस्य शुभाशुभस्य मदधी-नत्वव्यवसाय इति मदनन्यभक्तासाधारणो धर्मस्तस्मात्त्वं मदाराधनैकनिष्ठो मय्यर्पितसर्वस्व भवेति भावः॥

आहा! तब भने भक्तिको प्रभाव धेरै नै ठूलो छ जसले महाविभूतिका स्वामी र अखिल ब्रह्माण्डको नायक भएर पनि हजुर अति तुच्छ पत्र पुष्प आदि स्वीकार गर्नुहुन्छ। यदि यस्तो नै हो भने हजुर आफ्नो भक्तको विशेष धर्म भन्नुहोस जसलाई जानेर म पनि हजुरको भक्त बनौं। यस मा भगवान् भन्नुहुन्छ। स्वाभाविक वा लौकिक जुन सुकै कर्म गर, देह धारणको लागि जेसुकै(अखाद्य बाहेक) भोजन गर, हवन कर्म गर, जुन दान दिन्छौ, जुन तपस्या गर्छौ, अर्थात् जुन कुनै पनि नित्य वा नैमित्तिक कर्म गर र स्वाभाविक आहार विहार, देख्नु इत्यादि तथा शास्त्रविहित स्नान, दान, व्रत आदि जुन सुकै कर्म गर्दछौ ती सबै मलाई अर्पण गरिदेऊ। कर्म, कर्त्तृत्व, उपाय, उपेय आदि सबै विषय मलाई अर्पण गरेर म माथि नै निर्भर भई आफ्नो यस लोकको र परलोकको शुभाशुभ कर्मलाई मेरो आधीन निश्चय गरेर जान्नु, यहि नै मेरो भक्तको असाधारण धर्म हो। अतः मेरो आराधनामा एकनिष्ठ होऊ र मलाई नै सर्वस्व अर्पण गरिदेऊ॥२७॥

–★–★–★–

## शुभाशुभफलैरेवं मोक्ष्यसे कर्मबन्धनैः ।
## सन्न्यासयोगयुक्तात्मा विमुक्तो मामुपैष्यसि ॥

**यस प्रकार मलाई अर्पण गर्नाले तिमी कर्मबन्धनबाट र शुभ अथवा अशुभ कर्मको फलबाट तिमी मुक्त हुनेछौ। यसरी आफु सहित सबैथोक मलाई अर्पण गर्नेवाला र सबै बाट सर्वथा मुक्त भएको तिमी मलाई नै प्राप्त गर्नेछौ ॥ २८ ॥**

एवंवृतस्त्वं यत्फलं प्राप्स्यसि तच्छृणु–शुभाशुभफलैरितिं। एवं मदुक्तप्रकारेण संन्यासः मयि सर्व कर्मकर्त्तत्वादि–समर्पणं स एव योस्तेन युक्त आत्मा चित्तं यस्य तथाभूतः सन् शुभाशुभे इष्टानिष्टे फलं येषां तै कर्मबन्धनैः कर्मरूपैर्बन्धनैर्मोक्ष्यसे। कर्मणां मय्यर्पिततवात्तव तत्सम्बन्धा–नुपपत्तेः ततश्चतैर्विमुक्तः सन्मामेवोपैष्यसि। न पुनः संसारे वर्त्स्यसीत्यर्थः॥

यस्तो गर्नाले जस्तो फल तिमीलाई मिल्ने छ त्यो पनि सुन। यस प्रकार मैले अह्राएको अनुसार सबै कर्म, कर्त्तृत्व आदि अर्पणरूप संन्यासयोगले युक्त भएपछि इष्टानिष्टवाला शुभाशुभ कर्महरूका बन्धनबाट तिमी छुटकारा पाउनेछौ। किनकी कर्महरू मलाई अर्पण गर्नाले ती कर्महरू सँग तिम्रो सम्बन्ध रहँदैन र यस प्रकार उनीहरूबाट विमुक्त भई तिमी मलाई प्राप्त गर्नेछौ र फेरि यस संसारमा आउने छैनौ ॥ २८ ॥

–★–★–★–

## समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः।
## ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम् ॥

**सम्पूर्ण प्राणीहरूका लागि म समान छु, ती प्राणीहरू मा न त कुनै मेरो द्वेषी छ न त कुनै प्रिय नै छ। परन्तु जो प्रेमपूर्वक मेरो भजन गर्दछन् ती म भित्र छन् र म पनि तिनीहरू भित्र छु॥ २९ ॥**

ननु यद्येवं त्वं स्वभक्तानेवात्मभावं प्रापयसि नान्रूपांस्तर्हि तवापि रागद्वेषयोगात्सर्वेश्वरत्वं कथं स्यादिति चेत्तत्राह–सम इति। सर्वेषु देवतिर्यङ्मनुष्यपश्वाद्यात्मनाऽवस्थितेषु जातिस्वभावज्ञानाज्ञानादिनोत्तममध्यमाधमेषु भूतेषु प्राणिषु भजनीयतयाऽन्तर्यामितया च समोऽहं, यतो न मे द्वेष्योऽस्ति न प्रियः। अपकृष्टजातिस्वभावज्ञानादिमताऽराध्यमानस्य मे न कश्चिदपकर्षो भवत्यतस्तथाभूतो मदाराधको मम द्वेषविषयो न भवति। तथोत्कृष्टजातिस्वभावज्ञानादिना पुरुषेणाराध्यमानस्य मे कश्चिदुत्कर्षो न भवत्यतो जात्यादिरुत्कृष्टोऽमित्येवं मत्प्रीतिविषयो न भवति। एवमपि ये तु जात्यादिनिकृष्टा उत्कृष्टा वा भक्त्या मां भजन्ति ते मयि चित्तवृत्त्या वत्तन्ते। अहमपि तेष्वनुग्राहकतया वर्त्ते, तेषां मद्वियोगो न भवतीत्यर्थः। यथा जात्यादिनिकृष्टा गजेन्द्रशवरीगुहकप्यादयः, उत्कृष्टाः श्रुतदेवबहुलाश्व–भीष्मपाण्डवादयः, सर्वेऽपि मन्निष्ठा मदनुग्राह्यत्वेन समा एव। न त्वभक्ता दुर्योधनादयः। एवं न मे वैषम्यापत्तिः। यथा

यदि हजुर आफ्ना भक्तलाई मात्र आत्मभाव वा मुक्ति दिनुहुन्छ अरुलाई चैं दिनुहुन्न भने हजुर पनि रागद्वेषको वशमा पर्नुहुन्छ। फेरि हजुर सर्वेश्वर कसरी हुन सक्नुहुन्छ? यस शंकाको उत्तर दिनुहुन्छ। जाति, स्वभाव, ज्ञान आदिबाट उत्तम, मध्यम, अधम श्रेणीका देव, मनुष्य, पशु, पक्षी आदि जीवहरूको पूजनीय र अन्तर्यामी भएको कारण म सबैका लागि बराबर छु। यसैले न त मेरो कुनै शत्रु छ न कुनै मित्र छ। यदि नीच जाति र स्वभाववाला पुरुष पनि मेरो आराधना गर्दछन् भने त्यस बाट मेरो अपकर्ष वा हीनता हुँदैन र न उच्च जाति वा स्वभाववाला द्वारा पूजिएर पनि मेरो उत्कर्ष वा श्रेष्ठता नै हुन्छ। यसबाट यो जातिमा उच्च छ यस्तो संझेर म कसैलाई प्रेम–पात्र बनाउँदिन, र न यो संझेर कि यो जातिमा नीच हो, म कसैसँग द्वेष गर्दिन। यस प्रकार जुन, चाहे ती उँचा जातिका होउन् वा नीचो जातिका, मेरो भजन गर्दछन् ती सबै चित्तवृत्तिबाट सधैं म मा वर्त्तमान रहन्छन्, र म पनि उनहरूमा अनुग्रह वा कृपा भावले सदा वर्त्तमान रहन्छु, अर्थात् उनीहरूसँग मेरो वियोग हुँदैन। तल्लो जातिको र निकृष्ट स्वभाव भएका गजेन्द्र, शवरी, गुह, बाँदर(हनुमान्) आदि र उच्च जाति र उत्कृष्ट स्वभावका श्रुतदेव, बहुलाश्व, भीष्म, पाण्डव आदि सबै म प्रति निष्ठा राख्नेवाला, मेरो अनुग्रहको समान पात्र हुन्। तर जो दुर्योधनादि अभक्त छन् ती मेरो कृपाका पात्र होईनन्।

कल्पवृक्षः स्वाश्रितस्यैव मनोरथं पूरयति, यथा वाऽग्निः स्वाश्रितस्यैव शीतं तमश्च नाशयति, न तेन तस्य किञ्चिद्वैषम्यं तथा ममापि भक्तानेवानुग्रह्णतो न किञ्चिद्वैषम्यमिति भावः। तथोक्तं श्रीभागवते युधिष्ठिरेण "न ब्रह्मणः स्वपरभेदमतिस्तव स्यात्सर्वात्मनः समदृशः स्वसुखानुभूतेः। संसेवतां सुरतरोरिव ते प्रसादः सेवानुरूपमुदयो न विपर्ययोऽत्रे"ति॥

जस्तो कल्पवृक्ष आफ्नो आश्रितको मात्रै मनोरथ पूरा गर्दछ अरुको गर्दैन यसले उसमा विषमता आउँदैन; फेरि जसरी अग्नि आफ्नो आश्रितको मात्रै शीत र अन्धकारलाई टाढा गरिदिन्छ अरुको होईन यसले उसमा पनि विषमता आउँदैन, त्यसै प्रकार केवल आफ्ना भक्तहरूमा मात्र अनुग्रह राख्नाले म मा पनि विषमभाव आउँदैन श्रीमद्भागवतमा युधिष्ठिरले भनेका छन्-"न.... विपर्ययोऽत्र॥" अर्थात् सर्वात्मा, समदृष्टि भएका, सुखानुभवले पूर्ण ब्रह्मस्वरूप हजुरको आफ्नो र पराईको भेद भाव छैन। सेवा गर्नेहरू माथि कल्पवृक्षको जस्तो, सेवाको अनुसार, हजुरको कृपा हुन्छ। यसैले हजुरमा कुनै विषमता छैन॥२९॥

-★-★-★-

## अपि चेत्सुदुराचारो भजते मामनन्यभाक्। साधुरेव स मन्तव्यः सम्यग्व्यवसितो हि सः॥

**यदि कुनै दुराचारी-भन्दा-दुराचारी भएपनि अनन्यभक्त भएर मेरो भजन गर्दछ भने त्यसलाई त साधु नै मान्नु पर्दछ। किनकी त्यसले राम्रो सँग निश्चय गरी सकेको छ॥३०॥**

किञ्चालोकिकं मम भक्तेः प्रभावं शृणु-अपि चेदिति द्वाभ्याम्। न तावन्मदनन्यभक्तानां दुराचारः सम्भवति, यदि कथञ्चित् स्यात्तत्सम्भावनापरावपिचेच्छब्दौ "अपिः पदार्थसम्भावनाऽन्ववसर्गगर्हासमुच्चयेष्वि"ति सूत्रात्। केन चिज्जन्मान्तरीयेण बलिष्ठेन कर्मणा वैदिकाचारविरोधिनाऽन्त्यजादिसमुद्भवं शरीरं प्रापितः, उत्तमाधिकारार्हकुलजन्मापि केनचिद्बलीयसा भगवदीयापचारात्कमेन पापेन प्राप्तदुःसङ्गजन्यकर्मणा सत्सम्प्रदायोक्तशास्त्रीयसदाचारात्पतितो वा सुदुराचारशब्दवाच्यः। उभयथाऽपि सम्प्राप्त वैदिकाचारानर्ह इति यावत्। न तूत्तमाधिकारार्होऽपि यथेष्टाचारेण तर्त्तमानोऽत्र दुराचारो विवक्षितः, तस्यासुरकोटी सन्निविष्टत्वात्। एवं चोभयविधदुराचारादप्यधिकः पातकातिपातकमहापातकसर्वाशित्वकृतघ्नतादिविशिष्टो दुराचारः, पूर्वं तथाभूतोऽपि यः केन चिद्भाग्योदयेनानन्यभाक् अन्यसाधनान्यप्रयोजनान्यसम्बन्धशून्यः सन् मां भजते, सर्वसाधनरूपं सर्वयोगक्षेमकर्त्तारं मुक्तप्राप्यं तद्भोग्यं सर्वसम्बन्धाश्रयं मुमुक्षुध्येयं मां निश्चित्य सर्वात्मना सेवते मद्भजनैकाबलम्बनो भवतीत्यर्थः। साधुरेव मन्तव्यः। चतुर्विधा मम जना भक्ता एवेति ये श्रुताः। तेषामेकान्तिनः श्रेष्ठा ये चैवान्यदेवताः॥ अहमेव गतिस्तेषां निराशी

अरु पनि मेरो भक्तिको प्रभाव सुन।

यद्यपि मेरो भक्त दुराचारी हुँदैनन्, तथापि यदि कदाचित् भएमा('अपि' 'चेत्' यी दुबै शब्द यसै सम्भावना का सूचक हुन्) जसलाई कुनै जन्मान्तरको बलिष्ठ पापले निषिद्ध, वैदिकाचार विरोधी चाण्डाल आदिको शरीर पाएको, अथवा जो उत्तम अधिकारवाला कुलमा जन्म भएर पनि भगवान्को अपचारात्मक कुनै बलिष्ठ पापको कारण दुःसङ्गमा परेर सम्प्रदायोक्त शास्त्रीय सदाचारबाट पतित भएको होस, त्यही पुरुष सुदुराचारी हो। दुबै प्रकारबाट त्यो वैदिक आचरणको अयोग्य हुन जान्छ। यहाँ उत्तम अधिकारी भएर यथेष्टाचार गर्नेवाला दुराचारी संझिईंदैन। त्यसको गणना असुरकोटिमा हुन्छ। यस तरीकाले दुबै प्रकारका दुराचारी भन्दा पनि अधिकपातक, अतिपातक, महापातक, सर्वभक्षिता, कृतघ्नता आदि दोषवाला दुराचारी भएपनि जो कोही कुनै भाग्योदयले अनन्य भएर र अन्यसाधन, अन्यप्रयोजन र अन्यसम्बन्धले शून्य भएर मेरो भक्ति गर्दछ अर्थात् मलाई सर्वसाधनरूप, सबैको योगक्षेम कर्त्ता, मुक्तहरूका प्राप्य र भोग्य, सबै सम्बन्धहरूका आश्रय, मुमुक्षुहरूका ध्येय संझेर सम्पूर्णभावले मेरो नै सेवा गर्दछ र मेरो नै भजन जसको अवलम्ब हो त्यसलाई सदाचारी र एकान्त भक्त नै जान्नु पर्दछ किनकी त्यो तल भनिएको लक्षणले युक्त छ। शास्त्रमा एकान्ती भक्तको लक्षण यी हुन्-

"चतुर्विधा .....कर्मकारिणाम्॥"

अर्थात् चार प्रकारका मेरा भक्त प्रसिद्ध छन्। तिनीहरूमा अनन्य देवतावाला एकान्त भक्त नै सर्वप्रधान हुन्। ती आशारहित(निष्काम भगवत्प्रीत्यर्थ) कर्म गर्नेहरूको गति (प्राप्य फल) म नै हूँ।

यसमा कारण यो छ कि ती भगवान्मा दृढ विश्वास राख्दछन्।

कर्मकारिणाम्–इत्युक्तैकान्ति लक्षणसम्पन्नत्वात्॥ तत्र हेतुमाह–सम्यग्व्यवसितो हि स इति। हि यतः सम्यग्व्यवसायसम्पत्तियुक्तः,सर्वमुमुक्षुध्येयो जगज्जन्मादिहेतुर्वेदैकप्रमाणगम्यो वेदान्त प्रतिपाद्यो मुक्तप्राप्यो भगवान् श्रीपुरुषोत्तमो रमानिवासो गोपीप्रियो मदुपायोपेयः सर्वसम्बन्धरूपो नान्य कश्चित्साध्यसाधनसम्बन्धत्वेन मया समाश्रयणीयोऽस्ति। यद्यपि मम पापबाहुल्येन वैदिकाचारयोग्यतानाभूत्, प्रत्युताधःपातार्हो ह्यभवम्। तथापि तेन निरतिशयदयाकारुण्यतितिक्षावात्सल्यादिगुणमहोदधिना भगवता स्वासाधारणगुणपारवश्यन्निर्हेतुककारुण्येनैव स्वानन्यभजनार्हमानुषभावं प्रापयित्वा स्वनियम्यभूतैर्मदीयात्मशरीरेन्द्रियादिभिरात्मानं भाजयित्वा स्वदीनानुकम्पित्व स्वभावप्रसिद्धये मां स्वानन्यभक्ततया ख्यापयति। तस्मात्तदुपकृतिं शिरसि निधाय स एवापारकारुण्यसिन्धुः सर्वात्मना मया भजनीय इति व्यवसाययुक्त इत्यर्थः॥

**अर्थात् सबै मुमुक्षुहरूका ध्येय, जगत्को जन्म आदिको कारण, केवल वेदको नै प्रमाण जान्न योग्य, वेदान्तबाट प्रतिपाद्य, मुक्तहरूका प्राप्य, श्रीपुरुषोत्तम लक्ष्मीपति, गोपिहरूका प्रिय भगवान् नै मेरो उपाय, उपेय र सर्व सम्बन्धरूप हुन्, र उहाँलाई छोडेर कुनै पनि साध्य साधन सम्बन्धले मेरो उपासनीय छैन, यस्तो जान्दछ। यद्यपि पापको अधिकताले वैदिकाचारको योग्य रहिन बरु अधःपातको नै योग्य रहेँ, तथापि अत्यन्त दया, कारुण्य, दाक्षिण्य, वात्सल्य आदि गुणहरूका महासमुद्र श्रीभगवान् आफ्नो असाधारण गुणहरूका वशीभूत भई र निर्हेतुक करुणाको वशमा भएर आफ्ना अनन्य भजनको योग्य मनुष्य शरीर दिएर र आफ्नो नियम्यभूत मेरो आत्मा, शरीर, इन्द्रिय आदिहरूबाट भजन गराएर आफ्नो दीनदयालुताको प्रसिद्धिका लागि मलाई अनन्य भक्त बनाएर प्रसिद्ध गर्नुहुन्छ। यसबाट ती अपार करुणाका समुद्रको सबै प्रकारले सेवा भक्ति गर्नुपर्दछ, यस प्रकारको दृढ व्यवसाय वा विश्वासले त्यो युक्त छ॥३०॥**

–★–★–★–

## क्षिप्रं भवति धर्मात्मा शश्वच्छान्तिं निगच्छति ।
## कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति॥

**त्यो त्यसै क्षण धर्मात्मा हुनजान्छ र निरन्तर रहने शान्तिलाई प्राप्त गर्दछ। हे कुन्तिपुत्र! मेरो 'भक्तको पतन हुँदैन' यस्तो तिमी प्रतिज्ञा गर॥३१॥**

ततश्च–क्षिप्रमिति। अनेन विश्वसात्मकेन दृढनिश्चयेन दुराचारं त्यक्त्वा क्षिप्र शीघ्रमेव धर्मात्मा महाभागवतलक्षणसम्पन्नो भवति। ततः शश्वच्छान्तिं मद्भावापत्तिलक्षणां मुक्तिं (क्रमेण) प्राप्नोति। ननु पूर्वाभ्यस्तदुराचारवशात्पुनस्तत्र रुचिश्चेत्तर्ह्यधर्मात्मत्वात् कथं वा शान्तिं गच्छेत्? किन्तुनश्येदित्याशङ्क्य तथाविधव्यवसायवतो मद्भक्तस्य न कदाऽपि नाशङ्का कार्येत्यह–कौन्तेयेति। हे कौन्तेय! त्वं प्रतिजानीहि प्रतिज्ञां कुर्वित्यर्थः। किं ? प्रतिजानीयामित्यपेक्षायामाह–न मे भक्तः प्रणश्यतीति। मम परमकारुण्यवात्सल्यसौहार्दक्षमादीनानुकम्पसौशील्यसर्वशरण्यत्वाद्यनन्तकल्याणगुणसागरस्य सत्यसङ्कल्पस्य ज्ञानैश्वर्यादिषाड्गुण्यनिधेः श्रीपुरुषोत्तमस्य भगवतो माधवस्य भक्तो दुराचारसम्पन्नोऽप्यनन्यशरणः सर्वसाधनहीनोऽपि न प्रणश्यतिं

**यस विश्वात्मक दृढ निश्चयबाट त्यो दुराचारलाई छोडेर महाभागवत (परमवैष्णव) हुन जान्छ। तब क्रमैले शाश्वत्(अविनाशी) शान्तिलाई अर्थात् मेरो भावापत्तिरूपी मुक्तिलाई पाउँदछ। यदि पहिले को दुराचारको अभ्यासले त्यसको फेरि दुराचारमा नै रुचि भयो भने त त्यो अधर्मी हुनाले कसरी साधु हुन सक्छ र कसरी शान्ति(मुक्ति) पाउँदछ? उल्टै त्यसको नाश नै हुन्छ। यस प्रकारको शंकाको उत्तरमा भगवान् भन्नुहुन्छ कि यस्तो कुरा हुन सक्दैन। त्यस प्रकारको दृढ व्यवसाय(निश्चय) वाला मेरा भक्तको नाशको शंका गर्नु पर्दैन। हे अर्जुन! तिमी यस प्रकार निश्चय गरेर संझिराख कि परम कारुण्य, वात्सल्य, सुहृदता, क्षमा, दीनदयालुता, सुशीलता, शरणागतवत्सलता आदि अनन्त कल्याण गुणका सागर, सत्यसंकल्प, ज्ञान, ऐश्वर्य आदि षड्गुणहरूले सम्पन्न म श्रीपुरुषोत्तम भगवान् माधवको भक्त, दुराचारी र सर्वसाधनहीन भएपनि, अनन्य शरण हुनाले अर्थात् साधन र साध्य भगवान्लाई नै संझेर अन्य सर्वसाधनहीन भएमा पनि नष्ट हुँदैन अर्थात् अन्य मनुष्यको समान मलाई प्राप्त नगरेर यमराजको अधीन भई फेरि संसारमा आउँदैन। यसमा अजामिल, भिक्षु, गज,**

अन्यजनवन्मामप्राप्य यमाधीनो भूत्वा संसारी न भवतीत्यर्थः। दृष्टान्ताश्चात्राजामिलभिक्षुगजगणिकाव्याधादयः तथा–चोक्तं शास्त्रे। "स्वपुरुषमभिवीक्ष्य पाशहस्तं वदति यमः किल तस्य कर्णमूले। परिहरमधुसूदनप्रपन्नान्प्रभुरहमन्यनृणां न वैष्णवानाम्। कमलनयन वासुदेव विष्णो धरणिधराच्युत शङ्खचक्रपाणे!। भवशरणमुदीरयन्ति ये वै त्यज भट दूरतरेण तानपानि"ति वैष्णवे। श्रीसात्त्वते च–दुराचारोऽपि सर्वाशी कृतघ्नो नास्तिकः पुराः। समाश्रयेदादिदेवं श्रद्धया शरणं हि यः॥ निर्दोषं विद्धि तं जन्तुं प्रभावात्परमात्मनः" वैष्णवधर्मे च– "अपि पापेष्वभिरता मद्भक्ताः पाण्डुनन्दन! मुच्यन्ते पातकैः सर्वैः पद्मपत्रमिवाम्भसा"इति॥ किञ्च–मेरुमन्दिरमात्रोऽपि राशिः पापस्य कर्मणः। केशवं वैद्यमासाद्य दुर्व्याधिरिव नश्यति॥ न वासुदेवभक्तानामशुभं विद्यते क्वचित्–इत्यादि॥३१॥

गणिका, व्याधा आदिका दृष्टान्त छन्। विष्णुपुराणमा लेखिएको छ–"स्वपुरुषमभिवीक्ष्य.....तानपानात्॥" अर्थात् यमराज आफ्ना सेवक(दूत)लाई पाश हातमा लिएको देखेर उनीहरूको कानमा भन्दछन् कि श्रीकृष्णको भक्तहरूलाई छोडिदिनु। म अन्य जीवको स्वामी हूँ वैष्णवहरूको होईन। कमलनयन, वासुदेव, धरणीधर आदि भगवान्को नामहरूको जो उच्चारण गर्दछन् ती पापरहितहरूलाई टाढै बाट छोडिदिनु। (नहेर्नु)। श्रीसात्त्वत तन्त्रमा पनि लेखिएको छ कि – "दुराचारोऽपि.....प्रभावात्परमात्मनः॥" अर्थात् दुराचारी, सर्वभक्षी, कृतघ्न, पहिलेको नास्तिक भएर पनि जो श्रद्धाले भगवान्को शरणमा आउँदछ त्यसलाई परमात्माको प्रभावले निर्दोष संझनु। वैष्णवधर्ममा पनि लेखिएको छ– "अपि. ....पद्मपत्रमिवाम्भसा॥" अर्थात् हे अर्जुन! पापमा बेरिएका भएपनि मेरा भक्त सबै पातकहरूबाट छुट्दछन् जस्तो कि पानी बाट कमल अलग रहन्छ। अरु पनि– "मेरुमन्दिरमात्रोऽपि.....क्वचित्॥ अर्थात् मेरु पर्वतको बराबर नै पापको ढेरी भएपनि त्यो केशवरूपी वैद्यलाई पाएर असाध्य नराम्रा रोगको समान नष्ट हुन्छ। किनकी वासुदेवको भक्तलाई अशुभ हुँदैन, अर्थात् उनीहरूको अशुभको नाश हुन्छ॥३१॥

–★–★–★–

**मां हि पार्थ व्यपाश्रित्य येऽपि स्युः पापयोनयः।**
**स्त्रियो वैश्यास्तथा शूद्रास्तेऽपि यान्ति परां गतिम्॥**

**हे पार्थ! पाप योनिवाला भएपनि तथा स्त्री, शुद्र, वैश्य भएपनि ती सबै सर्वथा मेरो शरण भएर निःसन्देह परम गतिलाई प्राप्त गर्दछन्॥३२॥**

दुःसङ्गादिजन्यदोषदुष्टं भक्तिः पावयित्वा भगवद्भावं प्रापयतीत्युक्तमिदानीं जातिस्वभावदोष दुष्टानपि परमगति प्रापयतीत्याह–मां हीतिं येऽपि पापयोनयोऽधम जन्मानोऽन्त्यजादयः स्युः, तथाऽध्ययनादिवर्जिताः स्त्रियः वैश्याः, वैश्याः–कृष्यादिमात्रनिकृष्टवृत्तिरताः, न त्वन्यवृत्तयः स्त्रीशूद्रयोर्मध्ये गणनीयास्तथा शूद्रा उत्तमवैदिकधर्महीना अधमगतियोग्या अपि हे पार्थ! तेऽपि मां व्यपाश्रित्यानन्यतया शरणमागत्य परां श्रेष्ठां गतिं यान्ति। हीति निश्चितम्॥

दुःसङ्गबाट उत्पन्न दोषहरूले दुषित पुरुषहरूलाई मेरो भक्ति पवित्र गरेर भगवद्भाव प्राप्त गराउँदछ, यो पहिले नै भनि आएको हो। जाति स्वभावको दोषले दूषित जीवलाई पनि मेरो भक्ति परम गति दिन्छ, यसैलाई अब भन्नुहुन्छ। अधम जन्मवाला चाण्डाल आदि, अपढ़ स्त्री, कृषिमात्र निकृष्ट वृत्तिवाला वैश्य(अन्य वृत्तिवाला वैश्य, स्त्री, शूद्रको गन्तीमा छैनन्) र उत्तम वैदिक धर्मले रहित शूद्र सबै अधम गतिका योग्य भएर पनि मेरो अनन्य भक्तिले युक्त भई अनन्य भावले मेरो शरणमा आएर श्रेष्ठ गति पाउँदछन्, यो निश्चित हो॥३२॥

–★–★–★–

**किं पुनर्ब्राह्मणाः पुण्या भक्ता राजर्षयस्तथा।**
**अनित्यमसुखं लोकमिमं प्राप्य भजस्व माम्॥**

**(भने जो) पवित्र आचरण गर्ने ब्राह्मण र ऋषिस्वरूप क्षत्रिय भगवान्को भक्त हुन्छन् अर्थात् तिनीहरू परमगतिलाई प्राप्त**

**गर्दछन् भने यसमा त भन्नु नै के छ र! यसैले यस अनित्य र सुखरहित शरीरलाई प्राप्त गरेर तिमी मेरो भजन गर ॥३३॥**

श्रेष्ठजातिगुणवतां तु परमां गतिं कैमुत्यन्यायेनाह–किं पुनरिति। यद्येवम्भूताः पापयोनयोऽपि परां गतिं यान्ति तर्हि पुण्याः सुकृतिनो ब्राह्मणास्तथा राजर्षयः, राजानश्च ते ऋषयः सूक्ष्मदर्शिनः क्षत्रियश्रेष्ठा मम भक्ताः परां गतिं यान्तीति किमु वक्तव्यं ? नात्र सन्देह इत्यर्थः। अतो मम भक्तिमेव पुरुषार्थाऽसाधारणहेतुं मत्वा अनित्यमध्रुवम् असुखं जन्ममरणाद्यनेकदुःखनिलयमिमं लोकं मनुष्यदेहं प्राप्य लब्ध्वा यावदयं न नश्येत्तावदन्यसुखसाधनं हित्वा शीघ्रमेव मां भजस्व अत्यादरेण सेवनं कुरु, मद्भजनेनैवास्य जन्मनः साफल्यं कुरु। अन्यथोत्तमकुलजन्मक्रिया–कौशल्यादिव्यर्थमेव स्यादिति भावः॥

श्रेष्ठ जाति तथा उत्तम गुणवाला भक्तहरूको त उत्तम गति हुन्छ नै, यसमा त भन्नुनै के छ र? यसैलाई यहाँ भन्नुहुन्छ।

यदि अनन्यभावले मेरो शरणमा आउनाले यस्ता चाण्डाल आदि पनि परम गति पाउँदछन् तब पुण्यात्मा ब्राह्मण, राजर्षि अर्थात् सूक्ष्मदर्शी श्रेष्ठ क्षत्रिय जो मेरा परमभक्त छन्, ती परम गति पाउने नै भए, यसमा केहि सन्देह नै छैन। यसैले मेरो भक्तिलाई नै मोक्षको कारण संझेर अनित्य, अनिश्चित जन्म मरण आदि अनेक दुःखहरूको घर यस लोकलाई अर्थात् यस मनुष्य देहलाई पाएर जब सम्म यसको विनाश हुँदैन तब सम्म अन्य सुख साधनहरूलाई शीघ्र अत्यन्त आदिले मेरो सेवा गर, अर्थात् मेरो भजनले नै यस जन्मलाई सफल गर होईन भने उत्तम कुलमा जन्म, क्रियाकुशलता आदि सबै व्यर्थ हुनेछन्॥३३॥

–★–★–★–

## मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु।
## मामेवैष्यसि युक्त्वैवमात्मानं मत्परायणः॥

**तिमी मेरो भक्त बन, ममा मन लगाऊ, मेरो पूजा गर्ने गर, मलाई नमस्कार गर, यस प्रकार तिमी आफुलाई मसँग जोडेर मेरो परायण भएको तिमी मलाई नै प्राप्त हुनेछौ॥३४॥**

भजनस्वरूपमुपदिशन्नध्यायमुपसंहरति–मन्मना भवेति। मयि सर्वेश्वरे भगवति वासुदेवे स्वभावतोऽपास्तसमस्त–दोषेऽशेषकल्याणगुणैकराशौ सर्वज्ञे सत्यसङ्कल्पे सर्वस्य जगतोऽभिन्ननिमित्तोपादानकारणे परब्रह्मणि पुरुषोत्तमाख्ये स्वयमवाप्तसमस्तकामे भक्ताभीष्टप्रदातरि भक्ताशेषदोष–निरसनस्वभावे सर्वशरण्ये सर्वस्वामिनि सौन्दर्यमाधुर्य्य–लावण्यादिनिधिमूर्तौ ध्यातृमनोहारिणि मनो यस्य स तथा त्वं भव विषयिणां विषयेष्वनपायिनीप्रीतिवदनवच्छिन्न–गङ्गाप्रवाहवन्मय्याविष्टमनो भवेत्यर्थः। यदि दृष्टश्रुतानु–भूतानेकवाह्यपदार्थासक्तं मनो झटिति मय्यावेष्टुं न शक्नोषि चेत्तर्हि मद्भक्तो भव तत्साधनभूतां मद्भक्तिं कुर्वित्यर्थः। साधनभक्तिश्च "सुरर्षे! विहिता शास्त्रे हरिमुद्दिश्य या क्रिया। सैव भक्तिरिति प्रोक्ता यया भक्तिः परा भवेदि"ति वचनाद्भगवदर्था क्रियैव। तामेव निर्दिशति–मद्याजीति। मद्यजनकरणशीलो भव, प्रत्यहं त्रिकालं द्विकालमेककालं वा विविधगन्धपुष्पतुलसीधूपदीपोत्तमवस्त्रभूषणनैवेद्यादि–

म सर्वेश्वर, अशेष कल्याण गुणनिधि, स्वभावले नै सम्पूर्ण दोषहरूबाट रहित, सर्वज्ञ सत्यसंकल्प, जगत्को अभिन्न निमित्तोपादान कारण, परब्रह्म, पुरुषोत्तम, स्वयं पूर्णकाम, भक्तहरूका अभीष्टदाता, भक्तदोषविनाशी, सर्व शरण्य, सर्वेश, सौन्दर्य, माधुर्य, लावण्य आदिको खान, ध्याताहरूका मनमोहक म वासुदेव भगवान्मा त्यस प्रकार मन लगाउनु जुन प्रकार गङ्गाप्रवाह नित्य अवाधित रूपले प्रवाहित हुन्छ र जसरी विषयी विषयमा मन लगाउँदछ। यदि कुनै कारणले अनेक देखेका सुनेका र अनुभूत पदार्थहरूमा लागेको मनलाई म तिर लगाउन सक्दैनौ भने मेरो भक्त बन अर्थात् त्यसको साधनस्वरूप मेरो भक्ति गर। साधन भक्ति यस प्रकार छ- "सुरर्षे! ....भवेति॥"
अर्थात् हे नारद! विष्णुको उद्देश्यले जुन क्रियाको विधान शास्त्रमा भनिएको छ त्यसैलाई भक्ति भनिन्छ। त्यसैबाट परा भक्ति हुन्छ। त्यसै क्रियालाई स्पष्ट गर्नुहुन्छ। प्रतिदिन त्रिकाल, द्विकाल वा एककालमा विविध सुगन्धका फूल, तुलसीदल, धूप, दीप, वस्त्र, भूषण आदिले मेरो मूर्त्ति शालिग्राम आदिको प्रीतिपूर्वक पूजा गर र यथाशक्ति जन्मोत्सव, एकादशीव्रत, उपवास, जागरण, मेरो सामुन्ने नाच गान आदि गर। धन छ भने मेरो मूल्यवान् सामग्रीहरूले मेरो पूजा गर्नुपर्दछ। गरिएको कर्मको सांगतासिद्धिको लागि र कर्त्तापनको अभिमानलाई मेटाउनको लागि मन, वाणी र शरीरले

भिर्ममम मूर्त्तिं शालग्रामादिमतिप्रीत्याऽर्चय। तथा मम जन्माद्युत्सवानुकरणमेकादश्युपवासजागरणनृत्यगीतादिकं च कुरुष्व तच्च विभवे सति बहुधनसाध्यसामग्र्या कर्त्तव्यं, कृतस्य च साङ्गतासिद्ध्यर्थं कर्त्तृत्वाभिमानरूपनिवृत्तये च मनोवाक्कायैर्मह्यं प्रणामः कर्त्तव्य इत्याह–मां नमस्कुर्विति। सर्वं त्वदीयं न ममास्ति किञ्चिदहं त्वदीयो न ममाहमस्मीत्याद्युक्तप्रकारेण मयि सर्वस्वं समर्प्य स्वाभिमानं त्यजेत्यर्थः। "द्व्यक्षरं तु भवेन्मृत्युस्त्र्यक्षरं ब्रह्म शाश्वतम्। ममेति च शाश्वतमि"ति भारते व्यासोक्तेः। प्रीत्यतिशये–नाष्टाङ्गं पञ्चाङ्गं वा प्रणामं कुरु। प्रणाममाहात्म्यं च वामने प्रह्लादेनोक्तं "वैकुण्ठं खड्गपरशुं भगवन्तं भवच्छिदम्। प्रणिपत्य यथान्यायं न संसारे पुनर्भवेत्।" वैष्णवधर्मे च "नम इत्येव यो ब्रूयान्मद्भक्तः श्रद्धयाऽन्वितः। तस्याक्षयो भवेल्लोकः श्वपाकस्यापि नारदे"ति एवं साङ्गे मद्यजने कृते सति सुशकं मयि मनो नियोक्तुमित्याह–एवमुक्त प्रकारेणात्मानं मनो मयि युक्त्वा मत्परायणो मदेकशरणः त्यक्तान्ययत्नः सन् मामेव नित्यं सच्चिदानन्दं मुक्तप्राप्यं तद्भोग्यं चैष्यसि प्राप्स्यसि॥३४॥

भक्त्याऽन्वितं निजं ज्ञानं भक्तिवैभवमेव च।
गुह्यमत्राह कृपया भगवाँस्तं समाश्रये॥

मलाई प्रणाम गर। अर्थात् "सर्वं त्वदीयं न ममास्ति किञ्चिदहं त्वदीयो न ममाहमस्मि" तात्पर्य यो कि–सबै हजुरको हो मेरो केहि पनि होईन, म हजुरको हूँ आफ्नो होईन। यस प्रकार मलाई सर्वस्व अर्पण गरेर आफ्नो अभिमानलाई छोडिदेऊ। महाभारतमा व्यासजी ले भन्नुभएको छ– "द्व्यक्षरं तु भवेन्मृत्युस्त्र्यक्षरं ब्रह्म शाश्वतम्। ममेति च शाश्वतम्" अर्थात् दुई अक्षर (मेरो) मृत्यु हो र तीन अक्षर (मेरो होईन) शाश्वत् ब्रह्म हो। मम(मेरो) यही नै मृत्यु हो। मम न(मेरो होईन अर्थात् भगवान्को हो) यही नै शाश्वत् ब्रह्म हो। यस प्रकार प्रकार प्रीतिपूर्वक साष्टाङ्ग वा पञ्चाङ्ग प्रणाम गर। वामन पुराणमा प्रह्लाद ले प्रणामको माहात्म्यको विषयमा यसरी भनेका छन्–"वैकुण्ठं .... पुनर्भवेत्॥"

अर्थात् संसारको बन्धन काटिदिने भगवान्लाई तथा खड्ग परशु सुदर्शन आदि उहाँको कुनै पनि आयुधलाई प्रणाम गर्नेवालाको यस संसारमा फेरि जन्म हुँदैन। वैष्णव धर्ममा पनि भनिएको छ– "नम .....नारद॥" अर्थात् जो मेरो भक्त श्रद्धापूर्वक हे भगवान् हजुरलाई नमस्कार छ यस्तो भन्दछ त्यो चाण्डाल भएपनि त्यसलाई अक्षय लोक प्राप्त हुन्छ। यस प्रकार साङ्गोपाङ्ग मेरो पूजन गर्नाले र म मा आफ्नो मन लगाएर मेरो शरण भएर तथा अरु यत्नहरूलाई छोडेर नित्य, मुक्त प्राप्य मुक्तभोग्य सच्चिदानन्दरूप मलाई प्राप्त गर्नेछौ॥३४॥ भक्त्याऽन्वितं .......समाश्रये॥ अर्थात् गोपनीय भक्तियुक्त ज्ञानको वैभवलाई जुन भगवान्ले कृपा गरेर यस अध्यायमा भन्नुभएको छ, म उनै भगवान्को आश्रित छु।

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा–टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां राजविद्याराजगुह्ययोगो नाम नवमोऽध्यायः॥९॥

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ दशमोऽध्यायः

श्रीभगवानुवाच

**भूय एव महाबाहो श्रृणु मे परमं वचः।**
**यत्तेऽहं प्रीयमाणाय वक्ष्यामि हितकाम्यया॥**

**हे महाबाहो! मेरो परम वचनलाई तिमी फेरि पनि सुन, जुन मलाई अत्यन्त प्रेम गर्ने तिम्रो हितको कामनाले भन्दैछु॥१॥**

तदेवं सप्तमाष्टमाध्याययोर्भजनं यस्य परमेश्वरस्वरूपस्य भक्तिप्राप्तयोक्तस्यैव नवमेऽध्याये ज्ञानमाहात्म्यकथन-पूर्वकमभक्तनिन्दया भक्तानां परमफलनिरूपणेन च भक्तेर्माहात्म्यं द्योतितमिदानीं भक्त्युत्पत्तये तद्वृद्धये च निरङ्कुशं स्वैश्वर्य वक्तुं तावदुक्तस्यापिमहिम्नो बहुभिर्दुर्ज्ञेयत-वात्स्वभक्तहिताकाङ्क्षया पुनरर्जुनं सम्बोधयति श्रीभगवान् उवाच-भूय एवति। भूय एव पुनरपि हे महाबाहो! मे मदीयं परमं प्रकृष्टं सपरिकरपरमतत्त्वप्रकाशकं वाचो वाक्यं मम महिमानं श्रुत्वा प्रीयमाणाय अमृतपानेनैव निरतिशय-प्रीतिमते ते तुभ्यं हितकाम्यया भक्तिप्राप्तिवृद्धिरूपत्व-द्धितकामनया यदहं वक्ष्यामि तदेकाग्रेण मनसा श्रृणु॥

यस प्रकार सातौं अध्याय र आठौं अध्यायमा सेवनीय परमेश्वरको स्वरूपलाई भक्तिद्वारा नै प्राप्त हुने कुरा भनेर नवौं अध्यायमा ज्ञानको माहात्म्य भन्नुका साथै अभक्तहरूको निन्दा र भक्तहरूको परमफल को निरूपण द्वारा भक्तिको माहात्म्य प्रकट गर्नुभयो। अब दशौं अध्यायमा भक्तिको उत्पत्ति र त्यसको वृद्धिको लागि आफ्नो निरङ्कुश महिमा भन्नलाई र भनेको महिमालाई सजिलै नसंझिएकोले भक्तको भलाईका लागि भगवान् फेरि अर्जुनलाई सम्बोधन गर्दै भन्नुहुन्छ। फेरि पनि हे अर्जुन! सबै अंग सहित परमतत्त्व प्रकाशक मेरो वचनहरूलाई एकाग्रमनले सुन। जसलाई म अमृतपानको समान सर्वाङ्ग मेरो महिमा सुनेर तृप्त भएको तिमि सँग, भक्तिको प्राप्ति र वृद्धिरूप तिम्रो हितको इच्छाले भन्दैछु, अर्थात् जुन मेरो वचनलाई सुनेर तिमीलाई भक्ति प्राप्त हुनेछ र त्यो बढ्नेछ॥१॥

-★-★-★-

**न मे विदुः सुरगणाः प्रभवं न महर्षयः।**
**अहमादिर्हि देवानां महर्षीणां च सर्वशः॥**

**म प्रकट हुने कारण न देउता जान्दछन् न त महर्षिहरू नै, किनकी म सम्पूर्ण कुराहरूले देउताहरू र महर्षिहरू को आदि हुँ॥२॥**

तव तत्त्व केचिदन्येऽपि तत्त्वज्ञा न जानन्ति किं? यतो भूयः स्वयमेव वक्ष्यसीत्यत आह-न म इति। मे मम प्रभवं जीववत्कर्मनिमित्तजन्मरहितस्यापि प्रकृष्टमलौकिकं भवं जन्म नानाविभूतिगुणशक्तिभिराविर्भावविशेषं सुरग-धा इन्द्रादयो महर्षयोऽतीन्द्रियवस्तुदर्शिनो भृग्वादयो न विदुर्न जान्ति। तदज्ञाने हेतुः-अहमिति। हि यस्मादहं देवानां महर्षीणां च सर्वशः सर्वप्रकारैः उत्पादकत्वेन ज्ञानशक्त्या-दिदातृत्वेन च आदिःकारणम्। अतस्ते मत्कार्यभूता मद्दत्तपरिमित-ज्ञानवन्तो मत्स्वरूपैश्वर्यादिकं मदुपदेशं विना न जानन्तीत्यर्थः॥

के हजुरको तत्त्वलाई अरु कुनै तत्त्वज्ञानी जान्न सक्दैन जो कि हजुर स्वयं त्यसलाई फेरि भन्नुहुँदैछ? यसको उत्तरमा भगवान् भन्नुहुन्छ कि म अन्य जीवहरूका समान कर्माधीन जन्मले रहित छु। मेरो अलौकि जन्मलाई अर्थात् नाना विभूति, गुण, शक्ति द्वारा मेरो उत्पत्ति विशेषलाई इन्द्र आदि देवता तथा अतीन्द्रिय(अदृष्ट) वस्तु देख्ने महर्षि पनि जान्दैनन्। उनीहरूले नजान्नुको कारण यो हो कि ती देउताहरू तथा महर्षिहरूका सम्पूर्ण प्रकारले उत्पादक र ज्ञान शक्ति आदिको दाता हुनाले, उनीहरूको कारण हूँ यसैले मैले दिएको परिमित ज्ञानवाला, मेरो कार्यस्वरूप, तिनीहरू मेरो स्वरूप र ऐश्वर्यलाई मेरो उपदेशको बिना जान्दैनन्॥२॥

-★-★-★-

**यो मामजमनादिं च वेत्ति लोकमहेश्वरम् ।**
**असम्मूढः स मर्त्येषु सर्वपापैः प्रमुच्यते ॥**

**जो मनुष्य मलाई अजन्मा, अनादि र सम्पूर्ण लोकहरूको महान् ईश्वर जान्दछ दृढतापूर्वक सन्देहरहित भई स्वीकार गर्दछ त्यो मनुष्यहरूमा ज्ञानवान् हो र त्यो सम्पूर्ण पापहरूबाट मुक्त हुन्छ ॥ ३ ॥**

एवं देवर्ष्याद्यविज्ञेयमत्स्वरूपयाथात्म्यज्ञानं भक्त्युत्पत्ति-प्रतिबन्धकपापनिरसनकारणमित्याह- यो मामिति । यस्मादहं देवानां महर्षीणां चादिर्न तु ममान्यः कश्चनादिर्वि-द्यते। अतोऽहमनादिरनादित्वादेवाजः, तं मामजमनादिं लोकमहेश्वरं च यो वेत्ति। "हिरण्यगर्भः समवर्त्तताग्रे यो देवानां प्रभवोश्चोद्भवश्च, न सन्न चासच्छिव एव केवलः। एको रुद्रो न द्वितीयाय तस्थुरि"त्यादिश्रुतिर्भब्रह्मरुद्रयोः सर्वदेवादित्वतत्कारणत्वप्रतिपादनाल्लोकेश्वरत्वं, तद्भगवतो वासुदेवस्यापि सामान्यं लोकेश्वरत्वमिति केषां चिद्ब्रह्मशिवादिसमत्वबुद्धेर्निरासाय। "तमीश्वराणां परमं महेश्वरं। तं देवतानां परमं च दैवतं "पतिं पतीनां परमं परस्ताद्विदाम देवं भुवनेशमीड्यमि"त्यादि विशेषश्रुत्य-भिहितपरममहेश्वरपर्यायलोकमहेश्वर शब्दवाच्यं मां वेत्तीत्युक्तम्। स मम लोकमहेश्वरत्ववेत्ता मर्त्येषु मनुष्येषु असम्मूढः परब्रह्मणः पुरुषोत्तमस्य भगवत इतरदेवसा-धारणत्वकल्पनं संमोहो महान् दोषस्तद्रहितः सन्मद्भक्त्युत्पत्ति-विरोधिभिः सर्वपापैः प्रमुच्यते। "यो मोहाद्विष्णुमन्येन हीनदेवेव दुर्मतिः। साधरणं सकृद्ब्रूते सोऽन्त्यजो नान्त्य-जोऽन्त्यज" इति पञ्चरात्रवचनाद्भगवति विष्णौ इतरदेव-सामान्यबुद्धीनां महापातकिनां भगवद्भक्तिर्न जायतेऽत एवम्भूतः सम्मोहो यत्नेन त्याज्य इति भावः॥

देवताहरू र ऋषिहरूबाट अविज्ञेय, मेरो स्वरूपको यथार्थ ज्ञान भक्तिको उत्पत्ति र वृद्धिमा रोकावट गर्ने पापहरूलाई हटाउने कारण हो। यसै कुरालाई यहाँ भगवान् भन्नुहुन्छ। म देउता, महर्षिहरूको आदि हूँ, मेरो अर्को कोहि आदि छैन। यसैले म अनादि हूँ र अनादि भएको ले अज हूँ। "हिरण्यगर्भः ...तस्थुः।" अर्थात् हिरण्यगर्भ ब्रह्मा नै पहिला भए, जो देउताहरूका उत्पादक हुन्। त्यतिखेर न सत् थियो न असत् केवल एक शिव नै थिए। एक रुद्र नै थिए अर्को कोहि थिएन। यी र यस्तै अरु श्रुतिहरूद्वारा प्रतिपादित ब्रह्मा र रुद्र सबै देउताहरू भन्दा पहिले एवं उनीहरूका कारण हुनाले उनीहरू लोकेश्वर हुनु सिद्ध छ, त्यस्तै भगवान् वासुदेव पनि लोकेश्वर हुनुहुन्छ, यस प्रकार भगवान् लाई शिव र ब्रह्माको समान नै लोकेश्वर जान्नेहरूको भ्रम निवारणार्थ भगवान् आफुलाई लोकमहेश्वर भन्नुहुन्छ। अर्थ यो कि म ती सबै ब्रह्मा रुद्रादिहरूका पनि ईश्वर हूँ। यथा श्रुति, "तमीश्वराणां .... भुवनेशमीड्यम्।" अर्थात् ईश्वरहरूका पनि ईश्वर, देउताहरूका पनि देउता, पतिहरूका पनि पति, पर भन्दा पनि पर, भुवनेश्वर, सबैबाट नमस्कृत भगवान्को हामी स्तुति गर्दछौं। यस श्रुति-विशेषमा कथित परम महेश्वर शब्दको वाचक लोकमहेश्वर शब्दले मलाई नै जो जान्दछ र मलाई अज र अनादि जान्दछ त्यो परम महेश्वर-तत्त्ववेत्ता मनुष्यहरूमा असंमूढ नै हो, अर्थात् अन्य देवहरूको समान नै परब्रह्म पुरुषोत्तम भगवान् लाई संझिएको महान दोषले रहित भएर, मेरो भक्तिको विरोध गर्ने पापहरूबाट छुटकारा पाउँदछ। "यो .....नान्त्यजोऽन्त्यज" जो मूढ मोहले एक पल्ट पनि विष्णुलाई अन्य हीन देउताहरूको समान भन्दछ त्यो नै यथार्थमा अन्त्यज हो, अन्त्यज अन्त्यज होईन। यस पञ्चरात्रको वचनबाट भगवान् विष्णुमा र अन्य देउताहरूमा समान भाव राख्नु महान् पाप हो। यस्तो महापातकिहरूको विष्णुमा भक्ति कहिल्यै पनि हुन सक्दैन। यसैले यस्तो मोहलाई सदा यत्न पूर्वक त्याग गरिदिनु पर्दछ॥ ३ ॥

-★-★-★-

**बुद्धिर्ज्ञानमसम्मोहः क्षमा सत्यं दमः शमः।**
**सुखं दुःखं भवोऽभावो भयं चाभयमेव च॥**

**बुद्धि, ज्ञान, असम्मोह, क्षमा, सत्य, दम, शम तथा सुख, दुःख, उत्पत्ति, विनाश, भय, अभय र ॥४॥**

उक्तं लोकमहेश्वरत्वमेव प्रतिपादयति-बुद्धिरित्यादि

माथि भनिएको आफ्नो लोकमहेश्वरतालाई यहाँबाट तीन

त्रिभिः। बुद्धिः सारासारविवेचनरूपान्तःकरणावस्था। ज्ञानमात्मानात्मपदार्थावबोधनम्। असम्मोहोः बोद्धव्य-वस्तुविषयकभ्रमनिरासेन तत्स्वरूपावधारणम्। क्षमा चित्तविकारहेतौ सत्यप्यविकृतचित्तता। सत्यं यथादृष्ट-श्रुतवस्तुविषयकभाषणम्। दमो बाह्येन्द्रियाणां स्वस्वविषयेभ्यो नियमनं। सुखमनुकूलवेदनीयं, दुःखं प्रतिकूलानुभवः। भाव उद्भवः। अभावस्तद्विपर्ययः, भयमागामिदुखस्य हेतुदर्शनजस्त्रासः, अभयं तन्निवृत्तिः ॥४॥

श्लोकहरूको द्वारा प्रतिपादन गर्नुहुन्छ।
बुद्धि अर्थात् सारासार विचार गर्ने अन्तःकरणको अवस्था, ज्ञान अर्थात् आत्म र अनात्म पदार्थलाई बुझ्नु, असम्मोह अर्थात् जान्नयोग्य वस्तुको भ्रमरहित बोध। क्षमा अर्थात् चित्तमा विकारको कारण उपस्थित भएमा पनि विकार नहुनु। सत्य अर्थात् सुनेको अथवा देखेको वस्तुलाई जस्ताको तस्तै भन्नु। दम अर्थात् बाह्य इन्द्रियहरूलाई आ-आफ्नो विषयहरूबाट रोक्नु। सुख अर्थात् अनुकूल अनुभव, दुःख अर्थात् प्रतिकुल अनुभव। भव अर्थात् उत्पत्ति। अभाव अर्थात् नाश। भय अर्थात् आउने दुःखको कारण देखेर आउने त्रास र अभय अर्थात् भयको निवृत्ति वा निडरता ॥४॥

-★-★-★-

**अहिंसा समता तुष्टिस्तपो दानं यशोऽयशः।**
**भवन्ति भावा भूतानां मत्त एव पृथग्विधाः॥**

**अहिंसा, समता, सन्तोष, तप, दान, यश, अपयश यी प्राणिहरूका अनेकप्रकारका बीस भाव म बाटै उत्पन्न हुन्छन्॥५॥**

अहिंसा मनोवाक्कायैः प्राणिहिंसानिवृत्तिः, समतारागद्वेषराहित्यं, तुष्टिर्यथालाभेन सन्तोषः तपः शारीरादि वक्ष्यमाणलक्षणं, दानं न्यायार्जितस्य धनादेर्देशे काले पात्रे प्रतिदानं, यश औदार्यादिगुणवत्तया श्लाघा, अयशः कार्पण्यादिदोषेण लोककुत्सनं, बुद्धिरित्यादयस्तद्विपरीताश्च भावाः पृथग्विधाः प्रतिव्यक्तिभिन्नाः प्राणिनां तत्तत्कर्मानुसारेण मत्त एव भवन्ति॥

अहिंसा अर्थात् मन, वचन, कर्मद्वारा जीवहिंसा न गर्नु। समता अर्थात् रागद्वेषले रहित हुनु। तुष्टि अर्थात् यथा लाभ संतोष। तप अर्थात् शरीरादि सम्बन्धी शास्त्रविहित कठिन कार्य। दान अर्थात् न्यायद्वारा उपार्जित धनादिलाई देश, काल, पात्रको उचित विचार गरेर दिनु। यश अर्थात् उदारता आदि गुणहरूबाट प्रशंसित हुनु। अयश अर्थात् कृपणतादिको कारण लोक निन्दा। बुद्धि आदि र उनीहरूको विपरीत भाव सबै जीवहरूमा अलग अलग उनीहरूमा कर्मानुसार मबाटै प्राप्त हुन्छन्॥५॥

-★-★-★-

**महर्षयः सप्त पूर्वे चत्वारो मनवस्तथा।**
**मद्भावा मानसा जाता येषां लोक इमाः प्रजाः॥**

**सात महर्षि र उनीहरूभन्दा पनि पहिले नै भएका चार सनकादिहरू तथा चौध मनुहरू यिनीहरू सबै मेरो मनबाट उत्पन्न भएका हुन् र म माथि श्रद्धा-भक्ति राख्नेहरू हुन्, जसका यी संसारमा भएका मनुष्यहरू बिन्दुज र नादज रूपमा प्रजा(सन्तति) हुन्॥६॥**

किञ्च-महर्षय इति। महर्षयो वेदतदर्थद्रष्टारः सप्त-भृग्वादयः। तेभ्योऽपि पूर्वे प्रथमजाश्चत्वारो महर्षयः सनकादयः, तथा मनवः स्वायम्भुवाद्याः। उपलक्षणं चैतदुद्रस्यापि। सर्वे चैते मानसा जाता हिरण्यगर्भात्मनः। ममैव मनसः सङ्कल्पज्जाता नतु योनिजाः। तत्र सप्तर्षयः सनकाद्यारुद्रश्च मानसा एव। मनुः स्वायम्भुवस्तत्पत्नी च हिरण्यगर्भस्य शरीर-भागावेव। अन्ये मनवस्तु योनिजा इति विवेकः। तथोक्तं पुराणेः "भृगुं मरीचिमत्रिं च पुलस्त्यं

वेद तथा उनीहरूको अर्थलाई देख्ने महर्षि अर्थात् भृगु आदि सप्तर्षि र उनीहरूका भन्दा पहिलेको चार महर्षि सनक, सनन्दन आदि र स्वयम्भु आदि मनु तथा रुद्र, यी सबै हिरण्यगर्भात्मक मेरो मन कै संकल्पले नै उत्पन्न हुन्, योनि द्वारा होईन। उनीहरूमा सप्तर्षि, सनकादि र रुद्र मनबाट उत्पन्न हुन्। स्वयम्भु मनु र उनकी स्त्री हिरण्यगर्भको नै शरीरको भाग हुन्। अर्थ यो कि अन्यान्य मनु योनि गर्भ बाट उत्पन्न भएका हुन्। पुराणहरूमा भनिएको छ- "भृगुं ......गता॥" अर्थात् भृगु, मरीचि, अत्रि, पुलस्त्य, पुलह, क्रतु र वशिष्ठ यी सबैलाई ब्रह्माले मनबाटै उत्पन्न गर्नुभयो। पुराणमा यी सात ब्राह्मण भनिन्छन्। महाभारतको मोक्ष

पुलहं क्रतुम्। वशिष्ठं च महातेजाः सोऽसृजन्मनसा सुतान्। सप्त ब्रह्माण इत्यते पुराणे निश्चयं गता" महाभारते मोक्ष–धर्मे तु "मरीचिरंगिराश्चात्रिः, पुलस्त्यः पुलहः क्रतुः। वसिष्ठ इति सप्तैते, मनसा निर्मिता हि वै" इत्येवं मरीच्यादय उक्ताः। विष्णुपुराणे तु नवोक्ताः। भृगुं पुलस्त्यं पुलहं क्रतु–मङ्गिरसं तथा। मरीचिं दक्षमत्रिं च, वशिष्ठं चैव मानसान्। नव ब्रह्माण इत्येते, पुराणे निश्चयं गता" इतिं "सनन्दनादयो ये च, पूर्वसृष्टास्तु वेधसा। न ते लोकेषु सज्जन्ते, निरपेक्षाः प्रजासु ते। सर्वे ते चागतज्ञाना, वितरागा विमत्सरा" इति। पुनः कभम्भूतास्ते मद्भावा–मदीयो यो भावः जीवानां सृष्टि–पालनसंहारमोक्षभावनं स मद्भावो विद्यते येषु ते मद्भावाः, मदनुग्रहात्सर्जनपालनसंहरणमोक्षशक्त्यान्विता इत्यर्थः। तत्र सप्त महर्षयः सृजनशक्त्यन्विताः। रुद्रः संहरणशक्त्यन्वितः। सनन्दनादयस्तु संसारान्मोक्षणशक्त्यन्विता निवृत्तिधर्म प्रवर्त्तकाः मोक्षशास्त्रेषु लोकाचार्याः। तदुक्तं मोक्षधर्मे सप्तर्ष्युत्पत्त्यनन्तरम्–''एते वेदविदो मुख्या लोकाचार्याः प्रकीर्त्तिताः।प्रवृत्तिधर्मिणश्चैव प्राजापत्ये प्रकल्पिता–इति॥ तथा तत्रैव सनकाद्युत्पत्त्यनन्तरमुक्तमस्वयमागतविज्ञाना निवृत्ति–धर्ममाश्रिताः। एते योगविदो मुख्या लोकाचार्याः प्रकीर्त्तिताः॥ आचार्या मोक्षशास्त्रेषु मोक्षशास्त्रप्रवर्त्तकाः''–इति। श्रीभागवते ब्रह्माप्याह–'' तप्तं तपो विविधलोक–सिसृक्षया मे। आदौ सनात्स्वतपसश्चतुः सनोऽभूत्॥ प्राक्कल्पसंप्लवविनष्टमिहात्मतत्त्वम्। सम्यग् जगाद मुनयो यदचक्षतात्मन्! इति॥'' एकादशे श्रीभागवताऽप्युक्तम्–एतावान्योग आदिष्टो मच्छिष्यैः सनकादिभिः। सर्वतो मन आकृष्य मय्यद्धाऽऽवेश्यते यथा। इति॥ मनूनां पालनत्वं रुद्रस्य संहर्त्तृत्वं चोक्तं वैष्णवे "विष्णुमन्वादयः कालः, सर्वभूतानि च द्विज! स्थितेर्निमित्तभूतस्य विष्णोरेता विभूतयः। रुद्रः कालान्तकाद्याश्च समस्ताश्चैव जन्तवः। चतुर्धाः प्रलयायैता जनार्द्दनविभूतयः" इति। तेषां कार्य–दर्शनेन सामर्थ्यं द्योतयति– येषां लोक इमा इति। येषां सप्तर्षीणां च चतुर्णां सनकादीनां मनूनां च अस्मिल्लोके इमा ब्राह्मणक्षत्रियाद्या यथायथं जन्मना विद्यया च पुत्रपौत्रादिरूपाः शिष्यप्रशिष्यादिरूपाश्च प्रजा सन्ततयो

धर्म मा पनि मरीचि आदिको गन्ती गराईएको छ। यथा– "मरीचिरंगिराश्चात्रिः...... वै" । विष्णुपुराणमा यी नौ जना भनिएको छ। यथा– "भृगुं पुलस्त्यं ....निश्चयं गता" यी श्लोकहरूमा माथि भनिएका सातजनाको अतिरिक्त अङ्गिरा र दक्षको नाम पनि लिईएको छ। फेरि "सनन्दनादयो ....विमत्सरा" अर्थात् पहिले ब्रह्माले जुन सनन्दनादिलाई मनको संकल्पले उत्पन्न गर्नुभयो तिनीहरू संसारमा फँसेनन्। ती सबै ज्ञानी, विरागी र द्वेषले शून्य भए। फेरि यी सबै अर्थात् सप्तर्षि सनन्दनादि, मनुहरू तथा रुद्र मेरो सृष्टि, पालन, संहार, मोक्ष भाववाला हुन् अर्थात् मेरो कृपाले सृष्टि, पालन, संहार, मोक्ष दिने शक्तिले युक्त छन्। यिनीहरूमा सात महर्षिगण सृष्टि गर्ने शक्तिले युक्त छन् र प्रवृत्तिधर्मको लौकिक आचार्य हुन्। मनु पालन शक्तिले युक्त र रुद्र संहार शक्तिले युक्त छन्। सनन्दनादि महर्षिगण मोक्ष शक्तिले युक्त र निवृत्ति धर्मको प्रवर्त्तक र मोक्षशास्त्रको लोकाचार्य हुन्। सप्तर्षिहरूको उत्पत्तिको वर्णन पछि मोक्ष धर्ममा यस्तो लेखिएको छ– एते ....प्रकल्पिता॥ अर्थात् यी सप्तर्षि वेदलाई जान्ने मुख्य लोकाचार्य हुन्, प्रवृत्ति धर्मको प्रवर्त्तक हुनाले सन्तान पैदा गर्नमा लागेका छन्। त्यहीं सनकादिको उत्पत्ति वर्णन पछि यो लेखिएको छ कि– ''स्वयमागतविज्ञाना.....प्रकीर्त्तिताः॥'' अर्थात् यी सनकादि स्वयं प्राप्त विज्ञानवाला र निवृत्ति धर्ममा निष्ठ छन्। मुख्य योगलाई जान्ने, लोकाचार्य र मोक्षशास्त्रको आचार्य र प्रवर्त्तक हुन्। भागवत् मा ब्रह्माले पनि भनेका छन्– "तप्तं .....यदचक्षतात्मन्॥"

अर्थात् जब अनेक प्रकारको लोक सृष्टि गर्ने इच्छाले ब्रह्माले तप गरे तब उनीबाट सनकादि चार पुत्र उत्पन्न भए। उनले पूर्वकल्पको महासंप्लवमा विनष्ट भएको आत्मतत्त्वलाई आफुमा देखे र त्यसलाई सम्यक् रूपले व्यक्त गरे। श्रीमद्भागवतको एकादश स्कन्धमा भगवान्ले भन्नुभएको छ– "एतावान्योग......यथा॥"

अर्थात् मेरो शिष्य सनकादिहरूले पनि यहि योग भनेका छन् जसले मन चारै तिरबाट तानेर ममा साक्षात् लगाउनु। विष्णुपुराणमा मनु आदि मनुष्यहरूका पालक हुनु र रुद्रको संहार हुनु लेखिएको छ– "विष्णुमन्वादयः ...........जनार्द्दनविभूतयः॥"

अर्थात् हे ब्राह्मण! विष्णु, मनु आदि, काल र सबै प्राणी। यी सबै सृष्टिको स्थितिको कारण स्वरूप विष्णुको विभूतिहरू हुन्, रुद्र कालान्तक आदि र समस्त चार प्रकारको जीव, यी सबै प्रलयको लागि जनार्दन को विभूतिहरू हुन्। उनीहरूका(मनुआदिको) कार्य देखाउँदै सामर्थ्यको वर्णन गर्नुहुन्छ। यी सप्तर्षि, सनकादि र मनु को यस लोकमा ब्राह्मण, क्षत्रिय आदि यथा योग्य जन्मद्वारा, अर्थात् पुत्र–पौत्रादि रूपले, तथा विद्याले, अर्थात् शिष्य–प्रशिष्य

विद्यन्ते। केचित्तुपूर्वे सप्तमहर्षयोऽतीतमन्वन्तरे ये भृग्वादयः सप्तर्षयो नित्यसृष्टिप्रवर्त्तनाय ब्रह्मणो मनसः सम्भवाः। नित्यस्थितिप्रवर्त्तनाय ये च सावर्णिकादयश्चत्वारो मनवः स्थिता येषां सन्तानमये लोके जाता इमाः सर्वाः प्रजाः प्रतिक्षणमाप्रलयादपत्यानामुत्पादकाः पालकाश्च भवन्त्येवं व्यचक्षते, तदसङ्गतार्थकथनादप्रामाणिकम्। तथाहि न तावत्सप्तर्षीणां पूर्वत्वं सङ्गतं, सनकादीनां तेभ्योऽपि पूर्ववत्प्रमिपादनात्। किञ्च चत्वार इत्यनेनापि न मनूनां ग्रहणमुचितं, यतः स्वायम्भुवः स्वारोचिष उत्तमस्तामसो रैवतश्चाक्षुषः वैवश्वत एवं सावर्णिर्दक्षसावर्णिर्ब्रह्मसावर्णि धर्मसावर्णी रुद्रसावर्णिर्देवसावर्णिरिति मनवश्चतुर्दश पुराणेषु प्रसिद्धास्तत्रातोतान्षड्वर्त्तमानं वैवस्वतं च विहाय "सावर्णिर्भविता मनुरि"ति वचनाद्भविष्यतां सावर्ण्यादिच-तुर्णामेव ग्रहणे भगवतस्तात्पर्याभावात्। किञ्च भविष्यतां मनूनां ग्रहणे "येषां लोक इमाः प्रजा" इति प्रत्यक्षनिर्द्देशो विरुद्ध स्यात्। तस्मात् तद्व्याख्यानस्यासङ्गतत्वा-दुक्तार्थस्यैव साधुत्वंमित्यलं विस्तरेण॥

**रूपले प्रजाहरू अर्थात् सन्तति विद्यमान छन्। कुनै यस छैटौं श्लोकको प्रथमार्द्धको यस्तो अर्थ गर्दछन् की "सबै भन्दा पहिले सात महर्षि अर्थात् बीतेका मन्वन्तरमा जो भृगु आदि सप्तर्षि नित्य सृष्टि गर्नको लागि ब्रह्माको मनबाट उत्पन्न भए र नित्य पालन गर्नको लागि जो सावर्णिकादि चार मनु स्थित छन् जसबाट यस सन्तानमय लोकमा उत्पन्न सबै प्रजाहरू छन् अर्थात् जो प्रतिक्षण प्रलयकाल पर्यन्त प्रजाहरूको उत्पत्ति र पालन गर्नेवाला हुन्।" यो अर्थ असंगत हो र प्रामाणिक पनि होईन किनकी सप्तर्षिहरू पूर्वमा हुनु संगत हुँदैन। उनीहरू भन्दा पहिले सनकादिहरूको उत्पत्ति हुने कुरा भनिएको छ, र "चत्वारः" भन्नाले मनुको ग्रहण गर्नु ठिक होईन किनकी पुराणहरूमा चौध मनु प्रसिद्ध छन्- "स्वायम्भुव, स्वारोचिष, उत्तम, तामस, रैवत, चाक्षुष, वैवश्वत एवं सावर्णि, दक्ष, सावर्णि, ब्रह्मसावर्णि, धर्मसावर्णि, रुद्रसावर्णि, देवसावर्णि र इन्द्रसावर्णि। यिनीहरूमा वैवस्वत मनुलाई छोडेर "सावर्णिर्भविता मनुः" यस वाक्यद्वारा हुने सावर्णि आदि चार मनुहरूको ग्रहण गरेमा त "येषां लोक इमाः प्रजा" यो प्रत्यक्ष कथन विरुद्ध हुनजान्छ। यसले उपर्युक्त जो कसैको मत छ, त्यो असंगत हुलाले मान्न योग्य छैन। यसैले जुन पहिला अर्थ लेखियो त्यो नै ठिक हो॥६॥**

-★-★-★-

## एतां विभूतिं योगं च मम यो वेत्ति तत्त्वतः।
## सोऽविकम्पेन योगेन युज्यते नात्र संशयः॥

**जो मनुष्य मेरो यस विभूतिलाई र योग सामर्थ्यलाई तत्त्व देखि नै जान्दछ अर्थात् सन्देहरहित भएर स्वीकार्दछ त्यो अविचल भक्तियोगले युक्त हुन्छ, यसमा अलिकति पनि सन्देह छैन॥७॥**

एवमुक्तबुद्ध्यादेर्महर्ष्यादेर्विभूतित्वं तद्याथात्म्यज्ञानस्य फलं चाह-एतामितिं एतां सम्प्रत्युक्तां बुद्ध्यादिमहर्ष्यादिरूपां मम विभूतिमैश्वर्य्यं योगं च तत्तदर्थनिर्माणसामर्थ्यंत त्वतो याथात्म्येन यो वेत्ति, सोऽविकम्पेनाप्रचलितेन दृढेनेति यावत् योगेन भक्त्याख्येन युज्यते युक्तो भवति। नास्त्यत्र संशयः॥

**यस प्रकार उक्त बुद्धि आदि तथा महर्षि आदिलाई भगवानको विभूति भएको कुरा भनियो। अब उक्त बुद्धि तथा महर्षि आदि रूप विभूतिको यथार्थ ज्ञानको फल भनिन्छ। जुन उक्त बुद्धि आदि र महर्षि आदि मेरा विभूति अर्थात् ऐश्वर्य र योग अर्थात् त्यस त्यस अर्थको निर्माणशक्तिलाई यथार्थ रूपमा जान्दछ त्यो अविचल अर्थात् दृढ भक्तियोगले युक्त हुन्छ, यसमा केहि पनि सन्देह छैन॥७॥**

-★-★-★-

## अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्तते।
## इति मत्वा भजन्ते मां बुधा भावसमन्विताः॥

**म संसारको प्रभव मूलकारण हुँ, र मबाटै सारा संसार प्रवृत्त भईरहेको अर्थात् चलिरहेको छ। यस्तो मानेर ममा नै श्रद्धा-प्रेम राख्दै बुद्धिमान् भक्त मेरो नै भजन गर्दछन्॥८॥**

उक्त विभूतियाथात्म्यज्ञानिनां भक्त्युद्रेकं दर्शयति-अहमिति। अहं

**उक्त विभूतिको यथार्थ ज्ञानवालाको प्रबल भक्तिलाई देखाईन्छ।**

जिज्ञास्यभूतजगज्जन्मादिलक्षणलक्षितपरब्रह्मस्वरूपः सर्वस्य ब्रह्मादिस्थावरान्तस्य जगतः प्रभव उत्पत्ति-कारणम्। मत्त एवास्य सर्वं देवमनुष्यादिलोकगमनागमनं वृद्धि-ह्रासादिकं प्रवर्त्तते,इत्येवं मत्वा बुधा यथावदवबो-धयुक्ता भावसमन्विताः प्रवृद्धप्रेमप्रवाहा मां निरतिशयप्रीति-विषयं भजन्ते॥

जान्नयोग्य, सम्पूर्ण जगत्को जन्मादिको लक्षणद्वारा लक्षित, परब्रह्म स्वरूप म ब्रह्मा देखि लिएर स्थावर पर्यन्त समस्त जगत्को उत्पत्तिको कारण हुँ। मबाट नै यस जगत्को देवलोक, मनुष्य लोकादि मा आउनु-जानु, वृद्धि,ह्रास आदि सबैथोक हुन्छ। यस्तो संझेर यथावत् ज्ञानवाला, भाव युक्त अर्थात् परम प्रेमयुक्त बुधजन मलाई अति प्रेमपात्र जानेर मेरो भजन गर्दछन्॥८॥

-★-★-★-

**मच्चित्ता मद्गतप्राणा बोधयन्तः परस्परम्।**
**कथयन्तश्च मां नित्यं तुष्यन्ति च रमन्ति च॥**

**ममा चित्त लगाउने, मैमा प्राण अर्पण गर्ने भक्तजनहरू आपसमा मेरो गुण, प्रभाव आदिलाई जनाउँदै र त्यसको कथन गर्दै नित्य-निरन्तर सन्तुष्ट रहन्छन् र मसँग नै प्रेम गर्दछन्॥९॥**

तेषां प्रेमवृद्धिपूर्वकभजनमेव विवृणोति-मच्चित्ता इति। मयि भगवति वासुदेवे चित्तं येषां ते मच्चित्ताः। मद्गतप्राणाः मामेव गताः प्राप्ताः प्राणाश्चक्षुरादीन्द्रियाणि येषां ते मद्रूपादि-दर्शनाद्येकविषयीभूतचक्षुरादिव्यापारा इत्यर्थः। मद्भजनार्थैक-जीवना इति वा। स्वसमानविद्वद्गोष्ठीषु परस्परमन्योऽन्यं युक्तिभिः श्रुतिस्मृत्यादिप्रमाणैश्च मामेव बोधयन्तः जिगीषाद्यभावान्मत्स्वरूपगुणज्ञापनेन सौहार्द्द कुर्वन्त इत्यर्थः। स्वन्यूनबोधेषु च मामेव कथयन्तः, तत्कृपया मदीयान् गुणान् मदीयान्यतिमानुःषान्यद्भुतानि कर्माणि च कथयन्तः सन्तस्तुष्यन्ति च रमन्ति च। वक्ता-रोऽनन्यप्रयोजनेन श्रोतृप्रश्नेन तुष्यन्ति अनुमोदयन्ते। श्रोतारश्च मदद्भुतप्रीणगुणकर्मश्रवणेन रमन्ति रमन्ते॥९॥

यहाँ उनीहरूको बढ्दै गरेको प्रेमयुक्त भजनको विषयमा भनिन्छ। म भगवान् वासुदेवमा चित्त दिने, मलाई नै प्राण र आँखा, कान आदि इन्द्रियहरू समर्पण गर्ने अर्थात् इन्द्रियहरूका क्रियाकलाप मलाई समर्पण गर्ने, एकमात्र मेरो रूपादिको दर्शनमा जो नेत्रादि इन्द्रियलाई लगाउँदछन्, भनाईको मतलब यो कि मेरो भजनको लागि नै जसको जिवन छ। फेरि आफ्नो समान विद्वान्हरूको मण्डलीमा श्रुति-स्मृति-प्रमाण तथा युक्तिहरू द्वारा मेरो नै बोध गराउँदै अर्थात् जित्ने इच्छा राखेर होईन तर मेरो स्वरूप तथा गुणहरूको कथन गर्दै आपस मा प्रेम गर्दछन्। आफु भन्दा नजान्नेहरूमा पनि मेरो नै कथन गर्दै र तिनीहरूमाथि कृपा गर्दै मेरो नै अमानुषिक अद्भुत कार्यहरूलाई भन्दै सन्तुष्ट तथा प्रसन्न हुन्छन्। अर्को प्रयोजन नभएको कारण वक्ता (भन्नेवाला) सुन्नेहरूका प्रश्नले प्रसन्न हुन्छन् तथा सुन्नेहरू भगवान्को अद्भुत गुणहरू र लीलादि कार्यहरूको कीर्त्तन सुनेर आनन्दलाभ गर्दछन्॥९॥

-★-★-★-

**तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम्।**
**ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते॥**

**ती नित्य-निरन्तर मतिर लागेका र प्रेमपूर्वक मेरो भजन गर्ने भक्तहरूलाई म त्यो बुद्धियोग दिन्छु, जसले उनीहरूलाई मेरो प्राप्ति हुन्छ॥१०॥**

तथाविधानां फलमाह-तेषामिति। सततं सर्वदा युक्तानां मयि निबद्धहृदयानां प्रीतिपूर्वकं भजतां तं बुद्धियोगं ज्ञानयोगमहं ददामिं येन बुद्धियोगेन मामुपयान्ति प्राप्नुवन्ति॥

उपरोक्त मनुष्यहरूलाई जो फल मिल्दछ अब त्यसको कथन हुन्छ। जो सदा मेरो एकचित्त भएर भजन गर्दछन्, उनीहरूलाई म यस्तो ज्ञानयोग दिन्छु जसले उनीहरूमलाई पाउँदछन्॥१०॥

-★-★-★-

**तेषामेवानुकम्पार्थमहमज्ञानजं तमः।**
**नाशयाम्यात्मभावस्थो ज्ञानदीपेन भास्वता॥**

**ती भक्तहरू माथि कृपा गर्नको लागि नै उनीहरूको स्वरूप (हुनुपन) मा रहने म उनीहरूको अज्ञानजन्य अन्धकारलाई देदीप्यमान ज्ञानरूप दीयोको द्वारा नष्ट गरिदिन्छु॥११॥**

किञ्च–तेषामिति। तेषामेव प्रीतिपूर्वकं भजतामेवानु–कम्पार्थमनुग्रहार्थम् आत्मभावस्थो बुद्धिवृत्तौ स्थितः सन्नज्ञानजं प्राचीनकर्मरूपाज्ञनजं तमो धर्मभूतज्ञानावरणं भास्वता प्रकाशमानेन मद्विषयकज्ञानाख्येन दीपेन नाशयामि॥

ती प्रीतिपूर्वक भजन गर्नेहरूमा दया गर्नका लागि उनहरूको बुद्धि वृत्तिमा स्थिर भएर प्राचीन कर्मरूप अज्ञानबाट उत्पन्न अन्धकारलाई, जसले जीवको धर्मभूत ज्ञानमा पर्दा लगाई दिएको छ, आफ्नो बारेमा ज्ञान–दानरूप चम्किरहेको दियोले त्यसको नाश गरिदिन्छु॥११॥

–★–★–★–

## अर्जुन उवाच

**परं ब्रह्म परं धाम पवित्रं परमं भजम्।**
**पुरुषं शाश्वतं दिव्यमादिदेवमजं विभुम्॥**

**परम ब्रह्म, परम धाम र महान् परम पवित्र हजुर नै हुनुहुन्छ। हजुर शाश्वत, दिव्य पुरुष, आदिदेव, अजन्मा र सर्वव्यापक यस्तो हजुर हुनुहुन्छ॥१२॥**

एवं भगवतो निरतिशयैश्वर्यं संक्षेपतो विभूतिं च श्रुत्वा प्रवृद्धश्रद्धया विस्तरेण ज्ञातुकामस्त्वदुक्तं सर्वं मयाऽव–धारितमिति प्रत्याययितुं भगवन्तमर्जुन उवाच–परं ब्रह्मेति। परं धाम परमं पवित्रमिति "तद्ब्रह्म परमं धाम, तद्ध्येयं मोक्षकाङ्क्षिणा। श्रुतिवाक्योदितं सूक्ष्मं, तद्विष्णोः परमं पदम्। पवित्राणां पवित्रं यः। पवित्राणां हि गोविन्दः पवित्रं परमुच्यते। पुण्यानामपि पेुण्योऽसौ मङ्गलानां च मङ्गलमि" त्यादिशास्त्रे य उच्यते स एव भवान्। यतः शाश्वतं सर्वदैकरूपं पुरुषं दिवि परमे व्योम्नि भवं विद्यमानं दिव्यम्। आदिश्चासौ देवश्च स्वयं प्रकाशस्तं देवानामादिः कारणमिति वा। तथाऽजं जन्मरहितं विभुं व्यापकं त्वामाहु–रित्युत्तरेण सम्बन्धः॥

यस प्रकार भगवान्को निरतिशय (सर्वश्रेष्ठ) ऐश्वर्य र विभूतिलाई संक्षेपले सुनेर पनि श्रद्धा बढ्नाले विस्तारले जान्नको लागि ''हजुरले भनेको मैले बुझें'' भगवान्लाई यस्तो विश्वास गराउनको लागि अर्जुनले भने। हजुर परम ब्रह्म, परम धाम, परम धाम, परम पवित्र हुनुहुन्छ। शास्त्रहरूमा भनिएको छ ''तद्ब्रह्म....मंगलम्'' अर्थात् त्यो परब्रह्म हो, परमधाम हो, मोक्ष चाहनेहरूका त्यो ध्येय हो। श्रुति वाक्यहरू द्वारा प्रतिपादित सूक्ष्म त्यो विष्णुको परम पद हो। पवित्रहरूमा पनि पवित्र परम पवित्र गोविन्द हुन्। पुण्यहरूका पुण्य र मंगलहरूका मंगल हुन्। शास्त्रहरूमा यो सबै हजुरको लागि नै भनिएको छ। किनकी हजुर सदा एकरूप, पुरुष, वैकुण्ठ मा विद्यमान, स्वयं प्रकाश, देवहरूका आदि कारण, अजन्मा र व्यापक हुनुहुन्छ॥१२॥

–★–★–★–

**आहुस्त्वामृषयः सर्वे देवर्षिर्नारदस्तथा।**
**असितो देवलो व्यासः स्वयं चैव ब्रवीषि मे॥**

**सबै ऋषि, देवर्षि नारद, असित, देवल तथा व्यास भन्नुहुन्छ र स्वयम् हजुर पनि मेरो प्रति आफुलाई यस्तै भन्नुहुन्छ॥१३॥**

एवम्भूतं त्वामृषयः सूक्ष्मार्थदर्शिनः सर्वे भृग्वादय आहुस्तथा देवर्षिर्नारदः, असितो देवलश्च, व्यासः कृष्णद्वैपायनः, स्वयं त्वमेव च साक्षान्मे मह्यं ब्रवीषि। तथोक्तं भीष्मपर्वणि ब्रह्मस्तवे "शृणु चेदं महाराज! ब्रह्मप्रोक्तं स्तवं मम। ब्रह्मर्षीभिश्च देवैश्च यः पुरा कथतो भुवि। साध्यानामपि देवानामपि सर्वेश्वरः प्रभुः। लोकभावनभावज्ञ इति त्वां नारदोऽब्रवीत्। भूतं भव्यं भविष्यं च मार्कण्डेयोऽभ्युवाच ह। यज्ञं त्वां चैव यज्ञानां, तपश्च तपसामपि। देवानामपि देवं च, त्वामाह भगवान् भृगुः। पुराणं चैव परमं, विष्णो रूपं तवेति वै। वासुदेवो वसूनां त्वं, शक्रं स्थापयिता तथा। देव! देवोऽसि देवानामिति द्वैपायनोऽब्रवीत्। एवं प्रजापतेः सर्गे दक्षमाहुः प्रजापतिं। स्त्रष्टारं सर्वदेवानामङ्गिरास्त्वां तथाऽब्रवीत्। अव्यक्तं ते शरीरस्थं, व्यक्तं ते मनसि स्थितं। देवानां सम्भवश्चेति,देवलस्त्वसितोऽब्रवीत्। शिरसा ते दिवं व्याप्तं, बाहुभ्यां पृथिवी तथा। जठरं ते त्रयो लोकाः, पुरुषोऽसि सनातनः। एवं त्वामभिजानन्ति, तपसा भाविता नराः। आत्मदर्शनतृप्तानामृषीणां चापि सत्तम!। राजर्षीणामुदाराणां, चाहवेष्वनिवर्त्तिनां। सर्वधर्मप्रधानानां त्वं गतिर्मधुसूदन! इति नित्यं योगविद्भिर्भगवान् पुरुषोत्तमः। सनत्कुमारप्रमुखैः स्तूयतेऽभ्यर्च्य हरिरि"ति। तत्रैव ब्रह्मा देवर्षिसंवादे "ततो देवर्षिगन्धर्वा, विस्मयं परमं गताः। कौतुहलपराः सर्वे पितामहमथाऽब्रुवन। कोन्वयं भो भगवता, प्रणम्य विनयाद्विभो! वाग्भिः स्तुतो वरिष्ठाभिः श्रोतुमिच्छाम तं वयम्। एवमुक्तस्तु भगवान्प्रत्युवाच पितामहः। देवब्रह्मर्षिगन्धर्वान्सर्वान्मधुरया गिरा। यत्तत् परं भविष्यं च भविता यच्च यत्परम्। भूतात्मा यः प्रभुश्चैव, ब्रह्म यच्च परं पदम्। तेनास्मि कृतसम्वादः, प्रसन्नेन नरर्षभाः। जगतोऽनुग्रहार्थाय याचितो मे जगत्पतिः। मानुषं लोकमातिष्ठ वासुदेव इति श्रुतः। असुराणां वधार्थाय सम्भवस्व महीतले। संग्रामे निहिता ये ते दैत्य दानवराक्षसाः। त इमे नृषु सम्भूता घोररूपा महाबलाः। तेषा वधार्थं भगवान्नरेण सहितो वशी। मानुषीं योनिमास्थाय चरिष्यति महीतले। नरनारायणौ तौ तु

उपर्युक्त प्रकारले हजुरको सूक्ष्मदर्शी भृगु आदि ऋषिहरूले वर्णन गरेका छन्। र देवर्षि नारद, असित, देवल, व्यास र स्वयं हजुरले पनि म सँग भन्नुभएको छ। भीष्म पर्वको ब्रह्मस्तवमा भनिएको छ, "शृणु.......स्तूयतेऽभ्यर्चते हरिः॥" अर्थात् हे महाराज युधिष्ठिर! ब्रह्माले जो मेरो स्तुति गरेका थिए र जसलाई ब्रह्मर्षिहरूलाई तथा देउताहरूले पृथ्वीमा पूर्व समयमा भनेका थिए, त्यसलाई सुन। नारदले हजुरलाई साध्यहरू र देउताहरूका पनि सर्वेश्वर, प्रभु र ब्रह्माको पनि भावलाई जान्ने भनेका छन्। मार्कण्डेयले हजुरलाई भूत भविष्य र भव्य भनेका छन्। भृगुले हजुरलाई यज्ञहरूका पनि यज्ञ, तपहरूका तप, देउताहरूका देउता र परम प्राचीन विष्णुको रूप भनेका छन्। द्वैपायन व्यासले हजुरलाई वसुहरूमा वासुदेव, इन्द्रको स्थापक र देउताहरूका देउता भनेका छन्। देवल र असितले भनेका छन् कि अव्यक्त हजुरको शरीरमा र व्यक्त हजुरको मनमा रहन्छ। र हजुर देउताहरूको कारण होईबक्सन्छ। तपबाट पवित्र मनुष्य हजुरलाई शिर द्वारा आकाशमा र भुजाहरूका द्वारा पृथ्वीमा व्याप्त भन्दछन् र तीनै लोकहरू हजुरका पेट हुन्। हजुर सनातन पुरुष होईबक्सन्छ यस्तो मान्दछन्। हे सर्वश्रेष्ठ! हजुर आत्मदर्शनले तृप्त ऋषिहरूका र संग्रामबाट कहिल्यै विमुख नहुने उदार एवं सर्व धर्म प्रधान राजर्षिहरूका गति हुनुहुन्छ। यस प्रकार सनत्कुमार आदि योगिहरू द्वारा भगवान् नित्य स्तुति र पूजा गरिनुहुन्छ। फेरि भीष्म पर्वमा नै देवर्षि र ब्रह्माको संवादमा भनेको छ- "ततो दवर्षि" इत्यादि, त्यसको भाव यो हो-

यस पछि देवर्षि र गन्धर्व परम विस्मित भए। र कौतुहलतावश पितामह ब्रह्मा सँग भने कि हे भगवन् यीनि को हुन् जसको हजुरले विनय पूर्वक श्रेष्ठ वचनद्वारा स्तुति गर्नुभएको छ। हामीहरू यो जान्न चाहन्छौं। यस प्रकार सोधेपछि ब्रह्माजीले देवर्षि, ब्रह्मर्षि गन्धर्वहरूलाई मधुर वचनमा भनेकि जुन परम भविष्य, हुनेवाला, भूतात्मा, प्रभु, ब्रह्म, परमपद हुन्, उनैसँग मैले कुरा गरेको हो, संसारको भलाईको लागि मैले उहाँ सँग प्रार्थना गरेकि हजुर वासुदेव भएर असुरहरूको संहारका लागि संसारमा अवतीर्ण हुनुहोस। जो दैत्य, दानव र राक्षस लड़ाईमा मारिए ती बलवान र घोर भएर मनुष्य रूपमा उत्पन्न भएका छन्। उनीहरूलाई मार्नका लागि भगवान् मनुष्यरूपमा अवतार लिएर नर का साथमा पृथ्वीतल मा विचरण गर्नुहुनेछ। यी दुबै नर-नारायण ऋषिहरूमा श्रेष्ठ,

पुराणावृषी सत्तमौ। अजेयौ हि रणे यत्तौ समेतावमरैरपि। सहितौ मानुषे लोके सम्भूतावमितद्युती। मूढास्त्वेतौ न जानन्ति नरनारायणावृषी। यस्माहमात्मजः पुत्रः सर्वस्य जगतः पतिः। वासुदेवोऽर्चनीयो वः सर्वलोकमहेश्वरः। न वो मनुष्योऽयमिति कदाचित्सुरसत्तमाः। अवज्ञेयो महावीर्यः शङ्खचक्रगदाधरः। एतत्परमकं ब्रह्म एतत्परमकं यशः। एतदक्षरमव्यक्तमेतद्वै शाश्वतं महत्। यत्तत्पुरुषसंज्ञं वै गीयते न च ज्ञायते। एतत्परमकं तेजः एतत्परमकं सुखम्। एतत्परमकं सत्यं कीर्तितं विश्व–कर्मणा। तस्मात्सर्वैः सुरैः सेन्द्रैर्लोकैश्चामितविक्रमो। नावज्ञेयो वासुदेवो मनुष्योऽयमिति प्रभुः। यश्च मानुषमा–त्रोऽयमिति ब्रूयात्स मन्दधीः। हृषीकेशमवज्ञानात्तमाहुः पुरषाधममि"ति। हरिवंशे शिवोऽपि देवर्षीन्पति–"एवं जानीत हे विप्रा! ये भक्ता द्रष्टुमागताः। एतदेव परं वस्तु नैतस्मात्परमस्ति वः। एतदेव विजानीध्वमेतद्वः परमं तपः। एतदेव सदा विप्रा ध्येयं सततमानसः। एतद्वः परमं श्रेय एतद्वः परमं धनम्। एतद्वो जन्मनः कृत्यमेतद्वस्तपसः फलम्। एष वः पुण्यनिलय एष धर्मः सनातनः। एष वो मोक्षदाता च एष मार्ग उदाहृतः। एष पुण्यप्रदः साक्षादेतद्वः कर्मणां फलम्। एतदेव प्रशंसन्ति विद्वांसो ब्रह्मवादिनः। एष त्रयीगतिर्विप्राः, प्रार्थ्या ब्रह्मविदां सदा। एतदेव प्रशं–सन्ति साङ्ख्ययोगं समाश्रिताः। एष ब्रह्मविदां मार्गः कथितो वेदवादिभिः। एवमेव विजानीत नात्रकार्या विचा–रणा। हरिरेकः सदा ध्येयो भवद्भिः सत्त्वमास्थितैः। नान्या गतिर्हि देवोऽस्ति विष्णोर्नारायणात्पर"इति। तथा "अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्त्तते। मत्तः परतरं नान्यत्, अहमादिर्हि देवानां महर्षीणां च सर्वशः" इत्यादिना च स्वयमेव मह्यं ब्रवीषि ॥१३॥

रणमा अजेय, अमित प्रकाश युक्त देउताहरूका साथमा एकै पल्ट मनुष्यलोकमा अवतार लिनुभएको छ। जो यी नरनारायण ऋषिहरूलाई जान्दैनन् ती मूढ़ हुन्। जसको पुत्र वासुदेव संसारको मालिक, पूजनीय र सबै लोकहरूका महेश्वर हुँ। हे श्रेष्ठ देउताहरू हो! शंख, चक्र गदालाई धारण गर्ने महापराक्रमी वासुदेवलाई 'यो मनुष्य हो' यस्तो अवज्ञा गर्नु हुँदैन। यिनी त परमब्रह्म हुन्, परम यश हुन्, यिनै अक्षर, अव्यक्त, महान, शाश्वत परम पुरुष हुन्। विश्वकर्माले यिनलाई परम तेज, परम सुख, परम सत्य भनेका छन्। यसैले इन्द्र सहित सबै देउताहरूले पराक्रमी वासुदेवलाई "यो मनुष्य हो" यस्तो अवज्ञा गर्नुहुँदैन। जो ऋषिकेशलाई मनुष्य संझिन्छ त्यो मूर्ख हो। त्यसलाई नराधम भनेर चिन्नु पर्दछ। हरिवंश पुराणमा शिवजीले पनि देवर्षिहरू संग भन्नुभएको छ– "एवं जानीत" इत्यादि, को भाव यो हो कि–हे ब्राह्मणहरू हो! संयत चित्तले यिनैको ध्यान गर्नुपर्दछ। यिनै परमश्रेय हुन्, यिनै परमधन हुन्। यिनै हामी सबैका जन्मको कारण हुन्। यिनै तपस्याको परमफल हुन, यिनै पुण्यको घर हुन् र यिनै सनातनधर्म हुन्। यिनै मोक्षदाता हुन्, यिनै मार्ग हुन्, यिनै साक्षात् पुण्यदाता हुन्। र यिनै हामी सबैका कर्मको फल हुन्। ब्रह्मवादी विद्वान् यिनैको प्रशंसा गर्दछन्, यिनै त्रयी विद्याहरूका गति हुन्। ब्रह्मलाई जान्नेहरूले सधैं यिनैको प्रार्थना गर्नुपर्दछ। यिनैको सांख्ययोग जान्नेहरू प्रशंसा गर्दछन्। वेदवादीहरूले यिनैलाई ब्रह्मलाई जान्नेहरूको मार्ग भनेका छन्। यो कुरा तपाईहरू संझिनुहोस। यसमा विचार गर्नुपर्ने केहि काम छैन। हजुरहरूले एक हरिको नै स्थिर चित्तले ध्यान गर्नु पर्दछ किनकी नारायण भन्दा ठूलो कुनै देउता छैनन् र उनलाई छोडेर अर्को कुनै गति छैन। र फेरि भगवान्ले पनि आफ्नो विषयमा मलाई भन्नुभएको छ–"अहं सर्वस्य प्रभवो इत्यादि, अर्थात् म सबैको उत्पत्ति स्थान हूँ। मबाट नै सबैथोक हुन्छ। म भन्दा ठूलो अर्को कोहि छैन। म देउताहरू र महर्षिहरूको सर्वतोभावेन आदि कारण हूँ इत्यादि ॥१३॥

–★–★–★–

**सर्वमेतदृतं मन्ये यन्मां वदसि केशव।**
**न हि ते भगवन्व्यक्तिं विदुर्देवा न दानवाः॥**

हे केशव! मलाई हजुरले जे पनि भनिरहनु भएको छ यो सबै म सत्य मान्दछु। हे भगवन्! हजुर प्रकट हुनुलाई न त देउताहरू जान्दछन न त दानव नै जान्दछन्॥१४॥

एतत्तथ्यमेवेत्याह–सर्वमिति। ऋषिभिर्यदुक्तं हे केशव! त्वं च प्रवदसि, एतत्सर्वमृतं सत्यमेवाहं मन्ये। न मे तवदैश्वर्यादौ काऽप्यसम्भावनेत्यर्थः। अतो यदुक्तं "न मे विदुः सुरगणाः प्रभवं न महर्षयः" इत्यादि तत्तथैव। हे भगवन्! समग्रज्ञानशक्तिबलैश्वर्यवीर्यतेजसां निधे! ते तव व्यक्ति प्रकटनप्रकारं परिमितज्ञाना देवा न विदुः। दानवाश्च न विदुः॥

यो सबै सत्य नै हो, यसैलाई भनिन्छ। हे कृष्ण! ऋषिहरूले जो भनेका छन् र हजुर जो भनिरहनु भएको छ यि सबैलाई सत्य मान्दछु। मलाई हजुरको ऐश्वर्यमा अलिकति पनि असम्भावना छ जस्तो लाग्दैन। यसैले हजुरले भन्नुभएको "न मे विदुः सुरगणाः प्रभवं न महर्षयः"। अर्थात् देउताहरू महर्षि मेरो उत्पत्ति जान्दैन सो कुरा ठिकै हो। हे भगवन्! अर्थात् समग्र ज्ञान, शक्ति, बल, ऐश्वर्य, तेज, वीर्य, यी छः गुणहरूका स्वामी! हजुरको व्यक्तिलाई अर्थात् प्रकट हुने तरीकालाई परिमित ज्ञान भएका देउताहरू जान्दैनन् र न त दानव नै जान्दछन्॥१४॥

–★–★–★–

**स्वयमेवात्मनात्मानं वेत्थ त्वं पुरुषोत्तम।**
**भूतभावन भूतेश देवदेव जगत्पते॥**

**हे भूतभावन! हे भूतेश! हे देवदेव! जे जगत्पते! हे पुरुषोत्तम! हजुर स्वयं नै आफुले आफैंलाई जान्नुहुन्छ॥१५॥**

कस्तर्हि वेदेत्यपेक्षायामाह–स्वयमेवेति। हे पुरुषोत्तम स्वयमेव त्वमात्मानमात्मनाऽऽत्माऽसाधारणेन ज्ञानेन वेत्थ। पुरुषोत्तमत्वं विवृणोति–चतुर्भिर्विशेषणैः। हे भूतभावन! भूतानि सर्वाणि भावयत्युत्पादयतीति। तथा हे भूतेश! सर्वेषां भूतानां नियन्तः! हे देवदेव! देवानामादित्यादीनामपि प्रकाशक!। हे जगत्पते सर्वस्य जगतः पालक। एवम्भूतं त्वां प्रार्थयामीत्यभिप्रायः॥

यदि भन्नुहोस कसले जान्दछ त भन्दछन् कि हे पुरुषश्रेष्ठ! हजुर आफुले आफैंलाई आफ्नो असाधारण ज्ञानले जान्नुहुन्छ। अब चार विशेषणहरूले पुरुषोत्तमको वर्णन गर्दछन्। हजुर नै भूत भावन होईबक्सन्छ, अर्थात् हजुर नै सबै जीवहरूका उत्पादक होईसिन्छ। हजुर भूतेश अर्थात् सबै जीवहरूका नियामक हजुर नै होईसिन्छ। हजुर नै देव देव होईसिन्छ अर्थात् सूर्यादि देवहरूका प्रकाशक हुनुहुन्छ। र हजुर जगत्पति होईसिन्छ अर्थात् संसारको पालक होईसिन्छ यस्ता हजुरको म प्रार्थना गर्दछु॥१५॥

–★–★–★–

**वक्तुमर्हस्यशेषेण दिव्या ह्यात्मविभूतयः।**
**याभिर्विभूतिभिर्लोकानिमांस्त्वं व्याप्य तिष्ठसि॥**

**यसैले जुन विभूतिहरूले हजुर यी सम्पूर्ण लोकहरूलाई व्याप्त गरेर स्थित हुनुहुन्छ ती सबै आफ्ना दिव्य विभूतिहरूका सम्पूर्णताले वर्णन गर्नमा केवल हजुर नै समर्थ हुनुहुन्छ॥१६॥**

प्रार्थनां व्यनक्ति– वक्तुमिति। दिव्याः सर्वोत्कृष्टा आत्मनस्तवासाधारणा या विभूतयस्तास्त्वमेवाशेषेण वक्तुमर्हसि। ताः काः? याभिर्विभूतिभिर्युक्तस्त्वमिमाँल्लोकान्व्याप्य तिष्ठसि॥१६॥

हे भगवन्! हजुर नै आफ्नो सर्वोत्कृष्ट र असाधारण विभूतिहरू पूर्णरूपमा वर्णन गर्नुहोस, जसले युक्त भएर हजुर यी लोकहरूमा व्याप्त भईरहनु भएको छ॥१६॥

–★–★–★–

**कथं विद्यामहं योगिंस्त्वां सदा परिचिन्तयन्।**
**केषु केषु च भावेषु चिन्त्योऽसि सदा भगवन्मया॥**

**हे योगिन्! निरन्तर साङ्गोपाङ्ग चिन्तन गर्दै म हजुरलाई कसरी जान्नु? र हे भगवन्! कुन–कुन भावहरूमा हजुरलाई म**

**चिन्तन गर्न सक्दछु अर्थात् कुन-कुन भावहरूमा म हजुरको चिन्तन गरौं ॥१७॥**

किमिह प्रयोजनं विभूतिकथनस्येत्यपेक्षायामाह–कथमिति। योगोऽचिन्त्यगुणशक्त्यैश्वर्य्यं तदस्यास्तीति योगी तत्सम्बुद्धौ हे योगिन्! निरतिशयैश्वर्यगुणशालिन्! अहमत्यल्पज्ञानशक्तिः भक्त्या त्वां सदा परिचिन्तयन् चिन्तयितु प्रवृत्तः चिन्तनीयं त्वामचिन्त्यैश्वर्यज्ञानशक्तिकं कथं विद्याम्? साकल्येन त्वां कोऽपि चिन्तयितुं न शक्नोति। अतः केषु केषु च भावेषु च पदार्थेषु मया चिन्त्योऽसि हे भगवन् ॥१७॥

यदि सोध्ने हो भने विभूतिहरूलाई भन्नुको के प्रयोजन छ? त यस प्रश्नको अपेक्षामा भन्दछन्- हे योगिन्, अर्थात् गुण, शक्ति, ऐश्वर्यवाला! अति तुच्छ ज्ञानभएको म भक्तिपूर्वक हजुरको चिन्तन गर्दै अचिन्त्य, ऐश्वर्य, ज्ञान, शक्तिवाला हजुरलाई कसरी जान्न सक्दछु, किनकी कोही पनि हजुरको पूर्णरूपले चिन्तन गर्न सक्दैन। यसैले हे भगवन्! कुन-कुन भाव र पदार्थमा म हजुरको चिन्तन गरौं ॥१७॥

–★–★–★–

## विस्तरेणात्मनो योगं विभूतिं च जनार्दन।
## भूयः कथय तृप्तिर्हि शृण्वतो नास्ति मेऽमृतम् ॥

**हे जनार्दन! हजुर आफ्नो योगसामर्थ्यलाई र विभूतिहरूलाई विस्तारले फेरि भन्नुहोस किनकी हजुरको अमृतमय वचन सुनेकोसुन्यै गर्दा पनि मलाई तृप्ति भएको छैन ॥१८॥**

"अहं सर्वस्य प्रभवो मत्तः सर्वं" "मन्त्रोऽहमप्सु कौन्तेये"–त्यादिना सप्तमे "मया ततमिदं सर्व मन्त्रोऽहमहमेवाज्यमि" त्यादिना नवमे च मयाऽऽत्मयोगो विभूतिश्चोक्त एव, किं पुनः पृच्छसीत्यत आह–विस्तरेणेति। यद्यपि पूर्वं त्वयोक्तं तथाऽपि संक्षेपेणैव। इदानीमात्मनो योगं विभूतिं च विस्तरेण भूयः पुनः कथय। सर्वैः स्वं स्वं श्रेयस्तमर्द्यसे हे जनार्द्दन! हि यस्मान्माहात्म्यवाचकं त्वद्वचनामृतं शृण्वतो मे तृप्तिरमृतं पिवत इवालम्बुद्धिर्नास्ति ॥१८॥

सातौं अध्यायमा "अहं सर्वस्य.....प्रवर्त्तते" "रसोऽहमप्सु कौन्तेय" आदिले र नवौं अध्यायमा "मयाततमिदं सर्व" "मन्त्रोऽहममेवाज्यम्" आदिद्वारा मैले आफ्ना विभूतिहरू भनिसकें भने फेरि किन सोध्दछौ? यसमा भन्दछन्। पहिले हजुरले आफ्नो विभूतिहरू र योगलाई संक्षेपमा भन्नुभयो अब त्यसलाई विस्तारपूर्वक भन्नुहोस। किनकी हे जनार्दन! जो पनि हजुर सँग आफ्नो कल्याणको लागि याचना गर्दछ। हजुरको माहात्म्य वाचक अमृत वचनहरू सुनेर मलाई तृप्ति हुँदैन जसरी अमृत पिउँदा मनुष्यहरूलाई अलं बुद्धि वा सन्तोष हुँदैन ॥१८॥

–★–★–★–

## श्रीभगवानुवाच
## हन्त ते कथयिष्यामिम दिव्या ह्यात्माविभूतयः।
## प्राधान्यतः कुरुश्रेष्ठ नास्त्यन्तो विस्तरस्य मे ॥

**अँ, त्यसो भए ठिकै छ। म आफ्ना दिव्य विभूतिहरूलाई तिम्रो लागि प्रधानता (संक्षेप) मा भन्नेछु किनकी हे कुरुश्रेष्ठ! मेरो विभूतिहरूको विस्तारको अन्त्य छैन ॥१९॥**

एवं प्रार्थितः श्रीभगवानुवाच–हन्तेति सम्बोधनेनाकम्पां द्योतयति। हे कुलश्रेष्ठ! दिव्याः सर्वोत्कृष्टा या आत्मनो

यस्तो प्रार्थना गरिएपछि भगवान् भन्नुहुन्छ कि, हे अर्जुन! म मुख्य-मुख्य आफ्नो दिव्य सर्वश्रेष्ठ विभूतिहरूलाई भन्दछु किनकी

मम विभूतयस्ताः प्राधान्यतः। ते तुभ्यं कथयिस्यामि। हि यतो मम विभूतीनां विस्तरस्यान्तो नास्ति॥१९॥

मेरो विभूतिहरूका विस्तारको अन्त्य छैन। "हन्त" भनेर अर्जुन माथिको कृपालाई देखाउनु हुन्छ॥१९॥

-★-★-★-

## अहमात्मा गुडाकेश सर्वभूताशयस्थितः।
## अहमादिश्च मध्यं च भूतानामन्त एव च॥

**हे निद्रालाई जितेका अर्जुन! सम्पूर्ण प्राणिहरूको आदि, मध्य तथा अन्त्यमा म नै छु र सम्पूर्ण प्राणिहरूका अन्तःकरणमा स्थित आत्मा पनि म नै हुँ॥२०॥**

विभूतिं वक्तुं तावद्विभूतिमदात्मस्वरूपं निर्दिशति- अहमिति। हे गुडाकेश! गुडाका निद्रा तस्या जयेनेश जितनिद्रेत्यर्थः। सर्वेषां भूतानां प्राणिनामाशये हृदयेऽन्तर्या- मिरूपेण स्थितः आत्माऽहं भूतानामादिरुत्पत्तिश्च मध्यं स्थितिश्च अन्तश्च नाशः, सर्वभूतानामुत्पत्तिस्थितिनाशहेतु- रहमेवेत्यर्थः॥२०॥

विभूतिहरूको वर्णन गर्नुभन्दा पहिले विभूतिमान् आत्मरूप(आफ्नो रूप) को निर्देश गर्नुहुन्छ। हे गुडाकेश! अर्थात् निद्रालाई जित्ने अर्जुन! सबै जीवहरूका हृदयमा अन्तर्यामीरूपले बस्ने आत्मा म नै हो। तथा सबै जीवहरूका आदि अर्थात् उत्पत्ति स्थान, मध्य अर्थात् स्थिति, अन्त अर्थात् नाश पनि म नै हो। भाव यो हो कि जीवहरूका सृष्टि, स्थिति र नाशको कारण म नै हो॥२०॥

-★-★-★-

## आदित्यानामहं विष्णुर्ज्योतिषां रविरंशुमान्।
## मरीचिर्मरुतामस्मि नक्षत्राणामहं शशी॥

**म अदितिका पुत्रहरूमा विष्णु(वामन) र प्रकाशमान वस्तुहरूमा अंशुमाली(किरणवाला) सूर्य हुँ। म वायुहरूको तेज र नक्षत्रहरूका अधिपति चन्द्रमा हुँ॥२१॥**

इदानीं विभूतीर्दर्शयति-आदित्यानामित्यारभ्य यावदध्या- यसमाप्तिः। आदित्यानां द्वादशानां मध्ये विष्णुना- माऽऽदित्योऽहं, ज्योतिषां जगति प्रकाशानां मध्ये अंशुमान जगद्व्यापिरश्म्याश्रयो रविः सूर्योऽहं, मरुतां वायुनां मध्ये मरीचिनामहमस्मि। नक्षत्राणामधिपः शशी चन्द्रमा अहं, मद्विभूतिः॥२१॥

यस श्लोक देखि आरम्भ गरेर अध्यायको समाप्ति सम्म आफ्नो विभूतिहरूको वर्णन गर्नुहुन्छ। बाह्रै सूर्यहरूमा विष्णु नामक सूर्य हूँ। ज्योतिर्जगत् मा प्रकाशमान पदार्थहरूका बीचमा अंशुमान् अर्थात् जगत् भरी किरण फैलाउने सूर्य म नै हूँ। वायुहरूमा मरीचि नामक र नक्षत्रहरूमा उनीहरूकै स्वामी चन्द्रमा हूँ॥२१॥

-★-★-★-

## वेदानां सामवेदोऽस्मि देवानामस्मि वासवः।
## इन्द्रियाणां मनश्चास्मि भूतानामस्मि चेतना॥

**वेदहरूमा सामवेद हुँ। देउताहरूमा इन्द्र हुँ। इन्द्रियहरूमा मन हुँ र प्राणिहरूको चेतना हुँ॥२२॥**

वेदानामिति। चतुर्णा वेदानां मध्ये गानमाधुर्येणोत्कृष्टः सामवेदोऽहमस्मि। देवानां वासव इन्द्र उत्कृष्ट सोऽहमस्मि। इन्द्रियाणामेकादशानां मध्ये प्रधानं मनोऽहमस्मि। भूतानां चेतनावतां या चेतना साऽहमेव॥२२॥

चारै वेदहरूमा हूँ। गानको मधुरता भएको सामवेद हूँ। देवहरूमा जुन श्रेष्ठ इन्द्र छन् सो पनि म नै हूँ। एकादश इन्द्रियहरूमा मन हूँ। र जीवहरूमा जो चेतनाशक्ति छ त्यो पनि म नै हूँ॥२२॥

-★-★-★

**रुद्राणां शङ्करश्चास्मि वित्तेशो यक्षरक्षसाम्।**
**वसूनां पावकश्चास्मि मेरुः शिखरिणामहम्॥**

**रुद्रहरूमा शंकर र यक्ष-राक्षसहरूमा कुबेर हुँ। वसुहरूमा पवित्र गर्नेवाला अग्नि र शिखरवाला पर्वतहरूमा सुमेरु म नै हुँ॥२३॥**

रुद्राणामिति। एकादशारुद्राणां मध्ये शङ्करोऽहमस्मि। यक्षरक्षसां पतिर्यो वित्तेशः कुबेरः सोऽहं, वसूनामष्टानां मध्ये पावकाऽग्निश्चास्मि। शिखरिणां शिखरवतामत्युच्छ्रितो मेरुरहम्॥२३॥

**एघारै रुद्रहरूमा शङ्कर हूँ। यक्ष तथा राक्षसहरूमा धनको स्वामी कुबेर हुँ। आठ वसुहरूमा अग्नि हुँ। पर्वतहरूमा सबैभन्दा अग्लो मेरु पर्वत म नै हुँ॥२३॥**

-★-★-★-

**पुरोधसां च मुख्यं मां विद्धि पार्थ बृहस्पतिम्।**
**सेनानीनामहं स्कन्दः सरसामस्मि सागरः॥**

**हे पार्थ! पुरोहितहरूमा मुख्य बृहस्पतिलाई मेरो स्वरूप संझिनु, सेनापतिहरूमा कार्तिकेय र जलाशयहरूमा समुद्र म नै हुँ॥२४॥**

पुरोधसामिति। पुरोधसां पुरोहितानां मध्ये य उत्कृष्टो वृहस्पतिस्तं मां विद्धिं सेनानीनां सेनापतिनां मध्ये स्कन्दोऽहमस्मि। सरसां स्थिरजलाशयानां मध्ये सागरोऽहमस्मि॥२४॥

**हे अर्जुन! पुरोहितहरूमा श्रेष्ठ जो वृहस्पति छन् ती पनि म नै हुँ। सेनापतिहरूमा स्कन्द, र स्थिर जलाशयहरूमा समुद्र हुँ॥२४॥**

-★-★-★-

**महर्षीणां भृगुरहं गिरामस्म्येकमक्षरम्।**
**यज्ञानां जपयज्ञोऽस्मि स्थावराणामं हिमालयः॥**

**महर्षिहरूमा भृगु र शब्दहरूमा एक अक्षर अर्थात् प्रणव(ॐकार) म नै हुँ। सम्पूर्ण यज्ञहरूमा जपयज्ञ र स्थिर रहनेहरूमा हिमालय पनि म नै हुँ॥२५॥**

महर्षीणामिति। उत्कृष्टर्षीणां मध्येऽतितेजस्वी भृगुरहं, गिरां वाचामेकप्रणवाख्यमक्षरमहमस्मि। यज्ञानामुत्कृष्टो जपयज्ञोऽस्मि। स्थावराणां स्थितिमतां हिमालयोऽहमस्मि॥

**उत्कृष्ट महर्षिहरूमा अति तेजस्वी भृगु हुँ। वचनहरूमा एक प्रणव "ॐ" नामको अक्षर हुँ। यज्ञहरूमा उत्कृष्ट जपयज्ञ हुँ। स्थावरहरूमा अर्थात् अचलहरूमा हिमालय म नै हुँ॥२५॥**

-★-★-★-

**अश्वत्थः सर्ववृक्षाणां देवर्षीणां च नारदः।**
**गन्धर्वाणां चित्ररथः सिद्धानां कपिलो मुनिः॥**

**सम्पूर्ण वृक्षहरूमा पीपल, देवर्षिहरूमा नारद, गन्धर्वहरूमा चित्ररथ र सिद्धहरूमा कपिल मुनि म नै हुँ॥२६॥**

अश्वत्थ इति। सर्ववृक्षाणां मध्ये पूज्योऽश्वत्थोऽहम्। देवर्षीणां मध्ये परमवैष्णवो नारदोऽहमस्मि। गन्धर्वाणां देवगायकानां मध्ये चित्ररथोऽहं, सिद्धानांजन्मनैवाधिगतज्ञानवैराग्यैश्वर्यादि सर्वपुरुषार्थानां मध्ये कपिलो मुनिरहम्॥

**सबै वृक्षहरूमा पूजनीय पीपलको वृक्ष म नै हुँ। देवर्षिहरूमा परम वैष्णव नारद, गन्धर्वहरू अर्थात मा देवगायकहरूमा चित्ररथ, र जन्म देखि नै ज्ञान, वैराग्य ऐश्वर्य आदि सबै पुरुषार्थ भएको सिद्धहरूमा कपिल मुनि म नै हुँ॥२६॥**



-★-★-★-

**उच्चैःश्रवसमश्वानां विद्धि मामृतोद्भवम्।**
**ऐरावतं गजेन्द्राणां नराणां च नराधिपम्॥**

**घोडाहरूमा अमृतको सहित समुद्रबाट प्रकट भएको उच्चैःश्रवा नामक घोडालाई र श्रेष्ठ हात्तीहरूमा ऐरावत नामक हात्तीलाई र मनुष्यहरूमा राजालाई मेरो विभूति मान्नु॥२७॥**

उच्चैःश्रवमिति। अश्वानां मध्ये उच्चैःश्रवसममृतमथ–नोद्भवमश्वं मां विद्धि। गजेन्द्राणां मध्ये ऐरावतममृतम–थनोद्भवं मां विद्धि। नराणां मध्ये नराधिपं राजानं मां विद्धि॥

घोडाहरूमा अमृत मथनको समयमा उत्पन्न भएको उच्चैःश्रवा र गजेन्द्रहरूमा ऐरावत तथा मनुष्यहरूमा मलाई राजा ठान्नु॥२७॥

–★–★–★–

**आयुधानामहं वज्रं धेनूनामस्मि कामधुक्।**
**प्रजनश्चास्मि कन्दर्पः सर्पाणामस्मि वासुकिः॥**

**आयुधहरूमा वज्र, धेनुहरूमा कामधेनु म नै हुँ। सन्तान उत्पत्तिको हेतु कामदेव र सर्पहरूमा वासुकि पनि म नै हुँ॥२८॥**

आयुधानामस्त्राणां मध्ये वज्रं दधीच्यस्थिभिर्निर्मितमस्त्र–महम्। धेनूनां हविर्दोग्धीणां च मध्ये कामान्दोग्धीति कामधुक् क्षीरसमुद्रमथनोद्भवा धेनुरहमस्मि। प्रजनः प्रजोत्पत्तिहेतुः कन्दर्पः कामोऽहमस्मि नतु केवल–भोगहेतुः। सर्पाणा–मेकशिरसां मध्ये तेषां राजा वासुकिरहमस्मि॥

अस्त्रहरूमा दधीचि मुनिको अस्थिले बनेको वज्र, दुध दिने गाईहरूमा क्षीरसागरको मथनबाट उत्पन्न कामधेनु हुँ। भोगार्थको कारण होईन, प्रजाको उत्पत्तिको कारण कामदेव पनि म नै हुँ। एक शिर भएको साँपहरूमा राजा वासुकि हुँ॥२८॥

–★–★–★–

**अनन्तश्चास्मि नागानां वरुणो यादसामहम्।**
**पितॄणामर्यमा चास्मि यमः संयमतामहम्॥**

**नागहरूमा अनन्त(शेषनाग) र जल–जन्तुहरूमा उनीहरूका अधिपति वरुण हुँ। पितृहरूमा अर्यमा र शासन गर्नेवालाहरूमा यमराज म नै हुँ॥२९॥**

नागास्तेभ्यो भिन्नजातीया अनेकशिरसस्तेषां मध्येऽनन्तः शेषो वैराग्यसत्त्वादिगुणविशिष्टोऽहमस्मि। यादसां जलजन्तूनामधिपो वरुणोऽहं, पितॄणां मध्येऽर्यमा नामाहमस्मि। संयमतां नियमनं कुर्वतां मध्ये धर्माधर्मयोः फल दानेनानुग्रह निग्रह कर्त्ता यमो वैवस्वतोऽहमस्मिद॥

धैरै शिरभएका साँपहरूमा वैराग्य, सत्वगुणविशिष्ट अनन्त नामक शेषनाग म नै हुँ। जल–जन्तुहरूमा उनीहरूका स्वामी वरुण हुँ। पितृहरूमा अर्यमा, नियमन गर्नेहरूमा धर्म तथा अधर्मको फल दिएर अनुग्रह र निग्रह गनेवाला वैवस्वत नामक यम हुँ॥२९॥

–★–★–★–

**प्रह्लादश्चास्मि दैत्यानां कालः कलयतामहम्।**
**मृगाणां च मृगेन्द्रोऽहं वैनतेयश्च पक्षिणाम्॥**

**दैत्यहरूमा प्रह्लाद र गणना गर्नेहरूमा काल म हुँ तथा पशुहरूमा सिंह र पक्षिहरूमा गरुड़ म नै हुँ॥३०॥**

दैत्यानां दितिसम्भवानां मध्ये प्रकर्षेणाल्हादयति सुखयति

दितिबाट उत्पन्न दैत्यहरूमा साधुहरूलाई सुख दिने प्रह्लाद हुँ,

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

साधूनिति प्रह्लादश्चास्मि। कलयतां गणनां कुर्वन्तां मध्ये कालः सर्वकार्यपरिणामहेतुः कलामुहूर्तादिमयो यः सोऽहं, मृगेन्द्रःसिंहो वैनतेयो गरुडः॥

गणना गर्नेहरूमा कला मूहूर्त्तादिले युक्त र सबै कार्यहरूका परिवर्त्तनको कारण जुन काल हो त्यो पनि म नै हुँ। चौपायाहरूमा म सिंह र पक्षिहरूमा गरुड हुँ॥३०॥

-★-★-★-

**पवनः पवतामस्मि रामः शस्त्रभृतामहम्।**
**झषाणं मकरश्चास्मि स्त्रोतसामस्मि जाह्नवी॥**

**पवित्र गर्नेहरूमा वायु र शस्त्रधारिहरूमा म राम हुँ। जल-जन्तुहरूमा गोही र नदिहरूमा गंगा म नै हुँ॥३१॥**

पवतां पावयितॄणां वेगवतां वा पवनो वायुरहं, शस्त्रधारिणां मध्ये रामो दाशरथिः परम वीरोऽहमेव साक्षान्नतु मे विभूति, स्वरूपभेदाभावात्। किन्तु शस्त्रभृच्छ्रेष्ठराघवकुले रामरूपो रावणहन्ता कोदण्डधार्यहमेव चिन्तनीय इति भावः। रामः परशुरामो वा। झषाणां मध्ये मकरो मत्स्य विशेषोऽहं, स्त्रोतसां जलप्रवाहरूपजलानां नदीनां मध्ये सर्वश्रेष्ठा जाह्नवी जन्हुकन्या गङ्गाऽहमस्मि॥

पवित्र गर्ने र बेगवालाहरूमा म पवन हुँ। शस्त्रधारीहरूमा दशरथको पुत्र परम वीर साक्षात् रूपले, विभूति रूपले होईन, राम म नै हुँ। श्रीराममा र म मा कुनै स्वरूप भेद छैन। अर्थात् शस्त्रधारीहरूमा श्रेष्ठ राघवकुलमा उत्पन्न रावणलाई मार्ने धनुर्धारी राम रूपले मेरो नै चिन्तन गर्नुपर्दछ। राम भन्नाले परशुराम रूपको पनि बोध हुन्छ। माछाहरूमा मकर नामक माछो हुँ। र प्रवाहशील नदिहरूमा सर्वश्रेष्ठ जन्हुकन्या अर्थात् गंगा हुँ॥३१॥

-★-★-★-

**सर्गाणामादिरन्तश्च मध्यं चैवाहमर्जुन।**
**अध्यात्मविद्या विद्यानां वादः प्रवदतामहम्॥**

**हे अर्जुन! सम्पूर्ण सृष्टिहरूको आदि, मध्य तथा अन्त्यमा म नै छु। विद्याहरूमा ब्रह्मविद्या र परस्पर शास्त्रार्थ गर्नेहरूको(तत्त्व निर्णयको लागि गरिने) वाद म नै हुँ॥३२॥**

सर्गाणां सृज्यानामाकाशद्यचेतनानामादिरन्तश्च मध्यं च उत्पत्तिस्थितिलया अहमेव। हे अर्जुन विद्यानां श्रेयः सा-धनभूतानां मध्ये अध्यात्मविद्या आत्मानौ तत्त्वम्पदार्थाव-धिकृत्य या विद्या तत्स्वरूपगुणसम्बन्धवेदनात्मिकाऽध्यात्मविद्या परमनिश्रेयोरूपमोक्षसाधनभूतत्वादतिश्रेष्ठाऽहं, प्रवदतां प्रकर्षेण वदतां वादिनां सम्बन्धिन्यो या वादजल्पवितण्डात्मिकास्तिस्रः कथास्तासां मध्ये वादोऽहं, तत्र वीतरागद्वेषयोस्तत्त्वबुभुत्स्वोः सतीर्थयोर्गुरुशिष्ययोर्वा तत्त्वनिर्णयार्थं युक्तिप्रमाणाभ्यां स्थापनदूषणाभ्यां च स्वपक्षप्रतिपक्षपरिग्रहरूपा कथा वादः। तत्वसंरक्षणार्थ जल्पवितण्डे। बीजरोहसंरक्षणार्थ कण्टकशाखाप्रावरण वत्। यत्र द्वयोर्जिगीष्वोस्तर्कप्रमाणाभ्यां स्वपक्षस्थापन पूर्विका छलजातिनिग्रहैः परपक्षनिरासफला कथा जल्पः।

हे अर्जुन! सृष्टिको अर्थात् आकाश आदि अचेतनहरूका उत्पादक, पालक र संहारक हुनाले यिनिहरूका आदि, मध्य र अन्त्य पनि म नै हुँ। कल्याण साधक विद्याहरूमा म अध्यात्म(वेदान्त) विद्या हुँ। 'तत्' र 'त्वं' पदार्थको विवेक दिनेवाला अर्थात् ती दुबैको स्वरूप, गुण र सम्बन्धको ज्ञान गराउने विद्यालाई अध्यात्म विद्या भन्दछन्। यो परम कल्याणरूप मोक्षको साधनभूत हुनाले सबै विद्याहरूमा श्रेष्ठ छ। यो अध्यात्म विद्या म हुँ। वादिहरूमा अर्थात् शास्त्रार्थ गर्नेहरूको वाद सम्बन्धी वाद, जल्प र वितण्डा नामक तीन बहस गर्ने रीतिहरूमा वाद हुँ। रागद्वेष छोडेर तत्त्वलाई जान्ने इच्छाले सहपाठिहरूमा वा गुरु शिष्यहरूमा तत्त्वको निर्णयको लागि युक्ति र प्रमाणद्वारा खण्डन-मण्डन गरेर जुन परपक्ष वा स्वपक्ष ग्रहण गर्ने तरीका छ त्यसलाई वाद भनिन्छ। जल्प वा वितण्डा केवल स्वपक्षलाई बचाउने तरीका हो, जस्तो रोपेको बिउलाई बचाउनको लागि खेतमा काँडाको घेरा लागाईन्छ। जल्प त्यसलाई भनिन्छ जुन जित्ने इच्छाले विवाद गर्नेहरू आ-आफ्नो पक्षलाई तर्क र प्रमाणको द्वारा स्थापन गर्दै छन, जाति तथा निग्रहले केवल प्रतिपक्षीको पक्ष खण्डनमा कथन गर्दछन्। जहाँ

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

यत्र तु छलजातिनिग्रहस्थानैः परपक्षो दूष्यते एव, नतु स्वपक्षः स्थाप्यते सा कथा वितण्डां तत्राभिप्रायान्तरेण प्रयुक्तस्य शब्दस्यार्थान्तरं प्रकल्प्य दूषणं छलम्, असदुत्तरं जातिः। सा च साधर्म्यवैधर्म्यादिभेदाद्बहुधा। अपजयहेतुर्निग्रहस्थानं, तदपि प्रतिज्ञाहानिप्रतिज्ञान्तरादिभेदादनेकविधम्॥

छल, जाति र निग्रहले केवल प्रतिपक्षीको खण्डन गर्दछन् र आफ्नो पक्ष स्थापन गर्दैनन् त्यसलाई वितण्डा भन्दछन्। प्रतिपक्षी द्वारा अन्य अर्थमा व्यवहार गरिएको शब्दलाई अर्कै अर्थ लगाई दिनु छल भनिन्छ। असत् अर्थात् ठीक-ठीक उत्तर न दिनुलाई जाति भन्दछन्। यो साधर्म्य वैधर्म्य आदि भेदहरूले धेरै प्रकारको हुन्छ। अपजयको कारणलाई निग्रहस्थान भन्दछन्। त्यसको पनि प्रतिज्ञा, हानि, प्रतिज्ञान्तर आदि अनेक भेद छन्॥३२॥

-★-★-★-

## अक्षराणामकारोऽस्मि द्वन्द्वः सामासिकस्य च।
## अहमेवाक्षयः कालो धाताहं विश्वतोमुखः॥३३॥

**अक्षरहरूमा अकार र समासहरूमा द्वन्द्व समास तथा अक्षयकाल अर्थात् कालको पनि महाकाल म नै हुँ। सबै तिर मुखभएको धाता(पालन-पोषण गर्नेवाला पनि म नै हुँ॥३३॥**

अक्षराणां वर्णानां मध्ये सर्ववाङ्मयत्वाच्छ्रेष्ठोऽकारोऽहमस्मि। "अकारो वै सर्वा वागि"ति श्रुतेः। द्वन्द्वः सामासिकस्य च समासानां समूहः सामासिकस्य मध्ये द्वन्द्वः समासोऽहं, स चोभयपदार्थप्रधानत्वाच्छ्रेष्ठः। अक्षयः सर्वसंहारकः कालोऽहमेव। "कालः कलयतामहमि"त्यत्र तु क्षणादिरूपः क्षयीकाल उक्तः, इह तु तस्यापि प्रवर्त्तकः कालकाल इति। "सः कालकालो गुणी सर्वविद्य" इति श्रुतौ प्रसिद्धः। महाभारते चोद्योगपर्वणि "कालचक्रं जगच्चक्रं युगचक्रं च केशवः। आत्मयोगेन भगवान् परिवर्त्तयतेऽनिशम् कालस्य च हि मृत्योश्च जङ्गमस्थावरस्य च। ईशते भगवानेकः सत्यमेतद्ब्रवीमि ते"। धाता विश्वतो मुखः प्राणिमात्रभर्त्ताऽहम्॥

अक्षरहरूमा सबै वर्णहरूमा प्रयोग हुने कारण श्रेष्ठ अकार हुँ। श्रुतिमा लेखिएको छ, "अकारो वै सर्वा वाक्" अर्थात् अकार नै सबै वाक् हो। समासहरूमा द्वन्द्व समास हुँ। यो समास मा दुबै पदार्थ प्रधान रहन्छन्। यसैले यो समासहरूमा श्रेष्ठ छ। सबैको संहार गर्ने अक्षय काल पनि म नै हुँ। माथि भनिएको "कालः कलयतामहँ" मा क्षण, घण्टा आदि क्षय हुनेवाला काल भनिएको छ। यहाँ त्यसको प्रवर्त्तक साक्षात् कालहरूका काल को बोध हुन्छ। श्रुतिमा भनिएको छ "ज्ञः कालकालो गुणी सर्व विद्यः"। महाभारतको उद्योगपर्वमा पनि लेखिएको छ- कालचक्रं जगच्चक्रं इत्यादि। अर्थात् कालचक्र, जगच्चक्र र युगचक्रलाई भगवान् आफ्नो शक्तिले सदा परिवर्तन गरि रहनुहुन्छ। काल, मृत्यु, जंगम तथा स्थावरको भगवान् नै एक मात्र मालिक हुन्। यो म तिमी सँग सत्य भन्दछु। प्राणीमात्र को भर्ता विश्व मुखवाला म नै हुँ॥३३॥

-★-★-★-

## मृत्युः सर्वहरश्चाहमुद्भवश्च भविष्यताम्।
## कीर्तिः श्रीवाक्च नारीणां स्मृतिर्मेधा धृतिः क्षमा॥

**सबैलाई हरण गर्ने मृत्यु र भविष्यमा उत्पन्न हुनेवाला म नै हुँ तथा स्त्री-जातिहरूमा कीर्ति, श्री, वाक्, स्मृति, मेधा, धृति र क्षमा पनि म नै हुँ॥३४॥**

संहारकरिणां मध्ये सर्वहरः सर्वसंहारकारी मृत्युरहं, भविष्यतामुत्पत्स्यमानानामुद्भव उद्भावनमुत्पादनमहमित्यर्थः। नारीणां मध्ये कीर्त्तिश्च श्रीश्च वाक्चाहं, स्मृतिर्मेधा धृतिः क्षमेति सप्तधर्मपत्न्योऽहमेव, यासां लेशयोगेनापि

संहारकहरूमा सर्व संहार गर्नेवाला मृत्यु म नै हुँ। हुनेहरूका उत्पादक पनि म नै हुँ। स्त्रीहरूमा कीर्त्ति, श्री, वाक्, मेधा, स्मृति, धृति, क्षमा यी धर्मको सात पत्नीहरू, जुन लेशमात्र भएपनि सर्वत्र मनुष्यहरूको प्रशंसा हुन्छ त्यो पनि म नै हुँ। अर्थात् कीर्त्ति

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

नरः सर्वलोकप्रशस्यो भवति। ताः कीर्त्याद्याः सप्तस्त्रियो मम विभूतिरित्यर्थः॥

आदि सात स्त्रीहरू मेरा विभूति हुन्॥३४॥



**बृहत्साम तथा साम्नां गायत्री छन्दसामहम्।**
**मासानां मार्गशीर्षोऽहमृतुनाकुसुमाकरः॥**

**गाएर पढिने श्रुतिहरूमा बृहत्साम र सबै छन्दहरूमा गायत्री छन्द, बाह्रै महिनाहरूमा मार्गशीर्ष र छः वटै ऋतुहरूमा वसन्त पनि म नै हुँ॥३५॥**

वृहत्सामेति। पूर्वं वेदेषु साम्नोर्वैशिष्ठ्यमुक्तं साम्नामपि विशेषो "यं त्वामिन्द्र हवामह" इत्यस्यामृचि गानविशेषभूतं वृहत्साम तच्च सर्वप्राणिनामीश्वरत्वेनेन्द्रस्तोत्रत्वाद्यन्तः श्रेष्ठं मद्विभूतिरित्यर्थः। छन्दसां नियताक्षरपादत्वरूपछन्दो-विशिष्टानां मन्त्राणां मध्ये द्विजत्वापादकत्वेन प्रातरादि-सवनत्रयवाचित्वेन च सोमाहरणेन च सर्वऋचां श्रेष्ठा गायत्री ऋगहमित्यर्थः। मासानां द्वादशानां मध्ये मार्गशीर्षः। "वसन्ते ब्राह्मण्मुपनयीत वसन्ते ब्राह्मणोऽग्निनादधीते" इत्यादिशास्त्रेण ब्राह्मणधर्मसम्बन्धितयाऽभिधीयमा-नत्वाच्छ्रेष्ठोऽहम्॥

पहिले नै सामवेदको विशेषता भनिसकिएको छ। अब भन्नुहुन्छ सामवेदमा पनि "यं त्वामिन्द्रं हवामहे" यस ऋचामा जो गान विशेष छ त्यो वृहत्साम हो। त्यो सबै प्राणीहरूका ईश्वरतायुक्त इन्द्रको स्तुति हुनाले श्रेष्ठ छ। यस ऋचालाई मेरो नै विभूति जान्नु। अर्थात् वृहत्साम म नै हुँ। नियत अक्षर एवं मात्रावाला विशिष्ट छन्दहरू अर्थात् मन्त्रहरूमा द्विजत्वको प्राप्ति गराउने हुनाले प्रातः आदि त्रिसन्ध्या वाचक र सोमको हरणमा प्रयुक्त हुनाले सबै ऋचाहरूमा श्रेष्ठ गायत्री ऋचा म नै हुँ। बाह्रै महीनाहरू मध्ये मंसीर म नै हुँ। छः ओटा ऋतुहरूमा बसन्त प्रधान छ, "बसन्ते ब्राह्मणमुमनयीत्"। "बसन्ते ब्राह्मणोऽग्निनादधीत" अर्थात् बसंतमा ब्राह्मणको उपनयन गर्नु, बसन्तमा ब्राह्मण अग्नि स्थापन गर्नु, इत्यादि शास्त्र प्रमाणहरूमा वैदिक कर्ममा प्रधानता भएकोले वसन्त ऋतु सर्वश्रेष्ठ छ, त्यो म हुँ॥३५॥



**द्यूतं छलयतामस्मि तेजस्तेजस्विनामहम्।**
**जयोऽस्मि व्यवसायोऽस्मि सत्त्वं सत्त्ववतामहम्॥**

**छल गर्नेहरूमा जुवा र तेजस्विहरूको तेज म नै हुँ। जीत्नेहरूको जीत र निश्चय गर्नेहरूको निश्चय तथा सात्त्विक मनुष्यहरूको सात्त्विक भाव पनि म नै हुँ॥३६॥**

छलयतां छलं परवञ्चनं कुर्वतां सम्बन्धिद्यूतमक्षदेवनादि लक्षणमहं, तेजस्विनां प्रतापिनां सम्बन्धितेजः पराभिभवसामर्थ्यमहं, जेतृणां जयोऽस्मि। व्यवसायिनामुद्यमवतां व्यवसाय उद्यमोऽस्मि। सत्ववतां सात्त्विकानां ज्ञानवैराग्यादिलक्षणं सत्कार्यरूपं सत्त्वमहमस्मि॥

अर्कालाई ठग्नेवालाहरू मा जुवा अर्थात् पाशाको खेल आदि हुँ। प्रतापीहरूमा प्रतापस्वरूप अर्थात् शत्रुहरूको अपमान गर्ने सामर्थ्य म नै हुँ। जीत्नेहरूमा जय स्वरूप हुँ। उद्यमशीलहरूमा व्यवसाय हुँ। र सात्त्विकहरूमा ज्ञान वैराग्य लक्षणात्मक सत्कार्य रूप सत्त्व म नै हुँ॥३६॥



**वृष्णीनां वासुदेवोऽस्मि पाण्डवानां धनञ्जयः।**
**मुनीनामप्यहं व्यासः कवीनामुशना कविः॥**

**वृष्णिवशीहरूमा वसुदेवपुत्र श्रीकृष्ण तथा पाण्डवहरूमा अर्जुन अर्थात् स्वयं तिमी र मुनिहरूमा वेदव्यास, कविहरूमा कवि शुक्राचार्य पनि म नै हुँ॥३७॥**

वृष्णीनां प्रवरो वासुदेवो वसुदेवसूनुर्यो लोके प्रसिद्धः

यदुवंशिहरूमा श्रेष्ठ, वसुदेवको पुत्र लोक प्रसिद्ध वासुदेव, साक्षात्

सोऽहं साक्षात्त्वदुपदेष्टा परमात्मैव, नतु विभूतिरर्थान्तराभावाद् । किन्तूक्तवक्ष्यमाणविभूतीशोऽहमित्यर्थः। विभूतिमध्ये पाठस्तु विभूतिमानहमनेनैव रूपेण चिन्तनीय इत्येतदर्थः। पाण्डवानां धनञ्जयस्त्वमेव मद्विभूतिः। मुनीनां मननेनात्मयाथात्म्यदर्शिनां मध्ये वेदव्यासोऽहमस्मि। कवयः क्रान्तदर्शिनस्तेषां मध्ये उशनाः कविः शुक्रः॥

तिमीलाई उपदेश दिने परमात्मा म हुँ। म नै सबै भनिएको र भनिने विभूतिहरूका ईश हुँ। विभूतिहरूका बीच मैले आफ्नो गणना यसैले गरें कि विभूतिवाला म यस वासुदेवरूप ले चिन्तनीय छु। पाण्डुपुत्रहरूमा अर्जुन रूप तिमी मेरो विभूति हौ। मनन द्वारा आत्मतत्त्वलाई जान्ने मुनिहरूमा व्यास हुँ। र सूक्ष्मदर्शी कवीहरूमा म शुक्राचार्य हुँ॥३७॥

-★-★-★-

**दण्डो दमयतामस्मि नीतिरस्मि जिगीषताम्।**
**मौनं चैवास्मि गुह्यानां ज्ञानं ज्ञानवतामहम्॥**

**दमन गर्नेहरूमा दण्डनीति र विजय चाहनेमा नीति म नै हुँ। गोपनीय भावहरूमा मौन म हुँ तथा ज्ञानवान्हरूका ज्ञान म नै हुँ॥३८॥**

दमयतां उत्पथवर्त्तिनो जनान् पथि प्रवर्त्तनार्थं दण्डं कुर्वतां निग्रहहेतुर्दण्डोऽहमस्मि। जिगीषतां जेतुमिच्छतां जयोपायो नीतिरहमस्मि। गुह्यानां गोप्यानां गोपनहेतुमौनं वाचो यमोऽहमस्मि। ज्ञानवतां तत्त्वज्ञानिनां यज्ज्ञानं तदहम्॥

कुत्सित (नराम्रो) बाटोमा हिड्नेहरूलाई राम्रो बाटोमा ल्याउनको लागि दण्ड म नै हुँ। जय पाउन इच्छा राख्नेहरूका जयको उपायस्वरूप नीति म नै हुँ। गोपनीय विषयहरूलाई गोप्य राख्ने कारण मौन हुँ। तत्त्व ज्ञानिहरूमा जो ज्ञान छ पनि म नै हुँ॥३८॥

-★-★-★-

**यच्चापि सर्वभूतानां बीजं तदहमर्जुन।**
**न तदस्ति विना यत्स्यान्मया भूतं चराचरम्॥**

**र हे अर्जुन! सम्पूर्ण प्राणिहरूको जो बीज(मूल कारण) हो, त्यो बीज पनि म नै हुँ किनकी त्यस्तो चर-अचर कुनै प्राणी छैन जुन मेरो बिना होस अर्थात् चर-अचर सबैथोक म नै हुँ॥३९॥**

यदपि च सर्वभूतानां सर्वावस्थाऽवस्थितानां चराचरप्राणिनां बीजं प्ररोहकारणं तदहं, हे अर्जुन! तत्र हेतुः आब्रह्मस्तम्बपर्यन्तं व्यापकेन मया विना यत्स्यात्तच्चरमचरं वा वस्तु नास्त्येव, सर्वस्य मदविनाभावात्। सर्वकारणव्यापकत्वात् सर्वं कार्यमेव। कारणकारणोऽहमित्यर्थः "सकारणं कारणाधिपाधिप" इति श्रुतेः॥३९॥

हे अर्जुन! सबै अवस्थाहरूमा स्थित चराचर जीवहरूको जीव अर्थात् उत्पत्तिको कारण जो छ त्यो म हुँ। यसको कारण यो हो कि ब्रह्माण्ड भरी व्यापक हुनाले चर वा अचर कुनै यस्तो वस्तु छैन जसमा म नभएको होस। सबै कारणहरूमा व्यापक हुनाले म नै सबै कारणहरूका कारण हुँ। श्रुतिमा पनि भनिएको छ, 'स कारणं कारणाधिपाधिपाधिपः' अर्थात् त्यो कारणाधिपको पनि अधिप (स्वामी) कारण हो॥३९॥

-★-★-★-

**नान्तोऽस्ति मम दिव्यानां विभूतीनां परन्तप।**
**एष तूद्देशतः प्रोक्तो विभूतेर्विस्तरो मया॥**

**हे परन्तप अर्जुन! मेरो दिव्य विभूतिहरूको अन्त्य छैन। मैले तिम्रो सामुन्ने आफ्नो विभूतिहरूको जुन विस्तार भनेको छु त्यो त केवल संक्षेपमा नाममात्र भनेको हो॥४०॥**

विभूतिं सङ्क्षिपंस्तदियत्तां विनिषेधति-नान्त इति। हे परन्तप! मम दिव्यानां विभूतीनामन्त इयत्ता नास्ति।

अब विभूतिहरूलाई संक्षिप्त गर्दै त्यसको इयत्ता (यति नै हो) को निषेध गर्नुहुन्छ। हे अर्जुन! मेरा दिव्य विभूतिहरूको अन्त्य छैन।

अतस्ताः साकल्येन न केनापि विदुषां ज्ञातुं वक्तुं वा शक्याः, एष तु विभूतेर्विस्तरस्तुभ्यमुद्देशत एकदेशेन मया प्रोक्तः॥

यसैले कुनै पनि विद्वान यसलाई पूर्णरूपले जान्न वा भन्न समर्थ छैनन्। यो त विभूतिहरूको विस्तार मैले एक उद्देश्य (नाममात्र) गरेर संक्षेपमा तिमी संग भनेको हो॥४०॥

-★-★-★-

**यद्यद्विभूतिमत्सत्त्वं श्रीमदूर्जितमेव वा।**
**तत्तदेवावगच्छ त्वं मम तेजोंऽशसम्भवम्॥**

**जुन-जुन ऐश्वर्ययुक्त, शोभायुक्त र बलयुक्त प्राणी तथा पदार्थ छन् त्यस-त्यसलाई तिमी मेरो नै तेज-(योग अर्थात् सामर्थ्य)को अंशबाट उत्पन्न भएको संझ॥४१॥**

एवमपि सर्वासां विभूतीनां कश्चिदन्योऽप्युद्देशो मदनुग्रहाय भवता कर्तव्य इति चेत्तत्राह-यद्यदिति। विभूतीमत् ऐश्वर्य युक्तं श्रीमत् श्रीः सम्पत् कातिर्न्वा तयायुक्तम्, ऊर्जितं ज्ञानबलशक्त्याद्यतिशययुक्तं, यद्यत्सत्त्वं वस्तुमात्रं तत्तदेव मम तेजसः प्रभावस्यांशेन सम्भवं सम्पन्नमवगच्छ जानीहि॥

यस्तै नै सबै विभूतिहरूको कुनै अरू पनि अंश छ भने हजुर कृपा गरेर मलाई भन्नुहोस। यस आशंकामा नभनेको विभूतिहरूका उपलक्षण गरेर भगवान् भन्नुहुन्छ। ऐश्वर्य युक्त, श्री अर्थात् सम्पत्ति वा कांति युक्त तथा संसारमा अत्यधिक ज्ञान, बल, शक्ति सम्पन्न जुन-जुन वस्तुहरू छन् तिनीहरूलाई मेरो नै अंशले उत्पन्न वा सम्पन्न संझिनु॥४१॥

-★-★-★-

**अथवा बहुनैतेन किं ज्ञातेन तवार्जुन।**
**विष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगत्॥**

**अथवा हे अर्जुन! तिमीलाई यस प्रकार धेरै कुराहरू जान्ने के आवश्यकता छ, जबकि म आफ्नो कुनै एक अंशले यस सम्पूर्ण जगत्लाई व्याप्त गरेर स्थित छु अर्थात् अनन्त ब्रह्माण्ड मेरो कुनै एक अंशमा छ॥४२॥**

एवं सङ्क्षिप्य विभूतिमुक्त्वा पुनः प्रकारान्तरेण संक्षिप्य वदन्नध्यायमुपसंहरति-अथवेति। अथ वा पक्षान्तरे। हे अर्जुन! बहुनैतेन पृथक्-पृथक् ज्ञातेन तव किं कार्यं स्यात्। सर्वस्य निष्कर्षार्थमुच्यमानं श्रृणु-विष्टभ्येति। इदं कृत्स्नं निखिलं जगदेकांशेन एकदेशस्याप्यत्यल्पांशेन अयुतायुतांशेनेत्यर्थः। विष्टभ्य धृत्वा स्थितोऽहम्। तथोक्तं वैष्णवे पराशरेण "यस्यायुतायुतांशांशे विश्वशक्तिरियं स्थिति"ति। तस्मात्सर्व(स्य) चेतनाचेतनस्य जगतो मदायत्तस्थितिप्रवृत्तितया मद्व्यतिरेकाभावान्मद्रूपमेव सर्वमनुसन्धत्स्वेति भावः॥ विभूतिज्ञानतो यस्य नृणां भक्तिर्भवेदिति।विभूतिः कृपया प्रोक्ता तं श्रीमाधवमाश्रये॥

यस प्रकार विभूतिहरूलाई संक्षेपमा भनेर अर्कै प्रकारले फेरि पनि विभूतिहरूलाई भन्दै अध्यायको समाप्ति गर्नुहुन्छ। हे अर्जुन! अथवा यी सबै विभूतिहरूलाई बेग्ला-बेग्लै जान्नुसँग तिमीलाई के मतलब? सबैको सारांश यो संझिराख्नु कि म नै यस निखिल संसारलाई आफ्नो अलिकति अंशले धारण गरेको छु। जस्तो कि विष्णुपुराणमा परासरले भनेको छ, 'यस्या.....स्थिताः' अर्थात् जसको दशहजार अंशमा पुरै विश्वको शक्ति बसेको छ। यसैले सबै चेतनाचेतनमय जगत्को स्थिति र प्रवृत्ति मेरो नै अधिन भएकोले म भन्दा अलग केही पनि छैन। अर्थात् सबैलाई मेरो नै स्वरूप ठान॥४२॥ जसको विभूतिको ज्ञानले मनुष्यहरूलाई त्यस विभूतिका पति भगवान् श्रीकृष्णमा भक्ति हुन्छ, यसैले जसले कृपा गरेर आफ्ना विभूतिहरूलाई भन्नुभयो उनै माधवको शरणमा म छु।

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां विभूतियोगो नाम दशमोऽध्यायः॥१०॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथैकादशोऽध्यायः

## अर्जुन उवाच

**मदनुग्रहाय परमं गुह्यमध्यात्मसञ्ज्ञितम्।**
**यत्त्वयोक्तं वचस्तेन मोहोऽयं विगतो मम॥**

**केवल मलाई कृपा गर्नको लागि हजुरले जुन परम गोपनीय अध्यात्म–विषयक वचन भन्नुभयो, त्यसले मेरो यो मोह नष्ट भएको छ॥१॥**

तदेवं भवत्युत्पत्तये तद्‌वृद्धये च भगवता स्वविभूतिरुक्ता, तदन्ते "च विष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगदि"ति विश्वव्यापकं पारमेश्वरं रूपं निर्दिष्टं तद्दिदृक्षुः पूर्वोक्तम–भिनन्दन्नर्जुन उवाच–मदनुग्रहायेति चतुर्भिः। देहात्माभि–मानरूप मोहेन मोहितस्य ममानुग्रहैकप्रयोजनाय मां शोक–सागरादुद्धर्त्तुं परमं गुह्यं परमरहस्य मध्यात्मसंज्ञितमध्यात्म–शब्दवाच्यं देहादिभ्य आत्मविवेकविषयं वचो वाक्यं "न त्वेवाहं जातु नासमि"त्यारभ्य "तस्माद्योगीभवार्ज्जुने"–त्येतदन्तं यत्त्वयोक्तं तेन ममायं मोहोऽहमेषां हन्ता मयैते हन्यन्ते इत्यादिलक्षणो भ्रमो विगतो विनष्टः। आत्मनः कर्त्तृत्वाभाव निश्चयात्॥१॥

यस प्रकार पूर्व अध्यायमा भक्तिको उत्पत्तिको लागि भगवान्‌ले आफ्नो विभूतिको वर्णन गर्नुभयो, र अध्यायको अन्त्यमा 'विष्टभ्याहमिदं....स्थितोजगत्' यस वाक्यले भगवान्‌ले आफुलाई विश्व–व्यापक परमेश्वर रूप भन्नुभयो। त्यसै रूपलाई हेर्ने इच्छाले अर्जुनले त्यस रूपलाई अभिनन्दन गर्दै भने। देहात्माभिमानले मोहित भएको ममाथि कृपा गरेर, शोक सागरको पार गराउनको लागि जुन हजुरले परम गोपनीय अध्यात्म नामक देहबाट आत्माको पृथक भएको विवेक विषयक वचनहरूलाई 'नत्वे....नासम्' देखि प्रारम्भ गरेर र 'तस्मात् योगी भवार्जुन' सम्म भन्नुभयो त्यसले मेरो यो मोह कि म यिनीहरूलाई मार्नेवाला हुँ, मबाटै यी सबै मारिन्छन्। इत्यादि नष्ट भयो किनकी आत्मा स्वतन्त्र कर्त्ता होईन यो कुरा निश्चित भयो॥१॥

–★–★–★–

**भवाप्ययौ हि भूतानां श्रुतौ विस्तरशो मया।**
**त्वत्तः कमलपत्राक्ष माहात्म्यमपि चाव्ययम्॥**

**किनकी हे कमलनयन! सम्पूर्ण प्राणिहरूको उत्पत्ति तथा विनाश मैले विस्तारपूर्वक हजुरबाटै सुने र हजुरको अविनाशी माहात्म्य पनि सुने॥२॥**

किञ्च–भवाप्ययाविति। भूतानां भवाप्ययावुत्पत्तिप्रलयौ मत्त एव भवत इति त्वत्त एव विस्तरशो मया श्रुतौ। "अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयेस्तथे"त्यादिना। कमलपत्रे इव विशाले सुप्रसन्ने अक्षिणी यस्य तव हे कमलपत्राक्ष! उपलक्षणं चैतन्माधुर्यसौकुमार्यादिविग्रहगुणानां, तथा च निरतिशयसौन्दर्य्यसौकुमार्यमाधुर्य्यलावण्यादि गुणनिधे! इत्यर्थः। न केवलं त्वत्तो भूतानां भवाप्ययावेव श्रुतौ अपि तु सर्वेश्वरस्य तव माहात्म्यमपि अव्ययमक्षयं श्रुतं, सृष्ट्या–

अरू पनि, सबै जीवहरूको उत्पत्ति र प्रलय हजुरबाटै हुन्छ यो विस्तार पूर्वक नै 'अहम्....तथा' आदि वचनहरू द्वारा मैले सुनेको छु। हे कमलको समान सुन्दर आँखा भएका! (कमल नेत्र सम्बोधन भगवान्‌को माधुर्य, सुकुमारता, निरतिशय सुन्दरता, लावण्य आदि विग्रहहरू गुणहरूका उपलक्षण मात्र हुन्) अर्थात् हे सौन्दर्यादि गुणनिधे! हजुर बाट जीवहरूको उत्पत्ति र प्रलय हुने कुरा मात्रै सुनेको होई बरु हजुर सर्वेश्वरको अक्षय माहात्म्यलाई पनि सुने। हजुर सृष्टिकर्त्ता भएर पनि अकर्त्ता हुनु, सर्वनियामक भएर पनि स्वयं उदासीन रहनु, सर्वव्यापी हुँदा पनि व्याप्य वस्तुहरूका दोषले निर्लेप हुनु, शुभाशुभ कर्महरूका प्रेरक भएर

दिकर्तृत्वेऽप्यकर्तृत्वं सर्वनियन्तृत्वेऽप्यौदासीन्यं, सर्वव्यापित्वेऽपि तद्दोषास्पृष्टत्वं शुभाशुभकर्मकारयितृत्वेऽप्यवैषम्यं, तत्तत्फलदातृत्वेऽप्यनैघृण्यं, बन्धमोक्षादिविचित्रफलदातृत्वेऽपि समत्वं, प्रकृतिकालकर्मादिनियन्तृत्वं, सर्वोपास्यत्वं, सर्वानतिक्रमणीयत्वं, स्वभक्तदोपक्षपणस्वभावत्वमित्याद्यपरिमितमहत्त्वं च श्रुतमित्यर्थः ॥२ ॥

**पनि विषमता रहित हुनु, कर्महरूका फलदाता भएर निघृण(निष्पक्ष) हुनु, जीवहरूलाई आ-आफ्नो कर्मानुसार बन्धमोक्षादि विचित्र फलहरूका दाता भएर पनि समभाव राख्नु, प्रकृति, काल तथा कर्म का नियामक एवं सबैको उपास्य हुनु, कसैबाट अतिक्रमणीय नहुनु। आफ्नो भक्तहरूका दोषलाई पखाल्ने स्वभावको हुनु जस्ता हजुरका अपरिमित माहात्म्यलाई मैले विस्तार पूर्वक सुनें ॥२ ॥**

-★-★-★-

## एवमेतद्यथात्थ त्वमात्मानं परमेश्वर ।
## द्रष्टुमिच्छामि ते रूपमैश्वरं पुरुषोत्तम ॥

**हे पुरुषोत्तम हजुर आफुले आफैलाई जस्तो भन्नुहुन्छ यो वास्तवमा त्यस्तै नै छ। हे परमेश्वर! हजुरको ईश्वर-सम्बन्धी रूपलाई म हेर्न चाहन्छु ॥ ३ ॥**

किञ्चैवमिति। हे परमेश्वर ! यथा येन प्रकारेण निरतिशयैश्वर्याश्रयमात्मानं त्वमात्थ ब्रवीपि-एवमेवैतत्। त्वद्वचसि मेऽविश्वासो नास्तीत्यर्थः। तथापि हे पुरुषोत्तम ! तवैश्वरं शक्तिबलवीर्यतेजोभिः सम्पन्नमद्भुतं रूपं द्रष्टुमिच्छामि ॥३ ॥

**हे परमेश्वर! हजुरले आफुलाई जस्तो अत्यन्त ऐश्वर्यको आधार भन्नुभएको छ त्यो कुरा ठिकै हो, मलाई यसमा अलिकति पनि सन्देह र अविश्वास छैन। फेरि पनि हे पुरुषोत्तम! हजुरको शक्ति, बल, वीर्य, तेज आदिले युक्त हजुरको अद्‌भुत रूपको म दर्शन गर्न चाहन्छु ॥ ३ ॥**

-★-★-★-

## मन्यसे यदि तच्छक्यं मया द्रष्टुमिति प्रभो ।
## योगेश्वर ततो मे त्वं दर्शयात्मानमव्ययम् ॥

हे प्रभो ! म द्वारा हजुरको त्यो ऐश्वररूप देख्न सकिन्छ, यस्तो हजुर मान्नुहुन्छ भने हे योगेश्वर ! हजुर आफ्नो त्यो अविनाशी स्वरूप मलाई देखाई दिनुहोस ॥४ ॥

ननु मद्रूपदर्शने तवेच्छाऽस्तीति स्यादेतत्तु देवादिदर्शनाशक्यं कथं द्रष्टुमर्हसीत्याशङ्क्याह-मन्यस इति। हे प्रभो ! सर्वसामर्थ्याश्रय तत्सर्वस्याधारभूतमैश्वरं रूपं मयाऽर्जुनेन त्वदनुग्राह्येण द्रष्टुं शक्यमिति यदि जानासि, तर्हि योगेश्वर ! योगः सर्वसाधनकदम्बस्तस्येश्वर ! सर्वसाधनानां त्वदनुग्रहं विनाऽकिञ्चित्करत्वमित्यर्थः । ततः स्वानुग्रहादेव मेऽनन्यसाधनाय त्वं करुणार्णव अव्ययं नित्यमात्मन ऐश्वरं रूपं दर्शय दृष्टिविषयी कारयेत्यर्थः ॥४ ॥

**यदि तिमीलाई मेरो त्यस रूपको दर्शनको इच्छा छ भने तिमी त्यसलाई कसरी हेर्दछौ किनकी देउता पनि त्यस रूपलाई हेर्न असमर्थ छन्? यसै शंकाको उत्तरमा अर्जुन भन्दछन्। हे प्रभो! अर्थात् सबै सामर्थ्यले युक्त, यदि हजुरले संझिनुहोस कि हजुरको कृपाको बलले सबैको आधारभूत हजुरको त्यस ईश्वरीय रूपलाई देख्न समर्थ हुन सक्दछु भने हे योगेश्वर! अर्थात् सबै साधनभूत समूहहरूका मालिक (मतलब कि हजुरको कृपा बिना सबै साधान व्यर्थ छ) म जस्तो साधनहीन लाई हजुरको आफ्नो ईश्वरीय अव्यय(नित्य) रूपलाई हजुरकै कृपाले मेरो दृष्टिको विषय बनाउनु होस अर्थात् देखाउनु होस ॥ ४ ॥**

-★-★-★-

## श्रीभगवानुवाच
## पश्य मे पार्थ रूपाणि शतशोऽथ सहस्त्रशः ।

## नानाविधानि दिव्यानि नानावर्णाकृतीनि च ॥

**हे पार्थ! अब मेरो अनेक प्रकारका र अनेक वर्ण तथा आकृति भएका सैकड़ौं-हजारौं अलौकिक रूपहरूलाई तिमी हेर ॥५ ॥**

एवं स्वानन्यभक्तेनार्जुनेन प्रार्थित: स्वैश्वरं रूपं दर्शयितुकामस्तद्दर्शनेऽर्जुनं द्रढयन् श्रीभगवानुवाच–पश्येति। हे पार्थ! पृथाया मम भक्ताया: पुत्र शतशोथ सहस्रोऽपरिमितानि नानाविधानि अनेकप्रकाराणि दिव्यान्यलौकिकानि नानानीलपीतादयो वर्णा आकृतयश्चावयसंस्थानविशेषा येषां तानि नानावर्णाकृतीनि मम रूपाणि पश्य, दर्शनयोग्यो भवेत्यर्थ:। तस्य दुर्दर्शत्वात्। रूपस्यैकत्वेऽपि विचित्राऽपरिमितत्वाद्रूपाणीति बहुवचनम् ॥५ ॥

यस प्रकार अनन्य भक्त अर्जुनले सविनय प्रार्थना गरेपछि आफ्नो ईश्वरीय रूप देखाउने इच्छाले अर्जुनलाई दृढ़ गर्दै भगवान् भन्नुहुन्छ– हे मेरा भक्त पृथापुत्र अर्जुन! मेरा सैकड़ौं हजारौं अपरिमित, अनेक प्रकारको, अलौकिक नीलपितादि अनेक वर्ण भएका र अनेक आकृतिवाला र अनेक आकृति वाला रूपहरूलाई पनि हेर, अर्थात् यिनीहरूलाई देख्न योग्य बन किनकी यी रूपहरू धेरै दुर्दर्श छन्। रूप एकत्व भए पनि त्यो विचित्र र अपरिमित भएको कारण बहुवचनको व्यवहार भएको छ ॥५ ॥

–★–★–★–

## पश्यादित्यान्वसून्रुद्रानश्विनौ मरुतस्तथा।
## बहून्यदृष्टपूर्वाणि पश्याश्चर्याणि भारत ॥

**हे भारत! बाह्रै सूर्यहरू, आठै वसुहरू, एघारै रुद्रहरू, दुबै अश्विनीकुमारहरू तथा उनन्चास मरुद्‌गणहरूलाई हेर। जसलाई तिमीले पहिले देखेका थिएनौ यस्ता अनेक आश्चर्यजनक रूपहरूलाई पनि तिमी हेर ॥६ ॥**

तान्येव निर्दिशति–पश्येति द्वाभ्याम्। हे भारत! मम देहे आदित्यान् द्वादश वसूनष्टौ रुद्रानेकादश, अश्विनौ द्वौ, मरुत एकोनपञ्चाशत् पश्य। उपलक्षणमिदमन्येषां देवानाम्। तत्रापि नैतावदेव अपि तु बहूनि अन्यानि अदृष्ट पूर्वाणि इहलोके त्वयाऽन्येन वा केन चिदपि पूर्वदृष्टानि रूपाणि आश्चर्याणि अद्भुतानि पश्य ॥६ ॥

त्यही आफ्नो रूपको विषयमा दुई श्लोकहरू द्वारा वर्णन गर्नुहुन्छ। हे अर्जुन! मेरो शरीरमा बाह्रै सूर्य, आठै वसु, एघारै रुद्र, दुबै अश्विनीकुमार र उन्चास मरुत्‌गणहरूलाई पनि हेर। यो भन्नु अरु देउताहरूको पनि उपलक्षण हो, अर्थात् माथि भनिएका देउताहरूका अतिरिक्त अरु सबै देउताहरूलाई पनि मेरो शरीरमा हेर। यति मात्रै होईन अरु पनि पहिले कसैले नदेखेको आश्चर्य अर्थात् अद्‌भुत रूपहरूलाई पनि हेर ॥६ ॥

–★–★–★–

## इहैकस्थं जगत्कृत्स्नं पश्याद्य सचराचरम्।
## मम देहे गुडाकेश यच्चान्यद्द्रष्टुमिच्छसि ॥

**हे जितनिद्र अर्जुन! मेरो यस शरीरको एकदेशमा चराचर–सहित सम्पूर्ण जगत्‌लाई अहिले हेर। यसको सिवाय अरु पनि जे हेर्न चाहन्छौ त्यो पनि हेर ॥७ ॥**

किञ्च–इहैकस्थमिति। इहास्मिन्मम देहे तत्राप्येकस्थम् एकस्मिन्नवयदेशे स्थितं कृत्स्नं सचराचरं जङ्गमस्थावरसहितं जगत् अद्याधुनैव पश्य। हे गुडाकेश! यच्चान्यद्भयाभयोद्भवनाश जयपराजयादिकं द्रष्टुमिच्छसि तदप्येकदेहे देश एव सन्देहनिरासाय पश्य ॥७ ॥

अरु पनि मेरो यस शरीरमा, त्यसमा पनि त्यसको एउटा कुनामा नै स्थित सम्पूर्ण स्थावरको सहित जगत्‌लाई अहिले नै हेर। हे अर्जुन! अरू पनि जति छ भय-अभय, उत्पत्ति-नाश, जीत-हार, आदि लाई हेर्न चाहन्छौ भने त्यसलाई पनि मेरो शरीरको एक कुनामा नै हेर, जसले कि तिम्रो संदेह हट्‌न सकोस ॥७ ॥



–★–★–★–

**न तु मां शक्यसे द्रष्टुमेनेनैव स्वचक्षुषा।**
**दिव्यं ददामि ते चक्षुः पश्य मे योगमैश्वरम्॥**

**परन्तु तिमी यस आफ्नो आँखाले (चर्मचक्षुले) मलाई हेर्न सक्दैनौ, यसैले म तिमीलाई दिव्यदृष्टि दिन्छु जसले तिमी मेरो ईश्वरीय सामर्थ्यलाई देख्न सक्नेछौ॥८॥**

यदुक्तं मन्यसे यदि तच्छक्यमिति तस्योत्तरमाह-न तु मामिति। अहं दिव्यं स्वकीयं रूपं दर्शयिस्यामि। त्वं तु अनेनैव प्राकृतेन प्राकृताल्पवस्तुदर्शनक्षमेण स्वचक्षुषां मामप्राकृतमपरिमेयं द्रष्टुं न शक्यसे, समर्थो योग्यो न भविष्यति। अतस्त्वदनुग्रहाय दिव्यमप्राकृतरूपदर्शनक्षमं चक्षुस्ते तुभ्यं ददामि। तेन ममासाधारणं योगमघटघटनापटीयस्त्वसामर्थ्यमैश्वरमीश्वरासाधारणं पश्य॥८॥

अर्जुनले जुन कुरा भनेका थिए कि यदि त्यो रूपलाई म देख्न सक्दछु भने त्यो अवश्य देखाउनु होस त्यसको उत्तर भगवान् यस श्लोकमा दिनुहुन्छ। म आफ्नो दिव्य रूपलाई देखाउँद छु। तिमी प्राकृतिक साना चीजहरूलाई हेर्ने शक्ति भएको आफ्नो प्राकृति आँखाबाट मेरो अप्राकृतिक, अपरिमेय रूपलाई हेर्न सक्दैनौ। यसैले तिमीलाई कृपा गरेर अलौकिक अप्राकृत रूपलाई हेर्न योग्य आँखा तिमीलाई दिन्छु। ती नेत्रहरूबाट अघटन-घटना गर्ने मेरो ईश्वरीय, असाधारण सामर्थ्यलाई हेर॥८॥

-★-★-★-

**सञ्जय उवाच**

**एवमुक्त्वा ततो राजन्महायोगेश्वरो हरिः।**
**दर्शयामास पार्थाय परमं रूपमैश्वरम्॥**

**हे राजन्! यस्तो भनेर फेरि महायोगेश्वर भगवान् श्रीकृष्णले अर्जुनलाई परम ऐश्वर विराट्रूप देखाउनु भयो॥९॥**

एवं भगवद्रूपदर्शनाय भक्त्याऽर्जुनेन प्रार्थितो भगवान् दिव्यं चक्षुःप्रदाय यादृशं पारमेश्वरं रूपं तस्मै कृपया दर्शयामासैतद्धृतराष्ट्रं प्रति सञ्जय उवाच-एवमुक्तेत्यादिषड्भिः। हे राजन! एवमुक्तप्रकारेणोक्तवान्, महांश्चासौ योगेश्वरश्च हरिः पार्थाय परमं दिव्यमैश्वरं रूपं दर्शयामास॥९॥

यस प्रकार भगवानको रूपलाई हेर्नको लागि भक्त अर्जुनको द्वारा प्रार्थना गरिएपछि भगवान्ले अर्जुनलाई दिव्य नेत्र दिएर जस्तो परमेश्वरीय रूपलाई देखाउनु भयो त्यसलाई धृतराष्ट्र सँग संजय भन्दछन्। हे राजन्! यस्तो भनेर महायोगेश्वर भगवान् श्रीकृष्णले आफ्नो परमदिव्य ईश्वरीय रूप अर्जुनलाई देखाउनु भयो॥९॥

-★-★-★-

**अनेकवक्त्रनयनमनेकाद्भुतदर्शनम्।**
**अनेकदिव्याभरणं दिव्यानेकोद्यतायुधम्॥**

**जसको अनेक मुख र नेत्र छन्, अनेक प्रकारका अद्भुत दर्शन छन्, अनेक अलौकिक आभूषण छन्, हातमा उठाएका अनेक दिव्य आयुधहरू छन्॥१०॥**

तदेवं रूपं विशिनष्टि द्वाभ्याम्-अनेकेति। अनेकानि वक्त्राणि नयनानि च यस्मिन् तत्, अनेकानामद्भुतानां दर्शनं यस्मिन् तत्, अनेकानि दिव्यान्याभरणानि यस्मिन् तत्, दिव्यान्यनेकान्युद्यतान्यायुधानि यस्मिन् तत्॥१०॥

त्यसै रूपको विशेषतालाई दुई श्लोकहरू द्वारा वर्णन गर्नुहुन्छ। जुन रूपमा अनेक मुख र नेत्र छन्, जसमा अनेक अद्भुत वस्तुहरूको दर्शन छ, अनेक अलौकिक आभरणहरूले युक्त छ र जसमा अनेक आयुध उठाईएको छ॥१०॥

-★-★-★-

**दिव्यमाल्याम्बरधरं दिव्यगन्धानुलेपनम्।**
**सर्वाश्चर्यमयं देवमनन्तं विश्वतोमुखम्॥**

**जसको गलामा दिव्य मालाहरू छन्, जो अलौकिक वस्त्र पहिरिनु भएको छ, जसको निधारमा तथा शरीरमा दिव्य चन्दन, कुंकुम आदि लेपन लगाईएको छ, यस्तो सम्पूर्ण आश्चर्यमय, अनन्त रूपवाला तथा सबै तिर मुखभएका देव-(आफ्नो दिव्य स्वरूप-)लाई भगवान्ले देखाउनु भयो॥११॥**

दिव्येति। दिव्यानि माल्याम्बराणि च धारयति तथा दिव्यगन्धवदनुलेपनं यस्य तत्, सर्वाश्चर्यमयम्, अनेकाश्चर्यप्रचुरं देवं द्योतनात्मकम् अनन्तं, त्रिविध परिच्छेदशून्यं, सर्वतो मुखानि यस्य तत्॥११॥

जुन रूप अलौकिक माला र वस्त्रहरूले युक्त छ र दिव्य गन्धहरूका अनुलेपनले युक्त छ, धेरै आश्चर्ययुक्त, प्रकाशमय, अनन्त अर्थात् तीनै परिच्छेद(देश, वस्तु र काल) ले शून्य र सबै तिर मुखवाला छ॥११॥

-★-★-★-

**दिवि सूर्यसहस्रस्य भवेद्युगपदुत्थिता।**
**यदि भाः सदृशी सा स्याद्भासस्तस्य महात्मनः॥**

**यदि आकाशमा एकैसाथ हजारौं सूर्यहरूको उदय होओस तर पनि ती सबैको प्रकाश मिलेर पनि त्यस महात्मा विराट्रूप परमात्माको प्रकाशको समान सायदै हुन सक्ला अर्थात् हुन सक्दैन॥१२॥**

देवमित्युक्तं, कीदृशी तस्य दीप्तिरित्यपेक्षायां तस्या अभूतोपमामाह–दिवीति। दिवि आकाशे सूर्य–सहस्रस्य युगपदुत्थिता भाः प्रभा यदि भवेत्तदा सा तस्य महात्मानो विश्वरूपस्य भासः प्रभाया सदृशी उपमा स्यात्, अन्योपमा तु नास्त्येवेत्यर्थः। एवं चैकदा दिवि सूर्यसहस्रस्योत्थानमसम्भावितं तदभावे तत्सादृश्याभाव इत्थंभूतोपमया निरुपमत्वमेव व्यक्तीकृतम्॥१२॥

माथिको श्लोकहरूमा 'देवम्' अर्थात् प्रकाशमान स्वरूप भनियो। अब त्यस शरीरको कस्तो अलौकिक द्युति छ त्यसलाई अद्भुत उपमा दिएर देखाउनु हुन्छ। यदि आकाशमा एकैपटक हजारौं सूर्य उदाए भने त्यस विश्वरूप परमात्माको प्रभाको सदृश उपमा हुन सक्दछ। त्यसको अर्को उपमा त हुनै सक्दैन। आकाशमा एकैपल्ट हजारौं सूर्य उदाउनु असम्भव छ, यसैले भगवान्को त्यस रूपको प्रभाको पनि कुनै उपमा हुन सक्दैन। यसै भाँति त्यस प्रभालाई उपमा रहित भएको कुरा भनियो॥१२॥

-★-★-★-

**तत्रैकस्थं जगत्कृत्स्नं प्रविभक्तमनेकधा।**
**अपश्यद्देवदेवस्य शरीरे पाण्डवस्तदा॥**

**त्यस समय अर्जुनले देउताहरूका पनि देउता भगवान्को त्यस शरीरमा एकैठाऊँमा स्थित अनेक प्रकारको विभागहरूमा विभक्त सम्पूर्ण जगतलाई देखे॥१३॥**

ततो यथा भगवतोक्तं तथाऽर्जुनस्तद्देहे दृष्टवानित्याह–तत्रेति। (तत्र) तस्मिन्ननुपमे देवदेवस्य विश्वरूपे शरीरे एकत्र स्थितम् अनेकधा प्रविभक्तं ब्रह्मादिविवधविचित्र देवतिर्यङ्मनुष्यस्थावरादिपृथिव्यन्तरिक्षनदीपर्वतस्वर्गपातालादिभेदभिन्नं चेतनाचेतनात्मकं कृत्स्नं जगत् भग–

त्यतिखेर भगवान्ले जस्तो भन्नुभएको थियो अर्जुनले त्यस्तै नै उहाँको शरीरमा देखे। यसैलाई भन्नुहुन्छ– त्यस उपमा रहित भगवान्को शरीरको अङ्गमा स्थित र अनेक प्रकारले विभक्त ब्रह्मा आदि विविध देउता, तिर्यक्, मनुष्य, स्थावर आदि, पृथिवी, आकाश, नदी, पर्वत, स्वर्ग, पाताल आदि भेदयुक्त चेतन र अचेतन समस्त जगत्लाई, भगवान्को कृपाले त्यस दिव्य

वत्प्रसादलब्धतद्रूपदर्शनार्हदिव्यचक्षुः पाण्डवोऽर्जुनोऽपश्यत्॥१३॥

स्वरूपलाई हेर्नयोग्य आँखा पाएर, अर्जुनले देखे॥१३॥

-★-★-★-

## ततः स विस्मयाविष्टो हृष्टरोमा धनञ्जयः।
## प्रणम्य शिरसा देवं कृताञ्जलिरभाषत॥

**भगवान्‌को विश्वरूपलाई देखेर ती अर्जुन धेरै चकित भए र आश्चर्यको कारण उनको शरीर रोमाञ्चित भयो। उनी हात जोडेर विश्वरूप भगवान्‌लाई शिर निहुराएर प्रणाम गर्दै भन्नलागे॥१४॥**

ततः किं वृत्तपेक्षायामाह-तत इति। ततस्तदद्भुतरूप-दर्शनाद्विस्मयो योऽलोकिकान्तश्चमत्कारस्तेनाविष्टो व्याप्तस्तत एव हृष्टरोमा उत्पुलकिततनूरुहः स धनञ्जयः देवं तमेव विश्वरूपं शिरसा प्रणम्य कृताञ्जलिः सम्पुटी कृतहस्तो भूत्वा अभाषत उक्तवान्॥१४॥

फेरि के भयो यसमा भन्दछन्। तब त्यस अद्‌भुत रूपको दर्शनले विस्मित, अर्थात् भित्रको अलौकिक चमत्कारले व्याप्त र यसै कारण रोमोञ्चित अर्जुनले त्यही प्रकाशयुक्त विश्वरूपलाई शिर निहुराएर प्रणाम गर्दै हात जोडेर भने॥१४॥

-★-★-★-

## अर्जुन उवाच
## पश्यामि देवांस्तव देव देहे सर्वांस्तथा भूतविशेषसङ्घान्।
## ब्रह्माणमीशं कमलासनस्थमृषींश्च सर्वानुरगांश्च दिव्यान्॥

**हे देव! हजुरको शरीरमा सम्पूर्ण देउताहरूलाई तथा प्राणिहरूका विशेष-विशेष समुदायहरूलाई र कमलासनमा बसेका ब्रह्माजीलाई, शंकरजीलाई, सम्पूर्ण ऋषिहरूलाई र दिव्य सर्पहरूलाई देखिरहेको छु॥१५॥**

अर्जुन उवाच-पश्यामीति। हे देवदेव! तव देहे सर्वानिन्द्रि-यस्थादीन्देवान् पश्यामि। तथा सर्वाद् भुतविशेषाणां स्थाव-रजङ्गमात्मकानां जरायुजाण्डजादिभेदभिन्नानां वा सङ्घान समूहान्, तथा ब्रह्माणं चतुर्मुखं ब्रह्माण्डाधिपं, तथेशं शङ्करं, कथं भूतं कमलासनस्थं कमलासने ब्रह्मणि स्थितं तदानु-कूल्ये वर्त्तमानं, तथा सर्वान् भृगुमरीच्यादीनृषीन्, तथोरगान् वासुकितक्षकप्रभृतीन्सर्पान् पश्यामीति सर्वत्रान्वेति॥१५॥

अर्जुनले भने हे देव! हजुरको शरीरमा इन्द्र, वसु आदि सबै देउताहरूलाई, स्थावर, जङ्गमादि जरायुज अंडज आदि प्राणी समूहहरूलाई, चारमुख भएका ब्रह्माण्डका मालिक ब्रह्मालाई र कमलासन ब्रह्मा मा स्थित, अर्थात् ब्रह्माको अनुकुल वर्त्तमान शिवलाई, भृगु, मरीचि आदि सबै ऋषिहरूलाई र वासुकि तक्षक आदि सबै दिव्य सर्पहरूलाई देखिरहेको छु॥१५॥

-★-★-★-

## अनेकबाहूदरवक्त्रनेत्रं पश्यामि त्वां सर्वतोऽनन्तरूपम्।
## नान्तं न मध्यं न पुनस्तवादिं पश्यामि विश्वेश्वर विश्वरूप॥

**हे विश्वरूप! हे विश्वेश्वर! हजुरलाई म अनेक हात, पेट, मुख र आँखा तथा सबैतिरबाट अनन्त रूपवाला देखिरहेको छु। म हजुरको न आदिलाई न त मध्यलाई र न त अन्तलाई नै देखिरहेको छु॥१६॥**

किञ्च-अनेकेति। अनेकानि बाहूदरवक्त्रनेत्राणि यस्य तमनन्तरूपं त्वां सर्वतः पश्यामि। हे विश्वेश्वर

फेरि जुन रूपमा अनेक भुजा, गोडा, मुख तथा आँखा छन् यस्ता अनन्त रूपवाला हजुरलाई म चारैतिर देखि रहेको छु। हे विश्वका

विश्वनियन्तः! हे विश्वरूप! यस्त्वमनन्तः अतस्तव नान्तमवसानं न मध्यं न पुनरादिं पश्यामि ॥१६॥

नियन्ता! हे विश्वरूप! हजुर अनन्त हुनुहुन्छ, यसैले म हजुरको आरम्भ, मध्य र अन्त्य कतैबाट पनि देख्दिन॥१६॥

-★-★-★-

**किरीटिनं गदिनं चक्रिणं च तेजोराशिं सर्वतो दीप्तीमन्तम्।**
**पश्यामि त्वां दुर्निरीक्ष्यं समन्ताद्दीप्तानलार्कद्युतिमप्रमेयम्॥**

**म हजुरको किरीट(मुकुट), गदा, चक्र, शंख तथा पद्म धारण गरेको देखिरहेको छु। हजुरको तेजको राशि, सबै तिर प्रकाशवाला, देदीप्यमान अग्नि तथा सूर्यको समान कान्तिवाला, नेत्रको द्वारा कठिनताले मात्र देख्न सकिने र सबैतिरबाट अप्रमेयस्वरूप देखिरहेको छु॥१७॥**

पुनर्विश्वरूपं भगवन्तं विशिनष्टि–किरीटिनमिति। किरीटमुकुटादिमन्तं तेजोराशिं तेजःपुञ्जभूतं तत एव सर्वतो दीप्तिमन्तम् अत एव दुर्निरीक्ष्यं दुःखेन द्रष्टुं शक्यम्। सर्वतो दीप्तिमन्तमितयुक्तमिदानीं तस्य दीप्तेरुपमामाह–दीप्तानलार्कयोर्द्युतेरिव द्युतिः प्रकाशो यस्य तमत एवाप्रमेयम् इयानिति प्रमातुमशक्यं त्वां समन्तात् पश्यामि॥१७॥

फेरि विश्व रूपलाई विशेष रीतिले भन्दछन्। किरीटको मुकुट लगाएको, गदा र चक्र धारण गरेका, तेजको राशी हुनाले चारै तिर चम्किरहेका र यसैले कठिनताले मात्र देख्न सकिने, प्रदीप्त अग्नि र सूर्यको समान चम्किला र यसै कारण 'यस्तो नै हो' भनेर निश्चय गर्न नसकिने हजुरलाई म चारै तिर देखि रहेको छु॥१७॥

-★-★-★-

**त्वमक्षरं परमं वेदितव्यं त्वमस्य विश्वस्य परं निधानम्।**
**त्वमव्ययः शाश्वतधर्मगोप्ता सनातनस्त्वं पुरुषो मतो मे॥**

**हजुर नै जान्नयोग्य परम अक्षर (अक्षरब्रह्म) हुनुहुन्छ, हजुर नै यस सम्पूर्ण विश्वको परम आश्रय हुनुहुन्छ, हजुर नै सनातन धर्मको रक्षक हुनुहुन्छ र हजुर नै अविनाशी सनातन पुरुष हुनुहुन्छ भनेर म मान्दछु॥१८॥**

अप्रमेयमहिमत्वात्त्वमेववं मतोऽसीत्याह–त्वमिति। उपनिषत्सु "एतदक्षरमविदित्वा गार्ग्यस्माल्लोकात्पैति स कृपणः एतस्य वाऽक्षरस्य प्रशासने गार्गि! सूर्याचन्द्रमसौ विधृतौ तिष्ठत" इत्यादिना वेदितव्यं परमक्षरं त्वमेवं अस्य विश्वस्य परं प्रकृष्टं निधानं निधीयतेऽस्मिन्नति निधान–माश्रयः, यतस्त्वमव्ययः स्वरूपतो गुणतो महिम्नश्च न व्येषि न हीयसे अतएव शाश्वतधर्मगोप्ता शाश्वतस्य भागवतस्य धर्मस्य वा गोप्ता रक्षकः। यतः सनातनः, सदैकरसस्वरूपः, पुराणः पुरुषो मे मया मतोज्ञातोऽसि॥१८॥

अपार महिमा भएका कारण तिमीले यस्तो मान्यौ। यसैलाई यहाँ भन्नुहुन्छ। उपनिषदहरूमा 'एतदक्षरम्.....तिष्ठतः' अर्थात् यस अक्षरलाई नजानिकनै जो यसलोक बाट प्रस्थान गर्दछ त्यो कृपण हो, हे गार्गि! यस अक्षरको शासनमा सूर्य र चन्द्रमा आधार बिना नै अडिएका छन्, जो अक्षर भनिएको छ त्यो जान्नयोग्य परमअक्षर हजुर नै हो। यस विश्वको प्रकृष्ट(एकान्त) आश्रय हजुर नै हो, किनकी हजुरको स्वरूप, गुण र महिमा कहिल्यै पनि कम हुँदैन। यसैले नित्यधर्मको अर्थात् वेदबाट प्रतिपादित यज्ञादि धर्मको अथवा हजुरको आराधना रूप भागवत धर्मको रक्षक हजुर नै हो। किनकी हजुर सदा एक रसस्वरूप अर्थात् सनातन होईबक्सन्छ, प्राचीन पुरुष होईबक्सन्छ, यस्तो म मान्दछु॥१८॥

-★-★-★-

**अनादिमध्यान्तमनन्तवीर्यमनन्तबाहुं शशिसूर्यनेत्रम्।**
**पश्यामि त्वां दीप्तहुताशवक्त्रं स्वतेजसा विश्वमिदं तपन्तम्॥**

**हजुरलाई म आदि, मध्य र अन्त रहित, अनन्त प्रभावशाली, अनन्तबाहुवाला, चन्द्र र सुर्यरूप नेत्रवाला, प्रज्वलित अग्निरूप मुखहरू भएको र आफ्नो तेजले यस संसारलाई तपाईरहेको देख्दैछु ॥१९॥**

पुनरनुभूतरूपमेव वर्णयति–अनादीति। अनादिमध्यान्त–रहितम्, अनन्तवर्यं निरतिशयप्रभावम्,अनन्ता बाहवो यस्य तं, शशिसूर्यौ नेत्रे यस्य शशिवत्सूर्यवच्च तापहरप्रतापके च नेत्रे यस्येति वा, स्वभक्तानां देवादीनां तापहरं तद्विपरीता–नामसुराणां तापकरं च नेत्रं यस्य तम्। दीप्तहुताशवक्त्रं प्रदीप्तकालानलवत्संहारकं वक्त्रं यस्य अतएव स्वतेजसा विश्वमिदं तपन्तं स्वकीयेन तेजसा विश्वं तापयन्तं पराभवं कुर्वन्तं त्वां पश्यामि ॥१९॥

फेरि अनुभूत रूपको नै वर्णन गर्दछन्। आदि, मध्य र अन्त्यले रहित, अनन्त प्रभावयुक्त, अनन्त बाहुवाला, सूर्य चन्द्रमा जसको नेत्र हुन्, अथवा सूर्यको जस्तो तापकारक र चन्द्रको जस्तो तापहारक नेत्र छन् जसका अर्थात् आफ्ना देवादि भक्तहरूका तापलाई हर्ने र असुरादि अभक्तहरूलाई ताप दिनेवाला नेत्र छन्। जसको बल्दै गरेको कालाग्निको जस्तो संहारक मुखवाला तथा आफ्नो तेजले यस विश्वलाई तपाउँदै गरेका अर्थात् हेय गरिंदिदै गरेको हजुरलाई म देखिरहेको छु॥१९॥

–★–★–★–

## द्यावापृथिव्योरिदमन्तरं हि व्याप्तं त्वयैकेन दिशश्च सर्वाः।
## दृष्ट्वाद्भुतं रूपमुग्रं तवेदं लोकत्रयं प्रव्यथितं महात्मन्॥

**हे महात्मन्! यो स्वर्ग र पृथ्वीको बीचको अन्तराल र सम्पूर्ण दिशाहरू एक हजुरबाटै परिपूर्ण छन्। हजुरको यस अद्‌भुत र उग्ररूपलाई देखेर तीनै लोक व्यथित भईरहेका छन्॥२०॥**

तद्रूपस्य सर्वलोकासह्यत्वमाह–द्यावापृथिव्योरिति। द्यौश्च पृथिवी च तयोर्मध्ये इदमन्तरमवकाशं त्वयैवैकेन व्याप्तं दिशश्च सर्वा व्याप्ताः, एवमद्‌भुतमत्याश्चर्यं तवेदमुग्ररूपं दृष्ट्वा–लोकत्रयं प्रव्यथितमिति भीतियुक्ततया व्याकुलं पश्यामि। हे महात्मन्! महानात्मा दीनानुकम्पो स्वभावो यस्य स त्वमनुकम्पिस्वभावतवादेतद्रूपोपसंहारेणैताननु गृहाणेति भावः॥२०॥

यो रूप सबैका लागि असह्य छ, यसैलाई भन्दैछन्। स्वर्ग र पृथ्वीको बीच अवकाश(खाली ठाँउमा) र सबै दिशाहरूमा हजुर एकमात्र व्याप्त हुनुहुन्छ। हजुरको यस अद्‌भुत र उग्र रूपलाई देखेर तीनै लोक भयले व्याकुल भईरहेका छन् यस्तो म देखिरहेको छु, हे महात्मन्! भाव यो कि आफ्नो दयालुताले यस उग्ररूपलाई समेटेर यिनीहरू माथि दया गर॥२०॥

–★–★–★–

## अमी हि त्वां सुरसङ्घा विशन्ति केचिद्भीताः प्राञ्जलयो गृणन्ति।
## स्वस्तीत्युक्त्वा महर्षिसिद्धसङ्घाः स्तुवन्ति त्वां स्तुतिभिः पुष्कलाभिः॥

**उनै देउताहरूको समुदाय हजुरमा प्रवेश गरिरहेका छन्। उनीहरूमा कतिपय भयभीत भई हात जोडेर हजुरको नाम र गुणहरूका कीर्तन गरिरहेका छन्। महर्षि र सिद्धहरूको समुदाय 'कल्याण होस!' यस प्रकार भनेर धेरै राम्रा स्तोत्रहरू द्वारा हजुरको स्तुति गरिरहेका छन्॥२१॥**

लोकत्रयं प्रव्यथिमित्युक्तं तदेव विवृणोति–अमी हीति त्रिभिः। अमी सुरसङ्घाः शरणार्थिनस्त्वमेव(परमाश्रयं) विशन्ति आश्रयन्ते। तेषु केचित्तवात्युग्ररूपं दृष्ट्वा भीताः सन्तो दूरत एव स्थिताः प्राञ्जलयो भूत्वा गृणन्ति। जय

तीनै लोकहरूका व्याकुलताको वर्णन गर्दछन्। यी देवगण शरणार्थी सबैका परमाश्रय हजुरकै शरणमा आईरहेका छन्। तिनीहरूमा कोही हजुरको उग्ररूपलाई देखेर डराउँदै टाढै बाट उभिएर हात जोडी 'हजुरको जय होस, जय होस, हाम्रो रक्षा गर्नुहोस' इत्यादि प्रार्थना गर्दछन्। महर्षि सिद्धगण हजुरको मुखलाई

जय पाहीत्यादिवाक्यान्युच्चारयन्ति। महर्षिसिद्धसङ्घा जगद्विनाशनिमित्तानि वक्त्राण्यग्निज्योतीषि महोल्का-नीवोपलक्ष्य जगतः स्वस्ति भूयादित्युक्त्वा सर्वलोक संरक्षणाय त्वां पुष्कलाभिर्महदर्थयुक्ताभिः स्तुतिभिर्भग-वन्माहात्म्यप्रतिपादिकाभिर्वाग्भिः स्तुवन्ति ॥२१ ॥

संसारको विनाशको कारण अनुमान गरेर र त्यसबाट निक्लिदै गरेको फिलिङ्गाहरूलाई बल्दै गरेको उल्का समान संझेर 'संसारको मंगल होस' यो भनेर सबै लोकको रक्षाका लागि हजुरको माहात्म्यलाई प्रकट गर्ने ठूला अर्थयुक्त स्तुतिहरूले हजुरको स्तुति गरिरहेका छन्॥२१॥

-★-★-★-

**रुद्रादित्या वसवो ये च साध्या विश्वेऽश्विनौ मरुतश्चोष्मपाश्च।**
**गन्धर्वयक्षासुरसिद्धसंङ्घा वीक्षन्ते त्वां विस्मिताश्चैव सर्वे॥**

**यी जो एघार रुद्र, बाह्र सूर्य, आठ वसु, बाह्र साध्यगण, दस विश्वेदेव र दुई अश्विनीकुमार तथा उन्चास मरुद्गण र तात्तातो भोजन गर्ने (सात पितृगण) तथा गन्धर्व, यक्ष, असुर र सिद्धहरूका समुदाय छन्, ती सबै चकित भएर हजुरलाई हेरिरहेका छन्॥२२॥**

किञ्च-रुद्रादित्या इति। रुद्रादय उष्मपाः पितरः "उष्मभागा हि पितर" इति श्रुतेः। "यावदुष्णं भवेदन्नं यावदश्नन्ति वाग्यताः। पितरस्तावदश्नन्ति यावन्नोक्ता हविर्गुणा" इति स्मृतेश्च। एते सर्वेऽपि विस्मितास्त्वां वीक्षन्ते ॥२२ ॥

एघारै रुद्र, बाह्रै सूर्य, आठ वसु, साध्य गण, विश्वेदेव लोग, दुबै अश्विनी कुमार, मरुत् गण, पितृगण, गन्धर्व, यक्ष, सुरसिद्ध गण सबै विस्मित भएर हजुरलाई हेरिरहेका छन्। उष्मपा पितृहरूलाई भनिन्छ किनकी श्रुतिले भनेको छ ''उष्मभागा हि पितर'' स्मृतिमा लेखिएको छ, अरु पनि स्मृतिहरू भन्दछन्-'यावदुष्णं......हविर्गुणाः' अर्थात् पितृ तातो अन्नका भागी हुन्। जब सम्म अन्न तातो हुन्छ र मान्छे मौन भएर भोजन गर्दछ, त्यतिखेर सम्म कि जतिखेर सम्म पितृहरू भोजन गर्दछन् जतिखेर सम्म हविष्यको गुण न भनियोस॥२२॥

-★-★-★-

**रूपं महत्ते बहुवक्त्रनेत्रं महाबाहो बहुबाहूरुपादम् ।**
**बहूदरं बहुदंष्ट्राकरालं दृष्ट्वा लोकाः प्रव्यथितास्तथाहम्॥**

**हे महाबाहु! हजुरको अनकानेक मुख, आँखा तथा पाखुरा, पाउ र तिघ्रा, पेट, विकराल दाह्रा यस प्रकारको महान रूपलाई देखेर सबै प्राणी व्यथित भईरहेका छन् तथा साथमा म पनि व्यथित भई रहेको छु॥२३॥**

किञ्च-रूपमिति। हे महाबाहो! ते तव रूपं दृष्ट्वा सर्वे लोका जनाः प्रव्यथिता भयाकुलचित्ता भवन्ति। तथाऽहं प्रव्यथि-तोऽस्मि। कीदृश ते रूपं मदहतिप्रमाणं, बहूनि वक्त्राणि नेत्राणि च यस्मिन् तत्। बहवो बाहवः उरवः पादाश्च यस्मिन् तत्। बहून्युदराणि यस्मिन् तत्, बह्वीभिर्दंष्ट्राभिः कराल-मतिभयानकम्॥२३ ॥

हे महाबाहो! हजुरको महत् रूपलाई देखेर, जुन धेरै मुख, आँखा, हात, तिघ्रा, गोडा र पेटवाला छ र जसमा धेरै विकराल दाँत छन्, सबै लोक व्याकुल भईरहेका छन्, र साथै म पनि व्याकुल भई रहेको छु॥२३॥

-★-★-★-

**नभः स्पृशं दीप्तमनेकवर्णं व्यात्ताननं दीप्तविशालनेत्रम्।**
**दृष्ट्वा हि त्वां प्रव्यथितान्तरात्मा धृतिं न विन्दामि शमं च विष्णो॥**

**किनकी हे विष्णु! हजुरको देदीप्यमान अनेक वर्ण छन्, हजुर आकाशलाई स्पर्श गरिरहनु भएको छ अर्थात् सबै भन्दा ठूलो होईसिन्छ हजुरको मुख पनि धेरै फैलिएको छ, हजुरको नेत्र प्रदीप्त र विशाल छन्। यस्ता हजुरलाई देखेर भयभीत अन्तःकरणवाला मैले धैर्य तथा शान्ति पाएको छैन॥२४॥**

अहं त्वतिव्याकुलचित्तोऽस्मीत्याह–नभःस्पृशमिति। अत्र नभःशब्दो “योऽस्याध्यक्षः परमे व्योमन् तदक्षरे परमे व्योमन्नि”त्यादि श्रुत्यभिहितप्रकृत्यतीतपरमव्योमवाचकः सर्वविकाराश्रयभूतत्रिगुणाश्रयप्रकृतेः सर्वावस्थावस्थितस्य पुरुषस्य चाश्रयतया वर्त्तमानत्वान्नभः परमव्योम स्पृशते इति नभःस्पृशं, दीप्तं प्रज्वलितम्, अनेके सितकृष्णपीता–दयो वर्णा यस्य तमनेकवर्णं व्यात्तानि विवृत्तानि आननानि यस्य तं, दीप्तानि विशालानि नेत्राणि यस्य तमेवम्भूत त्वां दृष्ट्वा प्रव्यथितान्तरात्मा प्रकर्षेण व्यथितान्तःकरणोऽहं धृतिं देहधारणं न विन्दामि न लभे। शमं चेन्द्रियाणां शान्तिं च न लभे। हे विष्णो! बाह्याभ्यन्तरव्यापक! मम बाह्या–भ्यन्तरव्यथां त्वं जानासीत्यभिप्रायः॥२४॥

मेरो चित्त व्याकुल भईरहेको छ, यसैलाई भन्दछन्- परम व्योम(आकाश)लाई छोईरहेको, प्रज्वलित, उज्यालो, कालो, पहँलो आदि अनेक रंगहरूवाला, खोलिएको मुख भएका र दीप्त तथा विशाल नेत्रवाला हजुरलाई देखेर मेरो अन्तःकरण अत्यन्त व्यथित भएको छ, यसैले म धैर्य अर्थात् देह धारण गर्न सक्दिन र इन्द्रियहरूलाई पनि शान्ति मिल्दैन, हे विष्णो! हजुर बाहिर र भित्र व्याप्त हुनुहुन्छ, यसैले मेरो व्यथा पनि अवश्य जान्नुहुन्छ। यहाँ 'नभ' शब्द प्रकृति भन्दा अतीत परमधामको वाचक हो, जस्तो श्रुति ले भनेको छ 'योऽस्याध्यक्षः......व्योमन्' अर्थात् यस जगत्को अध्यक्ष परमव्योम( पर वैकुण्ठ) मा छ त्यो अक्षर परमात्मा परम व्योम मा छ॥२४॥

–★–★–★–

## दंष्ट्राकरालानि च ते मुखानि दृष्ट्वैव कालानलसन्निभानि।
## दिशो न जाने न लभे च शर्म प्रसीद देवेश जगन्निवास॥

**हजुरको प्रलयकाल को अग्निको समान प्रज्वलित र दाह्राहरूको कारण भयानक भएको मुखहरूलाई हेरेर मलाई न दिशाहरूको ज्ञान भईरहेको छ, न त शान्ति नै मिलेको छ यसैले हे देवेश! हे जगन्निवास हजुर प्रसन्न हुनुहोस॥२५॥**

किञ्च–दंष्ट्रेति। दंष्ट्राभिः करालानि भयानकानि कालानल–वत्सर्वसंहारे प्रवृत्तानि ते मुखानि दृष्ट्वैव भयावेशेन दिशो न जाने, शर्म सुखं च न लभे। तस्माद् हे देवेश! ब्रह्मादि–देवानां लोकेश्वराणामपीश्वर! हे जगन्निवास! प्रसीद प्रसन्नो भव। यथाऽहं भयनिवृत्त्या प्रकृतिस्थो भवेयं तथा कुर्वित्यर्थः॥२५॥

दाह्राहरूले भयानक, कालाग्निको समान सबैलाई संहार गर्नमा प्रवृत्त हजुरका मुखलाई देखेर भयभीत भएर मैले दिशाहरूलाई पनि भूलिरहेको छु र मलाई सुख पनि मिलेको छैन, यसैले हे देवेश! अर्थात् ब्रह्मादि लोकपालहरू का पनि ईश्वर! हे जगन्निवास! प्रसन्न हुनुहोस अर्थात् जसरी मेरो भय निवृत्त भएर म प्रकृतिस्थ हुन सकूँ त्यो गर्नुहोस॥२५॥

–★–★–★–

## अमी च त्वां धृतराष्ट्रस्य पुत्राः सर्वे सहैवावनिपालसङ्घैः।
## भीष्मो द्रोणः सूतपुत्रस्तथासौ सहास्मदीयैरपि योधमुख्यैः॥

**हाम्रा पक्षका मुख्य–मुख्य योद्धाहरूको सहित भीष्म, द्रोण र त्यो कर्ण तथा धृतराष्ट्रका सबै छोराहरू पनि राजाहरूको समुदाय सहित हजुर भित्र प्रवेश गरिरहेका छन्॥२६॥**

“प्रसीद देवेशेत्यनेन” भयनिवृत्तिलक्षणप्रसादार्थं प्रार्थितेन

पछाडि 'हे देवेश' इत्यादि द्वारा भय निवारण गरेर प्रसन्नताको

भगवता देवासुरसंग्रामे निहतानामुभय सैन्ये राजछद्मनाऽ–वस्थितानां भूभाररूपाणामसुराणां धार्त्तराष्ट्रादीनां संहारार्थं भवतो जयकीर्तिप्रख्यापनाय च मयैतद्रूपमाविष्कृतमतस्त्वं मा भैषीति सूचनाय पार्थाय प्रदर्शितम्। स च पार्थो भाविनमपि स्वविजयं परेषां पराजयं च "मम देहे गुड़ाकेश! यच्चान्यद्द्रष्टुमिच्छसी"त्यादिष्टं तत्प्रसादलब्धदिव्येन चक्षुषा पश्यन्नाह–अमीत्यादिपञ्चभिः। अमी धृतराष्ट्रस्य पुत्रा दुर्योधनादयः सर्वे अवनिपालानां शल्यजयद्रथादीनां राज्ञां सङ्घैः समूहैः सह तव वक्त्राणि विशन्तीत्युत्तरे–णान्वयः। न केवलं दुर्योधनादयो विशन्त्यपि तु सर्वैरजे–यत्वेनाभितो भीष्मः परशुरामादधिगतास्त्रविद्यः तथा द्रोणः तथाऽसौ (सदा) मम द्वेषी सूतपुत्रः कर्णः, न केवलमेत एव विशन्ति, किन्तु अस्मदीयैरपि योधमुख्यैस्तत्प्रतियोद्धृभिः शिखण्डिधृष्टद्युम्नादिभिः सह॥२६॥

लागि प्रार्थित भएपछि भगवान्ले देवासुर संग्राममा मारिएका दुबै तर्फका सेनाहरूमा राजाहरूका भेषमा लुकेका पृथ्वीका भारस्वरूप दुर्योधनादिको संहारका लागि मैले यो स्वरूप धारण गरेको छु यसैले तिमी न डराउ यो सूचित गर्नको लागि अर्जुनलाई यो रूप देखाउनु भयो। अर्जुन हुनेवाला आफ्नो विजय र शत्रुहरूका हारलाई 'मम......मिच्छसि' भनेर आएका छन्, त्यसलाई उहाँको कृपाले प्राप्त दिव्यदृष्टिले हेर्दै भन्दछन्। यी सबै धृतराष्ट्रका छोराहरू दुर्योधनादि, शल्य, जयद्रथ आदि राजाहरू आफ्ना समूहहरूका सहित हजुरका मुखमा प्रवेश गरिरहेका छन्, केवल दुर्योधनादि मात्र प्रवेश गरेका होईनन् परशुरामबाट अस्त्र विद्या सिकेका अजेय भीष्म, द्रोण तथा मेरो द्वेषी सूतपुत्र कर्ण पनि मुखमा पसिरहेको छ। केवल यी मात्रै पनि होईनन् मेरो तर्फका शिखण्डी, धृष्टद्युम्नादि मुख्य योद्धा पनि सँगसँगै हजुरका मुखमा पसिरहेका छन्॥२६॥

–★–★–★–

**वक्त्राणि ते त्वरमाणा विशन्ति दंष्ट्राकरालानि भयानकानि।**
**केचिद्विलग्ना दशनान्तरेषु सन्दृश्यन्ते चूर्णितैरुत्तमाङ्गैः॥**

**ती सबै हजुरको विकराल दाह्राहरूले भयंकर देखिएको मुखमा अत्यन्त छिटो–छिटो गरेर प्रविष्ट भईरहेका छन्। उनीहरूमा त कतिपय चूर्णभएको शिर सहित हजुरको दाँतका बीचमा फँसेको देखिईरहेका छन्॥२७॥**

एते सर्वे त्वरमाणा वेगवन्तस्ते तव दंष्ट्राभिः करालानि भयङ्कराणि वक्त्राणि विशन्ति तत्र केचित् चूर्णितैरुत्तमा–ङ्गैश्चूर्णीकृतशिरोभिरुपलक्षिता दशनान्तरेषु दन्तानां सन्धिषु विशेषेण लग्ना दृश्यन्ते॥२७॥

कराल दाह्राहरूले भयंकर भएको हजुरका मुखमा ती शिघ्रातिशिघ्र प्रवेश गरिरहेका छन्। कतिका शिर फुटेका छन् र कति त हजुरका दाह्राहरूमा चेपिएका, झुण्डिएका छन्॥२७॥

–★–★–★–

**यथा नदीनां बहवोऽम्बुवेगाः समुद्रमेवाभिमुखा द्रवन्ति।**
**तथा तवामी नरलोकवीरा विशन्ति वक्त्राण्यभिविज्वलन्ति॥**

**जस्तै कि धेरै नदीहरूको जल–प्रवाह स्वभाविक नै समुद्र तिर दौडिन्छ त्यस्तै नै ती संसारका महान् शूरवीर हजुरको देदीप्यमान मुखमा प्रवेश गरिरहेका छन्॥२८॥**

ते कथं प्रविशन्तीत्यपेक्षायां तेषां प्रवेशस्य दृष्टान्तमाह यथेति। यथा नदीनां नानामार्गगानां बहवोऽम्बूनां वेगाः प्रवाहाः समुद्राभिमुखाः सन्तः समुद्रमेव द्रवन्ति प्रविशन्ति, तथा नरलोकवीरा अभिविज्वलन्ति सर्वतः प्रदीप्यमानानि तव वक्त्राणि विशन्ति॥२८॥

ती कसरी मुखमा पस्दछन् त्यसको उपमा दिनुहुन्छ। जस्तो नदिहरूका अनेक धाराहरू समुद्रमुख भएर समुद्रमा नै झर्दछन्, त्यसै गरी यी नरलोकका वीर चारैतिर बाट हजुरका मुखमा प्रवेश गर्दछन्॥२८॥

–★–★–★–

**यथा प्रदीप्तं ज्वलनं पतङ्गा विशन्ति नाशाय समृद्धवेगाः।**
**तथैव नाशाय विशन्ति लोकास्तवापि वक्त्राणि समृद्धवेगाः॥**

**जस्तो पुतलीहरू मोहवश आफ्नो नाश गर्न अत्यन्त वेगले दौडिएर प्रज्वलित अग्निमा प्रवेश गर्दछन् त्यस्तै नै यी सबैजना मोहवश आफ्नो नाश गर्नका लागि बडो बेगले दौडिदै हजुरको मुखमा प्रवेश गरिरहेका छन्॥२९॥**

अबुद्धिपूर्वकप्रवेशे नदीवेगं दृष्टान्तमुक्त्वा बुद्धिपूर्वकप्रवेशे दृष्टान्तमाह–यथेति। यथा पतङ्गाः शलभाः समृद्धवेगाः सन्तः प्रदीप्तं ज्वलनमग्निं बुद्धिपूर्वकं नाशाय मरणायैव विशन्ति, तथैव नाशायैवैते लोका दुर्योधनादयः सर्वेऽपि समृद्धिवेगास्तव वक्त्राणि प्रविशन्ति॥२९॥

अबुद्धिपूर्वक प्रवेशमा नदीको पानीको दृष्टान्त दिए। अब बुद्धि पूर्वक प्रवेशमा दृष्टान्त दिन्छन्। जस्तो जानि–जानि पुतलीहरू एकदम वेगपूर्वक दौड़िदै गएर बलिरहेको आगो मा मर्नका लागि पर्दछन् त्यसै गरी यी सबै दुर्योधनादि पनि नाशका लागि बड़ो तेज पूर्वक हजुरका मुखमा पसिरहेका छन्॥२९॥

–★–★–★–

**लेलिह्यसे ग्रसमानः समन्ताल्लोकान्समग्रान्वदनैर्ज्वलद्भिः।**
**तेजोभिरापूर्य जगत्समग्रं भासस्तवोग्राः प्रतपन्ति विष्णो॥**

**हजुर आफ्नो प्रज्वलित मुखद्वारा सम्पूर्ण लोकहरूको ग्रसन गर्दै उनीहरूलाई सबैतिरबाट बारम्बार चाटिरहनु भएको छ; र हे विष्णु! हजरको त्यो उग्र प्रकाश आफ्नो तेजले सम्पूर्ण जगत्‌लाई परिपूर्ण गरेर सबैलाई तप्त गरिरहेको छ॥३०॥**

त्वं त्वेतान्निरवशेषान् ग्रसन् हृष्टः प्रतीयस इत्याह–लेलिह्यसे इति। वेगेन विशतो लोकान् दुर्योधनादीन्समग्रान् राज्ञो ज्वलद्भिर्वदनैः समन्तात्सर्वतः कोपावेशेन ग्रसमानः तद्रु–धिरासिक्तावोष्ठपुटौ महासिंह इव लेलिह्यसे, पुनः पुनरा–श्वादयसि। किञ्च हे विष्णो! तवोग्रा घोरा असह्या भासो रश्मयस्तेजोभिः प्रकाशैर्जगत्समग्रमापूर्य्य व्याप्य प्रतपन्ति सन्तापयन्ति॥३०॥

समग्ररूपमा यिनीहरूलाई खाएर प्रसन्न देखिईरहनु भएको छ। यसैलाई भन्दछन्। वेगसँग दौड़िदै पसेका दुर्योधनादि सबै राजाहरूलाई, प्रज्वलित मुख द्वारा चारै तिरबाट क्रोधको आवेशमा हजुर खाईरहनु भएको छ। र उनिहरूका रुधिरले भिजेका आफ्ना ओठहरूलाई हजुर महासिंहको समान चाटिरहनु भएको छ र बारम्बार स्वाद लिईरहनु भएको छ। र पनि, हे विष्णो! हजुरको असह्य किरणहरू सम्पूर्ण जगत्‌लाई व्याप्त गरेर तपाई रहेका छन्॥३०॥

–★–★–★–

**आख्याहि मे को भवानुग्ररूपो नमोऽस्तु ते देववर प्रसीद।**
**विज्ञातुमिच्छामि भवन्तमाद्यं न हि प्रजानामि तव प्रवृत्तिम्॥**

**मलाई यो भन्नुहोस कि उग्ररूपवाला हजुर को हुनुहुन्छ? हे देउताहरूमा श्रेष्ठ हजुरलाई नमस्कार छ। हजुर प्रसन्न हुनुहोस। आदिरूप हजुरलाई म तात्त्विक तरिकाले जान्न चाहन्छु; किनकी म हजुरको प्रवृत्तिलाई राम्रोसँग जान्दिन॥३१॥**

पूर्वं "द्रष्टुमिच्छामि ते रूपमैश्वरं पुरुषोत्तमो"ति पारमेश्वरं रूपं साक्षात्कर्त्तुं प्रार्थितेन भगवता निरङ्कुशैश्वर्ययुक्तं रूपं प्रदर्शितमिदानीमतिघोररूपमाविष्कृतं दृष्ट्वा सन्दिह्य पृच्छति–आख्याहीति। उग्ररूपोऽतिकरालाकृतिः को भवानिति मे मह्यमनुग्राह्याय आख्याहि कथय। ते तुभ्यं नमोऽस्तु। हे देववर! प्रसीद प्रसन्नो भव। भवन्तमाद्यं

'द्रष्टुमिच्छामि....पुरुषोत्तम!' भनेर अर्जुनले परमेश्वरको साक्षात् रूपलाई हेर्ने प्रार्थना गरे। तब भगवान्‌ले ऐश्वर्य युक्त आफ्नो निरंकुश रूप देखाउनु भयो। अब यस समयमा भगवान्‌को घोर रूपलाई देखेर अर्जुन शंकाले सोध्छन्। यस अति कराल रूपवाला हजुर को हो? म माथि कृपा गरेर हजुर भन्नुहोस। हजुरलाई नमस्कार छ। हे देवहरूमा श्रेष्ठ! हजुर प्रसन्न हुनुहोस। सबैको आदिपुरुष हजुरलाई म विशेषरूपले जान्न चाहन्छु। भगवान् यदि सोध्नुहुन्छ

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

पुरुषं विशेषेण ज्ञातुमिच्छामि। ननु त्वत्प्रार्थनयैव मयैतदैश्वरं रूपमाविष्कृतं स एव वासुदेवोऽस्मि कथं पुनः को भवानिति पृच्छसीत्यत आह। नहीति। हि यतस्तव प्रवृत्तिं न जानामि। एवं संहर्त्तृरूपेण किं कर्त्तुं प्रवृत्तोऽसि मदनुग्रहायैश्वररूप प्रदर्शने प्रवृत्तस्य घोररूपाविष्करणे कोऽभिप्राय इति भावः॥३१॥

कि तिमी यस्तो किन प्रश्न गर्दछौ, तिम्रै प्रार्थनाले त मैले यस्तो रूप देखाएको छु, म त्यही वासुदेव हुँ। त यसको उत्तरमा अर्जुन भन्दछन् कि हजुरका प्रवृत्तिलाई म संझिन्न। कहाँ त आफ्नो ईश्वरीय रूप देखाउन लाग्नुभएको थियो तर देखाउनु भयो यो संहारक भयानक रूप। यसको मतलब के हो? यस संहारक रूपले हजुर के गर्न लाग्नु भएको छ॥३१॥

-★-★-★-

## श्रीभगवानुवाच

## कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धो लोकान् समाहर्तुमिह प्रवृत्तः।
## ऋतेऽपि त्वां न भविष्यन्ति सर्वे येऽवस्थिताः प्रत्यनीकेषु योधाः॥

**श्रीभगवान्ले भन्नुभयो- म सम्पूर्ण लोकहरूको नाश गर्ने अत्यन्त बढेको काल हुँ र यस समय म यी सबैको संहार गर्नको लागि यहाँ आएको छु। तिम्रो प्रतिपक्षमा जुन योद्धाहरू उभिएका छन् ती सबै तिमीले युद्ध नगरे पनि रहने छैनन् अर्थात् तिमीले युद्ध नगरे पनि मर्नेछन्॥३२॥**

एवं प्रार्थितः स्वस्य घोररूपस्य प्रवत्तिनिमित्तं ज्ञापयन् श्रीभगवानुवाच-कालोऽस्मीति। कलयति गणयति लोकानामवसानमिति कालः, सोऽहमस्मि। अत एव लोकक्षयकृत् प्रवृद्धः स्वशक्तिसामर्थ्येन वृद्धिं गतः। किं कर्त्तुं तव प्रवृत्तिरित्यस्योत्तरमाह-लोकान्दुर्योधनादीन् जनान्समाहर्त्तुं भक्षयितुमिहास्मिन्समये प्रवृत्तोऽस्मि। अत ऋतेऽपि त्वामर्जुनं योद्धारमृतेऽपि त्वदुद्योगं विनाऽपि मत्सङ्कल्पादेव प्रत्यनीकेषु प्रतिपक्षसैन्येषु ये योधा योद्धारो भीष्मद्रोणकर्णप्रभृतयोऽवस्थितास्ते सर्वेऽपि न भविष्यन्ति विनंक्ष्यन्तीत्यर्थः॥३२॥

यस प्रकारको प्रार्थना सुनेर आफुले घोर रूप धारण गरेको कारण बताउनु हुन्छ। म काल हुँ। लोकहरूका नाश गर्नका लागि आफ्नो शक्तिले बढेको छु। यस समय दुर्योधनादि लाई नष्ट गर्नका लागि प्रवृत्त भएको छु। तिम्रो उद्योगको बिना पनि मेरो संकल्पले नै शत्रु पक्ष मा स्थित सबै भीष्म, द्रोण, कर्ण आदि योद्धा नष्ट हुनेछन्॥३२॥

-★-★-★-

## तस्मात्त्वमुत्तिष्ठ यशो लभस्व जित्वा शत्रून् भुङ्क्ष्व राज्यं समृद्धम्।
## मयैवैते निहताः पूर्वमेव निमित्तमात्रं भव सव्यसाचिन्॥

**यसैले तिमी युद्धको लागि ऊठ र यशलाई प्राप्त गर तथा शत्रुहरूलाई जितेर धन-धान्यले सम्पन्न राज्यलाई भोग। यी सबै मेरोद्वारा पहिले देखि नै मारिएका छन्। हे सव्यसाचिन्! (दुबै हातले बाण चलाउन सक्ने) तिमी यिनीहरूलाई मार्न निमित्त मात्रै बनिदेऊ॥३३॥**

एवं च यथाऽहं स्वातन्त्र्येण सर्वलोकस्य पालकस्तथा संहर्त्ताऽप्यहमेव स्वतन्त्रोऽन्येषां मदधीनं कर्त्तृत्वमनु-सन्धेयमित्याह-तस्मादिति। यस्मादहमेव संहर्त्ता तस्मात्त्वं तान् पति युद्धायोत्तिष्ठ। देवैरपि दुर्जया भीष्मद्रोणादयोऽर्जुनेन

म जसरी स्वतन्त्रता पूर्वक सबै लोकहरूका पालक छु, त्यसै गरी स्वतन्त्ररूपले तिनीहरूका संहारक पनि हुँ। सबैका कर्त्तृत्व मेरो नै अधीन छ। यसैलाई भन्नुहुन्छ। म नै उनीहरूको संहारक हुँ। यसैले तिमी उनीहरूका साथ युद्ध गर्नका लागि ऊठ, तयार होऊ। देवताहरूबाट पनि अजेय भीष्म, द्रोण, कर्ण आदिलाई अर्जुनले

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

जिता इत्येवम्भूतं यशो लभस्व। ऊर्जिताञ्छत्रून् दुर्योधनादीन् जित्वा समृद्धं राज्यं भुंक्ष्व। एते च तव शत्रवस्त्वदीययुद्धात्पूर्वमेव मयैव कालात्मना निहता हतायुषः, अतः त्वमेतेषां हनने निमित्तमात्रं भव, मया हन्यमानानां शस्त्रादिस्थानीयो भव। हे सव्यसाचिन्! सव्येन वामहस्तेनापि शरान्सचितुं सन्धातुं शीलं यस्येति तथा हस्तद्वयेन सम्प्रहर्त्तुं समर्थेत्यर्थः ॥३३॥

जीते, यो यश लाभ गर। बलवान् दुर्योधनादि शत्रुहरू माथ विजय प्राप्त गरेर वैभवशाली राज्यलाई भोग। यी तिम्रा शत्रुहरूलाई लड़ाईंभन्दा पहिले नै कालात्मक मैले आयुहीन गरिदिएको छु। हे देब्रेहातले बाण चलाउने अर्जुन! तिमी यी शत्रुहरूलाई मार्नमा केवल निमित्त बन अर्थात् मबाट मारिनेहरूका लागि शस्त्र आदिको स्थानमा बस ॥३३॥

–★–★–★–

## द्रोणं च भीष्मं च जयद्रथं च कर्णं तथान्यानपि योधवीरान्।
## मया हतांस्त्वं जहि मा व्यथिष्ठा युध्यस्व जेतासि रणे सपत्नान्॥

**द्रोण, भीष्म, जयद्रथ, कर्ण तथा अरू पनि सबै मद्वारा मारिएका शूरवीरहरूलाई तिमी मार। तिमीले चिन्ता गर्नुपर्दैन। युद्धमा तिमी अवश्य शत्रुहरूलाई जित्नेछौ ॥३४॥**

ननु द्रोणो मम गुरुर्धनुर्वेदाचार्यः परशुरामाल्लब्धदिव्यास्त्रः तथा भीष्मोऽपि शन्तनुवरलब्धस्वच्छन्दमृत्युर्दिव्यास्त्रसम्पन्नश्च द्वन्द्वयुद्धे परशुरामेणाप्यजेयः, तथा जयद्रथोऽस्मज्जयार्थमाराधितगिरिशो दिव्यास्त्रसम्पन्नश्च, तथा कर्णः सूर्यस्यानन्यभक्तो दिव्यास्त्रसम्पन्नश्च, अन्ये च कृपाश्वत्थामप्रभृतयो दुर्जयवीरा विद्यन्ते तेषु सत्सु कथं शत्रून् जित्वा राज्यं भोक्ष्ये। कथं वा यशो लप्स्ये। इत्यर्जुनस्याशङ्कां निरासयन्नाह–द्रोणं चेति। द्रोणं चेति। द्रोणभीष्मकर्णादींस्त्वयाऽजेयत्वेन कल्पितान्सर्वानेव योधवीरान्कृतापराधतया मयैव कालात्मना हतान् हतायुषस्त्वं जहि। त्वत्संयुगमात्रावशेषितप्राणानां हनने न ते प्रयासो भविष्यति। अतो मां व्यथिष्ठाः। तदजेयत्वनिमित्तां गुरुबन्धुवधनिमित्तां वा व्यथां पीडां मा गाः। अतो निःशङ्को युद्ध्यस्व, रणे संग्रामे सपत्नान् शत्रून् जेता जेष्यसि ॥३४॥

द्रोण मेरा गुरु हुन्, धनुर्वेदका आचार्य हुन्, र उहाँले परशुराम सँग दिव्य अस्त्र प्राप्त गर्नुभएको छ, भीष्मले शान्तनुबाट इच्छा मृत्युको वर पाएका, दिव्यास्त्रधारी र द्वन्द्वयुद्धमा परशुराम भन्दा पनि अजेय हुनुहुन्छ। र जयद्रथ ले पनि हामीलाई जीत्नको लागि महादेवजीको आराधना गरेर दिव्यास्त्र प्राप्त गरिसकेको छ। कर्ण सूर्यको अनन्य भक्त तथा दिव्यास्त्रले युक्त छ। यसै प्रकार कृपाचार्य, अश्वत्थामा आदि अनेकौं दुर्जय वीर छन्। यिनीहरू हुँदा-हुँदै कसरी राज्य पाउन सक्दछु र कसरी यश पाउन सक्दछु? अर्जुनको यश शंकाको उत्तरमा भगवान् भन्नुहुन्छ। भीष्म, द्रोण, कर्ण आदि जुन वीरहरूलाई तिमी अजेय संझिरहेका छौ, मेरो अपराध गरेको हुँदा कालात्मक मैले पहिले नै तिनीहरूलाई आयुहीन गरिदिएको छु। अब तिमी उनीहरूलाई मार। केवल तिम्रो युद्धभरीका लागि मात्र तिनीहरूको आयु बँचेको छ। यिनीहरूलाई मार्न तिमीलाई अलिकति पनि कष्ट हुँदैन। यसैले तिमी उनीहरू अजेय भएको वा गुरु, बन्धु-बध हुनेछ भन्ने कारण दुःखी हुनु पर्दैन। निडर भएर लड़। संग्राममा तिम्रो नै अवश्य जीत हुनेछ ॥३४॥

–★–★–★–

## सञ्जय उवाच

## एतच्छ्रुत्वा वचनं केशवस्य कृताञ्जलिर्वेपमानः किरीटी।
## नमस्कृत्वा भूय एवाह कृष्णं सगद्गदं भीतभीतः प्रणम्य॥

**संजयले भने- भगवान् केशवको यो वचन सुनेर भयले काँप्दै किरीटधारी अर्जुन हात जोडेर नमस्कार गर्दै फेरि पनि डर**

**मान्दै प्रणाम गर्दै गद्गद् वाणीले भगवान् श्रीकृष्ण सँग भन्नथाले॥३५॥**

ततः किम्वृत्तमिति धृतराष्ट्रापेक्षायां सञ्जय उवाच–एतदिति। एततपूर्वं पद्यत्रयेणोक्तं केशवस्य वचनं श्रुत्वा कृताञ्जलिः सम्पुटीकृतहस्तः वेपमानोऽत्याश्चर्यघोरासह्यतेजोरूपदर्शनेन कम्पमानः किरीटी अर्जुनः कृष्णं स्वभक्तपापकर्षकं नमस्कृत्वा नमस्कृत्य भूयः पुनरप्याह उक्तवान् कथमाह भयहर्षाद्यावेशेनाव्यक्तस्खलिताक्षरोच्चारणादिरूपः कण्ठविकारो गद्गदहस्तेन सह वर्त्तते इति सगद्गदं यथा स्यात्तथा भीतभीतः भीतादपि भीतोऽतिशयेन भीतः सन् अतिनम्रीभूयेत्यर्थः॥३५॥

फेरि के भयो भनेर धृतराष्ट्रले सोधेपछि संजय भन्दछन्। पछाडि भनिएका भगवान् श्रीकृष्णको वचनलाई सुनेर हात जोडेर आश्चर्यजनक, घोर र असह्य तेजवाला रूपलाई देखेर थर-थर काँप्दै अर्जुनले आफ्ना भक्तका पापलाई तानेर निकालि दिने श्रीकृष्णलाई नमस्कार गरेर गद्गद् वचनले, धेरै डराएर, नम्रता पूर्वक भन्नलागे। भय, हर्ष आदिको कारण उनको वचन गद्गद् भयो॥३५॥

–★–★–★–

## अर्जुन उवाच

## स्थाने हृषीकेश तव प्रकीर्त्या जगत्प्रहृष्यत्यनुरज्यते च।
## रक्षांसि भीतानि दिशो द्रवन्ति सर्वे नमस्यन्ति च सिद्धसङ्घाः॥

**हे हृषीकेश! हजुरको नाम, गुण, लीलाहरूको कीर्तन गर्नाले यो सम्पूर्ण जगत् हर्षित भईरहेको छ र सबैलाई अनुराग र प्रेम प्राप्त भईरहेको छ। हजुरको नाम, गुण आदिको कीर्तनले भयभीत भएर राक्षसहरू दशै दिशाहरूमा भागिरहेका छन् र सम्पूर्ण सिद्धगणहरू हजुरलाई नमस्कार गरिरहेका छन्। यो सबै हुनु उचित पनि हो॥३६॥**

अर्जुन उवाच–स्थान इत्येकादशभिः। स्थाने इत्यव्ययं युक्तमित्यस्मिन्नर्थे। हे हृषीकेश! सर्वेन्द्रियप्रवर्त्तक यतस्त्वमेवम्भूतात्यद्भुतप्रभावो भक्तवत्सलश्च अतस्तव प्रकीर्त्त्या यशःप्रकीर्त्तनेन श्रवणेन च न केवलमहमेव हृष्यामि। किन्तु देवगन्धर्वयक्षकिन्नरादिजगत् चेतनमात्रं प्रहृष्यति, प्रकर्षेण हर्षमाप्नोति। तथाऽनुरज्यते चानुरागम् उपैति, एतत् स्थाने युक्तमित्यर्थः। तथा रक्षांसि रक्षोगणानि भीतानि दिशो द्रवन्ति सर्वासु दिक्षु पलायन्ते इति यत्। तथा सिद्धानां तपोमन्त्रादिसिद्धिं प्राप्तानां सङ्घाः समूहा नमस्यन्ति चेति यत्, एतत्सर्वं स्थाने युक्तमेवेत्यर्थः॥३६॥

हे हृषीकेश! (सबै इन्द्रियहरूका स्वामी) हजुर यस्ता अद्भुत प्रभाववाला र भक्तवत्सल हुनुहुन्छ, यसैले हजुरको यश कीर्त्तनको कारण केवल म मात्र होईन, देव, किन्नर, गन्धर्व, यक्ष आदि सबै चेतनामय जगत् प्रसन्न भईरहेका छन्, तथा प्रेमपूर्ण छन् र यस्तो हुनु पनि स्वाभाविक नै हो। राक्षस डराएर चारै तिर भागिरहेका छन् र सिद्धहरूका समूह हजुरलाई प्रणाम गर्दछन्। यो पनि स्वभाविक नै हो॥३६॥

–★–★–★–

## कस्माच्च ते न नमेरन्महात्मन् गरीयसे ब्रह्मणोऽप्यादिकर्त्रे।
## अनन्त देवेश जगन्निवास त्वमक्षरं सदसत्तत्परं यत्॥

**हे महात्मन्! गुरुहरूका पनि गुरु र ब्रह्माको पनि आदिकर्ता हजुरलाई ती सिद्धगणहरू नमस्कार पनि किन नगरुन्?**

**किनकी हे अनन्त! हे जगन्निवास! हजुर अक्षरस्वरूप हुनुहुन्छ; हजुर सत् पनि हुनुहुन्छ र असत् पनि र त्यो सत्–असत् भन्दा पर जे पनि छ त्यो पनि हजुर नै हुनुहुन्छ॥३७॥**

युक्ततामेवोपपादयति–कस्मादिति। हे महात्मन्! ते तुभ्यं महर्षिसिद्धसङ्घाः कस्मान्न नमेरन् नमस्कारं न कुर्युः, कथम्भूताय ते ब्रह्मणो हिरण्यगर्भस्यापि गरीयसे गुरुतमाय। आदिकर्त्रे ब्रह्मणोऽपि जनकाय। हे अनन्त! त्रिविध परिच्छेदशून्य! देवेश सर्वदेवाधीश जगन्निवास! सर्वचेतनाचेतनजगदाश्रय! चेतनाचेतनसर्ववस्तुरूपोऽपि त्वमेवेत्याह–त्वमक्षरमिति। न क्षरतीत्यक्षरं क्षेत्रज्ञस्वरूपं "न जायते म्रियते वा विपश्चिदि"त्यादिश्रुतिसिद्धो जीवात्माऽक्षरशब्दवाच्यस्त्वमेव। सदसच्छब्दवाच्यं कार्यकारणोभयावस्थं प्रकृतितत्त्वं त्वमेव। तत्परं यत् यस्मात्सदसद्रूपप्रकृतितत्संसृष्टाज्जीवात्परं तुरीयं तत्त्वं यत्तदपि त्वमेव। तस्मातसर्वे नमन्तीति न किमपि चित्रमित्यर्थः॥३७॥

**औचित्यको नै उपपादन गर्दछन्। हे महात्मन्! हजुरलाई महर्षिहरू र सिद्धहरूका समूह किन प्रणाम नगरुन् त? हजुर त ब्रह्मा भन्दा पनि ठूलो हुनुहुन्छ र आदिकर्त्ता पनि हुनुहुन्छ अर्थात् ब्रह्माका पिता हुनुहुन्छ। हे अनन्त! अर्थात् आदि, मध्य र अन्त्यले हीन, सबै देश, काल र वस्तुहरूमा व्यापक, हे सबै देवहरूका ईश्वर, हे जगन्निवास, अर्थात् सबै चेतन र अचेतन जगत्का आश्रय, हजुर अक्षर अर्थात् अविनाशी, क्षेत्रज्ञ स्वरूप, अक्षर शब्दले वाच्य जीवात्मा हजुर नै होईसिन्छ। जसको विषयमा श्रुतिमा भनिएको छ- 'न जायते म्रियते वा विपश्चित'। फेरि सत् र असत् शब्दले वाच्य कार्य कारणरूप प्रकृतितत्त्व हजुर नै हो। सत् असत् रूप प्रकृतिसृष्ट जीवहरू भन्दा पर जो तुरीय तत्त्व छ, त्यो पनि हजुर नै हो। यसैले सबै हजुरलाई नमस्कार गर्दछन्। यसमा अलिकति पनि विचित्रता वा आश्चर्य गर्ने कुरा छैन॥३७॥**

–★–★–★–

## त्वमादिदेवः पुरुषः पुराणस्त्वमस्य विश्वस्य परं निधानम्।
## वेत्तासि वेद्यं च परं च धाम त्वया ततं विश्वमनन्तरूप॥

**हजुर नै आदिदेव र पुराण पुरुष हो तथा हजुर नै यस संसारको परम आश्रय हुनुहुन्छ। हजुर नै सबैलाई जान्ने, हजुर नै जानिन योग्य र परमधाम हुनुहुन्छ। हे अनन्तरूप! हजुरद्वारा नै सम्पूर्ण संसार व्याप्त छ॥३८॥**

किञ्च–त्वमिति। त्वमादिदेवो देवानामादिः, यतः पुराणोऽनादिः पुरुषः अतस्त्वमस्य विश्वस्य रं निधानं निधीयतेऽस्मिन्निति निधानं विश्वस्यात्मतया परमाधारभूतस्त्वमेवेत्यर्थः। विश्ववेत्ता प्रत्यक्षतया ज्ञाता त्वमसि। वेद्यं च वस्तुजातं त्वमेव। परं च धाम स्थानं वैष्णवं पदं वैकुण्ठाख्यं त्वमेव। अतएव हे अनन्तरूप! त्वया विश्वं ततं व्याप्तम्। एतैरपि विशेषणैस्त्वमेव नमस्कार्य इति भावः॥३८॥

**हजुर देउताहरूका पनि आदि होईसिन्छ। हजुर सनातन पुरुष हो र यस्तो भएका कारण संसारको हजुर नै निधान हुनुहुन्छ अर्थात् विश्वको आत्मा हुनाले हजुर नै त्यसको परम आधारभूत होईसिन्छ। हजुर नै यस विश्वको प्रत्यक्ष ज्ञाता हुनुहुन्छ। ज्ञातव्य वस्तु पनि हजुर नै हो। वैकुण्ठ नामक परमधाम पनि हजुर नै हो। हे अनन्तरूप! हजुरबाटै यो सारा संसार व्याप्त छ। भाव यो कि यी सबै विशेषणहरूले युक्त भएको ले हजुर नै नमस्कार गर्न योग्य हुनुहुन्छ॥३८॥**

–★–★–★–

## वायुर्यमोऽग्निर्वरुणः शशाङ्कः प्रजापतिस्त्वं प्रपितामहश्च।
## नमो नमस्तेऽतु सहस्रकृत्वः पुनश्च भूयोऽपि नमो नमस्ते॥

**हजुर नै वायु, यम, अग्नि, वरुण, चन्द्रमा, दक्षआदि प्रजापति, र प्रपितामह (ब्रह्माजीको पनि पिता) हुनुहुन्छ। हजुरलाई**

**हजारौं पल्ट नमस्कार होस! नमस्कार होस! र फेरि पनि हजुरलाई बारम्बार नमस्कार छ, नमस्कार छ॥३९॥**

किञ्च–वायुरिति। वाय्वादिरूपस्त्वं, सर्वप्रजायाः सन्ततेः पतिः सर्वस्य जनकः पितामहस्त्वं तस्यापि जनकत्वात् प्रपितामहश्च त्वमेव। एव सर्वात्मभूतोऽसि, तस्मात्ते तुभ्यं सहस्रकृत्वः सहस्रवारान्नमो नमोऽस्तु। पुनश्च भूयोऽपि नमो नमः॥३९॥

वायु, मन, अग्नि, वरुण, चन्द्रमा आदि हजुर नै हो। सबै प्रजाका पति अर्थात् पितामह हजुर नै हो। पितामहको पनि जनक प्रपितामह पनि हजुर नै हो। यस प्रकार हजुर सर्वात्मा स्वरूप हुनुहुन्छ। यसैले हजुरलाई बारम्बार हजारौं पल्ट नमस्कार छ पुनः नमस्कार छ॥३९॥

–★–★–★–

**नमः पुरस्तादथ पृष्ठतस्ते नमोऽस्तु ते सर्वत एव सर्व।**
**अनन्तवीर्यामितविक्रमस्त्वं सर्वं समाप्नोषि ततोऽसि सर्वः॥**

**हे सर्वस्वरूप! हजुरलाई अगाडीबाट पनि नमस्कार छ र पछाडिबाट पनि नमस्कार छ। हजुरलाई सबैतिरबाट नमस्कार छ। हे अनन्तवीर्य! असीम पराक्रमवाला हजुरले सबैलाई एकदेशमा समेट्नु भएको छ यसैले सबैथोक हजुर नै हुनुहुन्छ॥४०॥**

अत्याश्चर्यरूपं भगवन्तं दृष्ट्वाऽत्यद्भुतभक्तिप्रवाहवेगेन सर्वतो नमस्करोति। ते तुभ्यं पुरस्तादग्रभागेऽथ पृष्ठतोऽपि नमोऽस्तु। किं बहुना सर्वत एव ते नमोऽस्तु। सर्वतः कृतो नमस्कारो मे कथं स्यादित्यत आह–हे सर्वेति!। कथमहं सर्व इति चेत्तत्राह हे अनन्तवीर्याऽमितविक्रमोऽपरिमित–पराक्रमस्त्वं यतः सर्वं जगत्सम्यगातमतयाऽऽप्नोषि, व्याप्नोषि। ततः सर्वोऽसि। एतेन पूर्वोक्तवाय्वादि सर्वचेतनाचेतनजगत्सामानाधिकरण्यनिर्देशस्तदात्मतया व्याप्त्यैव सूपपन्नः। नतु मायावाद्यभिमतविवर्त्ता–धिष्ठानत्वेनेति सिद्धम्॥४०॥

भगवान्को आश्चर्यरूप देखेर (चतुर्मासमा बढेका नदीको जल प्रवाहको समान) उर्लेको भक्तिले अर्जुन सम्पूर्ण प्रकारले चारै तिरबाट भगवान्लाई प्रणाम गर्दछन्। हजुरलाई अगाडी, पछाडिबाट नमस्कार छ। धेरै कुरा त के गर्नु हजुरलाई सबैतिर बाट नमस्कार छ, किनकी हजुर सर्व हुनुहुन्छ। सर्व हुने कारण भन्दछन्:- हजुर अनन्त बलवाला हुनुहुन्छ, हजुरको पराक्रम अपरिमित छ। हजुर जगत्को आत्मा हो। यसैले सारा संसारमा व्याप्त हुनुहुन्छ। यसैले हजुर सर्व हो। यसैले भगवान् चेतनमय जगत्मा तादात्म्य भेदको सहनशील अभेदरूपले व्याप्त हुनु सिद्ध भयो। मायावादिहरू विवर्ताधिष्ठान यसले सिद्ध हुँदैन॥४०॥

–★–★–★–

**सखेति मत्वा प्रसभं यदुक्तं हे कृष्ण हे यादव हे सखेति।**
**अजानता महिमानं तवेदं मया प्रमादात्प्रणयेन वापि॥**
**यच्चावहासार्थमसत्कृतोऽसि विहारशय्यासनभोजनेषु।**
**एकोऽथवाप्यच्युत तत्समक्षं तत्क्षामये त्वामहमप्रमेयम्॥**

**हजुरको यस महिमालाई नजानेर यिनी 'मेरो सखा हुन्' यस्तो मानेर मैले प्रमादले अथवा प्रेमले पनि हठपूर्वक (सोचबिचार नगरी) हे कृष्ण! हे यादव! हे सखा! यस प्रकार भनेको छुहे अच्युत! हाँसो–ठट्टामा, घुमफिरमा, सुत्दा–उठ्दा, खान–पिनको समयमा एक्लै अथवा सबैका सामुन्ने मेरो द्वारा हजुरको अपमान भएको छ; हे अप्रमेयस्वरूप! ती सबैका लागि म हजुर सँग क्षमा माग्दछु॥४१–४२॥**



अहो पुनः पुनरग्रतः पृष्ठतश्च भूयो भूयः किमिति नमस्करो–षीत्यपेक्षायां त्वन्माहात्म्यापरिज्ञानाद्यत्ते बहुशो मयाऽपरा–

अहो बारम्बार र अगाडी पछाडि किन नमस्कार गर्दछौ? यसको उत्तर अर्जुन दुई श्लोकहरूमा दिन्छन्। सबै भन्दा ठूलो हुनु,

धाः कृतास्तन्निवृत्तये इदानीं परमकारुणिकं त्वां क्षमापया-मीत्याह-सखेतीति द्वाभ्याम्। इदं सर्वगरीयस्त्वब्रह्मादि-कर्तृत्वसर्वनमस्कार्यत्वादिकं तव महिमानमजानता मया प्रमादान्मोहात्प्रणयेन स्नेहेन वा सखेति त्वं मम समानवया इति मत्वा प्रसभं विनयापेतं हठेनवा हे कृष्ण। हे यादव! हे सखेति यदुक्तम्। यच्चावहासार्थं परिहासार्थं विहार-शय्यासनभोजनेषु सहकृतेषु मयाऽसतकृतोऽसि तिरस्कृ-तोऽसि, एकः सखीन्विहाय रहसि स्थितः, अथवा तत्समक्षं तेषां परिहसतां सखीनां समक्षं साक्षात् हे अच्युत! सर्वदा नित्यैकरस! तत्सर्वमपराधजातं त्वामप्रमेयमचिन्त्यप्रभावं क्षामये क्षमापये॥४१-४२॥

**ब्रह्मादिकको पनि कर्त्ता हुनु, सबैबाट नमस्कारको योग्य हुनु आदि हजुरको महिमालाई नजानेर मैले भूलले या प्रेमले वा हजुरलाई दौंतरी उमेरको साथी मानेर हठ गरेर तिरस्कार पूर्वक हजुरलाई हे कृष्ण, हे यादव, हे सखा, आदि जो भनेको छु, र घुमफिरको बेलामा, शयनको बेला, भोजनको समय, एक्लै वा हाँसो-ठट्टा गर्दै ती साथीहरूका सामुन्ने जुन हाँसो मा हजुरको तिरस्कार गरेको छु, त्यसलाई हे अचिन्त्यशक्तिवाला अच्युत! हजुर सँग क्षमा गराउँदछु॥४१-४२॥**

-★-★-★-

## पितासि लोकस्य चराचरस्य त्वमस्य पूज्यश्च गुरुर्गरीयान्।
## न त्वत्समोऽस्त्यभ्यधिकः कुतोऽन्यो लोकत्रयेऽप्यप्रतिमप्रभाव॥

**हजुर नै यस चराचर संसारको पिता हुनुहुन्छ, हजुर नै पूजनीय हुनुहुन्छ र हजुर नै गुरुहरूका पनि गुरु हुनुहुन्छ। हे अनन्त प्रभावशाली भगवान्! यस त्रिलोकिमा हजुरको समान अर्को कोहि पनि छैन भने हजुर भन्दा ठूलो त हुन नै कसरी सक्दछ॥४३॥**

अप्रमेयत्वमेवोपपादयति-पितेति। अस्य चराचरस्य लोकस्य पिता जनकस्त्वमसि पूज्यश्चासि। गुरुश्च शास्त्रोपदेष्टा अतो गरीयान् गुरोरपि गुरुत्वेन पूज्यतमः। हे अमितप्रभाव! यत एवम्भूतस्त्वं तस्मात्त्वत्समो लोकत्रये नास्ति। यदि त्वत्सम एव नास्ति तर्हि अभ्यधिकः कुतोन्यः, त्वदधिकः कुतः स्यात्। नास्ति नासीन्न भविष्यत्ये-वेत्यर्थः॥४३॥

**अप्रेमयताको वर्णन गर्दछन्- यस चराचर लोकको पिता हजुर नै हो, पूज्य हुनुहुन्छ, शास्त्रोपदेशक गुरुका पनि गुरु हुनाले अधिक पूजनीय हुनुहुन्छ। हे अप्रतिम स्वभावभएका, हजुर यस्तो हुनुहुन्छ यसैले तीनै लोकहरूमा हजुरको समान कोही पनि छैन। यदि हजुरको समान नै कोही छैनन् भने ठूला त कसरी हुन सक्दछन्? भाव यो कि हजुरको समान न कोही छ, न भएको छ, न त हुन्छ नै॥४३॥**

-★-★-★-

## तस्मात्प्रणम्य प्रणिधाय कायं प्रसादये त्वामहमीशमीड्यम्।
## पितेव पुत्रस्य सखेव सख्युः प्रियः प्रियायार्हसि देव सोढुम्॥

**यसैले स्तुती गर्नयोग्य ईश्वर हजुरलाई म लम्पसार परि प्रणाम गरेर प्रसन्न गर्न चाहन्छु। जसरी पिता पुत्रको, मित्र मित्रको, पति पत्नीको अपमान सहन्छ, यसै गरी हे देव! मद्वारा गरिएको अपमान सहनमा अर्थात् क्षमा गर्नमा हजुर समर्थ हुनुहुन्छ॥४४॥**

एवे सर्वोत्तमत्वेन संस्तुत्य, पूर्वपर्चितसौम्यरूपदर्शन-काङ्क्षया लोकसिद्धप्रियसम्बन्धनिदर्शनेन भगवन्तं प्रसादाभिमुखीकरोति-तस्मादिति। यस्मात्त्वं सर्वस्य पिता

**यस प्रकार सर्वोत्तमरूपले स्तुति गरेर पूर्वपरिचित सौम्यरूपको दर्शनका लागि लोक प्रसिद्ध प्रिय सम्बन्धको निर्देश गरेर भगवान्लाई प्रसन्न गर्दछन्। हजुर सबैका पिता, परमगुरु, पूज्य**

गुरुतमः पूज्यश्चातिशयसाम्यरहितश्च तस्मात् प्रणम्य, कथं प्रणिधाय कायम्। भूमौ दण्डवन्निपतय ईशं सर्वलोकस्वामिनमीड्यं स्तुत्यं त्वामहं प्रसादये, मद्विषयानुग्रहाभिमुखं कामये। हे देव! सर्वसम्बन्धिरूपेण दीव्यति व्यवहरतीति तथा। कृतापराधस्यापि पुत्रस्य पितेव, सख्युः सखेव, प्रियायाः प्रिय इव, प्रणामपूर्वकं प्रार्थितः सर्वापराधं सोढ्वा प्रसीदति तथा ममापराधं सोढुमर्हसि। प्रियः प्रियायार्हसीत्यत्रेवशब्दस्य लोपः सन्धिश्चार्षः॥४४॥

र श्रेष्ठ तथा साम्यरहित हुनुहुन्छ, यसैले पृथ्वीमा दण्डवत-प्रणाम गरेर हजुरलाई जो सबै लोकहरूका स्वामी र स्तुति योग्य हुनुहुन्छ प्रसन्न गर्दछु। हे देव! अर्थात् सबै सम्बन्धीरूपले व्यवहार गर्नेहरू, जस्तो अपराधी पुत्रको पिता, मित्रको मित्र र पत्नीको पति प्रणामपूर्वक प्रार्थना गरेमा सबै अपराध क्षमा गरिदिन्छन्, त्यस्तै नै हजुर मेरो सबै अपराधलाई सहनु हुनेछ अर्थात् क्षमा गरिदिनु हुनेछ॥४४॥

-★-★-★-

**अदृष्टपूर्वं हृषितोऽस्मि दृष्ट्वा भयेन च प्रव्यथितं मनो मे।**<br>
**तदेव मे दर्शय देवरूपं प्रसीद देवेश जगन्निवास॥**<br>
**किरीटिनं गदिनं चक्रहस्तमिच्छामि त्वां द्रष्टुमहं तथैव।**<br>
**तेनैव रूपेण चतुर्भुजेन सहस्त्रबाहो भव विश्वमूर्ते॥**

**जुन रूपलाई पहिले कहिल्यै देखिन त्यस रूपलाई देखेर म हर्षित भईरहेको छु; साथैसाथ भयले मेरो मन अत्यन्त व्यथित भई रहेको छ। अतः हजुर मलाई आफ्नो उहि देवरूप शान्त विष्णुरूपलाई देखाउनुहोस। हे देवेश! हे जगन्निवास! हजुर प्रसन्न हुनुहोस। म हजुरलाई त्यसरी नै किरीट-(मुकुट)धारी, गदाधारी र हातमा चक्र लिएको अर्थात् चतुर्भुजरूपमा हेर्न चाहन्छु। यसैले हे सहस्त्रबाहु! हे विश्वमूर्ते! हजुर त्यही चतुर्भुजरूप (शंख-चक्र-गदा-पद्मसहित) नै बन्नुहोस।॥४५-४६॥**

एवं सम्बन्धज्ञापनेन क्षमापयित्वा भगवन्तं प्रसन्नमुपलक्ष्य स्वाभिलषितं प्रार्थयते-अदृष्टपूर्वमिति द्वाभ्याम्। पूर्वं कदाऽप्यदृष्टं तवेदं रूपं दृष्ट्वा हृषीतोऽस्मि हृष्टोऽस्मि। घोररूपदर्शनजेन भयेन मे मनः प्रव्यथितं व्याकुलीकृतम्। अतो हे देव! तदेव पूर्वपर्चितं प्रसन्नं रूपं मे दर्शयं हे देव देवेश देवानां ब्रह्मादीनामपीश! जगन्निवास! सर्वजगदाश्रयभूत प्रसीद, तत्सौम्यरूपप्रदर्शनात्मकं प्रसादं मे कुर्वित्यर्थः। तद्रूपमेवानुवदति-किरीटिनमिति। तथैव पूर्ववदेव किरीटिनं दिनं चक्रहस्तं च त्वां द्रष्टुमिच्छामि। अतो हे सहस्त्रबाहो! विश्वमूर्त्ते! इदं रूपमुपसंहृत्य तेनैव पूर्वेण किरीटादियुक्तेन चतुर्भुजेन रूपेणैव भव प्रकटो भवेत्यर्थः॥४५-४६॥

यस प्रकार सम्बन्ध जोडेर क्षमा गराए पछि भगवान्लाई प्रसन्न देखेर अर्जुन आफ्नो अभिलाषा प्रकट गर्दछन्। पहिले कहिल्यै नदेखेको हजुरको यस रूपलाई देखेर म प्रसन्न छु। हजुरको घोर रूपको दर्शन गरेर मेरो मन धेरै व्याकुल भईरहेको छ यसैले हे देव! त्यहि पूर्वपरिचित प्रसन्नरूप नै मलाई देखाउनु होस। हे ब्रह्मादि देवहरूका पनि मालिक, हे सबै जगत्का आश्रयभूत! हजुर प्रसन्न हुनुहोस अर्थात् त्यस सौम्य रूपलाई देखाउने कृपा गर्नुहोस। अब त्यसै रूपको वर्णन गर्दछन्। पहिलेको यस्तो किरीटधारी हातमा गदा चक्र लिएको हजुरलाई देख्न चाहन्छु। हे सहस्त्र हात भएका। हे विश्वमूर्ते! यस रूपलाई हटाएर पहिलेको किरीट आदियुक्त चतुर्भुज रूप धारण गर्नुहोस॥४५-४६॥

-★-★-★-

## श्रीभगवानुवाच

**मया प्रसन्नेन तवार्जुनेदं रूपं परं दर्शितमात्मयोगात्।**

## तेजोमयं विश्वमनन्तमाद्यं यन्मे त्वदन्येन न दृष्टपूर्वम् ॥

**श्रीभगवान भन्नुहुन्छ– हे अर्जुन! म प्रसन्न भएर आफ्नो सामर्थ्यले मेरो यो अत्यन्त श्रेष्ठ, तेजस्वरूप, सबैको आदि र अनन्त विश्व–रूप तिमीलाई देखाएको छु, जसलाई तिमी बाहेक पहिले अरु कसैले देखेका छैनन् ॥४७॥**

एवमर्जुनेन प्रसादितस्तदेव स्वं रूपं दर्शयितुं तावद्विश्वरूपं मया तवानुग्रहायैव दर्शितमित्याश्वासयन् श्रीभगवानुवाच– मयेति त्रिभि:। हे अर्जुन! किमिति त्वं भीतोऽसि यतो मया प्रसन्नेन त्वत्प्रसादार्थं तेजोमयं विश्वं सर्वात्मभूत–मनन्तमन्तरहितमाद्यं कृत्स्नस्यादिभूतं यत्त्वदन्येन केनापि न दृष्टपूर्वं तदिदं परं श्रेष्ठतरं रूपं तव आत्मयोगात् आत्मन: सत्यसङ्कल्पत्वयोगाद्दर्शितम् ॥४७॥

अर्जुनको द्वारा प्रसन्न भए पछि भगवान्‌ले अर्जुनलाई, यो भनेर कि मैले पहिलेको रूप देखाउनको लागि नै मैले तिमी माथि अनुग्रह गरेर मेरो यो विश्वरूप देखाएँ, यस प्रकार आश्वासन दिंदै भन्नुहुन्छ। हे अर्जुन तिमी किन डराएको? मैले प्रसन्न भएर तिमीलाई खुशी बनाउनको लागि नै मेरो यो तेजोमय, सर्वव्यापी, अनन्त, सबैको आदिभूत तथा अरु पनि यस भन्दा पहिले कसैले नदेखेको यस सर्वश्रेष्ठ रूपलाई आफ्नो सत्यसंकल्पको योगले तिमीलाई देखाएको हो ॥४७॥

–★–★–★–

## न वेदयज्ञाध्ययनैर्न दानैर्न च क्रियाभिर्न तपोभिरुग्रै:।
## एवंरूप: शक्य अहं नृलोके द्रष्टुं त्वदन्येन कुरुप्रवीर ॥

**हे कुरुश्रेष्ठ! मनुष्यलोकमा यस प्रकारको विश्वरूपवाला मलाई, न वेदहरूको पाठले, न यज्ञ गरेर, न शास्त्रहरूको अध्ययनले, न दानले, न उग्र तपले र न क्रियाहरूद्वारा तिम्रो (कृपापात्र) सिवाय अरु कसैको द्वारा देख्न सकिन्छ ॥४८॥**

एतद्रूपदर्शनं मत्प्रसादेन विना दुर्लभम्। अतो मदनुग्रहेणैव तद्दृष्ट्वा त्वं कृतार्थोऽसीत्याह–न वेदानां चतुर्णामपि अध्ययनैर्गुरुमुखादक्षरराशिग्रहणरूपैस्तथा यज्ञानां मीमां–साकल्सूत्रादिलक्षणानां यज्ञविद्यानां साङ्गयज्ञकर्मप्रति–पादकानामध्ययनेरर्थविचाररूपै: न दानैर्भूमितुलाकन्या–ऽन्नादीनां पात्रेष्वर्पणरूपै:, नच क्रियाभिरग्निहोत्रादिश्रौत–कर्मभि:, न चोग्रैस्तपोभि: कृच्छ्रचान्द्रायणादिभि:, एवं रूपोऽहं नृलोके मनुष्यलोके हे कुरुप्रवीर! त्वदन्येन मदनु–ग्रहरहितेन द्रष्टुं शक्य:, अपि तु मत्प्रसादभाजनेन त्वादृशेनैव द्रष्टुं शक्य इत्यर्थ: शक्य अहमित्यत्र विसर्गलोप आर्ष:। एकेनापि नकारेणोक्तार्थसिद्धौ चतुर्भिर्नकारैर्दर्शनप्रतिषे–धाभ्यास: स्वसाक्षात्कारं प्रति स्वनुग्रस्यैवासाधारणहेतुत्व–ज्ञापनाय। तथा च श्रुति: "श्रृण्वन्तोऽपि बहवोयं न विद्यु:, नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा वृणुते तनुं स्वामि"ति ॥४८॥

यस प्रकारको मेरो दर्शन मेरो कृपाको बिना दुर्लभ छ। यसैले गर्दा मेरो अनुग्रहले यस रूपलाई देखेर तिमी कृतार्थ भयौ। यसैलाई भन्नुहुन्छ– हे कुरुश्रेष्ठ! यस मनुष्यलोकमा मेरो स रूपलाई चारै वेदको अध्ययनले अर्थात् गुरुमुखद्वारा अक्षरहरूलाई सुनेर रट्नाले, यज्ञहरूका अध्ययनले अर्थात् साङ्गयज्ञकर्महरूका प्रतिपादक (निर्णय कर्त्ता) मीमांसा कल्पसूत्रादि पढ्नाले, भूमि, तुला, कन्या, अन्न आदि सत्पात्रमा दान गर्नाले, अग्निहोत्रादि श्रौत कर्महरूलाई गर्नाले तथा कृच्छ्र चान्द्रायणादि व्रत स्वरूप कठिन तपहरू गरेर पनि तिमी बाहेक अरु कसैले देख्न सक्दैन, अर्थात् तिम्रो जस्तो कुनै बिरलै पाईने मेरो कृपापात्र मात्रै देख्न सक्दछ। एक नकार दिएर मात्रै काम चल्छ तर चार नकार दिनाले आफ्नो साक्षात्कारको प्रति आफ्नो अनुग्रहलाई नै असाधारण कारण सिद्ध गर्नुभएको छ। श्रुतिमा पनि भनिएको छ–'शृण्वन्तोऽपि.......स्वाम्।' अर्थात् सुनेर पनि धेरैले यसलाई जानेनन्। यो परमात्मा न व्याख्यानले, न बुद्धिले, न धेरै पढेर जान्दछ तर जसलाई यो अपनाउँदछ त्यसैलाई प्राप्त हुन्छ, त्यसैलाई परमात्मा आफ्नो शरीर वरण गर्दछ ॥४८॥

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

–★–★–★–

## मा ते व्यथा मा च विमूढभावो दृष्ट्वा रूपं घोरमीदृङ्ममेदम्।

**व्यपेतभीः प्रीतमनाः पुनस्त्वं तदेव मे रूपमिदं प्रपश्य ॥**

**यो मेरो यस प्रकारको रूपलाई देखेर तिमी व्यथित हुनु (डराउनु) पर्दैन र तिमीमा मूढ़भाव पनि हुनुहुँदैन। अब निर्भय र प्रसन्न मन भएर तिमी फेरि त्यहि मेरो चतुर्भुज रूपलाई राम्रो सँग हेर ॥४९ ॥**

एवं त्वदनुग्रहार्थमाविष्कृतमिदं रूपं दृष्ट्वा ते व्यथा भवति चेत्तर्हि तदेव रूपं दर्शयामीत्याह–मा ते इतिं ईदृक् घोरं मदीयमिदं रूपं दृष्ट्वा या ते व्यथा यश्च विमूढभावोऽन्तःकरणविभ्रमः तदुभयं मा भूत्। किन्तु व्यपेतभीर्विशेषेणापगतभयः प्रीतमनाश्च सन् पुनस्त्वं तदेवेदं मम रूपं प्रपश्य ॥४९ ॥

तिमी माथि कृपा गरेर मैले जो यो रूप देखाएको छु यसलाई देखेर तिमीलाई व्यथा हुन्छ भने म तिमीलाई त्यो पहिले को रूप नै देखाउँदछु। यसैलाई भन्नुहुन्छ– मेरो यस प्रकारको भयानक रूपलाई देखेर तिमीलाई जुन दुःख र विमूढ़भाव भएको छ त्यो दुईओटे नहोस, तिमी निडर होऊ, आनन्दपूर्वक मेरो त्यो रूपलाई नै हेर, अर्थात् जसलाई तिमीले पहिले देखेको छौ, उहि चतुर्भुज वासुदेव रूपलाई म तिम्रो सामुन्ने प्रकट गर्दछु तिमी हेर ॥४९ ॥

–★–★–★–

## सञ्जय उवाच

**इत्यर्जुनं वासुदेवस्तथोक्त्वा स्वकं रूपं दर्शयामास भूयः।**
**आश्वासयामास च भीतमेनं भूत्वा पुनः सौम्यवपुर्महात्मा ॥**

**संजयले भने– भगवान् वासुदेवले अर्जुनलाई यस्तो भनेर त्यसै प्रकारले आफ्नो देवरूप (चतुर्भुज स्वरूप) देखाउनु भयो र महात्मा श्रीकृष्णले पुनः सौम्यरूप (द्विभुज मानुषरूप) भएर यस भयभीत अर्जुनलाई आश्वासन दिनुभयो ॥५० ॥**

एवमुक्त्वा भगवान्पूर्वरूपमेवार्जुनाय दर्शयामासेति–सञ्जय उवाच। इत्येवमर्ज्जुनं वसुदेवसूनुरुक्त्वा भूयः पुनः किरीटादियुक्तं चतुर्भुजं स्वकीयं रूपं दर्शयामास। घोररूदर्शनेन भीतमेनमर्ज्जुनं पुनः सौम्यवपुर्भूत्वा आश्वासयामास च। महात्मा परमकारुणिकः सार्वज्ञवात्सल्यादिमहद् गुणाश्रयः ॥५० ॥

यस्तो भनेर भगवानले पहिलेको रूप देखाउनु भयो, यसैलाई संजय भन्दछन। वासुदेवले अर्जुनलाई यस प्रकार भनेर फेरि आफ्नो किरीट आदि युक्त चतुर्भुज रूप देखाउनु भयो। भयानक रूपलाई देखेर डराएका अर्जुनलाई फेरि सुन्दर रूप धारण गरेर परम कारुणिक र सर्वज्ञता, वात्सल्य आदि गुणहरूका आश्रय, श्रीकृष्णले आश्वासन दिनुभयो ॥५० ॥

–★–★–★–

## अर्जुन उवाच

**दृष्ट्वेदं मानुषं रूपं तव सौम्यं जनार्दन।**
**इदानीमस्मि संवृत्तः सचेताः प्रकृतिं गतः ॥**

**अर्जुनले भने– हे जनार्दन! हजुरको यस सौम्य मनुष्यरूपलाई देखेर म फेरि यस समय स्थिर चित्त भएको छु र आफ्नो स्वभाविक स्थितिलाई प्राप्त गरेको छु ॥५१ ॥**

भगवतैवमाश्वासितो व्यपेतभयः सन्नर्जुन उवाच–दृष्ट्वेति। हे जनार्द्दन ! निरतिशयसौन्दर्य्यसौकुमार्यमाधुर्यलावण्यादि दिव्यगुणनिधिमानुषं मनुष्यसंस्थानविशिष्टमतिसौम्यं तवेदं रूपं दृष्ट्वा इदानीं सचेता अव्याकुलचित्तः संवृत्तोऽस्मि। तथा प्रकृतिं साध्वसनिवृत्त्या स्वास्थ्यं गतोऽस्मि ॥५१ ॥

भगवान्ले यसप्रकार आश्वासन दिए पछि अर्जुनले निडर भएर भने– हे जनार्दन्! अत्यन्त सौन्दर्य, सुकुमारता, मधुरता, लावण्य आदि दिव्य गुणहरूका खानी सुन्दर हजुरको यो मनुष्य रूपलाई देखेर म अब सचेत र प्रकृतिस्थ अर्थात् स्वस्थ भएको छु ॥५१ ॥

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

–★–★–★–

**श्रीभगवानुवाच**

**सुदुर्दर्शमिदं रूपं दृष्टवानसि यन्मम।**
**देवा अप्यस्य रूपस्य नित्यं दर्शनकाङ्क्षिणः॥**

**श्रीभगवान्ले भन्नुभयो–यो मेरो जुन चतुर्भुज रूप तिमीले देखेको छौ यसको दर्शन अत्यन्तै दुर्लभ छ। देउता पनि यस रूपलाई देख्नको लागि लालायित रहन्छन्॥५२॥**

दर्शितस्य विश्वरूपस्य स्वानुग्रहं विना दुर्दशत्वं श्रीभगवा–नुवाच–सुदुर्दर्शमिति। सर्वाश्रयं सर्वकारणभूतं मम विश्व–रूपं यत्त्वं दृष्टवानसि, तदिदं सुदुर्दर्शं सुतरां द्रष्टुमशक्यं, यतो देवा अपि अस्य रूपस्य नित्यं दर्शनकाङ्क्षिणः। नतु दृष्टवन्तो न वा द्रक्ष्यन्ति॥५२॥

मेरो अनुग्रहको बिना यस मेरो विश्वरूपलाई कोहि पनि देख्न सक्दैन। यसैलाई भगवान् भन्नुहुन्छ। मेरो जुन सर्वाश्रय, सर्वकारणभूत, विश्वरूपलाई तिमीले देखेको छौ त्यो रूपलाई देख्न अति नै दुर्लभ छ, मेरो कृपाको बिना स्वयं कोही पनि देख्न सक्दैन। किनकी देउताहरू पनि यस रूपको दर्शनका अभिलाषी बनिरहन्छन्। न उनीहरूले यस रूपलाई देखे न देख्ने छन्॥५२॥

–★–★–★–

**नाहं वेदैर्न तपसा न दानेन न चेज्यया।**
**शक्य एवंविधो द्रष्टुं दृष्टवानसि मां यथा॥**

**जस्तो रूपमा तिमीले मलाई देख्यौ त्यो (चतुर्भुजरूप) मलाई न त वेदहरूले, न तपले, न दानले र न यज्ञले नै देख्न सकिन्छ॥५३॥**

एतत् कुतस्तत्राह–नाहमिति। वेदैरध्ययनाध्यापनश्रवणार्थ–मननादिविषयैरुपनिषद्व्यतिरिक्तैः तपोदानेज्यादिभिश्च एवं विधोऽहं द्रष्टुं न शक्यः, यथा मां त्वं दृष्टवासि॥५३॥

हजुरको यो रूप दुर्दर्श किन छ? यसको उत्तर दिनुहुन्छ- जस्तो रूपलाई तिमीले देख्यौ, त्यस्तो रूपलाई उपनिषदहरूलाई छोडेर वेदहरूका पठन–पाठन, श्रवण, मनन आदिले वा तपले वा दानले वा यज्ञादिको द्वारा देख्न सकिंदैन॥५३॥

–★–★–★–

**भक्त्या त्वनन्यया शक्य अहमेवंविधोऽर्जुन।**
**ज्ञातुं द्रष्टुं च तत्त्वेन प्रवेष्टुं च परन्तप॥**

**परन्तु हे शत्रुतापन अर्जुन! यस प्रकार चतुर्भुजरूपवाला मलाई केवल अनन्यभक्तिले नै तत्त्वद्वारा जान्नमा र साकाररूपमा देखिन तथा प्राप्त गर्न सकिन्छ॥५४॥**

यद्येतैर्न द्रष्टुं शक्यस्तर्हि केनोपायेन द्रष्टुं शक्यो भवानित्य–पेक्षायामाह–भक्त्येति। तु शब्दः भक्तेः सर्वसाधनेभ्यः स्वातन्त्र्येणोत्कर्षद्योतनतत्परः। अनन्यया साधनसाध्य–सम्बन्धरूपतया मदेकनिष्ठया भक्त्या तु एवम्भूतो विश्व–रूपोऽहं तत्त्वेन परमार्थतो ज्ञातुं शक्य। हे अर्ज्जुन! तत्त्वेन द्रष्टुं च साक्षात् कर्त्तुं शक्यः। प्रवेष्टुं च मच्छक्त्यात्मना मदाधेयतयाऽवस्थातुं शक्यः। हे परन्तप! परापरशक्ति–रूपत्वाच्चेतनाचेतनरूपविश्वस्य "विष्णुशक्तिः परा प्रोक्ता

यदि वेदादिले हजुरलाई देख्न सकिंदैन भने कुन उपायले देख्न सकिन्छ? यस प्रश्नको उत्तर दिनुहुन्छ- 'भक्त्या तु' यसमा 'तु' शब्द भक्तिलाई सर्वसाधनहरू मा स्वतन्त्र हुनाले श्रेष्ठ भन्नका लागि व्यवहार गरिएको छ। हे अर्जुन! मेरो अनन्य भक्तिले अर्थात् मेरो एकनिष्ठ भक्तिले, जुन भक्तिमा साध्य, साधन र सम्बन्ध केवल म नै होऊँ, विश्वरूप म यथार्थ रूपले जानिन सक्दछु। हे शत्रुका नाशक! त्यसै भक्तिले यस्तो रूपवाला म देखिन पनि सक्दछु, र मेरो त्यस रूपमा प्रवेश पनि गर्न सकिन्छ अर्थात् मेरो शक्तिरूपले मेरो आधेय भएर स्थित हुन पनि सकिन्छ, चेतन अचेतन रूप विश्व मेरो परा र अपरा शक्ति भएको कारण।

चेतनाख्या तथाऽपरे"ति वैष्णवे जनकवाक्यात् "अपरेय-मिस्त्वन्यां प्रकृतिं विद्धि मे परामि"ति स्वयमप्युक्तवात्। तस्माद्देवादीनां वेदादिभिर्दर्शनाशक्यत्वं यदुक्तं तद्भक्तिहीनानामेवेति फलितम् ॥५४ ॥

विष्णुपुराणमा जनकको वचन छ-'विष्णुः.... तथाऽपरा' अर्थात् विष्णुको दुई शक्ति भनिएको छ एक अपरा र अर्को चेतना नामक परा। भगवान्ले स्वयं पनि भन्नुभएको छ-'अपरेय.... पराम्'। यसले देउताहरू र वेदादिबाट दर्शनको योग्य नहुनु, जो पछाडि भनिएको छ, त्यो भक्तिहीनहरू का लागि मात्र हो यस्तो बुझ्नु ॥५४ ॥

-★-★-★-

**मत्कर्मकृन्मत्परमो मद्भक्तः सङ्गवर्जितः।**
**निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डव ॥**

**हे पाण्डव! जो मेरो लागि नै कर्म गर्ने, मेरो नै परायण र मेरो नै प्रेमी भक्त तथा सर्वथा आसक्ति-रहित र प्राणिमात्रमा वैरभावले रहित छ त्यो भक्तले मलाई प्राप्त गर्दछ ॥५५ ॥**

एवमनन्यया भक्त्या येन पुरुषेण स्वस्य ज्ञातुं द्रष्टुं प्रवेष्टुं च शक्यत्वमुक्तं तस्य वृत्तिं फलं च वदन्नध्यायमुपसंहरति-मत्कर्मकृदिति। यत्किञ्चिद्वेदाध्ययनादिसर्वं कर्म मदाराधनरूपं यः करोति, स मत्कर्मकृत्, तथा मत्परमः अहमेव परमः प्राप्यभूतः पुरुषार्थो यस्य नतु स्वर्गस्त्रीपुत्रधनादिर्मत् कर्मफलं तथा सः। अत एव मद्भक्तः मत्कीर्त्तनश्रवण-ध्यानार्चनादिमद्भजनेनैव कालक्षेपं यः करोति स तथा। ननु पूर्वसिद्धस्त्रीपुत्रादिस्नेहे तद्भरणार्थमावश्यककर्मान्तरे च सति कथमुक्तप्रकारस्त्वद्भक्तः स्यादिति चेत्तत्राह-सङ्गवर्जित इति। मद्भक्तेतरसर्वसङ्गशून्यः। एवमपि सर्वभूतेषु यो निर्वैरः अपकारिजनेष्वपि द्वेषाभिनिवेशवर्जितो यः स मामेति। विश्वमायानिवृत्तिपूर्वकमद्भावापत्तिमाप्नोति, न पुनरावर्त्तते इत्यर्थः ॥५५ ॥

यस प्रकार अनन्यभक्तिले जुन पुरुष भगवान्लाई जान्न देख्न र त्यसमा प्रविष्ट हुन समर्थ छ, त्यसको वृत्ति र फल भनेर अध्यायको समाप्ति गर्नुहुन्छ। जो मत्कर्मको कर्त्ता छ अर्थात् वेदाध्ययन, नित्य-नैमित्तिक आदि सबै कर्म जसको लागि मेरो आराधना स्वरूप नै छन्, जो मत्परायण छ अर्थात् जसको प्राप्य वस्तु, परमपुरुषार्थ म नै हुँ, मेरो लागि गरिएका कर्महरूका फल जसको पुत्र, धन, स्त्री आदि होईनन्, जो मेरो भक्त छ अर्थात् मेरो नै कीर्त्तन, श्रवण, ध्यान, अर्चन आदि मेरो भजन मा नै आफ्नो समय बिताउँदछ र मेरा भक्तहरूलाई छोडेर अरुको संगत गर्दैन र अपकारीहरूका प्रति पनि जो द्वेष राख्दैन, त्यही मलाई प्राप्त गर्दछ अर्थात् संसारको मायाबन्धनबाट मुक्त भएर मेरो भाव (सर्वज्ञादि)लाई प्राप्त गर्दछ अर्थात् फेरि जन्म लिंदैन ॥५५ ॥

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां विश्वरूपदर्शनयोगो नामैकादशोऽध्यायः ॥११ ॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ द्वादशोऽध्यायः

## अर्जुन उवाच

**एवं सततयुक्ता ये भक्तास्त्वां पर्युपासते।**
**ये चाप्यक्षरमव्यक्तं तेषां के योगवित्तमा॥**

**अर्जुनले भने- जुन भक्त यसरी निरन्तर हजुरमा लागेर हजुर (सगुण-साकार) को उपासना गर्दछन् र जो अविनाशी निर्गुण-निराकारको नै उपासना गर्दछन् ती दुबैमा उत्तम योगवेत्ता कुन हो? ॥१॥**

पूर्वाध्यायान्ते "मत्कर्मकृन्मत्परमो मद्भक्तः सङ्गवर्जितः। निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डवे"त्यनेन भगवदनन्यभक्तस्य भगवत्प्राप्तिफलमित्युक्तम्। अष्टमेऽध्याये "परस्तस्मात्तुभावोऽन्योऽव्यक्तोऽव्यक्तासनामन" इत्यादिश्लोकेन प्रकृतिसंसृष्टाद्धिरण्यगर्भात्प्रकृतिवियुक्ततयोत्कृष्टो भावो भिन्नो लौकिकपदार्थविलक्षणः शास्त्रमन्तरेणकेनापि प्रकारेण न व्यज्यत इत्यव्यक्तः सनातनो नित्यः प्रत्यगात्मोक्तः। तस्यैव "अव्यक्तोऽक्षर इत्युक्तः तमाहुः परमां गतिमि"त्यननाक्षरत्वपरमागतित्व परममत्वं चोक्तम्। एवं द्वयोः प्राप्यत्वाभिधानादुभयोः कस्य श्रैष्ठ्यफलत्वं कस्य वा सुखप्राप्यत्वं प्राप्यानुगुणं के वा साधकाः श्रेष्ठा इति विशेषजिज्ञासया अर्जुन उवाच- एवमिति। एवं "मत्कर्मकृन्मत्परम" इत्यादिनोक्तेन प्रकारेण सततयुक्तास्त्वन्निष्ठाः सन्तो ये भक्ताः सर्वज्ञं सर्वशक्तिं निरवधिकातिशयैश्वर्यं परमप्राप्यं भगवन्तं त्वामेव पर्युपासते, सर्वतः सेवन्ते, ये चाप्यक्षरमविनाशि प्रत्यगात्म स्वरूपं तदेव चक्षुरादिकरणेनानभिव्यक्तमुपासते। तेषामुभयेषां मध्ये के योगवित्तमाः योगमुत्तमप्राप्त्युपायं विदन्ति ते योगविदस्तेषु परमफलप्राप्तिसाधनवित्त्वाद्योगवित्तमाः श्रेष्ठा इत्यर्थः॥१॥

पूर्वका अध्यायहरूका अन्तमा 'मत्कर्म.......पाण्डव।' भनेर भगवान्ले यो प्रकट गर्नुभयो कि मेरो अनन्य भक्त नै मलाई प्राप्त गर्न सक्दछ। र आठौं अध्यायमा 'परस्त....सनातन।' इत्यादि श्लोकहरूले यो भन्नुभयो कि मायामा बेरिएका ब्रह्मा भन्दा पनि प्रकृतिवियुक्त हुनाले श्रेष्ठ, लौकिक पदार्थहरू भन्दा विलक्षण, शास्त्रको अतिरिक्त अरु कुनै पनि उपायले जान्न नसकिने सनातन र नित्यज्ञानानन्दरूप प्रत्यगात्मा नै परमगति हो। यस प्रकार प्राप्त गर्न योग्य यी दुबै गतिहरूमा कुन श्रेष्ठतर छ, कुन अधिक सुखले पाउन सकिन्छ र कसलाई प्राप्त गर्नेवाला साधक श्रेष्ठ हो? यसै कुरालाई जान्नको लागि अर्जुनले भने- 'मत्कर्म.....परमो' इत्यादि भनिएको तरीकाले हजुरमा निष्ठा राख्ने भक्त, सर्वज्ञ, सर्वशक्तिमान् सीमारहित, अत्यधिक ऐश्वर्ययुक्त, परमप्राप्य, हजुरको उपासना गर्दछ र सम्पूर्ण प्रकारले हजुरको सेवा गर्दछ। अर्को चक्षु आदि इन्द्रियहरू बाट अगोचर, अविनाशी, प्रत्यगात्म स्वरूपको उपासना गर्दछ। यी दुबैमा कुन योगवित्तम हो अर्थात् परम फलप्राप्तिको साधनमा कुन श्रेष्ठ छ? भाव यो कि दुबैमा कसको उपाय श्रेष्ठ छ॥१॥

-★-★-★-

## श्रीभगवानुवाच

**मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते।**
**श्रद्धया परयोपेतास्ते मे युक्ततमा मताः॥**

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रनीगंज-२, सर्लाही, नेपाल

**भगवान्‌ले भन्नुभयो- ममा मन लगाएर नित्य-निरन्तर मतिर लागेका जो भक्त परम श्रद्धाले युक्त भएर मेरो (सगुण-साकारको) उपासना गर्दछन्, ती मेरो मतमा श्रेष्ठ हुन्॥२॥**

तत्र प्रथमाः श्रेष्ठा इत्युत्तरं श्रीभगवानुवाच-मयीति। सार्वज्ञवात्सल्यादिगुणाब्धौ स्वाश्रितदोषक्षपणस्वभावे मयि मन आवेश्यैकाग्रं कृत्वा नित्ययुक्ताः क्षणाद्यपरिच्छेदेन मदनुध्यानसम्पन्नाः सन्तः परयोत्कृष्टया श्रद्धयोपेता युक्ता ये मामुपासते आराधयन्ति, ते मे मम युक्ततमा मता अभिमताः॥२॥

माथि भनिएका दुबैमा पहिलो साधक श्रेष्ठ छ, यसैलाई भन्नुहुन्छ। भगवान् भन्नुहुन्छ- सर्वज्ञ, वात्सल्य आदि गुणहरूका समुद्र, आफ्ना आश्रितहरूका दोषलाई क्षमा गर्नेवाला ममा एकाग्रता पूर्वक मन लगाएर मेरो ध्यानमा सदा लागिरहने, र उत्कट श्रद्धाले युक्त भएर, जो मेरो उपासना गर्दछन्, त्यही नै श्रेष्ठ हो अर्थात् उनीहरूकै साधन श्रेष्ठतर हो, यही मेरो मत हो॥२॥

-★-★-★-

## ये त्वक्षरमनिर्देश्यमव्यक्तं पर्युपासते । सर्वत्रगमचिन्त्यं च कूटस्थमचलं ध्रुवम्॥
## सन्नियम्येन्द्रियग्रामं सर्वत्र समबुद्धयः । ते प्राप्नुवन्ति मामेव सर्वभूतहिते रताः॥

**फेरि जो आफ्नो इन्द्रिय-समूहलाई राम्रो सँग वशमा गरेर चिन्तनमा नआउने सबैठाऊँमा परिपूर्ण, देख्न पनि नसकिने, निर्विकार, अचल, ध्रुव, अक्षर र अव्यक्तको तत्परताले उपासना गर्दछन् तिनीहरू प्राणिमात्रको हितमा प्रीति राख्ने र सबैमा समबुद्धि भएको मनुष्यहरू मलाई नै प्राप्त हुन्छन्॥३-४॥**

तर्हितरे न श्रेष्ठास्ते किं वा फलं प्राप्नुवन्तीत्यत आह-ये त्विति द्वाभ्याम्। ये तु मदुपासकेतरा अक्षरं प्रत्यगात्मस्वरूपनिर्देश्यं देहादिविलक्षणत्वाद्देवमनुष्यादिशब्द-निर्देशानर्हमत एवाव्यक्तं चक्षुराद्यविषयं सर्वत्रगमचिन्त्यं च सर्वत्र देवमनुष्यादिदेहे वर्त्तमानमपि तद्विलक्षणत्वाद्देवा-दिरूपेण चिन्तयितमनर्हमत एव कूटस्थं कूटे देवमनुष्या-दिदेहसमूहे क्रमेणावस्थितमपि तदाकारं न भवति स्वासा-धारणाकार एव सर्वत्र तिष्ठति, निर्विकारमपरिणामीत्यर्थः। अपरिणामित्वेनैव स्वासाधारणाकारान्न चलतीत्यचलमत एव ध्रुवं नित्यम्। सन्नियम्येन्द्रियग्रामं सर्वेभ्यः स्वव्यापारेभ्य सम्यङ्नियम्य सर्वत्र देवादिविषमाकारेष्वात्मसु ज्ञानैका-कारदर्शने समबुद्धयः समबुद्धित्वादेव सर्वभूतहिते रताः। एवम्भूताः सन्तो येऽक्षरमुपासते, ते मामेव मत्समानाकारं मदंशमेव प्राप्नुवन्ति, नतु संसरन्तीत्यर्थः। "तं यथा यथो-पासते तथातथा भवती"ति श्रुतेः। अक्षरोपासका अक्ष-रात्मानमेव मां प्राप्नुवन्तीत्यर्थः॥३-४॥

तब अरु जो श्रेष्ठ छैनन् तिनीहरूलाई के फल मिल्दछ यसैको उत्तर दिनुहुन्छ। अरु जो मेरा उपासक छैनन्, प्रत्यगात्म स्वरूपलाई, जुन अक्षर हो, देहादि भन्दा विलक्षण हुनाले देव, मनुष्य आदि सम्बोधनहरूको अयोग्य छ अर्थात् जसलाई देव या मनुष्य भनेर बोलाउन सकिंदैन। यसैले जो अव्यक्त अर्थात् चक्षु आदि इन्द्रियहरूबाट अगोचर छ, सर्वत्र अर्थात् देव, मनुष्यादिको शरीरमा भएर पनि तिनीहरू भन्दा विलक्षण भएको ले जो देवादि रूपमा अचिन्तनीय छ र यसैले कूटस्थ छ अर्थात् देव मनुष्य आदिको शरीरमा क्रमैले स्थित भएर पनि उनीहरूको आकारको हुँदैन बरु उनीहरूभन्दा विलक्षण आफ्नो असाधारण आकारमा नै सर्वत्र रहन्छ, (अथवा ज्ञान धर्मद्वारा सबैमा व्यापक छ, यसैले सर्वत्रगम् भने), अपरिणामी र यसैले अचल र नित्य छ, यस्तो अक्षरको उपासना गर्दछन्, यिनीहरू जुन आफ्ना इन्द्रियसमूहलाई उनीहरूका व्यवहारबाट रोकेर र देवादि विषमाकार देहहरूमा स्थित भए पनि ज्ञान स्वरूले एकाकार देखिने कारण सबैमा समान बुद्धि राख्दै र यसै कारण सबैको भलाईमा निरत, प्रत्यगात्मा अर्थात् अक्षरको उपासना गर्दछन् ती मलाई नै अर्थात् मेरो समानाकार अंशलाई नै प्राप्त हुन्छन्। मतलब यो कि यीनिहरू फेरि संसारमा आउँदैनन्। श्रुतिमा भनेको छ-'तं...भवति' अर्थात् जो जसरी भगवान्‌को उपासना गर्दछ त्यो त्यसरी नै भगवान्‌लाई पाउँदछ। मतलब यो कि अक्षरको उपासक अक्षरात्मक मलाई नै प्राप्त गर्दछन्॥३-४॥

-★-★-★-

## क्लेशोऽधिकतरस्तेषामव्यक्तासक्तचेतसाम्।

**अव्यक्ता हि गतिर्दुःखं देहवद्भिरवाप्यते॥**

**अव्यक्तमा आसक्त चित्तभएको ती साधकहरूलाई आफ्नो साधनमा कष्ट धेरै हुन्छ; किनकी देहाभिमानिहरूका द्वारा अव्यक्त-विषयक गति धेरै कठिनताले मात्रै प्राप्त गरिन्छ॥५॥**

ननु यद्यक्षरोपासका अपि तद्रूपं त्वामेव प्राप्नुवन्ति तर्हि पूर्वोक्तानामेतेभ्यः को विशेषो यतस्तेषां युक्ततमत्व-मुक्तमित्यपेक्षायामाह-क्लेश इति। अव्यक्ते पूर्वोक्तेऽक्षरे आसक्तं चेतो येषां तेषामव्यक्तचेतसां क्लेशोऽधिकतरः हि यतोऽव्यक्ता गतिरव्यक्तविषया गतिर्मनोनिष्ठा देहवद्भिर्दे-हात्माभिमानयुक्तैर्दुदुःखं दुःखेनावाप्यते। देहाभिमानवतां तद्विलक्षणशुद्धात्मनिष्ठाया दुर्ल्लभत्वादित्यर्थः॥५॥

यदि अक्षरको उपासक अक्षर रूप हजुरलाई नै प्राप्त गर्दछन् भने त पहिलो पक्षका साधकहरूको विशेषता नै के भयो र उनीहरूलाई युक्ततम् भनियो। यस विषयमा भन्नुहुन्छ। पूर्वोक्त अक्षरमा जुन चित्त लगाउनेहरू छन् उनीहरूलाई क्लेश धेरै हुन्छ। किनकी अव्यक्तमा गति अर्थात् मनोनिष्ठा देहाभिमानीहरूलाई कठिनताले मात्रै प्राप्त हुन्छ। मतलब यो कि देहाभिमानीहरूलाई देह भन्दा विलक्षण शुद्ध आत्मनिष्ठा दुर्लभ छ॥५॥

-★-★-★-

**ये तु सर्वाणि कर्माणि मयि सन्न्यस्य मत्पराः।**
**अनन्येनैव योगेन मां ध्यायन्त उपासते॥**

**परन्तु जो सम्पूर्ण कर्महरू मलाई अर्पण गरेर तथा मेरो परायण भएर अनन्ययोग सम्बन्धले मेरो नै ध्यान गर्दै मेरो उपासना गर्दछन्॥६॥**

मद्भक्तानां तु अनायासेनाल्पकालेनैव मत्प्राप्तिर्भवतीत्याह-ये त्विति द्वाभ्याम्। ये तु जन्मसमये मत्कृपाकटाक्षाव-लोकिता लौकिकानि देहयात्रार्थकानि वैदिकानि यागदा-नाग्निहोत्रप्रभृतीनि सर्वाणि फलाभिसन्धिवर्जितानि मत्प्रसादैकप्रयोजनानि अत्यर्थप्रेष्ठे मयि संन्यस्य सम्यक्त-याऽर्प्य मत्परा अहमेव परं प्राप्यं येषां ते तथा भूत्वा मां भगवन्तं वासुदेवं ध्यायन्तश्चिन्तयन्तोऽनन्येनैव योगेन न विद्यतेऽन्यो भजनीयः प्राप्यश्च यस्मिन् तेन भक्तियोगेनो-पासते, ध्रुवास्मृतिरूपां चित्तवृत्तिं मयि निवेशयन्तीत्यर्थः॥६॥

मेरा भक्तहरूलाई अनायासै र थोरै समयमा नै मेरो प्राप्ति हुन्छ। यसैलाई दुई श्लोकहरू मार्फत भन्नुहुन्छ। जो जीवनभरी मेरो कृपाकटाक्षले अवलोकित भएर देहयात्राको लागि गरिएका लौकिक कामहरूलाई र याग, दान, अग्निहोत्रादि वैदिक कर्महरूलाई, उनीहरूको फलको आकांक्षा नराखीकन र केवल मेरो प्रसन्नताको लागि नै ममा पूरा तरीकाले अर्पण गरेर, र मलाई नै परमप्राप्य ठानेर र म भगवान्‌को ध्यान गर्दै मेरो अनन्य योग द्वारा, अर्थात् भक्तियोग द्वारा, जसमा भजनीय र प्राप्य मलाई छोडेर अरु कुनै वस्तु नहोस,(यस प्रकारले) उपासना गर्दछ अर्थात् ध्रुवास्मृतिरूप आफ्नो चित्तवृत्तिलाई मतिर लगाओस॥६॥

-★-★-★-

**तेषामहं समुद्धर्ता मृत्युसंसारसागरात्।**
**भवामि नचिरात्पार्थ मय्यावेशितचेतसाम्॥**

**हे पार्थ! ममा आविष्ट चित्तभएका ती भक्तहरूको लागि म मृत्युरूप-संसार समुद्रबाट तुरुन्तै उद्धार गर्नेवाला बन्दछु॥७॥**

तेषामुक्तप्रकारेण मय्यावेशितचेतसाम् अहं वात्सल्य-कारुण्यदयादिनिधिः मृत्योरपि मृत्युः स्वभक्तदुःखास-हिष्णुर्मृत्युयुक्तात्संसारसागरादचिरेणैव समुद्धर्त्ता भवामि।

यस प्रकारले चित्तवृत्तिलाई मतिर लगाउने त्यसलाई म, जो वात्सल्य, कारुण्य, दया आदिको समुद्र हुँ, मृत्युको पनि मृत्यु हुँ र आफ्ना भक्तहरूका दुःख सहन सक्दिन, संसाररूप समुद्रबाट

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

हे पार्थ! उद्धृत्य च नित्यनिरतिशयानन्दरूपामात्मभावापत्तिं मुक्तिं ददामीत्यर्थः ॥७॥

ढिलो नगरीकन म उनीहरूलाई नित्य, निरतिशय आनन्दयुक्त, आत्मभावापत्तिरूप मुक्ति दिन्छु ॥६-७॥

-★-★-★-

## मय्येव मन आधत्स्व मयि बुद्धिं निवेशय।
## निवसिष्यसि मय्येव अत उर्ध्वं न संशयः ॥

**तिमी ममा नै मनलाई स्थापित गर र ममा नै बुद्धि प्रविष्ट गर; यसपछि तिमी ममा नै निवास गर्नेछौ यसमा अलिकति पनि सन्देह छैन ॥८॥**

एवं स्वानन्यभक्तानां मृत्युसंसारसागरान्मोचकः परमानन्द-दाता चाहमेवतस्त्वमप्येवं कुर्वित्याह-मय्येवेति। चेतसः शुभाश्रये भक्तिप्रिये ईश्वरेश्वरे मय्येव नतु देवान्तरे फलान्तरे वा मन आधत्स्व समाधानं कुरुष्व। मय्येव बुद्धिमध्यवसा-यात्मिकां निवेशय। भगवान् वासुदेव एव भजनीयः प्राप्यश्चेति निश्चयं कुर्वित्यर्थः। एवं मय्यावेशितमनोबुद्धिः सन्नत ऊद्ध्र्वमेतद्देहान्ते मय्येव निवसिष्यसि, नितरां वत्स्यसि। मदाश्रितो भूत्वा न कदाऽपि वियोक्ष्यसे इत्यर्थः। अत्र संशयो नास्ति ॥८॥

यस प्रकार आफ्ना अनन्य भक्तहरूका म संसार सागरबाट उद्धारकर्त्ता र परमानन्द दाता हुँ। यसैले तिमी पनि त्यस्तै नै गर। यसैलाई भन्नुहुन्छ। मनको शुभाश्रय, भक्तहरूका प्रिय र ईश्वरहरूका पनि ईश्वर म भगवान् वासुदेवमा आफ्नो मनलाई लगाऊ, अन्य देउताहरूका कर्मफल मा होईन। फेरि मलाई नै आफ्नो अध्यवसायात्मिका बुद्धि अर्पण गर। भन्नुको मतलब यो हो कि म भगवान् वासुदेवलाई नै आफ्नो भजनीय र प्राप्य निश्चय गरेर जान्नु। यस प्रकार मलाई मन र बुद्धि अर्पण गर्नाले मृत्युपछि तिमी म मा नै सधैं बस्नेछौ। भाव यो कि मेरो आश्रयमा आएर तिम्रो कहिल्यै मसँग विछोड हुँदैन। यस मा अलिकति पनि सन्देह छैन ॥८॥

-★-★-★-

## अथ चित्तं समाधातुं न शक्नोषि मयि स्थिरम्।
## अभ्यासयोगेन ततो मामिच्छाप्तुं धनञ्जय ॥

**यदि तिमी मनलाई ममा अचलभावले स्थिर(अर्पण) गर्नमा आफुलाई समर्थ मान्दैनौ भने हे धनञ्जय! अभ्यासयोगको द्वारा तिमी मेरो प्राप्तिको इच्छा गर ॥९॥**

अत्राशक्तस्य सुकरोपायमाह-अथेति। अथपक्षान्तरे। स्थिरं निश्चलं यथा स्यात्तथा मयि चित्तं समाधातुं यदि न शक्नोषि, ततोऽभ्यासयोगेन निरतिशयसौन्दर्यमाधुर्यलावण्यादि-गुणनिधेर्मद्दिव्यमूर्त्तेः पुनः पुनश्चिन्तनेन मत्प्रियदिव्य-नामस्तोत्रादिकीर्त्तनादिरूपेण वाऽभ्यासयोगेन मां प्राप्तु-मिच्छ, हे धनञ्जय! ॥९॥

अशक्तको लागि सरल उपाय भन्नुहुन्छ- हे अर्जुन! यदि स्थिररूप ले ममा चित्त लगाउन सक्दैनौ भने त अभ्यासयोगले अर्थात् निरतिशय सौन्दर्य, माधुर्य, लावण्य आदि गुणहरूको समुद्ररूप मेरो दिव्यमूर्त्तिको बारम्बार चिन्तन गरेर र मेरो दिव्य-नाम स्तोत्र आदि को कीर्त्तनरूप अभ्यासले मलाई प्राप्त गर्ने इच्छा राख ॥९॥

-★-★-★-

## अभ्यासेऽप्यसमर्थोऽसि मत्कर्मपरमो भव।
## मदर्थमपि कर्माणि कुर्वन्सिद्धिमवाप्स्यसि ॥

**यदि तिमी अभ्यास योगमा पनि आफुलाई असमर्थ पाउँदछौ भने मेरो लागि नै कर्म गर्नेवाला बन। मेरो लागि कर्म गर्दा पनि तिमी सिद्धिलाई प्राप्त गर्नेछौ ॥१०॥**

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

तत्राप्यशक्तस्योपायान्तरमाह–अभ्यासेऽपीति। यद्येवम्विधमद्रूपस्मरणनामकीर्त्तनाद्यभ्यासेऽप्यसमर्थोऽसि चेत्तर्हि मत्कर्मपरमो भव। मदीयानि कर्माणि मन्दिरनिर्माणतुलसी–पुष्पादिवाटिकाकरणमन्दिरमार्जनलेपनदीपप्रकाशनतुलसी–पुष्पाहरणमन्मूर्त्तिस्नापनोद्वर्त्तनगन्धपुष्पधूपदीपनैवेद्यार्पणप्रदक्षिणनमस्कारस्तुत्यादीनि श्रद्धाप्रीत्यतिशयेन तत्परमो भव। एवम्भूतानि कर्माण्यपि मदर्थं कुर्वन्नचिरादभ्यास–योगपूर्विकां मयि स्थिरां चित्तस्थितिं लब्ध्वा मत्प्राप्तिरूपां सिद्धिमवाप्स्यसि ॥१०॥

यदि अभ्यासमा पनि असक्तका लागि अर्को उपाय भन्नुहुन्छ। यदि यस प्रकारको मेरो रूपको स्मरण, नाम कीर्त्तन आदिको अभ्यासमा पनि असमर्थ छौ भने मेरो कर्ममा रत होऊ, अर्थात् मन्दिर बनाउनु, तुलसी पुष्पादिको बगैंचा बनाउनु, मन्दिरको साफ–सफाई गर्नु, पोत्नु, दियो बाल्नु, तुलसी पुष्प टिपेर चढाउनु, मेरो मूर्त्तिलाई स्नान गराउनु, पुछ्नु, गन्ध, फूल, दीप, नैवेद्य अर्पण गर्नु, प्रदक्षिणा गर्नु, नमस्कार गर्नु आदि मेरो सेवाकार्यलाई श्रद्धा र अत्यन्त प्रीतिपूर्वक गर। यस प्रकारका कर्मलाई पनि मेरो निमित्त गर्दै केहि समयमा नै अभ्यासयोगपूर्वक ममा स्थिर चित्तरूपी स्थितिलाई पाएर मेरो प्राप्तिरूप सिद्धिलाई पाउनेछौ ॥१०॥

–★–★–★–

## अथैतदप्यशक्तोऽसि कर्तुं मद्योगमाश्रितः।
## सर्वकर्मफलत्यागं ततः कुरु यतात्मवान् ॥

**यदि मेरो योग (समता-)को आश्रित भएर तिमी पूर्वश्लोकमा भनिएको साधन गर्नमा पनि आफुलाई असमर्थ पाउँदछौ भने त मन–इन्द्रियलाई वशमा गरेर सम्पूर्ण कर्महरूको फलको इच्छालाई त्याग गरिदेऊ ॥११॥**

उक्तकेवलभगवत्सम्बन्धिकर्मपरत्वेऽप्यशक्तस्योपा–यान्तरमाह–अथैतदपीति। यदि मद्भक्तियोगमाश्रितः सन्नेतदपि मत्प्रसादहेतूक्तप्रकारकं मत्कर्मापि कर्त्तुमश–क्तोऽसि ततस्तस्मात्सर्वेषां नित्यनैमित्तिकानामग्निहोत्रा–दिकर्मणां फलत्यागं कुरु। यतात्मावान् संयतचित्तः सन् फलाभिसन्धिशून्यानि सर्वकर्माणि कुर्वन्नन्तःकरणशुद्धि–पूर्वकमात्मज्ञानभक्तिद्वारा मद्भावं प्राप्नोषीति भावः ॥११॥

पूर्वोक्त भगवत् सम्बन्धी कर्ममा निरत हुनमा पनि असक्तका लागि अर्को उपाय बताउनु हुन्छ। यदि मेरो भक्तियोगको आश्रय लिएर माथि भनिएको मेरो कर्महरूलाई पनि गर्न, जसले मलाई प्रसन्नता हुन्छ, असमर्थ छ भने सबै नित्य नैमित्तिक र आवश्यक अग्निहोत्रादि कर्महरूका फललाई त्याग गर्नु। भाव यो कि संयमचित्त भएर फलकामना शून्य कर्महरूलाई गर्दै अन्तःकरण शुद्धिपूर्वक आत्मज्ञान भक्तिद्वारा मेरो भावलाई प्राप्त गर्नेछौ ॥११॥

–★–★–★–

## श्रेयो हि ज्ञानमभ्यासाज्ज्ञानाद्ध्यानं विशिष्यते।
## ध्यानात्कर्मफलत्यागस्त्यागाच्छान्तिरनन्तरम् ॥

**अभ्यास भन्दा शास्त्रज्ञान श्रेष्ठ हो, शास्त्रज्ञान भन्दा ध्यान श्रेष्ठ हो र ध्यान भन्दा पनि सबैकर्महरूको फलको इच्छाको त्याग श्रेष्ठ हो किनकी त्यागद्वारा तत्काल नै परमशान्ति प्राप्त हुन्छ ॥१२॥**

तदेवं भगवत्प्राप्त्यसाधारणकारणतदेकनिविष्टमनोबुद्धित्व–लक्षणपराभक्तियोग एव श्रेयस्कामैः सम्पाद्यस्तत्रा–शक्तानामशक्तितारतम्यात्क्रमेणाभ्यासयोगभगवत्कर्म–निष्ठासर्वकर्मफलत्यागेष्वधिकार आदिष्टः। इदानीं कर्मत्यागस्यैवान्तःकरणशुद्धिद्वारा परम्परया भगवत्प्राप्ति–हेतुभूतपरभक्तिसाधनत्वात्तमेव स्तौति–श्रेयो हीति।

भगवान्मा मन बुद्धिलाई सदा स्थिर राख्नुनै लक्ष्य हो जसको यस्तो पराभक्तियोग भगवान्को प्राप्तिको असाधारण उपाय हो र श्रेय अर्थात् मोक्षको इच्छा भएकाहरूलाई त्यसैको साधना गर्नु पर्दछ। असक्तहरूका लागि उनीहरूको शक्तिको मात्रालाई ध्यानमा राख्दै क्रमैले अभ्यासयोग, भगवत् कर्मनिष्ठा र कर्मफलको त्याग भन्नुभयो अर्थात् जसको जति शक्ति छ त्यसले त्यस्तै साधनको आश्रय लेओस, यस्तो उपदेश गर्नुभयो। अब यस श्लोकमा कर्मफल त्यागको नै प्रशंसा गर्नुहुन्छ, किनकी कर्मफल त्याग नै

केवलश्रवणादिरूपादभ्यासात्सद्युक्तिसद्गुरुशास्त्रोपदेशजं परोक्षज्ञानं श्रेयः श्रेष्ठं प्रत्यगात्मविषयकपरोक्षज्ञानात् तत्साक्षात्कारहेतुर्ध्यानं विशिष्यते, आत्महितत्वे श्रेष्ठतरं भवति। "ते ध्यानयोगानुगता अपश्यन् देवात्मशक्तिं स्वगुणैर्निगुढामि"ति श्रुतेः। ध्यानादप्यनिष्पन्नरूपान्मुमुक्षुकृतः कर्मफलत्यागो विशिष्यते, इत्यनुषज्यते। त्यागात् श्रेयोऽर्थिना यतचित्ततया कृतात्कर्मफलत्यागात् फलाभिसन्धिशून्यकर्मानुष्ठानादनन्तरमेव निरस्तपापतया मनः शान्तिर्भवति। "प्रजहाति यदा कामान्सर्वान्पार्थ! मनोगतान्। आत्मन्येवात्मना तुष्टः स्थितप्रज्ञस्तदोच्यते" इत्यनेन सर्वकामत्यागस्यैव परमशान्तिफलकत्वाभिधानात्। "यदा सर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि स्थिताः। अथ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुत" इति श्रुतेश्च॥१२॥

अन्तःकरणको शुद्धि गरेर परम्परारूपले पराभक्तिको,(जो भगवत् प्रीतिको कारण हो,) साधन बन्दछ। केवल श्रवणादिरूप अभ्यासभन्दा त्यो परोक्ष ज्ञान श्रेष्ठ छ, जुन उत्तम युक्ति र सद्गुरु र शास्त्रको उपदेशले उब्जन्छ। प्रत्यगात्मा(जीव) विषयक परोक्ष ज्ञानभन्दा ध्यान श्रेष्ठ हो, किनकी त्यो आत्माको साक्षात्कारको कारण हो, र यसैले आत्माको हितमा अति श्रेष्ठ छ। श्रुतिमा भनिएको छ-'ते......गूढाम्' अर्थात् ध्यान योग गर्नेहरूले आफ्ना गुणहरू द्वारा सबैमा लुकेको देवात्मशक्तिलाई देखे। असिद्ध ध्यानले पनि रूपको साक्षात्कार हुँदैन, यसैले मुमुक्षुद्वारा गरिएको कर्मफलको त्याग नै श्रेष्ठ हो। संयतचित्त भएका मोक्षार्थिको त्यागले अर्थात् फलको आकांक्षा शून्य कर्म गर्नाले त्यसको मन पापशून्य भएर शांति प्राप्त गर्दछ। भगवान्को यो वचन छ- 'प्रजहाति...उच्यते' जसले प्रकट गरेको छकि सबै कर्मफल त्याग नै परम शान्तिको कारण हो। फेरि श्रुतिमा पनि भनिएको छ-'यदा...समश्नुते' अर्थात् जसको हृदयमा स्थित सबै कामनाहरू वा अभिलाषाहरू सकिन्छन् वा नष्ट हुन्छन् ती मनुष्य अमृत हुन्छन् र त्यो यहाँ पनि ब्रह्मसुखको अनुभव गर्न लाग्दछन्॥१२॥

-★-★-★-

**अद्वेष्टा सर्वभूतानां मैत्रः करुण एव च।**
**निर्ममो निरहङ्कारः समदुःखसुखः क्षमी॥**

**सबै प्राणिहरूमा द्वेषभावले रहित, मित्रभाववाला, दयालु र ममतारहित, अहंकाररहित सुख-दुःखको प्राप्तिमा सम, क्षमाशील छ॥१३॥**

"त्यागाच्छन्तिरनन्तरमित्युक्तमि"दानीमेवम्भूतनिष्कामकर्मकर्त्तुर्भक्तिमभीप्सोः शीघ्रमेव भगवत्प्रसादहेतूनुपादेयान् गुणानाह-अद्वेष्टेत्यादि सप्तभिः। सर्वाणि भूतानि मदपराधानुगुणमीश्वरप्रेरितानि मह्यं द्विषन्ति नैषां कश्चिदपराध इत्यनुसन्धानेन सर्वभूतानामद्वेष्टाऽनपकारी, तथा तेषु मैत्री हिताशंसनं तद्वान् मैत्रः, यतः करुणः तेष्वेव दुःखितेषु दयावान्, तथा निर्ममः देहेन्द्रियेषु तत्सम्बन्धिषु च ममताशून्यः, निरहङ्कारः अनात्मनि देहादावात्मबुद्धिरहङ्कारस्तद्रहितः। तत एव समदुःखसुखः, अत एव क्षमी सुख दुःखहेतुषु चित्तविकाररहितत्वात् क्षमावानित्यर्थः॥१३॥

त्यागले नै शान्ति प्राप्त हुन्छ, यो भन्नुभयो। अब ती गुणहरू भन्नुहुन्छ जो भगवान्लाई शीघ्र प्रसन्नतामा हेतु छन् र भक्तिको इच्छा राख्ने र निष्काम कर्म गर्नेहरूमा हुनुपर्दछ।
मसँग द्वेष गर्नेहरू ईश्वरबाट प्रेरित भएर र मेरो अपराधहरूका अनुकुल नै मसँग द्वेष गर्दछन् त्यसमा उनीहरूको केही अपराध छैन, यस्तो संझ कि जो कसैको अपकार गर्दैन र सबै प्राणिहरूमा मित्रभाव राख्दछ, उनीहरूमा जो दुःखी छन् उनीहरू माथि दया गर्दछ, र देह, इन्द्रिय तथा उनीहरूका विषयमा ममता रहित छ र अहंकार शून्य छ अर्थात् देहादिमा त्यसको आत्मबुद्धि छैन, र यसैले दुःख सुखमा समान भाव राख्दछ, र यसैले क्षमावान् छ, किनकी सुख-दुःखका कारणले त्यसको चित्तमा विकार हुँदैन॥१३॥

-★-★-★-

**सन्तुष्टः सततं योगी यतात्मा दृढनिश्चयः।**
**मय्यर्पितमनोबुद्धिर्यो मद्भक्तः स मे प्रियः॥**

**निरन्तर सन्तुष्ट, योगी, शरीरलाई वशमा गरेको, दृढ़ निश्चयभएको, मलाई अर्पित मन-बुद्धि भएको यस्तो जो मेरो भक्त छ त्यो मलाई प्रिय छ॥१४॥**

किञ्च–सन्तुष्टः। देहधारणार्थं यदृच्छाप्राप्तेन गुणवता निर्गुणेन वा येन केनापि भोजनाच्छादनादिना सन्तोषवान्, सततं योगी नित्यमात्मप्रवणीकृतान्तःकरणः, यतात्मा संयतदेहेन्द्रियः, दृढनिश्चयः गुरुशास्त्रोक्तार्थेषु एवमेवेति निश्चलबुद्धिः। एवम्भूतो मद्भक्तो निष्कामकर्मयोगेन मां भजते, स मे प्रियः॥१४॥

देह धारण गर्नसम्मका लागि अनायास प्राप्त भएका, मिठो या नमिठो तथा राम्रा र नराम्रो जस्तो सुकै भोजन र वस्त्रले संतोष गर्नेवाला, नित्य आफ्नो आत्मामा अन्तःकरण लगाईराख्ने, देहेन्द्रियलाई संयममा राख्ने, दृढ निश्चयी अर्थात् गुरु र शास्त्रवाक्यमा दृढमति यस प्रकारको मेरो भक्त जो निष्काम पूर्वक मलाई भज्दछ त्यो मेरो प्रिय छ॥१४॥

–★–★–★–

**यस्मान्नोद्विजते लोको लोकान्नोद्विजते च यः।**
**हर्षामर्षभयोद्वेगैर्मुक्तो यः स च मे प्रियः॥**

**जसबाट कुनै पनि प्राणि दुःखी हुँदैनन् र जो स्वयं पनि कुनै प्राणी सँग दुःखी हुँदैन तथा जो हर्ष, ईर्ष्या, भय र उद्वेगले रहित छ, त्यो मलाई प्रिय हुन्छ॥१५॥**

किञ्च–यस्मादिति। यस्मात्सकाशाल्लोको नोद्विजते भयान्न क्षुभ्यति लोकोद्वेगकरं कर्म किञ्चन्न करोतीत्यर्थः। यश्च लोकान्निमित्तान्नोद्विजते, यमुद्दिश्य सर्वो लोक उद्वेगकरं कर्म न कुर्यात्सर्वाविरोधित्वनिश्चयादित्यर्थः। अत एव हर्षः स्वप्रियवस्तुलाभे प्रीतिविशेषः, अमर्षः परसुखलाभाद्यसहनं, भयं त्रासः, उद्वेगश्चित्तव्याकुलतारूपो विकारः, एतैर्मुक्तो यः स च सोऽपि मे प्रियः॥१५॥

जो देखि कसैलाई उद्वेग हुँदैन अर्थात् जो कुनै यस्तो कर्म गर्दैन जसले लोकमा भयले क्षोभ उत्पन्न हुन्छ, र जो लोक सँग डराउँदैन अर्थात् जसलाई अन्य व्यक्ति पनि यो संझियोस कि यो कसैको विरोधी हैन, कुनै उद्वेगकर काम गर्दैन, र यसैले जो स्वप्रिय वस्तुको प्राप्तिको लागि हर्षबाट मुक्त छ, अमर्ष अर्थात् परसुख प्राप्तिको डाहबाट शून्य छ, जसलाई डर छैन र चित्तको विकलतारूप विकार बाट पनि जो मुक्त छ त्यो पनि मेरो प्रिय हो॥१५॥

–★–★–★–

**अनपेक्षः शुचिर्दक्ष उदासीनो गतव्यथः।**
**सर्वारम्भपरित्यागी यो मद्भक्तः स मे प्रियः॥**

**जो अपेक्षाले रहित(आवश्यकताले रहित) बाहिर–भित्रबाट पवित्र, चतुर, उदासीन, व्यथाले रहित र सबै आरम्भ अर्थात् नयाँ–नयाँ आरम्भको सर्वथा त्यागी छ त्यो नै मलाई प्रिय हुन्छ॥१६॥**

किञ्चानपेक्ष इति। अनपेक्षः यदृच्छाप्राप्तेष्वपि लौकिकपदार्थेषु स्पृहारहितः, शुचिर्बाह्याभ्यन्तरशुद्धियुक्तः, दक्षः ज्ञातव्येषु शास्त्रीयेषु कर्त्तव्येषु च ज्ञातुं कर्त्तुं च समर्थः, उदासीनः मित्राद्युद्देशेन पक्षपातविवर्जितः, गतव्यथः कुत्रचिदसम्मानोपेक्षणादिना या मानसीव्यथा तया शून्यः, परमार्थानुपयुक्तान्सर्वान्कर्मारम्भान् परित्यक्तुं शीलं यस्य एवम्भूतो यो मद्भक्तः स मे प्रियः॥१६॥

अनायास मिलेको लौकिक पदार्थमा स्पृहाहीन, भित्र बाहिरको शुद्धताले युक्त, जान्न र गर्न योग्य शास्त्रीय विषयहरूलाई जान्न र गर्नमा समर्थ, मित्रहरूका लागि पक्षपात रहित, असम्मान र उपेक्षा गरिएपनि तज्जनित मनको व्यथाले शून्य, परमार्थको अयोग्य आरम्भहरू(कर्महरू)लाई छोड्ने जो मेरो भक्त छ, त्यो मेरो प्रिय हुन्छ॥१६॥

–★–★–★–

**यो न हृष्यति न द्वेष्टि न शोचति न काङ्क्षति।**

**शुभाशुभपरित्यागी भक्तिमान्यः स मे प्रियः ॥**

**जो न कहिल्यै हर्षित हुन्छ, न द्वेष गर्दछ, न शोक गर्दछ, न कामना गर्दछ र जो शुभ-अशुभ कर्महरू भन्दा माथि उठेको (राग-द्वेषले रहित) छ, त्यो भक्तिमान् मनुष्य मलाई प्रिय छ ॥ १७ ॥**

किञ्च–य इति। प्रियं प्राप्य यो न हृष्यति, अप्रियं प्राप्य न द्वेष्टि, प्रियार्थनाशे च न शोचति, अप्राप्तमर्थं कञ्चिन्न काङ्क्षति। शुभाशुभपरित्यागी शुभाशुभसाधनभूतकर्म त्यक्तुं शीलमस्य तथा, एवम्भूतो यो भक्तिमान्स मे प्रियः ॥१७ ॥

प्रिय पदार्थ पाएर जो प्रसन्न हुँदैन र अप्रिय पाएर दुखित हुँदैन, प्रियको नाश भएपनि शोक गर्दैन, अप्राप्तको लागि आकांक्षा गर्दैन र जो शुभ र अशुभको साधनरूप कर्महरूलाई गर्दैन, यस्तो मेरो भक्त मलाई प्रिय छ ॥ १७ ॥

-★-★-★-

**समः शत्रौ च मित्रे च तथा मानापमानयोः।**
**शीतोष्णसुखदुःखेषु समः सङ्गविवर्जितः ॥**
**तुल्यनिन्दास्तुतिर्मौनी सन्तुष्टो येन केनचित्।**
**अनिकेतः स्थिरमतिर्भक्तिमान्मे प्रियो नरः ॥**

**जो शत्रु र मित्रमा तथा मान-अपमानमा सम छ र गर्मी-जाडो तथा सुख-दुःखमा सम छ एवं आसक्ति रहित छ र जो निन्दा स्तुतिलाई समान संझिन्छ मननशील, जस्तोसुकै तरिकाले शरीर निर्वाह हुनु-नहुनुमा सन्तुष्ट, बस्ने ठाउँ तथा शरीरमा ममता-आसक्तिले रहित र स्थिर बुद्धिवाला छ, त्यो भक्तिमान् मनुष्य मलाई प्रिय छ ॥ १८-१९ ॥**

किञ्च–सम इति। शत्रौ मित्रे च समः, द्वेषरागशून्यः तथा मानापमानयोस्तथा शीतोष्णादिषु समः सङ्गविवर्ज्जितः कुत्राप्यासक्तिरहितः। तुल्ये निन्दास्तुती यस्य स, मौनी संयतवाक्, येन केन यदृच्छाप्राप्तेन सन्तुष्टः अनिकेतः नियतवासरहितः, स्थिरा आत्मनि व्यवसायात्मिका मतिर्यस्य स स्थिरमतिः, एवम्भूतो भक्तिमान् नरो मे प्रियो भवति ॥१८-१९ ॥

शत्रु-मित्रमा समान अर्थात् द्वेष रागले शून्य, मान अपमान मा समान, शीत उष्ण र सुख-दुःखमा समान, र संग अर्थात् आसक्तिले हीन, निन्दा स्तुतिमा समान, मौनी अर्थात् वाक् संयमी अर्थात् धेरै नबोल्ने, जे मिल्छ त्यसैले सन्तुष्ट हुने, निश्चित वासस्थानले हीन अर्थात् जसको घर द्वार छैन, र जो आफ्नो आत्मामा व्यवसायात्मिका बुद्धि राख्दछ, यस्तो भक्त प्राणी मेरो प्रिय हुन्छ ॥ १८-१९ ॥

-★-★-★-

**ये तु धर्म्यामृतमिदं यथोक्तं पर्युपासते।**
**श्रद्दधाना मत्परमा भक्तास्तेऽतीव मे प्रियाः ॥**

**परन्तु जो मलाई श्रद्धा गर्ने र मेरो परायण भएको भक्त यस धर्ममय अमृतको जस्तो भनिएको छ त्यस्तै गरी राम्रोसँग सेवन(आचरण) गर्दछ त्यो मलाई अत्यन्त प्रिय हुन्छ ॥ २० ॥**

एवमद्वेष्टृत्वादिधर्मजातं भगवद्भक्तिकामेनोपादेयमित्युक्त-मिदानीं "मय्याऽऽवेश्यमनो ये मामि"त्यादिनोपक्रान्तस्या-नन्यभक्तियोगस्यैव सर्वश्रैष्ठ्यं प्रतिपादयन्नध्यायमुपसंहरति येत्विति। तुशब्द उक्तेभ्योऽपि श्रैष्ठ्याद्वैलक्षण्यदर्शनार्थः। येतु जन्मान्तरसहस्रेष्वनुष्ठितनिष्कामकर्मतया क्षीणपाप

भगवद्भक्तिको कामना गर्नेहरूका लागि अद्वेष्टा (द्वेष रहित हुनु) आदि धर्मसमूह उपादेय छ, यो पछाडि भनियो। अब 'मय्यावेश्य मने ये माम्' इत्यादि बाट प्रारम्भ गरिएको अनन्य भक्तियोगलाई नै प्रशंसा गरेर यस अध्यायको समाप्ति गर्नुहुन्छ। 'तु' शब्द को व्यवहार गरेर यो देखाईएको छ कि यो अनन्य भक्तियोग पहिले

त्वादिगुणसम्पन्ना धर्म्यामृतमुक्तप्रकारधर्मादनपेतममृतप्रापकत्वादमृतमिदं मदुपासनात्मकं भक्तियोगं यथोक्तं "मय्यावेश्य मनो ये मां, ये तु सर्वाणि कर्माणि मयि संन्यस्य मत्परा" इत्याद्युक्तप्रकारं पर्युपासते, सर्वात्मनाऽनुतिष्ठन्ते श्रद्धां कुर्वन्तो मत्परमास्ते भक्ता अतितरां मे प्रियाः। न ततोऽधिकोऽन्य प्रिय इत्यर्थः॥२०॥

**भनिएको भन्दा श्रेष्ठ हुनाले विलक्षण छ। जुन हजारौं जन्ममा गरिएका निष्काम कर्मबाट पापहीन भई, र अद्वेष्टा आदि गुणहरूले युक्त, धर्मयुक्त, अमृततुल्य मेरो उपासनारूप भक्तियोगको 'मय्यावेश्यमनो...मत्परा' आदि रीतिले मेरो उपासना गर्दछन्, ममा श्रद्धायुक्त भएर लागेका छन्, ती मेरा परमप्रिय हुन्, अर्थात् तिनीहरू भन्दा धेरै मेरा प्रिय अर्का कोही छैनन्॥२०॥**

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां भक्तियोगो नाम द्वादशोऽध्यायः॥१२॥

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ त्रयोदशोऽध्यायः

## श्रीभगवानुवाच

**इदं शरीरं कौन्तेय क्षेत्रमित्यभिधीयते।**
**एतद्यो वेत्ति तं प्राहुः क्षेत्रज्ञ इति तद्विदः ॥**

**भगवान्ले भन्नुहुन्छ– हे कौन्तेय! 'यो' भनेर भनिने शरीरलाई 'क्षेत्र' यस नामले भन्दछन् र यस क्षेत्रलाई जो जान्दछ, त्यसलाई ज्ञानीहरू 'क्षेत्रज्ञ' यस नामले सम्बोधन गर्दछन्॥१॥**

तदेवं यत् प्राप्त्यसाधारणोपायस्याङ्गभूतं प्राप्तुः प्रत्यगात्मनो याथात्म्यं सपरिकरं ज्ञानयोगकर्मयोगलक्षणनिष्ठाद्वयसहितं प्रथमषट्के निरूपितं, तस्य परमप्राप्यस्य भगवतस्तत्त्वयाथात्म्यं तन्माहात्म्यैश्वर्यज्ञानपूर्वकोऽङ्गी तदनन्यभक्तियोगश्च मध्यमे षट्के निरूपितः। इदानीं षट्कद्वयोदितप्रकृतिपुरुषपरमात्मनां स्वरूपस्वभावसम्बन्धयाथात्म्यविवेकं तदधिकारिनिर्णयाय दैवासुरसम्पद्विभागं श्रद्धाहारयज्ञतपोदानत्यागकर्तृबुद्ध्यादीनां गुणतस्त्रैविध्यं दैवीसम्पदमाश्रितानां सात्त्विकानन्यभक्तानां ज्ञानवैराग्यवतां पराभक्त्यैव भगवत्प्राप्तिलक्षणं निरतिशयानन्तफलं च निरूपयितुमन्तिमः षट्क आरभ्यते। तत्र "तेषामहं समुद्धर्त्ता मृत्युसंसारसागरादिति पूर्वाध्यायोक्तस्वभक्त–संसारोद्धारस्योपायं ससाधनं प्रकृमिपुरुषविवेकं दर्शयितुं त्रयोदशाध्यायारम्भः। तत्र तावत् "अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे परामि"त्युक्तयोः परापरशक्तिरूपयोः संयुक्तयोरपि शरीरात्मनोः स्वरूपं विवेचयन् श्रीभगवानुवाच– इदं शरीरमिति। इदं भूतेन्द्रियसङ्घातरूपं चेतनभोगायतनं देवोऽहं मनुष्योऽहं स्थूलोऽहं कृशोऽमित्यादिनाऽऽत्मतादात्म्येन प्रतीयतानमपि भोक्तुरात्मनो विलक्षणं शीर्यते इति शरीरं हे कौन्तेय! क्षेत्रमित्यभिधीयते। सस्यस्येव कर्त्तुर्भोक्तुरात्मनः शुभाशुभकर्मणां तद्भोगस्य चोत्पत्तिस्थानमभिधीयते।

पहिलेका छः अध्यायहरूमा स्वस्वरूप प्राप्तिका असाधारण उपायहरूका अङ्गभूत जीवात्माको यथार्थरूप त्यसका परिकरहरूका साथ वर्णन गरियो र ज्ञानयोग र कर्मयोगको लक्षणवाला दुबै निष्ठाहरू पनि वर्णन गरियो। बीचका छः अध्यायहरूमा परम प्राप्य भगवान्को अनन्य भक्तियोगको निरूपण गरियो। अब यी अन्तिमका छः अध्यायहरूमा पछाडिका दुबै षटकहरूमा भनिएका प्रकृति (माया), पुरुष र परमात्मा को स्वरूप, स्वभाव र परस्पर सम्बन्धको यथार्थरूप वर्णन गरिने छ र त्यसको अधिकारीको पनि निर्णय गर्नका लागि दैवी र आसुरी गुण सम्पद्को विभाग देखाईने छ। फेरि श्रद्धा, आहार, यज्ञ, तप, त्याग, बुद्धि, कर्त्ता आदि गुणहरूका अनुसार तीन प्रकारका हुने कुरा भनिने छ। फेरि यो निरूपण गरिने छ कि दैवी सम्पद्वाला सात्विक, अनन्य भक्त र ज्ञानवैराग्ययुक्त पुरुष पराभक्ति द्वारा नै भगवत्प्राप्तिलक्षणवाला निरतिशय र अनन्त फल पाउँदछन्।

पूर्वको अध्यायमा भगवान्ले भन्नुभयो कि "तेषाम्...सागरात् अर्थात् म उनीहरूलाई मृत्युरूप संसारबाट उद्धार गर्दछु। अब यस तेह्रौ अध्यायमा भगवान् प्रकृति(माया) र पुरुष(जीव)को विवेकरूप, आफ्ना भक्तहरूलाई संसार सागरबाट तर्ने उपायलाई, साधन सहित भन्नुहुनेछ।

पछाडि भनेर आईएको छ कि "अपरेय....पराम्" अर्थात् यस अपरा प्रकृतिबाट अर्को मेरो परा प्रकृतिलाई जान्नु। अब यस प्रथम श्लोकमा परा र अपरा शक्तिरूप र, एक अर्को सँग जोडिएको, शरीर र आत्माको स्वरूपको विवेचना गर्नुहुन्छ।

श्री भगवान् भन्नुहुन्छ– हे अर्जुन! पंचमहाभूत (पृथ्वी, जल, वायु, तेज र आकाश) र इन्द्रियहरूका संघातरूप र आत्माको भोगको स्थान जो यो शरीर हो त्यसलाई त्यसको यथार्थ तत्त्व जान्नेहरू क्षेत्र भन्दछन्। यद्यपि 'म देव हुँ' 'म मनुष्य हुँ' 'म मोटो छु' 'म दुब्लो छु', इत्यादि वाक्यहरूले शरीर र आत्मा एकै भए जस्तो

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

शरीरयाथात्म्यविद्भिरिति शेषः। एतद्भुतादिसङ्घातरूपं ममेदमिति यो वेत्ति आत्मनो भेदेन जानाति–तं क्षेत्रज्ञ इति तद्विद आत्मयाथात्म्यज्ञाः प्राहुः। क्षेत्रात् कृषीवलवत् क्षेत्रज्ञोऽत्यन्तविलक्षण इति प्रकर्षेणाहुरित्यर्थः। यद्यप्यतिप्राकृताः स्थूलोऽहं कृशोऽहं मनुष्योऽहमिति शरीराभेदेनात्मानमनुसन्दधते तथाऽपि मम देहे सुखं मम देहे दुःखं मम देहे पीडा ममेदं शरीरमिति भेदेनापि बहवोऽनुसन्दधाना दृश्यन्तेऽतस्तद्विद इत्युक्तं, तस्मादति–मूर्खाणां देहात्मनोर्विवेकाभावेऽपि शास्त्राधिकारिणां तद्विवेकोऽस्त्येव॥१॥

लाग्दछ तथापि भोक्तारूप आत्मा भन्दा यो शरीर विलक्षण छ। आत्मा जुन कर्त्ता र भोक्ता छ त्यसको शुभ र अशुभ कर्महरूको उत्पत्ति र भोग स्थान यो शरीर हो, जस्तो अन्नको उत्पत्ति स्थान खेत र त्यसको भोक्ता खेतवाला हुन्छ। पंच महाभूतादिको संघातरूप यस शरीरलाई 'यो मेरो हो' यस्तो जो मान्दछन् त्यो आत्मालाई भेदद्वारा जान्दछ अर्थात् आफुलाई शरीर भन्दा पृथक जान्दछ। आत्माको यथार्थ तत्त्वलाई जान्नेहरू यस्तो जीवलाई 'क्षेत्रज्ञ' भन्दछन्। जसरी खेत भन्दा खेतवाला वा गृहस्थ विलक्षण छ त्यसरी नै क्षेत्र भन्दा अर्थात् शरीरभन्दा क्षेत्रज्ञ(जीव) बिल्कुल विलक्षण छ। यसैले 'प्राहुः' शब्दको प्रयोग भयो। यद्यपि मूढ़हरू म दुब्लो छु, पातलो छु, मनुष्य हुँ, आदि भनेर शरीर र आत्मालाई एउटै संझिन्छन्, दुबैको भेदको अनुभव गर्दैनन् तथापि धेरै मनुष्य मेरो शरीरमा दुःख छ, मेरो शरीरमा पीडा छ आदिबाट आत्मा र शरीरको भेद जान्दछन् यसैले 'तद्विदः' भन्नुभयो। मतलब यो कि अति मूर्खहरूलाई देह र आत्माको विवेक नभए पनि शास्त्र जान्नेहरूलाई त्यसको विवेक अवश्य नै हुन्छ॥१॥

–★–★–★–

**क्षेत्रज्ञं चापि मां विद्धि सर्वक्षेत्रेषु भारत।**
**क्षेत्रक्षेत्रज्ञयोर्ज्ञानं यत्तज्ज्ञानं मतं मम॥**

**हे भारत! सम्पूर्ण क्षेत्रहरूमा क्षेत्रज्ञ मलाई नै संझिनु र क्षेत्र-क्षेत्रज्ञको जो ज्ञान छ, त्यहि मेरो मतमा ज्ञान हो॥२॥**

एवं संसृष्टयोः शरीरात्मभूतयोः प्रकृतिपुरुषयोः क्षेत्रक्षेत्र–ज्ञत्वेन विवेकः प्रदर्शितः। अथ स्वेन तयोः सम्बन्धज्ञा–नाकाङ्क्षायाम् "एकत्वेन पृथक्त्वेन बहुधा विश्वतो मुखमि"त्यनेन नवमे सामान्येन सर्वस्य जगतः सम्बन्ध प्रकार उक्तोऽपि क्षेत्रज्ञस्य विभज्य नोक्तः, इदानीं तस्य स्वतादात्म्यमाह–क्षेत्रज्ञं चामीति। पूर्वम् "अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयस्तथा। मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव। मया ततमिदं सर्वं जगदव्यक्तमूर्त्तिना। मत्स्थानि सर्वभूतानि, इहैकस्थं जगत् कृत्स्नं पश्याद्य सचराचरम्" इत्यादिना सर्वस्य जगतो मत्तः पृथक् स्थितिप्रवृत्त्यभावेन मदभिन्नत्वं "न चाहं तेष्ववस्थितः, न च मत्स्थानि भूतानि पश्य मे योगमैश्वरं, मयाऽध्यक्षेण प्रकृतिः सूयते सचराचरमि"त्यादिना मद्भिन्नत्वं चोक्तं (ततोऽन्यज्जानासि) सर्वं समाप्नोषि ततोऽसि सर्व"इति त्वयाऽप्युक्तमेव। किन्तु पूर्वाध्याये "ये तु सर्वाणि कर्माणि मयि सन्यस्य मत्पराः। अनन्येनैव योगेन मां ध्यायन्त

माथिको श्लोकमा परस्पर सम्मिलित शरीर र आत्मा अर्थात् प्रकृति (माया) र पुरुष (जीव)को विवेक क्षेत्र र क्षेत्रज्ञको रूप देखाईयो। प्रकृति र पुरुषसँग आफ्नो जो सम्बन्ध छ त्यसलाई भगवान्ले सामान्य रूपले नवौं अध्यायमा भन्नुभयो। त्यहाँ भगवान्ले भन्नुभयो कि 'एकस्त्वेन०' अर्थात् मेरो सम्पूर्ण विश्वसँग एकता र पृथकता दुबै छ। तर यसमा भगवान्ले जगत्सँग आफ्नो सम्बन्ध बताउनु भएको छ, क्षेत्रज्ञ अर्थात् जीवसँग उहाँ के सम्बन्ध छ यो विशेष रूपले भन्नुभएन। अब यहाँ यस श्लोकमा जीवका साथ आफ्नो तादात्म्य सम्बन्ध बताउनुहुन्छ। पछाडिका अध्यायहरूमा तल लेखिएका वाक्यहरूलाई भनेर भगवान् ले यो भन्नुभएको छ कि जगत्को मसँग पृथक स्थिति प्रवृत्ति हुन सक्दैन र यसैले त्यो मसँग अभिन्न छ। 'अहं०' अर्थात् म सम्पूर्ण जगत्को कारण र प्रलय स्थान हुँ, 'मयि०' यो सम्पूर्ण जगत् ममा डोरीमा मणि उनेको जस्तो गरेर उनिएको छ, 'मया०' अर्थात् म अव्यक्तमूर्त्ति बाट यो संसार व्याप्त छ, 'मत्स्थानि०' सबै चराचर जगत ममा नै स्थित छन्, 'इहैक०' सम्पूर्ण चराचर जगत्लाई मेरो एउटा छेउमा देख। फेरि यो 'न चाहं०' म तिनीहरूमा छैन, 'न च०' म भूतहरूमा छैन र छु पनि यस मेरो ईश्वरसम्बन्धी योग अर्थात् सामर्थ्यलाई हेर, 'मयाध्यक्षेण०' प्रकृति मेरो अध्यक्षतामा चर र अचर जगत्लाई पैदा गर्दछ, इत्यादि वाक्यहरूद्वारा भगवान्ले आफुलाई जगत् भन्दा भिन्न बताउनु भयो। फेरि भगवान् भन्नुहुन्छ कि हे अर्जुन!

उपासते। तेषामहं समुद्धर्त्ता मृत्युसंसारसागरादि"त्यादिना पराप्रकृतिभूतस्य जीवपुरुषादिशब्दाभिधेयस्य क्षेत्रज्ञस्य ध्यातृत्वोपासकत्वोद्धार्यत्वेन प्रतीतं केवलभिन्नत्वं मन्तव्यमपि तु सर्वक्षेत्रेषु देवतिर्यङ्मनुष्यादिशरीरेषु क्षेत्रज्ञमपि मां विद्धि, मदात्मकत्वेन मदभिन्नं जानीहि। चशब्देनात्मनस्तद्वैलक्षण्यमपि समुच्चिनोति। मां ततो विलक्षणं च विद्धीत्यर्थः। तथा च श्रुतयः "ऐतदात्म्यमिदं सर्वं, तत् सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो! अयमात्मा ब्रह्म, सर्वं खल्विदं ब्रह्म तज्जलानीति, अभयं वै जनक प्राप्तोऽसि, यदात्मानं वेदाहं ब्रह्मास्मीति"इत्यादिका भगवतः सर्वात्मत्वेन सर्वसामानाधिकरण्यवाचिकाः। तथा "सूर्यो यथा सर्वलोकस्य चक्षुर्न लिप्यते चाक्षुषैर्बाह्यैः, वायुर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव। एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बहिश्चे"त्यादिका भगवतः सर्वरूपत्वेऽपि सर्ववैलक्षण्यबोधिकाः। एवं मदात्मकत्वेन मद्व्याप्यत्वेन मत्तोऽपृथक्सिद्धतया मत्ता-दात्म्यरूपं क्षेत्रक्षेत्रज्ञयोर्यज्ज्ञानं मम सर्वज्ञस्य वेदान्तकृतो वेदविदः सर्वेश्वरस्य मतं सम्मतम्। अतो मम मताद्य-दन्यथा ये मन्यते तदज्ञानमित्यर्थः। केचित्तु क्षेत्रज्ञं चापि मां विद्धीति समानाधिकरणनिर्देशेन परमात्मैवाविद्योपा-धिवशात्परिच्छिन्नः क्षेत्रज्ञः संसारीव जातः, तमविद्योपा-धित्यागेन शुद्धमसंसारिणं मां परमेश्वरमेव जानीहीति भगवतस्तात्पर्यं कल्पयन्ति, तदसत् सर्वशास्त्रविरुद्धत्वात्। तथाहि न तावत् क्षेत्रज्ञानां ब्रह्मस्वरूपैक्यं शास्त्रप्रमाणेन वक्तुं शक्यं "नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान्, ज्ञासौ द्वावजावीशानीशौ, द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषष्वजाते, तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्योभिचाकशीति। प्रधानक्षेत्रज्ञपतिर्गुणेशः, अक्षरात् परतः परः, सर्वस्य वशी सर्वस्येशानः, एको वशी सर्वगः कृष्ण ईड्यः, अन्तःप्रविष्टः शास्ता जनानां य आत्मनि तिष्ठन्नात्मनोऽन्तरो यमात्मा न वेद यस्यात्मा शरीरम्, एष ते आत्माऽन्तर्याम्यमृतः, संसारबन्धस्थिति-

तिमीले मेरो विषयमा भनेको छौ– 'ततोऽन्यज्जानासि०' जगत्भन्दा पृथक् हुनुहुन्छ, सबै हजुरमा छन्, सबैमा हजुर व्याप्त हुनुहुन्छ र यसैले हजुर सर्वरूप हो तर पछाडिका अध्यायमा 'येतु०' आदि बाट जीव, पुरुष आदि शब्दहरूबाट भनिने क्षेत्रज्ञ(आत्मा)को ध्यान र उपासनाको वस्तु र त्यसको उद्धार गर्नेवाला हुनाले जीवसँग मेरो भिन्नता प्रतीत हुन्छ यस्तो संझिनु हुँदैन, बरु सबै क्षेत्रहरूमा अर्थात् देव, तिर्यक्, मनुष्यादिको शरीरमा पनि मलाई नै क्षेत्रज्ञ जान्नु। हे अर्जुन! म उनीहरूका अन्तरात्मा हुँ यसैले उनीहरूलाई मभन्दा अभिन्न जान्नु। 'च' शब्दको व्यवहार गरेर भगवान्‌ले जीवहरूसँग आफ्नो विलक्षणता देखाईदिनु भयो।

श्रुतिका यी वचनहरू पनि भगवान्‌लाई सबैको आत्मा भनेर, उहाँको सबैका साथमा समानाधिकरण बताउँदछन्, यथा–'ऐतदात्म्यमिदं सर्वं' अर्थात् यो सबै भगवदात्मक हो, 'त्यही सत्य हो, त्यही सबैको आत्मा हो,' 'हे श्वेतकेतु! तिमी त्यही हौ', 'यो आत्मा ब्रह्म हो' यो सबै जगत् ब्रह्म नै हो' 'सबै त्यसै बाट जन्म लिन्छन्, त्यसैमा सबैको चेष्टा हुन्छ र त्यसैमा सबै लय हुन्छन्,' 'जनक अभय प्राप्त भए किनकी उनले आफुलाई यो जाने कि म ब्रह्म हुँ'। परन्तु भगवान् सर्वरूप हुँदाहुँदै पनि सबै बाट विलक्षण हुनुहुन्छ जुन कुरा श्रुतिका यी वचनहरूबाट सिद्ध हुन्छ जस्तो–'जसरी सूर्य सबैको आँखा भएर पनि आँखाको बाह्य दोषहरूले लिप्त हुँदैन, 'त्यस्तै नै एकतर्फ र सबै भूतहरूका अन्तरात्मा हुँदाहुँदै पनि भगवान् बाहिरका लोक दुःखले लिप्त हुँदैनन्', 'जसरी वायु संसारमा व्याप्त भएर पनि पृथक् पृथक् रूपका अनुरूप आकार धारण गर्दछ त्यसरी नै सबै भूतहरूका अन्तरात्मा भएपनि ब्रह्म प्रत्येक रूपमा बाहिर भन्दा पृथक् देखिन्छ'। भगवान् भन्नुहुन्छ यस प्रकारको जो क्षेत्र र क्षेत्रज्ञको विषयमा ज्ञान छ त्यो दुबै मदात्मक हुन्, मबाटै व्याप्य, मभन्दा पृथक् उनीहरूको स्थिति प्रवृत्ति सम्भव नै छैन र मेरो साथ मा तादात्म्य सम्बन्धवाला छन् त्यही मत म सर्वज्ञ, वेदकर्त्ता, वेदज्ञाता र सर्वेश्वरको मत हो अर्थात् मेरो मतमा यो कुरा नै ठीक हो। र जो यस कुराको विरुद्ध मान्दछन् ती अज्ञ हुन्।

कतिपय 'क्षेत्रज्ञं चापि मां विद्धि' को यस प्रकार अर्थ लगाउँदछन्– परमात्मा अविद्याको उपाधिले परिच्छिन्न भएर संसारी संसारीको जस्तो भए र त्यसैलाई क्षेत्रज्ञ भन्दछन्। यस प्रकारको समाना-धिकरण देखाउँदै ती भगवान्‌ले भन्नुभएको कुराको तात्पर्य भन्दछन्। जब अविद्याको उपाधि छुट्दछ भने त्यो क्षेत्रज्ञ शुद्ध असंसारी हुन्छ। अर्थात् त्यो परमेश्वर नै हुन्छ। यस्तो अर्थ गर्नु बिल्कुलै भूल हो किनकी त्यो सबै शास्त्रको विरुद्ध छ।

अब शास्त्रको विरोध देखाईन्छ। जीव र ब्रह्मको स्वरूपको एकतामा कुनै शास्त्र प्रमाण छैन बरु श्रुतिशास्त्रादिको वाक्य ठीक उल्टा प्रमाण दिन्छन् जस्तो श्रुतिमा भनिएको छ–'परमात्मा नित्यमा नित्य, चेतनमा चेतन र धेरैमा एक छ र सबैका कामनाहरूका विधान गर्दछ।' 'परमात्मा ज्ञानवाला छ र जीव

मोक्षहेतुः" इत्यादिश्रुतीनां "भेदव्यपदेशाच्चान्यः, भेदव्य-पदेशाच्च, अनुपपत्तस्तु न शारीरः, कर्मकर्त्तृव्यपदेशाच्च, पत्यादिशब्देभ्यः, अधिकं तु भेदनिर्द्देशादि"त्यादि ब्रह्मसूत्राणां "इन्द्रियाणि मनो बुद्धिः सत्त्वं तेजो बलं धृतिः। वासुदेवात्मकान्याहुः क्षेत्रं क्षेत्रज्ञ एव च। ससुरा-सुरगन्धर्वं सयक्षोरगराक्षसम्। जगद्वशे वर्त्ततेऽदः कृष्णस्य सचराचरम्। अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मेपराम्। जीवभूतां महाबाहो! ययेदं धार्य्यते जगत्। विष्णुशक्तिः परा प्रोक्ता चेतनाख्या तथाऽपरा। ममैवांशो जीवलोके जीवभूतः सनातनः। द्वाविमौ पुरुषौ लोके क्षरश्चाक्षर एव च। क्षरः सर्वाणिभूतानि कूटस्थोऽक्षर च्यते। उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृतः। अज्ञो जन्तुरनीशश्च स्वात्मनः सुख-दुःखयो। ईश्वरप्रेरितो गच्छेत्स्वर्गं वाश्वभ्रमेव वा। दासभूताः स्वतः सर्वे ह्यात्मानः परमात्मनः। नान्यथा लक्षणं तेषां बन्धे मोक्षे च विद्यते। तत्र यः परमात्मा तु सनित्यो निर्गुणः स्मृतः। न लिप्यते फलैश्चापि पद्मपत्रमिवाम्भसा। कर्मात्मा त्वपरो योऽसौ मोक्षबन्धै स युज्यते। स सप्तदशकेनापि राशिना युज्यते पुनः। तवान्तरात्मा मम च ये चान्ये देहसञ्ज्ञिताः। सर्वेषां साक्षिभूतोऽसौ न ग्राह्यः केचित् क्वचिदि"ति भेदैकविषयाणामितिहासपुराणादिवाक्यानां च निर्विषयत्वापत्त्या बाधप्रसङ्गात्। तथात्वेचार्धनास्तिकत्वा-पत्तिर्दुवारा। अयं दोषः केवलभेदवादिमतेऽपि समानः। तन्मतेऽभेदवाक्यानां बाधप्रसङ्गात्,नह्येकविधवाकयबाधं विना केवलभेदोऽभेदो वा सिद्ध्यति। ननु भेदवाक्यानां नाहमीश्वर इत्यादिप्रतीतिसिद्धप्रत्यक्षभेदविषयत्वेन नैराकङ्क्ष्यात्र बाधप्रसङ्गः। अन्यथा सर्वस्य ब्रह्माभेदप्रति-पादकानां सहस्रशो वाक्यानां विरोधः स्यादिति चेन्न, जीवेश्वरभेदस्य प्रत्यक्षत्वाभावात्। भेदप्रत्यक्षस्य प्रतियो-गिप्रत्यक्षत्वाधीनत्वात्। जीवेश्वरयोरतीन्द्रियत्वेन प्रत्य-क्षत्वस्यासम्भवात्। नाहमीश्वर इत्यादिप्रतीतेस्तु शास्त्रोक्त-सर्वज्ञत्वाचिन्त्यशक्तित्वस्वतन्त्रत्वसर्वनियन्तृत्वजगज्जन्मा-दिकारणत्वदीश्वरत्वप्रयोजकाणां धर्म्माणामात्मन्यसम्भा-

अज्ञ छ' 'दुबै अज हुन्, एक परमात्मा ईश हो र अर्को-जीव-अनीश हो, 'राम्रा पखेटा भएका साथि र मित्र दुई पक्षीहरू(ब्रह्म र जीव) एकै पीपलको वृक्षमा बसेका छन् तिनीहरूमा एउटा त (जीव) वृक्षको स्वादु फललाई चाख्दछ र अर्को (ब्रह्म) फललाई नखाएरै प्रकाश गर्दछ' 'प्रधान, माया र जीवको पति, गुणहरूका स्वामी 'एक, स्वतन्त्र, सबै ठाउँमा रहेको कृष्ण पूजा गर्न योग्य छ' 'भित्र बसेर शासन गर्नेवाला' 'जो आत्मामा बसेर पनि आत्माको भित्र छ र जसलाई आत्मा जान्दैनन्', 'आत्मा जसको शरीर हो' 'यो तिम्रो आत्मा अन्तर्यामी र अमर छ' 'परमात्मा संसारको बन्ध, स्थिति, अरुपनि श्रुतिहरूका धेरै यस्ता वचनहरू छन्।

ब्रह्मसूत्रहरूमा पनि यही कुरा भनिएको छ, यथा 'भेदको कथन गर्नाले पनि जीव र ब्रह्म एक अर्का सँग पृथक् छन्, 'भेद कथनले' 'जीवमा ब्रह्मको गुण घट्दैनन् यसैले जीव ब्रह्म होईन' 'कर्त्ता र कर्मको कथनले जीव र परमात्मामा एकताको अभाव प्रमाणित हुन्छ' 'पति आदि शब्दहरूका प्रयोगले अर्थात् ब्रह्म पति हो यसैले जीव सँग उसको एकता हुँदैन' 'भेद छ भनेको हुनाले जीव भन्दा श्रेष्ठ छ' फरि इतिहास पुराणआदिको पनि तल लेखिएका भेद देखाउने वाक्यहरूका कुनै विषय न रहनाले त्यसको बाध हुन्छ। 'मनुष्यलोकमा यो सनातन जीव मेरो नै अंश हो' 'जीव स्वतन्त्र छैन, आफ्नो सुख दुःखको हुन सक्दैन र ईश्वरबाट प्रेरित भएर स्वर्ग या नर्क जान्छ' 'जीव सदा कालदेखि नै परमात्माको दास हो। बन्ध मोक्ष दुबै नै अवस्थामा यसको अर्को कुनै लक्षण छैन।' 'परमात्मा नित्य र निर्गुण छ। पानीमा कमलको पत्ता जस्तो त्यो फलहरूले लिप्त हुँदैन' 'अर्को कर्मात्मा (जीव) हो त्यो मोक्ष र बन्धले युक्त छ। फेरि त्यो सत्र वस्तुवाला लिङ्ग शरीरले युक्त छ।' 'मेरो तिम्रो र सबै देहधारीका अन्तरात्मा त्यो सबैको परमात्मा साक्षिभूत हो। त्यसलाई कोही कहिल्यै पनि जान्न सक्दैन' यसैले भेदवाक्यहरूका निर्विषयता भएको कारण केवल अभेद मान्नेहरूमा अर्द्ध नास्तिकताको दोष आउँछ किनकी यी भेद वाक्यहरूले उनीहरूका मतमा बाधा पर्दछ। केवल भेद मान्नेहरूमा पनि यो अर्द्धनास्तिकताको दोष लाग्दछ किनकी उनीहरूका मतले अभेद वाक्यहरूको बाधा पर्दछ। बिना एक प्रकारको वचनले बाध हुँदै गरेर केवल भेद वा अभेद सिद्ध हुँदैन। केवल अभेद मान्नेहरूले यो भन्नु कि 'म ईश्वर होईन' यस्तो जो प्रत्यक्ष विश्वास लोकमा छ त्यहीं भेदवाक्य चरितार्थ हुनजान्छ। यसैले अभेदमत मान्दा पनि भेद वाक्यहरूका बाध हुँदैन। र अभेदमत न मान्नाले अभेदको प्रतिपादक हजारौं वाक्यका विरोध हुन्छ।

तर यस्तो कुरा होईन। जीव र ईश्वरको जो भेद लोकमा प्रसिद्ध छ त्यो त प्रत्यक्ष हुन नै सक्दैन। किनकी भेद प्रत्यक्ष हुनका लागि प्रतियोगी (जीव र ईवर) प्रत्यक्ष हुनु आवश्यक छ र जीव एवं ईश्वर अतीन्द्रिय हुनाले प्रत्यक्ष हुन सक्दैनन्। 'म ईश्वर होईन' जीवको यस्तो प्रतीतिको प्रत्यक्ष ज्ञान त्यसलाई छैन। शास्त्रहरूमा ईश्वरको सर्वज्ञत्व, अचिन्त्यशक्तित्व, स्वतन्त्र, सबैका नियन्ता र

वितत्वेन याथार्थ्यात्। आत्मनोऽल्पज्ञत्वाल्पशक्तित्वतन्नि-
यम्यत्वतदधीनत्वज्ञानात्। न चाविद्यात्मकोपाधिपरिच्छे-
दापेक्षमेवेश्वरत्वं सर्वज्ञत्वं सर्वशक्तित्वं, न परमार्थतो
विद्ययाऽपास्तसर्वोपाधिरूपे आत्मनीशितव्यसर्वज्ञत्वाल्प-
ज्ञत्वादिव्यवहार उपपद्यते इति वाच्यं, परमात्मनो ब्रह्मण:
सजातीयस्वगतभेदशून्यत्वमेकत्वमसङ्गत्वं स्वयं प्रकाशत्वं
चाभ्युपगम्य पुनस्तस्योपाधिवश्यत्वपरिच्छिन्नत्वाज्ञत्वाल्प-
ज्ञत्वादिकल्पनस्य महद्विरुद्धत्वात्। मे माता वन्ध्येति वद्व-
दतो व्यघाताच्च। प्रचण्डमार्तण्डमण्डेऽन्धकारवत्स्व-
यम्प्रकाशस्वरूपेऽविद्याऽवच्छेदमनुन्मत्त: को ब्रूयात्। किञ्च
अविद्यासम्बन्ध: सहेतुको निर्हेतुको वा ? नाद्य:, अप्रसि-
द्धत्वात्। अविद्याब्रह्मेतरस्य तृतीयस्य तत्कार्यत्वेन तदानी-
मभावात्।न द्वितीय:,निर्हेतुकाऽविद्या स्वयमेव सम्बध्यते
चेत्तर्हि एकस्यैवोपाधिवश्यत्वे निवर्त्तकचेतनान्तराभावात्
कदाऽपि तन्निवृत्तिर्न स्यात्। अनिर्मोक्षश्च स्यात्। न च
स्वसामर्थ्येनैवाविद्यां निवर्तयति नेतरापेक्षेति वाच्यम्, एवं
चेत्स्वयम्प्रकाशस्य स्वतन्त्रस्य समर्थस्याविद्यासम्बन्धस्यै-
वानर्हत्वात्। तथाहि अविद्याया: स्वरूपं ब्रह्म जानाति न वा ?
जानाति चेत् को वा सर्वज्ञ: स्वतन्त्र: सन् श्वसूकरतिर्यक्
कीटनारक्यादियोनितज्जन्यदु:खहेतुभूताऽविद्यास्वरूपं
जानन् तया युज्येत। न जानाति चेदज्ञत्वादेव ब्रह्मत्वहानिरत:
सर्वथा ब्रह्मण्यविद्यायोगो वक्तुमनुपपन्न:। नन्वविद्या-
तत्कार्यं च मिथ्याज्ञानं न परमार्थवस्तु दूषयितुं समर्थं न
ह्यूषरदेशं स्नेहेन पङ्कीकर्त्तुं शक्नोति मरीच्युदकं, तथाऽविद्या
क्षेत्रज्ञस्य न किञ्चित्कर्त्तुं शक्नोतीति चेन्न, यदि तस्या
दोषकारित्वमेव नास्ति तर्हि तन्निवृत्त्यर्थमुपायस्य वैयर्थ्यात्।
बन्धमोक्षव्यवस्थायास्तद्विषयकशास्त्रस्यानर्थक्यप्रसङ्गात्
च। एवं ब्रह्मण्यविद्यासम्बन्धस्रू वक्तुमशक्यत्वात्तत्कृतं
जीवेश्वरविभागं मन्यमाना भ्रान्ता जगद्व्यामोहका:
श्रेयोऽर्थिभिरुपेक्षणीया:। नापि सर्वब्रह्माभेदप्रमिपादकानां
विरोध: शङ्कनीय:, तेषां क्षेत्रक्षेत्रज्ञप्रकृतिपुरुषक्षराक्षरादि-
शब्दाभिधेयस्य जडचेतनजातस्य ब्रह्मात्मकत्वतद्

जगत्को जन्म आदिको कारण हुनु प्रतिपादित छ। यी सबै गुणहरू आफुमा असम्भव भएको जानेर जीव अनुभव गर्दछ कि म ईश्वर होईन किनकी त्यो यो जान्दछ कि म अल्पज्ञ र अल्पशक्तिवाला छु र ईश्वर मेरो नियामक हो र म ईश्वरको अधीन छु। जीवले आफुलाई यस्तो मान्नु कि म ईश्वर होईन चरितार्थ हुन्छ। यस्तो मान्नु पनि भूल हो कि 'य यथार्थमा जीव र परमात्मामा भेद छैन। भेद अविद्याको अपेक्षाले हो। परमात्माको सर्वज्ञत्व, सर्वशक्तिमत्ता अविद्याको उपाधिको कारण नै हो। अविद्या हटे पछि जीवमा अल्पज्ञत्व वा परतन्त्रता आदि व्यवहार हुँदैनन्'। यो भूल यसरी हो कि जब यो मानियो कि परमात्माको स्वजातिय विजातीय वा स्वगत् भेद छैन, त्यो भेद शून्य, एक, असंग र स्वयं प्रकाशमान छ तब यो भन्नु कि त्यो माया वा अविद्याको वश भएर परिच्छिन्न, अज्ञ र अल्पज्ञ हुनजान्छ धेरै उल्टो कुरा हो। यो त त्यस्तै नै भयो कि कोही भनोस कि मेरो आमा बाँझी हुन। जस्तो प्रचण्ड सूर्यको सामने अन्धकारको कल्पना पागलको सिवाय अरु कसैले गर्दैन त्यस्तै नै स्वयं प्रकाशरूप परब्रह्ममा अविद्या को उपाधि लगाउनु र त्यस कारण त्यो जीव भएर संसारी यातना भोग्नु नितान्त पागलपन हो। अच्छा, ब्रह्म मा अविद्यारूप उपाधिको सम्बन्ध कुनै कारणले हो या बिना कारण? कारण ले त हुन सक्दैन, किनकी यस्तो कुनै कारण प्रसिद्ध छैन। र फेरि जहाँ अविद्या र ब्रह्म दुबै नै पदार्थ छन् त्यहाँ तेस्रो पदार्थ, जो कारण बनोस, हुन नै सक्दैन। र बिना कारणको नै ब्रह्ममा अविद्या लाग्दछ यो पनि मान्न सकिंदैन किनकी यस्तो भएमा फेरि ब्रह्मलाई अविद्याबाट छुटाउने कुनै अर्को चेतन रहँदैन र यसैले ब्रह्मको अविद्याबाट कहिल्यै छुटकारा हुँदैन। यसले मोक्षको कुरा जो शास्त्रहरूले भनेका छन् ती सबै झुटा हुन्छन्। । यदि मानौं कि ब्रह्म आफ्नै सामर्थ्यले अविद्याबाट छुट्दछ, अरु नै छुटाउनेवालाको आवश्यकता नै पर्दैन, तब यस्तो सामर्थ्ययुक्त स्वतन्त्र र स्वयंप्रकाश परब्रह्ममा अविद्याको को सम्बन्ध मान्न सकिंदैन। फेरि ब्रह्म अविद्याको स्वरूप जान्दछ या जान्दैन? यदि जान्दछ भने त यस्तो को होला जो सर्वज्ञ र स्वतन्त्र भएर पनि र अविद्याको स्वरूपलाई जानेर सुँगुर, कुकुर, कीट पतंगादि योनिहरूमा उत्पन्न हुने दु:खहरूलाई सहनका लागि अविद्या सँग आफ्नो संयोग गर्दछ? यदि भनौं कि ब्रह्म अविद्याको स्वरूपलाई जान्दैन भने त शास्त्र प्रतिपादित सर्वज्ञ ब्रह्म अज्ञ भयो र यसले त्यसको ब्रह्मत्वको हानि भयो किनकी ब्रह्म सर्वज्ञ छ यसैले ब्रह्ममा अविद्याको संयोग कसैगरी गराउन सकिंदैन। यदि यसको उत्तरमा यो भन्ने हो भने कि अविद्या र त्यसको कार्य मिथ्याज्ञान परमार्थ वस्तुलाई दूषित गर्न सक्दैन जस्तो मरीचिको जलले ऊषर देशमा हिलो बनाउन सकिंदैन र यसैले क्षेत्रज्ञ (परमात्मा)को अविद्या केही बिगार्न सक्दैन, त यो पनि ठिक होईन किनकी जब अविद्या कुनै दोष नै पैदा गर्न सक्दैन भने त्यसको निवृत्तिको उपाय जो शास्त्रहरूमा बताईएको छ सबै व्यर्थ हुनेछन्। बन्ध-मोक्ष-विषयक शास्त्र वचन

व्याप्यत्वतदधीनत्वादिहेतुभिर्ब्रह्मणः सर्वात्मत्वसर्वव्यापकत्वस्वतन्त्रत्वादिभिरभेदप्रतिपादनेन चरितार्थत्वात्। तथाहि "अन्तः प्रविष्टः शास्ता जनानां, सर्वात्मा, यच्च किञ्चिज्जगत्यस्मिन् दृश्यते श्रूयतेऽपि वा। अन्तर्बहिश्च तत्सर्वं व्याप्य नारायणः स्थितः। अहमात्मा गुडाकेश! सर्वभूताशयस्थितः। इन्द्रियाणि मनोबुद्धिः सत्त्वं तेजो बलं धृतिः। वासुदेवात्मकान्याहुः क्षेत्रं क्षेत्रज्ञ एव च। योऽयं तवागतो देव! समीपे देवतागणः। स त्वमेव जगत्स्रष्टा यतः सर्वगतो भवान्। सर्वगत्वादनन्तस्य स एवाहमवस्थितः। सर्वं समाप्नोषि ततोऽसि सर्वः, तथा "यदासीत्तदधीनमासीत् सर्वस्य वशी सर्वस्येशानः आत्मा हि परमः स्वतन्त्रोऽधिगुणः, जीवोऽल्पशक्तिरस्वतन्त्रोऽवरः, सत्त्वं स्वातन्त्र्यमुद्दिष्टं तच्च कृष्णे न चापरे। अस्वातन्त्र्यात्तदन्येषामसत्त्वं विद्धि भारत!। किमनेन जगन्नाथ! सर्वं त्वद्वशगं जगदि"त्यादि श्रुतिस्मृतीहासपुराणादिवाक्येभ्यः यद्यदायत्तस्थिप्रवृत्तिकं वस्तु तत्तदभेदव्यपदेशार्हमिति व्याप्तिमामनन्ति-छान्दोगाः प्राणेन्द्रियसम्वादे "न वै वाचो न चक्षूंषि न मन इत्यचक्षते प्राण इत्येवाचक्षत"इति। तथा भेदव्यपदेशाश्च, क्षेत्रक्षेत्रज्ञपरमात्मनां स्वरूपस्वभाववैलक्षण्यप्रमिपादनेन मुख्यार्थतयैव सूपपन्नाः। "सर्वं तं परादाद्योऽन्यत्रात्मनः सर्वं वेद, नान्योऽतोऽस्ति द्रष्टा, द्वितीयाद्वै भयं भवती"त्यादिभेदनिषेधव्यपदेशास्तु परमात्मतरस्वतन्त्रत्वावच्छिन्नवस्तुनिषेधनेन सूपपन्नाः। एवञ्च न कस्यापि वाक्यस्य विरोधशङ्कागन्धोऽपि। अत एव भेदविषयकाणामभेदविषयकाणां च वाक्यानां परस्परं बाध्यबाधकभावो वक्तुं न शक्यः;तुल्यबलत्वात्। इदमेव तात्पर्यं हृदि निधाय भगवान् सूत्रकारः परस्परविरुद्धार्थकानां भेदवाक्यानामभेदवाक्यानां चाविरोधेन समन्वयप्रकारदर्शनाय चेतनाचेतनयोर्ब्रह्मणा स्वाभाविकभेदाभेदसम्बन्धस्यैव निर्दोषत्वख्यापनाय घटकसूत्राणि प्रणीतवान्। "अंशो नानाव्यपदेशादन्यथा चापि दासकितवादित्वमधीयते एके, उभयव्यपदेशात्त्वहिकुण्डलवत्,

अनर्थक हुन पुग्दछन्। यसैले ब्रह्ममा अविद्याको सम्बन्ध छ भनेर भन्न सकिंदैन र अविद्या कृत जीव ईश्वरको विभाग पनि मान्न सकिंदैन। मोक्षार्थिहरूले यस भ्रान्तियुक्त र जगत्मा मोह पैदा गर्ने मतलाई मान्नु हुँदैन। यस्तो शंका पनि गर्नु हुँदैन कि यस मतलाई नमान्नाले ब्रह्मको सबैसँग अभेद प्रतिपादक शास्त्रवाक्यहरूको विरोध हुनेछ। ती वाक्य क्षेत्र क्षेत्रज्ञ, प्रकृति पुरुष, क्षर अक्षर इत्यादि शब्दहरूबाट भनिने जड़ र चेतनको जो ब्रह्म सँग घनिष्ठ सम्बन्ध छ त्यसैमा चरितार्थ हुनेछन्। ब्रह्म सबैको आत्मा हो र सबै जड़ चेतन ब्रह्मात्मक हुन्। ब्रह्मव्यापक छ र जड़ चेतन व्याप्य छ। यसै प्रकार ब्रह्म स्वाधीन छ र जगत् त्यसको आधीन इत्यादि अरु पनि ब्रह्म र जड़ चेतनसँग जो सम्बन्ध छ ती दुबैका अभेद प्रतिपादन गर्दछन् किनकी व्याप्य व्यापक वा स्वाधीन र तदधीन वस्तु पृथक् बस्न सक्दैनन्। ती दुबैमा अभेद सम्बन्ध रहन्छ। यी सम्बन्धहरू का द्वारा अभेद प्रतीपादक शास्त्रवचन चरितार्थ हुन्छन्। यस मा शास्त्र प्रमाण छन्, यथा 'भित्र पसेर जीवहरूलाई ब्रह्म शासन गर्दछ'। 'सर्वात्मा'। हे अर्जुन! म नै सबैको आत्मा हुँ र सबै भूकको हृदयमा बसेको छु।' 'यी जुन देवगण तिम्रो छेउ आएका छन, हे देव! त्यो सबै तिमी नै हौ, हे जगत्को पालक! किनकी हजुर सबैमा विद्यमान हुनुहुन्छ'। 'सबैमा ब्रह्म विद्यमान छ यसैले म नै ब्रह्म हुँ' 'जे छ त्यो सबै त्यसको अधीन छ' 'आत्मा अर्थात् ब्रह्म परम स्वतन्त्र र जीव भन्दा धेरै गुणवाला छ' 'जीव अल्पशक्तिवाला, अधीन र अश्रेष्ठ छ' 'स्वतन्त्र हुनाले कृष्ण नै एक वस्तु हुन् उनैको एउटा सत्ता छ र सबै जगत् अस्वतन्त्र हुनाले वस्तुको गिन्तिमा छैनन्। हे अर्जुन! यिनीहरूलाई वस्तु भनेर नठान्नु' धेरै किन भन्नु 'हे जगन्नाथ! सम्पूर्ण जगत् तिम्रो वशमा छ'। यी श्रुति, स्मृति, इतिहास, पुराणादि वचनहरूबाट यही प्रकट हुन्छ कि जुन वस्तु जसको अधीन स्थितिप्रवृत्तिवाला छ त्यसैले त्यसको अभेद छ। छान्दोग्यको प्राणेन्द्रिय संवादमा पनि यो व्याप्ति भनिएको छ, जस्तै 'वाक्, आँखा मन भनिदैनन्' अर्थात् यी प्राणको आधीन छन् यसैले प्राण सँग यिनीहरूको अभेद सम्बन्ध छ। क्षेत्र र क्षेत्रज्ञको परमात्माको स्वरूप र स्वभावमा विलक्षणता छ यसैले भेद प्रतिपादक वाक्य मुख रूपले सिद्ध भए। त्यसलाई सबै धर्म छोडिदिनु जुन सबै ब्रह्मभन्दा अन्यत्र जान्दछन्' 'अर्को बाट डर हुन्छ' यसै अर्को द्रष्टा कोही छैन' आदि जो भेद निषेधक वचन छन् ती केवल परमात्मा भन्दा भिन्न स्वतन्त्र वस्तुको निषेध गर्दछन्। यस प्रकार कुनै पनि वाक्यको विरोध शंकाको गन्धमात्र पनि यस सिद्धान्तमा छैन र अभेदवाक्य र भेद वाक्यहरूको तुल्यबल हुनाले उनीहरूमा एक अर्काको बाध्यबाधक भाव पनि हुन सक्दैन। यसै तात्पर्यलाई हृदयमा राखेर सूत्रकार भगवान् बादरायण व्यासले घटक सूत्रहरूलाई बनाउनु भयो। यी सूत्रहरूमा परस्पर विरोधी भेद र अभेद वाक्यहरूको समन्वयको रीति देखाउनको लागि भनिएको छ कि चेतन र अचेतन को ब्रह्मसँग स्वभाविक भेद र अभेद

प्रकाशाश्रयवद्वा तेजस्त्वादि''ति। एकः सन् बहुधा विचचार ''एको देवो बहुधा बहून् प्रविष्टः, त्वमेकोऽसि बहुधा बहून्प्रविष्ट'' इत्याद्याः घटकश्रुतयश्च। तथैवो–क्तार्थघटकानि स्मृतिपुराणवाक्यानि कानि चिदुदाह्रियन्ते–तथाह मनुः ''एकत्वे सति नानात्वं नान त्वे सति चैकता। अचिन्त्यं ब्रह्मणो रूपं कस्तद्वेदितुमर्हती''ति। ''ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते। एकत्वेन पृथक्त्वेन बहुधा विश्वतो मुखमि''ति भगवद्वाक्यं, च विष्णुपुराणे प्रह्लाद आह ''ॐ नमो भगवते वासुदेवाय तस्मै भगवते सदा। व्यतिरिक्तं न यस्यास्ति व्यतिरिक्तोऽखिलस्य च। नित्या–नित्यप्रपञ्चात्मन्! निःप्रपञ्चामलाश्रित। एकानेक नमस्तुभ्यं वासुदेवादिकारण। यः स्थूलसूक्ष्मः प्रकटः प्रकाशो यः सर्वभूतो न च सर्वभूतः। विश्वं यतश्चैतदविश्वहेतो! नमोऽस्तु तस्मै पुरुषोत्तमाये''ति। तत्रैव ध्रुवस्तुतौ ''पृथग्भू–तैकभूताय भूतभूतात्मने नमः'' इति। हरिवंशे घण्टाकर्णश्च ''अनेकमेक बहुधा वदन्ति श्रुतिस्मृतिन्यायनिविष्टचित्ताः। आहुर्यमात्मानमजं पुराणं द्रष्टुं तमीशं वयमुद्यतोः स्म''इति। श्रीभागवते प्रथमस्कन्धे श्रीनारदो व्यासं प्रति ''इदं हि विश्वं भगवानिवेतरा यतो जगत्स्थाननिरोधसम्भवाः। तद्धि स्वयं वेद भवांस्तथाऽपि वै प्रादेशमात्रं भवतः प्रदर्शितम्'' द्वितीयस्कन्धे ब्रह्मापि नारदायाह ''सोऽयं तेऽभिहितस्तात! भगवान् हरिरीश्वरः। समासेन हरेर्नान्यदन्यस्मात्सदसच्च यदि''ति। तस्मात्सर्वश्रुतिस्मृतीतिहासपुराणादिवाक्या–विरुद्धो भगवत्सूत्रकारसम्मतश्चिदचितोर्ब्रह्मणा स्वाभाविक भेदाभेद एव सम्बन्धः सत्सम्प्रदायिभिरुपादेयः केवलभेदः केवलाभेदश्चोक्तशास्त्रविरुद्धत्वाद्भ्रान्तिपरिगृहीतत्वाच्चो–पेक्षणीयः। अपरे तु देवमनुष्यादिक्षेत्रेषु वेत्तृत्वैकाकारं क्षेत्रज्ञं च मां विद्धि मदात्मकं विद्धि, चापीति अपिशब्दात् क्षेत्रमपि मां विद्धीत्युक्तमवगम्यते, यथा क्षेत्रं क्षेत्रज्ञैक–विशेषणस्वभावतया तदपृथक्सिद्धेस्तत्सामानाधिक–रण्येनैव निर्दिष्टं, तथा क्षेत्रं क्षेत्रज्ञश्च मद्विशेषणैकस्वभावतया मदपृथक्सिद्धेस्तत्सामानाधिकरण्येनैव निर्देश्याविति हि–

सम्बन्ध छ र यही सम्बन्ध निर्दोष छ। घटक सूत्र यी हुन् 'अंशो०' अर्थात् धेरै भनिएको ले आत्मा अंश हो। अथर्वण शाखावाला ब्रह्मको जीव संग अभेद देखाउँदै भन्दछन् कि दास, ठग, चोर आदि पनि ब्रह्म नै हुन्। 'उभय०' अर्थात् साँप र त्यसको कुण्डलको जस्तो ब्रह्म र जीवमा भेद र अभेद दुबै छ। 'प्रकाश र प्रकाशवान्मा भेद र अभेद दुबै छ। 'एक भएपनि धेरै प्रकारले स्थित छ।' 'एक देव धेरैमा धेरै प्रकारले गर्‍यो'। 'तिमी एक हौ र धेरैमा धेरै प्रकारले प्रविष्ट छौ।'

माथि लेखिएका कुराहरूलाई समर्थन गर्नेवाला केहि स्मृतिपुराणका वाक्य यहाँ दिईदैछ।

मनुजी भन्नुहुन्छ–''एक भएपनि अनेक र अनेक भएपनि एक। ब्रह्मको रूप अचिन्त्य छ। कोही पनि त्यसलाई जान्न सक्दैन।' भगवान् श्रीकृष्ण भन्नुहुन्छ– 'ज्ञानयज्ञले होस वा अन्य यज्ञले भएपनि जो मेरो उपासना गर्दछन् एक मानेर होस या धेरै मानेर किनकी म विश्वमुखवाला हुँ।' विष्णुपुराणमा प्रह्लादको वचन छ–'उनै भगवान् वासुदेवलाई नमस्कार छ जो भन्दा पृथक् केहि पनि छैन र जो अखिल ब्रह्माण्डभन्दा पृथक हुनुहुन्छ। जो नित्य र अनित्य प्रपञ्चरूपी मलबाट शून्य हुनुहुन्छ, एक हुन्, अनेक हुन्, जगत्को आदि कारण हुन्, स्थूल हुन्, सूक्ष्म हुन्, प्रकट छन्, प्रकाशरूप हुन, सर्वभूत हुन् र सर्वभूत होईनन् पनि, जो विश्वको हेतु हुन् र होईनन् पनि, यस्ता परमपुरुषोत्तमलाई म नमस्कार गर्दछु। विष्णुपुराणमा फेरि ध्रुवले स्तुति गरेको छन्– सबैबाट जो पृथक् छन् र सबैसँग एकभूत पनि छन्, सबै भूतहरूका आत्मा हुन उहाँलाई मेरो नमस्कार छ। हरिवंशमा घण्टाकर्णले भनेको छ– 'श्रुति, स्मृति, न्यायलाई जान्नेहरू जसलाई एक पनि भन्दछन् र अनेक पनि भन्दछन्, जसलाई आत्मा, अजन्मा र पुराण भन्दछन् त्यस ईशलाई देख्नको लागि म उद्यत छु'। श्रीमद्भागवतको प्रथम स्कन्धमा नारदले व्यासलाई भन्नुभएको छ– 'मैले त्यस भगवान्को विषयमा संक्षेपमा तिमीलाई भनेको छु। भगवान् भन्दा पृथक् केहि पनि छैन अर्थात् कार्य सत् र असत् कारण सबै हरि भन्दा अलग छैनन् र कारणभूत भगवान् कार्यभन्दा भिन्न पनि छन्। यसैले चित् र अचित्को ब्रह्मसँग स्वभाविक भेद र अभेद सम्बन्ध सबै श्रुतिहरू, स्मृतिहरू, इतिहास, पुराणादिहरूलाई सम्मत छ र भगवान् सूत्रकारलाई पनि मान्य छ। यसैले यस्तो नै सम्बन्ध सत्सम्प्रदायवालाहरूले मान्नु पर्दछ। केवल भेद वा केवल अभेद शास्त्र विरुद्ध छ र यसैले त्यसको उपेक्षा गर्नु पर्दछ।

कोही कोही 'क्षेत्रज्ञं चापि मां विद्धि' को अर्थ यसरी लगाउँदछन्– देव मनुष्यादि क्षेत्ररूपमा ज्ञातारूपले मलाई नै जान्नु अर्थात् ती सबै मदात्मक हुन्। श्लोकमा 'अपि' शब्द भन्नुको अर्थ यो निक्लियो कि क्षेत्र पनि मलाई नै जान्नु। जस्तो क्षेत्र क्षेत्रज्ञको विशेषण हुनाले त्यस भन्दा पृथक छैन अर्थात् दुईटैमा समानाधिकरण छ त्यस्तै नै क्षेत्र र क्षेत्रज्ञ दुबै मेरो (परमात्माको) विशेषण हुन् र

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

वक्ष्यति क्षेत्रज्ञात् बद्धमुक्तोभयावस्थात् क्षराक्षरशब्द–निर्दिष्टादर्थान्तरत्वं परस्य ब्रह्मणो वासुदेस्य "उत्तमः पुरु–षस्त्वन्य"इति पृथिव्यादिसङ्घातरूपस्य भगवच्छरीरै–कस्वभावतया भगवदात्मकत्वं श्रुतयो वदन्ति "यः पृथिव्यां तिष्ठन् पृथिव्यन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयति स ते आत्माऽन्तर्याम्यमृतः" इत्यारभ्य "य आत्मनि तिष्ठन्नात्मनोऽन्तरो यमात्मा न वेद यस्यात्मा शरीरं य आत्मानमन्तरो यमयति स ते आत्माऽन्तर्याम्यमृत"इत्याद्यः। इदमेवान्तर्यामितया सर्व–क्षेत्रज्ञानामवस्थानं भगवतस्तत्सामानाधिकरण्येन व्यपदेश–हेतुरित्येवं समानाधिकरण्यमुपपाद्य अचिद्वस्तुनः परस्य च ब्रह्मणो भोग्यत्वेन भोक्तृत्वेनेशितृत्वेन च स्वरूपस्वभा–वविवेकं(च) श्रुतिभिः प्रतिपाद्य "हन्ताऽहमिमास्तिस्त्रो देवता अनेन जीवेनात्मनाऽनुप्रविश्य नामरूपे व्याकरवाणि तत्सृष्ट्वा तदेवानुप्राविशत् तदनुप्रविश्य सच्च त्यच्चाभवत् विज्ञानं चाविज्ञानं च सत्यं चानृतं च सत्यमभवदि"ति स्वात्मकजीवानुप्रवेशेन नामरूपव्याकरणवचनात् सर्वे वाचकशब्दा अचिज्जीवविशिष्टपरमात्मवाचका इति कारणावस्थपरमात्मवाचिना शब्देन कार्यवाचिनः शब्दस्य सामानाधिकरण्यं मुख्यवृत्तम्। अतः स्थूलसूक्ष्मचिदचित् प्रकारं ब्रह्मैव कार्यं कारणं चेति विशिष्टाद्वैतमङ्गीकृत्य भोक्तृभोग्यनियन्तृभूतचिदचिद्ब्रह्मणां स्वरूपभावभेदाङ्गी–कारेण धर्मसाङ्कर्यमपि वारयन्ति। विशेषणस्य विशिष्ट–वस्त्वेकदेशत्वेनाभेदव्यवहारो मुख्यः, विशेषणविशेष्योः स्वरूपस्वभावभेदेन भेदव्यवहारो मुख्य इति सर्ववाक्या–नमविरोधप्रकारं च वर्णयन्ति। तत् प्रयासमात्रम्। भेदाभेद व्यवहारयोर्मुख्यत्वाङ्गीकारेणास्मन्मतप्रवेशात्। यतोऽस्मा–भिर्भेदाभेदस्यैव श्रुतिस्मृतिसूत्रैर्निगदं साधितत्वात्। यदवशिष्टं ब्रह्मणश्चिदचिद्विशिष्टत्वं, तदसम्भवमेव, चिद–चितोर्विशेषणत्वानुपपत्तेः। तथाहि इतरव्यावर्त्तकत्वं विशे–षणत्वमिति सर्वशास्त्रसमानस्य विशेषणलक्षणस्य चिद–चितोः समन्वयाभावात्। चिदचिद्ब्रह्मेति तत्त्वत्रयेत–

यसैले मदेखि ती अपृथक् सिद्ध छन् र दुबैको मदेखि यस प्रकारको समानाधिकरण सम्बन्ध छ। फेरि बद्ध र मुक्त दुबै अवस्थामा क्षर अक्षर भनिने क्षेत्रज्ञभन्दा परब्रह्म वासुदेव विलक्षण पनि छन् किनकी गीताले नै भनेको छ 'उत्तमः पुरुषस्त्वन्यः' अर्थात् उत्तम पुरुष 'ब्रह्म दोस्रो हो र क्षर र अक्षरले, अर्थात् त्यो त्यसको नियन्ता हो। यस प्रकार पृथिव्यादि को संघातरूप समस्त संसार, क्षर र अक्षर, स्वभावसे भगवान्‌को शरीर हो र यसैले त्यो उसको आत्मा हो। श्रुतिहरू पनि यस्तै भन्दछन्- 'जो पृथ्वीमा रहेर पनि पृथ्वीको भित्र छ, जसलाई पृथ्वीले जानेको छैन, पृथ्वी जसको शरीर हो, जो पृथ्वीको भित्र बसेर शासन गर्दछ त्यही तिम्रो अन्तर्यामी र अमृत आत्मा हो'। यस श्रुतिबाट आरम्भ गरेर- जो आत्मामा रहेर आत्माको भित्र चेतन छ, जसलाई आत्मा जान्दैन, आत्मा जसको शरीर हो, जो आत्माको भित्र बसेर शासन गर्दछ त्यही तिम्रो अन्तर्यामी र अमृत आत्मा हो। यस श्रुति सम्म। यस प्रकार सबै क्षेत्रज्ञहरूमा भगवान् अन्तर्यामीरूपले स्थित भएको कारण त्यसको भगवान्‌सँग समानाधिकरण छ। यस प्रकार भगवान्‌सँग संसारको समानाधिकरण भएको सिद्ध गरेर अचित् वस्तु अर्थात् अचेतन पदार्थ(जड़ प्रकृति) परब्रह्मको भोग्य हो र परब्रह्म त्यसको भोक्ता र ईश हो र यस प्रकार दुबै स्वरूप र स्वभावमा पृथकता छ यस्तो श्रुतिद्वारा प्रतिपादन गरिन्छ। श्रुति-'हन्त! म र पृथ्वी, जल, वायु यी तीनै देवता, यस जीवको साथमा प्रवेश गरेर नाम रूपको भेद गर्‍यौं। र सृष्टि गरेर त्यसैमा प्रवेश गर्‍यौं। प्रवेश गरेर म नै कार्य र कारण भएँ। म नै विज्ञान, अविज्ञान, सत्य र अनृत भएँ।' स्वआत्मीय जीवमा प्रवेश गरेर नाम रूपको विभाग गरेँ। यस कारण संसारको सबै वाचक शब्द अचित् र जीवमा विशेषण युक्त परमात्माको नै वाचक हुन्। यस प्रकार कारणावस्थास्थित परब्रह्मको वाची शब्दको साथ कार्यवाची शब्दको सामानाधिकरण सिद्ध भयो अर्थात् दुबैमा अभेद मुख्य भयो। यसले कार्य अवस्थामा स्थूल र अचेतन शरीररूप विशेषणयुक्त परम पुरुष परमात्मा नै हो। किनकी कार्य कारण को अभेद छ यसैले दुबै विशेषणयुक्त ब्रह्म एउटै हो। पूर्वोक्त प्रकारले ब्रह्म नै कार्य र कारण हो। यस्तो भएर पनि चेतन भोक्ता हो, अचेतन भोग्य हो र ब्रह्म दुबैको नियन्ता हो। यस प्रकार तीनैमा स्वभाव र स्वरूपको भेद हुनाले तीनैमा ध र्मको संकरता आउन सक्दैन। विशेषणको विशेष्य सँग एकदेशित्व छ र यसैले दुबैमा अभेद व्यवहार पनि छ तर दुबैको स्वरूप र स्वभावमा पृथकता छ यसैले दुबैमा भेद व्यवहार पनि छ। यस तरहले ती भेद र अभेद वाक्यहरूको अविरोध वर्णन गर्दछन्। तर यो व्याख्या प्रयास मात्र हो। भेद र अभेद मुख्यरूपले यस मतमा अंगीकार हुन्छ यसैले यो मत यस अंशमा मेरो मतको समान छ किनकी मेरो मतमा पनि भेद र अभेद श्रुति स्मृति वाक्यहरूद्वारा स्पष्ट गरिएको छ। तर चित् अचित् अर्थात् प्रकृति र जीव ब्रह्मको विशेषण हुनु असम्भव छ किनकी चेतन र अचेतन

रवस्त्वभावादनङ्गीकाराच्च। एवञ्च यथा शृङ्गसास्नादिमत्त्वेन गोत्वलक्षणेन महिष्यादयो व्यावर्त्त्यन्ते तथा विशेषणत्वेनाभिमताभ्यां चिदचित्पदार्थाभ्यां किं वा वस्तु व्यावर्त्त्यते इति वक्तव्यं ? न तावद्ब्रह्मान्तरमस्ति व्यावर्त्त्यम् "एकमेवाद्वितीयमि"ति श्रुत्या तस्यैकत्वावधारणात्। नापि चेतनचेतना येव तयोर्व्यावर्त्त्यत्वाङ्गीकारेण व्यावर्त्तकत्वरूपविशेषणत्वासम्भवात्। एवं तन्मते व्यावर्त्त्यं किञ्चिन्न सिध्यति। व्यवर्त्त्यसिद्धौ कुतो व्यावर्त्तकता। तयोः व्यावर्त्तकत्वाभावेविशेषणत्वं न शक्यते वक्तुं विशेषणत्वासिद्धौ तद्विशिष्टत्वमनुन्मत्तः को ब्रूयात्। किञ्च चिदचितोर्ब्रह्मविशेषत्वे श्रुतेः स्मृते सूत्रस्य वा प्रमाणाभावात्तद्विशिष्टत्ववचनमप्रमाणिकमेव। तस्माद्यथा मायावादिनां शास्त्रानुभवविरुद्धोऽपि ब्रह्मण्यविद्याऽध्यायासाङ्गीकारस्तथाऽनुपपन्नमपि विशिष्टाद्वैतं दुराग्रहेण सम्प्रदायस्वातन्त्र्यसिद्ध्यर्थमङ्गीकृतमित्यलं विस्तरेण। तस्मादुक्तार्थस्यैव शास्त्रानुभवसिद्धत्वाच्छ्रेयोऽर्थिभिरुपादेयत्वम्॥२॥

मा विशेषणको लक्षण घट्दैनन्। यस कुरालाई देखाउनु हुन्छ। जुन एउटा वस्तुलाई अर्को अनेक वस्तुहरू बाट पृथक् गर्छ त्यही नै त्यस वस्तुको विशेषण हो। यो लक्षण सर्वशास्त्र सम्मत छ। यो चित् र अचित् मा घट्दैन किनकी चित् अचित् र ब्रह्म यी तीन तत्त्व मानिएको छ। र बादी पनि यिनीहरू भन्दा पृथक् कुनै चौथो तत्त्व मान्दैन। यसैले जस्तो सींग र सास्नादिबाट गोवंश लाई भैंसी वर्गबाट पृथक् गरिन्छ त्यस्तै नै चित् र अचित् विशेषण ले ब्रह्मलाई कुन वस्तुले पृथकता गर्दछन्? यसको प्रतिवादि के जवाफ दिन सक्दछन् किनकी ब्रह्म भन्दा अर्को कुनै व्यावर्त दोस्रो ब्रह्म छैन। किनकी श्रुतिले ब्रह्मको विषयमा भनेको छ-'एकमेवाद्वितीयम्' अर्थात् ब्रह्म एक अद्वितीय छ, त्यो भन्दा दोस्रो कोही छैन।' यो भन्न नै सकिंदैन कि चेतन र अचेतनले ब्रह्मको पृथकता हुन्छ किनकी जसलाई पृथक् गर्नुछ त्यो विशेषण हुन सक्दैन। यस प्रकार प्रतिवादीको मतमा व्यवर्त्य कसैगरी पनि सिद्ध हुँदैन। र व्यवर्त्य जब सिद्ध नै भएन भने त व्यावर्त्य रह्यो नै कहाँ? व्यावर्त्तकत्वको अभावमा विशेषणत्व पनि भन्न सकिंदैन जब विशेषण नै रहेन भने विशेषणयुक्त ब्रह्म हो यस्तो सिद्धान्त को मान्न सक्दछ? अरु पनि चित् अचित् ब्रह्मको विशेषण हुनमा श्रुति, स्मृति र सूत्रको कुनै वचन प्रमाण छैन। यसैले ब्रह्म विशेषणयुक्त भएको वचन पनि अप्रामाणिक हो। यसैले जो अर्थ(भिन्नाभिन्न ब्रह्म) यहाँ प्रतिपादन गरिएको छ यही शास्त्र र अनुभव सिद्ध भएको कारण श्रेय छ॥२॥

-★-★-★-

**तत्क्षेत्रं यच्च यादृक्क यद्विकारि यतश्च यत्।**
**स च यो यत्प्रभावश्च तत्समासेन मे शृणु॥**

**त्यो क्षेत्र जे छ जस्तो छ तथा जुन विकारहरूवाला छ जसबाट जो उत्पन्न भएको छ तथा त्यो क्षेत्रज्ञ पनि जे छ र जस्तो प्रभाववाला छ त्यो सबै संक्षेपमा मसँग सुन॥३॥**

एवं निर्णीतस्वसम्बन्धज्ञानयोः क्षेत्रक्षेत्रज्ञयोः स्वरूपयाथात्म्यं सङ्क्षेपेण वक्तु प्रतिजानीते-तदिति। तत् इदं शरीरमिति। पूर्वोक्तं क्षेत्रं यच्च यद्द्रव्यं यादृक्च धर्मतो यत् प्रकारं यद्विकारि यैर्विकारैर्युक्तं यतश्च प्रकृतिपुरुषसंयोगाद्भवति यत्स्वरूपं स च क्षेत्रज्ञः यो यत्स्वरूपः यत्प्रभावः ये चास्य प्रभावास्तत्समासेन संक्षेपेण मे मत्तः शृणु॥३॥

क्षेत्र र क्षेत्रज्ञको आफुसँगको सम्बन्धको ज्ञान भगवान्ले पछाडि निर्णय गर्नुभयो। अब यस श्लोकमा क्षेत्र र क्षेत्रज्ञको रूपलाई संक्षेपमा भन्ने प्रतिज्ञा गर्नुहुन्छ। पूर्वमा भनिएको क्षेत्र अर्थात् शरीर जुन द्रव्यले बनेको छ, जुन धर्महरू र जुन विकारहरूले युक्त छ, जसबाट प्रकृति पुरुषको संयोगले हुन्छ र जो त्यसको रूप हो सबै मबाट संक्षेपमा सुन। फेरि क्षेत्रज्ञ जीवको जो स्वरूप छ र जो त्यसको प्रभाव हो त्यो पनि मबाट संक्षेपमै सुन॥३॥

-★-★-★-

**ऋषिभिर्बहुधा गीतं छन्दोभिर्विविधैः पृथक्।**
**ब्रह्मसूत्रपदैश्चैव हेतुमद्भिर्विनिश्चितैः॥**

**ऋषिहरूका द्वारा धेरै विस्ताले भनिएको छ तथा वेदको ऋचाहरू द्वारा अनेक प्रकारले विभागपूर्वक भनिएको छ र**

**युक्तियुक्त एवं निश्चित गरिएको ब्रह्मसूत्रको पदहरू द्वारा पनि भनिएको छ ॥४॥**

कैर्विस्तरेणोक्तं यतः संक्षेपेणोच्यत इत्यपेक्षायामाह– ऋषिभिरिति। ऋषिभिः पराशर व्यासादिभिर्बहुधा बहुप्रकारेण गीतं निरूपितं छन्देभिर्विविधैः पृथक् विविधैः छन्दोभिः ऋग्यजुसामाथर्वभिः क्षेत्रक्षेत्रज्ञयोः स्वरूपं पृथग्गीतं "तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूतः आकाशाद्वायुः वायोरग्निरग्नेराः अद्भ्यः पृथिवी पृथिव्या ओषधयः ओषधिभ्योऽन्नमन्नात्पुरुषः स वा एष पुरुषोऽन्नरसमय इति क्षेत्रमन्नमयपुरुषं शरीरमभिधाय तदनन्तरं प्राणमयं मनोमयं च पुरुषमभिधाय "तस्माद्वाएतस्मान्मनोमयादन्योऽन्तर आत्मा विज्ञानमये"इति क्षेत्रज्ञस्वरूपं निरूपितम्। तथा ब्रह्मसूत्रपदैः ब्रह्म सूत्र्यते वेष्ट्यतेऽल्पाक्षरैर्यैस्तानि ब्रह्मसूत्राणि तानि च तैर्ब्रह्मसूत्रपदैः वेदेषु विस्तृतं स्वरूपगुणविभूतिसहितं ब्रह्मतत्त्वं सारवद्भिरल्पाक्षरैः संक्षिप्योच्यते यैस्तानि ब्रह्मसूत्राणीत्यर्थः। तान्येव पदानि तैः हेतुमद्भिः अज्ञातार्थबोधको हेतुस्तद्वद्भिः, पुनर्विनिश्चितैर्विदुषामसन्दिग्धार्थै, तथा चोक्तम् "अल्पाक्षरमसन्दिग्धं सारवद्विश्वतो मुखम्। अस्तोभमनवद्यं च सूत्रं सूत्रविदो विदुरि"ति। तथा च ब्रह्मसूत्रैः शारीरिकमीमांसासूत्रैः क्षेत्रक्षेत्रज्ञस्वरूपयाथात्म्यं प्रतिपादितमित्यर्थः। ननु यानि ब्रह्मप्रतिपादकानि न तैः क्षेत्रक्षेत्रज्ञप्रतिपादनं तेषां कथं ब्रह्मसूत्रत्वमिति चेच्छृणु ब्रह्मस्वरूपनिरूपणासाधारणहेतूनां जगज्जन्माद्युपादात्वतन्नियन्तृत्वततप्रवर्त्तकत्वस्वतन्त्रत्वव्यापकत्वानुग्राहकत्वादिधर्माणां ब्रह्मोपादेयत्वतन्नियम्यत्वततप्रवर्त्त्यत्वतत्तन्त्रत्वतद्व्याप्यत्वदनुग्राह्यत्वादिधर्मावच्छिन्नक्षेत्रक्षेत्रज्ञस्वरूपनिरूपणं विनाऽनुपपत्तेरतस्तत्प्रतिपादनस्यापि ब्रह्मप्रतिपादनोपयोगित्वाद्ब्रह्मप्रतिपादनमेवेति सर्वेषां

क्षेत्र र क्षेत्रज्ञको रूप विस्तारमा कसले भनेको छ जसलाई संक्षेपमा हजुर भन्नुहुनेछ? यसैको उत्तर भगवान् दिनुहुन्छ। पराशर, व्यास आदिले धेरै तरीकाले क्षेत्र र क्षेत्रज्ञको रूपमा निरूपण गरेका छन्। ऋक्, यजु, साम र अथर्व वेदहरूका अनेकानेक छन्दहरूद्वारा क्षेत्र र क्षेत्रज्ञको स्वरूप पृथक् पृथक् वर्णन गरिएको छ। जस्तो 'तस्माद्वा०' अर्थात् यस आत्मा (परमात्मा)बाट आकाश उत्पन्न भयो र आकाशबाट वायु, वायुबाट अग्नि, अग्निबाट जल, जलबाट पृथ्वी, पृथ्वीबाट औषधीहरू, र औषधीहरूबाट अन्न र अन्नबाट पुरुष(क्षेत्र) पैदा भयो। त्यही पुरुष अन्नरसमय हो। यस प्रकारले क्षेत्रलाई अन्नमय पुरुष भनियो। फेरि प्राणमय र मनोमय पुरुषलाई भनियो। यस मनोमय पुरुष भन्दा विलक्षण विज्ञानमय पुरुष जो छ त्यही क्षेत्रज्ञ अर्थात् जीवात्मा हो। ब्रह्मसूत्रहरूबाट अर्थात् वेदमा विस्तृत स्वरूप, गुण र विभूतिको सहित जो ब्रह्मतत्त्व छ त्यसलाई सारयुक्त अल्पाक्षरमा भनिदिने पदहरूले, जुन अज्ञात अर्थ बोधको हेतुहरूका सहित र विद्वान्हरूबाट सुनिश्चित छ, जस्तो कि भनिएको छ 'अल्पाक्षर०' सूत्रलाई जान्नेहरू सूत्रको यस्तो व्याख्या गर्दछन्- जुन थोरै अक्षरहरूमा, सन्देहरहित, सारवाला, व्याप्त, स्पष्ट र निर्दोष छ त्यसलाई सूत्र भनिन्छ। अर्थात् शारीरिक मीमांसा सूत्रहरूबाट क्षेत्र र क्षेत्रज्ञको यथार्थ स्वरूप निरूपण गरिएको छ।

शङ्का–ब्रह्मसूत्रहरूले ब्रह्मको प्रतिपादन गरेका छन्, क्षेत्र र क्षेत्रज्ञको होईन। ब्रह्मको प्रतिपादक सूत्र क्षेत्र र क्षेत्रज्ञको प्रतिपादक कसरी हुन्छन्? र क्षेत्र र क्षेत्रज्ञको प्रतिपादन गर्ने सूत्रलाई ब्रह्मसूत्र कसरी भन्ने?

उत्तर–क्षेत्र र क्षेत्रज्ञ ब्रह्मको निरूपणमा असाधारण कारण हुन किनकी ब्रह्म जगत् (क्षेत्र र क्षेत्रज्ञ)को जन्म, स्थिति, लयको उपादान, त्यसको नियन्ता, प्रवर्त्तक, स्वतन्त्र, व्यापक, यसमा अनुग्रह गर्नेवाला छ र यो उसको स्वभाविक धर्म हो र जगत त्यसबाट उत्पन्न, त्यसबाट नियन्त्रित, प्रवर्त्त्य, त्यसको अधीन, त्यसैबाट व्याप्य र अनुग्रहीत धर्मवाला हो। यसैले क्षेत्र र क्षेत्रज्ञको स्वरूप को निरूपण नगरीकन ब्रह्मको स्वरूप-निरूपण हुन सक्दैन। यसैले ब्रह्मको निरूपणमा उपयोगी भएको कारण क्षेत्र र क्षेत्रज्ञको निरूपण पनि ब्रह्मको नै निरूपण भयो। यसैले सबै सूत्र ब्रह्म प्रतिपादक नै भए। फेरि 'नवियदश्रुतेः' (आकाश उत्पन्न हुँदैन किनकी आकाश पैदा हुनमा श्रुति प्रमाण हुँदैन।) आदि सूत्रहरूले कार्यकारण भाव द्वारा क्षेत्रको निर्णय गरेका छन्। अर्थात् छान्दोग्य मा संसारको उत्पत्तिको वर्णन गर्दाखेरि आकाशको उत्पत्तिको वर्णन गरेको छैन। तर तैत्तिरिय उपनिषद्मा 'आत्मन आकाशः सम्भूतः' लेखिएको छ। भाव यो हो कि ब्रह्मबाट आकाश उत्पन्न भएको छ। यसैले गुणोपसंहार न्याय द्वारा परमात्मा बाट आकाशको उत्पत्ति सिद्ध छ। यस हेतुले परमात्माको आकाश

ब्रह्मसूत्रत्वमेवेत्यविरोधः। तथा च "न वियदश्रुते"रित्यादिभिः कार्यकारणभावेन क्षेत्रनिर्णय उक्तः। एवमृष्यादिभिः क्षेत्रक्षेत्रज्ञयाथात्म्यं बहुधा गीतं, मया सङ्क्षेपेण स्पष्टमुच्यमानं शृण्वित्यर्थः॥४॥

आदिसँग कार्य कारण द्वारा क्षेत्रको निर्णय भनियो। 'नात्मा०' (आत्माको उत्पत्ति छैन किनकी श्रुतिमा आत्मालाई नित्य भनिएको छ। आत्मा ज्ञाता हो)। इत्यादि बाट क्षेत्रज्ञको निर्णय गरिएको छ। यस प्रकार ऋषिहरूले क्षेत्र र क्षेत्रज्ञको स्वरूप धेरै तरीकाले भनेका छन् जसलाई हे अर्जुन! तिमी मबाट संक्षेपमा स्पष्ट सुन॥४॥

-★-★-★-

**महाभूतान्यहङ्कारो बुद्धिरव्यक्तमेव च।**
**इन्द्रियाणि दशैकं च पञ्च चेन्द्रिय गोचराः॥**

**मूल प्रकृति र समष्टि बुद्धि (महत्तत्व), समष्टि अहंकार, पाँच महाभूत र दस इन्द्रियहरू, एक मन तथा पाँचै इन्द्रियहरूका पाँचै विषयहरू यही नै (चौबीस तत्त्वहरू भएको) क्षेत्र हो॥५॥**

तत्र तावत् क्षेत्रस्वरूपमाह–महाभूतानीति द्वाभ्याम्। महाभूतानि शरीरोपादानद्रव्याणि पृथिव्यप्तेजावाय्याकाशाख्यानि, अहङ्कारस्तत्कारणं भूतादिः, बुद्धिर्महत्तत्त्वम्, अव्यक्तं गुणत्रयात्मकं प्रधानम्, इत्यष्टधा प्रकृतिः, इन्द्रियाणि दशैकं च श्रोत्रत्वक्चक्षु रसनघ्राणाख्यानि पञ्च ज्ञानेन्द्रियाणि वाक्पाणिपादयूपस्थाख्यानि कर्मेन्द्रियाणि, एकं च मनः, इन्द्रियगोचराः श्रोत्रादीन्द्रियविषयाः शब्दस्पर्शरूपरसगन्धाः पञ्च इति चतुर्विंशति तत्त्वानि साङ्ख्याः कथयन्ति॥५॥

अब क्षेत्रको स्वरूप दुई श्लोकहरूमा वर्णन गर्नुहुन्छ- शरीरको उपादान द्रव्य पाँच महाभूत यथा, पृथ्वी, जल, तेज, वायु र आकाश यी सबैको कारण अहंकार, बुद्धि अर्थात् महत्तत्व, अव्यक्त अर्थात् तीन गुणवाला प्रकृति, एघार इन्द्रियहरू जस्तै कान, छाला, आँखा, जिब्रो र नाक; पाँच ज्ञानेन्द्रिय, वाक्, हात, गोडा, जननेन्द्रिय र मलद्वार पाँच कर्मेन्द्रियहरू र एघारौं मन, इन्द्रियहरूका पाँच विषय, यथा-कानको शब्द, त्वचाको स्पर्श, आँखाको रूप, रसनाको रस र नाकको गन्ध यहि चौबीस तत्त्व सांख्यवादिहरूले भनेका छन्॥५॥

-★-★-★-

**इच्छा द्वेषः सुखं दुःखं सङ्घातश्चेतना धृतिः।**
**एतत्क्षेत्रं समासेन सविकारमुदाहृतम्॥**

**इच्छा, द्वेष, सुख, दुःख, संघात (शरीर) चेतना (प्राण-शक्ति) र धृति- यी विकारहरूका सहित यो क्षेत्र संक्षेपले भनिएको हो॥६॥**

इह तु इच्छादयो धर्मा अधिका अङ्गीकृताः। तत्र सुख्हेतुतयाऽभिमतवस्त्वीप्सा इच्छा, द्वेषः प्रतिकूलवस्तुनिरासात्मिका चित्तवृत्तिः। सुखं पुण्यजन्यानुकूलविषयानुभवः। यद्यपीच्छाद्वेषसुखदुःखान्यात्मनो धर्माः "पुरुषः सुखदुःखानां भोक्तृत्वे हेतुरुच्यते" इति वक्ष्यमाणत्वात्। तथाऽपि तेषामात्मनः क्षेत्रसम्बन्धप्रयुक्तत्वात्तज्जन्यत्वाच्च क्षेत्राश्रितत्वमप्युच्यते। सङ्घातश्चेतनभोगायतनभूत पञ्चमहाभूतपरिणामः, चेतना विषयानुभवयोग्यदेहेन्द्रियावैकल्यावस्था, धृतिः वैकल्यहेतौ सति देहेन्द्रियावष्टम्भको धर्मविशेषः।

यहाँ गीताशास्त्रमा भगवान्ले इच्छादि धर्म अधिक मान्नुभएको छ। सुखको लागि इच्छित वस्तुको चाहलाई इच्छा भन्दछन्। प्रतिकूल वस्तुलाई हटाउनेवाला चित्तवृत्तिलाई द्वेष भन्दछन्। पुण्य जनित अनुकूल विषयको अनुभवलाई सुख भन्दछन्। यद्यपि इच्छा, द्वेष, सुख, दुःख आदि आत्माको धर्म हुन् जस्तो अगाडी गएर भगवान् भन्नुहुनेछ 'पुरुषः...हेतुरुच्यते' अर्थात् भोक्ता हुनाले सुख दुःख हुने कारण पुरुष हो। तथापि त्यसको आत्मामा प्रयोग क्षेत्रको सम्बन्धले नै हुन्छ र क्षेत्रको नै सम्बन्धले ती पैदा हुन्छन् यसैले ती क्षेत्रको आश्रित छन् यस्तो भनियो। यसै कारण उनीहरूलाई क्षेत्रको धर्म भनियो। फेरि क्षेत्र आत्माको भोगको घर हो र पञ्चमहाभूहरूको संघको परिणाम हो। विषय अनुभव योग्य र इन्द्रियको अविकल अवस्थालाई चेतना भन्दछन्। विकलताको कारण उपस्थित हुँदा पनि देह र इन्द्रियमा जो

एतत् दृश्यमानं सर्वं प्रकृत्यादिपृथिव्यन्तद्रव्यपरिणामरूपम् इन्द्रियमनइच्छादिधर्म्मोद्भवहेतुभूतं चेतनसुखदु:खादि-भोगागारं क्षेत्रं देहान्तरबीजभूतपुण्यपापोद्गमभूमिभूतं समासेन सङ्क्षेपेण सविकारं जन्ममरणावस्थान्तरादिपरिणामयुक्तमु-दाहृतमुक्तम् ॥६ ॥

विकलता हुन दिंदैन त्यसलाई धृति वा धैर्य भन्दछन्। देखिने, प्रकृतिदेखि लिएर पृथिवीसम्म द्रव्यको परिणाम स्वरूप, इन्द्रिय, मन, इच्छा आदि को धर्मको उत्पत्तिको कारण स्वरूप, चेतनको सुख दु:खादि भोगको स्थान, देहान्तरको कारणभूत पाप-पुण्यको उत्पत्ति भूमि, जुन क्षेत्र वा शरीर छ, त्यसलाई जन्म, मरण, अवस्थान्तर आदि परिणाम सहित मैले भने॥६॥

-★-★-★-

## अमानित्वमदम्भित्वमहिंसा क्षान्तिरार्जवम्।
## आचार्योपासनं शौचं स्थैर्यमात्मविनिग्रहः॥

**आफुमा श्रेष्ठताको भाव नहुनु, देखावटीपन नहुनु, अहिंसा, क्षमा, सरलता, गुरुको सेवा, बाहिर-भित्रको शुद्धि, स्थिरता र मन वशमा हुनु॥७॥**

एवं क्षेत्रं प्रतिपाद्य तद्विलक्षणं क्षेत्रज्ञस्वरूपं प्रतिपादयितुं वेत्तुस्तज्ज्ञानयोग्यताऽऽपादनाय साधनान्याह-अमानित्वमित्यादि पञ्चभि:। यत्किञ्चिद्‌गुणवत्तया पूज्यजनेष्वपि स्वपूज्यत्वबुद्धिर्मानस्तद्वत्त्वं मानित्वं तद्रहितत्वममानित्वम्, अदभित्वं धर्मित्वख्यापनायाविधि ाविद्धर्मलेशानुष्ठानं दम्भस्तद्वत्त्वं दम्भित्वं तद्रहितत्वम्, अहिंसा वाङ्मन: कायै: परपीडावर्जन, क्षान्ति: परैपर-पकृतेऽपि निर्विकारचित्ततया तदपराधोपेक्षा, आर्ज्जवं वाङ्मन: कायानां समत्वमकौटिल्यमिति यावत्, आचार्यो-पासनम्, आचार्य: "(श्रोत्रियं ब्रह्मनिष्ठम्,) आचार्यो वेद-सम्पन्नो विष्णुभक्तो विमत्सर:। मन्त्रज्ञो मन्त्रभक्तश्च सदा मन्त्राश्रय: शुचि:। गुरुभक्तिसमायुक्त: पुराणज्ञो विशेषत:। एवं लक्षणसम्पन्नो गुरुरि"त्यभिधीयते इतिश्रुतिस्मृत्युक्तल-क्षणो विवक्षित:, मोक्षमार्गदर्शितत्वात्। तस्योपासनं निर्मायिकतया वाङ्मन: कायै: सेवनं शौचं बाह्याभ्यन्तर-भेदाद्द्विविधं, बाह्यं मृज्जलादिना कायेन्द्रियशुद्धि:, आभ्यन्तरं मनोमलरागादीनां विवेकेनापानयनं, स्थैर्यं परमार्थोपाये, प्रवृत्तस्य विघ्नबाहुल्ये प्राप्तेऽपि उद्वेगाभावेन तदपरित्यज्यावस्थानम्, आत्मविनिग्रह: देहेन्द्रिय-सङ्घस्य शास्त्रविरुद्धासत्प्रवृत्तेर्निवर्त्तनम् ॥७ ॥

क्षेत्रको प्रतिपादन गरेर त्यस भन्दा विलक्षण क्षेत्रज्ञ(आत्मा)को प्रतिपादन गर्नको लागि त्यसलाई जान्नको लागि योग्यता प्राप्तिलाई पाँच श्लोकहरूमा वर्णन गर्नुहुन्छ।
अलिकति गुणको बलमा पूज्यजनहरूका बीचमा पूज्य हुन खोज्ने बुद्धिलाई मान भन्दछन् र यस्तै मानबाट हीनता अमानिता भनिन्छ। धर्मात्मा भएको ख्याति पाउनको लागि गर्ने विधि रहित किञ्चित ध र्मानुष्ठानलाई दम्भ भन्दछन्। त्यस दम्भबाट रहित हुनु अदम्भिता हो। मन, वचन, कर्मले कसैलाई पीडा नदिनु अहिंसा भनिन्छ। अरुबाट अपकार गरिए पनि निर्विकार चित्तले अपराधको उपेक्षा गर्नुलाई क्षान्ति भन्दछन्।। मन, वचन, कर्मले समभाव राख्नु आर्जव भनिन्छ। आचार्यको उपासना अर्थात् निश्च्छल भएर गुरुको मन, वचन, कर्मले सेवा गर्नु। आचार्यको यो लक्षण हो। 'श्रोत्रियं ब्रह्मनिष्ठम्' वेदलाई जान्ने र ब्रह्मनिष्ठ। फेरि आचार्यो वेदसम्पन्नो इत्यादि। वेदलाई जान्ने, विष्णुभक्त, मत्सरहीन, मन्त्रलाई जान्ने, मन्त्र भक्त, मन्त्रको आश्रय लिनेवाला, पवित्र गुरुभक्तिले युक्त, पुराणको विशेष जानकार। यी लक्षणहरूले युक्त पुरुष मोक्षमार्ग देखाउने गुरु हुन सक्दछ।
बाहिर र भित्रको पवित्रतालाई शौच भन्दछन्। मृत्तिका जल आदिले कर्मेन्द्रियहरू र शरीरलाई शुद्ध गर्नु बाहिरको पवित्रता हो र विवेकको द्वारा मनको मल स्वरूप रोगादिलाई हटाउनु भित्री शुद्धता हो। मोक्षको उपायमा प्रवृत्त हुँदाखेरि, विघ्न बहुलताले चञ्चल नभईकन त्यसमा लागि रहनुलाई स्थिरता भन्दछन्। देह, इन्द्रियहरूलाई शास्त्र निन्दित प्रवृत्तिहरूमा जानलाई रोक्नु आत्म विनिग्रह भनिन्छ॥७॥



-★-★-★-

## इन्द्रियार्थेषु वैराग्यमनहङ्कार एव च ।

## जन्ममृत्युजराव्याधिदुःखदोषानुदर्शनम् ॥

**इन्द्रियहरूलाई विषयबाट वैराग्य हुनु, अहंकार पनि नहुनु, र जन्म, मृत्यु, वृद्धावस्था तथा व्याधिहरूमा दुःखरूप दोषहरूलाई बारम्बार देख्नु ॥८॥**

किञ्चेन्द्रियार्थेष्विति। इन्द्रियार्थेषु शब्दादिविषयेषु दोषदृष्ट्युत्पादनेन रागराहित्यं वैराग्यम्, अनहङ्कारः अभिजनजातिक्रियाभिरात्मन उत्कृष्टत्वाभिमानो गर्वोऽहङ्कारस्तद्राहित्यं, जन्ममृत्युजराव्याधिदुःखदोषानुदर्शनम्। प्राकृतशरीरवत्त्वे जन्ममृत्युजराव्याधिदुःखादिरूपदोषाणामवर्जनीयत्वादनुदर्शनं पुनः पुनरनुसन्धानं, "न ह वा शरीरस्य सतः प्रियाप्रिययोरपहतिरस्ति अशरीरं वाव सन्तं प्रियाप्रिये न स्पृशत" इति श्रुतेः॥८॥

अरु पनि साधन बताउनु हुन्छ- इन्द्रियहरूका विषय शब्दादिकमा दोषदृष्टि राखेर तिनिहरूबाट विराग हुनु। निवास स्थान, जाति, कार्य, आदिबाट आफुलाई ऊँचो मान्नु यसैलाई गर्व या अहङ्कार भन्दछन् र त्यसबाट रहित हुनुलाई अनहङ्कार भन्दछन्। प्राकृत शरीरमा जन्म, मृत्यु, बुढापा, रोग आदि दोष अनिवार्य छन्, यस कुरालाई बारम्बार विचार गर्नु। श्रुतिमा भनिएको छ-'न ह वा... ..स्पृशतः' अर्थात् प्राकृत शरीर हुँदै प्रिय र अप्रिय बाट छुटकारा छैन र शरीर नहुँदा अर्थात् दिव्य शरीर प्राप्त भएपछि प्रिय र अप्रिय छुँदैनन्॥८॥

-★-★-★-

## असक्तिरनभिष्वङ्गः पुत्रदारगृहादिषु।
## नित्यं च समचित्तत्वमिष्टानिष्टोपपत्तिषु॥

**आसक्तिरहित हुनु, पुत्र, स्त्री, घर आदिमा एकात्मता (घनिष्ठ सम्बन्ध) नहुनु र अनुकूलता-प्रतिकूलताको प्राप्तिमा चित्त नित्य सम रहनु॥९॥**

किञ्च-असक्तिरिति। ममेदमिति प्रीत्यतिशयः सक्तिस्तद्राहित्यमसक्तिः, अनात्मनि तत्सम्बन्धिषु च आत्माभिमानोऽभिष्वङ्गस्तद्राहित्यमनभिष्वङ्गः। असक्त्यनभिष्वङ्गयोर्विषयमाह-पुत्रदारग्रहादिष्विति। आदिना वित्तपशुभृत्यप्रभृतिसम्बन्धिग्रहणं सर्वत्र स्नेहवर्जनमित्यर्थः। इष्टानिष्टयोरुपपत्तिषु नित्यं सर्वदा समवित्तत्वं हर्षविषादाभाव इत्यर्थः॥९॥

पुत्र, स्त्री, घर, धन, पशु, नोकर आदिमा 'यी मेरा हुन्' यस्तो गाढ़ा प्रीतिको अभावलाई असक्ति भन्दछन्। यी अनात्म वस्तुहरू र ती सँग सम्बन्ध राख्नेहरूमा आत्माभिमान नहुनु र इच्छित र अनिच्छित वस्तुहरूमा सदा समता अर्थात् हर्ष, विषादको अभाव॥९॥

-★-★-★-

## मयि चानन्ययोगेन भक्तिरव्यभिचारिणी।
## विविक्तदेशसेवित्वमरतिर्जनसंसदि ॥

**ममा अनन्ययोगको द्वारा अव्यभिचारिणी भक्ति हुनु, एकान्त स्थानमा बस्ने स्वभाव हुनु र जन-समुदायमा प्रीति नहुनु॥१०॥**

किञ्च-मयीति। मयि भगवति वासुदेवे सर्वेश्वरे अनन्ययोगेन न मत्तोऽन्यो देवादिरुपास्यः फलं वाऽस्तीत्यनन्यसम्बन्धेनेत्यर्थः। भक्तिः सेवनात्मिका बाह्याभ्यन्तःकरणवृत्तिः अव्यभिचारिणी केनचित् कामान्तरेण पुरुषान्तरेण वा प्रतिहर्त्तुमशक्या दृढेत्यर्थः। तथा विविक्तो भगवदारा-

म सर्वेश्वर वासुदेव भगवान्मा अनन्य रूपले अव्यभिचारिणी भक्ति गर्नु। 'अनन्य रूपले' यसको अर्थ यो निस्कियो कि म भन्दा अर्को कुनै उपास्य देव वा फलको भाव नहुनु, अर्थात् अनन्य सम्बन्ध। अभ्यभिचारिणी को अर्थ हो दृढ़, अर्थात् कामान्तर वा पुरुषान्तरबाट रोक्नको लागि अयोग्य। बाहिर र भित्रिको कारणहरू द्वारा भगवान्को सेवा गर्नुलाई भक्ति भन्दछन्। जहाँ

धनविरोधिजनसंसर्गवर्जितो देशस्तत्सेवनशीलत्वं विविक्तदेशसेवित्वम्। जनानां भगवद्भक्तिज्ञानहीनानां विषयप्रवणानां संसदि समाजे अरतिः प्रीत्यभावः असङ्गतिरित्यर्थः। सतां सङ्गतिस्तु कर्तव्या, तथोक्तं च्यवननहुषसम्वादे "सद्भिरेव सहासीत सद्भिः कुर्वीत सङ्गमम्। सद्भिर्विवादं मैत्रीं च नासद्भिः किञ्चिदाचरेत्। सङ्गः सर्वात्मना हेयः स च त्यक्तुं न शक्यते। स सद्भिः सह कर्त्तव्यः सतां सङ्गो हि भेषजमि"ति ॥१०॥

भगवान्को आराधनाको विरोधी मनुष्य रहँदैनन् यस्तो देशमा बस्नु। र भगवद्भक्तिको ज्ञानले हीन र विषयमा आसक्त मनुष्यहरूका समाजमा अप्रीति अर्थात् असंगति राख्नु। सदा साधुहरूको संग गर्नु पर्दछ जस्तो कि च्यवन-नहुष संवादमा भनिएको छ-'सद्भिरेव सहासीत' इत्यादि। अर्थात् सज्जनहरूका साथमा रहनु, उनीहरूकै संगत गर्नु। उनीहरूकै साथमा विवाद या मित्रता गर्नु, असज्जनहरूका साथमा कुनै व्यवहार नगर्नु। उसो त कसैको पनि संग गर्नु हुँदैन, तर सज्जनहरूको संगति संसाररूपी रोगको औषधी हो ॥१०॥

-★-★-★-

## अध्यात्मज्ञाननित्यत्वं तत्त्वज्ञानार्थदर्शनम्।
## एतज्ज्ञानमिति प्रोक्तमज्ञानं यदतोऽन्यथा ॥

**अध्यात्मज्ञानमा नित्य-निरन्तर रहनु, तत्त्वज्ञानको अर्थरूप परमात्मालाई सबैठाउँमा देख्नु यो (पूर्वोक्त बीस साधन-समुदाय) त ज्ञान हो र जो यसको विपरीत छ त्यो अज्ञान हो भनेर भनिएको छ ॥११॥**

किञ्च-अध्यात्मेति। आत्मानमधिकृत्य प्रवृत्तं ज्ञानमध्यात्मज्ञानमनात्मविविक्तात्मयाथात्म्यज्ञानमित्यर्थः । तस्मिन्नित्यत्वं तत्रैव सदा निष्ठत्वं तत्त्वज्ञानस्यार्थः प्रयोजनं निःशेषाविद्यानिवृत्तिपूर्वकं निरतिशयानन्दभगवद्भावापत्तिलक्षणो मोक्षस्तस्य दर्शनमालोचनम्, एतदमानित्वादिविंशकं ज्ञानं ज्ञायते तत्त्वमनेनेति ज्ञानमिति प्रोक्तम्। अतोऽन्यथा उक्तादस्माद्विपरीतं यन्मानदम्भादिमत्त्वं तदज्ञानति प्रोक्तं, ज्ञानविरोधिभूतं मुमुक्षुणा यत्नेन त्याज्यमित्यर्थः ॥११॥

आत्माको ज्ञानलाई आत्मज्ञान भनिन्छ अर्थात् अनात्म वस्तुहरू भन्दा पृथक आत्माको यथार्थ ज्ञान। यसै ज्ञानमा सदा एकनिष्ठ भएर लागिरहनु। अविद्यालाई पूर्णरूपमा हटाएर अतिशय आनन्दरूप भगवद्भापत्ति लक्षणवाला मोक्षको आलोचना गर्नु। यी नै अमानिता आदि बीस ज्ञान हुन। यिनिहरू द्वारा तत्त्व जानिन्छ यसैले यस ज्ञान लाई भन्नुभयो। यसको विपरीत दम्भ, अहंकार आदि अज्ञान भनिन्छन् र मुमुक्षुहरूले यिनीहरूलाई छोडिदिनु पर्दछ किनकी यी पूर्वोक्त ज्ञानको विरोधि हुन् ॥११॥

-★-★-★-

## ज्ञेयं यत्तत्प्रवक्ष्यामि यज्ज्ञात्वामृतमश्नुते।
## अनादिमत्परं ब्रह्म न सत्तन्नासदुच्यते ॥

**जो ज्ञेय (पूर्वोक्त ज्ञानद्वारा जान्नयोग्य) छ, त्यस (परमात्म तत्त्व) लाई म राम्रो सँग भन्दछु, जसलाई जानेर मनुष्य अमरताको अनुभव गर्दछ। (त्यो ज्ञेय-तत्त्व) अनादि र परम ब्रह्म हो। त्यसलाई न सत् भन्न सकिन्छ न त असत् नै भन्न सकिन्छ ॥१२॥**

यदर्थममानित्वादिसाधनवृन्दमुक्त तज्ज्ञेयं प्रकृतिवियुक्तं क्षेत्रज्ञस्वरूपमाह-ज्ञेयमिति। उक्तैः साधनैर्ज्ञेयं यत्प्रत्यगात्मस्वरूपं तत्प्रवक्ष्यामि। तज्ज्ञानस्य फलं नाल्पमित्याह-यज्ज्ञात्वाऽमृतमश्नुते इति। यत् प्रकृतिवियुक्तात्मस्वरूपं ज्ञात्वा अमृतं जन्मजरामरणादिप्राकृतधर्मरहितं शुद्धमात्मस्वरूपमश्नुते प्राप्नोति। तदेवाह-अनादीति। न

अमानिता आदि साधन समूह जसलाई जान्नका लागि भनियो र जुन प्रकृति वियुक्त आत्मा जान्न योग्य छ त्यसको स्वरूप अब भन्नुहुन्छ। माथि भनिएको साधनहरू द्वारा जान्न योग्य जुन प्रत्यगात्माको स्वरूप छ त्यसलाई म भन्दछु। त्यसलाई जानेको फल थोरै मात्र छैन। त्यस फललाई भन्दछु। प्रकृति वियुक्त आत्मस्वरूपलाई जानेर अमृतलाई अर्थात् जन्म, बुढ्यौली, मृत्यु आदि प्राकृतिक धर्महरूले रहित शुद्ध आत्म स्ववरूपलाई प्राप्त हुन्छ। अब स्वरूपको वर्णन गर्नुहुन्छ।

आदिर्जन्म यस्य तदनादि, मत्परम् अहं परो गुणशक्त्यादिभिरुत्कृष्टो यस्मात्तन्मत्परं "स एतस्माज्जीवघनात्परात्परं पुरिशयं पुरुषमीक्षते" इति श्रुतेः "प्रधानपुरुषकालानां कारणं परमं हि यत्। यश्यन्ति सूरयो नित्यं तद्विष्णोः परमं पदमि"ति स्मृतेश्च निवृत्ताखिलाविद्यस्य प्रत्यगात्मनः शुद्धस्वरूपं ब्रह्म। आवरणाभावात् बृहद्गुणयोगेन ब्रह्मत्वमविरुद्धम्। "बृहन्तो गुणा अस्मिन्निति ब्रह्मे"ति श्रुतेः। मुक्तस्य "परमं साम्यमुपैती"ति साम्याभिधानात् "सर्वं हि पश्यः पश्यती"ति सार्वज्ञ्योगाच्च ब्रह्मत्वं युक्तम्। न सत्तन्नासदुच्यतें तदात्मस्वरूपं न सत् न चासत् शास्त्र उच्यते, कार्यावस्थायां नामरूपविभागार्हं द्रव्यं सच्छब्देनोच्यते। कारणवस्थायां नामरूपविभागानर्हं द्रव्यमसच्छब्देनोच्यते। तथा च श्रुतिः "असद्वा इदमग्र आसीत्ततो वै सदजायत, तद्धेदं तर्ह्यव्याकृतमासीत्तन्नामरूपाभ्यां व्याक्रियते"ति। तदुभयावस्थारहितत्वात्सदसच्छब्दाभ्यां नोच्यते। "न जायते म्रियते वा विपश्चिदि"ति श्रुतेः॥१२॥

त्यो प्रत्यगात्मा अनादि अर्थात् जन्मरहित छ। म त्यो भन्दा गुण, शक्ति आदिले उत्कृष्ट छु यसैले त्यो मत्पर हो, जस्तो कि श्रुतिको वचन छ-'स......ईक्षते' (त्यो शुद्ध, प्रकृतिरहित आत्मा यस जीवसमूह भन्दा श्रेष्ठ, पुरितत्ति नाड़ीमा सुत्ने पुरुषलाई देख्दछ)। स्मृतिको वचन छ-'प्रधान........पदम्'(माया, जीव, व्यक्त र कालको परमकारण, जसलाई सूरि अर्थात् मुक्तजीव नित्य देख्दछन् त्यहि विष्णुको सर्वश्रेष्ठ लोक हो)। सम्पूर्ण अविद्याबाट निवृत्त जीवात्माको शुद्ध स्वरूपलाई ब्रह्म भनिएको छ किनकी अविद्यारूपी आवरण हटेपछि जीवात्माको ज्ञान व्यापक हुन्छ। यस प्रकार त्यसको ब्रह्मत्व सिद्ध भयो। श्रुति भनेको छ-'वृहन्तो...ब्रह्म'(जसमा धेरै गुण व्यापक छ भने त्यो ब्रह्म हो।) मुक्त जीव परम समतालाई प्राप्त गर्दछ अर्थात् त्यसको ज्ञान सर्वव्यापी हुन्छ। र यस प्रकार त्यसलाई ब्रह्म भन्नु युक्त हुन्छ। त्यस आत्मस्वरूपलाई शास्त्र न सत् भन्दछ न असत्। कार्यावस्थामा जसको नाम द्वारा विभाग हुन सकोस त्यसलाई सत् भनिन्छ। श्रुतिमा भनेको छ-'असद्वा......व्याक्रियत।' (यसभन्दा पहिले असत् थियो, त्यसबाट सत् भयो, यो पहिले अविभाजित थियो। तब नामरूपको विभाग भयो। आत्मा दुबै अवस्थाहरूले रहित छ यसैले न त्यो सत् हो न असत्। श्रुतिमा भनिएको छ-'न.....विपश्चित्'(जीव न जन्म लिन्छ न मर्दछ॥१२॥

-★-★-★-

## सर्वतः पाणिपादं तत्सर्वतोऽक्षिशिरोमुखम्।
## सर्वतः श्रुतिमल्लोके सर्वमावृत्य तिष्ठति॥

**ती परमात्मा सबै तिर हात र गोडाहरू भएको, सबै तिर आँखा, शिर र मुखहरू भएको तथा सबै तिर कान भएको पनि हुन्। ती संसारमा सबैलाई व्याप्त गरेर स्थित हुनुहुन्छ॥१३॥**

तस्य ब्रह्मत्वमुपपादयति-सर्वत इति पञ्चभिः। अयं भावः "अपाणिपादो जवनो गृहीता पश्यत्यचक्षुः स शृणोत्यकर्णः। अनिन्द्रियोऽपि सर्वतः पश्यति सर्वतः शृणोति सर्वत आदत्ते" इत्यादिश्रुत्या परमात्मनो यथा पाणिपादादिसर्वेन्द्रियरहितत्वेऽपि आदानगमनादिदर्शनश्रवणादिसर्वकार्यकर्तृत्वं तादृशशक्तियोगादेव निरूपितं, तद्वत्। तथा "तदा विद्वान् पुण्यपापे विधूय निरञ्जनः परमं सम्यमुपैति, इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागता" इतिश्रुतिस्मृतिभ्यां मुक्तानां तत्साम्यस्य प्रतिपादनात्। तत्साम्यापन्नानां प्रत्यगात्मनामपीन्द्रियनिरपेक्षैवादानगमनदर्शनादिक्रिया सम्भवतीत्यतः सर्वतः पाणिपादं तदित्युक्तंतत्परिशुद्धात्मस्वरूपं सर्वतः पाणिपादक्रियाकृदित्यर्थः। तथा सर्वतश्चक्षुः

पाँच श्लोकहरूका द्वारा मुक्तजीवको ब्रह्मत्व सिद्ध गर्नुहुन्छ। भाव यो कि, श्रुतिमा परमात्माको विषयमा भनेको छ-'अपाणि....आदत्ते' (परब्रह्म बिना गोडा कै बेगका साथ हिंड्दछ, हात नभए पनि पकड्दछ, आँखा नभए पनि देख्न सक्दछ, बिना कानको पनि सुन्दछ। बिना इन्द्रिय नै सबै तिर देख्दछ, सबै थोक सुन्दछ र सबै थोक समात्दछ।) जस्तो परमात्मा बिना इन्द्रिय कै सबैथोक गर्दछ सुन्नु, देख्नु आदि त्यस्तै नै प्रकृतिवियुक्त आत्मा पनि सबै थोक गर्दछ। श्रुति भन्दछ-'तदा.....साम्यमुपैति'(तब विद्वान् पुण्य र पापलाई नष्ट गरेर र मायाको अंजन बाट छुटेर परम समता प्राप्त गर्दछ। स्मृतिको वचन छ- 'इदं.....मागता'(यस ज्ञानलाई पाएर मेरो समान धर्मवाला हुन्छ)। यी श्रुति, स्मृति वाक्यहरूले यो सिद्ध हुन्छ कि मुक्त जीव परब्रह्मको समतालाई प्राप्त गर्दछ। समता पाएका यस्ता मुक्त जीवहरू पनि हिड्ने, घुम्ने, समात्ने, देख्ने, सुन्ने आदि क्रियाहरूका लागि इन्द्रियहरूको अपेक्षा गर्दैनन्। यसैले त्यो सबै ठाउँमा हात-गोडावाला भनिएको हो अर्थात् हात

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

शिरोमुखकार्यकृत्, सर्वतः श्रुतिमत् श्रवणेन्द्रियशक्तिमत्, लोके सर्वमावृत्य तिष्ठति लोके यद्वस्तु जातं तत्सर्वं स्वज्ञानेनवृत्य ज्ञानगोचरीकृत्य तिष्ठति। तदा निःशेषाविद्यानिवृत्त्या धर्मभूतज्ञानस्य व्यापकत्वात् प्रत्यगात्मनो व्यापक धर्मयोगादेव विभुत्वस्य विवक्षिततत्वात्। तथा चाह भगवान्सूत्रकारः "तद्‌गुणसारत्वात् तद्‌व्यपदेशः प्राज्ञवदि"ति ॥१३॥

गोडाको अपेक्षा नरहनाले शुद्ध आत्मस्वरूप सबैठाऊँमा हिंड्-डुल गर्न सक्दछ। त्यसै प्रकार त्यो सबै ठाउँमा आँखा, कान, सिर र मुखको काम गर्न सक्दछ। संसारको सबै वस्तुहरूलाई आफ्नो धर्मभूत ज्ञानले व्याप्त गरेर स्थित छ अर्थात् त्यो सबैथोकको प्रत्यक्ष ज्ञान राख्दछ। यस प्रकार अविद्या बिल्कुल निवृत्त भएपछि प्रत्यगात्माको धर्मभूत ज्ञान व्यापक हुन्छ र यस रीतिले नै जीव कतै कतै विभु भएको भनिएको छ। भगवान् सूत्रकारले भन्नुभएको छ- 'तद्....प्राज्ञवत्'(धर्मभूत ज्ञान त्यसको सार हुनाले ब्रह्मको समान जीव पनि विभु भनिन्छ॥१३॥

-★-★-★-

**सर्वेद्रियगुणाभासं सर्वेन्द्रियविवर्जितम्।**
**असक्तं सर्वभृच्चैव निगुणं गुणभोक्तृ च॥**

**ती परमात्मा सम्पूर्ण इन्द्रियहरूले रहित र सम्पूर्ण इन्द्रियहरूको विषयलाई प्रकाशित गर्नेवाला हुन्; आसक्तिरहित छन् र सम्पूर्ण संसारको भरण-पोषण गर्नेवाला हुन् तथा गुणहरूले रहित छन् र सम्पूर्ण गुणहरूका भोक्ता पनि हुन्॥१४॥**

किञ्च-सर्वेन्द्रियेति। सर्वाणीन्द्रियाणि ज्ञानकर्मात्मकानि बाह्यकरणानि, अन्तर्ज्ञानकरणे मनोबुद्धी, तेषां गुणानां शब्दादिवागादिसङ्कल्पाध्यवसायादीनामाभासः प्रकाशो येन तत्सर्वेन्द्रियगुणाभासं, न ह्यात्मानं विनेन्द्रियविषयप्रकाशः सम्भवति। स्वयं च सर्वेन्द्रियविवर्जितम्, इन्द्रियवृत्तिं विनाऽपि सर्वं जानातीत्यर्थः असक्तं देहादिसङ्गरहितम्, सर्वभृच्चैव, देवमनुष्यादिदेहभरणसमर्थम्। तदुक्तं "इतस्त्वन्यां प्रकृतिं विद्धि मे पराम्। जीवभूतां महाबाहो! ययेदं धार्यते जगदि"ति। तथा निर्गुण गुणभोक्तृ च। सत्त्वादिगुणरहितं सत्त्वादिगुणभोगसमर्थं च॥१४॥

आत्माको बाहिरका सबै ज्ञान र कर्मेन्द्रियहरूका अन्तःकरण अर्थात् मन र बुद्धिको शब्दादि, वागादि र अध्यवसाय संकल्पादि गुणहरूको प्रकाश गर्नेवाला हो किनकी आत्माको बिना इन्द्रियहरूका विषयमा प्रकाश हुनु असम्भव छ। विषय प्रकाशनमा स्वयं आत्मालाई इन्द्रियहरूको आवश्यकता पर्दैन। बिना इन्द्रियनिवृत्ति नै सबै जान्दछ। त्यो असक्त अर्थात् देहादिको सङ्गले रहित छ र सर्वभृत्, अर्थात् देव, मनुष्यादि सबै देहहरूलाई धारण गर्नमा समर्थ छ। गीताको नै वचन छ, 'इत....जगत् आत्मा सत्त्वादि गुणहरूले रहित छ र ती गुणहरूलाई भोग्नमा समर्थ छ॥१४॥

-★-★-★-

**बहिरन्तश्च भूतानामचरं चरमेव च ।**
**सूक्ष्मत्वात्तदविज्ञेयं दूरस्थं चान्तिके च तत्॥**

**ती परमात्मा सम्पूर्ण प्राणिहरूको बाहिर-भित्र परिपूर्ण छन् र चर-अचर प्राणिहरूका रूपमा पनि उनै छन् एवं टाढा भन्दा टाढा तथा नजिक भन्दा नजिक पनि उनै छन् र उनी अत्यन्त सूक्ष्म हुनाले जान्नमा पनि आउँदैनन्॥१५॥**

किञ्च-बहिरिति। भूतानां पृथिव्यादीनां कार्यकारणत्वाभावात्तेभ्यां बहिर्विलक्षणं तेषामन्तश्च वर्त्तते आधारत्वात्, पञ्चभूतात्मकशरीराद्विलक्षणं तदन्तर्गतं चेत्यर्थः। अचरं चरमेव च। स्वभावतोऽचरं स्थिरं देहित्वेन चरं, सूक्ष्मत्वादणुपरिमाणत्वात्तदात्मस्वरूपमविज्ञेयं देहे वर्त्तमानमपि

पृथ्वी आदि भूतहरूसँग कार्य कारण भाव न हुनाले आत्मा उनीहरू भन्दा बाहिर अर्थात् विलक्षण छ र उनीहरूका आधार हुनाले तिनीहरूको भित्र पनि छ अर्थात् पंचभूतले बनेको शरीरभन्दा विलक्षण छ र त्यसको भित्र पनि छ। स्वभावले नै अचर (स्थिर) छ तर देहको सम्बन्धले चर छ। सूक्ष्म अर्थात् अणु परिमाणवाला हुनाले त्यो आत्मस्वरूप जान्नमा आउँदैन, अर्थात् देहमा स्थित पनि

संसारिभिर्देहात्पृथक्त्वेन नोविज्ञेयं, दूरस्थं चान्तिके च तत्। उक्तामानित्वादिहीनानामतिदूरस्थं, तद्वतां चान्तिके निकटे च वर्त्तते ॥१५ ॥

संसारिहरूलाइ देह भन्दा बैग्ले भन्ने जानिदैन। अमानित्वादि गुणहरूले हीन मान्छेहरूका लागि त्यो धेरै टाढा छ र जो ती गुणहरूले युक्त छ त्यो उनीहरूका लागि धेरै नजिक छ॥१५॥

-★-★-★-

## अविभक्तं च भूतेषु विभक्तमिव च स्थितम्।
## भूतभर्तृ च तज्ज्ञेयं ग्रसिष्णु प्रभविष्णु च॥

**ती परमात्मा स्वयं विभागरहित भएर पनि सम्पूर्ण प्राणिहरूमा विभक्तको जसरी स्थित छन् र ती जान्नयोग्य परमात्मा नै सम्पूर्ण प्राणीहरूलाई उत्पन्न गर्ने तथा उनीहरूको भरण-पोषण गर्ने र संहार गर्ने हुन्॥१६॥**

किञ्चाविभक्तमिति। देवमनुष्यादिभूतेषु ज्ञातृत्वेनैकरूपतया वर्त्तमानमात्मवस्तु अविभक्तं भेदेन निर्देष्टुमशक्यम्। आत्मस्वरूपयाथात्म्यविदुषां देवमनुष्याद्याकारमेव विजानतां विभक्तमिव च स्थितम्। भूतभर्तृ च । भूतानां प्राणवद्देहानां धारणकर्तृ च तज्ज्ञेयं ततोऽर्थान्तरत्वेन ज्ञेयं, भूतभर्तृत्वाद्ग्रसिष्णु अन्नादिग्रसनशीलम्, एवम्भूतमपि मुक्तिदशायां प्रभविष्णु च प्रकर्षेण बहुधा भवनशीलं "स एकधा भवति त्रिधा भवति पञ्चधा भवति सप्तधा नवधा चैव पुनश्चैकादशधा स्मृतः, शतं च दश चैकश्च सहस्राणि च विंशती"ति श्रुतेः॥१६॥

देव मनुष्यादिको शरीरमा ज्ञातृत्व रूपले एकजस्तै भएको कारण आत्माको भेदनिर्देश गर्न सकिदैन अर्थात् सबै अनात्म वस्तुमा आत्मा एकजस्तै छ। आत्माको यथार्थरूप नजान्नेहरूका लागि देव मनुष्यादिमा भिन्नभिन्नै जस्तो लाग्दछ। प्राणयुक्त शरीरहरूलाई त्यो धारण गर्नेवाला हो। शरीर भन्दा भिन्न वा पृथक् पृथक् जानिन्छ। प्राणीलाई धारण गर्नेवाला हुनाले अन्नादि ग्रहण गर्नेवाला हो। यस्तो भएर पनि मुक्तिदशामा धेरै हुनेवाला हो जस्तो श्रुतिले भनेको छ- 'स एकधा.....विंशति।'(त्यो मुक्त आत्मा एक प्रकारको हुन्छ, तीन, पाँच, सात, एघार, सय, हजार, बीस हजारको हुन्छ) ॥१६॥

-★-★-★-

## ज्योतिषामपि तज्ज्योतिस्तमसः परमुच्यते।
## ज्ञानं ज्ञेयं ज्ञानगम्यं हृदि सर्वस्य विष्ठितम्॥

**ती परमात्मा सम्पूर्ण ज्योतिहरूका पनि ज्योति र अज्ञान भन्दा अत्यन्त पर भनिएको छ। ती ज्ञानस्वरूप, जान्नयोग्य, ज्ञानद्वारा प्राप्तगर्न योग्य र सबैको हृदयमा विराजमान छन्॥१७॥**

किञ्च-ज्योतिषामिति। ज्योतिषां मणिद्युमणिदीपादीनामपि ज्योतिः प्रकाशकं, मणिद्युमणदीपादयो विषयेन्द्रियसन्नि-कर्षविरोधितमोनिवर्त्तकाः, आत्मधर्मभूतज्ञानं तु आदित्या-दिसर्वं प्राकृतं ज्योतिः प्रकाशयति। तेन विना सर्वप्रकाशा-नुपपत्तेः। यतस्तमसः परमुच्यते तमःशब्दवाच्या प्रकृति-स्तस्याः परं श्रेष्ठमुच्यते, अपरिणामित्वात्। प्रकृतेस्तु परिणामिस्वभावत्वात्। अतो ज्ञानं ज्ञानैकस्वरूपमिति ज्ञेयं ज्ञातव्यं ज्ञानगम्यं ज्ञानैरुक्तैरमानित्वादिभिर्ज्ञानसाधनैर्गम्यं प्राप्यं, सर्वस्य मनुष्यादेर्हृदि विष्ठितमधिष्ठातृतयाऽवस्थितम्।

आत्मा मणि, सूर्य, दीपक आदिहरूका पनि प्रकाशक हो अर्थात् मणि, सूर्य आदिको विषय र इन्द्रिय निकट भएपछि विरोधी अन्धकारलाई त्यो हटाउँदछ। आत्मधर्मभूतज्ञान आदित्यादि सबै प्राकृतिक ज्योतिहरूको प्रकाशक हो किनकी आत्माको धर्मभूत ज्ञान कै द्वारा उनीहरूलाई प्रकाश प्राप्त हुन्छ। आत्मा तम अर्थात् प्रकृति भन्दा श्रेष्ठ हो किनकी आत्मा अपरिणामी स्वभाववाला छ र प्रकृति परिणामी हौं। आत्मा ज्ञानस्वरूप हो, जान्नयोग्य छ र पूर्वोक्त अमानिता आदि ज्ञानसाधनहरू द्वारा प्राप्य छ।

विष्ठितमिति पाठे विष्ठितमिति पाठे विशेषेण स्थितमित्यर्थ: ॥१७॥

सबै मनुष्यादिको हृदयमा अधिष्ठाता रूपले स्थित छ ॥१७॥

-★-★-★-

**इति क्षेत्रं तथा ज्ञानं ज्ञेयं चोक्तं समासत: ।**
**मद्भक्त एतद्विज्ञाय मद्भावायोपपद्यते ॥**

**यस प्रकार क्षेत्र तथा ज्ञान र ज्ञेयलाई संक्षेपमा भनेको हो। मेरो भक्त यसलाई तत्त्वद्वारा जानेर मेरो भावलाई प्राप्त हुन्छन्॥१८॥**

उक्तं क्षेत्रादिकमधिकारिविशेषफलसहितमुपसंहरति-इति क्षेत्रमिति। इत्येवमुक्तप्रकारेण "महाभुतान्यहङ्कार"इत्यादिना "सङ्घातश्चेतना धृतिरि"त्यन्तं क्षेत्रयाथात्म्यं तथा "अमानित्वमि"त्यादि "तत्त्वज्ञानार्थदर्शनमि"त्यन्तं ज्ञेयस्य (क्षेत्रज्ञस्य)ज्ञानसाधनं ज्ञानं ज्ञेयं च "अनादिमत्परमि" इत्यादिना "हृदि सर्वस्य धिष्ठितमि"त्यन्तेन ज्ञेयस्य क्षेत्रज्ञस्य च तत्त्वयाथात्म्यं सङ्क्षेपेण मयोक्तम्। एतच्छास्त्राधिकारी पूर्वाध्यायोक्तो मद्भक्त एवेत्याह-मद्भक्त इति। एतत् क्षेत्रयाथात्म्यं क्षेत्रज्ञसय प्राप्त्युपायं क्षेत्रज्ञस्वरूपयाथात्म्यं च विज्ञाय मद्भावायोपपद्यते। मम यो भावो जन्ममरणादिराहित्यं तत्प्राप्तये योग्यो भवतीत्यर्थ: ॥१८॥

यहाँ क्षेत्रादिलाई त्यसको अधिकार र विशेष फलको साथमा भनेर समाप्त गर्नुहुन्छ। 'महा.... अहंकार' देखि 'संघातश्चेतना धृतिः' सम्म क्षेत्रको यथार्थरूप वर्णन गर्नुभयो, 'अमानित्वम्' बाट आरम्भ गरेर ' तत्त्वज्ञानर्थ दर्शनम्' सम्म ज्ञेय जो क्षेत्रज्ञ हो त्यसको ज्ञानको साधनलाई बताउनु भयो र 'अनादिमत्परम्' देखि 'हृदि सर्वस्यधिष्ठितम्' सम्म जान्नयोग्य क्षेत्रज्ञ तत्त्वको यथार्थरूप संक्षेपमा भन्नुभयो। यस शास्त्रको अधिकारी बाह्रौं अध्यायमा भनिएको मेरो भक्त नै हुन, यसैलाई अब भन्नुहुन्छ।
मेरो भक्त क्षेत्रको यथार्थज्ञान, क्षेत्रज्ञको प्राप्तिको उपाय र क्षेत्रज्ञको स्वरूपको याथात्म्यलाई जानेर मेरो भावको योग्य हुन्छ अर्थात् जन्म-मरण आदिले रहित स्वरूप अर्थात् मोक्षको प्राप्तिको योग्य हुन्छ ॥१८॥

-★-★-★-

**प्रकृतिं पुरुषं चैव विद्ध्यनादी उभावपि।**
**विकारांश्च गुणांश्चैव विद्धि प्रकृतिसम्भवान् ॥**

**प्रकृति र पुरुष दुबैलाई तिमी अनादि संझ र विकारहरूलाई तथा गुणहरूलाई पनि प्रकृतिद्वारा नै उत्पन्न संझ ॥१९॥**

तदेवं सप्तमाध्यायोक्ते ये परापरप्रकृतिशब्दाभिहिते शक्ती द्वे तेऽत्र क्षेत्रक्षेत्रज्ञशब्दाभ्यां विवृत्ते। इदानीं क्षेत्रक्षेत्रज्ञावेव प्रकृतिपुरुषौ तयोरनादित्वमनादिसंसर्गं प्रकृतेश्च सर्वविकारोपादानत्वं चाह-प्रकृतिमिति। त्रिगुणात्मिकाऽचेतना क्षेत्रलक्षणपरा शक्तिर्या प्रागुक्ता सा प्रकृतिरुच्यते। या तु तद्विलक्षणा चेतनरूपा क्षेत्रज्ञलक्षणा परा प्रकृतिरित्युक्ता सेह पुरुषइत्युच्यते। प्रकृतिं पुरुषं च उभावपि अनादी एव विद्धि, न विद्यते आदि: कारणं ययोस्तौ तथा प्रकृते: सर्वविकारोपादनत्वात् तस्या अपि प्रकृत्यन्तराङ्गीकारेऽनवस्थापत्तेश्चं पुरुषस्यापि मदंशत्वात् "न जायते म्रियते वा विपश्चिदि"त्यजत्वाभिधानाच्चनादित्वं निर्विवादम्। विकारान् जीवानां बन्धहेतुभूतानिच्छाद्वेषादीन्गुणाँश्चा-

सातौं अध्यायमा जसलाई परा र अपरा प्रकृति भनिएको छ उनै दुई भगवत् शक्तिहरूलाई यहाँ क्षेत्र र क्षेत्रज्ञ शब्दले स्पष्ट गर्नुहुन्छ। क्षेत्र र क्षेत्रज्ञ नै प्रकृति पुरुष हुन्। र दुबै संसर्ग अनादि छ र प्रकृति नै सर्वविकारहरूलाई उत्पन्न गर्दछ, यी सबै कुराहरू यस श्लोकमा भनिएको छ।
त्रिगुणात्मक, अचेतन, क्षेत्रलक्षणयुक्त जुन अपराशक्ति पहिले भनिएको छ त्यसैलाई प्रकृति भनिन्छ। त्यस भन्दा बिलक्षण चेतन क्षेत्रज्ञ, जो परा प्रकृति भनिएको छ त्यही यहाँ पुरुष भनिएको छ। प्रकृति पुरुष, दुबैलाई नै अनादि जान्नु अर्थात् यिनिहरूको आदि वा कारण छैन। प्रकृति सबैको उपादान कारण हो, यसैले त्यसको पनि अर्को कारण खोज्ने हो भने फेरि त्यस अर्को को पनि कारण खोज्नु पर्दछ, र यस प्रकार अनवस्थापत्ति अर्थात् अस्थिरताको दोष लाग्दछ। र पुरुष त मेरो नै अंश हुनाले अनादि हुँदै हो यसमा केहि विवाद छैन। श्रुतिले भनेको छ 'नजायते... विपश्चित्' अर्थात् पुरुष अजन्मा हो र यसैले त्यो अनादि ठहरियो।

मानित्वादिकान् ज्ञानद्वारा मोक्षहेतुभूतान् प्रकृतिसम्भवान् विद्धि। अनादिकर्मात्मिकाऽविद्यानिमित्तेन जीवसंसृष्टेयं प्रकृतिः क्षेत्रात्मना परिणता सती स्वविकारभूतैरिच्छाद्वेषादिभिः पुरुषस्य संसृतिहेतुर्भवति। सैवामानित्वादिभिः सत्त्वकार्यरूपैः स्वगुणैः पुरुषस्य मोक्षहेतुर्भवतीति भावः॥१९॥

जीवहरूको बन्धको कारण इच्छा, द्वेष आदि विकारहरूलाई, र ज्ञानद्वारा मोक्षको कारण अमानिता आदि गुणहरूलाई प्रकृतिबाट नै उत्पन्न संझ। अर्थात् अनादिकर्मात्मिका अविद्याको कारण जीवहरू सँग टाँसिएको प्रकृति, क्षेत्रको रूप धारण गरेर, आफ्नो विकार भूत इच्छा द्वेषादि गुणहरूले, पुरुषको संसृति अर्थात् बन्धनको कारण हुन्छ र त्यहि प्रकृति, अमानिता आदि सत्त्वको कार्यरूप आफ्नो गुणहरूको द्वारा, पुरुषको मोक्षको हेतु पनि हुन्छ॥१९॥

–★–★–★–

**कार्यकरणकर्तृत्वे हेतुः प्रकृतिरुच्यते।**
**पुरुषः सुखदुःखानां भोक्तृत्वे हेतुरुच्यते॥**

**कार्य र कारणको द्वारा उत्पन्न हुने क्रियाहरूलाई उत्पन्न गर्नमा प्रकृतिलाई हेतु भनिन्छ र सुखदुःखहरूको भोक्तापनमा पुरुष हेतु भनिन्छ॥२०॥**

प्रकृतिकार्यमुक्त्वा संसृष्टयोः प्रकृतिपुरुषयोः कार्यभेदमाह कार्यकारणेति। कार्यं शरीरं कारणानीन्द्रियाणि तेषां कर्त्तृत्वे क्रियाकारित्वे पुरुषाधिष्ठिता प्रकृतिर्हेतुरुच्यते। पुरुषः प्रकृतिसंसृष्टः सुखदुःखानां भोक्तृत्वे हेतुः, सुखदुःखानुभवाश्रय उच्यते। यावत्प्रकृतिसंसर्गस्तावत्पुरुषस्य सुखदुःखभोगोऽवर्जनीय इत्यर्थः॥२०॥

प्रकृतिको कार्य भनेर अब एक अर्को सँग टाँसिएको प्रकृति र पुरुषको कार्यभेदलाई बताउनुहुन्छ। शरीर र इन्द्रियहरूका कार्य गर्नमा पुरुषसँग अधिष्ठित प्रकृति कारण हो। प्रकृतिसँग टाँसिएको पुरुष सुख दुःखलाई भोग्नमा कारण हो, अर्थात् सुख दुःखको अनुभवको आश्रय प्रकृतिसंसृष्ट पुरुष हो। जब सम्म प्रकृतिसँग संसर्ग छ तब सम्म पुरुषलाई दुःख सुखको भोग बाट छुटकारा हुँदैन॥२०॥

–★–★–★–

**पुरुषः प्रकृतिस्थो हि भुङ्क्ते प्रकृतिजान्गुणान्।**
**कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मसु॥**

**प्रकृतिमा स्थित पुरुष (जीव) नै प्रकृतिजन्य गुणहरूका भोक्ता बन्दछ र गुणहरूको संगत नै यसको ऊँचो-नीचो योनिहरूमा जन्म लिने कारण बन्दछ॥२१॥**

यदुक्तं पुरुषस्य सुखदुःखानां भोक्तृत्वं तत्स्वतो ज्ञान स्वरूपत्वेन सुखरूपस्य न सम्भवति। अतस्तद्भोगे हेतुमाह– पुरुष इति। स्वरूपेण सुखी निर्विकारोऽपि पुरुषः प्रकृतिस्थः उच्चावचदेहरूपपरिणतप्रकृतिस्थस्तत्सम्बद्धः हि एव प्रकृतिसंसर्गजान्सत्त्वादिगुणकार्यभूतान्सुखदुःखादीन् भुङ्क्ते, अनुभवति। प्रकृतिस्थत्वेऽपि हेतुमाह– कारणमिति। अस्य पुरुषस्य सदसद्योनिजन्मसु गुणसङ्गः कारणमित्यन्वयः। तत्र सत्त्वगुणकार्यभूताः सद्योनयो देवाः। तमोगुणकार्यभूता असद्योनयो रक्षःपिशाचपश्वादयः। रजःकार्यभूताः सदसन्मिश्रयोनयो ब्राह्मणाद्या मनुष्याः।

जुन पुरुष सुख दुःखको कारण भनियो त्यो ज्ञानस्वरूप हुनाले सुखरूप छ। यसैले त्यो सुख दुःखको भोक्ता हुन कसरी सक्दछ? यस शंकाको उत्तर दिनुहुन्छ। स्वरूपले सुखी र निर्विकार पुरुष, प्रकृतिस्थ अर्थात् उच्च नीच देह रूप प्रकृति सँग सम्बन्धित भएको कारण, प्रकृतिको सँगले उत्पन्न सत्त्वादि गुणहरूको कार्यभूत सुख दुःखलाई भोग्दछ वा अनुभव गर्दछ। अब पुरुषको प्रकृतिस्थ हुने कारणलाई बताउनुहुन्छ। सत्वगुणको कार्यभूत देव आदि सत् योनिहरू हुन्। तमोगुणको कार्यभूत राक्षस, पिशाच, पशु आदि असत् योनिहरू हुन्। रजोगुणको कार्यभूत ब्राह्मण आदि मनुष्यहरूको सत् असत् मिश्रित योनिहरू हुन्छन्। शुभ अशुभ र मिश्रित फलहरूका भोगको लागि यी योनिहरूमा पुरुषको गुण संग हुन्छ अर्थात् शब्द, स्पर्श, रूपादि इन्द्रिय विषयहरूमा प्रिय र भोग्य बुद्धि गरेर पुरुष त्यसमा आफ्नो मनलाई लगाउँदछन्, यही

तेषु शुभाशुभमिश्रफलभोगार्थं जन्मसु अस्य पुरुषस्य गुणसङ्गः, गुणेषु शब्दस्पर्शरूपादिष्विन्द्रियविषयेषु प्रियभोग्यत्वबुद्ध्या मनसोऽभिनिवेशरूपः कारणम् सत्त्वादिगुणकार्यसुखाद्यासक्तोऽयं पुरुषस्तत्साधनभूतेषु पुण्यपापकर्मसु प्रवर्त्तते। ततस्तत्फलानुभवाय सदसद्योनिषूत्तमाधमयोनिषु जायते, पुनस्तत्र कर्मारभते जायते च। एवं यावद्विषयत्यागपूर्वकं मोक्षसाधनभूतान् विशुद्धबुद्धिवैराग्यादीन्न सेवते तावत्संसरतीति भावः॥२१॥

**पुरुषको प्रकृतिस्थ हुने कारण हो। भाव यो कि सत्वादि गुणहरूको कार्य जो सुख आदि छ त्यसमा आसक्त पुरुष तिनीहरूको प्राप्तिका साधनभूत पुण्य पाप कर्ममा प्रवृत्त हुन्छ। ती कर्महरूलाई भोग्नको लागि सत्, असत्, उँचो, नीचो योनिहरूमा पैदा हुन्छ। फेरि त्यहाँ त्यो कर्म गर्दछ र फेरि जन्म लिन्छ। यस प्रकार जब सम्म विषय त्याग गरेर मोक्षको साधनभूत विशुद्ध बुद्धि वैराग्य आदिको आश्रय लिंदैन तब सम्म त्यो संसारमा आउने-जाने गरिरहन्छ॥२१॥**

-★-★-★-

## उपद्रष्टानुमन्ता च भर्ता भोक्ता महेश्वरः।
## परमात्मेति चाप्युक्तो देहेऽस्मिन्पुरुषः परः॥

**यो पुरुष (शरीरसँग सम्बन्ध राख्नाले) 'उपद्रष्टा', (त्यससँग मिलेर सम्मति दिनाले) 'अनुमन्ता', (आफुलाई त्यसको भरण-पोषण गर्नेवाला मान्नाले) 'भर्ता', (त्यसको संगले सुख-दुःख भोग्नाले) 'भोक्ता' र (आफुलाई त्यसको स्वामी मान्नाले) 'महेश्वर' (बन्दछ)। परन्तु (स्वरूपले यो) यो पुरुष 'परमात्मा'- यस नामले भनिने गर्दछ। यो यस देहमा भएर पनि देहबाट सर्वथा सम्बन्ध रहित छ॥२२॥**

एवं गुणसङ्गकृतप्रकृतिसंसर्गात्पुरुषस्य संसारः, नतु स्वतः स्वरूपेणेत्युक्तम्। तत्र कीदृशं तत्स्वरूपमित्यपेक्षायां तत्स्वरूपं विवेचयति-उपद्रष्टेति। अस्मिन्देहे प्रकृतिकार्यभूते वर्त्तमानोऽपि पुरुषः परो भिन्नः न तु स्वरूपेण संसारीत्यर्थः। तत्र हेतूनाह-उपद्रष्टेति। उप समीपे देहस्यावस्थापरिणामादेः साक्षिवद्दृष्टा। तथाऽनुमन्ता च। देहस्वभावप्रवृत्त्याद्यनुमोदिता च भवति। तथा भर्त्ता धारकः। तथा महेश्वरः देहयात्रानिर्वाहकतयेश्वराणामपि देहस्य धारकपालकतया महानीश्वरो महेश्वरः। अत एव परमात्मेति चाप्युक्तः, आत्मशब्देन विवक्षितानां देहेन्द्रियमनसां परमः श्रेष्ठः, आन्तरत्वाद्विज्ञानमयत्वाच्च क्षेत्रज्ञः परमात्मेत्युक्तः "तस्माद्वा एतस्मादन्योऽतरात्मा विज्ञानमय" इति श्रुतेत्यर्थः॥२२॥

**गुणहरूका संगले गरिएको जो प्रकृति संग छ, यसैले गर्दा यो पुरुष(जीवात्मा) संसारी हुन्छ। त्यो आफ्नो स्वरूपमा संसारी होईन। त्यसको स्वरूप कस्तो छ त्यसको विवेचना गर्नुहुन्छ। प्रकृतिकार्य्यभूत यस शरीरमा वर्त्तमान पुरुष पनि त्यसभन्दा भिन्न छ। स्वरूपले त्यो संसारी होईन, यो भाव हो। अब यसमा कारण भन्नुहुन्छ- देहमा अदल बदल भएपनि आत्मा मा हुँदैन। त्यो केवल देहको निकट, साक्षी जस्तो देख्नेवाला हो। फेरि देहको स्वभावले जो प्रवृत्ति हुन्छ वा त्यसलाई जो प्रारब्ध भोग छ त्यसको यो जीव अनुमोदन कर्त्ता हो। देहलाई धारण गर्नेवाला हो र देहको सम्बन्धले उत्पन्न सुख दुःखको भोग गर्दछ। देह यात्राको निर्वाहक, इन्द्रियहरू र देहहरूको पालक हुनाले यो आत्मा महेश्वर हो। आत्मालाई परमात्मा पनि यसैले भनेको छ कि आत्मा शब्दले भनिएको देह, इन्द्रिय र मनले यो क्षेत्रज्ञ श्रेष्ठ छ किनकी यो त्यसको भित्र छ र विज्ञानमय छ। श्रुति मा भनेको छ- 'तस्माद्वा. ......विज्ञानमय'। (यस मनोमय पुरुषभन्दा अर्को अन्तरात्मा विज्ञानमय छ।)॥२२॥**

-★-★-★-

## य एवं वेत्ति पुरुषं प्रकृतिं च गुणैः सह।
## सर्वथा वर्तमानोऽपि न स भूयोऽभिजायते॥

**यस प्रकार पुरुषलाई र गुणहरूको सहित प्रकृतिलाई जुन मनुष्य (अलग-अलग) जान्दछ, त्यो अनेक प्रकारका आचरण गरे पनि फेरि जन्म लिदैन॥२३॥**

उक्तपुरुषप्रकृतिविवेकज्ञानिनं स्तौति–य एवमिति। एवमुपद्रष्टृत्वादिस्वभावं पुरुषं प्रकृतिं च गुणैः सुखदुःखादिपरिणामैः सह यो वेत्ति स सर्वथा देवमनुष्यादिदेहे कस्मिंश्चित्सुखितया क्लिशितया वा वर्त्तमानोऽपि स भूयो नाभिजायते प्रकृत्या न सम्बध्यते। प्रजापतिवाक्योदितापहतपाप्मत्त्वादिधर्मकमनवच्छिन्नज्ञानमात्मानं देहान्ते प्राप्नोतीत्यर्थः ॥२३ ॥

पुरुष र प्रकृतिको विवेक युक्त ज्ञानी पुरुषहरूको स्तुति गर्नुहुन्छ। यस प्रकार उपद्रष्ट आदि स्वभाववाला पुरुषलाई र सुख दुःखादि परिणामहरूका साथ प्रकृतिलाई जो जान्दछ त्यो सबै प्रकारले, अर्थात् देव मनुष्यादि देहमा सुखले वा दुःखले स्थित भएपनि फेरि प्रकृतिसँग सम्बन्धित हुँदैन। भाव यो हो कि देहको अन्त्य भएपछि प्रजापति वाक्यमा भनेको अपहत्पाप्मा अविजर आदि आठ धर्मले युक्त आफ्नो स्वरूपलाई पाउँदछ अर्थात् मुक्त हुन्छ॥२३॥

–★–★–★–

## ध्यानेनात्मनि पश्यन्ति केचिदात्मानमात्मना।
## अन्ये साङ्ख्येन योगेन कर्मयोगेन चापरे॥

**कुनै मनुष्यहरू ध्यानयोगको द्वारा, कुनै सांख्ययोगको द्वारा र कुनै कर्मयोगको द्वारा आफु नै आफैमा परमात्मतत्त्वको अनुभव गर्दछ॥२४॥**

एवम्भूतप्रकृतिवियुक्तात्मदर्शने साधनभेदप्रयुक्ताधिकारिभेदमाह–ध्यानेनेति द्वाभ्याम्। केचित्सदाचार्यमुखान्निश्चितात्मयाथात्म्या निष्पन्नयोगा ध्यानेन श्रवणमननाङ्गिभूतेन निदिध्यासनेन आत्मनि देहेऽवस्थितमात्मानमात्मना मनसा पश्यन्ति, साक्षात्कुर्वन्ति। अन्येऽनिष्पन्नयोगाः साङ्ख्येन योगेन निदिध्यासनाङ्गभूतश्रवणमननापरपर्यायेण प्रकृतिपुरुषविवेकात्मकेन योगेनात्मानं पश्यन्ति। अपरे च ततोऽपि निकृष्टाधिकारिणो ज्ञानयोगानधिकृताः कर्मयोगेनेश्वरार्पणबुद्ध्या क्रियमाणेन फलाभिसन्धिरहितेन स्ववर्णाश्रमोचितेन कर्मयोगेनान्तःकरणशुद्धिद्वारेण मनसो ध्यानयोग्यतोत्पादनेन पश्यन्तीत्यर्थः ॥२४ ॥

प्रकृतिबाट वियुक्त यस प्रकारको आत्म दर्शनमा साधन भेदको द्वारा अधिकारी भेदलाई दुईश्लोकहरू मार्फत देखाउनु हुन्छ। कुनै सदाचार्यको मुखबाट आत्माको यथार्थ रूप निश्चय गरेर र सिद्धयोग भएर श्रवण, मनन युक्त ध्यानले, आफ्नो शरीरमा स्थित आत्मालाई, मनैले देख्दछन् अर्थात् ध्यानले आत्माको साक्षात्कार गर्दछन्। अन्य जसको ध्यानयोग सिद्ध छैन, सांख्य योगको बाटो ध्यानको अंगभूत श्रवण र मनन द्वारा प्रकृति र पुरुषको विवेक रूप योगले आत्मालाई देख्दछन्। अर्थात् यीनिहरू माथि भनिएकाहरू भन्दा निकृष्ट हुन्। यी केवल प्रकृति र पुरुषको विवेक सांख्यको रीतिले गर्न सक्दछन्। तेस्रो दर्जाका यी दोस्रा भन्दा पनि निकृष्ट हुन्। यी ज्ञान योगको अधिकारी होईनन्। यीनिहरू कर्मयोगले आत्मालाई देख्दछन् अर्थात् आफ्नो वर्णोचित कर्महरूका फलको आकांक्षाले रहित भएर ईश्वरार्पण बुद्धिले गर्दछन् र यस प्रकार कर्म गर्नाले तिनीहरूको अंतःकरण शुद्ध हुन्छ र मनमा ध्यानको योग्यता हुन्छ॥२४॥

–★–★–★–

## अन्ये त्वेवमजानन्तः श्रुत्वान्येभ्य उपासते।
## तेऽपि चातितरन्त्येव मृत्युं श्रुतिपरायणाः॥

**अरु मनुष्य यस प्रकार (ध्यानयोग, सांख्ययोग, कर्मयोग आदि साधनहरूलाई) जान्दैनन्, तर अरुबाट (मतलब जीवन्मुक्त महापुरुषहरूबाट) सुनेर नै उपासना गर्दछन्, यस्ता सुनेको अनुसारले गर्नेवाला मनुष्य पनि मृत्युको पार गर्दछन्॥२५॥**

ततो मन्दाधिकारिण आह–अन्ये त्विति। अन्ये तूक्तयोगादिसाधनेष्वनधिकृता एवमुक्तप्रकारेणात्मानमजानन्तोऽन्येभ्यस्तत्त्वदर्शिभ्यो गुरुभ्यः श्रुत्वा इत्थं तत्त्वं जानीतेत्युक्ता

सबैभन्दा निम्न श्रेणिको अधिकारीलाई अब भन्दछन्। दोस्रा, जो योगादिको साधनका अधिकारी छैनन् र उक्त रीतिले आत्मालाई जान्दैनन, ती अरुबाट अर्थात् तत्त्वदर्शी गुरुहरूबाट आत्म तत्त्वलाई सुनेर श्रद्धा विश्वासको साथ आत्मालाई पनि त्यस्तै नै

सन्त उपासते, श्रद्धाविश्वासेनाङ्गीकुर्वन्ति। तेऽपि श्रुतिपरायणाः श्रद्धया श्रवणपरायणाः सन्तो मृत्युं संसारं क्रमेण तरन्ति। अपिशब्दाद्ये साधनसम्पन्ना विचारसमर्थास्ते मृत्युं तरन्तीति किमु वक्तव्यमिति सूचितम्॥२५॥

अंगीकार गर्दछन्। यस्ता श्रद्धायुक्त श्रवण परायण मनुष्य पनि संसारलाई क्रमैले पार गर्दछन्। 'अपि' शब्दको अर्थ यो हो कि साधन युक्त र विचार समर्थ मनुष्य त संसारलाई पार गरिहाल्छन् यसमा सोध्नु नै के छ र?॥२५॥

–★–★–★–

## यावत्सञ्जायते किञ्चित्सत्त्वं स्थावरजङ्गमम्।
## क्षेत्रक्षेत्रज्ञसंयोगात्तद्विद्धि भरतर्षभ॥

**हे भरतश्रेष्ठ! स्थावर र जंगम जति पनि प्राणी पैदा हुन्छन्, उनीहरूलाई तिमी क्षेत्र र क्षेत्रज्ञको संयोगले उत्पन्न भएको संझिनु॥२६॥**

एवं विविक्तात्मज्ञानं संसारनिवर्त्तमित्युक्तमितः परं तद्दा-र्ढ्यार्थमेव प्रकृतिपुरुषविचारः क्रियते यावदध्यायसमाप्तिः। तत्र तावत्प्रकृतिपुरुषसंसर्ग एव सर्वप्राणिमसम्भवहेतु-रित्याह–यावदिति। यावत्किञ्चित्स्थावरजंगमं सत्त्वं प्राणिमात्रं सञ्जायते त्पद्यते, तत्सर्वं क्षेत्रक्षेत्रज्ञसंयोगात् प्रकृतिपुरुषयोः संयोगाद्भवतीति विद्धि। हे भरतर्षभ! न केवलायाः प्रकृतेः, पुरुषद्वा॥२६॥

शुद्ध आत्मज्ञान संसारबाट मुक्ति दिन्छ। अब यसैलाई दृढ गर्नका लागि अध्यायको अन्तिम सम्म प्रकृति र पुरुषको विषयमा विचार गर्नुहुन्छ। प्रकृति पुरुषको संसर्ग नै सर्व प्राणिहरूको उत्पत्तिको कारण हुन्, यहि यहाँ पनि भन्नुहुन्छ।

जति पनि स्थावर जंगम प्राणिमात्र उत्पन्न हुन्छन् ती सबै प्रकृति पुरुषको संयोगले नै हुन्छन्, यस्तो तिमी जान्नु। हे अर्जुन! केवल पुरुष वा केवल प्रकृतिले यिनीहरूको उत्पत्ति हुँदैन॥२६॥

–★–★–★–

## समं सर्वेषु भूतेषु तिष्ठन्तं परमेश्वरम्।
## विनश्यत्स्वविनश्यन्तं यः पश्यति स पश्यति॥

**जो नष्ट हुँदै जाने सम्पूर्ण प्राणीहरूमा परमेश्वरलाई नाशरहित र समरूपले स्थित देख्दछ, त्यो नै वास्तवमा सही देख्दछ॥२७॥**

प्रकृतिपुरुषसंयोगोद्भवं संसारमुक्त्वा तन्निवृत्तये प्रकृतिवि-युक्तात्मदर्शनमाह–सममिति। सर्वेषु स्थावरजङ्गमेषु भूतेषु समं देवतिर्यङ्मनुष्यादिविषमाकारवियुक्ततया ज्ञानैक-स्वरूपतया च समं यथा भवति तथा तिष्ठन्तं देहेन्द्रियमनसां परमेश्वरं विषमाकारेषु देहेषु विनश्यत्सु अविनश्यन्तं विनाशायोग्यतया नितयं यः पश्यति स यथाऽवस्थित-मात्मानं पश्यति॥२७॥

संसार प्रकृति र पुरुषको संयोगले हुन्छ यो भनेर अब संसारबाट मुक्तिको कारण प्रकृतिवियुक्त आत्माको दर्शनलाई भन्नुहुन्छ। सबै स्थावर जंगम जीवहरूमा अर्थात् देव, मनुष्य, तिर्यक आदि विषम आकारवाला शरीरहरूमा विषमाकार वियुक्त र ज्ञान स्वरूपवाला हुनाले आत्मा त्यसमा सम भावले स्थित छ। त्यो देह, इन्द्रिय, मनको परमेश्वर हो, विषम आकारवाला देहको नाश भएपनि त्यसको नाश हुँदैन, अर्थात् आत्मा नित्य छ। आत्मालाई जो यस्तो देख्दछ त्यही आत्माको यथार्थ तत्त्व जान्दछ॥२७॥

–★–★–★–

## समं पश्यन्हि सर्वत्र समवस्थितमीश्वरम्।
## न हिनस्त्यात्मनात्मानं ततो याति परां गतिम्॥

**किनकी सबै ठाउँमा समरूपले स्थित ईश्वरलाई समरूपले देख्ने मनुष्य आफुले आफ्नै हिंसा गर्दैन, यस्तो गर्नाले त्यो परमगतिमा प्राप्त हुन्छ॥२८॥**

तदेवं समत्वेन दर्शनस्य फलमाह–सममिति। सर्वत्र देवमनुष्यादिदेहे समवस्थितं देवादिविषमाकारवियुक्तं समीश्वरं देहेन्द्रियस्वामिनं हि एव पश्यन् आत्मना स्वेनैव आत्मानं न हिनस्ति, संसारे प्रक्षिप्य न विनाशयति। किन्तु ततस्तस्मात् ज्ञानस्वरूपत्वेन सर्वत्र समानाकारदर्शनाभ्यासात्परां गतिं याति, प्रकृतिवियुक्तं शुद्धं भगवदात्मकमात्मानं प्राप्नोति मुच्यते इत्यर्थः। देवमनुष्याद्याकारयुक्ततया सर्वत्र विषममात्मानं पश्यति स स्वात्मानं हिनस्ति संसारे प्रक्षिपति, तेन सर्वथा पापकारी भवति। तथा महाभारते शकुन्तलावाक्यं "योऽन्यथा सन्तमात्मानमन्यथा प्रतिपद्यते। किं ते न कृतं पापं चौरेणात्मापहारिणे"ति। आत्मघ्नानां गतिः श्रुतावुक्ता "असूर्या नाम ते लोका अन्धेन तमसावृताः। तांस्ते प्रेत्यभिगच्छन्ति ये के चात्महनो जनाः"इति ॥२८॥

आत्मालाई यस प्रकारले सम देख्नुको फल भन्दछन्। जुन आत्मालाई सबै ठाऊँ अर्थात् देव मनुष्यादि देहमा देव मनुष्यादि विषम आकारले वियुक्त, र देह इन्द्रियको स्वामी देख्दछ वा जान्दछ त्यो आफ्नो आत्मालाई मार्दैन अर्थात् संसारमा फ्याँकेर आफ्नो आत्माको नाश गर्दैन, बरु ज्ञान स्वरूप भएकोले कारण विषमाकारहरूमा आत्मालाई समान देख्ने अभ्यास बसाल्नाले त्यो प्रकृतिवियुक्त, शुद्ध, भगवदात्मक आत्मालाई प्राप्त गर्दछ। जो देव मनुष्यादि विषम आकारहरूले युक्त हुनाले आत्मालाई सबैतिर विषम देख्दछ त्यो आफ्नो आत्मालाई मार्दछ अर्थात् संसारमा फ्याँक्तछ। त्यो मनुष्य पापी हो। महाभारतमा शकुन्तलाको वचन छ–'योऽन्यथा.......अपहारिणा।' (जसले आत्मालाई जस्तो त्यो छ त्यो भन्दा उल्टो प्रतिपादन गर्‍यो त्यस आत्मापहारी चोरले के चैं पाप गरेन?) आत्महा आदिहरूको गति श्रुतिमा यस प्रकार छ 'असूर्या....ये के चात्महनो जनाः।' अर्थात् जो पुरुष आत्माको हनन गर्नेवाला छन् ती मरे पछि ती लोकहरूमा जान्छन् जसलाई असूर्या भन्दछन् र त्यो अन्धकारले ढाकिएको छ॥२८॥

–★–★–★–

## प्रकृत्यैव च कर्माणि क्रियमाणानि सर्वशः।
## यः पश्यति तथात्मानमकर्तारं स पश्यति॥

**जो सम्पूर्ण क्रियाहरूलाई सम्पूर्ण तरिकाले प्रकृतिले नै गरिरहेको देख्दछ र आफुलाई अकर्ता देख्दछ (या अनुभव गर्दछ), त्यहि वास्तवमा देख्दछ॥२९॥**

ननु शुभाशुभकर्मकर्त्तृत्वेन वैषम्येदृश्यमाने कथमात्मनां समत्वं स्यादित्याशङ्क्याह–प्रकृत्यैवेति। देहेन्द्रियाकारेण परिणतया प्रकृत्येव सर्वाणि सर्वशः सर्वप्रकारैः क्रियमाणानि कर्माणि यः पश्यति, तथाऽऽत्मानकर्त्तारं तस्य यावत् प्रकृतिसम्बन्धस्तावद्देहेन्द्रियाधीनकर्त्तृत्वादकर्त्तारं यः पश्यति, स यथाऽवस्थितमात्मानं पश्यति॥२९॥

यहाँ यो शंका हुन्छ कि आत्मा मा, शुभाशुभ कर्महरूको कर्त्ता हुनाले, विषमता देखिन्छ, भने त्यसको समता कसरी प्रतिपादन हुन्छ? यस शंकाको उत्तर यहाँ दिनुहुन्छ। देह, इन्द्रियको रूपमा बदलिएको प्रकृति नै सर्वप्रकारले गरिएका कर्महरूलाई सम्पादित गर्दछ। आत्माको जबसम्म प्रकृतिसँग सम्बन्ध रहन्छ तब सम्म देह, इन्द्रिय को अधीन त्यसको कर्त्तापना हुन्छ र यसै कारणले यो अकर्ता हो, यस्तो जो जान्दछ वा देख्दछ त्यही आत्माको यथार्थ रूपलाई जान्दछ। भाव यो हो कि आत्मामा राम्रो नराम्रो कर्महरूको कर्तापन जो देखिन्छ त्यो प्रकृति सँग सम्बन्धित छ। शुद्ध आत्मस्वरूपमा यो विषमता छैन॥२९॥

–★–★–★–

## यदा भूतपृथग्भावमेकस्थमनुपश्यति।
## तत एव च विस्तारं ब्रह्म सम्पद्यते तदा॥

**जुन समय साधक प्राणिहरूका बेग्ला–बेग्लै भावलाई एक प्रकृतिमा नै स्थित देख्दछ र त्यस प्रकृतिबाटै ती सबैको विस्तार देख्दछ त्यस समयमा त्यो ब्रह्मामा प्राप्त हुन्छ॥३०॥**

एवमात्मनः सर्वत्र समत्वं प्रतिपाद्य पुनस्तस्य क्रियया प्राप्तं वैषम्यं शरीररूपप्रकृतिनिमित्तत्वेन परिहृतम्। इदानीं देहभेदमपि कारणैकत्वदर्शनेन निराकुर्वंस्तथाद्रष्टुर्ब्रह्म-सदृशात्मप्राप्तिमाह-यदेति। यदा यस्मिन्काले भूतपृथग्भावं देवतिर्यङ्मनुष्यादिभेदभिन्नं भावं देहरूपं कार्यमेस्थ-मेस्यामेवेश्वरशक्तिरूपायां प्रकृतौ स्थितं स्थितिकाले अनुपश्यति सर्वदा अनुसन्धत्ते तत एव च विस्तारं प्रकृतेः सकाशादेव भूतानां विस्तारं सृष्टिसमयेऽनुपश्यति। तदा भूतानां कारणद्रव्यात्मनैकत्वमनुपश्यन् ब्रह्म सम्पद्यते, ब्रह्मवदविच्छिन्नज्ञानं सममात्मानं प्राप्नोति ॥३०॥

यस प्रकार आत्माको सबैतिर समता प्रतिपादन गरियो। फेरि यो भनियो कि क्रियाबाट प्राप्त जो विषमता आत्मामा देखिन्छ त्यो शरीर रूप प्रकृतिको कारणले हो। अब यहाँ देह जनित विषमतालाई पनि त्यसको कारणको एकता वर्णन गरेर हटाउनु हुन्छ र यस्तो जान्नेहरूकलाई ब्रह्मको समान आत्म प्राप्ति हुन्छ, यस्तो भन्नुहुन्छ। जतिखेर भूत पृथक् भावलाई अर्थात् देव, तिर्यक्, मनुष्यादिको शरीर भेदरूपी कार्यलाई भगवान्को एउटै शक्ति रूप प्रकृतिमा एकत्र देख्दछ, भाव यो कि त्यो संझिन्छ कि स्थितिकालमा यो सबै देह जनित विभिन्नता प्रकृतिमा एकत्र थियो छुट्टै लाग्दैन थियो र सृष्टिको समयमा प्रकृतिबाटै विषमाकार भूतहरूको विस्तार हुन्छ त्यस समय कारण द्रव्य प्रकृतिमा सबै भूतहरूको एकता अनुभव गर्दै त्यो ब्रह्म जस्तो निरावरण अनवच्छिन्न ज्ञान स्वरूप आत्म तत्त्वलाई प्राप्त गर्दछ॥३०॥

-★-★-★-

**अनादित्वान्निर्गुणत्वात्परमात्मायमव्ययः।**
**शरीरस्थोऽपि कौन्तेय न करोति न लिप्यते॥**

**हे कौन्तेय! यो (पुरुष स्वय) अनादि हुनाले र गुणहरूले रहित हुनाले अविनाशी परमात्मस्वरूप नै हो। यो शरीरमा भएर पनि न गर्दछ र न लिप्त नै हुन्छ॥३१॥**

ननु भवत्वात्मनः प्रकृतिवैलक्षण्यं तन्निमित्तं कर्त्तृत्वं च न स्वत इति तथाऽपि शरीरेऽवस्थानदशायां तत्सम्बन्धनिमित्तैः कर्मभिस्तज्जन्यसुखदुःखादिभिश्च यदि लिप्येत तर्हि कथमकर्त्तृत्वं समत्वदर्शनं च स्यादित्याशङ्क्याह-अनादित्वादिति। आदिजन्मस्वरूपतस्तद्रहित्वात्, निर्गुणत्वात्स्वरूपेण मायागुणसम्बन्धरहितत्वात् अयं परमात्माऽव्ययः विनाशवर्जितः देहमनोबुद्ध्योऽपि आत्मशब्दवाच्यास्तेभ्योऽपि परमत्वाच्छ्रेष्ठत्वादयं क्षेत्रज्ञः परमात्मेत्युक्तः। यदुत्पत्तिमत्प्रकृतिगुणवच्च वस्तु तस्य व्ययो नाशो भवति। अयं (तु) न तथा अतोऽव्य-यस्तस्माच्छरीरस्थोऽपि शरीरे वर्त्तमानोऽपि हे कौन्तेय! न करोति न लिप्यते। देहस्वभावैः परिणामादिभिर्न युज्यते॥३१॥

मानियो कि आत्मा प्रकृति भन्दा विलक्षण छ र त्यसको कर्तापना प्रकृति सम्बन्धले नै छ स्वरूपले हैन। तर जब यो शरीरमा हुन्छ तब शरीरबाट गरिएको कर्महरूको फल, सुख दुःखादिले यो लिप्त हुन्छ नै। तब त्यसको अकर्तापना र स्वरूपको समता देख्नु कसरी हुन्छ? यस शंकाको उत्तर यस श्लोकमा दिनुहुन्छ। अनादि अर्थात् जन्म रहित र निर्गुण अर्थात् स्वरूपबाट माया गुण-सम्बन्ध रहित हुनाले यो परमात्मा जीव अव्यय छ। यसको विनाश हुँदैन। देह, मन, बुद्धिलाई कतै कतै आत्मा भनिएको छ र क्षेत्रज्ञ यिनीहरूभन्दा श्रेष्ठ छ यसैले त्यसलाई यहाँ परमात्मा भनियो। उत्पत्तिवाला र त्रिगुण युक्त वस्तुहरूको नाश हुन्छ। यो क्षेत्रज्ञ त्यस प्रकारको नहुनाले अविनाशी छ। यसैले शरीरमा स्थित आत्मा पनि केहि गर्दैन र न त ती कामहरूको फल ले लिप्त हुन्छ। भाव यो हो कि परिणाम आदि जो देहको स्वभावका गुण छन् तिनीहरूसँग आत्माको संयोग हुँदैन॥३१॥

-★-★-★-

**यथा सर्वगतं सौक्ष्म्यादाकाशं नोपलिप्यते।**
**सर्वत्रावस्थितो देहे तथात्मा नोपलिप्यते॥**

**जस्तो सबै तिर व्याप्त आकाश अत्यन्त सूक्ष्म हुनाले कतै पनि लिप्त हुँदैन, यस्तै नै सबैठाऊँमा परिपूर्ण आत्मा कुनै पनि देहमा लिप्त हुँदैन॥३२॥**

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

तथाऽपि देहसंयोगे सति तद्धर्मैः कथं न लिप्यते इति शङ्कानिरासाय दृष्टान्तमाह–यथेति। यथाऽऽकाशं सर्वगत–मपि सर्वैर्वस्तुभिः संयुक्तमपि सौक्ष्म्यात् सर्ववस्तुस्वभावैर्न लिप्यते, तथा सर्वत्रोत्तमेऽधमे वा देहेऽवस्थितोऽप्यात्मा न लिप्यते, दैहिकैर्गुणदोषैर्न युज्यत इत्यर्थः॥३२॥

देहको संयोग भए पछि आत्मा देहको धर्मले किन लिप्त हुँदैन? यस शंकाको दृष्टान्त दिएर हटाउनुहुन्छ।
जस्तो आकाश सबै वस्तुहरूले संयुक्त भए पनि धेरै सूक्ष्म भएको कारण ती वस्तुहरूको स्वभावले लिप्त हुँदैन, त्यसै प्रकार उत्तम, मध्यम र नीच सबै देहहरूमा स्थित आत्मा पनि ती–ती देहहरूका गुण दोषहरूले लिप्त हुँदैन॥३२॥

–★–★–★–

**यथा प्रकाशयत्येकः कृत्स्नं लोकमिमं रविः।**
**क्षेत्रं क्षेत्री तथा कृत्स्नं प्रकाशयति भारत॥**

**हे भारत! जस्तै एउटै सूर्य यस सम्पूर्ण संसारलाई प्रकाशित गर्दछ, त्यस्तै नै क्षेत्रज्ञ (आत्मा) सम्पूर्ण क्षेत्रलाई प्रकाशित गर्दछ॥३३॥**

स्यादेतदात्मन आकाशदृष्टान्तेन समत्वं निर्लेपत्वं च, तथाऽप्याकाशवद्विभुश्चेदात्मा तर्हि तस्य सर्वत्र व्याप्त्या सर्वान्तर्वर्त्तिसुखदुःखाद्यनुभवः समानः स्यात्तथात्वेऽहं त्वमयमित्यादिप्रत्ययानां विभागाभावश्च स्यात्। तस्य म–ध्यमपरिणामत्वे देहवन्नश्वरत्वापत्ते पिपीलिकादेहे स्थितस्य तत्परिमितस्य तद्देहत्यागे कर्मवशाद्धस्त्यादिदेहगमने तत्राव्याप्यमानं स्यात्। इस्तिदेहस्थस्य तत्समस्य कर्मवशात् पिपीलिकादेहगमने सव्रप्रवेशो न स्यात्। अणुपरिमाणत्वे तु मेर्वेकाल्पदेशस्थसर्षपस्येव देहाल्पतमैकदेशस्थत्वेन सर्वावयववृत्ति सुखदुःखाद्यनुभवः प्रकाशकत्वं च न स्यादित्याशङ्कायामाह–यथेति। यथैकः परिच्छिन्नश्चादित्यः स्वप्रभया कृत्स्नमिमं लोकं प्रकाशयति तथा क्षेत्री क्षेत्रज्ञः अणुपरिमाणकोऽपि स्वधर्मभूतज्ञानेन कृत्स्नमापादतल–मस्तकं क्षेत्रं प्रकाशयति। हे भारत! न विभुपरिमाणको वा मध्यमपरिमाणको वा उक्तदोषयोगात् अणुतवपक्ष एव शास्त्रीयः। "यथाऽणुनश्चक्षुषः प्रकाशो व्याप्त एवमेवास्य पुरुषस्य प्रकाशो व्याप्तः, व्याप्तो वै पुरुष" इति। "अणुर्वाह्येष आत्मा वेदितव्यो यस्मिन् प्राणः पञ्चधा

शंका– मानियो कि यो आत्मा आकाशको समान निर्लेप र सम छ। यदि यो आकाशको जस्तो विभु मान्ने हो भने पनि त त्यसको सबैतिर व्याप्ति भएको कारण त्यसको अंतःकरणको सुख–दुःखको समान अनुभव हुन्छ र यस्तो हुँदा खेरि म, तिमी, त्यो को भेद मेटिन्छ। यदि आत्मालाई मध्यम परिमाणवाला मान्ने हो भने, न विभु न अणु, त देहको समान नाशवान् हुन जान्छ। फेरि देह त्याग पछि यदि कमिलो को आत्मा हात्तीको देहमा गयो भने त कमिलोको शरीरमा कमिलो को परिमाणवाला आत्मा हात्तीको ठूलो शरीरमा सबैतिर व्याप्त हुन सक्दैन। त्यसको शरीरको कुनै भागमा हुन्छ। फेरि जब हात्तीको आत्मा त्यसको देहको समान ठूलो शरीर छुटेपछि कर्मवश कमिलोको शरीरमा गयो भने त त्यस छोटो शरीरमा अट्दैन र बाहिर नै हुन्छ। यदि आत्मालाई अणु परिमाण बाला मान्ने हो भने त्यो मेरू पर्वको एक भागमा स्थित तोरीको दाना समान देहको एउटा सानो कुनामा हुन्छ। शरीरको सबै सुख दुःख को त्यसलाई अनुभव हुँदैन, न सम्पूर्ण शरीरलाई त्यो प्रकाशित गर्दछ।
यिनै शंकाहरूका उत्तर यहाँ दिनुहुन्छ। जस्तो एकातिर परिच्छिन्न सूर्य आफ्नो प्रभाले समस्त लोकहरूलाई प्रकाशित गर्दछ त्यस्तै नै आत्मा अणु परिमाण वाला हुँदा पनि आफ्नो धर्मभूत ज्ञानले नखशिख पर्यन्त शरीरलाई प्रकाशित गर्दछ, हे अर्जुन! माथि भनिएका दोषहरूका कारण आत्मा विभु वा मध्यम परिमाणवाला होईन। आत्मा अणु हो यही शास्त्रहरूको मत हो, यथा श्रुति– 'यथा.......कल्पते'(जस्तो अणु प्रमाणवाला चक्षुको प्रकाश फैलिन्छ त्यस्तै नै यस आत्माको पनि प्रकाश फैलिन्छ। यो पुरुष अर्थात् आत्मा व्याप्त छ अर्थात् यसको धर्मभूत ज्ञान व्याप्त छ। यो आत्मा निश्चय नै अणु हो। आत्मा बुद्धिले जान्न योग्य छ। जसमा पाँचप्रकारको प्राण प्रवेश गरे। कपालको टुप्पो सय भाग मा एक भाग र फेरि त्यसको एकभाग को सय भाग। यस्तो सय भागको एकभाग बराबर यो जीव छ। त्यो जान्न योग्य छ। मुक्ति अवस्थामा त्यो आत्मा धर्मभूत ज्ञानको विकासको कारण अनन्तता

संविवेश, वालाग्रशतभागस्य शतधा कल्पितस्य च। भागो जीवः स विज्ञेयः स चानन्त्याय कल्पते" इत्यादिश्रुतिभ्यः। "उत्क्रान्तिगत्या गतीनां, नाणुरतच्छ्रुतेरिति चेन्नेतराधिकारात्, गुणाद्वाऽलोकवदि"त्यादिसूत्रेभ्यश्च। अनुगीतायामपि "यथा दीपः स्वशरणे दीप्यमानः प्रकाशते। एवमेव शरीराणि प्रकाशयति चेतन" इति ॥३३॥

**प्राप्त गर्दछ।) फेरि व्यास सूत्रमा पनि यस्तै नै भनिएको छ- जस्तो 'उत्क्रान्ति......लोकवत्' आत्मा निस्कन्छ, कर्मफल भोग्न लोकहरूमा जान्छ र फेरि यहाँ कर्म गर्नको लागि फर्किन्छ। यसमा अणु छ किनकी विभुमा यी आउने जाने कार्य सम्भव छैन। जीव अणु होईन यस्तो पनि भन्नु ठीक होईन किनकी श्रुतिका, आत्माको विभुत्व प्रतिपादक वाक्य परमात्माको वाचक हुन् जीव को होईन। सूर्य र दियोको जस्तो आत्मा धर्मभूत ज्ञानले समस्त देहलाई प्रकाशित गर्दछ। अनुगीतामा लेखिएको छ- 'यथादीपः........ चेतनः' जस्तो दियो घरलाई प्रकाश गर्दछ त्यस्तै नै चेतन अर्थात् जीव शरीरलाई प्रकाश गर्दछ॥३३॥**

-★-★-★-

## क्षेत्रक्षेत्रज्ञयोरेवमन्तरं ज्ञानचक्षुषा।
## भूतप्रकृतिमोक्षं च ये विदुर्यान्ति ते परम्॥

**यस प्रकार जो ज्ञानरूपी नेत्रले क्षेत्र र क्षेत्रज्ञको विभागलाई तथा कार्य-कारण-सहित प्रकृतिद्वारा स्वयंलाई अलग जान्दछ, ती परमात्मालाई प्राप्त हुन्छन्॥३४॥**

उक्तमध्यायार्थं सफलमुपसंहरति-क्षेत्रक्षेत्रज्ञयोरिति। यथेह निरूपितयोः क्षेत्रक्षेत्रज्ञयोरेवमुक्तप्रकारेणान्तरं परस्परवैल-क्षण्यं परिणामित्वापरिणामित्वरूपं ज्ञानचक्षुषा शास्त्रा-चार्योपदेशजनितक्षेत्रक्षेत्रज्ञस्वरूपयाथात्म्यज्ञानाख्येन चक्षुषा ये विदुः, तथा चेयमुक्ता भूतानां प्राणिनां प्रकृतिस्तस्याः सकाशान्मोक्ष मोक्षोपायं च ये विदुर्विदित्वाऽनुतिष्ठन्ति, ते निवृत्ताशेषाविद्याः परं प्रकृतिवियुक्तं शुद्धात्मस्वरूपं यान्ति प्राप्नुवन्तीत्यर्थः॥३४॥ 'क्षेत्रक्षेत्रज्ञयोर्यो वै विवेकं कृपयाऽऽदिशत्।सर्वज्ञस्तं हरिं नित्यं व्रजामि शरणं गुरुम्॥'

**यस अध्यायको अर्थलाई फल सहित भनेर अध्यायलाई समाप्त गर्नुहुन्छ।**
**जस्तो यस अध्यायमा निरूपण गरिएको छ त्यस्तो क्षेत्र (शरीर) र क्षेत्रज्ञ (जीव)को परस्पर विलक्षणतालाई कि एक (क्षेत्र) परिणामी हो र अर्को (क्षेत्रज्ञ) अपरिणामी हो, ज्ञानचक्षुले, अर्थात् शास्त्र र आचार्यको उपदेशले उत्पन्न क्षेत्र र क्षेत्रज्ञको स्वरूप यथार्थता रूपी ज्ञानचक्षुले, जो जान्दछ र जो प्रकृतिबाट प्राणिहरूको मुक्तिको उपायहरूलाई जानेर त्यसको अनुष्ठान गर्दछ त्यो प्रकृति वियुक्त आत्मस्वरूपलाई प्राप्त गर्दछ॥३४॥**
**जसले कृपा गरेर क्षेत्र र क्षेत्रज्ञको विवेकको उपदेश गर्नुभयो ती सर्वज्ञ, नित्य, गुरुरूप हरिको म शरणमा पर्दछु॥**

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां क्षेत्रक्षेत्रज्ञविभागयोगो नाम त्रयोदशोऽध्यायः॥१३॥

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ चतुर्दशोऽध्यायः

## श्रीभगवानुवाच

**परं भूयः प्रवक्ष्यामि ज्ञानानां ज्ञानमुत्तमम्।**
**यज्ज्ञात्वा मुनयः सर्वे परां सिद्धिमितो गताः॥**

**सम्पूर्ण ज्ञानहरूमा उत्तम र श्रेष्ठ ज्ञानलाई म फेरि भन्दैछु, जसलाई जानेर सब मुनिहरू यस संसारबाट मुक्त भएर परमसिद्धि लाई प्राप्त गरिसकेका छन॥१॥**

त्रयोदशाध्याये "यावत्सञ्जायते किञ्चित्सत्त्वं स्थावर-जङ्गमम्। क्षेत्रक्षेत्रज्ञसंयोगात्तद्विद्धि भरतर्षभे"ति प्रकृति-पुरुषसंसर्गस्य सर्वचराचरकारणत्वं "कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मसु" इति पुरुषस्य गुणमयसुखादिसङ्गो जन्मादबिन्धहेतुरिति चोक्तमिदानीं प्रकृतिस्वातन्त्र्यवादि-निरीश्वरसाङ्ख्यमतनिरासाय गुणानां बन्धनप्रकारदर्शनाय गुणत्ययप्रकारदर्शनाय च गुणातीतलक्षणं प्रकृतिलक्षणं च वक्तु चतुर्दशाध्याय आरभ्यते। तत्र तावद्वक्ष्यमाणार्थं स्तुवन् श्रीभवानुवाच-परं भूय इति द्वाभ्याम्। परं पूर्वोक्ताद्विलक्षणं प्रकृतिपुरुषसत्त्वादिगुणविषयं ज्ञानं भूयः पुनरपि प्रवक्ष्यामि। कथं भूतं तत्? ज्ञानानां तपःकर्मादिविषयाणां मध्ये उत्तमम्। उत्तमत्वं विवृणोति-यज्ज्ञानं ज्ञात्वा मननेन स्थिरीकृत्य सर्वे मुनयस्तन्मननशीला इतः संसारात्परां प्रकृतियुक्तात्मविषयां सिद्धिं गताः प्राप्ताः॥१॥

तेह्रौं अध्यायमा 'यावत्संजायते.......भरतर्षभ।' द्वारा भगवान्ले यो भन्नुभयो कि प्रकृति पुरुषको संसर्ग सबै चर अचरका कारण हुन्। फेरि 'कारणं.......जन्मसु।' ले यो भन्नुभयो कि पुरुषको जन्म, मरण आदि बन्धको कारण त्रिगुणमय सुख आदिको संग नै हो। अब यस चौधौं अध्यायमा प्रकृतिलाई स्वतन्त्र मान्नेवाला निरीश्वरवादिहरूका सांख्यमतको खण्डन गर्नुहुनेछ र गुणहरूबाट बन्धनको रीति, गुणहरूबाट छुटकाराको प्रकार र गुणातीत पुरुषहरू र प्रकृतिको लक्षणलाई बताउनु हुनेछ। अब जुन ज्ञानलाई भगवान् भन्नुहुनेछ त्यसको स्तुति दुईश्लोकहरू द्वारा गर्नुहुन्छ। फेरि पूर्वमा भनिएको ज्ञान भन्दा विलक्षण र तप कर्म आदि विषयक ज्ञानहरूमा उत्तम, प्रकृति, पुरुष र सत्त्व रज आदि गुणहरूका ज्ञानलाई म भन्नेछु। यो ज्ञान उत्तम यसैले हो कि यस ज्ञानलाई, मननको द्वारा स्थिर गरेर सबै मननशील मुनिहरू यस संसारबाट मुक्त भएर प्रकृति-वियुक्त आत्म स्वरूप विषयक परम सिद्धिलाई प्राप्त गरेका छन्॥१॥

-★-★-★-

**इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागताः।**
**सर्गेऽपि नोपजायन्ते प्रलये न व्यथन्ति च॥**

**यस ज्ञानको आश्रय लिएर जो मनुष्य मेरो सधसर्मतालाई प्राप्त भएका छन् ती महासर्गमा पनि पैदा हुँदैनन् र महाप्रलयमा पनि व्यथित हुँदैनन्॥२॥**

किञ्च-इदमिति। इदं वक्ष्यमाणं ज्ञानमुपाश्रित्यानुष्ठाय मम साधर्म्यमागता मत्साम्यं प्राप्ताः सन्तः सर्गेऽपि ब्रह्मादि-षूत्पद्यमानेष्वपि नोत्पद्यन्ते, गर्भवासदुःखं नानु भवन्ति। तथा प्रलये न व्यथन्ति प्रलयकालिकदुःखानि नानुभवन्ति। न पुनरावर्त्तन्त इत्यर्थः॥२॥

यस वक्ष्यमाण ज्ञानलाई धारण गरेर मेरो साम्यता अर्थात् मेरो समान संसार बन्ध रहित भावलाई प्राप्त भएर सृष्टिकालमा पनि, जब ब्रह्मा आदि पनि पैदा हुन्छन् तब परासिद्धिलाई प्राप्त गरेका मुनिगण गर्भवासको दुःख अनुभव गर्दैनन् र प्रलयकालको पनि मरणादि दुःख भोग्नु पर्दैन, अर्थात् ती आवागमन बाट छुट्तछन्॥२॥

-★-★-★-

**मम योनिर्महद्ब्रह्म तस्मिन्गर्भं दधाम्यहम्।**
**सम्भवः सर्वभूतानां ततो भवति भारत॥**

**हे भारत! मेरो मूल प्रकृति त उत्पत्ति-स्थान हो र म त्यसमा जीवरूप गर्भको स्थापन गर्दछु। त्यसले सम्पूर्ण प्राणिहरूको उत्पत्ति हुन्छ॥३॥**

एवं वक्ष्यमाणार्थं स्तुत्वा सर्वभूतोत्पत्तिः प्रकृतिपुरुष-संसर्गाद्भवति, तत्संसर्गश्च न साङ्ख्यसिद्धान्तवत्तयोः स्वातन्त्र्येण किन्तु मयैव कृत इत्याह-ममेति। मम परमेश्वरस्य नियम्यभूता त्रिगुणात्मिका प्रकृतिः योनिः सर्वभूतोत्पत्तिस्थानं देशकालानवच्छिन्नत्वात्सर्वकार्येभ्यो महत्त्वात्सर्वस्य बृंहणहेतुत्वाच्च महद्ब्रह्म, तस्मिन् प्रकृति-रूपे महद्ब्रह्मणि योनौ गर्भं सर्वभूतादेर्हिरण्यगभस्यापि जन्मनो बीजं क्षेत्रज्ञसमष्टिं दधामि योजयामि। अहं सर्वज्ञः चेतनाचेतनशक्त्यधीश्वरः "बहु स्यां प्रजायेये"ति सङ्कल्पपूर्वकमीक्षणं करोमि। प्रलये मयि लीनमविद्या-कामकर्मानुशयवन्तं क्षेत्रज्ञं पराशक्तिवाच्यं चेतनपुञ्ज कर्मफलभोगार्हमालोच्य भोग्यभूतयाऽपराशक्तिक्षेत्रशब्द-वाच्यया योजयामीत्यर्थः। ततस्तस्माच्चेतनाचेतनप्रकृति-द्वयसंयोगातमकाद्गर्भाधानात्सर्वभूतानां ब्रह्मादिस्तम्ब-पर्यन्तानां समभवो भवति हे भारत!॥३॥

वक्ष्यमाण ज्ञानको स्तुति गरेर प्रकृतिको संसर्गले सबै भूतहरूको उत्पत्ति हुन्छ र त्यो संसर्ग स्वतन्त्र छैन, जस्तो सांख्यवादिहरूको मत छ, तर मैले गरेको हो, यसैलाई भगवान् यहाँ भन्नुहुन्छ। हे अर्जुन! म परमेश्वरबाट नियम्य त्रिगुणात्मिका प्रकृति योनि हो अर्थात् सबै भूतहरूको उत्पत्तिको स्थान हो। यो प्रकृति देशकालबाट अनवच्छिन्न छ, सवै कार्यहरूभन्दा ठूलो छ र सबैको वृद्धिको कारण हो। यसैले त्यो महद् ब्रह्म भनिन्छ। यस प्रकृति रूप महद् योनिमा म सबै भूतहरू र ब्रह्माको पनि जन्मको बीजलाई अर्थात् क्षेत्रज्ञ समूहलाई धारण गराउँदछु वा स्थापन गर्दछु। चेतन र अचेतन शक्तिको मालिक म 'बहुस्यां प्रजायेयं' (धेरै भएर, सृष्टि गरुँ) यस्तो संकल्प पूर्वक हेर्दछु। तात्पर्य कि प्रलयकालमा ममा लीन अविद्या, काम, कर्महरूका संस्कारले युक्त पराशक्ति वाच्य चेतनपुंज क्षेत्रज्ञ जीवलाई कर्मफल भोगको योग्य सोचेर भोग्यभूत अपराशक्ति अर्थात् क्षेत्र(शरीर)को साथमा संयोग गराउँदछु। यसैले चेतन अचेतन दुबै प्रकृतिहरूका मेरो द्वारा गरिएको संयोगरूप गर्भाधान देखि लिएर कीट पर्यन्त सबै चर अचरको जन्म हुन्छ॥३॥

-★-★-★-

**सर्वयोनिषु कौन्तेय मूर्तयः सम्भवन्ति याः।**
**तासां ब्रह्म महद्योनिरहं बीजप्रदः पिता॥**

**हे कुन्ति नन्दन सम्पूर्ण योनिहरूमा प्राणिहरूको जतिपनि शरीर पैदा हुन्छन् त्यो सबैको मूल प्रकृति त माता हुन् र म बीज-स्थापन गर्ने पिता हुँ॥४॥**

न केवलं प्रलयान्तरमेव मत्कृतप्रकृतिपुरुषसंयोगाद् भूतोत्पत्तिः, किन्त्ववान्तरकार्यावस्थायामपि मदधीन तवमितयाह-सर्वयोनिष्विति। सर्वासु देवासुरगन्धर्वयक्ष-राक्षसपितृमनुष्यपशुमृगपक्षिसर्पादियोनिषु या मूर्त्तयस्तनवः सम्भवन्ति उत्पद्यन्ते हे कौन्तेय! तासां मूर्त्तीनां महद्ब्रह्म-योनिर्मातृस्थानीया चित् संयुक्ता महदादिविशेषान्ता प्रकृतिः कारणमित्यर्थः। अहं सर्वशक्तिः सर्वेश्वरो बीजप्रदः गर्भाधानस्य कर्त्ता पितृस्थानीयः। तत्र तत्र तत्तत्कर्मानुसाराच्चेतनवर्गस्य

केवल प्रलयको पछि नै पुरुष प्रकृति संयोगले भूतोत्पत्ति मैले गरेको मात्र होईन बरु पछिको कार्यावस्था पनि मेरो नै अधीन छ, यसैलाई भन्नुहुन्छ।
देव, असुर, गन्धर्व, यक्ष, राक्षस, पितृ, मनुष्य, पशु, मृग, पक्षी, सर्पादि सबै योनिहरूमा जुन शरीर उत्पन्न हुन्छन् ती मूर्त्तिहरूका वा शरीरहरूका, हे अर्जुन! महद् ब्रह्म योनि हो अर्थात् मातृस्थान हो। भाव यो हो कि चित संयुक्त महत् आदि विशेषणहरू भएको प्रकृति ती शरीरहरूका कारण हो र म सर्वशक्तिमान् सर्वेश्वर बीजदाता अर्थात् गर्भाधानको कर्त्ता हुँ। भाव यो हो कि म पिता स्थानमा छु। तात्पर्य यो कि काँही पनि जीवको स्वतन्त्रता छैन। म

संयोजकः, नतु तस्य स्वातन्त्र्यमित्यर्थः ॥४॥

नै त्यसको कर्मानुसार त्यसको प्रकृतिको साथ त्यसको संयोजक हुँ॥४॥

-★-★-★-

**सत्त्वं रजस्तम इति गुणाः प्रकृतिसम्भवाः।**
**निबध्नन्ति महाबाहो देहे देहिनमव्ययम्॥**

**हे महाबाहो! प्रकृतिबाट उत्पन्न हुने सत्त्व, रज र तम यी तीनै गुण अविनाशी देही जीवात्मालाई देहमा बाँधिदिन्छन्॥५॥**

तदेवं क्षेत्रक्षेत्रज्ञसंयोगस्येश्वराधीनत्वप्रतिपादनेन साङ्ख्य मतं निराकृत्य प्रकृतिसंसर्गेण पुरुषस्य बन्धं प्रतिपादयितुं तत्र के गुणाः कथं बध्नन्ति कथं ते ज्ञेया इति सर्वं दर्शयति सत्त्वमित्यादिचतुर्दशभिः। सत्त्वं रजस्तम इति सञ्ज्ञकास्त्रयो गुणाः प्रकृतिसम्भवाः। अत्र गुणा इति न रूपरसादिवद्द्रव्याश्रिताः किन्तु प्रकृत्यवस्था विशेषा यतो गुणसाम्यं प्रकृतिरित्युच्यते। सैव कालात्मना ईश्वरेण क्षोभिता सती महदादिकार्येषु गुणात्मनाऽभिव्यज्यते। यदुक्तं विष्णुपुराणे "प्रधानं पुरुषं चैव प्रविश्यात्मेच्छया हरिः। क्षोभयामास सम्प्राप्ते सर्गकाले व्ययाव्ययौ। स एव क्षोभको ब्रह्मन्! क्षोभ्यश्च परमेश्वरः। स सङ्कोचविकाशाभ्यां प्रधानत्वेऽपि च स्थितः। गुणसाम्यात्ततस्तस्मात् क्षेत्रज्ञाधिष्ठितान्मुने!। गुणव्यञ्जनसम्भूतः सर्गकाले द्विजोत्तम!। सात्त्विको राजसश्चैव तामसश्च त्रिधा महानिति। तस्मात्प्रकृतिपरिणाम एव त्रयो गुणास्ते च स्वकार्यभूतमहदादिपृथिव्यन्तारब्धदेहसम्बन्धिनं निबध्नन्ति, स्वकार्यैः सुखदुःखादिभिः संयोजयन्ति। ननु तर्हि "देही नित्यमवध्योऽयं देहे सर्वस्य भारते"ति कथमुक्तमिति चेत्तत्राह-अव्ययमिति। देहे वर्त्तमानमपि स्वरूपान्यथाभावरहितं देहतदनुबन्धिष्वभिनिवेशापादनेन निबध्नन्तीत्यर्थः॥५॥

यस प्रकार क्षेत्र क्षेत्रज्ञको संयोगलाई ईश्वराधीन भनेर सांख्यमतको निराकरण गर्नुभयो। प्रकृति संगले पुरुषलाई बन्धन हुन्छ यसैको प्रतिपादन गर्नको लागि, सत्त्वादि गुण के हो, ती कसरी बाँध्दछन्, तिनीहरूलाई कसरी जान्न सकिन्छ आदिलाई अब चौध श्लोकहरूद्वारा बताउनु हुन्छ। हे महाबाहु! सत्व, रज, तम नामको तीन गुण प्रकृतिबाटै उत्पन्न हुन्। यी गुण रूप रस आदिको समान द्रव्यको आश्रित छैनन्। यी प्रकृतिका अवस्था विशेष हुन् किनकी यी गुणहरूका समतालाई नै प्रकृति भन्दछन्। त्यही प्रकृति कालात्मक ईश्वरबाट क्षोभित भएपछि महदादि कार्यहरूमा गुण द्वारा परिणत हुन्छन्। विष्णुपुराणमा पनि यहि कुरा भनिएको छ-'प्रधानं......त्रिधा महानिति।' अर्थात् हरिले आफ्नो इच्छाले प्रधान (प्रकृति) र पुरुष (जीव) मा प्रवेश गरेर सृष्टिको समयमा क्षेत्र र क्षेत्रज्ञरूपले क्षोभन गर्नुभयो। हे ब्रह्मन्! परमेश्वर नै क्षोभक र क्षोभ्य दुबै हो। भगवान् संकोच र विकास रूपले प्रधानमा पनि स्थित हुनुहुन्छ। हे द्विजोत्तम! सृष्टिको पहिले गुणहरूमा समता रहन्छ, सृष्टिकालमा क्षेत्रज्ञसंग अधिष्ठित हुनाले सत्, रज, तम तीनै गुणहरू प्रकृतिबाट प्रकट हुन्छन्। यस प्रकार सत्, रज, तम यी तीनै गुणहरू प्रकृतिका नै परिणाम हुन्। यी आफ्नो कार्यभूत महत् बाट आरम्भ गरेर पृथ्वी पर्यन्त प्रारम्भित शरीरधारीहरूलाई बाँध्दछ अर्थात् सुख दुःख आफ्नो कार्यको साथमा तिनीहरूको संयोग गराईदिन्छन्।

शंका-'देही......भारत' मा भगवान्ले आत्मालाई (जीव)लाई नित्य र अवध्य भन्नुभएको छ, भने यसलाई गुण कसरी बाँधदछन्? उत्तर-अव्यय अर्थात् आत्म स्वरूपले अन्यथा भाव रहित हुँदा पनि देहमा स्थित जीव देह र त्यसको सम्बन्धीहरूसंग आसक्ति (आफ्नुपन) स्थापित गराएर बाँधिन्छ॥५॥

-★-★-★-

**तत्र सत्त्वं निर्मलत्वात्प्रकाशकमनामयम्।**
**सुखसङ्गेन बध्नाति ज्ञानसङ्गेन चानघ॥**

**हे पापरहित अर्जुन! ती गुणहरूमा सत्त्वगुण निर्मल स्वच्छ भएको कारण प्रकाशक र निर्विकार हो। त्यो सुखको आसक्तिले र ज्ञानको आसक्तिले देहीलाई बाँध्दछ॥६॥**

त्रयाणां गुणानां लक्षणं बन्धकत्वप्रकारं चाह त्रिभिः। तत्र तावत्सत्त्वस्याह-तत्रेति। तत्र तेषु त्रिषु गुणेषु मध्ये सत्त्वं

तीनै गुणहरूका लक्षण र बाँध्ने रीतिलाई तीन श्लोकहरूमा बताउनु हुन्छ। हे पापरहित अर्जुन! तीनै गुणहरूमा सत्व गुण

निर्मलत्वात्स्वच्छत्वात्स्फटिकपात्रमिवप्रकाशकं सुख-ज्ञानावरणस्वभावरहितम् अनामयं निरुपद्रवं शान्तमित्यर्थः। सत्त्वगुणः सुखसङ्गेन ज्ञानसङ्गेन च बध्नाति सुखेन ज्ञानेन च यः सङ्गः अहं सुखी ज्ञानी चेति ज्ञानसुखाभ्यां क्षेत्रज्ञं संयोजयति। पुनस्तत्साधने तत्फलानुभवे च प्रवर्त्तयति ॥६ ॥

स्वच्छ हुनाले स्फटिकको समान प्रकाशक छ, सुख र ज्ञानलाई आवरण गर्ने स्वभावले रहित छ र निरुपद्रव अर्थात् शान्त छ। यो सत्त्वगुण सुख र ज्ञानको संगले जीवलाई बाँध्दछ। म सुखी छु, म ज्ञानी छु, यस्तो ज्ञानको साथ जीवको सम्बन्ध गराउँदछ र त्यसको साधनहरू र त्यसको फलानुभवमा त्यसलाई लगाउँदछ ॥६ ॥

-★-★-★-

## रजो रागात्मकं विद्धि तृष्णासङ्गसमुद्भवम्।
## तन्निबध्नाति कौन्तेय कर्मसङ्गेन देहिनम् ॥

**हे कौन्तेय! तृष्णा र आसक्तिलाई पैदा गर्ने रजोगुणलाई तिमी रागस्वरूप संझ। त्यो कर्महरूका आसक्तिले देही(जीवात्मा)लाई बाँधिदिन्छ ॥७ ॥**

रजसो लक्षणं बन्धकत्वं चाह-रज इति। रागात्मकं रागो विषयेषु स्पृहा तदात्मकं चित्तस्य विषयाकारतापादकं विद्धि। तृष्णासङ्गसमुद्भवम्। तृष्णा प्राप्तेऽर्थेऽधिकाभिलाषः, सङ्गः प्राप्तेऽर्थे प्रीत्यतिशयेन तत्संश्लेषः तयोः समुद्भवो यस्मात् तद्रजः, हे कौन्तेय! कर्मसङ्गेन कर्मसु दृष्टादृष्टार्थफलेषु अभिलाषविशेषण तत्परता सङ्गस्तेन देहिनं बध्नाति ॥७ ॥

रजको लक्षण र त्यसले बाँध्ने तरीका बताउनु हुन्छ। हे कुन्ती पुत्र! रजलाई रागात्मक जान्नु। विषयमा चाह हुनाले चित्त तदाकार हुन्छ। प्राप्त अर्थमा अधिक चाहलाई तृष्णा भन्दछन् र त्यसमा अधिक प्रीतिको कारण मन लगाउनुलाई संग भन्दछन् कर्मको दृष्ट र अदृष्ट फलमा विशेष अभिलाषा र तत्परता द्वारा रजोगुण जीवलाई बाँध्दछ ॥७ ॥

-★-★-★-

## तमस्त्वज्ञानजं विद्धि मोहनं सर्वदेहिनाम्।
## प्रमादालस्यनिद्राभिस्तन्निबध्नाति भारत ॥

**र हे भारत! सम्पूर्ण देहधारिहरूलाई मोहित गर्ने तमोगुणलाई तिमी अज्ञानबाट उत्पन्न हुने संझ। त्यो प्रमाद, आलस्य र निद्राको द्वारा देह सँग आफ्नो सम्बन्ध मान्नेहरूलाई बाँध्दछ ॥८ ॥**

तमसो लक्षणमाह-तमस्त्विति तमस्तु अज्ञानजं ज्ञानं वस्तु-याथात्म्यबोधस्ततोऽन्यदज्ञानं वस्तुस्वरूपान्यथाज्ञानं तद्रू-पायाः प्रकृतेर्जातं विद्धि। मोहनं सर्वदेहिनां मोहोऽन्तःकरण विभ्रमः,अनित्यदुःखादिषु नित्यसुखदिबुद्धिः,तत्तमः प्रमा-दालस्यनिद्राभिर्देहिनं निबध्नाति। तत्र प्रमादः कर्त्तव्यस्य कार्यस्यानवधानता। आलस्यमुपस्थितेऽपि कार्ये उद्यमरा-हित्यम्। अत्यायासादिहेतुना सर्वेन्द्रियवृत्तिप्रवृत्त्युपर-तिर्निद्रा, ताभिर्जाड्यतापादनेन निबध्नातीत्यर्थः ॥८ ॥

तमको लक्षण भन्नुहुन्छ- हे अर्जुन! वस्तुको याथात्म्य बोधलाई ज्ञान भन्दछन् र अन्यथा बोधलाई अज्ञान भन्दछन्। तम अज्ञानरूप प्रकृतिबाट उत्पन्न हुन्छ र सबै देहिहरूमा मोह उत्पन्न गर्दछ। अनित्य र दुःख पैदा गर्नेवाला वस्तुहरूलाई नित्य र सुखकर संझिनु, यस्तो जो अन्तःकरणको भ्रम छ त्यसैलाई मोह भन्दछन्। यो तम प्रमाद, आलस्य र निद्राले जीवलाई बाँध्दछ। कर्तव्य कर्ममा अनवधानतालाई प्रमाद भनिन्छ। कार्य उपस्थित भएपछि पनि उद्यम नगर्नु आलस्य भनिन्छ। अति परिश्रमको कारण सबै इन्द्रियहरूका काम रोकिनु निद्रा भनिन्छ। तात्पर्य कि प्रमाद, आलस्य र निद्राको द्वारा मूढ़ता उत्पन्न गरेर तमोगुण जीवलाई बाँध्दछ ॥८ ॥

-★-★-★-

## सत्त्वं सुखे सञ्जयति रजः कर्मणि भारत।
## ज्ञानमावृत्य तु तमः प्रमादे सञ्जयत्युत ॥

**हे भारत! सत्त्वगुण सुखमा र रजोगुण कर्ममा लगाएर मनुष्यमाथि विजय गर्दछ। तर तमोगुण ज्ञानलाई छोपेर एवं प्रमादमा लगाएर मनुष्य माथि विजय गर्दछ॥९॥**

पुनर्गुणानां स्वस्वकार्यकरणे सामर्थ्यं सङ्क्षेपत आह–सत्त्वमिति। सत्त्वं सुखे सञ्जयति दुःखादिहेतोर्विद्यमानत्वेऽपि अन्तःकरणस्य सुखाकारवृत्तौ देहिनं संयोजयति। एवं रजोगुणः सुखोपशान्त्यादिहेतौ सत्यपि कर्मण्येव सञ्जयति प्रवर्त्तयति। हे भारत! तमस्तु गुरूपदेशेनोत्पद्यमानमपि ज्ञानमावृत्त्याच्छाद्य उपदिश्यमानस्य श्रेयसोऽनवधाने सङ्गं जनयति॥९॥

सत्त्वगुण सुखसँग संयोग गराउँदछ अर्थात् दुःखको कारण उपस्थित भए पनि देही(जीव)को अन्तःकरणलाई सुखसँग संयोग गराउँदछ। यसै प्रकार रजोगुण सुखको नाशको कारण उपस्थित भएमा पनि जीवलाई कर्ममा लगाउँदछ। हे भारत! तमोगुण गुरुको उपदेशले उत्पन्न ज्ञानलाई छोपेर उपदिष्ट कल्याणमा असावधानता पैदा गर्दछ॥९॥

–★–★–★–

**रजस्तमश्चाभिभूय सत्त्वं भवति भारत।**
**रजः सत्त्वं तमश्चैव तमः सत्त्वं रजस्तथा॥**

**हे भारत! रजोगुण र तमोगुणलाई दबाएर सत्त्वगुण बढ्दछ, सत्त्वगुण र तमोगुणलाई दबाएर रजोगुण बढ्दछ त्यस्तै नै सत्त्वगुण र रजोगुणलाई दबाएर तमोगुण बढ्दछ॥१०॥**

ननु त्रयाणां गुणानां सर्वत्र साहचर्यात् कार्यविभागः कथमिति चेत्तत्राह–रजस्तमश्चेति। यद्यपि सत्त्वादयस्त्रयो गुणाः प्रकृतिसंसृष्टात्मनः स्वरूपानुबन्धिनः, तथाऽपि गुणवृद्धि–हेतुभूतत्रिविधागमादिदशपदार्थानां प्राचीनकर्मवशाद्य–थायथोपजोषणात्सत्त्वादयः रस्परमुद्भवाभिभवरूपेण वर्त्तन्ते, अन्नादिना पुरुषस्यान्तःकरणं परिणमते "अन्नमयं हि सौम्य! मनः, आपो मयी वागि"ति श्रुत्या तथाविधानात् "आगमोऽपः प्रजा देशः कालः कर्म च जन्म च। ध्यानं मन्त्रोऽथ संस्कारः दशैते गुणहेतव"इति भागवतोक्तेः। तथा च रजस्तमसी कदाचिदभिभूय सत्त्वमुद्भवति। तथा तमःसत्त्वेऽभिभूय रज उद्रिच्यते। कदाचिद्रजःसत्त्वेऽभि–भूय तम उद्रिक्तं भवति॥१०॥

तीनै गुणहरूको साहचर्य भएमा कार्य विभाग कसरी हुन्छ त्यसलाई यहाँ भन्नुहुन्छ। हे अर्जुन! यद्यपि सत्त्वादि तीनै गुणहरू प्रकृतिसँग टाँसिएका आत्माको स्वरूपलाई बाँध्नेवाला हुन् र पनि गुणहरू बढ्ने कारण, तीन प्रकारका (सात्त्विक, राजस, तामस) शास्त्र र दस पदार्थ, (देश, काल, कर्मादि) प्राचीन कर्मवश जसरी जीवद्वारा सेवित हुन्छन् त्यसै प्रकार तीनै गुणहरू घटेका या बढेका रूपमा देखिन्छन्। अन्न, जल आदि मनुष्यको अन्तःकरणलाई बदलिरहन्छन्। पुरुष जस्तो सात्त्विक अन्नपानादिको व्यवहार गर्दछ त्यसको अन्तःकरण पनि त्यस्तै नै व्यवहार वाला हुन्छ। श्रुतिमा भनेको छ–'अन्नमयं.......वाक्' (हे शिष्य मन अन्नमय हो। वाक् जलमय हो।) भागवतमा गुणहरूको कारण यसरी गिन्ति गरिएको छ– 'आगमोऽपः........गुणहेतवः।(शास्त्र जल, प्रजा, देश, काल, कर्म, जन्म, ध्यान, मन्त्र र संस्कार यी नै दश गुणको कारण हुन्।) मतलब यो कि सात्त्विक शास्त्रको पठन-पाठन, सात्त्विक देवताको ध्यान, सात्त्विक कुलमा जन्म आदिले जीवमा सात्त्विक गुणहरूको वृद्धि हुन्छ। यस प्रकार कहिले रज र कहिले तमलाई दबाएर सत्त्व बढ्दछ। कहिले सत्त्व र तमलाई दबाएर रज बढ्दछ र कहिले रज र सत्त्वलाई दबाएर तम बढ्दछ॥१०॥

–★–★–★–

**सर्वद्वारेषु देहेऽस्मिन्प्रकाश उपजायते।**
**ज्ञानं यदा तदा विद्याद्विवृद्धं सत्त्वमित्युत॥**

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**जब यस मनुष्य शरीरमा सबै द्वारहरू (इन्द्रिय र अन्तःकरणमा) प्रकाश स्वच्छता र विवेक प्रकट हुन्छ, तब यो जान्नु पर्दछ कि सत्त्वगुण बढेको छ॥११॥**

सत्त्वादीनां वृद्धिं तत्कार्यद्वारेण जानीयादित्याह–सर्वद्वारेष्विति। सर्वेषु द्वारेषु ज्ञानोपलब्धिस्थानेषु श्रोत्रादीन्द्रियेषु प्रकाशः शब्दादिविषयस्तस्ययथावद्ग्रहणं तदेव ज्ञानं यदा उपजायते तदा ज्ञानप्रकाशात्मकेन लिङ्गेन विवृद्धं सत्त्वमिति विद्यात्। उत सुखसङ्गेनापि सत्त्वं विवृद्धं विद्यादित्यर्थः॥११॥

सत्त्वादिहरू को वृद्धि तिनीहरूको कार्यले जान्नु पर्दछ। यस शरीरमा ज्ञान प्राप्तिको बाटो जुन श्रोत्रादि इन्द्रियहरू छन् तिनीहरूमा जब शब्दादि विषयको ठीक-ठीक ज्ञान हुन्छ, तब प्रकाशरूप ज्ञान द्वारा सत्त्वलाई बढेको जान्नु। फेरि सुखसँग ले पनि सत्त्वको वृद्धि जानिन्छ। तात्पर्य कि जब इन्द्रियहरू वस्तुविषयक यथावत् ज्ञान प्रदान गरुन् र सुखको संग छ भने तब जान्नु पर्दछ कि सत्त्व गुणको वृद्धि भएको छ॥११॥

–★–★–★–

## लोभः प्रवृत्तिरारम्भः कर्मणामशमः स्पृहा।
## रजस्येतानि जायन्ते विवृद्धे भरतर्षभ॥

**हे भरतश्रेष्ठ! रजोगुण बढ्यो भने लोभ, प्रवृत्ति, कर्महरूको आरम्भ, अशान्ति र स्पृहा- यी वृत्तिहरू पैदा हुन्छन्॥१२॥**

रजोगुणवृद्धेर्लिङ्गमाह–लोभ इति। लोभः धनागमे सत्यपि तदत्यागपूर्वकमधिकागमेऽभिलाषः, प्रवृत्तिः क्रियासामान्यचेष्टा, आरम्भः देहगेहादिकर्मणामुद्योगः, कर्मणामशमः इदं कृत्वा पुनरेतत् करिष्यामीति सदा कर्मानुपरतिः, स्पृहा सर्वसामान्यवस्तुविषया तृष्णा, रजसि विवृद्धे एतानि लिङ्गानि जायन्ते। हे भरतर्षभ! लोभादिभी रजःप्रवृद्धं विद्यादित्यर्थः॥१२॥

हे अर्जुन! रजोगुणको वृद्धि हुँदा यी सबै चिन्हहरू देखा पर्दछन्, जस्तो लोभ-धन भएपनि त्यसको दान नगरि र धनको अभिलाषा, प्रवृत्ति अर्थात् काम गर्नमा असामान्य चेष्टा, आरम्भ अर्थात् देह घर आदि सम्बन्धी कार्यमा उद्योग, कर्ममा सदा लागि रहनु अर्थात् यो काम गरेर फेरि यो काम गर्नेछु यस प्रकारले सदा काम मा लागि रहनु र स्पृहा अर्थात् सबै वस्तुहरूको तृष्णा। मतलब यो कि चित्तमा लोभ आदिको वृत्ति हुँदा रजोगुण बढेको छ भनि जान्नु॥१२॥

–★–★–★–

## अप्रकाशोऽप्रवृत्तिश्च प्रमादो मोह एव च।
## तमस्येतानि जायन्ते विवृद्धे कुरुनन्दन॥

**हे कुरुनन्दन! तमोगुण बढ्दा अप्रकाश, अप्रवृत्ति तथा प्रमाद र मोह- यी वृत्तिहरू पनि पैदा हुन्छन्॥१३॥**

तमसो वृद्धेर्लिङ्गान्याह–अप्रकाश इति। अप्रकाशः ज्ञानानुदयः, अप्रवृत्तिः कर्त्तव्येऽप्यनुद्यमः, प्रमादः कर्त्तव्यार्थानवधानता, मोहो विपर्यज्ञानम्, एतानि तमसि विवृद्धे जायन्ते। एतैस्तमः प्रवृद्धं विद्यादित्यर्थः॥१३॥

तबको वृद्धिको चिन्ह बताउनुहुन्छ। हे अर्जुन! तमको वृद्धि भएपछि यी चिन्हहरू पाईन्छन्, यथा-अप्रकाश अर्थात् ज्ञान ढाकिनु, अप्रवृत्ति अर्थात् कर्त्तव्य कर्महरूमा पनि उद्यमहीनता, प्रमाद अर्थात् कर्त्तव्य कर्ममा लापरवाही र मोह अर्थात् उल्टो ज्ञान। यिनै चिन्हहरू भएको बेला तम बढेको छ भनेर जान्नुपर्दछ॥१३॥

–★–★–★–

## यदा सत्त्वे प्रवृद्धे तु प्रलयं याति देहभृत्।
## तदोत्तमविदां लोकानमलान्प्रतिपद्यते॥

**जतिखेर सत्त्वगुण बढेको छ त्यतिखेर यदि देहधारी मनुष्य मर्दछ भने त्यो मनुष्य उत्तमवेत्ताहरूका निर्मल लोकहरूमा जान्छ॥१४॥**

इदानीं देहिनः सत्त्वादिगुणवृद्धौ मरणे गुणानुरूपलोक–

सत्त्वादि गुणहरूको वृद्धि भएको बेला मरेमा तद् गुणानुरूप लोकहरूको प्राप्ति हुन्छ, यसैलाई यहाँ दुई श्लोकहरूका द्वारा

विशेषप्राप्तिमाह–यदेति द्वाभ्याम्। यदा सत्त्वे प्रवृद्धे सति देहभृज्जीवः प्रलयं याति मृत्युं प्राप्नोति, तदा उत्तमा देवादि-हिरण्यगर्भान्तास्तद्विदां तदुपासकानां लोकान्स्वर्गादि-सत्यान्तान् तत्तदुचितभोगस्थानविशेषानमलान् रजस्तमो-मलरहितान् प्रतिपद्यते प्राप्नोति ॥१४॥

भन्नुहुन्छ। सत्त्वगुण बढेको बेला जुन जीव मृत्युमा प्राप्त हुन्छ त्यसलाई उत्तम अर्थात् देउताहरू देखि लिएर हिरण्यगर्भ को लोक सम्मको उपासकहरूका, सर्गादि देखि लिएर सत्यलोक पर्यन्त, अमल अर्थात् रज र तम देखि रहित लोकहरूलाई, जुन त्यसको भोग्य स्थान हो प्राप्त गर्दछ ॥१४॥

–★–★–★–

**रजसि प्रलयं गत्वा कर्मसङ्गिषु जायते।**
**तथा प्रलीनस्तमसि मूढयोषिु जायते॥**

**रजोगुण बढेको बेला मर्ने प्राणी कर्मसंगी मनुष्यलोकमा जन्म लिन्छ तथा तमोगुण बढेको बेला मर्ने मूढ योनिहरूमा जन्म पाउँदछ ॥१५॥**

रजसीति। रजसि प्रवृद्धे प्रलयं मृत्युं गत्वा प्राप्य कर्मसङ्गिषु फलाभिसन्धियुक्तकर्मस्वासक्तेषु मनुष्येषु जायते तथा तमसि प्रवृद्धे प्रलीनो मृतो मूढयोनिषु पश्वादिषु जायते ॥१५॥

रज बढेको बेला मृत्यु भएमा फलयुक्त कामहरूमा आसक्त मनुष्ययोनिलाई प्राप्त गर्दछ। र तम बढेको बेला मृत्यु भएमा पशुआदिको मूढ योनि प्रप्त हुन्छ ॥१५॥

–★–★–★–

**कर्मणः सुकृतस्याहुः सात्त्विकं निर्मलं फलम्।**
**रजसस्तु फलं दुःखमज्ञानं तमसः फलम्॥**

**विवेकी पुरुषहरूले शुभकर्मलाई त सात्त्विक निर्मल फल भनेका छन्, राजस कर्मको फल दुःख भनेका छन् र तामस कर्मको फल अज्ञान (मूढ़ता) भनेका छन् ॥१६॥**

इदानीं सत्त्वादीनां स्वानुरूपकर्मद्वारा फलभेदमाह–कर्मण इति। सुकृतस्य सात्त्विकस्य कर्मणः सात्त्विकं निर्मलं प्रकाशसुखं फलमाहुः साङ्ख्याचार्या महर्षयः। रजसः राजसस्य तु कर्मणः सकामस्य पुण्यपापमिश्रस्य राजसं फलं दुःखमल्पसुखं दुःखप्रायमित्यर्थः। तमसस्तामसस्य कर्मणोऽज्ञानं मूढत्वं फलमाहुः ॥१६॥

अब सत्त्वादि गुण आफ्नो अनुसार कर्म द्वारा विचित्र फलका कारण हुन्। यसैलाई भन्नुहुन्छ। सात्त्विक कर्मको फल सात्त्विक र निर्मल अर्थात् प्रकाशयुक्त सुखवाला हुन्छ यस्तो कपिल आदि सांख्याचार्य महर्षि भन्नुहुन्छ। सकाम र पुण्यपाप मिलेको राजस कर्महरूको फल दुःख हो अर्थात् सुख कम र दुःख ज्यादा हुन्छ। र तामस कर्महरूको फल अज्ञान अर्थात् मूढ़ता हो ॥१६॥

–★–★–★–

**सत्त्वात्सञ्जायते ज्ञानं रजसो लोभ एव च।**
**प्रमादमोहौ तमसो भवतोऽज्ञानमेव च॥**

**सत्त्वगुणले ज्ञान र रजोगुणले लोभ आदि नै उत्पन्न हुन्छन्। तमोगुणले प्रमाद, मोह एवं अज्ञान पनि उत्पन्न हुन्छन् ॥१७॥**

एवम्भूतफलभेदे कारणगुणस्वभावमेव हेतुमाह–सत्त्वादिति। सत्त्वगुणात्सर्वज्ञानेन्द्रियद्वारेण प्रकाशाख्यं ज्ञानं सञ्जायते। अतः सात्त्विकस्य कर्मणः स्वानुरूपं प्रकाशसुखबहुलं फलं भवति। रजसो लोभो विषयधनादिप्राप्तावप्य-धिकतरोऽभिलाषो जायते। तस्य दुःखहेतुत्वात्तत्पूर्वकस्य

यस प्रकारको फलभेदमा गुणहरूको स्वभाव नै हेतु हो सत्त्वगुणबाट समस्त ज्ञानेन्द्रियद्वारा प्रकाशगर्ने ज्ञान उत्पन्न हुन्छ। यसैले सात्त्विक कर्महरूका, फल तिनीहरूका अनुरूप नै, प्रकाश र सुखको अधिकता हुन्छ। रज बाट लोभ अर्थात् विषय, धन आदिको प्राप्तिमा अधिकतर अभिलाषा उत्पन्न हुन्छ। यो रज दुःखको कारण हो यसैले रजबाट गरिएको कर्महरूको फल

कर्मणो दु:खं फलं भवति। एवं प्रमादमोहौ तमस: सकाशाद्भवतो जायेते, अज्ञानमेव च भवति न तु प्रकाशसुखलेश इत्यर्थ:॥१७॥

दु:ख नै हुन्छ। यसै प्रकार तमबाट प्रमाद र मोह उत्पन्न हुन्छ र अज्ञान पनि। अर्थात् यस अवस्थामा प्रकाश र सुखको लेश पनि मिल्दैन॥१७॥

-★-★-★-

**ऊर्ध्वं गच्छन्ति सत्त्वस्था मध्ये तिष्ठन्ति राजसा:।**
**जघन्यगुणवृत्तिस्था अधो गच्छन्ति तामसा:॥**

**सत्त्वगुणमा स्थित मनुष्य ऊर्ध्वलोकहरूमा जान्छन्, रजोगुणमा स्थित मनुष्य मृत्युलोकमा जन्म लिन्छन् र निन्दनीय तमोगुणको वृतिमा स्थित तामस मनुष्य अधोगतिमा जान्छन्॥१८॥**

इदानीं सत्त्वादिवृत्तिस्थानां प्रागुक्तान्युत्तमादिलोकफलान्येवोद्ध्र्वमध्याधेगतित्वेनाह- ऊद्ध्वमिति। सत्त्वस्था: सत्त्वस्था: सत्त्ववृत्तिस्था: सात्त्विकधर्मप्रधाना ऊद्ध्र्वं गच्छन्ति सत्त्वोत्कर्षतारतप्याद्देवलोकात्सत्यलोकपर्यन्तं गच्छन्ति, प्राप्नुवन्तीत्यर्थ:। क्रमेण मच्यन्तेऽपि। रजोगुणस्य लोभादिहेतुत्वाद्रजसा रजोवृत्तिस्था: स्वर्गादिफलभोगसाधनभूतकाम्यकर्मनिरतास्तथाभूतकर्माण्यनुष्ठाय तत्फलमनुभूय पुनर्धूममार्गेणवृत्य मध्ये मनुष्यलोके जनित्वा पुनस्तदर्थमेव कर्मानुतिष्ठन्ति जायन्ते म्रियन्ते च। जघन्यगुणवृत्तिस्था:। जघन्यो द्वाभ्यां निकृष्टं तमस्तस्य वृत्तितारतम्यात्तामिस्राादिनरकान् प्राप्य तत्तत्कर्मानुरूपं दु:खं भुक्त्वा श्वशूकरादियोनिषूत्पद्यन्ते॥१८॥

सत्त्वादिवृत्तिमा स्थित पुरुषहरूलाई मध्यमादि लोक फल स्वरूप मिल्दछन्। तिनै फलहरूलाई उच्च, मध्य र नीच गतिको द्वारा बताउनु हुन्छ। जुन मनुष्य सत्त्ववृत्तिमा स्थिर रहन्छन् अर्थात् सात्त्विक धर्म नै जसमा प्रधान छ तिनीहरू सत्त्वको उत्कर्षको मात्रा अनुसार देवलोक देखि आरम्भ गरेर सत्यलोक सम्म जान्छन् अर्थात् तिनीहरूलाई ती लोकहरूको प्राप्ति हुन्छ र क्रम-क्रम ले मुक्ति पनि पाउँदछन्। रजोवृत्तिमा स्थित मनुष्य काम्य कर्महरूमा निरत रहन्छन् किनकी यिनीहरूबाट स्वर्गादि फल मिल्दछ। यी काम्यकर्महरूलाई गरेर र तिनीहरूको फल स्वर्गादिलाई भोगेर फेरि धूममार्गको अवलम्वन गरेर बीचको पृथ्वीलोकमा नै आउँदछन् र फेरि स्वर्गादिको लागि कर्म गर्दछन् र यस प्रकार जिउने र मर्ने गरिरहन्छन्। सत्त्व र रज भन्दा नीच, तमोगुण वृत्तिमा स्थित मनुष्य अर्थात् जो मोह, आलस्य, निद्रा, प्रमाद आदिमा लिप्त रहन्छन् ती तलको लोकमा जान्छन्, र तमको तारतम्य अनुसार तामिस्त्र, अन्धतामिस्त्र आदि नरकहरूलाई प्राप्त गर्दछन् र त्यहाँ कर्महरूका अनुसार दु:ख भोगेर सुँगुर, कुकुर आदिको योनिमा पैदा हुन्छन्॥१८॥

-★-★-★-

**नान्यं गुणेभ्य: कर्तारं यदा द्रष्टानुपश्यति।**
**गुणेभ्यश्च परं वेत्ति मद्भावं सोऽधिगच्छति॥**

**जब विवेकी(विचार-कुशल) मनुष्य तीनै गुणहरूका सिवाय अन्य कसैलाई कर्ता देख्दैन र आफुलाई गुणहरू भन्दा पर अनुभव गर्दछ, तब त्यो मेरो सत्स्वरूपलाई प्राप्त हुन्छ॥१९॥**

एवमेतावता "कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मस्वि"ति पूर्वाध्यायोदितस्य क्षेत्रज्ञबन्ध(न)हेतोर्गुणत्रयस्य लक्षणस्वभावबन्धनप्रकारा उक्ता:। इदानीमुक्तज्ञानस्य "इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागता" इत्युक्तस्वधाधर्म्यलक्षणपरमफलस्य प्राप्तिप्रकारमाह-नान्यमिति। अयं भाव:, प्रथमं सात्त्विकाहारादिसेवया ज्ञानावरणहेतुरजस्त-

यस प्रकार 'कारणं........जन्मसु' ले पूर्व अध्यायमा भनेको क्षेत्रज्ञ(जीव)को बन्धनको हेतु जो तीन गुणहरू छन्, तिनीहरूका लक्षण, स्वभाव र बाँध्ने तरीका पनि भन्नुभयो। अब 'इदं...... साधर्म्यमागता' ले जुन यस ज्ञानको परमफल साधनधर्मको प्राप्ति भनियो त्यो प्राप्ति जसरी हुन्छ त्यसैलाई यहाँ भन्नुहुन्छ।
श्लोकको भाव यो हो- पहिला सात्त्विक आहारादिको सेवनले ज्ञानलाई ढाक्ने कारण जो रजोगुण र तमोगुण छ ती दबिन्छन् र सतोगुणको वृद्धि हुन्छ। तब सत्त्वनिष्ठ पुरुष यो देख्दछ कि

मोवृत्त्यभिभवेनोद्रिक्तसत्त्वनिष्ठो दृष्टा यदा गुणेभ्योऽन्यं कर्त्तारं नानुपश्यति। किन्तु गुणा एवानादिकर्मानुबन्धिनं जीवं स्वस्वकार्येषु प्रवर्त्तका इति वेत्ति, गुणेभ्यश्च परं विलक्षण-मात्मानं च वेत्ति। बद्धावस्थायां गुणाधीनकर्तृत्वात्। गुणाश्च नात्मस्वरूपानुबन्धिनः, किन्तु यावत्कर्मभाविनः सत्त्व-वृद्ध्याऽमलान्तःकरणे सति आत्मयाथात्म्यज्ञानोपलब्ध्यो-पशमादिना सत्त्वस्यापि निवृत्त्या गुणकर्मनाशात् केव-लात्मऽवतिष्ठते। अतो "गुणेभ्यश्च परं वेत्ती"त्युक्तम्। तदा स द्रष्टा मद्भावमधिगच्छति, मम यो भावो जन्मजरामरणा-दिविकाररहित्येन नित्यानन्दानुभवरूपस्तं प्राप्नोति ॥१९॥

गुणहरूका अतिरिक्त अरु कोही कर्त्ता छैन। गुणहरू नै अनादि कर्महरूका संगी जीवलाई आफ्नो कार्यमा लगाउँदछन्। त्यो पुरुष जान्दछ कि आत्मा यी गुणहरूभन्दा परम विलक्षण छ किनकी बद्धावस्थामा आत्माको कर्त्तापन गुणहरूका अधीन छ। प्राकृतगुण आत्मस्वरूपमा सदा बस्ने होईनन् किन्तु जब सम्म कर्म छन् तब सम्म रहन्छन्। सत्त्वको वृद्धिले अन्तःकरण निर्मल भएपछि आत्माको यथार्थ ज्ञानको प्राप्तिले उपशमादिको द्वारा सतोगुणको पनि निवृत्ति हुन्छ र त्यस अवस्थामा सबै गुणकर्महरूको निवृत्ति भएकोले केवल शुद्ध आत्मा नै रहन्छं यसैले भनिएको छ कि त्यो पुरुष आत्मालाई गुणहरूभन्दा परमविलक्षण जान्दछ। त्यस अवस्थालाई प्राप्त गरेपछि त्यो द्रष्टा अर्थात् आत्माको यथार्थरूपलाई जान्नेवाला पुरुष मेरो भावलाई प्राप्त गर्दछ अर्थात् जन्म, जरा, मृत्यु आदि विकारहरूले रहित जो नित्यानन्द अनुभवरूप छ त्यसलाई पाउँदछ॥१९॥

-★-★-★-

## गुणानेतानतीत्य त्रीन्देही देहसमुद्भवान्।
## जन्ममृत्युजरादुःखैर्विमुक्तोऽमृतमश्नुते ॥

**देहधारी विवेकी मनुष्य देहलाई उत्पन्न गर्ने यी तीनै गुणहरूलाई अतिक्रमण गरेर जन्म, मृत्यु र वृद्धावस्था रूप दुःखहरूबाट रहित भएर अमरताको अनुभव गर्दछ॥२०॥**

तत्र प्रकारमाह-गुणानेतानिति। देही देहे वर्त्तमानोऽपि एतान् यथोक्तान्सत्त्वादीन् गुणान्देह समुद्भवान्देहात्मना परिणतप्र-कृतिसमुद्भवान् देहोत्पत्तिबीजभूतान्वा अतीत्य तद्विलक्ष-णात्मज्ञानात् तद्वृत्तिभिः स्वयमनभिभूय तत्कार्यभूत-जन्ममृत्युजरादुःखैर्विमुक्तो विशेषेण निःशेषतया मुक्तोऽमृ-तमश्नुते मुक्तस्वरूपं प्राप्नोति। एवं मद्भावमधिगच्छति ॥२०॥

भगवद्भावको प्राप्तिको प्रकारलाई भन्नुहुन्छ। शरीरमा स्थित जीव पनि यी भनिएका तीनै सत्, रज, तम गुणहरूलाई, जो देहरूप प्रकृतिले उत्पन्न छ अथवा देहको उत्पत्तिको कारण हो छोडेर अर्थात् उनीहरूभन्दा विलक्षण आत्मस्वरूपको ज्ञान भएको कारण उनीहरूका वृत्तिहरूले अभिभूत न भएर, उनीहरूका कार्यभूत जन्म, मृत्यु, जरा आदि दुःखहरूबाट विशेषरूपले मुक्त हुन्छ र अमृत अर्थात् मुक्तिलाई प्राप्त गर्दछ॥२०॥

-★-★-★-

## अर्जुन उवाच
## कैर्लिङ्गैस्त्रीन्गुणानेतानतीतो भवति प्रभो।
## किमाचारः कथं चैतांस्त्रीन्गुणानतिवर्तते॥

**अर्जुनले भने- हे प्रभो! यी तीनै गुणहरूबाट अतीत भएको मनुष्य कुन लक्षणहरूले युक्त हुन्छ? त्यसको आचरण कस्ता हुन्छन्? र यी तीनै गुणहरूको अतिक्रमण कसरी गर्न सकिन्छ? ॥२१॥**

गुणानेतानतीत्य देही अमृत(त्व) मश्नुते इति श्रुत्वा गुणातीतस्य लक्षणमाचारं गुणात्ययोपायं च जिज्ञासुरर्जुन उवाच-कैर्लिङ्गैरिति। एतांस्त्रीन्गुणान्योऽतीतः स कैर्लिङ्गैर्ल-क्षणैर्विशिष्टो भवति, यैर्गुणातीत इति ज्ञायते तानि लिङ्गानि

गुणहरूबाट मुक्त भएको जीव अमरता प्राप्त गर्दछ यस्तो सुनेर अर्जुन गुणातीतहरूका लक्षण र आचार र गुणातीत हुने उपायलाई जान्ने इच्छाले भन्दछन्। यी तीनै सत, रज, तम गुणहरूलाई जो पार गर्दछन् त्यो कस्ता चिन्हले युक्त हुन्छ? अर्थात् जुन चिन्हहरू द्वारा यस्तो मनुष्य चिनिन्छ त्यसलाई हजुर भन्नुहोस। हे प्रभो,

वदेत्यर्थः। हे प्रभो! तत्सन्देहनिवारणसमर्थ! किमाचारः क आचारो यस्य स कीदृशाचार इत्यर्थः। कथं केन प्रकारेण एतांस्त्रीन्गुणानतिवर्त्तते। गुणातिक्रमोपायःक इति मे ब्रूहीत्यर्थः॥२१॥

अर्थात् मेरो सन्देहलाई हटाउनमा समर्थ! त्यस पुरुषको आचरण कस्तो हुन्छ र कसरी यी गुणहरूबाट त्यसलाई छुटकारा मिल्दछ? अर्थात् यी गुणहरूका अतिक्रमण गर्ने उपायहरूलाई हजुर भन्नुहोस॥२१॥

-★-★-★-

## श्रीभगवानुवाच
## प्रकाशं च प्रवृत्तिं च मोहमेव च पाण्डव।
## न द्वेष्टि सम्प्रवृत्तानि न निवृत्तानि काङ्क्षति॥

**भगवान्ले भन्नुभयो- हे पाण्डव! प्रकाश र प्रवृत्ति तथा मोह- यी सबै बलियो भएर प्रवृत्त भएपनि गुणातीत मनुष्य यीनिहरू सँग देष गर्दैन र यी सबै निवृत्त भए भने पनि यिनीहरूको इच्छा गर्दैन॥२२॥**

एवमर्जुनप्रश्नानुसारेण गुणतीतस्य लक्षणादिप्रतिवचनानि श्रीभगवानुवाच-पञ्चभिः श्लोकैः। तत्र तावत्कैर्लिङ्गैर्गुणातीतो भवतीत्यस्योत्तरम्-प्रकाशं चेति। प्रकाशं च सत्त्वकार्यं, प्रवृत्ति च रजःकार्यं, मोहमेव च तमःकार्यम्, उपलक्षणमेतत्सर्वाण्यपि गुणकार्याणि यथायथं सम्प्रवृत्तनि संस्कारानुगुणं प्राप्तानि प्रतिकूलबुद्ध्या न द्वेष्टि। तथा तदपायहेतुवशान्निवृत्तानि न काङ्क्षति न स्पृहयति। एवं द्वेषस्पृहाशून्यो यः गुणातीतः स उच्यते इति चतुर्थश्लोकगतेनान्वयः॥२२॥

अर्जुनको प्रश्नका अनुसार गुणातीतको लक्षण आदिलाई भगवान् पाँच श्लोकहरूमा भन्नुहुन्छ। गुणातीत कुन-कुन लक्षण चिनिन्छ त्यस प्रश्नको उत्तर यहाँ दिनुहुन्छ।

प्रकाश सतोगुणको कार्य हो, प्रवृत्ति रजोगुणको कार्य हो र मोह तमोगुणको। यी सबै चिन्ह यी गुणहरूका कार्यको उपलक्षण मात्र हो। संस्कारको अनुरूप प्राप्त भएका गुणहरूबाट गुणातीत पुरुष द्वेष गर्दैन र न कुनै कारण त्यसको नाश भएपछि त्यसको अभिलाषा नै गर्दछ। अर्थात् गुणहरू सँग न उसलाई स्पृहा छ न द्वेष छ। यस्तो पुरुषलाई गुणातीत भनिन्छ॥२२॥

-★-★-★-

## उदासीनवदासीनो गुणैर्यो न विचाल्यते।
## गुणा वर्तन्त इत्येव योऽवतिष्ठति नेङ्गते॥

**जो उदासीन जस्तै स्थित छ र जो गुणहरूका द्वारा विचलित गर्न सकिदैन तथा गुण नै गुणमा व्यवहृत भईरहेको छ यस भावले जो आफ्नो स्वरूपमा नै स्थित रहन्छ र स्वयं पनि कुनै चेष्टा गर्दैन॥२३॥**

गुणातीतस्य लक्षणमुक्त्वा किमाचार इत्यस्योत्तरमाह-उदासीनवदिति त्रिभिः। यथोदासीनो न कस्य चित् पक्षं श्रुयते तथा गुणातिक्रमे प्रवृत्तो यो रागद्वेषशून्यतया कुत्रापि न सज्जते स्वरूपानुसन्धान एवासीनः स्थितः गुणैः सुखदुःखाद्याकारेण परिणतैः सुखदुःखबुद्ध्या रागद्वेषाभ्यां यो न विचाल्यते स्वरूपावस्थानान्न प्रच्याव्यते किन्तु गुणाः स्वेषु कार्येषु प्रकाशादिषु वर्त्तन्ते इत्येवं मत्वा नेमे मम स्वरूपानुबन्धिन इति निश्चित्यावतिष्ठति स्वरूपेऽवतिष्ठते, अत एव नेङ्गते गुणानुरूपं न चेष्टते॥२३॥

गुणतीतको लक्षण भनेर अब त्यसको आचार लाई तीन श्लोकहरूमा भन्नुहुन्छ। जस्तो उदासीन पुरुष कसैको पक्ष ग्रहण गर्दैन त्यसै प्रकार गुणातीत पुरुष रागद्वेषले शून्य भएको कारण कहीं पनि आसक्त हुँदैन। आफ्नो आत्मस्वरूपको अनुसन्धानमा स्थित त्यो पुरुष गुणहरूबाट अर्थात् तिनीहरूका सुख दुःख आदि रूपहरूले विचलित हुँदैन अर्थात् आफ्नो स्वरूपावस्था द्वारा विचलित हुँदैन, किनकी सुख दुःखमा त्यसलाई राग द्वेष हुँदैन। बरु यो संझेर कि तीनै गुणहरू आफ्ना प्रकाशादि कार्यहरूमा प्रवृत्त हुन्छन् त्यो उनीहरूलाई आफ्नो संगी मान्दैन र यस्तो निश्चय गरेर आफ्नो आत्मस्वरूपमा नै स्थित रहन्छ। त्यो ती गुणहरूका अनुरूप चेष्टा गर्दैन॥२३॥

-★-★-★-

**समदुःखसुखः स्वस्थः समलोष्टाश्मकाञ्चनः।**
**तुल्यप्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः॥**

**जो धीर मनुष्य दुःख-सुखमा सम तथा आफ्नो स्वरूपमा स्थित रहन्छ; जो माटोको डल्लो, ढुंगा र सुनमा सम रहन्छ; जो प्रिय-अप्रियमा सम रहन्छ, जो आफ्नो निन्दा-स्तुतिमा सम रहन्छ॥२४॥**

किञ्च-समदुःखसुख इति। समदुःखसुखः दुःखसुखयोः समचित्तः, यतः स्वस्थः स्वस्मिन् स्वरूपे स्थितः। अत एव समलोष्टाश्मकाञ्चनः समानि लोष्टाश्मकाञ्चनानि यस्य स तथा तत एव तुल्यप्रियाप्रियः तुल्यौ प्रियाप्रियौ विषयो यस्य स तथा धीरः गुणकार्यप्राप्तावपि विवेकादप्रचलितः। अत एव तुल्यनिन्दातमसंस्तुतिः तुल्या निन्दा च आत्म-संस्तुतिश्च यस्य सः॥२४॥

त्यो पुरुष दुःख सुखमा एक समान चित्तवाला हुन्छ किनकी त्यो आफ्नो स्वरूपमा स्थित छ। यसैले मृतपिंड, ढुंगा र स्वर्ण सबै उसका लागि समान हुन् र प्रिय र अप्रिय वस्तु पनि बराबर नै छन्। त्यो पुरुष धीर हुन्छ अर्थात् गुणहरूका कार्य उपस्थित भएपछि विवेकयुक्त भएर रहन्छ, डिग्दैन। यसैले त्यसलाई आफ्नो निन्दा स्तुति बराबर नै छ॥२४॥

-★-★-★-

**मानापमानयोस्तुल्यस्तुल्यो मित्रारिपक्षयोः।**
**सर्वारम्भपरित्यागी गुणातीतः स उच्यते॥**

**जो मान-अपमानमा सम रहन्छ, जो मित्र-शत्रुको पक्षमा सम रहन्छ र जो सम्पूर्ण कर्महरूको आरम्भको त्यागी छ, त्यो मनुष्यलाई गुणातीत भनिन्छ॥२५॥**

किञ्च-मानापमानयोरिति। स्तुतिनिन्दाप्रयुक्तयोर्मानापमान-योस्तत्कल्पितयोर्मित्रारिपक्षयोरात्मनस्तत्स्पर्शाभावात्स-मचित्तः, सर्वनैहिकामुष्मिकार्थानारम्भन् क्रियाकला-पांस्त्यक्तुं शीलमस्येति सर्वारम्भपरित्यागी य एवम्भूतः स गुणातीत उच्यते॥२५॥

स्तुति र निन्दाको फल मान र अपमान र मान-अपमानको द्वारा शत्रुको पक्ष यी सबैमा जो यो जानेर कि आत्मालाई यी छुन सक्दैनन्, सम भाव राख्दछ र यस लोक वा परलोकको फलहरूका लागि जो कहिल्यै पनि कामको आरम्भ गर्दैन त्यही गुणातीत भनिन्छ॥२५॥

-★-★-★-

**मां च योऽव्यभिचारेण भक्तियोगेन सेवते।**
**स गुणान्समतीत्यैतान्ब्रह्मभूयाय कल्पते॥**

**जो मनुष्य अव्यभिचारी भक्तियोगकोद्वारा मेरो सेवन गर्दछ भने त्यो यी सबै गुणहरूको अतिक्रमण गरेर ब्रह्मप्राप्तिको पात्र हुन्छ॥२६॥**

तदेवं गुणातीताचारमुक्त्वेदानीं कथं चैतान्गुणानतिवर्त्तते इति प्रश्नस्योत्तरं गुणातिक्रमणासाधारणहेतुमाह-मां चेति। न केवलं गुणात्मविवेकमात्रेण गुणातिक्रमणं सम्भवति अनादिकालप्रवृत्तस्य दृढबन्धनस्य समर्थनिवर्त्तकमन्तरेण सर्वथा निवृत्त्यसम्भवात्-किन्तु मां चेति।चकारोऽवधा-रणार्थः। मामेव सर्वज्ञं निरस्तसमस्तदोषगन्धं परमकारुणिकं सर्वेश्वरमाश्रिताभयप्रदं भगवन्तं वासुदेवमव्य-

यस प्रकार गुणातीतहरूको आचारको विषयमा भनेर अब गुणहरूलाई पार गर्ने असाधारण कारणलाई बताउनुहुन्छ। केवल गुण र आत्माको विवेकले नै गुणहरूलाई पार गर्न वा नाघ्न सम्भव छैन किनकी गुणहरूको बन्धन अनादिकाल देखि नै प्रवृत्त छ र यसैले धेरै दृढ़ छ। जब सम्म ठूलो, समर्थ हटाउने नहोस तबसम्म यिनीहरूबाट निवृत्ति बिल्कुल असम्भव छ। 'च' शब्दले निश्चयताको बोध हुन्छ। म सर्वज्ञ, सर्वपापहरूको गन्धले पनि रहित परमकारुणिक, सर्वेश्वर, आफ्नो शरणमा आएकालाई

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

भिचारेणैकान्त्येन भक्तियोगेन यः सेवते स एतान् दुरतिक्रमान्सत्त्वादीन् गुणान्समतीत्य सम्यगतिक्रम्य ब्रह्मभूयाय ब्रह्मणो भावो ब्रह्मभूयमपहतपात्मत्त्वादि-गुणाष्टकत्वं सार्वज्ञं च तेन सर्वदाऽवस्थानं तस्मे कल्पते योग्यो भवति। अव्यभिचारेणेत्यनेन मद्भक्तस्य मदतिरदेव-भजनं व्यभिचारस्तेन भक्तियोगेन तु यः सेवते स पापिष्ठतया न गुणेभ्यो विमुच्यते संसारी भवतीति सूचितम्। तथा च श्रुतिः "यो वै स्वां देवतामतियजति परस्वायै देवतायै च्यवते न परां प्राप्नोति पापीयान्भवती"ति। ब्रह्माण्ड कौर्मयोः "ये तु सामान्यभावेन मन्यन्ते पुरुषोत्तमम्। ते वै पाखण्डिनो ज्ञेया नरकार्हा नराधमाः। नारद पञ्चरात्रे च "यो मोहाद्विष्णु-मन्येन हीनदेवेन दुर्मतिः। साधारणं सकृद्ब्रूते सोऽन्त्यजो नान्त्यजोऽन्त्यजः॥२६॥

अभय दिनेवाला भगवान् वासुदेवको जो ऐकान्तिकभक्ति ले सेवा जो गर्दछ त्यो यी दुरितक्रमणीय सत्त्वादि गुणहरूलाई राम्रो सँग पार गरेर ब्रह्मभावको योग्य हुन्छ अर्थात् ब्रह्मको अपहत्पाप्मा, जरा रहित आदि आठ गुणहरू र सर्वज्ञता यी उसमा सदाका लागि स्थित हुन्छन्। अव्यभिचारिणी एकान्तिक भक्तिको मतलब अन्य देवताको भक्तिले रहित। जो मनुष्य व्यभिचारिणी भक्ति (एकान्तिक होईन)ले मेरो सेवा गर्दछ त्यो पापी गुणहरूबाट छुट्कारा पाउँदैन अर्थात् संसारी हुन्छ। श्रुतिमा भनेको छ- 'यो वै......पापीयान्भवति' (जो आफ्नो देवतालाई छोडेर अर्काको देवताको सेवा गर्दछ त्यो कल्याणलाई प्राप्त गर्दैन। त्यो संसारी हुन्छ।) ब्रह्माण्ड र कूर्मपुराणको यो वचन छ-'ये तु.....नराधमाः।' (जो भगवान्लाई सामान्यभावले जान्दछन् उनीहरूलाई तिमी पाखण्डी संझ, ती नरको योगय र नराधम हुन्।) नारद पञ्चरात्रमा लेखिएको छ- 'यो......अन्त्यजः' (जो मूर्ख मोहले विष्णुलाई एकपल्ट पनि तल्लोदर्जाका देउताहरूका समान भन्दछ त्यही अन्त्यज हो।)॥२६॥

-★-★-★-

**ब्रह्मणो हि प्रतिष्ठाहममृतस्याव्ययस्य च।**
**शाश्वतस्य च धर्मस्य सुखस्यैकान्तिकस्य च॥**

**किनकी ब्रह्मको र अविनाशी अमृतको तथा शाश्वत धर्मको र ऐकान्तिक सुखको आश्रय म नै हुँ॥२७॥**

वासुदेवानन्यभक्तिमेव ब्रह्मभावयोग्तायां हेतुमाह-हि यस्मात् ब्रह्मणो ब्रह्मत्वस्यापहत पाप्मत्त्वसार्वज्ञादिगुणस्य प्रतिष्ठा अव्यभिचाय्राश्रयः, तथाऽव्यस्यामृतस्य मोक्षस्य च तथा शाश्वतस्य च धर्मस्य मोक्षसाधनस्य शमदमादेः तथै-कान्तिकस्य सुखस्य परमानन्दस्य चाश्रयोऽहं यस्मादेवंवि-धोऽहं तस्मान्ममैकान्तभक्तस्यैव मद्भजनेन गुणात्ययस्ततो ब्रह्मभावप्राप्तिरिति भावः॥२७॥

सत्त्वादिगुणवृत्तिस्थो जीवो संसृतिमृच्छति।
हरेरनन्यया भक्त्या मुच्यते गुणसंसृतेः॥
कृपया भक्तहितकृदेतदर्थं स्वयं प्रभुः।
गुणलक्षणकार्यादि अध्यायेऽस्मिन्समादिशत्॥

वासुदेवको अनन्य भक्त नै ब्रह्मभावको योग्यता प्राप्त गर्दछ, यसको कारण यहाँ बताउनुहुन्छ।
कारण कि म नै ब्रह्मत्व अर्थात् अपहत्पाप्मा, सर्वज्ञता आदि प्रजापति विद्यामा कथित अष्ट गुणहरूका आश्रय हुँ र अव्यय मोक्षको, मोक्षको साधन, शम दम आदि सनातन धर्मको र एकान्तिक सुख अर्थात् परमानन्दको पनि प्रतिष्ठा ममा नै छ। भाव यो हो कि म यस्तो हुँ यसैले मेरो एकान्त भक्त नै मेरो भजनको द्वारा गुणहरूलाई पार गरेर ब्रह्मभावलाई प्राप्त गर्दछ॥२७॥
सत्त्वादि गुणहरूका वृत्तिमा स्थित जीव संसारको इच्छा गर्दछ। भगवान्को अनन्य भक्तिले यस गुण संसृतिबाट मुक्ति मिल्दछ। यसैले भक्तहरूका हिताथ्र भगवान्ले कृपा गरेर यस अध्यायमा गुणहरूका लक्षण, कार्य आदिको उपदेश गर्नुभयो॥

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां गुणत्रयविभागयोगो नाम चतुर्दशोऽध्यायः॥१४॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ पञ्चदशोऽध्यायः

## श्रीभगवानुवाच

**ऊर्ध्वमूलमधःशाखमश्वत्थं प्राहुरव्ययम्।**
**छन्दांसि यस्य पर्णानि यस्तं वेद स वेदवित्॥**

**श्रीभगवान्ले भन्नुभयो- मास्तिर जरा(मूल) तथा तलतिर हाँगा भएको जुन संसाररूप पीपलको वृक्षलाई प्रवाहरूपले अव्यय भन्दछन् र वेद जसका पत्ता हुन्, त्यस संसाररूपी वृक्षलाई जो जान्दछ त्यो सम्पूर्ण वेदहरूका जानकार हो॥१॥**

पूर्वाध्याये पुरुषस्य मायागुणमयसंसारबन्धं प्रपञ्च्यान्ते "मां च योऽव्यभिचारेण भक्तियोगेन सेवते। स गुणान्समतीत्यैतान् ब्रह्मभूयाय कल्पते" इत्यनेन भगवदनन्यभक्तियोगेन गुणातिक्रमपूर्वकं ब्रह्मभावयोग्यतोक्ता। इदानीं भजनीयं यद्भगवत्स्वरूपं तस्यानन्तकल्याणगुणरूपभावयोगात्स्वशक्तिभूताभ्यां क्षराक्षरपदार्थाभ्यामति श्रैष्ठ्यात्पुरुषोत्तमतां वक्तुमस्याध्यायस्यारम्भः। तत्र तावद्ब्रह्मभावयोग्यस्याक्षरपुरुषस्य स्वांशत्वं निर्देष्टुं तस्यानाद्यचेतनप्रकृतिमयबन्धनिवृत्तिहेतुर्भगवद्भक्तिर्ज्ञानं वाऽविरक्तस्य न सम्भवतीत्यसङ्गशस्त्रेण बन्धच्छेदनाय वैराग्यार्थं छेद्यं बन्धभूतं प्रकृतिमयसंसारमश्वत्थवृक्षाकारेण निरूपयन् श्रीभगवानुवाच-ऊद्ध्र्वमूलमिति सार्द्धश्लोकाभ्याम्। ऊद्ध्र्वं भगवद्धामगन्तुर्भगवद्भक्तस्य सर्वलोकातिक्रमणे सावरणब्रह्माण्डोपरिवर्त्तमानं त्रिगुणात्मकप्रकृत्यावरणमेव मूलमादिर्यस्य संसारवृक्षस्येत्यूद्ध्र्वमूलम्। अधःशाखं ततोऽर्वाचीनाः सत्यलोकप्रभृतिचतुर्दशलोकाः शाखा इव फलाश्रया शाखा यस्येत्यधः शाखमश्वत्थं नश्वरं सम्यग्ज्ञानात्प्राक्प्रवाहरूपेणाव्ययं नित्यं प्राहुः श्रुतयः "ऊद्ध्र्वमूलोऽर्वाक्शाख एषोऽश्वत्थ सनातन" इत्याद्याः। छन्दांसि ऋग्यजुःसामलक्षणानि पर्णानीव पर्णानि यस्य यथा पत्रैर्वृक्षो वर्द्धते जीवानां समाश्रयणीयश्च भवति, तथा "वायव्यं श्वेतमालभेत भूतिकामः स्वर्गकामो यजेते"त्येवमादिवेदप्रतिपादितैः काम्यकर्मभिरयं संसारवृक्षो वर्द्धते, छायास्थानीयैः कर्मफलैः सकामानां जीवानां समाश्रयणीयश्चेत्यतः छन्दांस्येव पर्णानीत्युक्तम्। यस्तमेवं प्रतिपादितं

पूर्वको अध्यायमा पहिले यो भनियो कि प्रकृतिको गुणमय संसार नै पुरुषको बन्धन हो। फेरि 'मां च....कल्पते' ले यो भनियो कि भगवान्को अनन्यभक्तिले नै गुणहरूलाई नाघेर ब्रह्मभावको योग्यता हुन्छ। अब यस अध्यायमा भजनीय भगवान् हुनुहुन्छ उहाँको स्वरूप बताउनु हुनेछ र यो भन्नुहुने छ कि अनन्त कल्याण गुणवाला हुनाले भगवान्को शक्तिभूत क्षर (प्रकृति) र अक्षर (जीव) पदार्थहरू भन्दा श्रेष्ठ छन्। यसैले वहाँ पुरुषोत्तम होईबक्सन्छ। ब्रह्मभाव प्राप्त गर्नयोग्य अक्षर पुरुषलाई आफ्नो अंश भन्नका लागि र यो निरूपण गर्नका लागि कि त्यसको अचेतन प्रकृति बन्धनको निवृत्ति भगवत् भक्ति वा ज्ञानले हुन्छ। र अविरक्त पुरुषलाई त्यो निवृत्ति संभव छैन, असंगशस्त्रले नै जुन काटिन सक्दछ यस्तो काट्न योग्य बन्धभूत प्रकृतिमय संसारलाई अश्वत्थ वृक्षको रूपक द्वारा ड़ेढ़ श्लोक ले निरूपण गर्दै भगवान् ले भन्नुभयो।

भगवत् धाममा जाने भगवद्भक्तहरूको सर्वलोक अतिक्रमणमा सावरण ब्रह्माण्डको माथि वर्त्तमान त्रिगुणात्मिका प्रकृति को आवरण नै यस अश्वत्थरूप संसार वृक्षको मूल हो। अर्थात् सावरण ब्रह्माण्डको माथ जुन प्रकृतिको आवरण छ, जसको माथि भगवद्धाम नै छ, त्यही प्रकृतिको आवरण संसाररूपी अश्वत्थ वृक्षको जड हो। त्यसको तल सत्यलोक प्रभृति जो चौध लोकहरू छन् तीनै यस वृक्षको फल आश्रयरूपी शाखाहरू हुन्। यो अश्वत्थ वृक्ष सम्यक् ज्ञानको द्वारा नष्ट हुनु भन्दा पहिले सम्म प्रवाहरूप ले अव्यय अर्थात् नित्य भनिएको छ। जस्तो कि श्रुति को वचन छ-'ऊर्ध्व........सनातनः'(यो अश्वत्थ जसको मास्तिर जरा छ र शाखा तल छ सनातन हो)। ऋक्, साम, यजु आदि जो छन्द छन् ती नै यस वृक्षका पत्ता हुन्। जस्तो पत्ताले वृक्ष बढ्दछ र जीवहरूलाई छाँयारूपी शरण पनि मिल्छ त्यसैको जस्तो वेदहरूबाट प्रतिपादित काम्यकर्महरूका द्वारा यो संसारवृक्ष बढ्दछ र छाँयाको समान कर्मफललाई सकामी जीवहरू चाहन्छन्, यसैले छन्दहरूलाई पत्ताको रूपक दिईयो। श्रुतिमा भनेको छ-'वायव्यं........यजेत्'(विभूतिको कामनावाला पुरुष वायु देवतालाई श्वेत पशु अर्पण गर्नु। स्वर्गको कामनावाला यज्ञ

संसारवृक्षं वेद स वेदवित्। त्रिगुणप्रकृतिमूलः संसारवृक्षः, शाखास्थानीयाः कर्मफलभोगभूमयो ब्रह्मलोकादयश्च-तुर्दशलोकाः तद्वृद्धिहेतवः पर्णस्थानीया वेदास्तत्फल-भोक्तारो ब्रह्मादयो जीवसमूहा इति संसारवृक्षः स्वरूपेणा-नित्यः प्रवाहरूपेण नित्यश्च भगवद्भक्तिज्ञानं च तच्छेदनो-पाय इत्येतावान्वेदार्थस्तं यो वेद स सर्ववेदार्थविदित्यर्थः॥१॥

गर्नु।) यस्तो यस संसारवृक्ष लाई जो जान्दछ त्यही वेदलाई जान्दछ। त्रिगुण प्रकृति संसार वृक्षको मूल हो, कर्मफलको भोगभूमि ब्रह्मलोक आदि चौध भुवन त्यसको शाखा हो, वेदरूपी पत्ता त्यस वृक्षको वृद्धिका कारण हुन् र ब्रह्मा आदि जीवसमूह त्यस शाखाको फलका भोक्ता हुन्। यस संसाररूपी वृक्ष स्वरूपले नै अनित्य छ तर प्रवाहरूपले नित्य छ। भगवान्को भक्ति र त्यसको ज्ञान यस वृक्षलाई काट्ने उपाय हुन्। यति नै वेदको अर्थ हो। यसलाई जो जान्दछ त्यही वेदको जानकार हो॥१॥

-★-★-★-

**अधश्चोर्ध्वं प्रसृतास्तस्य शाखा गुणप्रवृद्धा विषयप्रवालाः।**
**अधश्च मूलान्यनुसन्ततानि कर्मानुबन्धीनि मनुष्यलोके॥**

**त्यस संसार वृक्षका गुणहरू (सत्त्व, रज, तम) को द्वारा बढेका विषयरूप कोपिलाभएको शाखाहरू तल, बीचमा र माथि सबै तिर फैलिएका छन्। मनुष्यलोकमा कर्मको अनुसार बाँध्ने मूल पनि तल र माथि सबैलोकहरूमा व्याप्त भईरहेका छन्॥२॥**

एवं मूलशाखाऽवयवनिरूपणेन संसारवृक्षं निरूप्य पुनर-वान्तरशाखानिर्देशेन निरूपयति-अधश्चेति। तस्योद्ध्वर्म-लस्याधःशाखस्य संसारवृक्षस्याऽधश्चोद्ध्वं च शाखाः प्रसृता विस्तारं प्राप्ता सन्ति। तत्र पापकर्मभिः पश्वादियो-निमारभ्य नरकान्तं प्राप्ता ये जीवास्तेऽधःशाखास्थानीया, ये सुकृतिनस्ते ऊद्ध्वं प्रसृताः प्रकर्षेण देवगन्धर्वादियोनि-प्रभृतिसत्यलोकान्तं प्राप्तास्ते उपरि शाखास्थानीयाः। ताश्च शाखा गुणप्रवृद्धाः गुणैः सत्त्वादिभिर्जलसेचनैरिव प्रवृद्धाः प्रकर्षेण वृद्धिं प्राप्ताः। शब्दादयो विषया एव प्रवाला इवा प्रवाला यासां ताः। उभयत्रशाखाप्रस्तारे हेतुमाह-अधश्च मलान्यनुसन्ततानीति। च शब्दादूद्ध्वं च मूलानीति। ऊद्ध्वं प्रकृत्यादीनि अधो देवादिभ्योऽर्वाक्तत्तद्विषयभोग-वासनालक्षणानि धर्माधर्मप्रवृत्तिहेतुभूतान्यनुसन्ततानि विरूढानि। कथं भूतानि-कर्मानुबन्धीनि। कर्म शुभाशुभ-मनुबद्धं पश्चाज्जनयितुं शीलं येषां तानि भवन्ति। क्व भवन्तीतयत आह-मनुष्य लोके मनुष्यश्चासौ लोकश्च तस्मिन्। अनादिभोगवासनाया मनुष्ययोनिषु तत्प्राप्तिसाधनैः कर्मभिरूद्ध्वाधोलोकेषु भोगं भुञ्जतां जीवानां कर्मक्षये तत्तद्भोगवासनाभिर्मनुष्यलोकं प्राप्तानां पुनस्तत्तद्भोगसा-धनेषु कर्मसु प्रवृत्तिर्भवति। तत्रैव कर्माधिकारात्। मनुष्यत्वे कृतानां कर्मणामेव सर्वलोकप्राप्तिहेतुतवादित्यर्थः॥२॥

यस प्रकार मूल शाखा र त्यसको अवयव निरूपण द्वारा संसारवृक्षको निरूपण गरियो। अब त्यसको मध्यको शाखाहरूलाई बताउनु हुन्छ। यस माथी मूल र तल शाखावाला संसार वृक्षमा तल र माथि शाखा फैलिएको छ। पापकर्महरूका कारण पशुआदि योनिहरू देखि लिएर नरक पर्यनत पुगेका जीव त्यसको तलको शाखा हुन र जो सुकर्म गर्नेवाला देव गन्धर्वादि योनिहरू देखि लिएर सत्यलोक पर्यन्त पुगेका जीव छन् ती नै त्यसको माथिका शाखाहरू हुन्। यी शाखाहरू सत्त्वादि गुणरूप जलले सिंचेर धेरै बढाईएको छ। शब्द, स्पर्श आदि विषय नै यस शाखाहरूको प्रवाल अर्थात् कोपिला कलश हुन्। अब तल माथीवाला दुबै शाखाहरू र देवलोक देखि तलको अधःवर्त्तिनी शाखाहरू विषय भोगवासना लक्षणवाला धर्म र अधर्ममा प्रवृत्त हुनाले खुब जमेका छन्। मतलब जस्तै अश्वत्थको शाखाहरूबाट विरोह निस्केर पृथ्वीमा पसेर ती शाखाहरूलाई दृढ़तर गरिदिन्छ त्यस्तै नै धर्म र अधर्मको प्रवृत्तिहरू द्वारा यी माथिका र तलका शाखाहरू दृढ़तर हुन्छ। र फेरि यी शाखाहरू शुभ र अशुभ कर्महरूलाई मनुष्य रूपी लोकमा पैदा गर्दछन्। भाव यो कि मनुष्य लोकमा प्राप्त भएर जीव अनादि भोग वासनाको कारण कर्महरूलाई गर्दछ। ती कर्महरूका फल भोग्नका लागि माथिको या तलको लोकहरूलाई प्राप्त गर्दछ। फेरि कर्म भोगको क्षय भएपछि भोगवासना को कारण मनुष्यलोकमा आउँदछ र पुनः भोगका साधन कर्ममा प्रवृत्त हुन्छ किनकी मनुष्यको लोकमा नै कर्म गर्ने अधिकार छ र मनुष्य शरीरमा गरिएको कर्महरूले नै सबै लोकहरूको प्राप्ति हुन्छ॥२॥

-★-★-★-

**न रूपमस्येह तथोपलभ्यते नान्तो न चादिर्न च सम्प्रतिष्ठा।**
**अश्वत्थमेनं सुविरूढमूलमसङ्गशस्त्रेण दृढेन छित्त्वा॥**

**यस संसार वृक्षको जस्तो रूप देखिनमा आउँदछ त्यस्तो यहाँ विचार गर्दा देखिंदैन किनकी यसको न त आदि छ न अन्त नै छ र स्थिति नै छ। यसैले यस दृढ़ मूलवाला संसाररूप अश्वत्थ–वृक्षलाई दृढ़ असंगतारूप शस्त्रको द्वारा काट्नु पर्दछ॥३॥**

एवम्भूतं संसारवृक्षं केचिदेव जानन्ति नतु सर्वे इत्याह–न रूपमिति। योऽयं संसारवृक्षो वर्णितः–अस्य रूपमिह संसारे स्थितैर्जीवैर्यथा वर्णितं तथा नोपलभ्यते। तथाऽस्य वृक्षस्यान्तो विनाशोऽपि गुणमयवस्तुष्वसङ्गकृत इति नोपलभ्यते। तथा गुणसङ्ग एवास्यादिरिति नोपलभ्यते। तथा प्रतिष्ठतयस्मिन्निति प्रतिष्ठा अनात्मन्यात्मबुद्धिरेवास्य प्रतिष्ठा सा च नोपलभ्यते। अथवाऽन्तोऽवसानमादिरित आरभ्य प्रवृत्त इति सम्प्रतिष्ठा सम्यक् प्रतिष्ठा मध्यावस्था सम्प्रतिष्ठत्यस्मिन्निति सम्प्रतिष्ठा निवासोऽस्येति न केन चिदुपलभ्यते। एवम्भूतोऽयं संसारवृक्षो दुरुच्छेद्योऽनर्थ–करश्चैतं श्रेयोऽर्थी निशितास्त्रेण छित्त्वा परमार्थं वस्त्वन्विच्छे–दित्याह–अश्वत्थमेनमिति सार्द्धेन। अश्वत्थमेनं यथोक्तं सुविरूढमूलं सुष्ठु विरूढानि निरोहं प्राप्तानि दृढानि मूलानि यस्य तमेनं दुरुच्छेद्यं असङ्गशस्त्रेण गुणमयविषयभो–गस्पृहानिरासेन पुत्रवित्तलोकाद्येषणानुद्भवरूपेण भग–वद्भक्तिदृढीकृतेन विवेकाभ्यासनिशितेन छित्त्वा तत्सम्बन्धं विहायेत्यर्थः॥३॥

यस्तो संसार वृक्षलाई कुनै कुनै व्यक्ति मात्र जान्दछन् सबै जना होईन–यसैलाई यहाँ भन्नुहुन्छ।

जुन संसार वृक्षको वर्णन गरियो त्यसको यथार्थ रूप जस्तो वर्णन गरिएको छ यस संसारमा रहने जीवलाई त्यो प्राप्त छैन। फेरि यस वृक्षको नाश पनि त्रिगुणमय वस्तुहरूको असंगले नै हुन्छ र त्यसको जन्म पनि गुणहरूका संगले नै हुन्छ। यो ज्ञान पनि संसारमा रहेका जीवलाई प्राप्त हुँदैन। फेरि अनात्म वस्तुहरूमा आत्म बुद्धि गर्नु नै यस वृक्षको प्रतिष्ठा हो अर्थात् यसैमा यो रहन्छ। यो ज्ञान पनि उनीहरूलाई प्राप्त छैन। प्रतिष्ठाको अर्थ आदि र अन्त बीचको अवस्था पनि हुन सक्दछ। मतलब कि संसारी जीवहरूलाई यस संसारवृक्षको आदि, मध्य र अन्तको ज्ञान हुँदैन। यस्तो यो संसार वृक्ष कठिनताले काट्न सकिन्छ। असंग रूपी शस्त्रले अर्थात् छोरो, धन आदिको इच्छा रूपी गुणमय विषयहरूका भोगको अभिलाषालाई हटाएर र भगवद्भक्तिमा दृढ़ भई विवेकको अभ्यासरूप तीक्ष्ण शस्त्रले संसार वृक्षलाई काट्नु अर्थात् विवेक द्वारा त्यो सँग सम्बन्ध छोडिदिनु॥३॥

–★–★–★–

**ततः पदं तत्परिमर्गितव्यं यस्मिन्गता न निवर्तन्ति भूयः।**
**तमेव चाद्यं पुरुषं प्रपद्ये यतः प्रवृत्तिः प्रसृता पुराणी॥**

**त्यस पछि त्यो परमपद परमात्माको खोजी गर्नुपर्दछ। जसको प्राप्ति भए पछि मनुष्य फेरि फर्केर संसारमा आउँदैन र जसबाट अनादिकाल देखि नै चलेर आईरहेको यो सृष्टि विस्तार भएको छ, त्यस आदि पुरुष परमात्माको नै म शरणमा छु॥४॥**

तदस्तदनन्तरं तत्पदं परिमार्गितव्यमन्वेषणीयं, किं तत्पदं यस्मिन्पदे गताः प्राप्ता भूयः पुनर्ननिवर्त्तन्ते संसाराय नावर्त्तन्ते। ननु "गौरनाद्यन्तवती जनित्री भूतभाविनी"ति श्रुतेरनाद्यनन्तस्या भगवच्छक्तेर्देव्या मायायाः संसारवृक्ष–स्वरूप मूलभूतायाः कथं निवृत्तिरनिवृत्तेः कथमपुनरावृत्ति–रित्याशंक्य तन्निवृत्त्यसाधारणमुपायं शृण्वित्याह–तमेवेति।

त्यस पछि त्यो पद(स्थान)को पत्ता लगाउनु पर्दछ जहाँ पुगेर फेरि संसारमा फर्के आउनु पर्दैन। जसको विषयमा श्रुतिले भनेको छ 'गौ....भाविनी' (प्रकृतिको न आदि छ न अन्त र त्यो सबै सृष्टिका माता हुन्।) त्यस आदि अन्त रहित भगवद्शक्ति रूपिणी माया सँग, जो संसार वृक्षको जड़ हो, कसरी निवृत्ति हुन सक्दछ र निवृत्ति नहुनाले संसारबाट पुनरागमन कसरी बन्द हुन सक्दछ? यसै प्रश्नको उत्तरमा प्रकृतिबाट निवृत्तिको असाधारण उपायलाई भगवान् बताउनु हुन्छ। संसारको जड़ अनादि मायाबाट निवृत्तिका

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

संसारमूलनादिमायानिवृत्तयेऽपुनरावृत्तये च तमेव चाद्यं कृत्स्नस्यादिभूतं पुरुषं शरणं प्रपद्येत। कोऽसौ पुरुषस्तं लक्षयति–यतो यस्मात्पुरुषाद्गुणमयसंसारप्रवृत्तिः पुराणी पुरातनी प्रसृता वितता, यच्छक्तिगुणप्रवाहे पतितो जीवः संसरति। तत्प्रपत्तिं विन न मुच्यते तच्चोक्तं पूर्वमेव "दैवी ह्येषा गुणमयी मम माया दुरत्यया। मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते" इति तस्माद्भगवच्छणा अपुनरावृत्तिपदं गच्छन्ति ॥४ ॥

लागि र संसारमा न आउनका लागि उनै सबै जगत्को आदि भूत परपुरुष भगवान्को शरणमा जानु पर्दछ। अब त्यस परपुरुषको लक्षण बताउनु हुन्छ। त्यस पुरुषबाट यो गुणमय संसार पुरातनमार्फत निस्किएको हो। त्यसैको शक्तिको गुणको धारामा परेर जीव संसारमा भौंतारिन्छ। यसैले त्यसको शरणमा नगईकन जीवको छुटकारा छैन। पहिले पनि भगवान् ले भन्नुभएको छ– 'दैवी...तरन्तिते' यसैले जो भगवान्को शरणमा जान्छ त्यो नै अपुनरावृत्ति (फेरि फर्केर न आउने) पदलाई पाउँदछ॥४॥

–★–★–★–

**निर्मानमोहा जितसङ्गदोषा अध्यात्मनित्या विनिवृत्तकामाः।**
**द्वन्द्वैर्विमुक्ताः सुखदुःखसञ्ज्ञै गच्छन्त्यमूढाः पदमव्ययं तत्॥**

**जो मान र मोहले रहित भैसकेका छन्, जसले आसक्तिबाट हुने दोषलाई जितिसकेका छन्, जो नित्य–निरन्तर परमात्मामा नै लागेका छन्, जो (आफ्नो दृष्टिले) सम्पूर्णकामनाहरूले रहित भईसकेका छन्, जो सुख–दुःख नामवाला द्वन्द्वहरूबाट मुक्त भईसकेका छन्, यस्ता ऊँचो स्थिति भएका मोहरहित साधक भक्त त्यस अविनाशी परमपद परमात्मालाई प्राप्त हुन्छन्॥५॥**

पुनः कथम्भतास्तत्पदं गच्छन्तीति तान्विशिनष्टि–निर्मानमोहा इति। मानः गर्वपर्यायोऽहङ्कारः, मोहोऽनात्मन्यात्माभिमानः, निगर्तौ मानमोहौ येभ्यस्ते निर्मानमोहाः। जितौ सङ्गदोषौ यैस्ते जितसङ्गदोषाः। अध्यात्मनित्याः। आत्मनि यज्ज्ञानं तदध्यात्मं तस्मिन्नित्यरताः। विनिवृत्तान्यकामाः। सुखदुःखसञ्ज्ञैः सुखदुःखकारणत्वात्सुखदुःखनामकैः शीतोष्णादिभिर्द्वन्द्वैर्विमुक्ताः। अत एवामूढा आत्मानात्माविवेकरहितास्तदव्ययं पदं गच्छन्ति। पूर्वाध्याये उक्तं ब्रह्मभावाख्यं पदं प्राप्यं निरावरणज्ञानमात्मस्वरूपं गच्छन्ति प्राप्नुवन्तीत्यर्थः॥५ ॥

त्यस अव्यय पदलाई पाउनेहरूका अरु विशेषणहरूलाई बताउनु हुन्छ। मान अर्थात् गर्व र मोह अर्थात् अनात्म वस्तुमा आत्माभिमान रहित हुनु अर्थात् यी पुरुषहरूबाट अहंकार र मोह निक्लिसकेको छ, यस्ता मनुष्यले राग र द्वेषलाई जितीसकेका छन्, सदा अध यात्म अर्थात् आत्मज्ञानमा निरत छन् र यिनीहरूका कामनाहरू निवृत्त भईसकेका छन्। फेरि सुख दुःखलाई पैदा गर्नेवाला हुनाले सुख–दुःख रूप चिसो तातो आदि द्वन्द्वहरूबाट यी पुरुष छुटेका छन्। यसैले यी अमूढ़ हुन् अर्थात् आत्म र अनात्मको अविवेकले रहित छन्। भाव यो कि यिनीहरू आत्म र अनात्मको विवेक छ। यस्ता पुरुष त्यस अव्ययलाई प्राप्त गर्दछन् अर्थात् पूर्व अध्यायमा कथित आत्म स्वरूपलाई प्राप्त गर्दछन्। त्यस अवस्थामा उनीहरूको धर्मभूत ज्ञान आवरण रहित अर्थात् विभु हुन जान्छ र त्यसैलाई ब्रह्म भाव पद भनिएको छ॥५॥

–★–★–★–

**न तद्भासयते सूर्यो न शशाङ्को न पावकः।**
**यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम॥**

**त्यस परमपदलाई न सूर्य, न चन्द्रमा, र अग्नि नै प्रकाशित गर्न सक्दछ र जसलाई प्राप्त भएपछि जीव फर्केर संसारमा आउँदैन त्यहि मेरो परमधाम हो ॥६ ॥**

तदेवं पदं विशिनष्टि–न तदिति। तत्पदं प्रकृतिवियुक्तातमस्वरूपं सूर्यो न भासयते न प्रकाशयति, न शशाङ्कः, न पावकोऽग्निरपि, यथा प्राकृतं सर्वं वस्तु दिवा सूर्यो भासय–

त्यस पदको वर्णन गर्नुहुन्छ।
प्रकृति वियुक्त आत्मस्वरूपलाई न सूर्य प्रकाश गर्दछ र चन्द्र र न अग्नि। जस्तै प्राकृत वस्तुहरूलाई दिनमा सूर्य प्रकाशित गर्दछ र सूर्य नहुँदा चन्द्रमा प्रकाशित गर्दछ। र दुबै नरहे मा अग्नि प्रकाशित

ति सूर्यास्तमये निशि चन्द्रः भासको भवति, उभयोरप्यभावेऽग्निरपि प्रकाशको दृष्टः तदात्मस्वरूपं न कोऽपि प्रकाशयितुं समर्थः। तत्र हेतुगर्भितविशेषणम्–तद्धामेतिं धाम ज्योतीरूपं ज्योतीरूपत्वादित्यर्थः। सूर्यादयस्तु जडमेव प्रकाशयन्ति नतु स्वयम्प्रकाशमितिभावः। प्राकृतज्योतिर्व्यावर्त्तयति–परमिति। तमसः परमित्यर्थः "आदित्यवर्णं तमसः परस्तादि"ति श्रुतेः। अत एव यद्गत्वा प्राप्य न निवर्त्तन्ते पुनः संसारिणो न भवतीत्यर्थः। एतत्परमधामपदार्थस्य परमात्मसाधारण्यात्तदैक्यभ्रान्तिः स्यात्तां वारयतिममेति। तत्परमं धाम न परं ब्रह्म, नापि ततः स्वतन्त्रमत्यन्तभिन्नं, किन्तु मम मदीयशक्तिरूपांश इत्यर्थः॥६॥

**गर्दछ त्यस प्रकारले आत्मस्वरूपलाई कोही पनि प्रकाशित गर्न सक्दैन किनकी आत्मस्वरूप स्वयं ज्योति रूप हो। भाव कि सूर्यादि जड़ वस्तुलाई प्रकाशित गर्न सक्दछन् स्वयं प्रकाश वस्तुलाई होईन। फेरि यस आत्म स्वरूपको ज्योति प्राकृतिक होईन बरु पर हो अर्थात् प्रकृति मण्डल भन्दा पर छ जस्तो कि श्रुतिमा भनेको छ- 'आदित्यवर्णं तमसः परस्तात्।' यसैले यस परधामलाई प्राप्त गरेर जीव फेरि यस संसारमा आउँदैन, यस परधाम पदार्थको परब्रह्मको साथ समता भएको कारण एकताको भ्रान्ति नहोस यसैले भगवान् भन्नुहुन्छ कि यो परंपद परब्रह्म होईन, यो स्वतन्त्र पनि छैन तर मेरो शक्तिरूप अंश हो॥६॥**

–★–★–★–

## ममैवांशो जीवलोके जीवभूतः सनातनः।
## मनःषष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति॥

**यस संसारमा जीव बनेको आत्मा स्वयं मेरो नै सनातन अंश हो तर त्यो प्रकृतिमा स्थित मन र इन्द्रियहरूलाई आकर्षित गर्दछ मतलब मन इन्द्रियहरूलाई आफ्नो मान्दछ॥७॥**

ननु यदि परमधामशब्दोदितोऽनवच्छिन्नज्ञानोऽसंसार्यात्मा तवांशश्चेत्तर्हि संसारे वर्त्तमानः परिच्छिन्नज्ञानो जीवाख्यः कस्यांशः, स्वतन्त्रः परतन्त्रो वेत्याशङ्क्याह–ममैवांश इति। योऽयं जीवलोके वर्त्तमानो जीवभूतः प्राणोपाधियुक्तः स ममैवांशः शक्तिरूपांश एव नतु स्वतन्त्रः। "अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम्। जीवभूतामि"त्युक्तत्वात्। शक्तेः शक्तिमतः स्वरूपभेदेऽपि पृथक्स्थित्यभावाद्भेदाभेदस्यैव सम्भवात्पूर्वं सप्रमाणं निरूपितत्वाच्च। केचित्तु जीवः स्वरूपेण ब्रह्मैव, जीवत्वमस्याविद्योपाधिकृतं सूर्यस्य जले प्रतिबिम्बत्वमिव घटावच्छिन्न आकाश इव च। जलघटाद्युपाध्यपाये बिम्बरूपसूर्यमहाकाशतापत्तिमात्रत्ववत् अविद्योपाध्यपाये निरूपाधिब्रह्मस्वरूपतापत्तिमात्रमेवावशिष्यते इत्याहुः, तन्निरासयति–सनातन इति। न हि प्रतिबिम्बोऽवच्छिन्नो वा सनातनो भवति प्रमाणाभावात्। प्रतिबिम्बो नानादी उपाधिजत्वात्, सूर्यादिप्रतिबिम्बवत्। किञ्च सावयव एव जलदर्पणाद्युपाधौ प्रतिबिम्बदर्शनान्न निरवयवे उपाधौ प्रतिबिम्बो दृष्टः श्रुतोऽनुभूयते वा।

**यदि परधाम (नाम)ले कथित अनवच्छिन्न ज्ञानयुक्त असंसारी आत्मा हजुरको अंश हो भने त संसारमा भएका परिच्छिन्न ज्ञानवाला जीव कसका अंश हुन्? त्यो परतन्त्र हो या स्वतन्त्र? यिनै शंकाहरूका उत्तर यहाँ दिनुहुन्छ।**

**यस जीवलोकमा प्राणोपाधियुक्त लिंग शरीरवाला जो संसारी जीव समूह छ त्यो मेरो पराशक्ति रूप जीवको नै अंश हो स्वतन्त्र होईन। पछाडि पनि भनिएको छ- 'अपरेय.....भूताम्'। शक्तिको शक्तिमान् सँग स्वरूप भेद भएपनि त्यसको पृथक् स्थिति प्रवृत्ति हुन सक्दैन, यसैले दुबैमा भेदयुक्त अभेद सम्बन्ध नै सम्भव छ, यो प्रमाणको साथमा पछाडि भनिएको छ। कोही कोही यस्तो मान्दछन् कि जीव स्वरूपबाट नै ब्रह्म हो। त्यसको जीवत्व अविद्यारूपी उपाधिकृत हो जस्तो सूर्यको प्रतिविम्व जलमा पर्दछ र घडामा जस्तो आकाश अवच्छिन्न रूपले स्थित हुन्छ त्यस्तै नै अविद्यारूपी उपाधिमा परब्रह्मलाई जीवत्व प्राप्त हुन्छ,। जस्तो जल र घटरूपी उपाधिको नाश भएपछि बिम्बरूप सूर्य र अवच्छिन्न घटाकाश रहँदैन, प्रतिबिम्ब सूर्यमा घटाकाश महाकाशलाई प्राप्त हुन्छ, त्यस्तै प्रकार अविद्यारूपी उपाधि हटेपछि निरुपाधि ब्रह्मको स्वरूपता त्यस उपाधि युक्त जीवलाई प्राप्त हुन्छ। अर्थात् जीवत्व नष्ट भएर त्यसको ब्रह्म स्वरूपता शेष रहन्छ।**

**यस मतलाई निर्मूल गर्नका लागि भगवान् भन्नुहुन्छ कि यो जीव सनातन हो। यो निश्चय छ कि प्रतिबिम्ब अथवा कुनै वस्तुले घेरिएको पदार्थ सनातन हुन सक्दैन किनकी यसमा कुनै प्रमाण**

प्रकृतेऽप्यविद्यारूपस्य बुद्धिरूपस्य वोपाधेर्निरवयवत्वात् कथं तत्र प्रतिबिम्बत्वकल्पनं, बुद्धेः सावयवत्वाङ्गीकारे "अणुर्वा ह्येष आत्मा चेतसा वेदितव्यो तस्मिन्प्राणः पञ्चधा संविवेश, उत्क्रान्तिगत्या गतीनां, नाणुरतच्छ्रुतेरिति चेन्नेतराधिकारादि"त्याद्यणुत्वप्रतिपादकेषु श्रुतिसूत्रेषूपाध्यणुत्वनिरूपितजीवाणुत्वमिति प्रतिपादितसिद्धान्तभङ्गेन जीवस्य प्रतिबिम्बत्वनुपपत्तिः। सावयवत्वेऽणुत्वप्रतिपादकश्रुतिसूत्रविरोधाद्भ्रान्ति परिकल्पित एव जीवप्रतिबिम्बवाद इत्यलं विस्तरेण। स जीवोऽनादिकर्मवशतया विषयभोगवासनानुविद्धः प्रकृतौ प्रकृतिकार्येऽहङ्कारे लीनतया स्थितानि पुनस्तत्तत्कर्मानुरूपं कालेन प्रादुर्भावितानि मनः षष्ठं येषां तानि श्रोत्रादीन्द्रियाणि भोगसाधनार्थं कर्षति गृह्णाति। जीवभूत इत्येकवचनं जात्यभिप्रायकं, बहुत्वस्य वाक्यशतैर्निरूपितत्वात्॥७॥

छैन। प्रतिबिम्ब अनादि होईन किनकी सूर्यादिको प्रतिबिम्ब को जस्तो यो पनि हुनु उपाधिको वशमा छ। फेरि प्रतिबिम्ब सावयव पदार्थमा नै हुन्छ जस्तो सूर्यको प्रतिबिम्ब जल वा दर्पणरूप उपाधिमा हुन्छ। निरवयव उपाधि वा पदार्थमा प्रतिबिम्ब हुने कुरा न सुनिएको छ देखिएको छ न अनुभवमा नै आउँदछ। वास्तवमा अविद्यारूप वा बुद्धिरूप उपाधि निरवयव हो यसैले त्यसमा प्रतिबिम्बको कल्पना कसरी गर्न सकिन्छ? र यदि बुद्धिलाई सावयव मान्ने हो भने श्रुति सूत्रको 'अणुर्वाह्येष...आधिकारात्' आदि जीवको अणुत्व प्रतिपादक वाक्यहरूमा उपाधिको गणुत्व भन्दा जीवको अणुत्व जो प्रतिवादीद्वारा प्रतिपादन गरिएको छ त्यस सिद्धान्त भंग हुन्छ। यसले जीव ब्रह्मको प्रतिबिम्ब हुनु कसैगरी प्रमाणित हुँदैन। उपाधिरवयव भएमा हुन नै सक्दैन र उपाधिको सावयव मान्नाले अणुत्व प्रतिपादक श्रुतिसूत्रहरूको विरोध हुन्छ। यसैले जीवलाई प्रतिबिम्ब मान्नु बिल्कुल भ्रान्तियुक्त कपोल कल्पना हो। यो जीव अनादि कर्मको वश भएकोले विषयभोग वासनाले बाँधिएको प्रकृतिको कार्यरूप अहंकारमा लीन काल पाएर कर्महरूका अनुरूप अविर्भूत हुने श्रोत्रादि पाँच ज्ञानेन्द्रियहरूलाई र छैटौं मनलाई तान्दछ अर्थात् आफ्नो भोगको साधनको लागि ग्रहण गर्दछ। जीवमा एक वचनको प्रयोग जाति अर्थमा भएको छ। जीव अनन्त हुनमा सयौं श्रुतिस्मृतिका वाक्य छन् जसलाई पहिले नै निरूपण भईसकेको छ॥७॥

–★–★–★–

**शरीरं यदवाप्नोति यच्चाप्युत्क्रामतीश्वरः।**
**गृहीत्वैतानि संयाति वायुर्गन्धानिवाशयात्॥**

**जस्तै वायु गन्ध भएको ठाऊँबाट गन्धलाई लिएर जान्छ, यस्तै नै शरीरादिको स्वामी बनेको जीवात्मा पनि जुन शरीरलाई छोड्दछ त्यहाँबाट यी मन सहित इन्द्रियहरूलाई ग्रहण गरेर फेरि जुन शरीरलाई प्राप्त गर्दछ त्यसमा प्रवेश गर्दछ॥८॥**

कदा कर्षति कृष्ट्वा च किं करोति इत्यपेक्षायामाह– शरीरमिति। यद्यदा शरीरान्तरमवाप्नोति यद्यस्माच्च शरीरादुत्क्रामति तद ईश्वरो देहेन्द्रियस्वामी एतानीन्द्रियाणि गृहीत्वा संयाति सम्यगागच्छति प्राप्नोति। क इव वायुराशयात्पुष्पचन्दनकस्तूर्यादेः सकाशाद्गन्धानिव॥८॥

जीव इन्द्रियहरूलाई कतिखेर तान्दछ र तानेर के गर्दछ, यसको उत्तर दिनुहुन्छ– जब जीव कर्मवश अर्को शरीर प्राप्त गर्दछ र पूर्व शरीरबाट निस्कन्छ तब त्यो जुन देह इन्द्रियहरूका ईश्वर हो पूर्व शरीरबाट यी इन्द्रियहरूलाई ग्रहण गरेर सम्यक् रीतिले अर्को शरीरलाई प्राप्त गर्दछ। मतलब कि जीव जब एक शरीर बाट निस्केर अर्को शरीरमा प्रवेश गर्दछ भने पहिलेको शरीरबाट मन, प्राण, र पंचतन्मात्रा सहित इन्द्रियहरूलाई साथमा लिएर उपस्थित हुन्छ ठीक त्यस्तै गरेर जुन तरीकाले वायु, फूल, चन्दन कस्तूरी आदि गन्धको आश्रयलाई लिएर बहन्छ॥८॥

–★–★–★–

**श्रोत्रं चक्षुः स्पर्शनं च रसनं घ्राणमेव च।**
**अधिष्ठाय मनश्चायं विषयानुपसेवते॥**

**यो जीवात्मा मनको आश्रय लिएर नै श्रोत्र र नेत्र तथा त्वचा, रसना र घ्राण (–यी पाँचै इन्द्रियहरूका द्वारा) विषयको सेवन गर्दछ॥९॥**

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

तानीन्द्रियाणि यदर्थं गृहीत्वा गच्छति तद्दर्शयति–श्रोत्रमिति। श्रोत्रादिघ्राणान्तानि पञ्चज्ञानेन्द्रियाणि चकराभ्यां षष्ठं मनः कर्मेन्द्रियाणि प्राणं चाधिष्ठाय विषयान् शब्दादीनुपसेवते उपभुङ्क्ते॥९॥

ती इन्द्रियहरूलाई जुन मतलबको लागि जीव ग्रहण गर्दछ त्यसलाई भन्नुहुन्छ- कान, आँखा, त्वचा, जिब्रो, घ्राण, मन, कर्मेन्द्रियहरू र प्राणलाई आश्रय गरेर त्यो विषयलाई भोग्दछ॥९॥

–★–★–★–

**उत्क्रामन्तं स्थितं वापि भुञ्जानं वा गुणान्वितम्।**
**विमूढा नानुपश्यन्ति पश्यन्ति ज्ञानचक्षुषः॥**

**शरीरलाई छोडेर जाँदै गरेको या अर्को शरीरमा रहँदै अथवा विषयहरूलाई भोग्दै गरेर पनि गुणहरूले युक्त (जीवात्माको स्वरूप) लाई मूढ़ मनुष्य जान्दैनन्, ज्ञानरूपी नेत्र भएका मनुष्यहरू नै जान्दछन्॥१०॥**

एवं देहे वर्त्तमानमपि सर्वविषयभोक्तारमपि जीवं केचिदेव पश्यन्ति, नतु सर्वे इत्याह–उत्क्रामन्तमिति। उत्क्रामन्तं देहाद्देहोन्तरं गच्छन्तं स्थितं वाऽपि तस्मिन्नेव देहे शब्दादी–न्विषयान्भुञ्जानं वा गुणान्वितं सत्त्वादिगुणपरिणामविशेषदे–वमनुष्याद्याकारसंयुक्तं विमूढा आत्मानात्मविवेकानर्हा नानुपश्यन्ति देहादिविलक्षणं न विजानन्ति। देवमनुष्या–दिदेहरूपमेवात्मानं जानन्ति। शास्त्राचार्योपलब्धं ज्ञानमेव चक्षुर्येषां ते ज्ञानचक्षुषस्ते तु देहेन्द्रियादिविविक्ताकारं पूर्वोक्तं ज्योतीरूपमेव पश्यन्ति॥१०॥

यस प्रकार देहमा बसेको र सबै विषयहरूका भोक्ता जीवलाई पनि कुनै कुनै मात्र देख्दछन्, सबै होईन। यसैलाई भन्नुहुन्छ। एउटा देहबाट अर्को देहमा जाँदै गर्दा वा त्यसै देहमा बसेर शब्दादि विषयलाई भोग्दै वा सत्त्वादि गुणहरूका परिणाम विशेष देव, मनुष्यादि आकार ले युक्त जीवलाई, आत्म अनात्मको विवेकले शून्य मूढ़हरू देख्दैनन् अर्थात् त्यसलाई देहादि भन्दा विलक्षण जान्दैनन् बरु देव मनुष्य आदिको देहलाई नै आत्मा संझिन्छन्। जो शास्त्र र आचार्य द्वारा ज्ञान चक्षु पाएका छन् उनीहरू नै केवल देह, इन्द्रियहरू बाट पृथक् यस आत्मस्वरूप ज्योतिलाई देख्दछन्॥१०॥

–★–★–★–

**यतन्तो योगिनश्चैनं पश्यन्त्यात्मन्यवस्थितम्।**
**यतन्तोऽप्यकृतात्मानो नैनं पश्यन्तचेतसः॥**

**प्रयत्न गर्ने योगीहरू आफैंमा स्थित यस परमात्म–तत्त्वको अनुभव गर्दछन्। परन्तु जसले आफ्नो अन्तःकरण शुद्ध गरेको छैन, यस्ता अविवेकी मनुष्य यत्न गरेमा पनि यस तत्त्वको अनुभव गर्न सक्दैनन्॥११॥**

तस्य पुनर्दुर्दर्शतामुपपादयति–यतन्त इति। योगिनो ध्याना–दिभिरुपायैर्यतन्तः यत्नं कुर्वन्तः केचिदेनमात्मानमात्मनि देहेऽवस्थितं देहाद्विविक्तरूपं पश्यन्ति। अकृतात्मानो मत्प्रपत्तिमन्तरेण स्वज्ञानाभिमानेनाशोधितान्तःकरणा अत एवाचेतसः तत्त्वावलोकनानर्हचेतस एनमात्मानं न पश्यन्ति॥११॥

आत्मदर्शनको कठिनता फेरि भन्नुहुन्छ ध्यानादि उपायहरूद्वारा प्रयत्न गर्दै कुनै योगीहरू देहमा स्थित यस आत्मालाई देह भन्दा पृथक देख्दछन्। जो मलिन आत्मावाला छ अर्थात् मेरो शरणमा छैन र आफ्नो ज्ञानको अभिमानले मलिन अन्तःकरणवाला छ र यसैले तत्त्व दर्शनको अयोग्य बुद्धियुक्त छ त्यो चेष्टा गर्दा पनि यस आत्माको दर्शन पाउँदैन॥११॥

–★–★–★–

**यदादित्यगतं तेजो जगद्भासयतेऽखिलम्।**
**यच्चन्द्रमसि यच्चाग्नौ तत्तेजो विद्धि मामकम्॥**

**सूर्यमा भएको जो तेज सम्पूर्ण जगत्लाई प्रकाशित गर्दछ र जो तेज चन्द्रमामा छ तथा जो तेज अग्निमा छ त्यस तेजलाई मेरो नै स्वरूप जान्नु॥१२॥**

एवं मुक्तबद्धोभयविधक्षेत्रज्ञस्वरूपं मच्छक्तिरूपांशविभूति-रित्युक्तमिदानीं सर्वशक्तिमत्स्वरूपमुपदेष्टुं तावत्सर्वंज-गच्छ्रेयोहेतुभूतादित्यचन्द्राग्नयादीनामपि स्वविभूतित्वमाह-यदादित्येति चतुर्भिः। अखिलं जगदवभासते यदादित्य-गतमादित्ये स्थितं तेजः यच्च रात्रौ चन्द्रमसि यच्चाग्नौ तत्तेजो मामकं मदीयमेव विभूतिभूतं विद्धि। तत्तदधिकारार्थं तत्तदाराधनप्रसन्नेन मयैव दत्तमिति जानीहि ॥१२॥

मुक्त र बद्ध दुबै प्रकारका जीवको स्वरूप मेरो नै शक्तिरूप अंश हुन् र मेरो नै विभूति हुन् यो पहिले नै भनिसकियो। अब उपदेश गर्नुहुन्छ कि म नै सर्वशक्तिमान् हुँ र जगत्को श्रेयको हेतू भूत, सूर्य, चन्द्र, अग्नि आदि सबै मेरा विभूति हुन्। सूर्यगत तेज, जुन सम्पूर्ण जगत्लाई प्रकाशित गर्दछ, रातमा चन्द्रमाको तेज र अग्निमा स्थित तेज सबैलाई मेरो नै अर्थात् मेरो विभूति जान्नु। उनीहरूका आराधनाले प्रसन्न भएर उनीहरूको अधिकार निर्वाहका लागि उनीहरूको तेज मैले नै दिएको जान्नु॥१२॥

-★-★-★-

## गामाविश्य च भूतानि धारयाम्यहमोजसा।
## पुष्णामि चौषधीः सर्वाः सोमो भूत्वा रसात्मकः॥

**म नै यस पृथ्वीमा प्रविष्ट भएर आफ्नो शक्तिले समस्त प्राणिहरूलाई धारण गर्दछु र म नै रसस्वरूप चन्द्रमा भएर समस्त औषधिहरू (वनस्पतिहरू)लाई पुष्ट गर्दछु॥१३॥**

सर्वजगदाधारभूतायाः पृथिव्या आधारकत्वशक्तिरपि मदीयै-वेत्याह-गामाविश्येति। गां पृथ्वीमाविश्य चराचराणि भूतानि ओजसा स्वभाविकबलेनाहमेव धारयामि। तथा रसात्मकः अमृतमयः सोमो भूत्वा अहमेव सर्वा ओषधीः पुष्णामि॥१३॥

सबै जगत्को आधारभूत पृथ्वीको आधारकत्व शक्ति पनि मेरो नै हो यो भन्नुहुन्छः-
पृथ्वीमा प्रवेश गरेर चर र अचर जीवलाई आफ्नो स्वभाविक बलले म नै धारण गर्दछु र रसात्मक अर्थात् अमृतमय चन्द्रमा भएर म नै सबै औषधिहरूको पोषण गर्दछु॥१३॥

-★-★-★-

## अहं वैश्वानरो भूत्वा प्राणिनां देहमाश्रितः।
## प्राणापानसमायुक्तः पचाम्यन्नं चतुर्विधम्॥

**प्राणिहरूको शरीरमा बस्ने म प्राण-अपानले युक्त वैश्वानर (जठराग्नि) भएर चार प्रकारको अन्नलाई पचाउँदछु॥१४॥**

किञ्च-अहमिति। अहं सर्वेश्वरो वैश्वानरो जाठराग्निर्भूत्वा प्राणिनां देहमाश्रितः सन् तैर्भुक्तं भक्ष्यं भोज्यं लेह्यं चोष्यं चेति चतुर्विधमन्नं पचामि। "अयमग्निर्वैश्वानरोऽयमन्तः पुरुषे येनेदमन्नं पच्यते" इति श्रुतेः। तत्र यद्दन्तैश्चूर्णीकृत्य भक्ष्यते पूपमोदकानि तद्भक्ष्यं, यत्तु दन्तावघातं विनैव जिह्वयाऽवलोड्य निगीर्यते यवागूसक्तूपायसादि तद्भोज्यं, यच्च केवलं जिह्वया रसास्वादेन निगीर्यते तद्द्रवीभूत द्रव्यं गुडमध्वादि तल्लेह्यं, यत्तु दन्तैर्निष्पीड्य रसांशं गीर्यावशिष्टं त्वगष्ठ्यादि त्यज्यते तच्चोष्यं, यथाऽऽम्रेक्षुदण्डादीति॥१४॥

म सर्वेश्वर पेटको आगो भएर प्राणिहरूका देहमा स्थित र प्राण, अपान आदि वायुले युक्त भएर मनुष्यले भोजन गरेका चार प्रकारका अन्नलाई पचाउँदछु, जस्तो श्रुतिमा भनेको छ- 'अयम. ....पच्यते'(यो परमेश्वर वैश्वानर अग्नि हो। यो जीव को भित्र छ। यसैले अन्न पच्दछ।) अन्न चार प्रकारका हुन्छन्, यथा-भक्ष्य जुन दाँतले चबाएर खाईन्छ, जस्तो मालपूवा, लड्डु आदि, भोज्य भनेको त्यो हो जुन दाँतले नचबाईकन केवल जिब्रोले लटरपटर गरेर निलिन्छ जस्तो सातु, खीर, हलुवा आदि, लेह्य त्यो हो जुन जिब्रो द्वारा द्रवीभूत रस लिईयोस, जस्तो मह, मिट्ठा आदि। र चोष्य त्यो हो जुन दाँतले चबाएर र रस चुसेर खाईन्छ जस्तो-उखु॥१४॥

-★-★-★-

## सर्वस्य चाहं हृदि सन्निविष्टो मत्तः स्मृतिर्ज्ञानमपोहनं च।
## वेदैश्च सर्वैरहमेव वेद्यो वेदान्तकृद्वेदविदेव चाहम्॥

**म नै सम्पूर्ण प्राणिहरूका हृदयमा बसेको छु तथा मबाट नै स्मृति, ज्ञान र अपोहन (संशय आदि दोषहरूको नाश) हुन्छ। सम्पूर्ण वेदहरूको द्वारा म नै जान्नयोग्य छु। वेदहरूको तत्त्व निर्णय गराउने र वेदहरूलाई जान्ने पनि म नै हुँ॥१५॥**

एवं जगद्यात्रानिर्वाहकादित्यचन्द्रादीनां स्वविभूतित्वमभिधायेदानीं सर्वचेतनाचेतनवस्तुजातस्य भगवदायत्तत्वं स्वस्य च स्वतन्त्रत्वं सर्वधीप्रवर्त्तकत्वं सर्ववेदवेद्यत्वमाचार्यत्वं चाह सर्वस्य चेति। सर्वस्य ब्रह्मादिप्राणिमात्रस्य हृदि सम्यगन्तर्यामिरूपेण निविष्टः, अतो मत्त एव हेतोः सर्वस्य पूर्वानुभूतार्थविषया स्मृतिर्भवति। ज्ञानं विषयेन्द्रियसंयोगजो यथावस्तुविषयानुभवः। अपोहनञ्च स्मृतिज्ञानयोः प्रमोषो मत्त एव भवति। वेदैश्च सर्वैरहमेव वेद्यः। इन्द्राग्निसूर्यमित्रावरुणवाय्वादिप्रतिपादिकैरपि वेदैरहमेव वेद्यः मम सर्वात्मत्वात्। तथा च श्रुतयः "सर्वे वेदा यत्पदमामनन्ति नामानि सर्वाणि यमाविशन्ति, सर्वे वेदा यत्रैकी"त्याद्याः। अत एवोक्तं महाभारते "एतमेके वदन्त्यग्निं मरुतोऽन्ये प्रजापतिम्। इन्द्रमेके परे प्राणमपरे ब्रह्म शाश्वतम्। ज्योतीषि शुक्लानि च यानि लोके त्रयो लोका लोकपालास्त्रयो च। त्रयोऽग्नयश्चाहुतयश्च पञ्च सर्वे देवा देवकीपुत्र एव। नमामः सर्ववचसां प्रतिष्ठा यत्र शाश्वतो, वासुदेवपरा वेदा वासुदेवपरामखाः। वेदे रामायणे चैव पुराणे भारते तथां आदावन्ते च मध्ये च हरिः सर्वत्र गीयते" इत्यादिवाक्यान्यप्यनुसन्धेयानि। वेदान्तकृत् वेदानां नानाविधार्थप्रतिपादनपराणां परस्परं विरुद्धार्थतया संशये जाते अन्तकृत् अविरोधप्रकारेण निर्णयकर्त्ता सर्वगुरुर्वेदान्तसम्प्रदाय प्रवर्त्तकोऽहमेव। "नमो वेदान्तवेद्याय गुरवे बुद्धिसाक्षिणे" इति श्रुतेः। वेदविच्चाहमेव। सर्ववेदाविरुद्धार्थविदहमेव। नतु मत्तोऽन्यः स्वतन्त्रः कश्चिज्ज्ञातुं समर्थः। मन्निर्णीतार्थं मत्प्रसादान्मदभिधायिनं वेदं यो वेद सोऽपि वेदवित्। अतोऽन्यथा वेदार्थं यो वक्ति न स वेदविदिति भावः॥१५॥

यस प्रकार जगत् यात्राको निर्वाहक सूर्य चन्द्र आदिलाई आफ्नो विभूति भनेर भगवान् अब यो भन्नुहुन्छ कि सबै चेतन अचेतन पदार्थ मेरा नै अधीन छन्, म स्वयं स्वतन्त्र छु, सबैको बुद्धि प्रवर्त्तक हुँ र सबै वेदहरूलाई जान्ने र आचार्य पनि म नै हुँ। ब्रह्मा आदि प्राणिमात्रको हृदयमा अन्तर्यामी रूपले प्रविष्ट छु। यसैले उनीहरूलाई आफ्ना पूर्वका अनुभूतिहरूका स्मृति मेरो नै कारणले हुन्छ। उनीहरूका विषय इन्द्रिय संयोगले उत्पन्न वस्तुहरूका यथार्थ ज्ञान वा अनुभवको कारण पनि म नै हुँ र उनीहरूका स्मृति र ज्ञानको भूलहरू पनि मेरै कारण हुन्छ। इन्द्र, वरुण, अग्नि, सूर्य, वायु आदिको प्रतिपादक जति पनि वेद छन् ती सबैद्वारा म नै जानिन्छु किनकी म नै सबै देउताहरूका आत्मा हुँ। श्रुतिले भनेको छ- 'सर्वे........भवन्ति'(सबै वेद जुन पदलाई भन्दछन्, सबै नाम जसमा एक हुन्छन्) महाभारतमा पनि यस्तै नै भनिएको छ, यथा- 'कुनै यी भगवान्लाई अग्नि भन्दछन्, कुनै मरुत्, अरु प्रजापति भन्दछन्, कुनै प्राण र कुनै यिनलाई सनातन ब्रह्म भन्दछन्। लोकको चम्किरहेका ज्योतिहरू, तीनै लोक, लोकपाल, तीनै वेद, तीनै अग्निहरू, पाँचै आहुतिहरू र सबै देव पनि देवकी पुत्र कृष्ण नै हुन्। सबै वचनहरूका जसमा सनातन प्रतिष्ठा छ, उहाँलाई हामी नमस्कार गर्दछौं। वेद, यज्ञ सबै वासुदेव परक हुन्। वेद रामायण, पुराण, महाभारत सबैका आदि मध्य र अन्तमा पनि सबै ठाउँमा भगवान् श्रीहरिको नै कीर्तन गरिएको छ।) नाना प्रकारका अर्थहरूका प्रतिपादक वेदहरूमा परस्पर विरोध हुँदा तिनको शंकाहरूको नाश गरेर अविरोध रूपले निर्णय कर्त्ता म नै हुँ, यसैले वेदान्तकृत् हुँ। श्रुति मा भनेको छ- 'नमो.......साक्षिणे' (वेदान्तद्वारा जान्नयोग्य गुरु र बुद्धिको साक्षीलाई म नमस्कार गर्दछु।) वेदवित् अर्थात् वेदलाई जान्ने पनि म नै हुँ। सबै वेदहरूका अविरुद्ध अर्थलाई म नै जान्दछु। म भन्दा अर्को, स्वतन्त्र कुनै वेदको अर्थ जान्नमा समर्थ हुन सक्दैन। मेरो द्वारा निश्चित गरिएको वेदको अर्थलाई जो मेरो कृपाले जान्दछ त्यो पनि वेदवित् हो। भाव यो हो कि मेरो निर्णित अर्थभन्दा अन्यथा जो वेदको अर्थ भन्दछ त्यो वेदवित् अर्थात् वेदको जानकार होईन॥१५॥

-★-★-★-

**द्वाविमौ पुरुषौ लोके क्षरश्चाक्षर एव च।**
**क्षरः सर्वाणि भूतानि कूटस्थोऽक्षर उच्यते॥**

**यस संसारमा क्षर (नाशवान्) र अक्षर (अविनाशी)-यी दुई प्रकारका नै पुरुष छन्। सम्पूर्ण प्राणिहरूको शरीर क्षर र जीवात्मा अक्षर भनिन्छ॥१६॥**



अहमेव वेदवित् वेदान्तकृच्च न मत्तोऽन्यः कश्चिदतोऽहमेव

म नै वेदको जानकार हुँ र त्यसको अर्थको निर्णयकर्ता हु, म

सर्ववेदान्तसारं वच्मि–द्वाविमाविति त्रिभिः। इमौ द्वौ पुरुषौ लोके जगति ज्ञेयाविति शेषः। इमौ कौ ? क्षरश्चाक्षर एव चेति। तावेवार्थतो व्याचष्टे–क्षरः सर्वाणीति। सर्वाणि भूतानि ब्रह्मादिस्थावरान्तानि शरीराणि जडत्वात्परिणामित्वात् क्षरः पुरुषो नश्वरः। अन्नमयः पुरुषश्चेतनाधिष्ठितो देहः क्षरशब्दार्थः। एकवचनं चात्र प्राकृतत्वाविशेषाज्जात्यभिप्रायकम्। अत एव क्षरः सर्वाणि भूतानीति विवृतम्। कूटस्थः कूटे प्रकृतिकार्यभूतशरीरसमुदाये स्थितोऽपि परिणामनाशरहितो नित्यः कूटस्थः पुरुषः अक्षरशब्दवाच्य इत्यर्थः। अत्राप्येकवचनं स्वयं ज्योती रूपत्वेन सामान्याभिप्रायकमेव। "आचार्यप्रोक्ता या जातिः सा नित्या साऽजराऽमरे"ति सनत्सुजातोक्तेः॥१६॥

भन्दा दोस्रो कुनै पनि वेदलाई जान्नेवाला छैन यसैले सबै वेद र वेदान्तको सार म तिमीलाई भन्दछु। यस लोकमा दुई पुरुष जान्नयोग्य छन्। एक क्षर अर्को अक्षर। अब दुबै पुरुषहरूको वर्णन गर्दछु। ब्रह्मा देखि लिएर स्थावर पर्यन्त जति शरीर छन् सबैलाई क्षर भनिन्छ। जड़ र परिणामी (अदल–बदल भईरहने) हुनाले यो क्षर पुरुष नश्वर छ। भाव यो कि अन्नमय पुरुष अर्थात् चेतन वा जीव अधिष्ठित देह क्षर भनिन्छ। जीवको आश्रित हुनाले र त्यसैको सम्बन्धले यसको पुरुष संज्ञा हुन्छ। सबै शरीर प्रकृतिका कार्य हुनाले पान्चभौति हुन् यसैले क्षरको एकवचन शरीर जातिको अर्थमा व्यवहार भएको हो। कूटस्थ पुरुषलाई अक्षर भन्दछन्। कूट अर्थात् प्रकृति कार्यभूत शरीर समुदायमा स्थित भएर पनि अदल–बदल र नाशले रहित छ यसैले जीवको अक्षर संज्ञा हुन्छ। यहाँ पनि जाति अर्थमा नै अक्षर शब्द एकवचनमा व्यवहार भएको छ किनकी ज्योति वा ज्ञानरूपले सबै चेतन समान छन्। सनत्सुजात को वचन छ–'आचार्य.......ऽमरा'। (जुन जाति आचार्य द्वारा भनियो त्यो नित्य, अजर र अमर छ)॥१६॥

–★–★–★–

## उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृतः।
## यो लोकत्रयमाविश्य बिभर्त्यव्यय ईश्वरः॥

**उत्तम पुरुष त अन्य (विलक्षण) नै छ, जो 'परमात्मा' यस नामले भनिन्छ। त्यही अविनाशी ईश्वर तीनै लोकमा प्रविष्ट भएर सबैको भरण पोषण गर्दछ॥१७॥**

तमेव चाद्यं पुरुषं प्रपद्ये इति यः प्राक् प्रपदनीय आद्यः पुरुष उक्तः। यद्विवक्षया आदित्यादिविभूतीर्निर्दिष्टास्तमेवाह–उत्तम इति। उत्तम उत्कृष्टतमः पुरुषस्तु क्षराक्षरशब्द–निर्दिष्टाभ्यां द्वाभ्यामन्यो विलक्षणः परमात्मेत्युदाहृतः। परमात्मा भूभुर्वः स्वराख्यं जगदिति। "परमात्मा च सर्वेषा–माधारः परमेश्वरः" इत्यादि श्रुतिस्मृतिभ्यः। कोऽसौ परमात्मा य आत्मतया लोकत्रयमाविश्य विभर्त्ति धारयति पालयति च। एवमप्यव्ययोऽविनाशी यत ईश्वरः सर्व–लोकनियामकः तस्माद्भर्त्तव्यान्नियम्याच्च विलक्षणः॥१७॥

'तमेव चाद्यं पुरुषं प्रपद्ये'ले पहिले जुन आदि पुरुषको शरणमा जानु भनियो र सूर्य आदि जसको विभूति भनियो उनीहरूलाई नै यहाँ भन्नुहुन्छ– सबै भन्दा जो उत्कृष्ट छ त्यो क्षर र अक्षरले पूर्वमा भनिएको दुबै पदार्थहरू भन्दा अत्यन्त विलक्षण छ र त्यो परमात्मा भनिन्छ। 'परमात्मा.......परमेश्वरः' (श्रुतिस्मृतिहरू भन्दछन् कि परमात्मा सबैको ईश्वर हो।) त्यो परमात्मा भूः, भुवः र स्वः तीनै लोकमा प्रवेश गरेर तिनीहरूलाई धारण र पालन गर्दछ। यस्तो हुँदा हुँदै पनि परमेश्वर अव्यय अर्थात् अविनाशी छ किनकी त्यो ईश्वर अर्थात् सबै लोकहरूका नियामक हो। यस प्रकार क्षर र अक्षर दुबै पुरुषहरूका भर्ता र नियामक हुनाले त्यो तिनीहरू भन्दा विलक्षण छ॥१७॥

–★–★–★–

## यस्मात्क्षरमतीतोऽहमक्षरादपि चोत्तमः।
## अतोऽस्मि लोके वेदे च प्रथितः पुरुषोत्तमः॥

**किनकी म क्षरबाट अतीत छु र अक्षर भन्दा पनि उत्तम छु, यसैले लोकमा र वेदमा 'पुरुषोत्तम' नामले प्रसिद्ध छु॥१८॥**

उक्तस्य पुरुषोत्तमशब्दस्य यो लोकत्रयमिति यच्छब्देनान्यत्र भ्रान्तिं वारयन्नात्मन्येव निर्वचनेन समन्वयमाह यस्मादिति।

पुरुषोत्तम शब्दले अन्य कसैको निर्देशको भ्रम न होस यसैले यस पुरुषोत्तम शब्द आफ्नै लागि भनिएको कुरा यस श्लोकमा बताउनु

यस्मात् क्षरं पुरुषं योग्यभूतं सर्वभूतात्मकंजडमतीतोऽहम्, अक्षरात् कूटस्थाद्भोक्तुर्विज्ञानमयपुरुषादपि उत्तमः उत्कृष्टः, तस्यापीशनशीलत्वात्। "भोक्ता भोग्यं प्रेरितारं च, प्रधान–क्षेत्रज्ञपतिर्गुणेश"इत्यादिश्रुतिभ्यः। अतोऽहं लोके वेदे च पुरुषोत्तमः प्रथितः प्रख्यातोऽस्मि। अत्र लोक्यते दृश्यते वेदार्थोऽनेनेति लोक इतिहासपुराणादिर्विवक्षितः। तथा च वेदेतिहासपुराणादावित्यर्थः। "स उत्तमः पुरुषः" इति वेदे, इतिहासे च महाभारते सहस्रनामस्तोत्रे "केशवः पुरुषोत्तम" इति प्रसिद्धः। पुराणे तु "विश्वं यतश्चैतदविश्वहेतो नमोऽस्तु तस्मै पुरुषोत्तमाये"ति, वैष्णवे "पुराणपुरुषः प्रत्यक्चैतन्यः पुरुषोत्तम" इति। पाद्मे नारदपञ्चरात्रे च "संसारसागरनिमग्नमनन्तदीनमुद्धर्त्तुमर्हसि हरे! पुरुषोत्त–मोऽसी"त्यादिषु प्रथितोऽस्मि ॥१८॥

हुन्छ। किनकी भोग्य भूत जड़ र सर्व भूतात्मक क्षर पुरुष भन्दा पनि म पर छु र भोक्ता, विज्ञानमय, कूटस्थ पुरुष (चेतन) भन्दा पनि उनीहरूका मालिक हुनाले म उत्कृष्ट छु। जस्तो श्रुतिमा भनेको छ–'भोक्ता......गुणेशः'(परब्रह्म प्रेरक हो, जीव भोक्ता हो र प्रकृति भोग्य हो। म माया र क्षेत्रज्ञको मालिक र गुणहरूका ईश्वर हुँ।) यसैले लोकमा म पुरुषोत्तम नामले प्रसिद्ध छु । लोकको अर्थ हो कि जसबाट वेदको अर्थ जान्न सकियोस, जस्तो इतिहास पुराण आदि। भाव यो हो कि वेद, पुराण, इतिहास आदिमा म पुरुषोत्तम भनिएको छु। वेद भन्दछ–'उहि परमात्मा उत्तम पुरुष हो'। इतिहास, महाभारत र विष्णु सहस्रना स्तोत्रमा लेखिएको छ– 'केशवः पुरुषोत्तमः' केशव पुरुषोत्तम हुन्। पुराणको वचन छ– 'विश्वं....पुरुषोत्तमाय' (जसबाट यो विश्व भएको छ, जो विश्वको कारण हो त्यही पुरुषोत्तमलाई म नमस्कार गर्दछु।) विष्णुपुराणमा आएको छ– 'पुराण.....पुरुषोत्तम'(पुराण पुरुष जीवलाई चेतना दिने र पुरुषोत्तम हो। पद्मपुराण र नारदपञ्चरात्रमा लेखिएको छ– 'संसार..... पुरुषोत्तमेसि'(हे हरि! हजुर पुरुषोत्तम होईबक्सन्छ, संसाररूपी सागरमा डुबेका अनन्त दीनलाई उद्धार गर्न योग्य हुनुहुन्छ) ॥१८॥

–★–★–★–

## यो मामेवमसम्मूढो जानाति पुरुषोत्तमम्।
## स सर्वविद्भजति मां सर्वभावेन भारत॥

**हे भारत! यस प्रकार जो मोहरहित मनुष्य मलाई पुरुषोत्तम भनेर जान्दछ, त्यो सर्वज्ञ सबैप्रकारले मेरो नै भजन गर्दछ ॥१९॥**

एवमुक्तस्य पुरुषोत्तमत्वस्य ज्ञातुः फलमाह–यो मामेति। य एवमुक्तप्रकारेणासम्मूढः। सम्मोहो वस्तुयाथात्म्याविवे–कस्तद्रहितोऽसम्मूढः पुरुषत्रयविवेकज्ञानाश्रयः मां पुरु–षोत्तमं जानाति स सर्ववित् सर्वं वेद्यं साधनफलविरो–ध्यादि वेदेत्यर्थः। भगवन्तं वासुदेवं पुरुषोत्तमत्वेन ज्ञाता सर्वज्ञो भवतीति भावः। "येनाश्रुतं श्रुतं भवत्यमतं मतमवि–ज्ञातं स्यात् सर्वं हि पश्यती"त्यादिश्रुतेः। एवमेव यज्ज्ञात्वा नेह भूयोऽन्यज्ज्ञातव्यमवशिष्यते इति प्रतिज्ञायते चेतना–चेतनात्मके पराऽपरे शक्ती अभिधाय "मत्तः परतरं नान्यत् किञ्चिदस्ति धनञ्जये"त्युक्तत्वात्। अत एव सर्वभावेन मां भजति सर्वप्रकारोदितेन मद्भजनेन वाङ्मनःकायकर्मभिर्वा सेवते हे भारत! अन्यस्य मन्नियम्याक्षरपुरुषान्तर्गतत्वेन विद्वद्भजनीयत्वाभावात्। तथोक्तं महाभारते "रुद्रं समाश्रिता

भगवान्लाई यस प्रकार पुरुषोत्तम जानेको फल भन्नुहुन्छ–
हे अर्जुन! यस प्रकारले जो असम्मूढ़ पुरुष अर्थात् त्यो पुरुष जसलाई वस्तुको यथार्थ ज्ञान छ र तीनै पुरुषहरू क्षर, अक्षर र पुरुषोत्तम को विवेकयुक्त ज्ञान छ, म पुरुषोत्तमलाई जान्दछ त्यो सबैलाई जान्नेवाला हो, अर्थात् त्यो साधन, फल र विरोधी आदि सबै पदार्थहरूलाई जान्दछ। भाव यो कि भगवान् वासुदेवलाई जो पुरुषोत्तम भनेर जान्दछ त्यो सर्वज्ञ हुन्छ। श्रुतिले भनेको छ–'येनाश्रुतं.........पश्यति'(जसलाई देख्नाले सर्वज्ञ हुन्छ र त्यसलाई न सुनिने पनि सुनेको हुन्छ, मनन नगरीकन पनि मनन गरिएको हुन्छ र नजानिकन पनि जानेको हुनजान्छ।) यस प्रकार जानेर त्यसलाई जान्नको लागि केहि बाँकि रहँदैन। यसरी नै 'यज्ज्ञात्वा. ....शिष्यते' (जसलाई जानेर जान्नका लागि केही बाँकी हुँदैन।) यस प्रकार प्रतिज्ञा गरेर भगवान्ले फेरि चेतन अचेतन, आफ्ना परा अपरा शक्तिलाई भन्नुभएको छ कि 'मत्तः....धनंजय' अर्थात् हे अर्जुन! म भन्दा दोस्रो कुनै वस्तु श्रेष्ठ छैन। यसैले मलाई पुरुषोत्तम जान्नेवाला पुरुष सबै भावले मलाई भज्दछ अर्थात् शास्त्रमा भनिएका सबै प्रकारहरू द्वारा मेरो भजन गर्दछ अथवा वाक्, मन, शरीर र कर्महरूद्वारा मेरो सेवा गर्दछ, किनकी अक्षर पुरुषले भनिएको जीव, मेरो नियम्य हुनाले विद्वानहरूको भजन

देवा रुद्रो ब्रह्माणमाश्रितः। ब्रह्मा ममाश्रितो राजन्नाहं कञ्चिदुपाश्रितः। ममाश्रयो न कश्चित्तु सर्वेषामाश्रयो ह्यहम्। ब्रह्माणं शितिकण्ठं च याश्चान्या देवताः स्मृताः। प्रतिबुद्धा न सेवन्ते यतः परिमितं फलमि"ति ॥१९ ॥

योग्य छैन। महाभारतमा पनि यस्तै भनिएको छ- 'रुद्रं......फलम्' (देवलोक शिवका आश्रित छन्, शिव ब्रह्माको आश्रित छन् र ब्रह्मा मेरो आश्रित छन्, म कसैका आश्रित छैन। हे राजन्! म कसैको आश्रित छैन सबै मेरो आश्रित छन्। ज्ञानीहरू ब्रह्मा, शिव या अन्य देवताहरूको सेवा गर्दैनन् किनकी ती परिमित फल दिनेवाला हुन्) ॥१९ ॥

-★-★-★-

**इति गुह्यतमं शास्त्रमिदमुक्तं मयानघ।**
**एतद्बुद्ध्वा बुद्धिमान्स्यात्कृतकृत्यश्च भारत ॥**

**हे निष्पाप अर्जुन! यस प्रकार यो अत्यन्तै गोपनीय शास्त्र मैले भनेको छु। हे भारत! यसलाई जानेर मनुष्य ज्ञानवान् तथा कृतकृत्य हुन्छ ॥२० ॥**

एवं वेदेतिहासपुराणादिसारार्थ उक्तः। इदानीमुक्तार्थं स्तुवन्न-ध्यायमुपसंहरति-इतीति। इत्यनेन प्रकारेण गुह्याद्गुह्यतम-मतिरहस्यमिदं शास्त्रं सर्वगीतार्थसङ्क्षेपरूपं मयोक्तं, यतो हे अनघ! त्वं निष्पापतयोपदेश्य एव। एतन्मदुक्तं सर्वशास्त्रार्थ-गुह्यतममन्योऽपि कश्चिद्बुद्ध्वा बुद्धिमान् स्यात् परमश्रे-यस्कामैरुपादेया या बुद्धिः सोपात्ता स्यात्। कृतकृत्यश्च कृतं कृत्यं येन पुनः कृत्यान्तरं यस्य नावशिष्येत्तथा स्यादित्यर्थः। हे भारत! यद्यन्योऽप्येतन्मदुक्तं सम्यग्वुद्ध्वा कृतार्थो भवति, तर्हि त्वमुत्तमकुलप्रसूतो मच्छिष्यश्चैतद्बुद्ध्वा कृतार्थो भविष्यसीति किमुत वक्तव्यमिति भावः ॥२० ॥

य एव वेदवेद्यश्च शास्त्रतत्त्वोपदेशकः। क्षराक्षरपदार्थाभ्यां चिदचिद्भ्यां विलक्षणः॥ सर्वगः परमात्मा च भास्करादि-विभूतिमान्। पुरुषोत्तमसञ्ज्ञो हि तं श्रीकृष्णं समाश्रये ॥

यस प्रकार वेद इतिहास पुराणादिको सार भन्नुभयो। अब भनेको अर्थको स्तुति गरेर अध्यायलाई समाप्त गर्नुहुन्छ- यस प्रकार अति रहस्य र गोपनीयहरू भन्दा पनि गोपनीय यस सबै गीताको सार अर्थलाई मैले संक्षेपमा भने। हे पापरहित अर्जुन! (अनघ भन्नुको भाव यो हो कि पापरहित हुनाले तिमी यस ज्ञानको उपदेशको अधिकारी हौ) हे अर्जुन! यस अतिगुह्य, सर्वशास्त्रहरूको अर्थलाई जानेर कोही पनि बुद्धिमान् हुनसक्छ अर्थात् परमश्रेय (मुक्ति)को हितकर बुद्धिले युक्त हुनेछ, त्यो कृतकृत्य हुनेछ अर्थात् उसले केही पनि गर्न बाँकी रहँदैन। भाव यो कि जब कुनै मनुष्य यस मैले भनेको कुरालाई राम्रोसँग जानेर कृतार्थ हुन्छ भने तिमी त हे अर्जुन! यसलाई जानेर कृतार्थ नै हुनेछौ यसमा सोध्नु नै के छ र किनकी तिमी उत्तम कुलमा उत्पन्न छौ र मेरो शिष्य हौ ॥२० ॥

'स.....समाश्रये' (हामी त्यस कृष्णको शरणमा जाऔं जो वेदद्वारा जान्न सकिन्छ, शास्त्रतत्त्वको उपदेशक हुन्, क्षर अक्षर पदार्थ भन्दा विलक्षण छन्, सबैमा बसेका र परमात्मा हुन्, भास्कर आदि जसको विभूति हुन र जो पुरुषोत्तम भनिन्छन्। यस अध्यायको यही सार हो)

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां पुरुषोत्तमयोगो नाम पञ्चदशोऽध्यायः ॥१५ ॥**

--★--★--★--

ॐश्रीपरमात्मने नमः

# अथ षोडशोऽध्यायः

## श्रीभगवानुवाच

**अथयं सत्त्वसंशुद्धिर्ज्ञानयोगव्यवस्थितिः।**
**दानं दमश्च यज्ञश्च स्वाध्यायस्तप आर्जवम्॥**

**श्रीभगवान्ले भन्नुभयो- भयको सर्वथा अभाव, अन्तःकरणको अत्यन्त शुद्धि, ज्ञानको लागि योगमा दृढ़ स्थिति र सात्त्विक दान, इन्द्रियहरूको दमन, यज्ञ, स्वाध्याय, कर्तव्य-पालनको लागि कष्ट सहनु र शरीर-मन-वाणीको सरलता॥१॥**

तदेवं भगवद्भावापत्तिलक्षणमोक्षप्राप्तिसाधनभूतभगवदनन्यभक्तेरन्तङ्गसाधनतया क्षेत्रज्ञस्वरूपयाथात्म्यं ततसंसृतिहेतुः प्रकृतिगुणसंयोगश्च त्रयोदशे उक्तः। ततो गुणलक्षणबन्धनप्रकारस्तदत्ययप्रकारेण ब्रह्मभावप्राप्तिश्चतुर्दशेऽभिहिता। पञ्चदशे च संसारस्य वृक्षस्येव वैराग्यशितेन ज्ञानशस्त्रेण छेदनपूर्वकपरमपदप्राप्तिः, प्राप्तुः प्रत्यगात्मनो मुक्तस्य संसारिणश्च भगवदंशत्वं, भगवतश्चादित्यचन्द्राग्न्यादिविभूतिमत्त्वात् क्षराक्षरपुरुषद्वयवैलक्षण्येन पुरुषोत्तमत्वं, तथा पुरुषोत्तमत्वज्ज्ञातुः सव्रज्ञतवं भगवद्भक्तत्वं कृतकृत्यत्वं च वर्णितम्। इदानीमुक्तस्य गुह्यतमशास्त्रस्याधिकारिनिर्णयाय "अवजानन्ति मां मूढा" इत्युपक्रम्य "राक्षसीमासुरीं चैव प्रकृतिं मोहिनीं श्रिताः। महात्मानस्तु मां पार्थ! दैवीं प्रकृतिमाश्रिताः। भजन्त्यनन्यमनसो ज्ञात्वा भूतादिमव्ययमि"ति नवमाध्याय उद्दिष्टयोर्हेयोपादेययोर्दैवासुरसम्पदोर्विवरणभूतः षोडशोध्याय आरभ्यते। तत्र राक्षस्यासुर्योः संसरणहेतुत्वाविशेषादेकी कृत्यासुरीमेवेह परिहाराय निरूपयितुं तावन्मोक्षहेतुभूतामुक्तशास्त्राधिकारोपयुक्तामुपादेय दैवी सम्पदं श्लोकत्रयेण प्रदर्शयन श्रीभगवानुवाच-अभयमिति। तत्रागन्तुकदुःखस्य हेतुदर्शनजमन्तर्दुःखं भयं तद्राहित्यमभयं, सत्त्वमन्तःकरणं तस्य संशुद्धिः रागद्वेषादिशून्यता, ज्ञानयोगव्यवस्थितिः आत्मज्ञानोपाये परिनिष्ठा,दानं स्वधर्मोपार्जितान्नादेःपात्रे प्रतिपादनं, दमोऽन्तःकरणस्य विषयप्रवणतानिवर्त्तनं, यज्ञो महायज्ञादिः, ब्रह्मयज्ञो जपयज्ञो वा, स्वाध्यायः भगवत्स्वरूपगुणलीलाविभूति-

यस प्रकार तेह्रौ अध्यायमा भगवद् भावप्राप्ति लक्षणवाला मुक्तिलाई प्राप्त गर्ने साधन अनन्यभक्तिको अन्तरंग साधन क्षेत्रज्ञको यथार्थ रूपलाई र क्षेत्रज्ञको संसृतिको कारण त्रिगुण प्रकृतिको संयोगलाई भन्नुभयो। फेरि चौधौं अध्यायमा गुणहरूका लक्षण, तिनीहरूले बाँध्ने तरीका र तिनीहरूबाट छुट्ने प्रकार र ब्रह्मभावको प्राप्तिका बारेमा भन्नुभयो। र पन्ध्रौं अध्यायमा संसार वृक्षको वर्णन तथा वैराग्य र ज्ञानरूपी धारिलो अस्त्रद्वारा त्यसको छेदन पूर्वक परमपदको प्राप्ति र, मुक्त र बद्ध वा संसारी दुबै प्रकारका जीवहरू भगवत् अंश भएको, सूर्य, चन्द्र, अग्नि आदि भगवत् विभूति भएको तथा क्षर र अक्षर पुरुष भन्दा विलक्षण भएकोले भगवान् पुरुषोत्तम भएको र भगवान्को पुरुषोत्तम तत्त्वलाई जान्नेवाला सर्वज्ञ, भगवद्भक्त र कृतकृत्य भएको वर्णित भयो। त्यस पछि अति गोपनीय शास्त्रको अधिकारीको निर्णय गर्नका लागि नवौं अध्यायमा जसलाई संक्षेपले 'अवजानन्ति मां मूढ़ाः' बाट आरम्भ गरेर 'राक्षसी........व्ययम्' आदिले भन्नुभयो, त्यसलाई छोड्ने र ग्रहण गर्न योग्य दैवी र आसुरी सम्पद्को विवरण अब यस सोह्रौं अध्यायमा गर्नुहुनेछ। राक्षसी र आसुरी सम्पत् दुईटै नै संसारमा धकेलिदिने कारण हुन् यसैले दुबैलाई मिलाएर यहाँ एक आसुरीलाई नै छोड्न योग्य भनेर निरूपण गर्नुहुन्छ। अब यहाँ तीन श्लोकहरूले मोक्षको कारण, पहिले भनेका शास्त्रको अधिकारी बनाउनमा उपयुक्त, र यसैले ग्रहण गर्न योग्य दैवी सम्पत्लाई देखाउँदै भगवान्ले भन्नुभयो। आउने दुःखले जनित अन्तरको दुःखले रहित हुनु अभय भनिन्छ। सत्त्व संशुद्धि अर्थात् अन्तःकरण रागद्वेष रहित हुनु, ज्ञानयोगव्यस्थिति अर्थात् आत्मज्ञानको उपायमा धेरै लाग्नु, दान अर्थात् स्वधर्मद्वारा कमाएको अन्नादिलाई सत्पात्रलाई दिनु, दम अर्थात् अन्तःकरणलाई विषय तिर जानबाट रोक्नु, यज्ञको अर्थ महायज्ञादि अथवा ब्रह्मयज्ञ वा जपरूपी यज्ञ, स्वध्याय अर्थात् भगवत् स्वरूप, गुण, लीला,

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

प्रतिपादकरहस्यादिपाठाभ्यासः, तपः उत्तराध्याये वक्ष्यमाणं सात्त्विकं शारीरादिकम्,आर्जवं मनोवाक्कायवृत्तीनां समत्वम् ॥१ ॥

विभूतिका प्रतिपादक रहस्य ग्रन्थहरूको पाठ, तप अर्थात् अगाडि भनिने सात्त्विक शरीरबाट गरिने तप र आर्जव अर्थात् मन, बचन, कर्मको समानता ॥ १ ॥

–★–★–★–

**अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम्।**
**दया भूतेष्वलोलुप्त्वं मार्दवं ह्रीरचापलम्॥**

**अहिंसा, सत्यभाषण, क्रोध नगर्नु, संसारको कामनाको त्याग, अन्तःकरणमा राग-द्वेषजनित हलचल नहुनु, चुक्ली नलगाउनु, प्राणिहरूलाई दया गर्नु, संसारिक विषयहरूमा न लोभिनु, अन्तःकरणको कोमलता, अकर्तव्य हुनमा लज्जा, चंचलताको अभाव ॥ २ ॥**

किञ्च–अहिंसेति। अहिंसा प्राणिमात्रपीडावर्जनं, सत्यं यथादृष्टश्रुतार्थभाषणम्, अक्रोधः अपराधकारिणि सन्निहिते॓प्यविकृतचित्तत्वं, त्यागः अन्याभिका ङ्क्षितस्य प्रियस्यापि वस्तुनो दातृत्वशक्तिः, शान्तिरिन्द्रियवृत्तिरोधनम्, अपैशुनं परोक्षे परदोषप्रकाशनवर्जनं, भूतेषु दया दुःखासहिष्णुता, अलोलुपत्वम् पकारलोप आर्षः ज्ञानेन्द्रियाणां विषयेष्व–चाञ्चल्यमित्यर्थः, मार्द्दवं कोमलहृदत्वं, ह्रीरकार्यकरणे लज्जा, अचापलं प्रयोजनं विनाऽपि कर्मेन्द्रियाणां प्रवर्त्तनं चापलं तदभावोऽचापलमित्यर्थः ॥२ ॥

प्राणीमात्रलाई पीड़ा नदिनु अहिंसा हो। जस्तो देखेको छ या सुनेको छ त्यस्तो नै भन्नु सत्य हो। अपराधी निकटमा भएपनि चित्तमा विकार नहुन दिनु अक्रोध हो। अरुले इच्छा गरेको आफ्नो प्यारो वस्तुलाई पनि दिने शक्तिलाई त्याग भन्दछन्। इन्द्रियहरूका वृत्ति शान्ति हो। पीठ पछाडि अर्काको दोष प्रकट नगर्नुलाई अपिशुनता भन्दछन्। जीवहरूको दुःख सहन नसक्नु दया भनिन्छ। ज्ञानेन्द्रियहरूको विषयमा अचंचलता अलोलुपता हो। (श्लोकमा जो अलुलप्त्वं को 'प्' लुप्त छ त्यो आर्ष प्रयोग हो। कोमल हृदय हुनु मार्द्दव हो। नराम्रो काम गर्नमा लज्जा नै ह्री भनिन्छ र कर्मेन्द्रियहरूलाई बिना प्रयोजनको प्रवृत्तिलाई रोक्नु अचपलता हो ॥ २ ॥

–★–★–★–

**तेजः क्षमा धृतिः शौचमद्रोहो नातिमानिता।**
**भवन्ति सम्पदं दैवीमभिजातस्य भारत॥**

**तेज (प्रभाव), क्षमा, धैर्य, शरीरको शुद्धि, वैरभाव नहुनु र मान नचाहनु, हे भारत! यी सबै दैवी सम्पदालाई प्राप्त गरेका मनुष्यको लक्षण हो ॥ ३ ॥**

किञ्च–तेज इति। तेजः प्रागल्भ्यं दुर्जनैरभिभवितुमशक्यत्वं, क्षमा सामर्थ्ये सत्यपि स्वापराधकारिणं क्रोधाकरणं, धृतिः आपद्यपि स्वधर्मादचलनेन कर्त्तव्यावधारणं, शौचं बाह्याभ्यन्त–रशोधनम्, अद्रोहो मनोवाक्कायैः परस्यानिष्टकर्त्तृत्वाभावः, नातिमानिता आत्मनि पूज्यत्वातिशयाभिमानोऽतिमानिता तदभावो नातिमानिता, एते अभयादयो गुणा दैवीं सम्पदम–भिजातस्य भवन्ति। देवा भगवदाज्ञानुवर्त्तिनस्तेषां सम्बन्धिनी सम्पद्दैवी भगवन्नियोगैकवृत्तिस्तामभिजातस्य तदाभिमुख्येन जातस्य तामभिलक्ष्य जातस्य भाविश्रेयस्करस्य पुंसो भवन्तीत्यर्थः ॥३ ॥

दुर्जनले हराउन नसक्नु तेज हो। बल भएर पनि अपराधिहरू माथि क्रोध नगर्नु क्षमा भनिन्छ। आपत् मा पनि आफ्नो धर्ममा अविचलित भई आफ्नो कर्तव्यमा डटिरहनु धृति भनिन्छ। बाहिर भित्रको पवित्रता शौच हो। मन वचन कर्मले कसैको अनिष्ट नगर्नु लाई अद्रोह भन्दछन्। आफ्नो विषयमा पूज्यत्व भाव राखेर अति अभिमान नगर्नु नातिमानिता भनिन्छ। हे अर्जुन! यी अभय आदि गुण दैवी सम्पद्वालामा हुन्छन्। भगवदाज्ञाको अनुवर्त्ती मनुष्यहरूको जो सम्पत्ति हुन्छ जो भगवान्मा एक वृत्तिवाला छन्, दैवी सम्पद् सन्मुख भएर उत्पन्न भएका हुन् र जसको भविष्य राम्रो छ ॥ ३ ॥

–★–★–★–

## दम्भो दर्पोऽभिमानश्च क्रोधः पारुष्यमेव च।
## अज्ञानं चाभिजातस्य पार्थ सम्पदमासुरी मता॥

**हे पार्थ! दम्भ गर्नु, घमण्ड गर्नु र अभिमान गर्नु, क्रोध गर्नु तथा कठोरता राख्नु र अविवेकि पनि हुनु -यी सबै आसुरी सम्पदामा प्राप्त भएका मनुष्यहरूका लक्षण हुन्॥४॥**

एवमुपादेयां सम्पदमुक्त्वा हेयामासुरीं सम्पदं सङ्क्षिप्यैकेन श्लोकेनाह–दम्भ इति। दम्भो धार्मिकत्वख्यापनाय किञ्चिद्धर्माचारः, दर्पो धनविद्यादिनिमित्तमौद्धत्यम्, अभिमानः अभिजात्यादिनिमित्त आत्मन्यतिश्रेष्ठत्वाभिनिवेशः,क्रोधः परपीडाहेतुरभिज्वननात्मकश्चित्तविकारः, पारुष्यं रूक्षवद–नेनाप्रियवाचित्वम्, अज्ञानं तत्त्वातत्त्वकृत्याकृत्यविवेक–शून्यत्वं, चकारोभयसत्त्वाशुद्ध्यवृत्यादिदोषाणां समुच्च–यार्थः। एते दोषा आसुरीं सम्पदमभिजातस्य भवन्ति। असुरा भगवदाज्ञाविपरीताचारशीलास्तेषां सम्बन्धिनी सम्पदासुरी तामभिलक्ष्य जातस्य तामेवाभिवर्त्तयितुं जातस्य भवन्तीत्यर्थः॥४॥

यस प्रकार ग्रहण गर्नयोग्य दैवी सम्पद्‌लाई वर्णन गरेर अब एकश्लोकले संक्षेपमा छोड्नयोग्य आसुरी सम्पद्‌लाई भन्नुहुन्छ। आफ्नो धार्मिकता प्रसिद्ध गर्नको लागि धर्मको देखावटी आचरण गर्नु दम्भ हो। धन र विद्याको कारण जो घमण्ड हो त्यसलाई दर्प भनिन्छ। ठूलो जातमा जन्म आदिको कारण आफुलाई श्रेष्ठ मान्नु अभिमान भनिन्छ। अर्कालाई पीडा दिन जो ज्वलनात्मक चित्त को विकार हुन्छ (यानि कि रिसले आगो हुनु) त्यसलाई क्रोध भन्दछन्। रुखो मुखले कठोर वचन बोल्नु परुषता हो। तत्त्व अतत्त्व र कृत्य अकृत्यको विवेकले शून्य हुनु अवज्ञान हो। 'च' ले अरुपनि हेय गुणहरूका बोध गराउँछ, जस्तो शरीर र मनको अशुद्धि, अधीरता आदि। यी दोष हे अर्जुन! आसुरी सम्पद्‌मा स्थित वा उत्पन्न मनुष्यहरूका हुन्छन्। भगवदाज्ञाको विपरीत हिड्ने असुर हुन्। उनीहरूकै सम्पद् आसुरी सम्पद हो। यस सम्पद्‌ले युक्त मनुष्यहरूमा यी माथि भनिएका दोष पाईन्छन्॥४॥

–★–★–★–

## दैवी सम्पद्विमोक्षाय निबन्धायासुरी मता।
## मा शुचः सम्पदं दैवीमभिजातोऽसि पाण्डव॥

**दैवी सम्पत्ति मुक्तिको लागि र आसुरी सम्पत्ति बन्धनको लागि मानिएको छ। हे पाण्डव! तिमीले दैवी सम्पत्ति प्राप्त गरेको छौ, यसैले तिमी चिन्ता नगर॥५॥**

उभयोः सम्पदोः कार्यभेदमाह–दैवी सम्पदिति। दैवी उक्त–लक्षणा भगवदाज्ञानुवृत्तिरूपा सम्पद्विमोक्षाय संसाराद्विशेषेण मोक्षाय उक्ततत्त्वज्ञानद्वारेण भगवद्भावापत्तये भवति। आसुरी भगवदाज्ञाविपरीताचारवृत्तिर्निबन्धाय नितरां बन्धः संसार–स्तस्मै नितरामासुरीराक्षसीयोनिषु पातायैव मता। शास्त्रज्ञै–रिति शेषः।एवं श्रुत्वाऽहं कतरां सम्पदभिजातोऽस्मीति सन्दिग्धचित्तमर्जुनमालक्ष्याश्वासयति–मा शुच इति। हिंसक धर्मक्षत्रियकुलजात आसुरीं सम्पदमभिजातः स्यामिति शङ्क्या शोकं मा कृथाः। यतस्त्वं दैवीं सम्पदमभिलक्ष्य जातोऽसीति एतदेव सम्बोधनेन बोधयति–हे पाण्डवेति। धार्मिकाग्रेसराणां भरतकुरुप्रभृतीनां कुले जातस्य पाण्डोस्त–नयस्त्वमपि धार्मिक एव न त्वासुरप्रकृतिरिति भावः॥५॥

अब दैवी र आसुरी सम्पदाहरूका कार्यभेद वर्णन गर्नुहुन्छ। भगवदाज्ञाको अनुकूल वृत्तिवाला सम्पद्, जसका लक्षण पहिले नै भनिसकिएका छन्, तत्त्वज्ञानको द्वारा मोक्ष अर्थात् भगवत् भावको प्राप्ति गराउँदछ। र भगवदाज्ञाको विरुद्ध आचरणवाला आसुरी सम्पद् सदाको लागि बन्धनमा अर्थात् संसारमा डुबाईदिन्छ तथा आसुरी र राक्षसी योनिहरूमा झारिदिन्छ। यी शास्त्रलाई जान्नेवालाहरूका मत हुन्। यस्तो सुनेर अर्जुनको मनमा सन्देह भयो कि म कुन सम्पद्‌वाला हुँ, भगवान्‌ले यस्तो अर्जुनको विचार जानेर उनलाई आश्वासन दिंदै भन्नुभयो। हे अर्जुन! तिमी यो संझेर कि म हिंसक धर्मवाला क्षत्रिय कुलमा उत्पन्न छु यसैले आसुरी सम्पद्‌वाल हुँ, शोक नगर किनकी तिमी दैवी सम्पद्‌ले युक्त भई जन्म लिएका छौ। यसैले अर्जुनलाई पाण्डव भनेर सम्बोधन गर्नुहुन्छ। मतलब यो कि धार्मिकहरूमा श्रेष्ठ भरत, कुरु आदि राजाहरूका वंशमा उत्पन्न पाण्डुको तिमी पुत्र हौ यसैले तिमी धार्मिक छौ। आसुरी सम्पद्‌वाला तिमी हुन सक्दैनौ॥५॥

–★–★–★–

## द्वौ भूतसर्गौ लोकेऽस्मिन्दैव आसुर एव च।
## दैवो विस्तरशः प्रोक्त आसुरं पार्थ मे शृणु॥

**यस संसारमा दुई प्रकारका प्राणिहरूको सृष्टि छ- दैवी र आसुरी। दैवीलाई त मैले विस्तारमा भने, अब हे पार्थ! तिमी मबाट आसुरीलाई विस्तारमा सुन॥६॥**

ननु राक्षसीं प्रकृतिमासुर्यामन्तर्भाव्य दैव्यासुरसम्पदद्वय-निरूपणेन तद्वत्तया देवा असुराश्च निर्दिष्टाः स्यादेवं "त्रयः प्राजापत्या देवा मनुष्या असुरा" इति श्रुतौ मनुष्याः पृथ-ङ्निर्दिष्टास्ते कस्याः कोटावन्तर्भवन्तीत्यत आह-द्वाविति। अस्मिल्लोके देवासुरत्वसाधके कर्माधिकारे मनुष्यलोके भूतसर्गौ मनुष्यसर्गौ द्वौ द्विप्रकारौ भवतः। कौ? दैव आसु-रश्च। एवकारेणान्यसर्गव्यवच्छेदः। देवा असुराश्चेति द्विविधा एवमनुष्याः राक्षसाश्चासुरान्तर्गता एवेत्यर्थः। प्राचीनशुभा-शुभकर्मवशाद्भगवदाज्ञानुवर्त्तनाय तद्विपरीताचरणाय चोत्पत्तिकाल एव देवासुरस्वभावा मनुष्या जायन्ते इति भावः। तत्र शुभवासनावान् जन्मसमये भगवत्कटाक्षाव-लोकितश्चेत् शमदमदयाऽहिंसादिसात्त्विकवृत्तिनिष्ठो देव इति ज्ञेयः। अशुभवासनावान् जन्मसमये ब्रह्मरुद्राद्यवलो-कितश्चेत् कामक्रोधलोभमोहिंसामात्सर्यादिरजस्तमो-वृत्तिस्थोऽधर्मपरायणोऽसुर इति ज्ञेयः। तथोक्तं मोक्षधर्मे "जायमानं हि पुरुषं यं पश्येन्मधुसूदनः। सात्त्विकः स तु विज्ञेयः स वै मोक्षार्थचिन्तकः। पश्यत्येनं जायमानं ब्रह्मा रुद्रोऽथवा पुनः। रजसा तमसा चैव मानसं समभिप्लुत-मि"ति। विष्णुधर्मे शौनकेनाप्युक्तं "द्वौ भूतसर्गौ लोकेस्मिन् दैव आसुर एव च। विष्णुभक्तिपरो दैवो विपरीतस्त-थाऽऽसुर"इति। तत्र दैवो दैवीसम्पदाश्रयो विस्तरशः प्रोक्तः सप्तमे नवमे द्वादशे। अमानित्वादिगुणवान् त्रयोदशे, गुणा-तीतलक्षणो चतुर्दशे, "निर्मानमोहा" इत्यादिना पञ्चदशे च अभयमित्यादिनाऽत्राप्युक्तः। आसुरम् असुराणां यथा प्रवृत्ति स्वभावस्तं मनुष्यसर्गं हे पार्थ! मे मत्तः शृणु॥६॥

**राक्षसी सम्पद् आसुरीको नै अन्तर्गत हो यसैले आसुरी र दैवी दुई सम्पद् भनियो र दुबैले युक्त देव असुर भए। तर श्रुतिमा मनुष्य जातिलाई देव र असुर भन्दा पृथक् भनेको छ, जस्तो- 'त्रयः.... ..असुराः' (ब्रह्माबाट उत्पन्न तीन छन्-देव, मनुष्य र असुर) तब मनुष्य जाति कसको अन्तर्गत छ? यस प्रश्नको उत्तर यहाँ दिनुहुन्छ।देवत्व र असुरत्वको साधक यस कर्मभूमि मनुष्यलोकमा दुई प्रकारको मनुष्यको सृष्टि छ, दैवी र आसुरी। 'एव' को अर्थ हो कि तेस्रो सृष्टि छैन। भाव यो कि दुई प्रकारको नै मनुष्य हुन्छन्, देव र आसुर स्वभाववाला। राक्षस मनुष्य असुर मनुष्यको अन्तर्गत हो। प्राचीन शुभ र अशुभ कर्महरूका वशले नै देव र असुर स्वभाववाला मनुष्य जन्मन्छन्। एकको स्वभाव हुन्छ भगवान्‌को आज्ञाहरू उल्लंघन गर्नु। यसलाई यसरी संझिनु पर्दछ। जो शुभ वासनावाला छन् तिनीहरूको जन्मकालमा भगवान्‌को कृपाकटाक्ष पर्दछ जसले ती शम, दम, अहिंसा आदिसत्त्व गुणहरूका वृत्तिले युक्त देव स्वभाववाला हुन्छन्। र जो अशुभ वासनावाला हुन्छन् उनीहरूमा जन्मसमयमा ब्रह्मा र शिवको दृष्टि पर्दछ यसैले ती काम, क्रोध, लोभ, मोह, हिंसा, मात्सर्य आदि राजसिक र तामसिक गुणहरूका वृत्तिले युक्त असुर स्वभाववाला हुन्छन्। महाभारतको मोक्ष पर्वमा यस्तो भनिएको छ- अर्थात् जन्म लिने समयमा जुन पुरुषलाई मधुसूदन हेर्नुहुन्छ त्यसलाई मोक्षको चिन्तन गर्नेवाला र सात्त्विक जान्नु र जन्मसमयमा जसमाथि ब्रह्मा अथवा शिवको दृष्टि पर्दछ त्यसको मन रजोगुण र तमोगुणले ओतप्रोत रहन्छ। विष्णुधर्ममा शौनकले पनि भनेका छन्-यस लोकमा मनुष्यको दुई प्रकारको सृष्टि छ, एउटा आसुरी र अर्को दैवी। दैवी सम्पद्वालाहरूको वर्णन विस्ताररूपमा सातौं, नवौं र बाह्रौं अध्यायमा गरिएको छ। तेह्रौ अध्यायमा पनि उसको अमानिता आदि गुण, चौधौं अध्यायमा त्यो सत, रज, तम गुणहरूबाट अतीत हुनु र पन्ध्रौं अध्यायमा मान मोहले रहित हुनु आदि बताईएको छ। यस अध्यायमा पनि उसको अभय आदि गुण भनिएको छ। हे अर्जुन! अब तिमी मबाट आसुरी प्रकृत्तिवाला मनुष्यहरूका सृष्टिको बारेमा सुन॥६॥**

-★-★-★-

## प्रवृत्तिं च निवृत्तिं च जना न विदुरासुराः।
## न शौचं नापि चाचारो न सत्यं तेषु विद्यते॥

**आसुरी प्रकृतिवाला मनुष्य कसमा प्रवृत्त हुनु पर्दछ र कसबाट निवृत्त हुनुपर्दछ यस कुरालाई जान्दैनन् र उनीहरूमा न त**

**बाह्य शुद्धि, न श्रेष्ठ आचरण तथा न सत्य-पालन नै हुन्छ॥७॥**

प्रतिज्ञातमासुरसर्गमेव विस्तरशो निरूपयति- प्रवृत्तिमित्यादिद्वादशभिः श्लोकैः। प्रवृत्तिं त्रिवर्गसाधनं प्रवृत्तिलक्षणं धर्मं, चकाराभ्यामुभयविधधर्मप्रतिपादक-मुभयविधं शास्त्रं च आसुरा आसुरीं सम्पदमभिजाता जना न विदुर्न जानन्ति। अत एव तेष्वासुरेषु शौचं प्रवृत्तिनिवृत्ति-धर्मोपयोगिबाह्याभ्यन्तरं तथा आचारोऽपि येनाचारेण वैदिकेन सन्ध्यावन्दनादिना तच्छौचं जायते, स न विद्यते "सन्ध्याहीनोऽशुचिर्नित्यमनर्हः सर्वकर्मसु। यदन्यत्कुरुते कर्म न तस्य फलभाग्भवेदि"ति स्मृतेः। सत्यं च यथा-दृष्टश्रुतार्थभाषणं श्रुतिस्मृत्यात्मकं शास्त्ररूपं प्रमाणं वा तेषु न विद्यते। बन्धमोक्षज्ञानहीना अशौचा अनाचारा अनृतभाषिणः असुराः प्रसिद्धास्तथाविधा मनुष्या अप्यसुरा ज्ञेया इत्यर्थः॥७॥

माथिको श्लोकमा प्रतिज्ञा गरेको असुर सृष्टिलाई विस्तारपूर्वक भगवान् भन्नुहुन्छ-

आसुरी सम्पद्मा उत्पन्न मनुष्य त्रिवर्ग(अर्थ, धर्म, काम)को साधक प्रवृत्ति धर्महरूलाई र मोक्षको साधक निवृत्ति धर्मलाई, र दुबै प्रकारको धर्महरूका प्रतिपादक शास्त्रहरूलाई जान्दैनन् यसैले यस्ता मनुष्यमा प्रवृत्ति र निवृत्ति धर्ममा उपयोगी बाहिर भित्रको पवित्रता रहँदैन, र जुन वैदि सन्ध्या वन्दनादि आचार द्वारा पवित्रता हुन्छ त्यो पनि रहँदैन किन भने स्मृतिको वचन छ-'सन्ध्याहीनो... .......भवेत्' अर्थात् सन्ध्याहीन पुरुष अपवित्र र सबै कर्महरूको अयोग्य हुन्छ। जो काम त्यो गर्दछ त्यसको त्यसलाई मिल्दैन। यस्ता मनुष्यमा सत्यता, (अर्थात् जस्तो सुनिएको र देखिएको छ त्यस्तो नै भन्नु अथवा श्रुति स्मृतिरूप शास्त्रलाई प्रमाण मान्नु।) रहँदैन। असुरहरूका जुन अवगुण प्रसिद्ध छन् जस्तै- बन्धमोक्षको ज्ञानले हीनता, अपवित्रता, अनाचार, झुटो बोल्नु आदि यी सबै दोष यी आसुरी प्रकृतिवाला मनुष्यमा पाईन्छ॥७॥

-★-★-★-

## असत्यमप्रतिष्ठं ते जगदाहुरनीश्वरम्।
## अपरस्परसम्भूतं किमन्यत्कामहैतुकम्॥

**उनीहरू भन्ने गर्दछन् कि संसार असत्य, बिना मर्यादाको र बिना ईश्वरकै आफै केवल स्त्री-पुरुषको संयोगले पैदा भएको हो। यसैले काम नै यसको कारण हो, यसको सिवाय अरु के कारण हुन्छ र? (अन्य कारण हुन नै सक्दैन)॥८॥**

अत एव-असत्यमिति। तस्मात्तेषु दृष्टादृष्टसर्ववस्तुज्ञापकं श्रेयोबोधकं शास्त्रं न विद्यतेऽत एव ते असत्यमप्रतिष्ठ-मनीश्वरं च जगदाहुः। तत्र "सदेव सौम्येदमग्र आसीत्, सत्त्वाच्चावरस्य, भावे चोपलब्धेः, ऊद्ध्र्वमूलमधःशाख-मश्वत्थं प्राहुरव्ययमि"त्यादिभिः सत्यत्वेनोक्तमपि असत्यं कालत्रयेऽपि सत्ताशून्यं सत्यतया भानं भ्रान्त्येत्याहुः, न चासदेवेदमग्र आसीदिति श्रुतौ असद्व्यपदेशस्यापि विद्यमानत्वात्कथं सत्यमिति चेन्न "असद्व्यपदेशादिति चेन्न धर्मान्तरेण वाक्यशेषादि"ति वाक्यशेषे सत्यत्वाभि-धानात्। तथा "सन्मूलाः सोम्येमाः सर्वाः प्रजाः सदायतनाः

किनकी आसुरी सम्पद्वाला देखिने र नदेखिने वस्तुहरूलाई वर्णन गर्ने र श्रेय(मोक्ष)को बोधक शास्त्रहरूलाई मान्दैनन् यसैले ती जगत्लाई असत्य, बिना आश्रयको र कर्त्ता नियन्ताहीन भन्दछन्। श्रुतिमा भनेको छ- 'सदेव...आसीत्' (हे शिष्य! यस भन्दा पहिले सत् नै थियो।) पछि रायणले सूत्रमा लेखेका छन्-(सत्बाट कार्यको उत्पत्ति हुन्छ किनकी कारणमा कार्य थियो, कारणमा हुनाले नै कार्यको उत्पत्ति हुन्छ) र भगवान्ले पनि पछि यस गीतामा नै भन्नुभएको छ-(माथि मूल र तल हाँगा भएको अश्वत्थ वृक्षरूप संसार सत् र अव्यय हो।) तर आसुरी प्रकृतिवाला मनुष्य यी श्रुतिसूत्र स्मृतिको प्रमाणलाई मान्दैनन् ती भन्दछन् यो संसार असत्य हो, तीनै कालमा सत्ताशून्य छ, यो सत्यको जस्तो देखिनु केवल भ्रान्ति मात्रै हो। ती श्रुतिको प्रमाणपनि आफ्नो मतको पुष्टिमा दिन्छन्, यथा- 'असदेवेदमग्र आसीत' (यसको पहिले असत् नै थियो) र भन्दछन् कि श्रुतिमा जगत्लाई असत् नै मानेको छ भने यो सत्य कसरी भयो? तर उनीहरूको यो समझ भूलले भरिएको छ किन भने किन भने सूत्रकार भन्दछन् 'असद्....शेषात्(जगत्लाई असत्य न जान्नु। जगत्लाई असत्य धर्मान्तरले भनिएको हो। त्यसैको छान्दोग्यको अन्तको

सत्प्रतिष्ठाः, बुद्धिर्मनो महद्वायुस्तेजोऽम्भः खं मही च या। चतुर्विधं च यद्भुतं सर्वं कृष्णे प्रतिष्ठितम्। विष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगदि"त्यादिशास्त्रान्मदाधारकम्, अप्रतिष्ठं नास्ति परमात्मा ब्रह्म प्रतिष्ठा यस्य तदप्रतिष्ठ-मित्याहुः। तथा "यतो वा इमानि भूतानि जायन्ते, अहं सर्वस्य प्रभवो मतः सर्वं प्रवर्त्तते। अन्तःप्रविष्टः शास्ता जनानां सर्वात्मा, ससुरासुरगन्धर्वं सयक्षोरगराक्षसम्। जगद्वशे वर्त्ततेऽद कृष्णस्य सचराचरमि"त्यादि-शास्त्रान्मत्कार्यं मन्नियम्यं मदात्मकं मदधिष्ठितं च, अनीश्वरं न विद्यते ईश्वरः कर्ता शास्ताऽन्तरात्माऽधिष्ठाता वा यस्य तदनीश्वरमित्याहुः। तर्हि कुतो जगदुत्पत्तिं वदन्तीत्यत आह-अपरस्परसम्भूतमिति। अपरश्च परश्चेत्यपरस्परं कामप्रयुक्तयोः स्त्रीपुरुषयोः संयोगात्सम्भूतं मनुष्यपश्वादिसर्वं जातमित्यर्थः। किमन्यत्कामहैतुकं कामहेतुकमेव कामहैतुकं स्त्रीपुरुषयोः कामात् किमन्यत् जगतः कारणं ? न किञ्चिदपि दृष्टमित्यर्थः। दृष्टार्थादन्यद-दृष्टं धर्माधर्मेश्वरादिकं कारण न मन्यन्ते इति भावः॥८॥

श्रुतिले जगत् सत्य छ यो स्पष्ट हुन्छ)। भाव यो कि सूत्रकारले जगत्को असत्यता अव्याकृत रूपले (पहिले प्रकट थिएन पछि सृष्टिकालमा प्रकट भएको) वा परिणामी हुलाले(संसार बदलि रहन्छ एकरूपले रहँदैन) अथवा धर्मान्तरको योगले (कारणावस्थामा कार्य कारणमा सूक्ष्म रूपले थियो यसैले न देखिएको कारण असत् भनिएको छ।) माथि जुन वाक्य शेषको उल्लेख गरिएको छ त्यो यो हो -'तत्सदासीत्' (जगत् सत्य नै थियो)। फेरि यो कुरा जो आसुरी सम्पदवाला मान्दछन् कि संसारको ब्रह्ममा प्रतिष्ठा छैन यो पनि भ्रममूलक हो किनकी जगत् सत्प्रष्ठि छ यसमा पनि शास्त्र प्रमाण छ यथा 'सन्मूला.....सत्प्रतिष्ठा' (हे शिष्य! यस सबै जगत् को मूल सत् हो, सत् नै यसको घर हो र सत्मा यसको प्रतिष्ठा छ।) 'बुद्धिर्मनो.....प्रतिष्ठितम्' (बुद्धि, मन, महत्, वायु, तेज, जल, आकाश, पृथ्वी, चारै प्रकारका अण्डज, पिण्डज, स्वेदज र उद्भिज जीव सबै श्रीकृष्णमा प्रतिष्ठित छन् अर्थात् उहाँ नै सबैका आधार हुनुहुन्छ। 'विष्ट....जगत्' (यस सम्पूर्ण जगत्मा म आफ्नो एक अंशले व्याप्त छु।) फेरि यो भनियो कि जगत् अनीश्वर छ अर्थात् त्यसको कर्त्ता, शासन कर्त्ता, अन्तरात्मा र अधिष्ठाता कुनैपनि छैन यो कुरा पनि असत्य हो, किन भने जगत्को कारण ईश्वर हो। यसको पनि शास्त्र प्रमाण छ जस्तो- 'यतो....जायन्ते'(जसबाट सबै प्राणीहरू प्रकट भए) ।'अहं....सचराचरम् आदि। यदि ईश्वरबाट जगत्को उत्पत्ति नभएको भए यसको उत्पत्ति भयो कसरी? आसुरी सम्पद्वाला यस प्रश्नको उत्तर दिन्छन् कि यो जगत् पर र अपर अर्थात् पुरुष र स्त्रीको संयोगले भयो। यस्तै संयोगले मनुष्य, पशु आदि सबै उत्पन्न भएका हुन्। स्त्री पुरुष को कामवासनालाई छोडेर यस जगत्को अर्को कारण के हुन सक्दछ? अर्थात् कुनै पनि हुन सक्दैन किनकी अर्को कारण देखिंदैन। भाव यो हो कि यिनीहरू दृष्ट पदार्थको अतिरिक्त अदृष्ट धर्म, अधर्म, ईश्वर आदि कारणहरूलाई मान्दैनन्॥८॥

-★-★-★-

## एतां दृष्टिमवष्टभ्य नष्टात्मानोऽल्पबुद्धयः।
## प्रभवन्त्युग्रकर्माणः क्षयाय जगतोऽहिताः॥

**यस पूर्वोक्त नास्तिक दृष्टिको आश्रय लिने मनुष्य आफ्नो नित्य स्वरूपलाई मान्दैनन्, जसको बुद्धि तुच्छ छ, जो उग्र कर्म गर्नेवाला र संसारका शत्रु हुन् ती मनुष्यहरूको सामर्थ्यको उपयोग जगत्को नाश गर्नको लागि नै हुन्छ॥९॥**

ततश्च-एतामिति। एतां तेषां नास्तिकानां दृष्टिं दर्शनम-वष्टभ्याश्रित्य नष्टात्मानः नष्टो देहातिरिक्त आत्मा येषां ते तथा देहातिरिक्तात्मज्ञानाभावात्। अतोऽल्पबुद्धयः अल्पे नश्वरे प्रत्यक्षसिद्धे देहे पञ्चेन्द्रियविषये वा बुद्धिर्येषां तेऽल्प-बुद्धयः, आत्मानात्मविवेकाभावाद्विपरीतज्ञाना इत्यर्थः।

नास्तिकताको दर्शनको अवलम्बन गरेर यी नष्टात्मा हुन्, अर्थात् यिनीहरूको आत्मा नष्ट भएको छ। नाम देहादिक भन्दा भिन्न आत्मस्वरूपलाई यिनीहरूले भूलेका छन् र यसैले अल्प अर्थात् नश्वर पदार्थहरूमा जस्तै देहादिक वा इन्द्रिय विषयहरूमा यिनीहरूको बुद्धि छ अर्थात् आत्म र अनात्मको विवेक नहुनाले यिनीहरूलाई उल्टो ज्ञान छ। र यी उग्र अर्थात् हिंसा आदि दुष्कर्महरू

उग्रकर्माण: उग्रं हिंसादिबहुलं कर्म येषां ते तथा अत एवाहिता वैरिण: सन्तो जगत: क्षयाय प्रभवन्ति ॥९ ॥

गर्नेवाला हुन र वेद विरुद्ध कूटयुक्तिहरू द्वारा जगत्लाई वेद र ईश्वरबाट भ्रष्ट गर्दछन् र यसैले जगत्को अहित वा वैरी हुन र जगत्को नाशका लागि यिनीहरूको जन्म हुन्छ ॥९ ॥

–★–★–★–

## कामाश्रितय दुष्पूरं दम्भमानमदान्विता: ।
## मोहाद्गृहीत्वासद्ग्राहान्प्रवर्तन्तेऽशुचिव्रता: ॥

**कहिल्यै पूरा नहुने कामनाहरूको आश्रय लिएर दम्भ, अभिमान रर मद मा चूर रहने तथा अपवित्र व्रत धारण गर्ने मनुष्य मोहको कारण दुराग्रह धारण गरेर संसारमा घुमिरहन्छन् ॥१० ॥**

किञ्च–काममिति। दु:पूरं दु:खेनापि पूरयितुमशक्यं काममाश्रित्य दम्भमानमदैरन्विता: मोहादविवेकादसद्ग्राहान् अशुभनिश्चयान् गृहीत्वा उपादाय अशुचिव्रता अशुचीनि मद्यमांसादिविषयाणि व्रतानि येषां तथा भूता: क्षुद्रदेवताराधनादौ प्रवर्त्तन्ते ॥१० ॥

कठिनताले पूरा हुने कामनाहरूको आश्रय गरेर, दम्भ, मान र अहंकारले युक्त भई मोहले दुराग्रहलाई अङ्गीकार गरेर यिनीहरू क्षुद्र देवताको आराधनामा नै प्रवृत्त हुन्छन्। भाव यो हो कि मोहले यो संझेर कि यस मन्त्रले यस देवताको आराधना गरेर यो फल पाईन्छ र यस प्रकारका अरु दुराग्रहहरूलाई स्वीकार गरेर प्रवृत्त हुन्छन्। फेरि यिनीहरू अशुचि व्रतवाला हुन्छन् अर्थात् मासु मद्य आदिको सेवन यिनीहरूको व्रत वा नियम हो ॥१० ॥

–★–★–★–

## चिन्तामपरिमेयां च प्रलयान्तामुपाश्रिता: ।
## कामोपभोगपरमा एतावदिति निश्चिता: ॥

**ती मर्नेबेला सम्म भैरहने अपार चिन्ताहरूको आश्रय लिनेवाला, पदार्थहरूको संग्रह र त्यसको भोगमा नै लागिरहनेवाला र 'जो छ यति नै हो'– यस्तो निश्चय गर्नेवाला हुन्छन् ॥११ ॥**

किञ्च–तामिति। जीवनस्य श्वस्तनस्याप्यनिश्चयाप्यनिश्चयाच्चिन्तां तु अपरिमेयामियत्तया मातुमशक्यां प्रलयान्तां मरणान्तामुपाश्रिता: सदा चिन्ताविष्टचित्ता इत्यर्थ:। तथा कामोपभोगपरमा:। कामोपभोग एव परम: पुरुषार्थो येषां पुनरेतावदिति निश्चिता:। इतोऽधिक: पुरुषार्थो नास्तीति कृतनिश्चया: ॥११ ॥

जीवनको एक स्वासको भरोसा नहुँदा पनि मरण पर्यन्त परिमाण रहित चिन्तामा तत्पर अर्थात् चिन्ताले सदा भरिएको चित्त लिएर र कामको उपभोगलाई नै परमपुरुषार्थ संझिनेहरू र यो निश्चय पूर्वक मान्ने कि यस कामोपभोगको अतिरिक्त अर्को कुनै श्रेष्ठ पुरुषार्थ छैन ॥११ ॥

–★–★–★–

## आशापाशशतैर्बद्धा: कामक्रोधपरायणा: ।
## ईहन्ते कामभोगार्थमन्यायेनार्थसञ्चयान् ॥

**ती सैकड़ौ डोरीको पाशमा बाँधिएका मनुष्य काम–क्रोधको परायण भएर पदार्थहरूको भोग गर्नका लागि अन्याय पूर्वक धन–संचय गर्दछन् ॥१२ ॥**

अत–एवाशेति। आशा एव पाशास्तेषां शतैर्बद्धा: इतस्तत आकृष्यमाणा: कामक्रोधपरायणा: क्रामक्रधमात्रपरमाश्रया आसुरा भवन्तीत्यर्थ: एतावता असुराणां लक्षणमुक्तमिदानीं तत्प्रवृत्तिमाह–ईहन्त इति। कामभोगार्थमन्यायेन चौर्यप्राणि–

आशारूपी पाशले सयौं प्रकार वा धेरै कसेर बाँधिएका अर्थात् आशाले यता उति तानिईरहेका तथा काम र क्रोधको आश्रय गरेका आसुरी प्रकृतिवाला मनुष्य यस्ता नै हुन्छन्। अब उनीहरूका प्रवृत्ति को वर्णन गर्नुहुन्छ। कामभोगको लागि यी अन्यायले

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

वधादिनाऽर्थसञ्चयान् प्रति ईहन्ते चेष्टन्ते ॥१२॥

अर्थात् चोरी, डकैती, प्राणीबध आदि द्वारा पैसा बटुल्ने गर्ने चेष्टा गर्दछन्॥१२॥

-★-★-★-

**इदमद्य मय लब्धमिमं प्राप्स्ये मनोरथम्।**
**इदमस्तीदमपि मे भविष्यति पुनर्धनम्॥**

**(ती यसरी मनोरथ गर्ने गर्दछन् कि) यति चीजहरू त आज हामीले प्राप्त गर्‍यौं र अब यो मनोरथलाई पूरा गर्नुपर्दछ। यति सम्पत्ति त हामी सँग छँदैछ, अरु यति सम्पत्ति त फेरि पनि भैहाल्छ॥१३॥**

तेषामर्थतृष्णां तन्मनोरथकथनेन विवृणोति-इदमद्येति। इदं धनक्षेत्रादिकं मया बुद्धिबलसामर्थ्यवता स्वसामर्थ्येनैव लब्धं न दैवादिना, इदञ्च धनं मनोरथं मनोऽभिलषितं स्वपौरुषेण प्राप्स्ये। इदं धनं स्वसामर्थ्येसञ्चितं मम गृहेऽस्ति। इदमपि मदुपायसाध्यं पुनर्भविष्यति॥१३॥

उनीहरूका धनतृष्णा र उनीहरूका मनोरथ द्वारा वर्णन गर्नुहुन्छ। यो धन खेदतादि मैले आफ्नो बल पौरुषले प्राप्त गरेको हो, देउताको कृपाले होईन। यो मनोवाञ्छित धन म आफ्नो पौरखले प्राप्त गर्नेछु। मेरो सामर्थ्यले अर्जित यो धन मेरो घरमा छ। फेरि मेरो उपायले नै यो धन पनि मलाई नै प्राप्त हुनेछ॥१३॥

-★-★-★-

**असौ मया हतः शत्रुर्हनिष्ये चापरानपि।**
**ईश्वरोऽहमहं भोगी सिद्धोऽहं बलवान्सुखी॥**

**त्यो शत्रु त मबाट मारियो र ती अरु शत्रुहरूलाई पनि म मारिदिने छु। म ईश्वर (सर्वसमर्थ) हुँ। म भोग भोग्ने हुँ। म सिद्ध हुँ। म धेरै बलवान् छु र म सुखी छु॥१४॥**

किञ्च-असाविति। असौ मदीर्ष्युर्दुर्जयः शत्रुः सर्वसामर्थ्यवता मया हतः। एवमपरानपि शत्रूनहं शूरो हनिष्यामि। दुर्बला हि दैवादिकं समाश्रयन्ते नाहं तथा, यत ईश्वरोऽहम्। स्वाधीनोऽहमितरेषां नियन्ताऽस्मि। अहं भोगी स्वत एव प्राप्तसर्वभोगः। सिद्धोऽहं पुत्रमित्रभृत्यादिभिराज्ञानुवर्त्तिभिः स्वतोऽपि बलवान् सुखी सर्वव्याधिरहितः॥१४॥

आफ्नो इर्ष्या गर्नेवाला र दुर्जय शत्रुलाई आफ्नो सामर्थ्यले मैले मारे। यसै प्रकार अरु शत्रुलाई पनि म मार्दछु। दुर्बलहरू दैवको भरोसा गर्दछन्। म त्यस्तो छुईन किनकी म ईश्वर अर्थात् स्वाधीन र सबैका नियन्ता हो। म भोगी हो अर्थात् मलाई नै सबै भोग आफैं प्राप्त छन्। म नै सिद्ध हुँ। पुत्र, मित्र, नोकर आदि मेरै आज्ञाको अधीन छन्। म स्वयं बलवान् र सुखी छु र सबै व्याधिहरूले रहित छु॥१४॥

-★-★-★-

**आढ्योऽभिजनवानस्मि कोऽन्योऽस्ति सदृशो मया।**
**यक्ष्ये दास्यामि मोदिष्य इत्यज्ञानविमोहिताः॥**

**म धनी छु, धेरै मान्छे म सँग छन्, मेरो समान अर्को को छ? म धेरै यज्ञ गर्नेछु, दान दिनेछु र मोज गर्नेछु, यस प्रकारले ती अज्ञानले मोहित रहन्छन्॥१५॥**

किञ्च-आढ्य इति। आढ्यो धनधान्यसम्पन्नः, अभिजनवानुत्तमकुले प्रसूतोऽहमेवास्मि। अतः कोऽन्योऽस्ति सदृशो मया, न कोऽपीत्यर्थः। ननु केचिद्यज्ञदानादिना कीर्त्तिमन्तो दृश्यन्ते श्रूयन्ते च तत्सादृश्यं स्यादत आह-यक्ष्य इति। यक्षपिशाचादीन् यक्ष्ये। दास्यामिस्तावकेभ्योः नटादिभ्यः।

म धनधान्य सम्पन्न छु र उत्तम कुलमा जन्मिएको छु। यसैले अर्को को मेरो समान छ, अर्थात् कोही छैन। यदि यो भन कि यज्ञ दानादि भन्दा अर्को कीर्त्तिमान देखिन्छ वा सुनिन्छ र यसैले ती मेरो बराबर छन् त म पनि यक्ष पिशाचादिको यज्ञ गर्दछु र भाट, नर्त्तक आदिलाई दान दिन्छु। यस प्रकार म पनि यज्ञ, दान द्वारा

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

अतो यज्ञेन दानेनाप्यहमेव सर्वेषां कीर्त्तिमभिभूयोत्कृष्टो भविष्यामीत्यर्थः। ततश्च मोदिष्ये हर्षं प्राप्स्यामि सखीजनैः सह। इत्येवमाद्यज्ञानेन विमोहिता विविधं मोहं वृथा मनोरथरचनात्मकं भ्रमं प्रापिताः पतन्ति नरकेऽशुचाविर्त्युत्तरेणान्वयः॥१५॥

सबै कीर्त्तिमानहरूमा श्रेष्ठ बन्दछु। साथिहरूका साथ हर्ष प्रकट गर्नेछु। यसै प्रकारका अज्ञानहरूले यी आसुरी सम्पद्वाला विमोहित रहन्छन् अर्थात् वृथा मनोरथहरूका चक्रमा परेर अपवित्र नरकमा झर्दछन्॥१५॥

–★–★–★–

**अनेकचित्तविभ्रान्ता मोहजालसमावृताः।**
**प्रसक्ताः कामभोगेषु पतन्ति नरकेऽशुचौ॥**

**अनेक कामनाहरूले भ्रमित चित्तभएका, मोह–जालमा नराम्रो सँग फँसेका तथा पदार्थहरूमा र भोगहरूमा अत्यन्त आसक्त हुने मनुष्य भयंकर नरकहरूमा पर्दछन्॥१६॥**

एवं ते किं फलं प्राप्नुवन्तीत्यपेक्षायामाह–अनेकेति। सर्वकर्मफलप्रदात्रीश्वरसाहाय्यमृते स्वस्यैव सामर्थ्यमवकल्प्यैतत्कुर्यामित्थं कुर्यामिदमनुभूयामित्यनेकचित्तविभ्रान्ता अनेकेषु विषयेषु चित्तं तेन विभ्रान्ता विक्षिप्ता एवं मोहरूपेण जालेन समावृताः सूत्रमयेन जालेनावृता मत्स्या इव कामभोगेषु प्रसक्ता अभिनिविष्टाः सन्तोऽशुचौ विण्मूत्रश्लेष्मादिपूर्णे रौरवादौ नरके पतन्ति॥१६॥

आसुरी प्रकृतिवाला जुन फललाई पाउँदछन् त्यसलाई भन्नुहुन्छ। सबै फल दिनेवाला ईश्वरको सहायता बिना नै आफ्नो सामर्थ्यले म यस्तो गर्नेछु, यस प्रकारले गर्नेछु र यसप्रकारले अनुभव गर्नेछु, यसप्रकारका अनेक विषयहरूमा भ्रान्त चित्तवाला, धागोको जालले घेरिएका माछाहरूका समान मोहरूपी जालले घेरिएका र काम भोगहरूमा नै आसक्त यी आसुरी प्रकृतिवाला मनुष्य अपवित्र अर्थात् मलमूत्रादिले भरिएका रौरव आदि नरकहरूमा पर्दछन्॥१६॥

–★–★–★–

**आत्मसम्भाविताः स्तब्धा धनमानमदान्विताः।**
**यजन्ते नामयज्ञैस्ते दम्भेनाविधिपूर्वकम्॥**

**आफुलाई सबैभन्दा पूज्य मान्ने, जान्ने–सुन्ने मै हुँ (भनेर), धन र मानको मदमा चूर रहने ती मनुष्य दम्भले अविधिपूर्वक नाममात्रको (देखावटी) यज्ञहरूले यजन गर्दछ॥१७॥**

यक्ष्य इत्यादिना यस्तेषां यज्ञदानाद्यभिमान उक्तः। सोऽपि केवलं धर्मध्वजित्वाय नतु शास्त्रविधिविषय इत्याह–आत्मसम्भाविता इति। आत्मनैव सम्भाविताः आत्मनैवात्मानं श्रेष्ठं मन्यमाना अत एव स्तब्धा अनम्राः। तत्र हेतुः–धनमानमदान्विताः। धनेन मानो गर्वः मदश्चोद्धर्षस्ताभ्यामन्विताः सन्तस्ते नामयज्ञैर्याज्ञिका दीक्षिता इति यष्टृत्वख्यापनाय ये यज्ञास्ते नामयज्ञाः, अथवा नामयज्ञैर्नाममात्रयज्ञैर्यज्ञाभासैर्यजन्ते। कथं? दम्भेन, नतु सात्त्विकश्रद्धया। अविधिपूर्वकं विधिहीनं यथा भवति तथेत्यर्थः॥१७॥

यस्ता मनुष्य धर्मध्वजी भनिनका लागि नै यज्ञादि गर्दछन् शास्त्रविधि पालनका लागि होईन। यसै कुरालाई यहाँ वर्णन गर्नुहुन्छ। यी मनुष्यहरू आफुले आफैंलाई ठूलो मान्दछन यसैले यी उद्दण्ड हुन्छन्। यसको कारण यो हो कि यी धन र मानको गर्वले चूर रहन्छन्। यसैले यी जो यज्ञ गर्दछन् त्यो केवल याज्ञिक वा यज्ञ–दीक्षितको ख्याति पाउनका लागि। अथवा यिनीहरूका यज्ञ केवल नाममात्रका हुन यथार्थ यज्ञ होईन, किनकी यी दम्भले, अर्थात् सात्त्विक श्रद्धाले होईन र अविधि पूर्वक गर्दछन्॥१७॥

–★–★–★–

**अहङ्कारं बलं दर्पं कामं क्रोधं च संश्रिताः।**
**मामात्मपरदेहेषु प्रद्विषन्तोऽभ्यसूयकाः॥**

**ती अहंकार, हठ, घमण्ड, कामना र क्रोधको आश्रय लिने मनुष्य आफ्नो र अरुको शरीरमा रहने म अन्तर्यामीको साथ द्वेष गर्दछन् तथा मेरो र अर्काको गुणहरूमा दोषदृष्टि राख्दछन्॥१८॥**

अविधिपूर्वकत्वं(च) स्वभाववैपरीत्यादित्याह-अहंकारमिति। अनात्मनि पाञ्चभौतिके आत्मत्वाभिमानोऽहंकारस्तं संश्रिताः। बलं पर पीडाकरणसामर्थ्यं, दर्पं दर्पो नाम स्वस्य पूज्यत्वातिशय बुद्ध्याऽन्यानादरस्तं, कामं स्त्र्यादिभोगासक्तिं, क्रोधं स्वपरसन्तापजननरूपमन्तर्ज्वलनमेतान् दोषान् संश्रिताः मामीश्वरमात्मपरदेहेषु तत्तद् बुद्धिसाक्षितया वर्त्तमानं प्रद्विषन्तो मच्छासनातिक्रमः प्रद्वेषस्तं कुर्वन्तः अभ्यसूयकाः सन्मार्गवर्त्तिनां सतां गुणेषु दोषारोपकाः॥१८॥

अविधि पूर्वक हुनमा कारण, स्वभाव विपरीत हुनु आदि वर्णन गर्नुहुन्छ-
पाञ्चभौतिक शरीरमा आत्माको अभिमान गर्नु अहङ्कार हो। अर्कालाई पीड़ा दिने शक्ति बल भन्दछन्। आफ्नो विषयमा अतिपूज्य बुद्धि हुनाले अर्काको अनादर गर्नुलाई दर्प भनिन्छ। स्त्री आदिको भोगमा आसक्तिलाई काम भन्दछन्। आफुमा र अरुमा देहमा बुद्धि साक्षीको रूपमा बसेको, म ईश्वरसँग द्वेष गर्दै अर्थात् मेरो शासन नमानी ती सत्मार्गमा हिड्नेहरूमा दोषारोपण गर्दछन्॥१८॥

-★-★-★-

**तानहं द्विषतः क्रूरान्संसारेषु नराधमान्।**
**क्षिपाम्यजस्त्रमशुभानासुरीष्वेव योनिषु॥**

**ती द्वेष गर्ने, क्रूर स्वभाव भएका र संसारमा महान् नीच, अपवित्र मनुष्यहरूलाई म बारम्बार आसुरी योनिहरूमा झारिदिने गर्दछु॥१९॥**

एवमासुराणां प्रवृत्तिं स्वभावं चोक्त्वेदानीं तेषां नित्यसंसृतिरूपामधोगतिं फलमाह-तानिति द्वाभ्याम्। तान् मां साधूंश्च द्विषतः क्रूरानत्युग्रस्वभावान् संसारेषु जन्ममरणादिमार्गेषु तत्राप्यासुरीष्वेव योनिषु अजस्रं निरन्तरं क्षिपामि। ततस्वभावानुगुणमुत्तरोत्तरं क्रूरबुद्धिमेव तेषां वर्द्धयामीत्यर्थः॥१९॥

असुरहरूका प्रवृत्ति र स्वभाव भनि सक्नुभयो। अब उनीहरूका स्वभावको फलस्वरूप जो नित्य संसृतिरूप अधोगति मिल्दछ त्यसलाई भन्नुहुन्छ। मसँग र सत्पुरुषहरू सँग द्वेष गरिरहने, उग्र स्वभाववाला ती अशुभ मनुष्यहरूलाई संसारमा अर्थात् जन्म-मरणादिको मार्गमा र त्यसमा पनि आसुरी योनिमा म फ्याँकिदिन्छ। भाव यो हो कि उनीहरूका स्वभावको अनुकुल उनीहरूका क्रूरबुद्धिलाई सदा बढ़ाईदिन्छु॥१९॥

-★-★-★-

**आसुरीं योनिमापन्ना मूढा जन्मनि जन्मनि।**
**मामप्राप्यैव कौन्तेय ततो यान्त्यधमां गतिम्॥**

**हे कुन्तीपुत्र! ती मूढ़ मनुष्यहरू मलाई प्राप्त नगरेर नै जन्म-जन्मान्तरमा आसुरी योनिमा प्राप्त हुन्छन्, फेरि त्यस भन्दा पनि अधिक अधम गतिमा अर्थात् भयंकार नरकहरूमा जान्छन्॥२०॥**

ततस्ते-आसुरीमिति। मूढा विवेकशून्यामच्छासनविपरीताचरणाश्रयां योनिमापन्नाः जन्मनि पुनः पुनस्तमोबहुलास्वेव जायमाना मां सर्वेश्वरं सर्वकर्मफलप्रदातारमप्राप्यैव गुरुशास्त्रोपदेशाभावेन अस्ति परमेश्वरो भगवान्वासुदेवः

विवेकशून्य, मेरो शासनको विपरीत आचरणको आश्रयवाला योनिहरूलाई प्राप्त गरेर, जन्मौं-जन्म सम्म तमको बहुलताले सबै फल दिनेवाला म सर्वेश्वरलाई जान्दैन, अर्थात् गुरुशास्त्रको उपदेशको अभावले 'सर्वाराध्य वासुदेव भगवान् हुन्'। यस

सर्वाराध्य इति ज्ञानमप्राप्यैव ततो मद्विषयाज्ञानादधर्माः श्वशूकरादियोनिरूपां गतिं फलं यान्ति, प्राप्नुवन्ति ॥२० ॥

कुरालाई न जानेर, मेरो विषयमा ज्ञान नभएको कारण त्यो अधम कुकुर, सुँगुर आदि योनि रूप फललाई प्राप्त गर्दछ ॥ २० ॥

-★-★-★-

## त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः।
## कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत्॥

**काम, क्रोध र लोभ -यी तीन प्रकारको नरकको ढोकाहरू जीवात्माको पतन गर्नेवाला हुन्,यसैले यी तीनैको त्याग गरिदिनु पर्दछ ॥ २१ ॥**

एवमुक्तः सर्व आसुर भावः। इदानीं सर्वानर्थस्यासुरीसम्पदश्च मूलं यत्परिहारेण सर्वानर्थः परिहृतो भवति। तत् त्रिविधं परित्यागाथ्रमाह-त्रिविधमिति। त्रिविधं त्रिप्रकारं नरकस्य नरकप्राप्तौ इदं द्वारमस्ति। किं भूतं? आत्मनो नाशनं यद्द्वारं प्रविशन्नेव पुरुषो नश्यति सर्वपुरुषार्थरहितो भवति। किं तत्त्रिकं? कामः क्रोधस्तथा लोभ इति। यस्मादात्मनो नाशनं नरकस्य द्वारं तस्मादेतत्कामादित्रयं त्यजेत्। यत्नतः परिवर्जयेत् ॥२१ ॥

आसुर भावलाई भनिसक्नु भयो। अब सबै अनर्थहरू र आसुरी सम्पद्को जुन जड़ छन् र जसलाई छोड्नाले सबै अनर्थहरू छूट्तछन्, तिनीहरूलाई नै भन्नुहुन्छ। नरकप्राप्तिको तीन द्वार छन्। यी द्वारहरूमा प्रवेश गर्ने बित्तिकै पुरुषको नाश हुन्छ अर्थात् त्यो सबै पुरुषार्थले हीन हुन्छ। यी तीन हुन् काम, क्रोध र लोभ। किनकी यी पुरुषहरूका नाशको कारण र नरकका द्वार हुन् यसैले यिनीहरूलाई यत्नपूर्वक छोड्नु पर्दछ ॥ २१ ॥

-★-★-★-

## एतैर्विमुक्तः कौन्तेय तमोद्वारैस्त्रिभिर्नरः।
## आचरत्यात्मनः श्रेयस्ततो यति परां गतिम्॥

**हे कुन्तिनन्दन! यी तीनै नरकको ढोकाहरूले रहित भएको जो मनुष्य आफ्नो कल्याणको आचरण गर्दछ त्यो, यसले गर्दा परम गतिमा प्राप्त हुन्छ ॥ २२ ॥**

तत्त्यागमेव श्रेयोहेतुत्वेन स्तौति-एतैरिति। एतैःकामक्रोध लोभैस्तमोद्वारैस्तामिश्रान्धतामिश्रादिनरकस्य द्वारभूतैस्त्रिभिर्विमुक्तो नर आत्मनः श्रेयो मोक्षसाधनमाचरति मद्भक्तिज्ञानोपाये यतते। ततो ज्ञानभक्तिपरिपाकात्परां गतिं परमफलं मामेव याति ॥२२ ॥

काम, क्रोध र लोभको त्याग श्रेयको कारण हो, यसलाई नै भन्नुहुन्छ- काम, क्रोध र लोभले, जो तामिस्र, अन्धतामिस्र आदि नरकहरूका द्वार हुन, विशेषरूपले मुक्त भई मनुष्य मोक्षको साधनहरूका आचरण गर्दछ, अर्थात् मेरो भक्ति र ज्ञानको उपायहरूमा निरत रहन्छ। र भक्ति र ज्ञानको परिपाक भएपछि परमफललाई अर्थात् मलाई पाउँदछ ॥ २२ ॥

-★-★-★-

## यः शास्त्रविधिमुत्सृज्य वर्तते कामकारतः।
## न स सिद्धिमवाप्नोति न सुखं न परां गतिम्॥

**जो मनुष्य शास्त्रविधिलाई छोडेर आफ्नो इच्छाले मनोमानी आचरण गर्दछ, त्यो न सिद्धि (अन्तःकरणको शुद्धि), न त सुख-शान्ति र न त परमगतिलाई नै प्राप्त गर्दछ ॥ २३ ॥**

उक्तस्य सर्वस्यासुरभावस्य कामादेस्त्रिविधस्य नरकद्वारस्य च परिवर्जनं श्रेयआचरणं च विधिनिषेधरूपशास्त्रज्ञानाधीनमिति वक्तुं तदनादरेणाचरणं सर्वश्रेयो बाधक-

असुर भाव र कामादि तीन प्रकारका नरकहरूका द्वारलाई छोड्नु र श्रेयको आचरण गर्नु विधिनिषेध रूप शास्त्रीय ज्ञानको आधीन छ। यसैले यहाँ यो भन्नुहुन्छ कि शास्त्रको अनादर गर्नु समस्त कल्याणको बाधक हो।

मित्याह–यः शास्त्रविधिमिति। यच्छब्देन शास्त्रीयकार्यानुष्ठानाधिकारी सामान्यो गृह्यते। जीवानां हितं शास्ति बोधयतीति शास्त्रं वेदस्तदुपजीविस्मृतिपुराणेतिहासादितत्सम्बन्धी विधिरित्युपलक्षणं निषेधस्य। तथा चैवं कुर्यादेवं न कुर्यादिति कर्त्तव्याकर्त्तव्यविषयोलिङ्गादिशब्दस्त–मुत्सृज्योपेक्ष्य कामकारतः स्वेच्छया यो वर्त्तते गुणकार्येषु प्रवर्त्तते स सिद्धिं साधनसिद्धिं कर्माद्युपायं कुर्वन्नपि नाप्नोति। सिद्ध्यभावे न सुखमैहिकामुष्मिकं किमपि प्राप्नोति, न परां गतिं मुक्तिं प्राप्नोति॥२३॥

जुन कुनै शास्त्रीय कर्महरूका अनुष्ठानको अधिकारी, शास्त्रको विधि–निषेधको उपेक्षा गरेर, आफ्नो इच्छा ले गुणहरूका कार्यमा प्रवृत्त हुन्छ त्यो साधन सिद्धिलाई पाउँदैन अर्थात् कर्मादि उपायहरूलाई गरेर पनि सिद्धिरूप फललाई पाउँदैन र सिद्धिको अभावमा यस लोक वा परलोकको किञ्चित् सुखलाई पनि पाउँदैन। यस्ता मनुष्यहरूलाई यदि मुक्ति मिल्दैन भने यसमा त भन्नुनै के छ र? शास्त्र त्यो हो जो विधि निषेधद्वारा मनुष्यको हितलाई भन्दछ, अर्थात् वेद र त्यसमाथी अवलम्बित स्मृति, पुराण, इतिहास आदि जसमा यो भनिएको छ कि मनुष्यले के गर्नु पर्दछ र के गर्नु हुँदैन॥२३॥

–★–★–★–

**तस्माच्छास्त्रं प्रमाणं ते कार्याकार्यव्यस्थितौ।**
**ज्ञात्वा शास्त्रविधानोक्तं कर्म कर्तुमिहार्हसि॥**

**अतः तिम्रो लागि कर्तव्य–अकर्तव्यको व्यवस्थामा शास्त्र नै प्रमाण हो–यस्तो जानेर तिमी यस लोकमा शास्त्रविधिले नियत कर्तव्य–कर्म गर्न योग्य छौ अर्थात् तिमीले शास्त्रविधिको अनुसार कर्तव्य–कर्म गर्नुपर्दछ॥२४॥**

फलितार्थमाह–तस्मादिति। यस्माच्छास्त्रानङ्गीकारिणां न किमपि फलं भवति, तस्मात् कार्याकार्यव्यवस्थितौ इदमित्थं वा कार्यमिदमित्थं वा न कार्यमित्यस्यां व्यवस्थायां ते तव दैवीप्रकृतिकस्य शास्त्रं वेदस्तदुपबृंहणस्मृतिपुराणेतिहासादिकं प्रमाणं निश्चायकम्। अतः शास्त्रविधानोक्तं विहितं प्रतिषिद्धं च धर्ममधर्मं च ज्ञात्वा इह कर्माधिकारे परलोके स्ववर्णाश्रमोचितमेव युद्धादिकं कर्म कर्त्तुं त्वमर्हसि॥२४॥
आसुरी–सम्पदं हित्वा कामाद्यैः कारणैः सह। शास्त्रोक्तमेव कर्त्तव्यमित्यादिष्टं हि षोडशे॥

किनकी शास्त्रलाई नमान्नेहरूलाई कुनै फल मिल्दैन यसैले गर्नयोग्य र नगर्नयोग्य कामहरूको निश्चय गर्नमा तिम्रो, जो दैवी प्रकृतिले युक्त छ, शास्त्र नै अर्थात् वेद र त्यसको अर्थबोधक स्मृति, पुराण इतिहासादि नै प्रमाण हुनु पर्दछ। यसैले शस्त्रद्वारा भनिएको र निषेध गरिएको अधर्मलाई जानेर, कर्मको अधिकार युक्त यस मनुष्यलोकमा, आफ्नो वर्णोचित युद्ध आदि कर्महरू तिमीले गर्नु पर्दछ॥२४॥

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा–टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां दैवासुरसम्पद्विभागयोगो नाम षोडशोऽध्यायः॥१६॥**

––★––★––★––

ॐश्रीपरमात्मने नमः

# अथ सप्तदशोऽध्यायः

## अर्जुन उवाच

**ये शास्त्रविधिमुत्सृज्य यजन्ते श्रद्धयान्विताः।**
**तेषां निष्ठा तु का कृष्ण सत्त्वमाहो रजस्तमः॥**

**अर्जुनले भने– हे कृष्ण! जुन मनुष्य शास्त्रविधिलाई त्याग गरेर श्रद्धापूर्वक देउता आदिको पूजन गर्दछन्, (भने) तिनीहरूको निष्ठा फेरि कस्तो चैं हो? सात्त्विकी हो अथवा राजसी–तामसी? ॥१॥**

पूर्वाध्याये तत्त्वज्ञानाधिकारार्थं मुमुक्षुणा सत्त्वैकनिष्ठेन भाव्यमित्येतदर्थं हेयोपादेययोर्दैवासुरसम्पदोर्विभागमुक्त्वा तयोर्हेयोपादेयज्ञानासाधरणं कारणं शास्त्रमेवोपादेयं तदुक्तमेव कार्यं तद्विरुद्धं निषिद्धं चाधमगतिदं नाचरणीयमित्यन्तेन, निर्णीतमिदानीं सात्त्विकश्रद्धयाऽनुष्ठितस्यैव श्रेयोहेतुत्वं राजसतामसश्रद्धयाऽनुष्ठितस्यासुरत्वात्संसारहेतुत्वमिति श्रद्धाऽऽहारयज्ञतपोदानादेस्त्रैविध्यदर्शनाय सप्तदशाध्याय आरभ्यते। तत्र ये शास्त्रविधिं कुतश्चित् कारणाद्विहाय शिष्टाचारमात्रेण निषिद्धत्यागपूर्वकं श्रद्धया यज्ञादिकर्मानुतिष्ठन्ति तेषु शास्त्रविध्युपेक्षालक्षणस्यासुर धर्मस्य श्रद्धापूर्वकानुष्ठानलक्षणस्य दैवधर्मस्य च दर्शनात् किं तेऽसुरेष्वन्तर्भवन्ति देवेषु वेत्येककोटिं निश्चेतुमशक्नुवंस्तन्निर्णयबुभुत्सुरर्जुन उवाच–ये शास्त्रविधिमिति। ये केचिच्छास्त्रविधिमज्ञानादुत्सृज्य श्रद्धयाऽन्विताः सन्तो यजन्ते देवताराधनादौ प्रवर्त्तन्ते। अत्र ये शास्त्रविधिमुत्सृज्येत्यनेन ये दुःखबुद्ध्या आलस्याद्वा शास्त्रविधिमुत्सृज्य शास्त्रज्ञाने श्रममकृत्वा केवलं शिष्टाचारपरम्परावशेन श्रद्धयाऽन्विताः सन्तो देवताराधनादौ प्रवर्त्तमाना गृह्यन्ते। नतु ये शास्त्रं सम्यग् ज्ञात्वा बुद्धिपूर्वकं तमनादृत्य यथेष्टाचारेण वर्त्तमाना गृह्यन्ते। कुतः श्रद्धयाऽन्वितत्वविशेषणात्। आस्तिक्यबुद्धिर्हि श्रद्धेत्युच्यते। सा च यथेष्टाचारिणां न सम्भवति। तस्माद्ये शास्त्रविधिमुत्सृज्येत्यत्र पूर्वोक्ता ज्ञेया।

पूर्वको अध्यायमा यो भनिएको छ कि मुमुक्षुहरूले तत्त्वज्ञानको अधिकारी हुनका लागि सत्वमा एकनिष्ठ हुनुपर्दछ। यसैले त्यहाँ ग्रहण गर्न योग्य र त्याग गर्न योग्य दैवी र आसुरी सम्पद्‌को विभाग भनियो। फेरि यो पनि भनियो कि ग्रहण र त्याग गर्न योग्य वस्तुहरूका असाधारण कारण शास्त्र नै हो। जुन कुरा शास्त्र प्रतिपादन गर्दछन् त्यही गर्नयोग्य हो र जसलाई त्यो हेय संझन्छ त्यही छोड्न योग्य हो, किनकी त्यसले अधम गति दिन्छ। यस कुराको निर्णय अध्यायको अन्तमा गरियो।
अब यस सत्रौ अध्यायमा यो भन्नुहुनेछ कि सात्त्विक श्रद्धाले युक्त कर्म नै श्रेयको कारण हुन्छ र राजस तथा तामस श्रद्धायुक्त कर्म असुरत्व को कारण संसारको हेतू हुन्छ। यसले श्रद्धा, आहार, यज्ञ, दान आदि सत, रज र तमको अनुसार तीन–तीन प्रकारका हुन्छन्। यसैलाई सम्झाउनको लागि यस अध्यायको आरम्भ गर्नुहुन्छ। जो मनुष्य शास्त्रको विधिलाई कुनै कारणले छोडेर शिष्टाचारको अनुसार निषिद्ध वस्तुको त्यागपूर्वक श्रद्धायुक्त भई यज्ञादि कर्महरू गर्दछन् उनीहरूमा शास्त्रविधिहरूको उपेक्षाले आसुर धर्म र श्रद्धायुक्त धर्मानुष्ठान गर्नाले दैव धर्म दुबै नै पाईन्छन्। यिनीहरूका गणना असुर कोटिमा हुनु पर्दछ वा देव कोटिमा यो अर्जुनले निश्चय गर्न सकेनन्। यसैले यस कुरालाई जान्नका लागि भगवान् सँग भने।
जो मनुष्य अज्ञानको कारण शास्त्रविधिलाई छोडेर श्रद्धायुक्त भई यजन अर्थात् देवताको आराधनादि गर्दछन्, ('शास्त्र विधिलाई छोडेर' को यो अर्थ मात्नु पर्दछ कि त्यो मनुष्य दुःख बुद्धिले अथवा आलस्यले शास्त्रको विधिलाई छोड्दछ। शास्त्रविधिलाई जान्नका लागि परिश्रम गर्दैन र परम्पराबाट आएका शिष्टाचारका वश भई श्रद्धायुक्त देवाराधनादि मा लाग्दछ। शास्त्रलाई सम्यक् रूपले जानेर र त्यसको अनादर गरेर जो शिष्टाचारको वश भई देवाराधन गर्दछन् यहाँ तिनीहरू को मतलब होईन, किनकी मूल श्लोकमा श्रद्धान्वित अर्थात् श्रद्धायुक्त हुनु लेखिएको छ र आस्तिक बुद्धिलाई नै श्रद्धा भन्दछन्। जसले शास्त्रको अनादर गरेका छन् त्यो श्रद्धायुक्त हुन सक्दैन। स्वेच्छाचारिहरूमा श्रद्धा सम्भव नै

तेषां का निष्ठा स्थितिः। हे कृष्णेति सामान्यतः पृष्ट्वा किं शब्देन प्रश्नस्थं विशेषं स्वयमेव व्यनक्ति-सत्त्वमाहो रजस्तम इति। उक्तप्रकारेण देवपूजनादौ ये प्रवृत्तास्तेषां सत्त्वादिषु का निष्ठा आश्रयः सत्त्वं ते सत्त्वाश्रयाः आहो स्वित् रजोनिष्ठा रजसि संश्रितास्तमः संश्रिता वा इति विवेचनीयमिति भावः॥१॥

छैन। यसैले शास्त्रविधिलाई छोडेर पहिले देखि नै पहिलेको जसरी मनुष्यहरूले जान्नु पर्दछ। यस्ता मनुष्यहरूको कस्तो निष्ठा वा स्थिति हुन्छ? हे कृष्ण! यो कुरा सामान्य रूपले पहिलेको जस्तै मान्छेहरूले जान्नुपर्दछ।) यस्ता मनुष्यको कस्तो निष्ठा वा स्थिति हो? हे कृष्ण! यो कुरा सामान्य तरीकाले सोधेर आफ्नो प्रश्नको मतलब 'किं' शब्दले अर्जुन स्वयं नै प्रकट गर्दछन्। अर्जुन सोध दछन् कि माथि भनिएको विधिद्वारा जो देव-पूजादि मा प्रवृत्त छ उसको निष्ठा सात्त्विकी हो वा राजसी अथवा तमोगुण आश्रयवाला यसको विवेचन हुनु पर्दछ॥१॥

-★-★-★-

## श्रीभगवानुवाच

## त्रिविधा भवति श्रद्धा देहिनां सा स्वभावजा।
## सात्त्विकी राजसी चैव तामसी चेति तां शृणु॥

**श्रीभगवान्ले भन्नुभयो- मनुष्यहरूको स्वभावले उत्पन्न भएको श्रद्धा सात्त्विकी, राजसी तथा तामसी- यस प्रकारले तीन थरिका नै हुन्छन्, त्यसलाई तिमी मबाट सुन॥२॥**

एवम्पृष्टोऽर्जुनसन्देहमपनिनीर्षुस्तावच्छास्त्रज्ञानवतां तदनुकूलाचाराणामनेकजन्मानुष्ठिताऽकाम्यकर्मणां सात्त्विकानां तु श्रद्धा मोक्षोपयोगिनी भगवदाराधनविषयकैकधैव भवति। शास्त्रज्ञानहीनानां मोक्षमार्गेऽनधिकृतानां सकामानां जीवानां गुणत्रयविभागेन श्रद्धात्रयविभागं श्रीभगवानुवाच-त्रिविधेति। देहिनां परमार्थज्ञानहीनानां प्रवृत्तिमात्रनिष्ठानां मनुष्याणां सर्वेषां श्रद्धा सात्त्विकी राजसी तामसी चेति त्रिविधा भवति। त्रैविध्ये हेतुः-सा स्वभावजेति। स्वभावः स्वकीयप्राचीनकर्मानुगुणो रुचिविशेषस्तस्माज्जाता स्वभावजा। जीवस्य यत्र रुचिविशेषस्तत्र श्रद्धा जायते। श्रद्धा नामायं ममेष्टं साधयेदिति विश्वासपूर्विकैव साधने प्रवृत्तिर्भवति। रुचिश्रद्धाप्रयत्नानां निमित्तभूता अन्तःकरणरञ्जकाः सत्त्वादयी गुणाः कार्यैकगम्या अतस्त्रिविधा भवति। तामिमां त्रिविधां श्रद्धां वक्ष्यमाणां शृणु॥२॥

यस प्रकार अर्जुनले सोधेपछि उनको शंकालाई हटाउनको हेतू भगवान् भन्नुहुन्छ कि जुन मनुष्य शास्त्र ज्ञानवाला र शास्त्रानुकुल आचरणवाला छन् र अनेक जन्महरू देखि नै निष्काम कर्म गरेका छन् ती सात्त्विक पुरुषहरूका श्रद्धा मोक्षको उपयोगी अर्थात् भगवान्को पूजादि विषयक, सदा एक प्रकारको अर्थात् सात्त्विकी हुन्छ। तर जुन मनुष्य शास्त्रज्ञानले हीन, मोक्ष मार्गको अनधिकारी र सकामी जीव छन् उनीहरूका श्रद्धा गुणहरूका विभागानुसार तीन प्रकारका हुन्छन्। यसैलाई भगवान् यस श्लोकमा भन्नुहुन्छ-

देहधारिहरू(अर्थात् परमार्थको ज्ञानले हीन र केवल प्रवृत्तिमा निष्ठा युक्त मनुष्य)का श्रद्धा तीन प्रकारका हुन्छन्, सात्त्विकी, राजसी र तामसी। तीन प्रकारको हुनमा कारण यो हो कि ती स्वभावले नै उत्पन्न छन्। स्वभावको अर्थ हो पूर्वमा गरिएका आफ्ना कर्महरूका अनुसार रुचि विशेष। जीवको जुन विषयमा विशेष रुचि हुन्छ त्यसैमा त्यसको श्रद्धा हुन्छ। मेरो यसबाट मतलब सधिन्छ- यस विश्वासलाई नै श्रद्धा भन्दछन् र यस्तो भएर नै साधनमा मनुष्य प्रवृत्त हुन्छ। रुचि, श्रद्धा, प्रयत्न आदिको कारण अन्तःकरणलाई (पूर्वमा गरिएका कर्महरूका वासना अनुसार) प्रसन्न गर्नेवाला (अर्थात् त्यसको रुचिलाई बढ़ाउनेवाला) सत्त्वादि गुण नै हुन् जो गुणानुसार कार्यहरूले जानिन्छन्। यसले श्रद्धा तीन प्रकारको हुन्छ। अब तीन प्रकारका श्रद्धालाई भन्दछु सुन॥२॥

-★-★-★-

## सत्त्वानुरूपा सर्वस्य श्रद्धा भवति भारत।

## श्रद्धामयोऽयं पुरुषो यो यच्छ्रद्धः स एव सः ॥

**हे भारत! सबै मनुष्यहरूको श्रद्धा अन्तःकरणको अनुरूप नै हुन्छ। यो मनुष्य श्रद्धामय छ। यसैले जो जस्तो श्रद्धावाला छ, त्यो त्यसैको स्वरूप हो अर्थात् त्यहि उसको निष्ठा (स्थिति) हो ॥३॥**

सत्त्वानुरूपेति। सत्त्वमन्तःकरणं तदनुरूपा सर्वस्य श्रद्धा भवतिं सत्त्वादिगुणरञ्जितान्तःकरणभेदाच्छ्रद्धाभेदः। यद्यप्यन्तःकरणस्य सात्त्विकाहङ्कारकार्यत्वात्सात्त्विकत्वमेव। तथाऽपि तदाप्यायकान्नपानादेः सात्त्विकादित्रैविध्यात्त्रिविधं भवति। तथा च प्राचीनकर्मनिमित्तकत्वाज्जन्मत एव केषां चित्सत्त्वगुणप्रधानं, केषाञ्चिद्रजःप्रधानं, केषाञ्चित्तमःप्रधानं, सत्त्वमन्तःकरणं देवयक्षरक्षसां क्रमेण भवति। मनुष्याणां तु प्रायेण व्यामिश्रं, केषाञ्चिदेकैकगुणप्रधानं सत्त्वं भवति। एवञ्च सर्वस्य पुरुषस्य सत्त्वानुरूपान्तःकरणरूपा श्रद्धा भवति। हे भारत! सत्त्वप्रधानस्य सात्त्विकी, रजः प्रधानस्य राजसी, तमः प्रधानस्य तामसीति विवेकः। फलितमाह–श्रद्धामयोऽयं पुरुषं इति। अयं मोक्षानधिकारी संसारी पुरुषः श्रद्धामयः श्रद्धाप्रधानः "प्राधान्ये मयट्" स्त्रीमय इति वत्। तस्माद्यो यच्छ्रद्धः स एव सः, यः पुरुषो यादृश्या श्रद्धया युक्तः स एव सः। सात्त्विक्यादिश्रद्धयायुक्तः सात्त्विकादिरूप एव पुरुषो भवति। एवं श्रद्धयैव निष्ठाऽपि दर्शिता। एतेन "तेषां निष्ठा तु का कृष्णे"ति प्रश्नस्योत्तरमुक्तम्। सत्त्वादिनिष्ठानां फलं तु "ऊद्ध्र्वं गच्छन्ति सत्त्वस्था मध्ये तिष्ठन्ति राजसाः। जघन्यगुणवृत्तिस्था अधो गच्छन्ति तामसाः" इति चतुर्दशे उक्तम् ॥३॥

हे अर्जुन! सत्त्व अर्थात् अन्तःकरणको अनुकुल नै सबैको श्रद्धा हुन्छ। सत्, रज, तम गुणहरूले रंजित अन्तःकरणको भेदले नै श्रद्धाको भेद उत्पन्न हुन्छ। यद्यपि अन्तःकरण सात्त्विक अहङ्कारको कार्य हुनाले सात्त्विक नै छ तथापि यसलाई बढाउने अन्नपानादिमा सत्, रज, तम गुणका भेद हुलाले यसमा पनि ती गुणहरूको भेद हुन्छ, र त्यो यस प्रकारले तीन प्रकारको हुन्छ। फेरि प्राचीन कर्महरूका कारण कतिपय मनुष्य जन्मदेखि नै सत्त्वगुण प्रधान हुन्छन्, यक्ष रजोगुण प्रधान र राक्षस तमोगुण प्रधान हुन्छन्। मनुष्य प्रायः मिश्र गुणवाला हुन्छन्। कसै-कसैको अन्तःकरण एक-एक गुण प्रधान पनि हुन्छ। यस प्रकार सबै पुरुषहरूका श्रद्धा अन्तःकरणको अनुसार नै हुन्छ, अर्थात् सत्त्व प्रधानवालाहरूको सात्त्विकी, रज प्रधानवालाहरूको राजसी र तम प्रधानवालाहरूको तामसी श्रद्धा हुन्छ। भावार्थ कि मोक्षको अनधिकारी यो संसारी जीव श्रद्धा प्रधान हो। यसैले जस्तो श्रद्धाले युक्त जो पुरुष छ त्यो त्यही नै हो अर्थात् सात्त्विक आदि श्रद्धाले युक्त पुरुष सात्त्विकादि रूप नै हुन्छ। यस कथनले श्रद्धाद्वारा नै निष्ठा देखाएर र 'उनीहरूको निष्ठा कस्तो हुन्छ?' अर्जुनको यस प्रश्नको उत्तर दिनुभयो। सत्त्वादि निष्ठा युक्त मनुष्यहरूलाई जो फल मिल्दछ त्यसलाई चौधौं अध्यायमा भगवान्ले भनिसक्नु भएको छ यथा–'उद्ध्र्वं....तामसाः।'॥३॥

–★–★–★–

## यजन्ते सात्त्विका देवान्यक्षरक्षांसि राजसाः।
## प्रेतान्भूतगणांश्चान्ये यजन्ते तामसा जनाः ॥

**सात्त्विक मनुष्य देउताहरूको पूजा गर्दछन्, राजस मनुष्य यक्ष तथा राक्षसहरूको र अन्य जो तामस मनुष्य छन्, ती भूत, प्रेतको पूजन गर्दछन् ॥४॥**

तदेवं श्रद्धया निष्ठा ज्ञेया। श्रद्धा तु सात्त्विकादिभेदभिन्ना देवादिपूजालिङ्गेन कार्येण लक्ष्येत्याह–यजन्त इति। सात्त्विकाः सत्त्वप्रचुरा जनाः समानशीलानेव देवान् यजन्ते, तेषां देवाराधनविषया श्रद्धा सात्त्विकीति ज्ञेया। राजसा

यस प्रकार निष्ठा श्रद्धा द्वारा जानिन्छ र सात्त्विक आदि भेदवाला श्रद्धा देवादि पूजा रूप कार्यहरूबाट जानिन्छ। यसैले भन्नुहुन्छ। सत्त्वगुणवाला मनुष्य अर्थात् जसको स्वभावमा सतोगुणको प्रचुरता छ ती आफ्ना समान गुणवाला देउताहरूका नै पूजा गर्दछन्। यिनीहरूको देवताराधनविषयिणी श्रद्धा सात्त्विकी भनेर

रजःप्रचुरा जनाः समानशीलानेव यक्षरक्षांसि यजन्ते, तेषां राजसी श्रद्धा भवति। अन्ये तामसा जनाः समानशीलांस्तामसानेव प्रेतान् भूतगणांश्च यजन्ते, तेषां तामसी श्रद्धा भवतीत्यर्थः ॥४॥

जान्नु पर्दछ। रजोगुणको अधिकतावाला मनुष्य आफ्ना समान गुणवाला यक्षहरूका र राक्षसहरूका पूजा गर्दछ, यिनीहरूका श्रद्धा राजसी हुन्छ। र तामसगुणवाला मनुष्य आफ्ना समान गुणवाला भूत-प्रेतहरूका नै पूजा गर्दछन्। यिनीहरूका श्रद्धा तामसी हुन्छ॥४॥

-★-★-★-

**अशास्त्रविहितं घोरं तप्यन्ते ये तपो जनाः। दम्भाहङ्कारसंयुक्ताः कामरागबलान्विताः॥**
**कर्शयन्तः शरीरस्थं भूतग्राममचेतसः। मां चैवान्तःशरीरस्थं तान्विद्ध्यासुरनिश्चयान्॥**

**जो मनुष्य शास्त्रविधिले रहित घोर तप गर्दछन्; जो दम्भ र नराम्रो सँग अहंकारले युक्त छन्; जो भोगपदार्थ, आसक्ति र हठले युक्त छन्, जो शरीरमा स्थित पाँच भूतहरूलाई अर्थात् पाञ्चभौतिक शरीरलाई तथा अन्तःकरणमा स्थित म परमात्मालाई पनि कृश गर्नेवाला छन् ती अज्ञानिहरूलाई तिमी आसुरनिष्ठावाला (आसुरी सम्पत्तिवाला) संज्ञ॥५-६॥**

ननु शास्त्रविधिमुपेक्ष्य श्रद्धया यजतां श्रद्धात्रैविध्येन सात्त्विकादित्रैविध्यमुक्तं, तथाऽपि तेषां शास्त्रोपेक्षणाद्देवत्वं न भवति "यः शास्त्रविधिमुत्सृज्य वर्त्तते कामकारत" इत्यादिना सर्वपुरुषार्थहीनत्वकथनात्। नाप्यासुरत्वं तेषु दैवसाधर्म्यस्य तपोयज्ञादेर्दर्शनात्। तस्मात्कस्तेषां निश्चय इति चेत्तत्राह–अशास्त्रविहितमिति द्वाभ्याम्। अशास्त्रविहितं शास्त्रेण वेदेन तदनुकूलेन स्मृतिपुराणादिना च यन्न विहितमत एव घोरं प्राणिपीडाकरं तपो ये जनास्तप्यन्ते, उपलक्षणमिदं यज्ञादेस्तथाऽतिघोरं च ये कुर्वन्ति। कथंभूता दम्भाहङ्कारसंयुक्ताः। दम्भो धार्मिकत्वख्यापनम्, अहङ्कार आत्मनः श्रैष्ठ्याभिमानस्ताभ्यां संयुक्ताः कामरागबलान्विताः कामोविषयाभिलाषः, रागस्तदभिनिवेशः, बलं तत्प्राप्त्यर्थं प्रयत्नाग्रहस्तैरन्विताः सन्तः शरीरस्थमुपादानतया शरीरे स्थितं भूतग्रामं पृथिव्यादिभूतसमूहं कर्षयन्तः, वृथैवोपवासादिभिः कृशं कुर्वन्तः अचेतसो विवेकहीना अन्तःशरीरस्थं मां च मदंशभूतं जीवं चैव कर्षयन्तोऽधमगतिप्रापणेन दुःखी कुर्वन्तस्तपोयज्ञादि कुर्वन्ति। ते आसुरनिश्चयास्तानासुरनिश्चयान् परिहारार्थं विद्धि। असुरा हि मच्छासनमुल्लङ्घ्य यथेष्टाचारिणः मदाज्ञाविपरीताचारित्वात्तेषां सुखलवसम्भावनाऽपि नास्ति, प्रत्युताजस्रदुःखे नरके पतन्ति। "प्रसक्ताः कामभोगेषु पतन्ति नरकेऽशुचावि" त्युक्तवान्॥५-६॥

शास्त्रविधिको उपेक्षा गरेर, श्रद्धाले युक्त भई पूजादि गर्नेवालाहरूका श्रद्धा सात्त्विकादि भेदले तीन भेद भएको भन्नुभयो। तर पनि शास्त्रको उपेक्षाको कारण उनीहरूलाई देवभाव हुँदैन किनकी पहिले भनिसकिएको छ कि यस्ता मनुष्य सबै पुरुषार्थले हीन हुन्छन्, यथाः -'यः....गतिम्'। र यी मनुष्यहरूलाई असुरभाव पनि हुँदैन किनकी देव समान यज्ञ, तप आदि कर्म उनीहरूमा देखिन्छ। यसैले यी दुबैकुरामा कुन कुरा निश्चित छ, त्यसैको उत्तर दुईश्लोकहरू द्वारा दिनुहुन्छ।

जो शास्त्र र त्यसको अनुकूल स्मृति पुराणादिद्वारा विहित छैनन्(स्विकृत छैनन्) र यसैले घोर अर्थात् प्राणिहरूलाई पीड़ा दिनेवाला हुन्, यस्ता तप यज्ञादि कर्महरूलाई दम्भपूर्वक अर्थात् आफुलाई धर्मात्मा प्रसिद्ध गर्नका लागि, र अहङ्कारले अर्थात् काममा आसक्ति र बल अर्थात्  कामको प्राप्तिमा पूरा प्रयत्नले युक्त भई, शरीरमा उपादानरूपले स्थित पृथिव्यादि पञ्चभूतहरूका वृथा उपवासादिले कृश गर्दै, विवेकहीन, र शरीरको भित्र बसेको मलाई अर्थात् मेरो अंशभूत जीवलाई पनि अधम गतिमा पुर्‍याएर दुःखी गर्दै, जो तप यज्ञादि गर्दछन्, उनीहरूलाई निश्चय नै असुर संज्ञिनु र उनीहरूको संगत नगर्नु। असुरहरू नै मेरो शासनको उल्लंघन गरेर यथेष्ठाचारी हुन्छन्। मेरो आज्ञाको विपरीत हिडेर उनीहरूलाई अलिकति पनि सुख हुँदैन बरु ती सदा दुःख पूर्ण नरकमा पर्दछन्, किनकी पहिले नै भनिसकिएको छ- 'असक्ताः.....ऽशुचौ॥५-६॥

-★-★-★-

**आहारस्त्वपि सर्वस्य त्रिविधो भवति प्रियः।**

## यज्ञस्तपस्तथा दानं तेषां भेदमिमं शृणु ॥

**आहार पनि सबैलाई (सात्त्विक, राजस, तामसको भेदले) तीन प्रकारको प्रिय हुन्छ त्यस्तै यज्ञ, तप र दान (पनि तीन प्रकारका हुन्छन् अर्थात् शास्त्रीय कर्महरूमा पनि गुणहरूलाई लिएर तीनप्रकारका रुचि हुन्छन्) तिमी तिनीहरूका यस भेदलाई सुन ॥७॥**

एवं परिहार्यमासुरत्वं प्रदर्श्य सात्त्विकानामुपादानार्थं राजसतामसानां परिहारार्थं यज्ञतपोदानानां गुणतस्त्रैविध्यं वक्तुं तावत् सात्त्विकादियज्ञादेरन्तःकरणनिमित्तत्वा-दन्तःकरणस्य शुद्धेस्तु "अन्नमयं हि सौम्य ! मनः, आहार शुद्धौ सत्त्वशुद्धिरि"ति श्रुत्या आहारशुद्धिमूलत्वनिश्चया-दाहारस्य गुणतस्त्रैविध्यं वक्तुं प्रतिजानिते-आहारस्त्व-पीति। न केवलं श्रद्धैव देहिनां त्रिविधा भवति। किन्तु सर्वस्य जनस्य यस्तु आहारः प्रियो भवति, सोऽपि त्रिवि-ध एव। सर्वस्य त्रिगुणात्मकत्वेन स्वस्वप्रकृत्य-नुसारात्त्रिविधेष्वेकैकतमः प्रियो, नतु चतुर्थः कश्चिदित्यर्थः। तथा यज्ञास्तथा तपो दानं च त्रिविधं भवति। तेषामाहारादीनां भेदमिमं वक्ष्यमाणं शृणु ॥७॥

यस प्रकार छोड्न योग्य असुरत्व देखाएर सात्त्विकलाई ग्रहण गर्ने र राजस तामसलाई छोड्न को निमित्त यज्ञ, तप, दान आदिको गुणको अनुसार तीन प्रकारको हुनु अब भन्नुहुनेछ। सात्त्विक तप, यज्ञ आदि अन्तःकरणको शुद्धतामा निर्भर छ र अन्तःकरणको शुद्धिको मूल आहार शुद्धि हो जस्तो कि वचन छ- 'अन्नमयं..... शुद्धिः' अर्थात् हे शिष्य, मन अन्नमय छ र आहारको शुद्धिद्वारा अन्तःकरणको शुद्धि हुन्छ। यसैले आहारका गुणानुकुल तीनै भेदहरूलाई भन्नका लागि यस श्लोकमा प्रतिज्ञा गर्नुहुन्छ। मनुष्यहरूका केवल श्रद्धा मात्रै तीन प्रकारका हुने होईन बरु मनुष्यका आहार पनि जो सबैलाई पिय्र छन्, तीन प्रकारका हुन्छन्। सबै चीज त्रिगुणात्मक छन् यसैले आफ्ना प्रकृतिका अनुसार तीनै प्रकारका आहारहरूमध्ये सबैलाई एउटा प्रिय हुन्छ। यज्ञ, दान, तप आदि पनि तीन प्रकारका हुन्छन्। ती आहारादिहरूका भेदलाई तिमी सुन, म भन्दछु ॥७॥

-★-★-★-

## आयुः सत्त्वबलारोग्य सुखप्रीतिविबर्धनाः।
## रस्याः स्निग्धाः स्थिरा हृद्याहाराः सात्त्विकप्रियाः ॥

**आयु, सत्त्वगुण, बल, आरोग्य, सुख र प्रसन्नता बढाउने स्थिर रहनेवाला, हृदयलाई शक्ति दिने, रसयुक्त तथा चिल्लो यस्तो आहार अर्थात् खानेकुरा सात्त्विक मनुष्यलाई प्रिय हुन्छन् ॥८॥**

तत्र तावदाहारभेदानाह-त्रिभिः श्लोकैः आयुरिति। आयुरादिवर्द्धना आहाराः सात्त्विकानां प्रिया भवन्ति। तत्रायुश्चिरजीवनं, सत्त्वमन्तःकरणं गुणो वा तस्य कार्यं ज्ञानं सत्त्वशब्देनोच्यते "सत्त्वात्सञ्जायते ज्ञानमि"ति वचनात्। बलं स्वधर्मानुष्ठानसामर्थ्यम्, आरोग्यं रोगराहित्यं, सुखं चित्तप्रसादः, प्रीतिरभिरुचिस्तेषां विवर्द्धना विवृद्धि-कराः। ते च रस्या मधुररसोपेताः, स्निग्धाः स्नेहयुक्ताः, स्थिराः शरीरे रसांशेन चिरकालस्थायिनः हृद्या हृदयङ्गमाः, एवंविधा आहारा भक्ष्यभोज्यादिरूपाः सात्त्विकप्रिया भवन्ति ॥८॥

अब आहारादिका भेदलाई तीन श्लोकहरूमा वर्णन गर्नुहुन्छ- आयुआदि लाई बढाउनेवाला भोजन सात्त्विक पुरुषहरूलाई प्रिय हुन्छ। आयुको अर्थ चिरजीवन, सत्त्वको अर्थ अन्तःकरण वा सत्त्वगुण वा ज्ञान जुन त्यस सतोगुणको कार्य हो किनकी भनेको छ-'सत्वात् संजायते ज्ञानम्' अर्थात् सतोगुणको उदय भएपछि ज्ञान हुन्छ। बलको अर्थ आफ्नो धर्मको अनुष्ठानको सामर्थ्य। आरोग्यता अर्थात् निरोगता, सुख अर्थात् चित्तको प्रसन्नता, प्रीतिको अर्थ अभिरुचि। जुन भोजन यी सबैलाई राम्रो सँग बढाउँदछ त्यो सात्त्विक भोजन हो। फेरि सात्त्विक भोजन मधुर रसले युक्त, घ्यूको समान चिल्लो, शरीरमा रसको द्वारा धेरै समयसम्म बस्ने, र हृदयलाई प्रीतिकर हुन्छ। यस्तै नै भक्ष्य भोज्य आदि रूप भोजन सात्त्विकहरूलाई प्रिय हुन्छ ॥८॥

-★-★-★-

## कट्वम्ललवणात्युष्णतीक्ष्णरूक्षविदाहिनः।
## आहारा राजसस्येष्टा दुःखशोकामयप्रदाः ॥

**अति तितो, अति अमिलो, अति नुनिलो, अति तातो, अति पिरो, अति सुख्खा र अति दाहकारक आहार अर्थात् खानेकुरा राजस मनुष्यलाई प्रिय हुन्छन्, जो कि दुःख, शोक र रोगहरूलाई दिनेवाला हो ॥९॥**

तथा–कट्विति। अति शब्दः कट्वादिषु सप्तस्वपि् योजनीयः। तथा चातिकटुर्निम्बादिः, अत्यम्लः, अतिलवणः, अत्युष्णः, अतितीक्ष्णो मरीच्यादिः, अतिरूक्षः स्नेहवर्जितः कङ्गुकोद्र–वादिः, अतिविदाहिनः कण्ठोदरदाहकराः, एवम्भूता आहारा राजसस्य इष्टाः प्रिया भवन्ति। ते च दुःखं तात्कालिकतापः, शोकः पश्चाद्भाविदौर्मनस्यम्, आमयो रोगः, एतान् प्रददतीति दुःखशोकामयप्रदाः ॥९॥

राजस गुणवालाहरूलाई अतिकटु, जस्तो निम आदि, धेरै अमिलो, धेरै नुनिलो, धेरै तातो, धेरै पिरो जस्तो खोर्सानी आदि, धेरै रुखो जस्तै कोदो, साँवाँ आदि र घाँटी र पेट पोल्ने आहार प्रिय हुन्छन्। यी आहार दुःख अर्थात् तात्कालिक ताप, शोक अर्थात् पछि हुने मनको दुर्बलता र आमय अर्थात् रोग दिनेवाला हुन् ॥९॥

–★–★–★–

## यातयामं गतरसं पूति पर्युषितं च यत्।
## उच्छिष्टमपि चामेध्यं भोजनं तामसप्रियम् ॥

**जुन खानेकुरा कुहिएको, रसरहित, दुर्गन्धित, बासी र जूठो छ तथा जुन धेरै अपवित्र (मांस आदि) पनि छ त्यो तामस मनुष्यलाई प्रिय हुन्छ ॥१०॥**

तथा–यातयाममिति। यतयामं बहुकालावस्थितं, गतरसं निर्गतस्वाभाविकरसं, पूति दुर्गन्धव्याप्तं, पर्युषितं रात्र्यन्त–रितत्वेन रसान्तराविष्टम्, उच्छिष्टं गुरुतत्सदृशेभ्योऽन्येषां भुक्तावशिष्टम्, अमेध्यं यज्ञेश्वरानर्हमशुचि, एवंविधं तमोमयं भोजनं तामस्य पुरुषस्य प्रियं भवति। पुनरपि तमसो विवृ–द्धिकरम्। तस्माच्छ्रेयस्कामै राजसं च हित्वा सत्त्ववृद्धये सात्त्विकाहार एव सेवनीय इति भावः ॥१०॥

बनाएको धेरै समय भईसकेका, स्वभाविक रसले हीन, दुर्गन्धयुक्त, बासी हुनाले अर्कै रस पसिसकेका, गुरु वा उहाँको समान मनुष्यलाई छोडेर अर्काको जुठो, अपवित्र र भगवान्‌लाई अर्पण गर्न नमिल्ने यस्ता तमोमय भोजन तामसी पुरुषलाई प्रिय हुन्छन् र उनीहरूको तामस गुणलाई बढाउनेवाला हुन्छन्। यसैले श्रेयको इच्छा राख्नेहरूले राजसी र तामसी भोजनहरूलाई छोडेर सतोगुण बढाउने सतोगुणी भोजन गर्नुपर्दछ, यो भाव निस्कियो ॥१०॥

–★–★–★–

## अफलाकाङ्क्षिभिर्यज्ञो विधिदृष्टो य इज्यते।
## यष्टव्यमेवेति मनः समाधाय स सात्त्विकः ॥

**यज्ञ गर्नु नै कर्तव्य हो –यस प्रकारले मनलाई समाधान (सन्तुष्ट गरेर) फलेच्छाले रहित मनुष्यद्वारा गरिने जुन शास्त्रविधिले नियत यज्ञ गरिन्छ, त्यो सात्त्विक हो ॥११॥**

इदानीमुक्तत्रिविधाहारसेविनां स्वभावानुगुणं सात्त्विकादिभेदेन यज्ञत्रैविध्यमाह त्रिभिः–अफलाकाङ्क्षिभिरिति। फला–काङ्क्षारहितैः पुरुषैर्विधिदृष्टः वेदविहितमन्त्रद्रव्यसंस्का–रादिभिर्युक्तः यष्टव्यमेवेति पुरुषोत्तमाराधनप्रयोजनत्वेनाश्य–मेव यष्टव्यमिति मनः समाधाय दृढीकृत्य यो यज्ञ इज्यते स सात्त्विकः ॥११॥

माथि भनिएका तीन प्रकारका आहार गर्नेहरूका स्वभावका अनुकूल सात्त्विकादि भेदले यज्ञ पनि तीन्रपकारका हुन्छन्, तिनीहरूलाई तीन श्लोकहरूद्वारा वर्णन गर्नुहुन्छ। फलको आकांक्षाले रहित पुरुषहरूद्वारा, मनमा यो निश्चय गरेर कि वेद विहित मन्त्र, द्रव्य, संस्कारादिले युक्त यज्ञ, भगवान्‌को आरा–धनाको निमित्त, अवश्य नै गर्नुपर्दछ, जुन यज्ञ गरिन्छ त्यो सात्त्विक यज्ञ हो ॥११॥

–★–★–★–

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

**अभिसन्धाय तु फलं दम्भार्थमपि चैव यत्।**
**इज्यते भरतश्रेष्ठ तं यज्ञं विद्धि राजसम्॥**

**परन्तु हे भरतश्रेष्ठ! जो फलको इच्छा राखेर नै यज्ञ गर्दछन् अथवा दम्भ अर्थात् बडप्पनको लागि गरिन्छ त्यस यज्ञलाई तिमी राजस संझ॥१२॥**

राजसयज्ञमाह–अभिसन्धायेति। फलमभिसन्धाय इदं मम स्यादित्युद्दिश्य तु यदिज्यते यजनं क्रियते, दम्भार्थं धार्मिकत्वख्यापनार्थमपीत्यपिशब्दाद्यशोऽर्थो यस्तं यज्ञं राजसं विद्धि॥१२॥

अब राजसयज्ञको बारेमा भन्नुहुन्छ। फलको आकांक्षा गरेर अर्थात् मलाई यस्तो प्राप्त होओस, यस्तो उद्देश्यले र आफुलाई धर्मात्मा प्रसिद्ध गर्नका लागि वा यशको इच्छाले जो यज्ञ गरिन्छ, त्यस यज्ञलाई हे अर्जुन! राजस यज्ञ भनेर जान्नु॥१२॥

–★–★–★–

**विधिहीनमसृष्टान्नं मन्त्रहीनमदक्षिणम्।**
**श्रद्धाविरहितं यज्ञं तामसं परिचक्षते॥**

**शास्त्रविधिले हीन, अन्न-दानले रहित, बिना मन्त्रहरूका, बिना दक्षिणाको र बिना श्रद्धा गरिने यज्ञलाई तामस भनिन्छ॥१३॥**

तामसं यज्ञमाह–विधिहीनमिति। शास्त्रोक्तद्रव्यसंस्कार–हीनमसृष्टान्नं पात्रेभ्यो न प्रतिपादितमन्नं यस्मिन् साङ्गमात्र–हीनमदक्षिणं यथोक्तदक्षिणाहीनं श्रद्धाविरहितं यज्ञं तामसं परिचक्षते कथयन्ति॥१३॥

अब तामस यज्ञ भन्नुहुन्छ। शास्त्रद्वारा विहित संस्कारादिले हीन, सत्पात्रलाई जसमा अन्न दिईंदैन अर्थात् ब्रह्मणादिको लागि जसमा अन्न पकाईएन, मन्त्रले हीन, र उचित दक्षिणाले हीन र विशेष गरेर श्रद्धा रहित जो यज्ञ हुन्छ त्यसलाई तामस यज्ञ भन्दछन्॥१३॥

–★–★–★–

**देवद्विजगुरुप्राज्ञपूजनं शौचमार्जवम्।**
**ब्रह्मचर्यमहिंसा च शारीरं तप उच्यते॥**

**देउता, ब्राह्मण, गुरुवर्ग र जीवन्मुक्त महापुरुषको यथा योग्य पूजन गर्नु, शुद्धि राख्नु, सरलता, ब्रह्मचर्यको पालन गर्नु र हिंसा नगर्नु यिनीहरूलाई शरीर सम्बन्धी तप भनिन्छ॥१४॥**

अथ तपसो गुणतस्त्रैविध्यं वक्तुं तस्य शरीरवाङ्मनोभिः साध्यत्वाच्छरीरादिभेदेन तावत्त्रैविध्यमाह त्रिभिः–देवद्विजेति। दीव्यति विश्वसर्गादिना क्रीडति ब्रह्मरुद्रेन्द्रादीन्विजिगीषते वा स्वभासा सर्वं (जगत्) प्रकाशयति वेति देवो भग–वांञ्छ्रीपुरुषोत्तमः। गुरुस्तत्त्वोपदेशेनाज्ञाननाशकः। प्राज्ञो गुरुव्यतिरिक्तोऽन्योऽपि तत्त्वज्ञस्तेषां पूजनम्। शौचं मृज्ज–लाभ्यां स्नानेन शरीरशोधनम् आर्जवं शरीरवाङ्मनसामकौटिल्यं, ब्रह्मचर्यमष्टविधमैथुनत्यागः। तथाऽऽहुः "स्मरणं कीर्त्तनं केलिः प्रेक्षणं गुह्यभाषणम्। सङ्कल्पोऽध्यवसायश्च क्रियानिर्वृत्तिरेव च। एतन्मैथुनमष्टाङ्गं प्रवदन्ति मनीषिणः। विपरीतं ब्रह्म–चर्यमनुष्ठेयं मुमुक्षुभिः। अहिंसा परपीडावर्जनं, चकारा–दस्तेयादिसमुच्चयः एतच्छारीरं तप उच्यते॥१४॥

तप गुणानुसार तीनप्रकारको हुन्छ भन्नका लागि पहिले त्यसको साधन भेदले अर्थात् शरीर, वचन र मनको भेदले त्यो तीन प्रकारका भएको कुरा भन्नुहुन्छ- देव अर्थात् विश्वको सृष्टि पालन आदिसँग क्रीड़ा गर्नेवाला, अथवा ब्रह्म, रुद्र, इन्द्रादिलाई जिलेवाला अथवा आफ्नो तेजले सम्पूर्ण जगत्लाई प्रकाशित गर्नेवाला श्रीपुरुषोत्तम भगवान्, गुरु अर्थात् तत्त्वको उपदेश द्वारा अज्ञानको नाश गर्नेवाला, प्राज्ञ अर्थात् गुरुलाई छोडेर र विवेकी र तत्त्वलाई जान्ने पुरुष। यी सबैका अर्थात् भगवान्, गुरु, प्राज्ञ आदिको पूजन, शौच अर्थात् माटो र जलले स्नानद्वारा शरीरलाई पवित्र गर्नु, आर्जव अर्थात् शरीर, वचन र मनको अकुटिलता वा समता, ब्रह्मचर्य धारण गर्नु अर्थात् आठै प्रकारका मैथुनलाई त्याग गर्नु र अरुलाई पीडा नदिनु, यीनीहरूलाई नै शारीरिक वा शरीर सम्बन्धी तप भन्दछन्। 'च' शब्दले चोरी नगर्नु आदि पनि शारीरिक तपमा नै सम्मिलित छन्। आठप्रकारका मैथुन यसरी भनिएको छ –'स्मरणं.....मुमुक्षुभिः॥१४॥

–★–★–★–

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**अनुद्वेगकरं वाक्यं सत्यं प्रियहितं च यत्।**
**स्वाध्यायाभ्यसनं चैव वाङ्मयं तप उच्यते॥**

**जुन कसैलाई पनि उद्विग्न नगर्नेवाला, सत्य र प्रिय तथा हितकारक बोली छ त्यो तथा स्वाध्याय र अभ्यास (नामजप आदि) पनि वाणी सम्बन्धी तप हुन्॥१५॥**

वाङ्मयं-तप आह-अनुद्वेगेति। परेषामुद्वेगं क्षोभं न करोतीत्यनुद्वेगकरं, सत्यं यथानुभूतार्थकथनं, प्रियं श्रोतुः प्रीतिकरं, हितं च परिणामे सुखावहं, यद्वाक्यं स्वाध्यायाभ्यसनं चैव वेदवेदान्ताध्ययनाभ्यासश्च वाङ्मय वाग्विकारं तप उच्यते विवेकिभिः॥१५॥

अब वचन सम्बन्धी तपको वर्णन गर्नुहुन्छ।
अरुलाई क्षोभ उत्पन्न नगर्ने, सत्य अर्थात् जस्तो अनुभव गरियो त्यस्तो नै भनिएको, सुन्नेहरूमा प्रीति उत्पन्न गर्नेवाला र अन्तमा सुख दिनेवाला वचनको व्यवहार गर्नु र वेदान्त पढ्ने अभ्यासलाई विवेकीहरू वाङ्मय अर्थात् वचन सम्बन्धी तप भन्दछन्॥१५॥

-★-★-★-

**मनः प्रसादः सौम्यत्वंमौनमात्मविनिग्रहः।**
**भावसंशुद्धिरित्येतत्तपो मानसमुच्यते॥**

**मनको प्रसन्नता, सौम्यभाव, मननशीलता, मनको निग्रह र भावहरूको राम्रो प्रकारले शुद्धि -यस प्रकारले यो मन-सम्बन्धी तप भनिन्छ॥१६॥**

मानसं तप आह-मन:प्रसाद इति। मनः प्रसाद कामक्रोधादित्यागेन मनसः स्वच्छता, सौम्यत्वं मुखादिप्रसादहेतुरन्तस्तुष्टिः, मौनं वृथाऽऽलापवर्जनम्, आत्मविनिग्रहः मनसोऽसत्प्रवृत्तेरवष्टम्भनं भावसंशुद्धिः भावस्य हृदयस्य संशुद्धिर्विषयभोगवासनारूपमालिन्याभावः, इत्येतन्मानसं तप उच्यते॥१६॥

अब मानस तप वर्णन गर्नुहुन्छ।
काम क्रोधआदिलाई छोड्नाले मनको स्वच्छता, सौम्यत्व अर्थात् मुखादिको प्रसन्नताको कारण अन्त:तुष्टि, मौन अर्थात् वृथालाप नगर्नु, मनलाई असत् काममा जानबाट रोक्नु, विषय-भोग वासनारूप मलिनता हृदयमा न रहनु, यी सबै मानस तप भनिन्छन्॥१६॥

-★-★-★-

**श्रद्धया परया तप्तं तपस्तत्त्रिविधं नरैः।**
**अफलाकाङ्क्षिभिर्युक्तैः सात्त्विकं परिचक्षते॥**

**परम श्रद्धाले युक्त फलेच्छालेरहित मनुष्यहरूका द्वारा जुन तीन प्रकार (शरीर, वाणी र मन) का तप गरिन्छ त्यसलाई सात्त्विक भनिन्छ॥१७॥**

तदेवं शरीरादिभेदेनोक्तस्य त्रिविधस्यापि तपसः सात्त्विकादि भेदेन त्रैविध्यमाह-श्रद्धयेति। परया प्रकृष्टया श्रद्धया आस्तिक्यबुद्ध्या तत्प्रकृतं त्रिविधं शरीरवाङ्मनोभिरित्युक्तम् अफलाकाङ्क्षिभिः फलाकाङ्क्षारहितैर्युक्तैः समाहितैर्नरैर्यत्तपस्तप्तमनुष्ठितं तत्सात्त्विकं परिचक्षते कथयन्ति॥१७॥

शारीरिक, मानसिक आदि भेदले तीन प्रकारका भनिएका तपहरूलाई सात्त्विक आदि भेदहरूले तीन प्रकारका हुने कुरा अब भन्नुहुन्छ। फलको इच्छाले रहित र एकाग्र चित्तवाला पुरुषहरूद्वारा परमश्रद्धाले युक्त भई जो उपरोक्त कायिक, वाचिक र मानसिक तीनै प्रकारका तपहरू गरिन्छ, ती सात्त्विक भनिन्छन्॥१७॥

-★-★-★-

**सत्कारमानपूजार्थं तपो दम्भेन चैव यत्।**

**क्रियते तदिह प्रोक्तं राजसं चलमध्रुवम् ॥**

**जुन तप सत्कार, मान र पूजा पाउनको लागि तथा देखाउनको लागि पनि गरिन्छ त्यो यस लोकमा अनिश्चित र नाशवान् फल दिनेवाला तपलाई राजस भनिन्छ ॥१८॥**

राजसं तप आह–सत्कारेति। सत्कार: साधुकार: साधुरयं तपस्वी श्रेष्ठ इत्यादिवाक्प्रशंसा, मान: प्रत्युत्थानाभिवादनादिपूजा–द्रव्योपायनादीत्येतदर्थं सत्कारमानपूजार्थं दम्भेन च हेतुना यत्तप: क्रियते, तदिह राजसमतएव चलमपायि तथाऽप्य–ध्रुवं किञ्चित्कालस्थायि, न यावज्जीवमित्यर्थ: ॥१८॥

अब राजस तप वर्णन गर्नुहुन्छ।
सत्कार अर्थात् यी साधु हुन्, श्रेष्ठ छन् इत्यादि वाक् प्रशंसाका लागि वा मान पूजाका लागि अर्थात् जसमा मान्छेहरू उठेर नमस्कार गरुन् र फूल चन्दनादि द्रव्यहरूले पूजा गरुन् भन्ने दम्भले जो तप गरिन्छ त्यो राजसी तप भनिन्छ। यसैले यस्तो तप अनिश्चित र थोरै समयम सम्म मात्र रहने हुन्छ, जीवनभरी बस्दैन ॥१८॥

–★–★–★–

**मूढग्राहेणात्मनो यत्पीडया क्रियते तप:।**
**परस्योत्सादनार्थं वा तत्तामसमुदाहृतम् ॥**

**जुन तप मूढ़तापूर्वक हठले आफुलाई पीडा दिएर अथवा अरुलाई कष्ट दिनको लागि गरिन्छ त्यो तप तामस भनिएको छ ॥१९॥**

तामसमाह–मूढग्राहेणेति। मूढा अविवेकिनस्तेषां ग्राहेण वृथाऽभि–निवेशेन आत्मन स्वस्य पीडया यत्तप: क्रियत्ते, परस्योत्सा–दनार्थमुच्छेदनार्थं वा क्रियते, तत्तामसमुदाहृतम् ॥१९॥

अब तामस तप भन्नुहुन्छ।
अविवेकीहरू दुराग्रहले शरीरलाई पीडा दिएर वा अर्काको नाशका लागि जो तप गर्दछन् त्यो तामसी तप भनिन्छ ॥१९॥

–★–★–★–

**दातव्यमिति यद्दानं दीयतेऽनुपकारिणे ।**
**देशे काले च पात्रे च तद्दानं सात्त्विकं स्मृतम् ॥**

**दान दिनु कर्तव्य हो– यस्तो भावले जो दान देश तथा काल र पात्र भेट्टाएपछि निष्कामभावले दिईन्छ त्यो दान सात्त्विक दान भनिएको छ ॥२०॥**

इदानीं प्रतिज्ञातेषु यज्ञादिष्ववशिष्टस्य दानस्य गुणतस्त्रैवि–ध्यमाह त्रिभि:–दातव्यमिति। दातव्यमित्येव निश्चयेन न तु फलोद्देश्येन यद्दानं दीयते, अनुपकारिणे प्रत्युपकाराकर्त्रे अयं मम प्रत्युपकारं करिष्यतीत्युद्देश्याविषयायेत्यर्थ:। देशे माथुरपुष्करकुरुक्षेत्रगङ्गादिक्षेत्रे, कार्त्तिकसहोमाघ मासादौ, पात्रे च शमदमतितिक्षादियुक्ताय श्रोत्रियाय तद्दानं सात्त्विकं स्मृतम् ॥२०॥

प्रतिज्ञा गरेको यज्ञादि विषयमा अवशिष्ट दानको, गुणहरूका अनुकूल, तीन प्रकारको हुनु अब तीन श्लोकहरूमा भन्नुहुन्छ। दिनु नै पर्दछ यस बुद्धिले र फलको आकांक्षाले होईन, जुन दान अनुपकारी पुरुषहरूलाई, अर्थात् जसबाट प्रत्युपकारको आशा नहोस, दिईन्छ र मथुरा, पुष्कर, कुरुक्षेत्र, गंगा आदि शुभस्थानहरूमा, कार्तिक, बैशाख, माघ, पूर्णिमा अमावस्या ग्रहण आदि शुभ समयमा शम, दम, तितिक्षा आदि गुणहरूले युक्त श्रोत्रिय ब्राह्मणहरूलाई जो दिईन्छ, त्यो सात्त्विक दान भनिन्छ ॥२०॥

–★–★–★–

**यत्तुप्रत्युपकारार्थं फलमुद्दिश्य वा पुन:।**
**दीयते च परिक्लिष्टं तद्दानं राजसं स्मृतम् ॥**

**तर जुन दान क्लेशपूर्वक र प्रत्युपकारको लागि अथवा फल–प्राप्तिको उद्देश्य बनाएर दिईन्छ भने त्यो दान राजस दान भनिएको छ ॥२१॥**

राजसदानमाह–यत्त्विति। तुशब्द:

अब राजस दान वर्णन गर्नुहुन्छ। 'तु' शब्दको अर्थ यो हो कि

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

पूर्वोक्तान्निष्कृत्वद्योतनार्थः। प्रत्युपकारार्थं ममायमुपकरिष्यतीत्येवमर्थं, फलमैहिकामुष्मिकं वा पुनरुद्दिश्य यद्दीयते परिक्लिष्टञ्च एतावद्द्रव्यं मया कथं देयमिति चित्ते परिक्लेशयुक्तं यथा भवति तथा तद्दानं राजसमुदाहृतम् ॥२१॥

सात्त्विक दान भन्दा राजस दान तलको हो। प्रत्युपकारको भावले अर्थात् जसलाई म दान दिन्छु त्यो कुनै दिन मेरो भलाई गर्नेछ वा यस लोक र परलोकमा शुभफल पाउने इच्छाले, चित्तमा अत्यन्त दुःख मानेर जस्तो म यति धेरै धन कसरी दिऊँ, जो दान दिईन्छ, त्यो राजस दान भनिन्छ॥२१॥

-★-★-★-

**अदेशकाले यद्दानमपात्रेभ्यश्च दीयते।**
**असत्कृतमवज्ञातं तत्तामसमुदाहृतम्॥**

**जुन दान बिना सत्कारकै तथा अवज्ञापूर्वक अयोग्य ठाउँ र समयमा कुपात्रलाई दिईन्छ भने त्यो दान तामस भनिएको छ॥२२॥**

तामसदानमाह–अदेश इति। अत्रादेशकाले इत्यनेन पुण्यत्वविशिष्टदेशकालयोः पर्युदासोऽभिप्रेतो न केवलयोरसम्भवात्। तथा चादेशे म्लेच्छामेध्यादिसंसृष्टेऽशुद्धे इत्यर्थः। अकाले सङ्क्रान्तिद्वादशीदर्शव्यतीपातादिपुण्यकालरहिते, अपात्रेभ्यश्च नटनर्त्तकमूर्खकर्षकादिभ्यः, कथञ्चिद्देशकालादौ प्राप्तेऽपि असत्कृतं पादप्रक्षलनादिसत्काररहितम्, अवज्ञातं तिरस्कारवचनपूर्वकं यद्दानं दीयते तत्तामसमुदाहृतमुक्तम्॥२२॥

अब तामस दान भन्नुहुन्छ।अदेशकालमा अर्थात् पवित्र देश र शुभकालले रहित मात्रै होईन बरु त्यसको ठीक उल्टो देश र कालमा, जस्तो म्लेच्छ र अपवित्र वस्तुहरूका संसर्गले अपवित्र स्थानमा र अकालमा अर्थात् जब संक्रान्ति, द्वादशी, अमावस्या, पूर्णिमा आदि पुण्य काल नभएको बेला, अपात्रहरूलाई जस्तै नट, नर्तक, मूर्ख, हलो जोत्नेवाला आदिलाई जो दान दिईन्छ त्यो तामस दान भनिन्छ। फेरि कहिँ अलिकति राम्रो देशकाल मिल्दा पनि जुन दान असत्कारका साथ,जस्तो दान पाउनेहरूको गोडा नधुनु र तिरस्कार आदि वचन पूर्वक दिईन्छ भने त्यो तामस दान भनिन्छ॥२२॥

-★-★-★-

**ॐतत्सदिति निर्देशो ब्रह्मणस्त्रिविधः स्मृतः।**
**ब्राह्मणास्तेन वेदाश्च यज्ञाश्च विहिताः पुरा॥**

**ॐ, तत्, सत्- यी तीन प्रकारका नामहरूले जुन परमात्माको निर्देश(संकेत) गरिएको छ, उहि परमात्माद्वारा सृष्टिको आदिमा वेद तथा ब्राह्मण र यज्ञको रचना गरिएको हो॥२३॥**

तदेवमाहारयज्ञादीनि मुमुक्षुभिः सात्त्विकान्युपादेयानि राजसतामसानि हेयानीत्येतदर्थं तेषां त्रैविध्यमुक्तं, तत्र सात्त्विकाहारेण शुद्धसत्त्वानां सात्त्विकयज्ञादिष्वधिकृतानामनुष्ठातृणामनुष्ठेयेषु सात्त्विकेष्वपि यज्ञतपोदानेषु देशकालद्रव्यमन्त्रक्रियादिच्छिदङ्गवैगुण्येन प्रत्यवायापत्त्याऽदृष्टानुत्पतौ तन्नैष्फल्यं स्यादिति तद्वैगुण्यपरिहाराय परमकारुणिको भगवानङ्गपूरणत्वेन तत्साद्गुण्यकारणं परब्रह्मवाचकशब्दोचारणमुपदिशति–ॐ तत्सदितीति। ॐ तत्सदित्यंवरूपो ब्रह्मणः परमात्मनः पुरुषोत्तमस्य निर्देशः, निर्दिश्यते प्रतिपाद्यतेऽनेनेति निर्देशः प्रतिपादकः शब्दो नामेत्यर्थः, त्रिविधस्त्रिप्रकारः स्मृतः, वेदवेदान्तविद्भिर्महर्षिभिर्ब्रह्मनामतया निर्दिष्ट इत्यर्थः। ॐमिति ब्रह्म ॐतद्ब्रह्म

मुमुक्षुहरूले सात्त्विक आहार यज्ञादि ग्रहण गर्नु पर्दछ र राजसिक तामसिक आहारादिकहरूलाई छोड्नु पर्दछ। यसैले उनीहरूका गुणानुकुल तीन प्रकारको भेदहरू बताउनुभयो। अब सात्त्विक आहारको व्यवहारबाट शुद्ध अन्तःकरण हुनाले सात्त्विक यज्ञ गर्नमा अधिकारी मनुष्यहरू द्वारा गरिएका सात्त्विक यज्ञ, तप, दान आदिमा देश, काल, द्रव्य, मन्त्र, क्रिया आदि सम्बन्धी अलिकति पनि त्रुटि भएमा दोष उत्पन्न हुन्छ, जसले फल(अदृष्ट) उत्पन्न हुँदैन र सबै यज्ञ, तप आदिको अनुष्ठान निष्फल हुनजान्छ। यसै विगुणता वा दोषलाई हटाउनका लागि, र कर्मको सर्वांश पूरकत्व र सफलताको अर्थ परमा कारुणीक श्रीभगवान् परब्रह्मको वाचक शब्दलाई उच्चारण गर्ने आदेश दिन्छ।
वेद वेदान्तलाई जान्ने महर्षिहरू 'ॐ तत् सत्' यी तीन शब्दहरूलाई ब्रह्म अर्थात् परमात्मा पुरुषोत्तमको प्रतिपादक भन्दछन्। जस्तो अकार, उकार, मकार यी तीन मिलेर एक प्रणव छ त्यस्तै नै यी तीन मिलेर ब्रह्मको नाम हुन्। यस सम्बन्धमा श्रुतिमा भनिएको छ-'ओमिति ब्रह्म.....भिध्यायीत्' अर्थात् ओम् ब्रह्म , ओम् तत्

ॐसद्ब्रह्म ॐमित्यनेनैवाक्षरेण परं पुरुषमभिध्यायीत'' इत्यादिश्रुतिभि: 'एकाक्षरं परं ब्रह्म प्राणायाम: परं तप: प्रणवाद्यास्तथा वेदा: प्रणवे पर्यवस्थिता:॥ ॐमित्येकाक्षरं ब्रह्म व्याहरन्नि''त्यादिस्मृतिभिश्च ॐकारो ब्रह्मनामतया निर्दिष्ट:। "तत्त्वमसि, तदेवर्त्तं तदु सत्यमाहु: यदेव ब्रह्म परं कवीनाम्" इत्यादि श्रुतिभि: "यत्तत्पदमनुत्तमं तद् ब्रह्म परमं धाम्" इत्यादिस्मृतिभिश्च तच्छब्दस्य ब्रह्मनामतया निर्देश: स्मृत:। "सदेव सौम्येदमग्र आसीत्सन्मूला: सौम्येमा: सर्वा: प्रजा: सत्प्रतिष्ठा" इत्यादिश्रुत्या "सदसत् क्षरमक्षरमि''त्यादिस्मृत्या च सच्छब्दो ब्रह्मनामतया निर्दिष्ट:। साद्‌गुण्यहेतुत्वेनैनं ब्रह्मनिर्देशं स्तौति तेन त्रिविधेन ब्रह्मणो निर्देशेन ब्राह्मणा वैदिकास्त्रैवर्णिका वेदाश्च यज्ञाश्च कर्त्तृकरणकर्मरूपा: पुरा पूर्वं सृष्ट्यादौ मदात्मकेन प्रजापतिना विहिता: प्रवर्त्तिता:, वैगुण्यपरिहारेण साद्‌गुण्यपूर्णीकृता इत्यर्थ:। तस्मान्महाप्रभावोऽयं परमात्मनिर्देशो यज्ञादिवैगुण्यपरिहाराय नियततया स्मर्त्तव्य इति भाव॥२३॥

ब्रह्म हो, ओम् सत् ब्रह्म हो। ॐ यस एक अक्षर नै परमपुरुष भनिन्छ। स्मृतिहरू पनि यही कुरा भन्दछन् यथा:- 'एकाक्षरं...... व्याहरन्।' अर्थात् 'ॐ' यो एकाक्षर परब्रह्म हो र प्राणायाम पर तप हो। वेदको आदि प्रणव 'ॐ' हो र यसैले वेद त्यसैमा स्थित छ। 'ॐ' यसै एकाक्षर ब्रह्मलाई भन्दै यी सबै श्रुति स्मृतिहरूबाट पनि यहि प्रमाणित भयो कि 'ॐ' शब्द ब्रह्मको निर्देशक हो। यसै प्रकार तत् र सत् पनि ब्रह्मको निर्देशक हुन्। यसको प्रमाण पनि श्रुतिस्मृतिको वाक्य हो यथा श्रुति-'तत्त्वमसि..... कवीनाम्' अर्थात् तिमी तत् (ब्रह्म)हौ, तत् (ब्रह्म) सत्य हो, तत् ब्रह्मलाई सत्य भनिन्छ। तत् नै सूक्ष्मदर्शिहरूका ब्रह्म हो। स्मृति- 'यत्त......धाम' अर्थात् जो तत् पद छ त्यो सर्वश्रेष्ठ हो। तत् ब्रह्म र परमधाम हो। यी सबै श्रुति स्मृति वाक्यहरूद्वारा तत् शब्द ब्रह्मको वाचक भयो। सत् पनि ब्रह्मको नै वाचक हो, यथा श्रुति- 'सदेव. ....सत्प्रतिष्ठा:' अर्थात् हे शिष्य, यी सबै सृष्टिहरूको मूल सत् नै हो। यी सबै लोकहरू सत् मा नै प्रतिष्ठित छन्। यी श्रुतिहरू र स्मृतिहरूका 'सदसत् क्षरक्षरम्' आदि वचनहरूले सत् पनि ब्रह्मको वाचक नै भनिएको छ। सद्‌गुणताको हेतू हुनाले यी ब्रह्मका नामहरूको अब प्रशंसा गर्नुहुन्छ। ॐ, तत्, सत् यी नी ब्रह्मका प्रतिपादक शब्दहरूका द्वारा मदात्मक ब्रह्माले सृष्टिको आरम्भमा वेदको अधिकारी त्रिवर्णी अर्थात् ब्राह्मण, क्षत्रिय, वैश्य, र चार वेद र सबै यज्ञहरूका कर्ता, करण र कर्मरूपले निर्माण गर्नुभयो। भाव यो हो कि विगुणतालाई हटाएर सद्‌गुणताले पूर्ण गर्नुभयो। अर्थात् परमात्माको निर्देशक यी तीन ॐ, तत् र सत् ठूलो प्रभाववाला हुन् र यज्ञ आदिको दोषलाई हटाउनका लागि सदा नियत रूपले स्मरण गर्न योग्य छन्॥२३॥

-★-★-★-

**तस्मादोमित्युदाहृत्य यज्ञदानतप: क्रिया:।**
**प्रवर्तन्ते विधानोक्ता: सततं ब्रह्मवादिनाम्॥**

**यसैले वैदिक सिद्धान्तलाई मान्ने पुरुषहरूको शास्त्रविधिले नियत यज्ञ, दान र तपरूप क्रिया हरू सदा 'ॐ' यस परमात्माको नामको उच्चारण गरेर मात्रै आरम्भ हुन्छ॥२४॥**

एवं ब्राह्मणाद्युत्तमसृष्टौ तच्छ्रेयोहेतुतया समुदितस्य त्रिविधस्य ब्रह्मनाम्न: समन्वय उक्त:। इदानीमभीष्टसिद्ध्यर्थं कार्येषु त्रयाणामोङ्काराद्यवयवानां समन्वयप्रकार उच्यते। तत्रादावोंकारस्यान्वयमाह-तस्मादिति। यस्मादयं सर्ववेदादिभूत:परब्रह्मवाचकस्तस्मादोमित्युदाहृत्योच्चार्य ब्रह्मवादिनां त्रैवर्णिकानामोंकारोच्चारणानन्तरं विधानोक्ता विधिना दर्शिता यज्ञदानतप:क्रिया: सततं सर्वदा प्रवर्त्तन्ते प्रकर्षेण दोषाभावेन सम्पद्यन्ते॥२४॥

यस प्रकार ब्राह्मण आदि उत्तम सृष्टिमा उनीहरूका श्रेयका लागि भनिएका ब्रह्मको तीन प्रकारका नामहरूको समन्वय भन्नुभयो। अब अभीष्ट सिद्धिका लागि ओंकारादि तीन प्रकारका अवयवहरू अर्थात् ॐ, तत्, सत्को ती कामहरूमा समन्वयको रीति बताउनुहुन्छ। यस श्लोकमा प्रथम ॐ को समन्वय भन्नुहुनेछ। ॐ सबै वेदहरूको आदि भूत र परब्रह्मको वाचक हो, यसैले ब्रह्मवादी अर्थात् ब्राह्मण, क्षत्रिय, वैश्य यसको उच्चारण गरेर वेद विधिले देखाईएका यज्ञ, दान, तप आदि क्रियाहरूमा सदा प्रवृत्त हुन्छन्, अर्थात् ॐको उच्चारण गरेर दोष रहित भई यी कर्महरूको सम्पादन गर्दछन्॥२४॥

-★-★-★-

**तदित्यनभिसन्धाय फलं यज्ञतपः क्रियाः।**
**दानक्रियाश्च विविधाः क्रियन्ते मोक्षकाङ्क्षिभिः॥**

**'तत्' नामले भनिने परमात्माको लागि नै सबैथोक हो– यस्तो मानेर मुक्ति चाहने मनुष्यहरूद्वारा फलको इच्छाले रहित भएर अनेक प्रकारको यज्ञ र तप तथा दानरूप क्रियाहरू गरिन्छ॥२५॥**

एवं फलानुसंहितकर्मणामोंकारोच्चारपूर्वकं साफल्यमुक्त-मिदानीं निष्कामाणां मुमुक्षुणां यज्ञादिषु तदिति शब्दान्व-यमाह तदिति। पूर्वोक्तं श्रुत्यादिसिद्धं ब्रह्मणो नाम उदा-हृत्येति पूर्वश्लोकादाहृत्य योजनीयं, तदुच्चार्य फलमनभिसन्धाय फलाकाङ्क्षां विहाय मोक्षकाङ्क्षिभिर्वेदान्वितैर्यज्ञदानतपः क्रियाश्च विविधाः क्रियन्ते, केवलं तच्छब्दनिर्दिष्टपर-मात्मोद्देशेन निवर्त्त्यन्ते इत्यर्थः॥२५॥

सकाम कर्महरूमा कर्मको सफलताको लागि पहिले ॐको उच्चारण गर्नुपर्दछ यो माथि नै भनिसकियो। अब निष्काम कर्म गर्नेवाला मोक्षार्थिहरूका यज्ञादिमा 'तत्' शब्दको अन्वय बताउनुहुन्छ।

फलको आकांक्षालाई छोडेर मोक्षको इच्छा राख्ने श्रुति आदिले सिद्ध, ब्रह्मनाम तत्को उच्चारण गरेर वेद प्रतिपादित नाना प्रकारका यज्ञ, तप, दान आदि क्रिया गर्दछन्। अर्थात् ती सबै कर्म तत् शब्दले निर्दिष्ट परब्रह्मको नै उद्देश्यले गर्दछन्॥२५॥

–★–★–★–

**सद्भावे साधुभावे च सदित्येतत्प्रयुज्यते।**
**प्रशस्ते कर्मणि तथा सच्छब्दः पार्थ युज्यते॥**

**हे पार्थ! 'सत्' यस्तो यो परमात्माको नाम सत्तामात्रमा र श्रेष्ठ भावमा प्रयोग गर्ने गरिन्छ तथा प्रशंसनीय कर्महरूका साथ 'सत्' शब्द जोड्ने गरिन्छ॥२६॥**

इदानीं सच्छब्दान्वयप्रकारमाह–सद्भाव इति द्वाभ्याम्। सद्भाभावे वस्तुनोऽविद्यमानताशंकाव्यावृत्तिः सद्भावस्तस्मिन् तथा साधुभावे च असदधृत्तत्वशंकायां सद्धृत्तत्वख्यापनं साधुभावस्तस्मिन् सदित्येत् श्रुतिस्मृतिसिद्धं ब्रह्मणो वाचकं पदं लोकवेदयोः प्रयुज्यते। शिष्टैः। तथा प्रशस्ते माङ्गलिके विवाहोत्सवादौ कर्मणि सदिदं कर्मेति सच्छब्दो हे पार्थ प्रयुज्यते इत्यर्थः॥२६॥

अब सत् शब्दको समन्वय–रीति दुई श्लोकहरूद्वारा बताउनुहुन्छ– सत् नाम वेदमा ब्रह्मको प्रसिद्ध छ यसैले वस्तुको अभावको शंका हटाउनमा र त्यसको सत्यता निश्चय गर्नका लागि सत् शब्दको उच्चारण गर्दछन्। फेरि असत् वृत्तिको आशंकामा सद् वृत्तिलाई भन्नका लागि लोक वेदमा सत् शब्दको, जो श्रुति स्मृतिले सिद्ध, ब्रह्मको वाचक छ, शिष्ट मनुष्य व्यवहार गर्दछन्। पुनः मांगलिक कर्महरूमा, जस्तो विवाह उत्सव आदिमा सत् शब्दको प्रयोग गरिन्छ, हे अर्जुन!॥२६॥

–★–★–★–

**यज्ञे तपसि दाने च स्थितिः सदिति चोच्यते।**
**कर्म चैव तदर्थीयं सदित्येवाभिधीयते॥**

**यज्ञ तथा तप र दानरूप क्रियामा जुन स्थिति (निष्ठा) छ, त्यो पनि 'सत्' –यस्तो भनिन्छ र त्यस परमात्माको लागि गरिने कर्म पनि सत्– यस्तो भनिन्छ॥२७॥**

तस्मात्–यज्ञ इति। यज्ञे यज्ञकर्मणि या स्थितिः तपसि च या स्थितिर्दाने च या स्थितिर्निष्ठा सा सदित्युच्यते। सदसतोर्विनिर्णयं सङ्गृह्याह–कर्म चैवेति। यस्य चैतन्नामत्रयं स परब्रह्मभूतो भगवानेवार्थः प्रयोजनमुद्देश्यो यस्य तत्

यज्ञ, कर्म, तप र दानमा जुन निष्ठा हुन्छ त्यसलाई सत् भन्दछन्। सत् असत्को निर्णय जम्मा गरेर अब भन्नुहुन्छ। जुन काम परब्रह्मभूत भगवान्को लागि, जसको ॐ, तत् र सत् तीनै नाम छ, गरिन्छ त्यसलाई सत् भनिन्छ, जस्तो भगवान्को पूजा, उपहार, जन्मोत्सव आदि र उहाँका अंगभूत तुलसी फूल आदि टिप्नु,

तदर्थीयं कर्म पूजोपहारजन्मोत्सवाद्यङ्गतया तुलसीपुष्पाद्य–वचयतदवरोपणमन्दिरनिर्माणमार्जनोपलेपनचित्रकरणविवि–धव्यञ्जनपाककरणगीतवाद्यनृत्यप्रदक्षिणप्रणामादिसर्वं सदितयेवाभिधीयते, सतः परमात्मनः प्राप्तिहेतुत्वात्। अत्रावधारणद्वयं तत्रैकमयोगव्यवच्छेदार्थकं द्वितीयमन्ययोग–व्यवच्छेदार्थकं, तदर्थीयं कर्म सन्नेति न अपितु सदेव। तदर्थीयव्यतिरिक्तं कर्म सन्नेत्यर्थः। "यथेह कर्मचितो लोकः क्षीयते एवमेवामुत्र पुण्यचितो लोकः क्षीयते इति" श्रुत्या "त्रैविद्या मां सोमपाः पूतपापा" इत्युपक्रम्य "क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति एवं त्रयीधर्ममनुप्रपन्ना गतागतं कामकामा लभन्त"इत्यादिना भगवता स्वयमपि देवादिभक्तानां स्वर्गादि फलकर्मणां क्षयिष्णुत्वाभिधानात्। भगवदर्थस्य कर्मणस्तु "मदर्थमपि कर्माणि कुर्वन् सिद्धिमवाप्स्यसि। सर्वकर्माण्यपि सदा कुर्वाणो मद्व्यपाश्रयः।मत्प्रसादवाप्नोषि,शाश्वतं पदमव्ययम्" इत्यादिना शाश्वताव्ययफलत्वप्रतिपादनात्। तदेव भगवदर्थी–यं यज्ञदानतपआद्यन्यदपि सर्वं कर्म परमात्माभिधानत्रयप्रयोगपूर्वकं सात्त्विकश्रद्धयाऽनुष्ठितं श्रेयस्करं भवतीति सिद्धम्॥२७॥

तुलसी फूलहरूका बगैंचा बनाउनु, मन्दिर बनाउनु, मन्दिरलाई सफा गर्नु, लिप्ने, चित्रकारी गर्नु, धेरै प्रकारका भोजन सामग्री बनाउनु, गाउनु, बजाउनु, नाच्नु, प्रदक्षिणा गर्नु, प्रणाम गर्नु आदि। यी सबै सत् यसैले हुन कि यी सत् स्वरूप परमात्माको प्राप्तिको कारण हुन्। श्लोकमा अवधारण सूचक'एव' शब्द दुईपल्ट आएको छ। एकले अयोगको र अर्कोले अन्य योगको वारण हुन्छ। अर्थात् एक 'एव' को अर्थ यो हो कि भगवान्का निमित्त गरिएका कर्म सत् होईनन्, त्यस्तो होईन, ती सत् नै हुन्। दोस्रो 'एव' को अर्थ यो हो कि भगवान्को लागि गरिएका कर्महरूलाई छोडेर दोस्रो कर्म सत् होईन। श्रुतिमा पनि यही कुरा छ, यथा–'यथेह....क्षीयते' अर्थात् जस्तो यहाँ कर्मले कमाएको लोकको क्षय हुन्छ त्यस्तै नै स्वर्गमा पनि पुण्यले कमाएको लोकको क्षय हुन्छ। फेरि भगवान्ले स्वयं पछाडि 'त्रैविद्या...यज्ञैरिष्ट्वा' देखि आरम्भ गरेर र 'क्षीणे......लभन्ते' सम्मले यो कुरा भन्नुभएको छ कि देवादिको भक्तहरूलाई जो स्वर्गादि फल मिल्दछन् ती नाश हुनेवाला हुन्। र भगवदर्थ जुन कर्म गर्ने गरिन्छ ती अव्यय र शाश्वत छन् अर्थात् अविनाशी फल दिनेवाला हुन जस्तो भगवान्ले स्वयं पछाडि भन्नुभएको छ- 'मदर्थ....व्ययम्' यी सबैले यो सिद्ध भयो कि सात्त्विक श्रद्धायुक्त र ॐ, तत्, सत् यी तीन नामहरूका उच्चारण पूर्वक यज्ञ तप आदि जति पनि कर्म भगवदर्थ गरिन्छ ती श्रेयस्कर हुन्छन्॥२७॥

–★–★–★–

**अश्रद्धया हुतं दत्तं तपस्तप्तं कृतं च यत्।**
**असदित्युच्यते पार्थ न च तत्प्रेत्य नो इह॥**

**हे पार्थ! अश्रद्धाले गरेको हवन, दिएको दान, गरेको तप तथा अरुपनि जेसुकै गरियोस त्यो सबै 'असत्' –यस्तो भनिन्छ। त्यसको फल न त यहाँ पाईन्छ र न मरेपछि नै हुन्छ अर्थात् त्यसको फल कहीं पनि सत् हुँदैन॥२८॥**

तदेतत्सर्वं श्रद्धयैवानुष्ठेयमिति दृढयितुमश्रद्धया कृतस्य नैष्फल्यं वदन्नध्यायमुपसंहरति–अश्रद्धयेति। अश्रद्धया होमदानतपःकृतं यच्चान्यदपि लौकिकं वैदिकं कर्म कृतं तत्सर्वमसदित्युच्यते। हे पार्थ तदश्रद्धया कृतं न प्रेत्य परलोकेऽपूर्वाजनकत्वात् नो इह लोके यशःसुखकरं न भवति,सद्भिर्निन्दितत्वात्"श्रद्धापूतं वदान्यस्य हतमश्रद्धयेतरदि"ति स्मृतेः। तस्माद्राजसतामसमासुरं कर्म विहाय सात्त्विकश्रद्धयैव सर्वं कर्म भगवत्प्रीत्यर्थमनुष्ठितमन्तःकरणशो–धनहेतुतया ज्ञानभक्तिद्वारेण मोक्षहेतुर्भवतीतीह दर्शितम्॥२८॥

सबै कर्म श्रद्धायुक्त भएर गर्नुपर्दछ- यसै कुरालाई यहाँ दृढ गर्नको लागि अश्रद्धायुक्त कर्महरूको निष्फलता बताउँदै यस अध्यायलाई समाप्त गर्नुहुन्छ। जुन होम, दान, तप आदि कर्म र अरु पनि लौकिक वा वैदिक कर्म अश्रद्धाले गर्ने गरिन्छ भने ती सबै असत् भनिन्छ। हे अर्जुन! यी कर्महरूबाट परलोक हुँदैन किनकी यी अपूर्व फललाई उत्पन्न गर्दैनन्। र यस संसारमा पनि यी यश वा सुख दिंदैनन् किनकी सज्जनहरू यी कर्महरूको निन्दा गर्दछन्। स्मृतिमा पनि भनेको छ- 'श्रद्धपूतं....तरत्' अर्थात् ठूला दानीहरूका श्रद्धाले गरिएका कर्म पवित्र हुन्छन् र अश्रद्धा पूर्वक गरिएका कर्म नष्ट हुन्छन्। यसैले राजस, तामस र आसुर कर्महरूलाई छोडेर सात्त्विक श्रद्धाले सबै कर्महरू भगवत् प्रीतिको लागि गर्नु। यसैले अन्तःकरणको शुद्धि भएर ज्ञान, भक्ति हुन्छ र यी नै मोक्षको कारण हुन्छन्, यस कुरालाई भगवान्ले देखाउनु भयो॥२८॥

## इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा–टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां श्रद्धात्रयविभागयोगो नाम सप्तदशोऽध्यायः॥१७॥

--★--★--★--

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

ॐश्रीपरमात्मने नमः

# अथाष्टादशोऽध्यायः

## अर्जुन उवाच

**सन्न्यासस्य महाबाहो तत्त्वमिच्छामि वेदितुम्।**
**त्यागस्य च हृषीकेश पृथक्केशिनिषूदन॥**

**अर्जुनले भने– हे महाबाहो! हे हृषीकेश! हे केशिनिषूदन! म संन्यास र त्यागको तत्त्व बेग्ला–बेग्लै जान्न चाहन्छु॥१॥**

अथेदानीमलसानामल्पबुद्धीनां मुमुक्षूणामेमेनैवाध्यायेन सम्यग्ज्ञातेन सर्वगीताध्यायार्थावगमे सर्वगीतार्थं संक्षिप्य वक्तुमयमध्याय आरभ्यते। तत्र पूर्वाध्यायान्ते "कर्म चैव तदर्थीयं सदित्येवाभिधीयत"इत्यनेन परब्रह्मार्थस्यैव कर्मणः सत्त्वमुक्तं तेन कर्मफलस्यैव त्यागो नतु कर्मण इति सूचितम्, "सर्वकर्मफलत्यागं ततः कुरु यतात्मवानि"त्यनेन द्वादशेऽ–ध्यायेऽपि कर्मफलस्यैव त्याग उक्तः। पञ्चमे तु "सर्वकर्माणि मनसा संन्यस्यास्ते सुखं वशी"त्यनेन कर्मसन्यास उक्तः। एवं सर्वकर्मसंन्यासं फलमात्रत्यागेन कर्मानुष्ठानं च परस्पर–विरुद्धं मुमुक्षवे सर्वज्ञो भक्तवत्सलो भगवान्कथमुपदिशेत तस्मात्संन्यासत्यागयोः स्वरूपैक्यं भेदो वेति सन्देहेन तयोस्तत्त्वबुभुत्सयाऽर्जुन उवाच संन्यासस्येति। महाबाहो केशिनिषूदनेति सम्बोधनाभ्याम् शत्रुसंहारार्थं महान्तौ बाहू यस्य स तथा दुर्जयमहासुरस्य केशिनः संहारकस्त्वं भक्तस्य ममापि शत्रून्नाशयिष्यसीति सूचितम्। हे हृषिकेशेत्यनेन सर्वेन्द्रियेश ममान्तःसर्वसंशयनिवारणक्षमेदानीमिमं (मे) संशयं छिन्धीत्याह–संन्यासशब्दार्थस्य तत्त्वं स्वरूपयाथात्म्यं वेदितुमिच्छामि। अत्र "वेदान्तविज्ञानसुनिश्चितार्थाः संन्यास–योगाद्यतयः शुद्धसत्त्वाः। ते ब्रह्मलोके तु परान्तकाले परामृतात् परिमुच्यन्ति सर्वे। न कर्मणा न प्रजया न धनेन त्यागेनैकेना–मृतत्वमानशुरि"त्यादिश्रुतिषु संन्यासत्यागश्च मोक्षसाधनतया विहितः। तथा "सर्वकर्माणि मनसा संन्यस्यास्ते सुखं वशी,

आलसी र अल्पबुद्धिवाला मुमुक्षुहरूले एउटै अध्यायलाई राम्रोसँग जान्दा सबै अध्यायहरूका अर्थको पूरै ज्ञान होस भन्नका लागि सम्पूर्ण गीताको अर्थ संक्षेपमा यस अठारौं अध्यायमा भन्नुहुनेछ। पूर्वको अध्यायको अन्तमा 'कर्म.....भिधीयते' ले यो कुरा भन्नुभयो कि भगवान्‌को लागि गरेको कर्म नै सत् हो। यसले यो प्रमाणित भयो कि कर्मको फलको नै त्याग गर्नु पर्दछ, कर्मको होइन। फेरि बाह्रौ अध्यायमा पनि 'सर्व.....यतात्मवान्' द्वारा केवल कर्मफलको नै त्याग भनिएको छ। तर पंचम अध्यायमा 'सर्व.....वशी' द्वारा कर्मको संन्यास वा त्याग भनिएको छ। अब सर्वज्ञ भक्तवत्सल भगवान्‌ले यस प्रकारका दुई विरोधी कुराहरूको उपदेश, अर्थात् एक त कर्मको फलको त्याग र अर्को कर्मको त्याग मुमुक्षुहरूका लागि कसरी गर्नुभयो? यसैले संन्यास र त्यागको स्वरूपको एकता छ या विभिन्नता यस सन्देहले युक्त अर्जुनले ती दुबैको तत्त्वलाई जान्ने इच्छाले सोधे।

हे महाबाहो! अथात् शत्रुहरूलाई मार्ने ठूला बाहु भएका र केशिनिषूदन अर्थात् केशीनामक दुर्जय राक्षसलाई मार्नेवाला! (यी दुबै सम्बोधनहरूबाट यो सुचित गरियो कि म भक्तको शत्रुहरूका हजुर नाश गरिदिनु हुनेछ।) हे हृषीकेश! अर्थात् सबै इन्द्रियहरूका स्वामी! (यो भनेर यो सूचित गरियो कि हजुर मेरो सबै संशयलाई हटाउन समर्थ हुनुहुन्छ, यसैले मेरो सबै संन्देहलाई हजुर हटाईदिनुहोस।) 'संन्यास' शब्दको यथार्थ रूप म जान्न चाहन्छु। श्रुतिले संन्यास र त्याग दुबैलाई मोक्षको साधन भनेको छ, यथा 'वेदान्त....मानशु' अर्थात् वेदान्तमा यत्नशील, सर्वकर्म फल त्याग योगले शुद्ध अन्तःकरणवाला, वेदान्तजनित विज्ञानद्वारा राम्रोसँग जानेका छन् आफ्नो र परमात्माको स्वरूप जसले, यस्ता मनुष्य अन्तकालमा अर्थात् अन्तिममा शरीर छुटेपछि परब्रह्मको उपासना गर्नाले अविद्याबाट छुट्दछन् र उनीहरूको स्थिति ब्रह्मलोकमा हुन्छ। (परामृतात् को स्थानमा यदि श्रुतिको 'पराभूतात्' पाठ हुने हो भने त्यसको अर्थ 'ब्रह्मलाई प्राप्त हुन्छन्' गर्नुपर्दछ।) कर्मले, सन्तानोत्पत्तिले वा धनले मोक्ष पाईदैन, केवल एक त्यागले नै मोक्षको प्राप्ति हुन्छ। फेरि हजुरले पनि दुबैलाई मोक्षको साधन भन्नुभएको छ। यथा–'सर्व...कुरु' भने के त्याग र संन्यासको भिन्न अर्थ छ वा दुबैको एउटै अर्थ छ? यदि भिन्न अर्थ छ भने दुबै

सर्वकर्मफलत्यागं ततः कुरु यतात्मवानि''ति पूर्वं भवताऽपि द्वौ विहितौ। किमेतौ तदवान्तरभेदनिमित्तं वक्तव्यं यथाऽहम–सन्दिग्धं तत्स्वरूपं जानीयां तथा विविच्य ब्रूहीत्यभिप्राः॥१॥

को पृथक् पृथक् अर्थ बताउनु होस। र यदि दुबै को एकै अर्थ हो भने दुबैमा भेद के छ यो भन्नुहोस, जसले म दुबैको असंदिग्ध रूपलाई जान्नसकूँ। यस तरह पृथक् पृथक् गरेर हजुर दुबैको यथार्थ तत्त्व मलाई भन्नुहोस॥१॥

–★–★–★–

## श्रीभगवानुवाच

**काम्यानां कर्मणां न्यासं सन्न्यासं कवयो विदुः।**
**सर्वकर्मफलत्यागं प्राहुस्त्यागं विचक्षणाः॥**

**श्रीभगवान्‌ले भन्नुभयो– कतिपय विद्वान् काम्य कर्महरूको त्यागलाई संन्यास संझिन्छन् र कतिपय विद्वान् सम्पूर्ण कर्महरूको फललाई त्याग भन्दछन्॥२॥**

अथैतयोः स्वरूपैक्यं यथा स्यात्तथा वक्तुं तावदस्मिन्विषये मतान्तराणि दर्शयन् श्रीभगवानुवाच–काम्यानामिति। "स्वर्गकामो यजेत पुत्रकामो यजेत वायव्यं श्वेतमालभेत भूतिकाम" इत्यादिभिर्वाक्यैः सकाममधिकृत्य विहितानां पशुयागपुत्रेष्ट्यादीनां कर्मणां न्यासं त्यागमनुष्ठानं संन्यासं संन्यासशब्दार्थं कवयः केचित्पण्डिता विदुर्जानन्ति। तथाऽऽह मनुः "मोक्षार्थी न प्रवर्त्तेत तत्र काम्यनिषिद्धयोः। नित्यनैमित्तिके कुर्यात्प्रत्यवायजिहासये''ति नित्यनैमित्ति–कानामनुष्ठीयमानानां सर्वेषां कर्मणां फलत्यागं त्यागशब्दार्थं प्राहुर्विचक्षणा विवेकिनः। फलत्यागेनापि त्यागशब्दस्य मुख्यार्थत्वात्। ननु "अहरहः सन्ध्यामुपासीत, यावज्जीव–मग्निहोत्रं जुहोतीत्यादिषु फलश्रवणाभावाद्येषां फलमेव नास्ति कथं तत्त्यागवचनमिति चेन्न "धर्मेण पापमपनुदति कर्मणा पितृलोक" इत्यादिश्रुतिषु श्रवणात् तत्त्यागस्य सम्भवात्। किञ्च "अविद्यया मृत्युं तीर्त्त्वा विद्ययाऽमृतमश्नुते" इति श्रुतौ अविद्याशब्दनिर्दिष्टस्ववर्णाश्रमोचितकर्मणो मृत्यु–शब्दनिर्दिष्टप्रमादतरणोपायत्वरूपफलस्यापि सत्त्वात्। "स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नर" इति भवता वक्ष्यमा–

संन्यास र त्यागको स्वरूपलको एकता बताउनका लागि यस विषयका मतान्तरहरूलाई पहिले भन्नुहुन्छ।
भगवान्‌ले भन्नुभयो–'स्वर्ग....भूतिकामः' अर्थात् स्वर्गको कामनाले यज्ञ गर्नु, पुत्रको इच्छाले यज्ञ गर्नु, यश वा वैभवको कामनाले वायु देवतालाई सेतो पशुको बलि दिनु। यी श्रुतिहरूद्वारा भनिएका कामना सहित अनुष्ठित पशुयज्ञ, पुत्रेष्टि यज्ञ आदि कर्महरूका त्यागलाई कोही कोही पण्डितहरू संन्यास भन्दछन्। मनुले पनि भनेका छन्–'मोक्षार्थी.....जिहायसा' अर्थात् मोक्षलाई चाहनेहरू काम्य र निषिद्ध कर्ममा नलाग्नु। प्रत्यवायको नाशको लागि नित्य र नैमित्तिक कर्महरूलाई अवश्य गर्नु। मनुले भन्नुभएको गर्नयोग्य नित्य नैमित्तिक कर्महरूका फल छोड्नुलाई त्याग भन्दछन्। फलत्याग नै त्याग शब्दको मुख्य अर्थ हो। अब यहाँ शंका हुन सक्दछ कि नित्य नैमित्तिक कार्यहरूका विषयमा जुन श्रुति स्मृतिहरूमा वचन छ जस्तो– 'अहरहः सन्ध्यामुपासीत' (प्रतिदिन संन्ध्या गर) 'जब सम्म जिउँछौ तब सम्म अग्निहोत्र गर' यिनीहरूमा फलको त कही पनि उल्लेख छैन तब यिनीहरूको फलको त्याग कसरी? तर यस्तो शंका गर्नु हुँदैन किनकी श्रुति मा नै लेखेको छ–'धर्मेण पापमपनुदति'(धर्मले पापको क्षय हुन्छ।), 'कर्मणा पितृलोकः'(कर्मले पितृहरूको लोक मिल्दछ)। यी श्रुतिहरूमा फल हुनु त सुनिन्छ, यसैले फलको त्याग सम्भव छ। फेरि श्रुतिमा भनेको छ'अविद्याद्धारा मृत्युलाई पार गरेर विद्याद्वारा अमृत अर्थात् मोक्ष प्राप्त गर्दछ।' यी श्रुतिहरूमा अविद्या शब्दको अर्थ हो वर्णाश्रमको उचित कर्म र तिनीहरूको फल भयो मृत्यु शब्दले निर्दिष्ट प्रमादलाई पार गर्नु अर्थात् वर्णाश्रम कर्म मृत्यु अर्थात् प्रमाद (अज्ञान)लाई तर्ने उपाय हो र यस प्रकार त्यो कर्म फलवाला भयो। फेरि भगवान् गीतामा अगाडि गएर भन्नुहुन्छ 'स्वे.....नरः' अर्थात् आ–आफ्ना कर्ममा निरत मनुष्य सिद्धिलाई प्राप्त गर्दछ यसले पनि कर्म फलवाला हुनु प्रमाणित हुन्छ। त्यसलाई अर्थात् नित्य नैमित्तिक कर्मलाई नछोड्दा कुनै दोष लाग्दैन। भाव यो हो कि नित्य–नैमित्तिक कर्म गर्नुपर्दछ। र काम्य कर्म त

णत्वाच्च। तदत्यागे दोषाभावात्। काम्यकर्मणां तु "गतागतं कामकामा लभन्ते" इति संसरणहेतुत्वाभिधानान्न मृत्युतरणोपायसिद्धिहेतुत्वसम्भावनाऽपीत्यलं विस्तरेण ॥२ ॥

मरण बाट तर्ने उपाय हुनै सक्दैन। यो बिल्कुल असम्भव हो किनकी स्वयं भगवान्ले भन्नुभएको छ कि 'गतागतं कामकामा लभन्ते' (काम्य कर्म गर्नेवाला संसारमा आउने जाने गरिरहन्छन् अर्थात् काम्यकर्म उनीहरूको संसरणको उपाय बन्दछ) ॥२॥

–★–★–★–

**त्याज्यं दोषवदित्येके कर्म प्राहुर्मनीषणः।**
**यज्ञदानतपः कर्म न त्याज्यमिति चापरे ॥**

**कतिपय विद्वान् यस्तो भन्दछन् कि कर्महरूलाई दोषको जस्तो छोडिदिनु पर्दछ र कतिपय विद्वान् यस्तो भन्दछन् कि यज्ञ, दान र तपरूप कर्महरूको त्याग गर्नु हुँदैन ॥३ ॥**

पुनर्मतान्तरमाह–त्याज्यमिति। एके मनीषिणः साङ्ख्याचार्या दोषवत् हिंसादोषवत्त्वेन बन्धकमिति हेतोः सर्वं यज्ञादिकं कर्म मुमुक्षुणा त्याज्यमिति प्राहुः। तत्र यज्ञदानतपःकर्म न त्याज्यमिति चापरे पण्डिताः कर्मनिष्ठाः प्राहुः ॥३ ॥

त्फेरि मतान्तर भन्नुहुन्छ– एक प्रकारका पंडितहरू जो सांख्यको आचार्य छन्, यो भन्दछन् कि यज्ञादि कर्म मुमुक्षुहरूले गर्नु हुँदैन किनकी ती दोषयुक्त छन् अर्थात् हिंसा दोषयुक्त हुनाले संसारमा बाँध्नेवाला हुन्। अन्य पण्डितगण जो कर्मनिष्ठ छन् उनीहरू भन्दछन् कि यज्ञ, दान, तप यी कर्महरू छोड्नु हुँदैन ॥३॥

–★–★–★–

**निश्चयं शृणु मे तत्र त्यागे भरतसत्तम।**
**त्यागो हि पुरुषव्याघ्र त्रिविधः सम्प्रकीर्तितः ॥**

**हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! तिमी संन्यास र त्याग –यी दुईमा पहिले त्यागको विषयमा मेरो निश्चय सुन; किनकी हे पुरुष श्रेष्ठ! त्याग तीन प्रकारको भनिएको छ ॥४॥**

एवं मतान्तराण्युक्त्वा त्यागविषयं निर्णयमाह–निश्चयमिति। तत्रैवं वादिप्रतिपन्ने त्यागे निश्चयं सर्वाविरुद्धपक्षं मे मत्तः शृणु। हे भरतसत्तम! नहि त्यागः सर्वैरवगन्तुं शक्यः। हे पुरुषव्याघ्र! हि यस्मात्त्यागस्त्रिविधस्तामसादिभेदेन सम्प्रकीर्त्तितस्तत्त्वविद्भिर्विवेकेन कथित इत्यर्थः ॥४ ॥

मतान्तरहरूलाई भनेर त्यागको विषयमा आफ्नो मत भन्नुहुन्छ– हे भरतश्रेष्ठ! त्यागको विषयमा यस प्रकार वादिहरूमा मतभेद र शंकाहरू छन्। यस विषयमा सर्व अविरुद्ध पक्ष तिमी मबाट सुन, किनकी त्याग को विषय सबै जना जान्न सक्दैनन्। हे पुरुषहरूमा सिंह! विवेकिहरूले तामस आदि भेदले त्याग तीन प्रकारका भनेका छन् ॥४॥

–★–★–★–

**यज्ञदानतपःकर्म न त्याज्यं कार्यमेव तत्।**
**यज्ञो दानं तपश्चैव पावनानि मनीषिणाम् ॥**

**यज्ञ, दान र तपरूप कर्महरूको त्याग गर्नु हुँदैन प्रत्युत उनीहरूलाई त गर्नु नै पर्दछ किनकी यज्ञ, दान र तप– यी कर्महरू मनीषिहरूलाई पवित्र गर्नेवाला हुन् ॥५ ॥**

कोऽसौ निश्चय इत्यत आह–यज्ञदानेतिद्वाभ्याम्। यज्ञदानतप इति वैदिकं कर्म मुमुक्षुणा न त्याज्यम्, अपि तु कार्यं कर्त्तव्यमेव तत् यज्ञो दानं तपश्चैव मनीषिणां मननशीलानामनभिहितफलानां पावनानि मनःशुद्धिकराणि ॥५ ॥

भगवान् आफ्नो निश्चयलाई दुई श्लोकहरूद्वारा भन्नुहुन्छ– मोक्षार्थिहरूले यज्ञ दान तप आदि वैदिक कर्म छोड्नु हुँदैन, त्यसलाई कर्त्तव्य संझेर नै गर्नु पर्दछ। फल न चाहने मननशील मनुष्यहरूको मन यी कर्महरूलाई गर्नाले शुद्ध वा पवित्र हुन्छ ॥५॥

–★–★–★–

**एतान्यपि तु कर्माणि सङ्गं त्यक्त्वा फलानि च।**

## कर्तव्यानीति मे पार्थ निश्चितं मतमुत्तमम् ॥

**हे पार्थ! यी (यज्ञ, दान र तपरूप) कर्महरूलाई तथा अन्य कर्महरूलाई आसक्ति र फलको इच्छा त्यागेर गर्नुपर्दछ; यो मेरो निश्चित गरिएको उत्तम मत हो ॥६ ॥**

ननु "मोक्ष्यसे कर्मबन्धनैरि"ति कर्मणां बन्धनत्वाभिधानात्कथमेषां पावनत्वमित्यत आह–एतानीति। यानि यज्ञादीनि कर्माणि पावनान्युक्तानि एतान्यपि सङ्गमहमेवं करिष्यामीत्यभिनिवेशं त्यक्त्वा, फलानि च ममैतत्फलसाधनानीति फलोद्देशं विहाय केवलमीश्वराज्ञापालनात्मकतया कर्त्तव्यानि। हे पार्थेति मे मम निश्चितमुत्तमं श्रेष्ठं मतम् ॥६ ॥

यहाँ यो शंका हुन्छ कि 'मोक्ष्यसे कर्मबन्धनैः' मा भगवान्ले कर्मलाई बाँध्नेवाला भन्नुभएको छ, तब कर्म पवित्र गर्नेवाला कसरी हुन सक्दछ? यसै शंकाको उत्तर भगवान् यस श्लोकमा दिनुहुन्छ– जो यज्ञादि कर्म पवित्र गर्नेवाला भनिएका छन्, तिनीहरूलाई पनि संग छोडेर अर्थात् 'म यस प्रकार गर्नेछु' यस्तो गर्वबाट मुक्त भएर र फलको आशा त्यागेर अर्थात् यी कर्महरूबाट मलाई यो फल प्राप्त हुन्छ यस आशालाई छोडेर, केवल भगवान्को आज्ञाको पालन संझेर गर्नु पर्दछ। हे अर्जुन! यही मेरो श्रेष्ठ मत हो ॥६ ॥

–★–★–★–

## नियतस्य तु सन्न्यासः कर्मणो नोपपद्यते।
## मोहात्तस्य परित्यागस्तामसः परिकीर्तितः ॥

**नियत कर्मलाई त्याग गर्नु त उचित होईन। त्यसको मोहपूर्वक त्याग गर्नु तामस भनिएको छ ॥७ ॥**

"त्यागो हि पुरुषव्याघ्र! त्रिविधः सम्प्रकीर्त्तितः" इत्युक्तं त्रैविध्यमेव दर्शयति–नियतस्येति। काम्यस्य कर्मणो बन्धहेतुत्वेन दोषवत्त्वात्त्याग उपपद्यते। नियतस्य तु नित्यकर्त्तव्यतया विहितस्य महायज्ञादेस्तु कर्मणः संन्यासस्त्यागो नोपपद्यते। अन्तःकरणशुद्धिहेतुत्वेन मुमुक्षूपादेयत्वात्। एवं मोहात् कर्त्तव्याकर्त्तव्याविवेकात् तस्य नित्यस्य परित्यागस्तामसः परिकीर्त्तितः। "प्रमादमोहौ तमसो भवतोऽज्ञानमेव चे"ति तमोजन्यमोहहेतुत्वेन तामसत्वमित्यर्थः ॥७ ॥

गुणानुसार त्याग तीन प्रकारका हुन्छन्, यो माथि 'त्यागो..... प्रकीर्त्तितः' द्वारा भनिआउनु भएको छ। अब तीनै प्रकारका त्यागको वर्णन गर्नुहुन्छ। काम्यकर्म बन्धनको कारण हुनाले दोष युक्त छ यसैले तिनीहरूलाई छोड्नु नै उचित हो तर नियत जुन महायज्ञादि कर्म छन्, जसलाई नित्य गर्नु कर्त्तव्य हो, तिनीहरूलाई छोड्नु उचित होईन, किनकी ती मुमुक्षुहरूका अन्तःकरणको शुद्धिको कारण हुनाले उपादेय छन्। मोहले अर्थात् कर्त्तव्य र अकर्त्तव्यको अज्ञानले यी नित्य कर्महरूको त्याग गर्नु तामस त्याग भनिन्छ। 'प्रमादमोहौ........मेव च' (प्रमाद, मोह र अज्ञान तमद्वारा हुन्छन्)। यस प्रकार तमबाट उत्पन्न मोहद्वारा यो त्याग पैदा हुन्छ। यसैले यो तामसी त्याग भनियो ॥७ ॥

–★–★–★–

## दुःखमित्येव यत्कर्म कायक्लेशभयात्त्यजेत्।
## स कृत्वा राजसं त्यागं नैव त्यागफलं लभेत ॥

**जति पनि कर्म छन्, ती दुःखरूप नै छन्– यस्तो संझेर कुनै शारीरिक परिश्रमको भयले त्यसको त्याग गरिदिन्छन् भने त्यो राजस त्याग गरेर पनि त्यागको फललाई पाउँदैन ॥८ ॥**

राजसं त्यागमाह–दुःखमिति। कर्मफले वैराग्याभावात् केवलमनुष्ठाने दुःखमिति मत्वा यत्कर्म कायक्लेशभयात् त्यजेत् स त्यागकर्त्ता एतादृशं राजसं त्यागं कृत्वा नैव त्यागफलं लभेत। यथाऽवस्थितवस्तुज्ञानं शास्त्रीयत्यागफलं न प्राप्नुयादित्यर्थः ॥८ ॥

अब राजस त्याग भन्नुहुन्छ–
कर्मको फलमा वैराग्य नभए पनि कर्मको अनुष्ठानलाई दुःखदायक ज्ञान र शरीरको क्लेशको भयले जुन कर्मको त्याग गरिन्छ त्यो राजस त्याग हो। यस्तो राजस त्याग गर्नेवाला त्याग गरेर पनि त्यसको फल पाउँदैन। भाव यो कि त्यो वस्तुको यथार्थ ज्ञानयुक्त शास्त्रीयत्याग को फललाई पाउँदैन ॥८ ॥

–★–★–★–

**कार्यमित्येव यत्कर्म नियतं क्रियतेऽर्जुन ।**
**सङ्गं त्यक्त्वा फलं चैव स त्यागः सात्त्विको मतः ॥**

**हे अर्जुन! 'केवल कर्तव्यमात्र गर्नु छ' यस्तो संझेर जुन कर्म आसक्ति र फलेच्छाको त्याग गरेर गरिन्छ त्यही सात्त्विक त्याग मानिएको छ ॥ ९ ॥**

सात्त्विकं त्यागमाह–कार्यमिति। कार्यं कर्त्तव्यमेवेति बुद्ध्या नियतमवश्यकर्त्तव्यतया विहितं नित्यनैमित्तकं कर्म सङ्गं स्वकर्तृत्वाभिनिवेशं फलं चैव त्यक्त्वा यत्क्रियते स त्यागः सात्त्विको मतः। भगवदाराधनरूपतया सत्त्वशुद्धिद्वारा ज्ञानोत्पादक इत्यर्थः ॥९ ॥

अब सात्त्विक त्यागलाई भन्नुहुन्छ–
हे अर्जुन! यो अवश्य कर्त्तव्य हो यस्तो जानेर जुन नियत कर्म अर्थात् शास्त्रमा आवश्यक कर्त्तव्यको रूपमा भनिएको नित्य र नैमित्तिक कर्म, संग अर्थात् कर्त्तापनको अभिनिवेश वा आसक्ति र फलको इच्छा छोड़ेर गरिन्छ त्यही त्याग सात्त्विक त्याग भनिन्छ। भाव यो कि यस्तो कर्म भगवदाराधनरूप हुलाले अन्तःकरणको शुद्धिद्वारा ज्ञानलाई उत्पन्न गराउँदछ ॥ ९ ॥

–★–★–★–

**न द्वेष्ट्यकुशलं कर्म कुशले नानुषज्जते।**
**त्यागी सत्त्वसमाविष्टो मेधावी छिन्नसंशयः ॥**

**जो अकुशल कर्मसँग द्वेष गर्दैन र कुशल कर्ममा आसक्त हुँदैन, त्यही त्यागि, बुद्धिमान्, सन्देहरहित र आफ्नो स्वरूपमा स्थित छ ॥ १० ॥**

तदेवं द्वेष्टीति। सत्त्वसमाविष्टो यदा सत्त्वेनात्मानात्मविवेक–ज्ञान हेतुना समाविष्टो व्याप्त अत एव मेधावी मेधा तत्त्वाव–धारणलक्षणा बुद्धिस्तद्वान् तत एव छिन्नसंशयः, देहात्म–याथात्म्यनिश्चयेन छिन्नसन्देहः। एवम्भूतो यः सात्त्विक त्यागी न अकुशलं शरीरदुःखावहं शिशिरे प्रातः स्नानमेका–दश्युपवासजागरणादिकं कर्म न द्वेष्टि प्रतिकूलबुद्ध्या न त्यजति।कुशले सर्वजनसामान्यप्रियत्वेनाभिमते ग्रीष्मेऽस–कृत्स्नानजलक्रीडादिवास्वापारामाटनादौ नानुषज्जते, प्रीत्यतिशयं न करोति। परिणामे सुखापादकं महदपि दुःखं सहते। संसारफलकं महदपि सुखं नेच्छतीत्यर्थः ॥१० ॥

सात्त्विक त्यागले उत्पन्न ज्ञानवाला मुमुक्षुहरूका व्यवहारविधि भन्नुहुन्छ– सत्त्वद्वारा अर्थात् आत्म र अनात्मको ज्ञान द्वारा शुद्ध चित्तवृत्तिले आविष्ट, र यसैले मेधावी अर्थात् तत्त्वावधारण लक्षणवाला बुद्धिले युक्त र यसैले देहात्मको यथार्थज्ञानबाट टाढिएका छन् सन्देह जसको, यस्ता सात्त्विक त्यागी अकुशल कार्यसँग जस्तो– शरीरलाई दुःख हुने जाडोमा नुहाउने, एकादशीको उपवास, रात्रिजागरण आदिसँग द्वेष गर्दैन। भाव यो कि ती कार्यहरूलाई दुःखजनक संझेर प्रतिकूल बुद्धिले छोड्दैन। र कुशल कर्ममा अर्थात् सबैलाई सुख दिनेवाला अतएव प्रिय कामहरूमा जस्तो– गर्मीमा बारम्बार नुहाउनु, जलक्रीड़ा, दिनमा सुत्नु, बगैंचा घुम्नु आदिमा अति प्रीति गर्दैन। भाव यो कि परिणाममा सुख दिनेवाला ठूला दुःखलाई पनि उ सहन सक्दछ र संसार दिनेवाला ठूला सुखको पनि त्यो इच्छा गर्दैन ॥ १० ॥

–★–★–★–

**न हि देहभृता शक्यं त्यक्तुं कर्माण्यशेषतः।**
**यस्तु कर्मफलत्यागी स त्यागीत्यभिधीयते ॥**

**कारण कि देहधारी मनुष्यको द्वारा सम्पूर्ण कर्महरूको त्याग गर्नु सम्भव छैन। यसैले जो कर्मफलको त्यागी छ, त्यही त्यागी हो– यस्तो भनिन्छ ॥ ११ ॥**



ननु सत्त्वसमाविष्टः कुशलाकुशलयोः कर्मणोर्यदि प्रीतिद्वेषौ न करोति, तर्हि किमर्थं तदनुष्ठानं फलाभावात्। फलाभि–

यहाँ शंका हुन्छ कि यदि शुद्ध अन्तःकरणले युक्त मनुष्यलाई कुशल र अकुशल कर्ममा प्रीति र द्वेष हुँदैन भने त्यो कर्म

सन्धिनाऽनुष्ठितस्य च बन्धकत्वमसकृदुक्तमेव। तस्मान्मुमुक्षुणा सर्वमेव कर्म त्याज्यमित्याशङ्क्याह–न हीति। देहं विभर्त्ती देहभृत् तेन देहभृता उत्पन्नज्ञानेनानुत्पन्नज्ञानेन वा कर्माण्यशेषतस्त्यक्तुं नैव शक्यानि। देहनिर्वाहहेतूनां भोजनाच्छादनाद्यर्थकर्मणामवर्जनीयत्वात्। तस्माद्यस्तु कर्मफलानपेक्षी स त्यागीत्यभिधीयते निरूप्यते ॥११॥

कसको लागि गर्दछ, किनकी उसलाई फलको कामना त छैन नै? र यदि फलको लागि ती कर्म गरिन्छ भने ती संसारमा बाँध नेवाला हुन्छन्, यो कुरा बारम्बार हजुरले नै भन्नुभएको छ। यसैले मुमुक्षुहरूले कुनै कर्म गर्नुहुँदैन। कर्मरूप विक्षेपको अभावमा ज्ञाननिष्ठा धेरै सुखले बन्दछ। यस शंकाको उत्तर यहाँ दिनुहुन्छ। देहधारी मनुष्य ज्ञानले वा अज्ञानले, अर्थात् चाहे त्यो ज्ञानी होस वा अज्ञानी, सबै कर्महरूलाई छोड्न सक्दैन किनकी देह निर्वाहका लागि भोजन, कपडा चाहिन्छ नै र त्यसको लागि कर्म अनिवार्य छ। यसैले जो कर्मफललाई छोड्दछ अर्थात् त्यसको इच्छा गर्दैन, त्यही त्यागी हो, यो शास्त्रको मत हो ॥११॥

–★–★–★–

## अनिष्टमिष्टं मिश्रं च त्रिविधं कर्मणः फलम्।
## भवत्यत्यागिनां प्रेत्य न तु सन्न्यासिनां क्वचित् ॥

**कर्मफलको त्याग नगर्ने मनुष्यलाई कर्महरूको इष्ट, अनिष्ट र मिश्रित– यस्ता तीन प्रकारका फल मरेपछि पनि हुन्छ; तर कर्मफलको त्याग गर्नेवालालाई कतैपनि हुँदैन ॥१२॥**

ननु यथा देहपुष्ट्युद्देश्याभावेनापि कृतस्य दधिदुग्धमिष्टान्नादिभोजनस्य पुष्टिफलत्वदर्शनात् तथा विधिनाऽनुष्ठितकर्मणामिह फलोद्देश्याभावेऽपि प्रेत्येष्टानिष्टं फलं स्यादेवातो मोक्षविरोधित्वान्मुमुक्षुणा हेयमेय सर्वं कर्मेति चेत् तत्राह–अनिष्टमिति। अनिष्टं नरकतिर्यगादिप्राप्तिफलमिष्टं दिव्यभोगप्राप्तिलक्षणं मिश्रमिष्टानिष्टं मनुष्यसम्बन्धिपुत्रपश्वन्नादीति त्रिविधं कर्मणः शुभाशुभस्य फलत्यागरहितानामेव प्रेत्य देहत्यागादूर्द्ध्वं देहान्तरे भवति। न तु संन्यासिनां सम्यकत्यक्तफलानां क्वचिदपि मोक्षविरोधिफलं भवति। एवं च सात्त्विकानां पापाचारासम्भवान्नानिष्टोत्पत्तिः। सुकृतानां तु भगवत्यर्पितत्वान्न तद्भोगोत्पत्तिरत एव मिश्रमपि न भवति। तस्मान्नोक्तशङ्काऽवकाशः ॥१२॥

फेरि शंका हुन सक्दछ कि जस्तो देहको पुष्टिको उद्देश्य नभए पनि दूध मिष्टान्न आदिको भोजन गर्ने फल शरीरमा पुष्टिको रूपमा देखिने गर्दछ, त्यस प्रकार विधिले अनुष्ठित कर्महरूलाई फलको उद्देश्य को बिना पनि यहाँ गरे परलोकमा त्यसाको फल इष्ट वा अनिष्ट हुन्छ नै। यसैले कर्ममात्र नै, मोक्षको विरोधी हुनाले, मोक्षार्थिहरूले त्यसलाई छोडिदिनु पर्दछ। यस शंकाको उत्तर यहाँ दिनुहुन्छ–
अनिष्ट फल जस्तो नरक, नीच योनिको प्राप्ति आदि, इष्ट फल जस्तो स्वर्गप्राप्ति, दिव्य भोगादि र मिश्रित फल जस्तो मनुष्य सम्बन्धी पुत्र, पशु अन्न आदि हुनु। शुभाशुभ कर्मका यी तिनै इष्ट, अनिष्ट र मिश्रित फल त्याग नगर्नेवाला लाई नै, वर्त्तमान पछि, देहान्तर मा मिल्दछ। संन्यासिहरूलाई अर्थात् जसले पूर्णरूपले फल त्यागेर कर्म गरेका छन् उनीहरूलाई यी मोक्षको विरोधी फल मिल्दैन किनकी  जो सात्त्विक छन् ती नराम्रो कर्म गर्दै गर्दैनन् र यसैले उनीहरूका अनिष्टफलको उत्पत्ति हुँदैन र आफ्नो राम्रो कार्यलाई तिनीहरू भगवानमा अर्पण गरिदिन्छन् यसैले सुकर्मको फलरूप इष्ट भोग पनि उनीहरूलाई हुँदैन, र जब इष्ट र अनिष्ट नै रहेनन् भने तिनीहरूका मिश्रित फल पनि रहेन। यसैले माथिको शंका गर्ने ठाउँ नै रहेन ॥१२॥

–★–★–★–

## पञ्चैतानि महाबाहो कारणानि निबोध मे।
## साङ्ख्ये कृतान्ते प्रोक्ता सिद्धये सर्वकर्मणाम् ॥

**हे महाबाहो! कर्महरू अन्त गर्नेवाला सांख्यसिद्धान्तमा सम्पूर्ण कर्महरूका सिद्धका लागि यी पाँच कारण भनिएको छ यिनीहरूलाई तिमी मबाट संझ ॥१३॥**

त्रिविधं कर्मफलं सकामानामेव भवति नतु त्यागिनामित्युक्तम्। तत्र विवेकाविवेकप्रयुक्तयोः कर्मण्यहङ्कारानहङ्कारयोरेव हेतुत्वप्रदर्शनाय कर्मसामान्यम्प्रति कारणपञ्चकं प्रतिजानाति– पञ्चेतानीति। हे महाबाहो! एतानि वक्ष्यमाणानि पञ्च कारणानि कर्मनिवर्त्तकानि मे मत्तो निबोध जानीहि। कर्मण्यहङ्कारनिवृत्तये विवेकार्थं मुमुक्षुणाऽवश्यं ज्ञातव्या–नीति प्रशंसति। साङ्ख्ये सम्यक् ख्यायन्ते निरूप्यन्ते विविच्यन्ते तत्त्वान्यस्मिन्निति साङ्ख्यं तस्मिन्। कथम्भूते कृतान्ते बन्धमोक्षहेतुतया हेयोपादेयविभागेन कृतोऽन्तः कर्माकर्म–निर्णयो यस्मिन् तत्कृतान्तं साङ्ख्यशास्त्रं तस्मिन्। यद्वा सम्यक् ख्यायन्ते निरूप्यन्ते ज्ञातव्या जीवेश्वरमायादिप–दार्था यस्मिन् तत्साङ्ख्यं, कृतोऽन्तो बन्धमोक्षसाधनादि–निर्णयो यस्मिन् तत्कृतान्तं तस्मिन् सांख्ये कृतान्ते वेदान्त–शास्त्रे सर्वकर्मणां सिद्धये बन्धकत्वाभावेन यथावत्तत्त्वज्ञा–नानोत्पत्तये प्रोक्तानि प्रकर्षेण संशयाभावेनोक्तानि ॥१३॥

**तीन प्रकारका कर्मफल कामनायुक्तहरू लाई नै हुन्छ त्यागिहरूलाई होईन, यो माथि भनियो। अब अविवेक र विवेकले उत्पन्न कर्ममा अहङ्कार र अहङ्कार शून्यताको हेतू देखाउनको लागि कर्म मात्रका पाँच कारणहरूलाई भन्ने प्रतिज्ञा गर्नुहुन्छ। हे महाबाहो! (अर्जुन) कर्मका निवर्त्तक अर्थात् सिद्ध गर्नेवाला पाँच कारणहरूलाई, जुन म भन्दैछु, तिमी मबाट जान। कर्ममा अहङ्कारलाई हटाउनका लागि र विवेक पैदा गर्नका लागि सबै मोक्षार्थिहरूले यसलाई जान्नुपर्दछ। यस्तो भनेर भगवान् यस कारण पंचक को ज्ञानको प्रशंसा गर्नुहुन्छ। सांख्यमा अर्थात् त्यस शास्त्रमा जसमा तत्त्वहरूको विवेचना राम्रो सँग गरिएको छ र बन्धमोक्षको कारण हुनाले छोड्न र संग्रह गर्न योग्य कर्म र अकर्महरूको विभाग गरेर निर्णय गरिएको छ वा जसमा जान्नयोग्य जीव, ईश्वर, मायादि पदार्थहरूका निरूपण गरिएको छ र बन्ध तथा मोक्ष र भगवत्प्राप्तिको साधनहरूलाई बताईएको छ त्यस वेदान्त शास्त्रमा सबै कर्महरूका सिद्धिका लागि अर्थात् बन्धकत्व को अभाव द्वारा ठीक तत्त्व ज्ञानको उत्पत्तिको लागि कारण पंचक संशय रहित वर्णन गरिएको छ॥१३॥**

–★–★–★–

## अधिष्ठानं तथा कर्ता करणं च पृथग्विधम्।
## विविधाश्च पृथक्चेष्टा दैवं चैवात्र पञ्चमम्॥

**यसमा कर्महरूको सिद्धिमा अधिष्ठान तथा कर्ता र अनेक प्रकारका करण एवम् विविध प्रकारका बेग्ला–बेग्लै चेष्टाहरू र त्यस्तै नै पाँचौ कारण दैव (संस्कार) हो॥१४॥**

तान्येवाह–अधिष्ठानमित्यादिचतुर्भिः। अधिष्ठानमधिष्ठीयते भोक्तृतया पुरुषेणास्मिन्नित्यधिष्ठानं पञ्चमहाभूतसङ्घातरूपं शरीरं, तथा कर्त्ता जीवपुरुषक्षेत्रज्ञादिशब्दाभिधेय आत्मा, तस्य कर्तृत्वं भोक्तृत्वं ज्ञातृत्वं च शास्त्रसिद्धं "मन उत्क्रा–मन्मीलित इवाश्नन्पिवन्नास्ते" इतिश्रुतौ मनस उत्क्रान्त्य–नन्तरमपि कर्त्तृत्वाभिधानात् "कर्त्ता शास्त्रार्थवत्त्वादि"ति सूत्राच्च। तथा "मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति" इत्यत्रापि। तथा भोक्तृत्वमपि "तयोरन्यः पिप्पलं स्वाद्वत्ति उत्क्रामन्तं स्थितं वाऽपि भुञ्जानं वा गुणान्वितमि"त्यादि

**चार श्लोकहरूद्वारा कारण पंचकलाई भन्नुहुन्छ–**
**भोक्तारूपले पुरुष जसमा अधिष्ठान गर्दछ वा रहन्छ, त्यो पंच महाभूतहरूका संघातरूप शरीर अधिष्ठान हो। यो अधिष्ठान वा शरीर कारणपंचक मा पहिले भयो। दोस्रो हो कर्त्ता अर्थात् पुरुष, जीव क्षेत्रज्ञ आदि नामहरूले जानिने आत्मा। आत्मा कर्त्ता, भोक्ता र ज्ञाता हुनु शास्त्रबाटै सिद्ध छ। श्रुतिमा भनेको छ 'मन.....नास्ते' अर्थात् मन बिग्रिए पनि आत्मा मिलेको जस्तो खाने पिउने गरिरहन्छ। यस श्रुतिमा मन निस्किए पछि पनि आत्मा कर्त्ता भएको कुरा भनिएको छ। वेदान्तसूत्र मा पनि 'कर्त्ता शास्त्रार्थवत्त्वात्' (जीव कर्त्ता हो, किनकी त्यतिखेर मात्र विधि सार्थक हुन सक्दछ अन्यथ सक्दैन।) द्वारा आत्मा कर्त्ता भएको सिद्ध छ। –'मनः.....कर्षति' (मन छैटौं इन्द्रिय हो। श्रेत्रादि पाँच र छैटौ मन। जीव अनादि कर्मवशले वासनामा बाँधिएको प्रकृतिको कार्य अहंकारमा लीनरूपले स्थित र फेरि ती ती कर्महरूका अनुरूप प्रकट हुने ती मन सहित छः इन्द्रियहरूलाई आफ्ना भोग साधनका लागि ग्रहण गर्दछ।) यहाँ पनि आत्मा कर्त्ता भएको**

शास्त्रसिद्धम्। अत्र केचित्कर्त्ता चिज्जडग्रन्थिरहङ्कार इति वदन्ति, तदुदाहृतशास्त्रविराधादुपेक्षणीयम्। पृथग्विधमनेकप्रकारं करणं वाक्पाण्यादिपञ्चेन्द्रियं, विविधाश्च पृथक् चेष्टा: प्राणापानादयो वायुव्यापरा:, दैवं चैवात्र पञ्चममत्र कारणसमुदाये पञ्चमं दैवं देवानामप्यन्तर्यामी परमात्मा कर्मनिष्पत्तौ प्रधानहेतुरित्यर्थ:। "सर्वस्य चाहं हृदि संनिविष्ट:, ईश्वर: सर्वभूतानां हृद्देशेऽर्जुन ! तिष्ठती"त्युक्तवक्ष्यमाणत्वात्। "परात्तुतच्छ्रुतेरिति सूत्रकारनिर्णयाच्च ॥१४॥

कुरा भनिएको छ। फेरि आत्मा भोक्ता हुनु शास्त्रसिद्ध छ, यथा- 'तयोरन्य: पिप्पलं स्वाद्वत्ति' (परमात्मा र जीव मध्ये जीव पीपलको स्वादु फललाई खान्छ), 'उत्क्रामन्तं.....गुणान्वितम्' (अर्थ पछाडि लेखिएको छ)। कुनै चित्त र जड़को गाँठो जो अहंकार छ त्यसलाई कर्त्ता भन्दछन्, तर यो मत माथि उद्धरित शास्त्र वचनको विरोधी हो यसैले उपेक्षा गर्न लायक छ। अनेक प्रकारका कारण अर्थात् वाक्, हात, गोडा आदि पाँच इन्द्रियहरू कारण पंचकमा तेस्रा हुन्। र विविध प्रकारका प्राण, अपान आदि वायुहरूका व्यापार चौथा हुन्। पाँचौ हो दैव, अर्थात् देवहरूका पनि अन्तर्यामी परमात्मा। कर्मको सिद्धिमा यही प्रधानकारण हो, किनकी भगवान् स्वयं पछि गएर भन्नुहुनेछ-'सर्वस्य.....संनिविष्ट:।' म सबै भूतहरूका हृदयमा बस्तछु, हे अर्जुन! सूत्रकारको पनि यही निर्णय हो, यथा -'परात्तुच्छ्रुते:' अर्थात् कर्महरूका फल दिनेवाला परमात्मा हो किनकी श्रुतिमा पनि यस्तै भनेको छ॥१४॥

-★-★-★-

**शरीरवाङ्मनोभिर्यत्कर्म प्रारभते नर:।**
**न्याय्यं वा विपरीतं वा पञ्चैते तस्य हेतव:॥**

**मनुष्य शरीर, वाणी र मनका द्वारा शास्त्रविहित अथवा शास्त्रविरुद्ध जति पनि कर्म आरम्भ गर्दछ, त्यसको यी पूर्वोक्त पाँचै हेतु हुन्छन्॥१५॥**

इमान्येव सर्वकर्महेतव इत्याह-शरीरेति। शरीरवाङ्मनोभिस्त्रिभिरेतैर्यत्कार्य नर: प्रारभते निर्वर्त्तयति न्याय्यं शास्त्रविहितं धर्म्यं विपरीतं वा शास्त्रनिषिद्धं वा न्याय्यविपरीतयोर्मध्ये प्राणापानाद्यन्यत्सर्वमन्तर्भवति। तस्य सर्वविधस्य कर्मण: पञ्चैते यथोक्ता हेतव: कारणानि भवन्ति॥१५॥

पूर्वोक्त यी नै पाँच कारण सबै कर्महरूका हेतु हुन्। यसैलाई भन्नुहुन्छ-

मनुष्य शरीर, वचन र मनले जति कर्म गर्दछ, चाहे ती शास्त्रसम्मत धर्मयुक्त कार्य होस, अथवा शास्त्र निषिद्ध ती सबै प्रकारका कर्महरूका यीनै पाँच कारण हुन्॥१५॥

-★-★-★-

**तत्रैवं सति कर्तारमात्मानं केवलं तु य:।**
**पश्यत्यकृतबुद्धित्वान्न स पश्यति दुर्मति:॥**

**परन्तु यस्ता पाँच हेतुहरू भएपनि जो त्यस कर्महरूका विषयमा केवल शुद्ध आत्मालाई कर्ता देख्दछ, त्यो दुष्ट बुद्धिवाला सही देख्दैन; किनकी त्यसको बुद्धि शुद्ध छैन अर्थात् त्यसले विवेकलाई महत्त्व दिएको छैन॥१६॥**

इदानीमधिष्ठानादिहेतुपञ्चकनिरूपणस्य प्रयोजनमाह-तत्रेति। तत्र एवं यथोक्ते न्याय्ये विपरीते वा कर्मणि अधिष्ठानादिहेतुके निश्चिते सति कस्मिंश्चिदपि कर्मणि कर्त्तारमात्मानं केवलमहमेव कर्त्तेति य: पश्यति जानाति, स अकृतबुद्धित्वात् अकृता शास्त्राचार्योपदेशसंस्काररहिता बुद्धिर्यस्य स तथाभूतत्वान्न पश्यति। यथाऽवस्थितातमन: कर्तृत्वं परमेश्वरनियम्यशरीरेन्द्रियाधीनमिति न पश्यति, अतो दुर्मति:।

यहाँ शरीर आदि हेतु पंचकनिरूपणको प्रयोजनले भन्नुहुन्छ- यहाँ यस प्रकार शास्त्र विहित अथवा शास्त्र निषिद्ध कर्ममा शरीर आदि पूर्वोक्त पाँच कारणहरू निश्चित भएपछि कुनै काममा केवल आफुलाई जो कर्त्ता मान्दछ, त्यो शास्त्र र आचार्यको उपदेशको संस्कारले रहित बुद्धि भएको कारण, यथार्थ कुरालाई देख्दैन। त्यो यो संझिंदैन कि आत्माको कर्त्तापन ईश्वरबाट नियम्य, शरीर र इन्द्रियको अधीन छ। यसैले त्यो दुर्मति हो, अर्थात् त्यसको बुद्धि यथार्थ कुरालाई ग्रहण गर्दैन यसैले त्यो उल्टो ज्ञानको कारण

दुष्टाप्यथार्थग्राहिणी मतिर्यस्य स विपर्ययज्ञानात्संसारे बन्धं प्राप्नोतीत्यर्थः ॥१६ ॥

संसारमा बन्ध प्राप्त गर्दछ अर्थात् त्यो संसार चक्रमा घूमिरहन्छ ॥१६ ॥

-★-★-★-

## यस्य नाहङ्कृतो भावो बुद्धिर्यस्य न लिप्यते।
## हत्वापि स इमाँल्लोकान्न हन्ति न निबध्यते ॥

**जसको अहंकृतभाव('म कर्ता हुं'- यस्तो भाव) छैन र जसको बुद्धि लिप्त हुँदैन, त्यो युद्धमा यी सम्पूर्ण प्राणिहरूलाई मारेर पनि न मार्दछ र न बाँधिन्छ नै ॥१७॥**

एवमविवेकिन आत्मनः स्वतन्त्रकर्तृत्वज्ञातुरज्ञत्वं दुर्मतित्वं च निरूप्य निरहङ्कारस्य सुबुद्धित्वेन कर्मलेपाभावं निरूपयति यस्येति। यस्य शास्त्राचार्योपदेशसंस्कृतान्तःकरणस्य पुरुषस्य अहङ्कृतो भावोऽहङ्कर्त्तेत्येवंरूपो भावोऽभिप्रायो न भवति। परमेश्वराधीनदेहेन्द्रियनिमित्तकर्तृत्वनिश्चयात्। अत एव बुद्धिर्यस्य न लिप्यते, ममेदं कर्म मदीयमिष्टं साधये-दितीष्टसाधनत्वेन तत्राभिनिवेशं न करोति। स एवम्भूतो विविक्तात्मस्वरूप इमाँल्लोकान् प्राणिनो हत्वाऽपि न हन्ति, हननक्रियाऽऽश्रयो न भवति। यद्यप्येवम्भूतस्य र हिंसादि-कर्म सम्भवति। तथाऽपि कथं चित्स्यात्तर्हि अहं कर्त्तेति न मन्यते इत्यर्थः। तत एव न निबध्यते तत्कर्मफलानुभवाय तत्र तत्र न जायते इत्यर्थः ॥१७ ॥

यस प्रकार यो निरूपण गरि सक्नुभयो कि अविवेकीहरू जो आत्मालाई स्वतन्त्र कर्त्ता मान्दछन् ती अज्ञ र दुर्मति हुन्। अब यहाँ यो देखाउनुहुन्छ कि अहंकार रहित मनुष्य आफ्नो बुद्धिको द्वारा कर्ममा लिप्त हुँदैन। अर्थात् कर्म त्यसलाई बाँध्न सक्दैनन्। शास्त्र र आचार्यहरूका उपदेशले जुन शुद्ध अन्तःकरणवाला पुरुषलाई अहंकारको भाव, अर्थात् म कर्त्ता हुँ यस्तो भाव हुँदैन किनकी त्यो संझिन्छ कि देह, इन्द्रियको बिना कर्म हुन सक्दैन र यो सबै परमात्मा परमेश्वरको अधीन छ, र यसैले जसको बुद्धि कर्ममा लिप्त हुँदैन अर्थात् मेरो यो कर्म हो यसले मेरो यो इष्ट सधिन्छ, यस प्रकारका कर्ममा इष्ट साधनरूपले आसक्ति हुँदैन, त्यो देहबाट अलग आत्मालाई जान्ने पुरुष यी मनुष्यहरू (युद्धभूमिमा आएका मनुष्यहरू) लाई मारेर पनि उनीहरूलाई मार्दैन, अर्थात् मार्ने क्रियाको आश्रय बन्दैन। यस प्रकारका मनुष्यहरूबाट हिंसा कर्म त बन्दैन नै र कदाचित् केहि हिंसा भयो भने पनि त्यो आफुलाई त्यस हिंसा कर्मको कर्त्ता मान्दैन। यस कारण यस्तो मनुष्य कर्मफलहरूले बाँधिदैनन् अर्थात् कर्मफलहरूका अनुभवको लागि जहाँ तहाँ जन्मिँदैनन्। भाव यो हो कि कर्मभोगका लागि नाना योनिहरूमा जन्म ग्रहण गर्दैनन् ॥१७॥

-★-★-★-

## ज्ञानं ज्ञेयं परिज्ञाता त्रिविधा कर्मचोदना।
## करणं कर्म कर्तेति त्रिविधः कर्मसङ्ग्रहः ॥

**ज्ञान, ज्ञेय र परिज्ञाता यी तीनैबाट कर्मप्रेरणा हुन्छ तथा करण, कर्म र कर्ता- यी तीनै बाट कर्मसंग्रह हुन्छ ॥१८ ॥**

कर्मण्यभिमानरहितः कर्मभिस्तत्फलैश्च न लिप्यते इत्युक्तं, सा निरभिमानता सत्त्वगुणवृद्ध्या भवत्यतः सत्त्वस्यो-पादानाय सत्त्वादिगुणकृतं ज्ञानादिभेदं वक्तुं तावत् कर्मविधेः कर्मणश्च त्रैविध्यमाह-ज्ञानमिति। तत्र ज्ञानं कर्मकर्त्तृवि-धिदेवताविषयं, ज्ञेयं ज्ञातव्यं साङ्गं कर्म,परिज्ञाता तस्य कर्मणो वोद्धा, एवं त्रिविधा कर्मचोदना प्रवर्त्तनोपदेशादिशब्दाभि-धेयः कर्मविधिरत्यर्थः। "चोदना चोपदेशश्च विधिश्चै-कार्थवाचिन" इतिभट्टैरुक्तत्वात्। तत्र ज्ञेयं कर्म त्रिविधं-

कर्ममा अभिमान रहित पुरुष कर्महरूले र त्यसका फलहरूले लिप्त हुँदैन, यो भन्नुभयो। यस प्रकार को निरभिमानता सतोगुणको वृद्धिले हुन्छ। यसैले सतो गुणको उपादानको लागि सत्त्वादि गुणहरूका भेदले गरिएका ज्ञानादि भेदहरूलाई भन्नुहुनेछ। यहाँ कर्मविधि र कर्मका तीन प्रकारहरूलाई भन्नुहुन्छ। ज्ञान अर्थात् कम, कर्त्ता, विधि र देवता विषयक ज्ञान, ज्ञेय अर्थात् जान्नयोग्य अंग सहित कर्म र परिज्ञाता अर्थात् त्यस कर्मलाई जान्नेवाला, यो तीन प्रकारका कर्म चोदना वा कर्मको विधि हो। चोदनाको अर्थ हो उपदेश, प्रवृत्ति, विधि आदि जस्तो भट्टहरूले भनेका छन्-'चोदना, उपदेश, विधि यी एक अर्थका वाचक

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

करणं कर्म कर्त्तेति। साधकतमं करणं वाक्पाण्यादीन्द्रियं स्रुगादि च, कर्म कर्त्तुरीप्सिततमं कर्त्तुः क्रियया प्राप्यमाणं ज्योतिष्टोमादिकं, कर्त्ता क्रियानिवर्त्तकः स्वतन्त्रः,त्रिविधः कर्मसंग्रहः, कर्म सङ्गृह्यतेऽस्मिन्निति कर्मसंग्रहः करण-कर्मकर्त्तेति त्रिविधो ज्ञेय इत्यर्थः॥१८॥

हुन्'। जसमा ज्ञेय कर्म तीन प्रकारका हुन्छन्, करण, कर्म र कर्त्ता। वाक्, हात, गोडा, स्रुवा आदि जो कर्मका साधन हुन्छन् ती करण भनिन्छन्। कर्त्तालाई अत्यन्त इच्छित र क्रिया द्वारा कर्त्तालाई प्राप्यमाण जस्तो ज्योतिष्टोम आदि कर्म भनिन्छ। र क्रियालाई पूर्ण गर्नेवाला स्वतन्त्र कर्त्ता। अर्थात् करण, कर्म र कर्त्ता यी नै तीन प्रकारका कर्म संग्रह हुन्॥१८॥

-★-★-★-

**ज्ञानं कर्म च कर्ता च त्रिधैव गुणभेदतः।**
**प्रोच्यते गुणसङ्ख्याने यथावच्छृणु तान्यपि॥**

**गुणहरूका विवेचन गर्ने शास्त्रमा गुणहरूका भेदले ज्ञान र कर्म तथा कर्ता तीन-तीन प्रकारले नै भनिन्छन्, उनीहरूलाई पनि तिमी यथार्थरूपले सुन॥१९॥**

अथोपादेयसात्त्विकज्ञानकर्मकर्त्तृस्वरूपज्ञापनाय तेषां सात्त्विकादिभेदं वक्तुं प्रतिजानीते-ज्ञानमिति। ज्ञायतेऽनेनेति ज्ञानं सर्वकर्मविषयं, कर्म कर्त्रानुष्ठेयं, कर्त्ता तस्यानुष्ठाता, करणाद्यन्यत्कारकमत्रैवान्तर्भूतमिति सत्त्वादिगुण (भेद) तस्त्रिधैव प्रोच्यते क्वगुणसङ्ख्याने। गुणाः सत्त्वादयः सम्यक्ख्यायन्ते स्वरूपतः कार्यतश्च यस्मिन्निति गुणसङ्ख्यानं साङ्ख्यशास्त्रं तस्मिन् तान्यपि ज्ञानादीनि वक्ष्यमाणानि यथावच्छृणु अवधारय॥१९॥

अब उपादेय सात्त्विज्ञान, कर्म र कर्त्ताको स्वरूप बताउनका लागि उनीहरूका सात्त्विक आदि भेदहरूको वर्णन गर्नुहुन्छ- ज्ञान अर्थात् जसले कर्म जानियोस त्यो सबै कर्मविषयक ज्ञान। कर्म अर्थात् कर्त्ता जसको अनुष्ठान गरोस। कर्त्ता अर्थात् कर्म गर्नेवाला मनुष्य। करण आदि अन्य कारक यिनीहरूकै अन्तर्गत हुन्। यी सबै सत्त्व आदिगुणहरूका स्वरूप र कार्यको राम्रोसँग वर्णन होस। यी ज्ञानादि को विषयमा पनि म अब भन्दछु। तिमी यथावत् सुन अर्थात् धारण गर॥१९॥

-★-★-★-

**सर्वभूतेषु येनैकं भावमव्ययमीक्षते।**
**अविभक्तं विभक्तेषु तज्ज्ञानं विद्धि सात्त्विकम्॥**

**जुन ज्ञानको द्वारा साधक सम्पूर्ण विभक्त प्राणिहरूमा विभाग रहित एक अविनाशी भाव (सत्ता)लाई देख्दैछ, त्यस ज्ञानलाई तिमी सात्त्विक संझ॥२०॥**

तत्र ज्ञानस्य सत्त्वादिगुणतस्त्रैविध्यमाह-सर्वभूतेष्विति त्रिभिः। सर्वभूतेषु देवमनुष्यपश्वादिषु जातिस्वभावतो विभक्तेषु परस्परं व्यावृत्तेषु एकं ज्ञानैकस्वरूपत्वेन विशेष्यवर्जितं भावमात्मवस्तु अविभक्तं देवमनुष्यादिवर्णाश्रमादिविभागरहितमव्ययं व्ययशीलेषु शरीरेषु व्ययरहितं परिणामशून्यं कूटस्थमित्यर्थः, अन्तर्यामिणं भगवन्तं वा कर्मानुष्ठानवेलायां येन ज्ञानेन पश्यति तज्ज्ञानं सात्त्विकं विद्धि॥२०॥

अब सत्त्वादि गुणहरूका अनुसार ज्ञान तीनप्रकारका हुन्छन्, यो कुराको वर्णन गर्नुहुन्छ- सात्त्विक ज्ञान त्यो हो जसबाट कर्मानुष्ठानको समयमा जाति र स्वभावले एक अर्का सँग पृथक् देव, मनुष्य, पशु आदि सबै भूतहरूमा अविभक्त भाव अर्थात् विभिन्नता भएर पनि ज्ञानस्वरूप हुनाले विशेषता शून्य आत्म-भाव देखियोस। अर्थात् नाश हुने शरीरहरूमा स्थित परिणाम शून्य अविनाशी आत्माको ज्ञान जसको द्वारा हुन्छ त्यसलाई सात्त्विक ज्ञान भन्दछन्। अथवा जुन ज्ञानकोद्वारा अन्तर्यामी भगवान् सम र एकै हुन यस्तो बोध होस, त्यसलाई सात्त्वि ज्ञान भन्दछन्॥२०॥

-★-★-★-

**पृथक्त्वेन तु यज्ज्ञानं नानाभावान्पृथग्विधान्।**
**वेत्ति सर्वेषु भूतेषु तज्ज्ञानं विद्धि राजसम्॥**

**परन्तु जुन ज्ञान अर्थात् जुन ज्ञानको द्वारा मनुष्य सम्पूर्ण प्राणिहरूमा बेग्ला-बेग्लै अनेकभावहरूलाई बेग्ला-बेग्लै रूपले जान्दछ, त्यस ज्ञानलाई तिमी राजस संझ ॥२१॥**

राजसं ज्ञानमाह-पृथक्त्वेनेति। तुशब्दः पूर्वोक्तान्निकृष्टत्व-द्योतनार्थः। पृथक्त्वेन दृश्यमानेषु ब्राह्मणादिषूत्तमाधमतया प्रतीयमानेषु भूतेषु नानाभावाज्जीवात्मनः पृथग्विधान् तत्तद्देहयोगादुत्तमाधमान् सुखिदु:खिनः यज्ज्ञानं वेत्ति येन ज्ञानेन पुरुषो जानाति तज्ज्ञानं राजसं विद्धि॥२१॥

अब राजस ज्ञानलाई भन्नुहुन्छ। 'तु' शब्दको अर्थ यो कि राजस ज्ञान पहिले भनिएको सात्त्विक ज्ञान भन्दा निकृष्ट हो। उच्च नीच, दुःखी सुखी आदि भेदहरू द्वारा पृथक् देखिने ब्राह्मण, क्षत्रिय, पशु, पक्षी आदि भूतहरूमा भिन्न-भिन्न प्रकारका शरीर हुनाले दुःख सुखको भेदले, जीवात्मामा पृथकता जुन ज्ञानको द्वारा मानिन्छ, त्यसलाई राजस ज्ञान भन्दछन्॥२१॥

-★-★-★-

## यत्तु कृत्स्नवदेकस्मिन्कार्ये सक्तमहैतुकम्।
## अतत्त्वार्थवदल्पं च तत्तामसमुदाहृतम्॥

**किन्तु जुन ज्ञान अर्थात् जुन ज्ञानको द्वारा मनुष्य एक कार्यरूप शरीरमा नै सम्पूर्णको जसरी आसक्त रहन्छ तथा जो युक्तिरहित, वास्तविक ज्ञानले रहित र तुच्छ छ, त्यो तामस भनिएको छ॥२२॥**

तामसं ज्ञानमाह-यत्त्विति। तुशब्दस्तस्मादप्यतिनिकृष्टं द्योतयति यज्ज्ञानमेकस्मिन्कार्ये एकस्मिन्नप्यस्मिन् क्षुद्रदेवताप्रेतभूत-गणाद्याराधनरूपे कर्मणि अति तुच्छेऽपि कृत्स्नफल-वत्सक्तमेतदेव मम सर्वाभीष्टप्रदमिति अहैतुकं हेतुरहितं निर्युक्तिकं यतोऽतत्त्वार्थवत् शास्त्रसिद्धतत्त्वार्थशून्यम् अत एवाल्पं च अल्पविषयत्वादल्पफलकं तज्ज्ञानं तामसमुदाहृतम्॥२२॥

अब तामस ज्ञान भन्नुहुन्छ-
'तु' शब्दको तात्पर्य यो हो कि तामस ज्ञान राजस ज्ञान भन्दा पनि अति निकृष्ट हो। जुन ज्ञानको द्वारा एउटै कार्य जस्तो क्षुद्र देवता, प्रेत, भूतादिको पूजा, अति तुच्छ भएपनि सबै वांक्षित फलहरूलाई दिने संझिईन्छ त्यसैलाई तामस ज्ञान भन्दछन्। यो ज्ञान बिना युक्तिको हो किनकी शास्त्रबाट सिद्ध तत्त्वार्थहरूबाट शून्य छ र यसैले अल्प पनि छ अर्थात् अल्प विषयवाला हुनाले यो अल्प फलवाला हो॥२२॥

-★-★-★-

## नियतं सङ्गरहितमरागद्वेषतः कृतम्।
## अफलप्रेप्सुना कर्म यत्तत्सात्त्विकमुच्यते॥

**जुन कर्म शास्त्रविधिले नियत गरिएको छ र कर्तृत्वाभिमानले रहित छ तथा फलेच्छारहित मनुष्यको द्वारा बिना राग-द्वेषकै गरिएको छ त्यो सात्त्विक भनिन्छ॥२३॥**

एवं कर्मानुष्ठातुर्ज्ञानांशेन गुणतस्त्रैविध्यं प्रदर्श्येदानीं कर्मण एव गुणतस्त्रैविध्यमाह-नियतमिति। नियतं नित्यकर्त्तव्यतया विहितं सङ्गरहितम्, सङ्गोऽहमस्य कर्त्ता फलभोक्तेत्यभिनिवे-शस्तद्रहितम् अरागद्वेषतः कृतं रागोऽनेन लोकपूजास्तुत्यादि प्राप्स्यामीति प्रीतिविशेषः, द्वेषः शत्रुमरणाद्यनिष्टचिन्तनं, ताभ्यां न कृतमिति। अफलप्रेप्सुना स्त्रीपुत्रधनादिफला-भिलाषरहितेन कर्त्रा यत्कृतं कर्म तत्सात्त्विकमुच्यते॥२३॥

कर्म गर्नेवालाहरू का ज्ञानलाई गुणहरूका भेदले तीन प्रकारका भन्नुभयो। नित्य गर्ने जुन कर्महरूलाई वेदले विधान गरेको छ ती कर्महरूका पनि गुणानुसार तीन भेद हुन्छन् ती तीनै भेदहरूलाई अब भन्नुहुन्छ- म यस कर्मको कर्त्ता हुँ, भोक्ता हुँ, यस्तो अभिनिवेश नहोस, रागद्वारा अर्थात् लोक पूजा, स्तुति आदि पाउनका लागि प्रीतिले, वा शत्रुमरण आदि अनिष्ट चिंतनले जो न गरियोस र स्त्री, पुत्र, धन आदिको प्राप्तिरूप फल संकल्पले जो रहित होस, यस प्रकार कर्त्ताको द्वारा गरिएको कर्मलाई सात्त्विक कर्म भन्दछन्॥२३॥

-★-★-★-

## यत्तु कामेप्सुना कर्म साहङ्कारेण वा पुनः।
## क्रियते बहुलायासं तद्राजसमुदाहृतम्॥

**परन्तु जुन कर्म भोगको इच्छाले अथवा अहंकारले र परिश्रमपूर्वक गरिन्छ, त्यसलाई राजस भनिएको छ॥२४॥**

राजसं कार्माह–यत्त्विति। यत्तु कामेप्सुना फलकामनायुक्तेन साहङ्कारेण च। वेति चार्थे। मत्समो याज्ञिकः ज्ञाता वा कोऽन्य इति गर्वयुक्तेन कर्त्रा यत्कर्म क्रियते पुनर्बहुलायासम् उपक्रमात्समाप्तिपर्यन्तमत्यायासावहं तद्राजसमुदाहृतं विवेचकैः॥२४॥

**अब राजस कर्म भन्नुहुन्छ–**

**जो कर्मफलको कामना सहित, र अहंकारले युक्त, जस्तो मेरो समान याज्ञिक वा कर्मको ज्ञाता अर्को को छ इत्यादि घमण्डले युक्त भएर गरिन्छ र फेरि जसमा आरम्भ देखि समाप्ति पर्यन्त धेरै क्लेश हुन्छन् ती कर्मलाई विवेकीहरू राजस कर्म भन्दछन्॥२४॥**

–★–★–★–

## अनुबन्धं क्षयं हिंसामनवेक्ष्य च पौरुषम्।
## मोहादारभ्यते कर्म यत्तत्तामसमुच्यते॥

**जुन कर्म परिणाम, हानि, हिंसा र सामर्थ्यलाई नहेरीकन मोहपूर्वक आरम्भ गरिन्छ त्यो तामस भनिन्छ॥२५॥**

तामसकर्माह–अनुबन्धमिति। कृते कर्मण्यनुपश्चाद् बध्यतेऽनिच्छयाऽपि कर्मफलभोगायापद्यते इत्यनुबन्धः दुःखविषादादिस्तं, क्षयं द्रव्यबलादिनाशः, हिंसा प्राणि–पीडां, पौरुषं स्वस्य कर्मनिवर्त्तनसामर्थ्यं च अनवेक्ष्य अपर्यालोच्य मोहात्सर्वकर्मसिद्धिहेतुपरमेश्वरायत्तत्वज्ञाना–भावात् यत्कर्म आरभते तत्तामसमुदाहृतम्॥२५॥

**अब तामस कर्म भन्नुहुन्छ–**

**जुन कर्म गर्दाखेरि दुःख, विषाद आदि फल नबोलाईकन नै आउँछन्, जसमा द्रव्य, बल आदिको नाश हुन्छ, प्राणिहरूलाई पीड़ा हुन्छ र कर्म गर्ने आफ्नो सामर्थ्यलाई नबुझिकनै र मोहले अर्थात् सबै कार्यहरूका सिद्धि भगवान्को अधीन छन् यस तत्त्वज्ञानले शून्य भई जुन कर्म गरिन्छ त्यो कर्म तामस भनिन्छ॥२५॥**

–★–★–★–

## मुक्तसङ्गोऽनहंवादी धृत्युत्साहसमन्वितः।
## सिद्ध्यसिद्ध्योर्निर्विकारः कर्ता सात्त्विक उच्यते॥

**जुन कर्ता रागरहित, कर्तृत्वाभिमानले रहित, धैर्य र उत्साहयुक्त तथा सिद्धि र असिद्धिमा निर्विकार छ, त्यो सात्त्विक (कर्ता) भनिन्छ॥२६॥**

ज्ञेयेषु त्रिष्ववशिष्टं कर्मकर्तुस्त्रैविध्यमाह–मुक्तसङ्ग इति त्रिभिः। मुक्तसङ्गः फलाभिलाषरहितः, अनहंवादी कर्तृत्वा–भिमानरहितः, धृत्युत्साहसमन्वितः, धृतिः कर्मारभ्य यावत्समाप्तिदुःखादि प्राप्तावनुद्वेगः, उत्साह उद्युक्तचित्तत्वं ताभ्यां समन्वितः आरब्धस्य कर्मणः सिद्ध्यसिद्ध्योर्निर्वि–कारोऽविकृतचित्तः। एवम्भूतः कर्त्ता सात्त्विक उच्यते॥२६॥

**ज्ञेय विषयहरूमा ज्ञान र कर्मका गुणहहरूका भेद तीन प्रकारका भएको कुरा माथि भनि सक्नुभयो। अब कर्त्तालाई पनि गुणहरूका भेदले तीन प्रकारका भएको कुरा अब भन्नुहुन्छ।**

**फलको इच्छाले रहित, कर्त्तापनको अभिमानले शून्य, धृति अर्थात् कर्महरूलाई आरम्भ गरेर त्यसको समाप्ति नहुन्जेल सम्म दुःखादि आउँदा उद्वेग नहुनु, र प्रारम्भ गरिएका कर्मको सिद्धि वा असिद्धिले जसको चित्तमा केही विकार उत्पन्न हुँदैन यस्तो कर्म गर्नेवालालाई सात्त्विक कर्त्ता भन्दछन्॥२६॥**

–★–★–★–

## रागी कर्मफलप्रेप्सुर्लुब्धो हिंसात्मकोऽशुचिः।
## हर्षशोकान्वितः कर्ता राजसः परिकीर्तितः॥

**जुन कर्ता रागी कर्मफलको इच्छावाला, लोभी, हिंसाको स्वभाववाला, अशुद्ध र हर्ष–शोकले युक्त छ, त्यो राजस (कर्ता) भनिन्छ॥२७॥**

राजसकर्त्तारमाह–रागीति। रागोऽस्यास्तीति। रागी इन्द्रि–यार्थेषु प्रीतिमान्, कर्मफलप्रेप्सुः प्रकर्षेण कर्मफलाकाङ्क्षी, लुब्धः आवश्यकेऽपि द्रव्यव्ययं कर्त्तुमशक्तः, प्रत्युत परस्वाभिलाषी, हिंसात्मकः परवृत्तिहरणं हिंसा तदात्म–कस्तत्स्वभावः, अशुचिः कर्मापेक्षितशौचवर्जितः, कर्मफ–ललाभालाभयोर्हर्षशोकान्वितः कर्त्ता राजसः परिकीर्त्तितः ॥२७॥

**अब राजस कर्त्ताको वर्णन गर्नुहुन्छ–**
**इन्द्रिय विषयमा प्रीति गर्नेवाला, कर्मफलको उत्कट इच्छायुक्त, लोभी, अर्थात् आवश्यक काममा पनि द्रव्य खर्च गर्नमा अशक्त र अर्काको धन पाउनलाई लालायित, हिंसा अर्थात् अर्काको वृत्ति हरण गर्ने स्वभाववाला, कर्मको योग्य पवित्रता ले हीन, र कर्मफलरूप लाभ र हानीले हर्ष र शोकले युक्त जुन कर्मगर्नेवाला छ त्यसलाई राजस कर्त्ता भनिन्छ॥२७॥**

–★–★–★–

**अयुक्तः प्राकृतः स्तब्धः शठोऽनैष्कृतिकोऽलसः।**
**विषादी दीर्घसूत्री च कर्ता तामस उच्यते॥**

**जुन कर्ता असावधान, अशिक्षित, मपाईं बन्ने, जिद्दी, उपकारीलाई अपकार गर्नेवाला, अल्छि, विषादी र दीर्घसूत्री छ, त्यसलाई तामस कर्ता भनिन्छ॥२८॥**

तामसं कर्त्तारमाह–अयुक्त इति। अयुक्तः अनवहिततया कर्मानुष्ठानायोग्यः, प्राकृतः कर्त्तव्यविवेकहीनः, स्तब्ध आरब्धेऽपि कार्ये शिथिलः, शठः वञ्चनपरः, नैष्कृतिकः, परवृत्तिच्छेदनाभिप्रायेण धर्मादि प्रदर्श्य स्वार्थसाधकः, अलसः आवश्यकेऽपि कर्मण्यनुद्यमशीलः, दीर्घसूत्री च एकद्विदिवसेन साध्यं यत्तन्मासेनापि न साधयति। एवम्भूतो यः कर्त्ता स तामस उच्यते ॥२८॥

**अब तामस कर्त्ताको लक्षण बताउनु हुन्छ–**
**असावधानताको कारण कर्मानुष्ठानको अयोग्य, कर्त्तव्यको विवेकले हीन, आरम्भ गरिएको कार्यमा पनि शिथिल, ठग, अर्काको वृत्ति नाश गर्ने मतलबले धर्म आदि देखाएर आफ्नो स्वार्थ साध्ने, आवश्यक काममा पनि उद्यम रहित, विषाद गर्नेवाला र एक दुई दिनको काम पनि जो एक महिनामा गर्न नसकोस, यस्तो काम गर्नेवालालाई तामस कर्त्ता भन्दछन्॥२८॥**

–★–★–★–

**बुद्धेर्भेदं धृतेश्चैव गुणतस्त्रिविधं शृणु।**
**प्रोच्यमानमशेषेण पृथक्त्वेन धनञ्जय॥**

**हे धनञ्जय! अब तिमी गुणहरूका अनुसार बुद्धि र धृतिको पनि तीन प्रकारको भेद अलग–अलग रूपले सुन, जो कि मैले पूर्णरूपमा भनिरहेको छु॥२९॥**

एवमनुष्ठेयस्य कर्मणो ज्ञानतः स्वरूपतः कर्त्तृतश्च गुणस्त्रैविध्यमुक्तमिदानीं सर्वव्यवहारासाधारणकारणभूताया बुद्धेर्धृतेश्च गुणतस्त्रैविध्यं वक्तुं प्रतिजानिते–बुद्धेरिति। बुद्धिरध्यवसायरूपा या तस्या धृतेश्च उद्वेगहेतौ प्राप्तावपि चित्तवृत्तेः स्थैर्यं धृतिस्तस्याश्च सत्त्वादिगुणतस्त्रिविधं भेदमशेषेण निःशेषेण हे धनञ्जय! पृथक्त्वेन मया प्रोच्यमानं यथावत्त्वं शृणु ॥२९॥

**यस प्रकार अनुष्ठेय कर्म ज्ञान, स्वरूप र कर्त्ताको गुण भेदले तीन प्रकारका भएको भनेर अब सबै व्यवहारको असाधारण कारणभूत बुद्धि र धृतिको गुण भेदले तीन प्रकार भएको कुरा भन्नुहुन्छ–**
**हे अर्जुन! निश्चयकारिणी बुद्धि र धृति अर्थात् उद्वेगको कारण उपस्थित भएपनि चित्तवृत्तिको स्थिरता, यी दुबै पनि, गुणहरूका भेदले तीन तीन प्रकारका हुन्छन्। ती सबैका पृथक् पृथक् भेद पूर्णरूपले तिमीलाई भन्दछु, तिमी सुन॥२९॥**

–★–★–★–

**प्रवृत्तिं च निवृत्तिं च कार्याकार्ये भयाभये।**
**बन्धं मोक्षं च या वेत्ति बुद्धिः सा पार्थ सात्त्विकी॥**

**हे पार्थ! जुन बुद्धि प्रवृत्ति र निवृत्तिलाई, कर्तव्य र अकर्तव्यलाई, भय र अभयलाई तथा बन्धन र मोक्षलाई जान्दछ, त्यो बुद्धि सात्त्विकी हो ॥३०॥**

तत्र त्रिविधबुद्धिमध्ये प्रथमं सात्त्विकीं बुद्धिमाह–प्रवृत्तिं चेति। प्रवृत्तिं त्रिवर्गसाधनभूतं धर्मं, निवृत्तिं मोक्षसाधनभूतं धर्ममथवा प्रवृत्तिः स्ववर्णाश्रमोचिते धर्मे, निवृत्तिः परोचिते धर्मे, कार्याकार्ये इदमस्मिन् देशे काले च कार्यं कर्त्तव्यमिदमस्मिन् देशे काले च न कर्त्तव्यमिति। भयाभये असत्कार्ये प्रवृत्तिर्भयं सत्कार्ये प्रवृत्तिरभयं, बन्धं बन्धोपायं विषयाभिमुख्यं, मोक्षं मोक्षोपायं विषयवैराग्यं, च या वेत्ति हे पार्थ! सा बुद्धिः सात्त्विकी। बुद्धेः करणत्वेन यया वेत्तीति वक्तव्ये तस्या वेदनासाधारणहेतुत्वात् कर्तृविवक्षया साध्वसिः छिनत्तीति वत् या वेत्तीत्यविरुद्धम् ॥३०॥

तीन प्रकारका बुद्धिहरू मध्ये प्रथम सात्त्विकी बुद्धिलाई यहाँ भन्नुहुन्छ- हे अर्जुन! प्रवृत्ति अर्थात् अर्थ, धर्म, कामको साधन गर्नेवाला धर्म, निवृत्ति अर्थात् मोक्षको साधनभूत धर्म, अथवा आफ्नो वर्णाश्रमको उचित धर्महरूमा प्रवृत्ति र अर्काको वर्णाश्रमहरूका योग्य धर्महरूबाट निवृत्ति, कार्य र अकार्य अर्थात् कुन ठाउँमा के गर्नु उचित हुन्छ र के गर्नु हुँदैन, भय अर्थात् बन्धनको उपाय विषयासक्ति र मोक्ष अर्थात् मोक्षको उपाय विषयबाट विराग, यी सबैलाई जो बुद्धि जान्दछ त्यो सात्त्विकी भनिन्छ ॥३०॥

–★–★–★–

**यया धर्ममधर्मं च कार्यं चाकार्यमेव च ।**
**अयथावत्प्रजानाति बुद्धिः सा पार्थ राजसी ॥**

**हे पार्थ! मनुष्य जसको द्वारा धर्म र अधर्मलाई तथा कर्तव्य र अकर्तव्यलाई पनि राम्रो सँग जान्दैन, त्यो बुद्धि राजसी हो ॥३१॥**

राजसीं बुद्धिमाह–ययेति। यया पूर्वोक्तं धर्ममधर्मं च कार्यमवश्यकर्त्तव्यमकार्यमुपेक्षणीयं च देशकालादिषु यथावन्न जानाति हे पार्थ! सा बुद्धिः राजसी ॥३१॥

अब राजसी बुद्धिलाई भन्नुहुन्छ–हे अर्जुन! जुन बुद्धिको द्वारा मनुष्य पूर्वमा भनिएका, धर्म, अधर्म, कार्य अर्थात् अवश्य करणीय, अकार्य अर्थात् नगर्नयोग्य अर्थात् कुन ठाउँमा के गर्नु र के गर्नु हुँदैन आदिलाइ ठीक–ठीक जान्दैन अर्थात् सन्देहयुक्त बनिरहन्छ, त्यही बुद्धि राजसी हो ॥३१॥

–★–★–★–

**अधर्मं धर्ममिति या मन्यते तमसावृता।**
**सर्वार्थान्विपरीतांश्च बुद्धिः सा पार्थ तामसी ॥**

**हे पृथापुत्र! तमोगुणले घेरिएको जुन बुद्धि अधर्मलाई धर्म- यस्तो मान्दछ र सम्पूर्ण चीजहरूलाई उल्टो मान्दछ, त्यो तामसी बुद्धि हो ॥३२॥**

तामसीं बुद्धिमाह–अधर्ममिति।या तमसाऽऽवृता तमोव्याप्ता सती अधर्मं धर्मं धर्मं चाधर्ममिति मन्यते सर्वार्थान् विपरी–तांश्च मन्यते परतत्त्वमपरमपरतत्त्वं च परं, बद्धं जीवं मुक्तं परमेश्वरं मायाऽवच्छिन्नं, परिच्छिन्नं प्रत्यगात्मानं विभुम्, अनन्तकल्याणगुणमीश्वरं निर्विशेषं, वेदान्तवेद्यं प्रमाणा–विषयं, सत्यं विश्वमसत्यं, स्वभावतो जगद्भिन्नभिन्नं ब्रह्म केवलभिन्नमभिन्नं चेत्येवं सर्वान्पदार्थान् विपरीतान्वि–पर्ययेण मन्यते सा तामसीत्यर्थः ॥३२॥

अब तामसी बुद्धिको वर्णन गर्नुहुन्छ । हे अर्जुन! तामस वा अन्धकारले छोपिईरहने कारण जुन बुद्धि धर्मलाई अधर्म र अधर्मलाई धर्म मान्दछ र सबै कुराहरूलाई उल्टो नै संझन्छ, जस्तो परतत्त्वलाई अपरतत्त्व र अपरतत्त्वलाई, बद्ध जीवलाई मुक्त र मुक्त परमेश्वरलाई मायाले अविच्छिन्न वा युक्त, परिच्छिन्न जीवात्मालाई विभु र अनन्त कल्याण गुणयुक्त ईश्वरलाई विशेषण रहित, वेदान्तको द्वारा जान्नयोग्य ब्रह्मलाई प्रमाणको अविषय, सत्य विश्वलाई असत्य, स्वभावले नै जो जगत्‌बाट भिन्न भएर पनि अभिन्न छ, त्यस ब्रह्मलाई केवल भिन्न वा केवल अभिन्न, यस प्रकार सबै पदार्थहरूलाई उल्टो नै संझिने बुद्धि तामसी भनिन्छ ॥३२॥

–★–★–★–

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

**धृत्या यया धारयते मनः प्राणन्द्रियक्रियाः।**
**योगेनाव्यभचारिण्या धृतिः सा पार्थ सात्त्विकी॥**

**हे पार्थ! समताले युक्त जुन अव्यभिचारिणी धृतिको द्वारा मनुष्य मन, प्राण र इन्द्रियहरूका क्रियाहरूलाई धारण गर्दछ अर्थात् संयम राख्दछ, त्यो धृति सात्त्विकी हो॥३३॥**

इदानीं धृतेस्त्रैविध्ये प्रथमां सात्त्विकीं धृतिमाह–धृत्येति। अव्यभिचारिण्या नित्यसमाध्यनुगतया यया धृत्या योगेन सात्त्विकविषये चित्तैकाग्र्येण मनसः प्राणस्येन्द्रियाणां च क्रियाश्चेष्टाः पुमान् धारयते धृतिः सा पार्थ! सात्त्विकी ज्ञेयेत्यर्थ॥३३॥

तीन प्रकारका धृतिमा सात्त्विक धृतिलाई अब यहाँ भन्नुहुन्छ– हे अर्जुन! अव्यभिचारिणी अर्थात् नित्य समाधिमा स्थित वा भगवत् विषयलाई छोडेर अन्य विषयलाई धारणगर्ने जुन धृतिले योगद्वारा अर्थात् सात्त्विक विषयहरूमा चित्तको एकाग्रता द्वारा मन, प्राण र इन्द्रियहरूका क्रिया अर्थात् चेष्टालाई मनुष्य धारण गर्दछ अर्थात् आफ्नो वशमा गर्दछ, त्यसलाई सात्त्विकी धृति भन्दछन्॥३३॥

–★–★–★–

**यया तु धर्मकामार्थान्धृत्या धारयतेऽर्जुन।**
**प्रसङ्गेन फलाकाङ्क्षी धृतिः सा पार्थ राजसी॥**

**परन्तु हे पृथानन्दन! हे अर्जुन! फलको इच्छावाला मनुष्य जुन धृतिको द्वारा धर्म, काम (भोग) र धनलाई अत्यन्त आसक्तिपूर्वक धारण गर्दछ, त्यो धृति राजसी हो॥३४॥**

राजसीमाह–यया त्विति। फलाकाङ्क्षीः पुरुषः प्रसङ्गेनात–मनः कर्तृत्वाभिनिवेशेन यया धृत्या धर्मकामार्थान् धर्मं काममर्थं च धारयते प्राप्यतया धरयतेऽवधारयति न तु तद्वि–लक्षणं मोक्षाख्यं कदाचिदपि हे पार्थ! सा धृती राजसी॥३४॥

अब राजसी धृतिलाई भन्नुहुन्छ– हे अर्जुन! फलको आकांक्षायुक्त पुरुष प्रसंगले अर्थात् म यस कर्मको कर्त्ता हुँ, मलाई यसको फल मिल्नेछ यस धारणाले जुन धृतिद्वारा अर्थ र कामलाई प्राप्त गर्ने योग्य वस्तु निश्चय गर्दछ र यी सबैभन्दा विलक्षण र श्रेष्ठ मोक्षलाई प्राप्तव्य वस्तु कहिल्यै मान्दैन, त्यही राजसी धृति भनिन्छ॥३४॥

–★–★–★–

**यया स्वप्नं भयं शोकं विषादं मदमेव च।**
**न विमुञ्चति दुर्मेधा धृतिः सा पार्थ तामसी॥**

**हे पार्थ! दुष्टबुद्धिवाला मनुष्य जुन धृतिको द्वारा निद्रा, भय, चिन्ता, दुःख र घमण्डलाई पनि छोड्दैन अर्थात् धारण गरिरहन्छ, त्यो धृति तामसी हो॥३५॥**

तामसीं धृतिमाह–ययेतिं यया धृत्या स्वप्नं निद्रां भयं त्रासं शोकमिष्टवियोगनिमित्तदर्शनजं विषादं खेदं मदं विरुद्ध–विषयानुभवजन्यं हर्षम्एतान्दुर्मेधा दुष्टा निषिद्धार्थधारणावती मेधा बुद्धिर्यस्य स पुरुषो न विमुञ्चति सदा तत्रैव निष्ठां करोतीत्यर्थः। धृतिः सा पार्थ! तामसी भवतीति सम्बन्धः॥३५॥

जुन धृतिले दुष्ट बुद्धिवाला मनुष्य स्वप्न अथवा निद्रा, त्रास, इष्टको वियोगनिमित्त दर्शनले उत्पन्न शोक, खेद र मद अर्थात् विरुद्ध विषयको अनुभवले उत्पन्न हर्ष आदिलाई छोड्दैन अर्थात् त्यसमा सदा निष्ठा गर्दछ त्यसैलाई हे पार्थ! तामसी धृति भन्दछन्॥३५॥

–★–★–★–

**सुखं त्विदानीं त्रिविधं शृणु मे भरतर्षभ।**
**अभ्यासाद्रमते यत्र दुःखान्तं च निगच्छति॥**

**हे भरतश्रेष्ठ अर्जुन! अब तीन प्रकारका सुखलाई पनि तिमी मबाट सुन। जसमा अभ्यासले रमण हुन्छ र जसमा दुःखको अन्त हुनजान्छ॥३६॥**

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

एवं ज्ञानकर्मकर्तृबुद्धिधृतीनां त्रैविध्यं निरूपितमिदानीं सर्वजीवाभिलषितस्य सुखस्य गुणतस्त्रैविध्यं वक्तुं प्रतिजानीते- सुखं त्वित्यर्द्धेन। पूर्वोक्ताज्ञानकर्मादयो यदर्थकास्तत्सुखं तु इदानीं मे मम वचनात्त्रिविधं शृणु, हेयोपादेयज्ञानार्थमव- धारय। तत्र सात्त्विकं सुखमाह सार्धेन-अभ्यासादिति। यत्र यस्मिन्सुखे अभ्यासाच्चिरकालावर्त्तनाद्रमते अबाधितां रतिं प्राप्नोति दुःखान्तं च निगच्छति, दुःखस्यान्तं च नितरां गच्छति न तु विषयसुख इव दुःखोदर्कं प्राप्नोति ॥३६ ॥

यस प्रकार ज्ञान,कर्म, बुद्धि र धृति, यी सबैका तीन तीन प्रकारका रूपहरूका निरूपण गरेर अब सबै प्राणिहरूलाई अभिलषित सुखलाई गुणभेदले तीन प्रकारको भएको कुरा भन्ने निश्चय गर्नुहुन्छ- पछाडि भनेको ज्ञान कर्मादि जुन सुखको लागि गरिन्छ त्यसको तीन प्रकार मबाट सुन, अर्थात् कुन ग्रहण गर्न योग्य छ र कुन छोड्न योग्य छ, यसलाई जान्नको लागि त्यसको प्रकारहरूलाई मबाट संझ। अब आधा श्लोकमा सात्त्विक श्लोकलाई भन्नुहुन्छ। जुन सुखको अभ्यासले अर्थात् चिरकाल परिचयबाट अबाधित प्रीति प्राप्त हुन्छ। र दुःखको अन्त सदा हुन्छ अर्थात् विषय सुखको समान जुन सुख दुःखको खाल्टोमा खसाल्दैन त्यही सात्त्विक सुख हो ॥३६॥

-★-★-★-

**यत्तदग्रे विषमिव परिणामेऽमृतोपमम् ।**
**तत्सुखं सात्त्विकं प्रोक्तमात्मबुद्धिप्रसादजम् ॥**

**यस्तो त्यो परमात्मविषयक बुद्धिको प्रसन्नताले पैदा हुनेवाला जुन सुख (सांसारिक आसक्तिको कारण) आरम्भमा विषको जस्तो र परिणाममा अमृतको जस्तो हुन्छ, त्यो सुख सात्त्विक सुख भनिएको छ ॥ ३६ ॥**

तदेव विशिनष्टि-यत्तदिति। यत्तत्किमपि अग्रे वैराग्यासन- यमनियमोपवासज्ञानध्यानाद्युपासनारम्भे बह्वायाससा- ध्यत्वाद्विषमिवातिदुःखमिव भवति। परिणामे वैराग्यादि- पूर्वकोपासनपरिपाके अमृतोपमममतिप्रियं भवति। यत आत्मबुद्धि प्रसादजम् आत्मविषया बुद्धिरात्मबुद्धिस्तस्याः प्रसादो रजस्तमः कार्यकामलोभमोहत्यागेन स्वच्छतया निरतिशयानन्दरूपेऽवस्थानं ततो जातं सुखं सात्त्विकं प्रोक्तं तद्विद्वद्भिः ॥३७ ॥

सात्त्विक सुखलाई नै विशेष रूपले यहा भन्नुहुन्छ। जति पनि अगाडि अर्थात् वैराग्य, आसन, यम, नियम, उपवास, ज्ञान, ध्यान आदि कष्ट साध्य भएको कारण उपासनाको आरम्भमा विषको समान अर्थात् अति दुःख जस्तो प्रतीत हुन्छ र परिणाममा अर्थात् वैराग्यादि पूर्वक उपासनाको परिपाक वा सिद्धिकालमा अमृतको समान अति प्रिय प्रतीत हुन्छ, किनकी त्यो सुख आत्मबुद्धिको प्रसादले उत्पन्न हुन्छ तथा रज र तमको कार्य काम मोह लोभको त्यागले स्वेच्छा पूर्वक अत्यन्त आनन्द आत्मस्वरूप मा जुन स्थिति त्यसबाट उत्पन्न हुन्छ, यस्तो सुखलाई विद्वान् सात्त्विक सुख भन्दछन् ॥३७॥

-★-★-★-

**विषयेन्द्रियसंयोगाद्यत्तदग्रेऽमृतोपमम् ।**
**परिणामे विषमिव तत्सुखं राजसं स्मृतम् ॥**

**जुन सुख इन्द्रियहरू र विषयहरूको संयोगले हुन्छ त्यो आरम्भमा अमृतको जस्तो र परिणाममा विष नै हो भन्ने लाग्दछ त्यस्तो सुख राजसी भनिएको छ ॥ ३८ ॥**

राजसं सुखमाह-विषयेन्द्रियेति विषयाणामिन्द्रियाणां च संयोगाद्यत्तल्लोप्रसिद्धं स्त्रीप्रसङ्गादिजन्यं सुखमग्रेऽनु- भवकाले अमृतोपमममृततुल्यं भवति। मनइन्द्रियादिसंय- मक्लेशाभावात्। परिणामे विषमिव इहामुत्रापि दुःखजन- कत्वात्तत्सुखं राजसं स्मृतम् ॥३८ ॥

अब राजसी सुखलाई भन्नुहुन्छ-
विषय र इन्द्रियको संयोगले, जस्तो संसारमा प्रसिद्ध स्त्रीप्रसंगादि द्वारा उत्पन्न सुख जो अनुभवको समयमा अमृतको समान प्रतीत हुन्छ, किनकी त्यसमा मन र इन्द्रियको संयमको क्लेश छैन, र अन्तकालमा यस लोकमा र र परलोकमा दुःख दिनेवाला हुनाले विषको समान नै छ, त्यही राजस सुख भनिन्छ ॥३८॥

-★-★-★-

**यदग्रे चानुबन्धे च सुखं मोहनमात्मनः ।**

**निद्रालस्यप्रमादोत्थं तत्तामसमुदाहृतम् ॥**

**निद्रा, आलस्य र प्रमादले उत्पन्न हुने जुन सुख आरम्भमा र परिणाममा पनि आफुलाई मोहित गर्नेवाला छ, त्यो सुख तामस भनिएको छ ॥ ३९ ॥**

तामसं सुखमाह–यदग्र इति। यत्सुखमग्रेऽनुभवकाले अनुबन्धे परिणामे चात्मनो मोहनं सर्ववस्तुयाथात्म्यज्ञानभ्रंशकं भवति तदेव दर्शयति–निद्रालस्यप्रमादोत्थम्। निद्रालस्ये प्रसिद्धे, प्रमादः कर्त्तव्यानवधानं तेभ्य उत्तिष्ठति उद्भवति तथाभूतं तत्तामसमुदाहृतम् ॥३९ ॥

अब तामस सुखको बारेमा भन्नुहुन्छ–
जो सुख अनुभवकालमा र अनुबन्ध अर्थात् परिणामकालाम आत्मालाई मोहित गर्नेवाला अर्थात् सबै वस्तुहरूका यथार्थ ज्ञानको नाशक हो, किनकी यो सुख निद्रा, आलस्य र प्रमाद अर्थात् काममा असावधानीले उत्पन्न हुन्छ, यसैले यस सुखलाई तामस सुख भनिन्छन् ॥ ३९ ॥

–★–★–★–

**न तदस्ति पृथिव्यां वा दिवि देवेषु वा पुनः।**
**सत्त्वं प्रकृतिजैर्मुक्तं यदेभिः स्यात्त्रिभिर्गुणैः ॥**

**पृथ्वीमा या स्वर्गमा अथवा देउताहरू तथा यिनीहरूका सिवाय अरु कतै पनि त्यो यस्तो कुनै पनि वस्तु छैन, जुन प्रकृतिबाट उत्पन्न यी तीनै गुणहरूले रहित होस ॥ ४० ॥**

इदानीमुक्तं त्रैगुण्यप्रकरणमुपसंहरन्सर्वस्य प्राकृतस्य त्रैविध्यं सङ्क्षिप्य दर्शयति–न तदस्तीति। प्रकृतिर्भगवतो मायाख्या शक्तिस्तत्सम्भवैरेभिः सत्त्वादिभिस्त्रिभिर्गुणैर्मुक्तं हीनं यत्सत्त्वं प्राणिजातं स्यात् तत् पृथिव्यां मनुष्यादिषु पुनर्दिवि स्वर्गे देवेषु वाऽन्येषु सुतलादिष्वपि नास्तीत्यर्थः ॥४० ॥

त्रैगुण्य प्रकरणलाई समाप्त गर्दै अब संसारी वस्तुहरूका गुणहरूका अनुसार तीन प्रकारका हुनु संक्षेपमा वर्णन गर्नुहुन्छ–प्रकृति अर्थात् भगवान्‌को माया नामक शक्ति ले उत्पन्न यी सत्, रज र तम आदि तीन गुणहरूबाट रहित सत्त्व अर्थात् प्राणी पृथिवी नाम मनुष्यादि लोकमा, स्वर्गमा या देवताहरूमा अथवा सुतल आदि लोकमा छैनन्। भाव यो हो कि मायाद्वारा उत्पन्न सबै प्राणीसमूह आ–आफ्नो गुणहरूका अनुसार तीन प्रकारका हुन्छन् ॥ ४० ॥

–★–★–★–

**ब्राह्मणक्षत्रियविशां शूद्राणां च परन्तप।**
**कर्माणि प्रविभक्तानि स्वभावप्रभवैर्गुणैः ॥**

**हे परन्तप! ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रहरूका कर्म स्वभावबाट उत्पन्न भएका तीन गुणहरूकै द्वारा विभक्त गरिएका छन् ॥ ४१ ॥**

तदेवं श्रेयस्कामानां श्रेयसे ज्ञानकर्मकर्त्रादीनां सात्त्विकोपादनायेतयोः परिहाराय सात्त्विकादिविवेकज्ञापनपूर्वकं त्रिलोकवर्त्तिप्राणिजातस्य त्रैगुण्यमेव प्रतिपादितमिदानीं सर्वस्य त्रिगुणात्मकत्वे सति राजसतामसपरिहारेण सात्त्विकज्ञानकर्मादिनिष्टस्यापि अनित्यापायिसातिशयं स्वर्गादिसम्बन्धिस्रक्‌चन्दनारामविहारदिव्यविमानसोमपानाप्सरोविहाराद्येव फलं स्यान्न तु नित्यानपायिनिरतिश यसुखरूपं मोक्षाख्यं फलं, तस्मात् कथं मोक्षो भवेदित्यपेक्षायां स्वस्ववर्णाश्रमाधिकरानुसारेण वेदविहितानि सात्त्विकानि

यस प्रकार कल्याण चाहनेवालाहरूका लागि ज्ञान, कर्म, कर्त्ता आदिको सात्त्विक रूप ग्रहण गर्ने र राजसी तामसी रूपलाई छोड्नका लागि सात्त्विक आदि को विवेकलाई भन्दै यो भन्नुभयो कि त्रिलोकमा जति पनि प्राणिहरू छन् सबै त्रिगुणात्मक हुन्, अर्थात् सत्, रज, तम को भेदले तीन प्रकार का छन्। अब सबै त्रिगुणात्मक भएपछि राजस, तामसलाई छोडेर केवल सात्त्विक ज्ञान, कर्म आदिमा निष्ठ पुरुषलाई अनित्य, नाशशील, सातिशय स्वर्गादिसम्बन्धी, माला, चन्दन, आराम, विहार, दिव्य विमान, सोमपान, अप्सराविहार आदिको नै फल मिल्दछ, नित्य (नाश नहुने) निरतिशय सुखदायक मोक्षरूप फल मिल्दैन। तब मनुष्यहरूलाई मोक्ष कसरी मिल्दछ? यस प्रश्नको अपेक्षामा यो भन्नुहुन्छ कि आ–आफ्नो वर्णाश्रमको अधिकारको अनुसार, वेद द्वारा भनिएको सात्त्विक कर्मलाई नै, भगवान् को आज्ञा पालन

कर्माण्येव परपुरुषाज्ञापालनबुद्ध्या फलकर्तृत्वाभावेनानुष्ठितानि तत्प्रसादजन्यज्ञानभक्तिद्वारेण भगवत्प्राप्तिलक्षणमोक्षफलकानि भवन्तीति प्रतिपादयितुं कर्माधिकारिणां ब्राह्मणादीनां स्वभावानुगुणानि सत्त्वादिगुणभिन्नानि कर्माणि वृत्तिभिः सह विवेक्तुं प्रतिजानीते–ब्राह्मणेति। ब्राह्मणक्षत्रियविशामिति त्रयाणां समासकरणं द्विजत्वेन वेदाध्ययनयज्ञाद्यधिकारज्ञापनार्थम्। शूद्राणां चेति समासात्पृथक्करणमेकजातितया वेदाध्ययनाद्यधिकारबहिर्भूतत्वज्ञापनार्थम् वेदाध्ययनस्योपनयनसंस्कारतन्त्रत्वात् "तं होपनिन्ये अधीहि भगव इति होपससादे"ति श्रुते। शूद्रस्य तु "न शूद्रे पातकं किञ्चिन्न च संस्कारमर्हति। शूद्रश्चतुर्थो वर्ण एकजातिरि"ति तन्निषेधात्। साक्षाद्वेदाध्ययननिषेधोऽपि "पद्यु ह वा एतच्छ्मशानं यच्छूद्रस्य समीपे नाध्येतव्यम्, अथास्य वेदमुश्रृण्वतस्त्रपुजतुभ्यां श्रोत्रपूरणम्, उदाहरणे जिह्वाछेदः धारणे शरीरभेद" इति श्रुतिस्मृतिभ्यां शूद्रस्य वेदश्रवणनिषेधादध्ययननिषेधः सुतरां सिद्धः, अध्ययनस्य श्रवणपूर्वकत्वात्। हे परन्तप! ब्राह्मणादीनां कर्माणि प्रकर्षेण विभक्तानि इतरेतरविभागेन स्थितानि। कैः स्वभावप्रभवैर्गुणैः। तथा हि ब्राह्मणस्य स्वभावप्रभवो रजस्तमोऽभिभवेनाद्रिक्तः सत्त्वगुणः, क्षत्रियस्य स्वभावप्रभवस्तमः सत्त्वाभिभवेनोद्रिक्तो रजो गुणः वैश्यस्य स्वभावप्रभवस्तमउपसर्जन उद्रिक्तो रजोगुणः, शुद्रस्य स्वभावप्रभवस्तु रज उपसर्जन उद्रिक्तस्तमोगुणः। एवमेतेः स्वभावप्रभवैर्गुणैश्चतुर्णां वर्णानां प्रविभक्तानि कर्माणि शास्त्रेषु प्रतिपादितानि मया वक्ष्यमाणानि त्वमवधारयेत्यर्थः॥४१॥

**संझेर र फलको आकांक्षा तथा कर्त्तापनको अभिमानले शून्य भएर गर्नाले भगवान्को कृपाले उत्पन्न, ज्ञान भक्तियोगको द्वारा, भगवत्प्राप्ति लक्षणवाला मोक्षको प्राप्ति हुन्छ। यस कुराको प्रतिपादन गर्नका लागि ब्राह्मण, क्षत्रिय आदि कार्मधिकारीहरूको स्वभावका अनुसार सत्त्वादि गुणहरूले भिन्न-भिन्न कर्महरूलाई उनीहरूका वृत्तिको साथमा रहने प्रतिज्ञा गनुहुन्छ। ब्राह्मण, क्षत्रिय वैश्य, तिनैलाई एकठाउँमा समास गरेर यो भन्नुभयो कि यी तिनैलाई वेद पढ्ने र यज्ञादि कर्म गर्ने अधिकार छ। शूद्रहरूलाई समासबाट पृथक् गरेर उनीहरूलाई एक अलग जाति भन्नुभयो जसलाई वेदाध्ययन आदिको अधिकार छैन। वेदाध्ययनको अधिकार उपनयन संस्कारको अधीन छ। श्रुतिमा पनि छ- 'तं..... होपसाद' अर्थात् म जनै धारण गर्नेछु। हे भगवन् मलाई पढाउनुस, यस्तो गुरुको सामने गएर भन्नु। शूद्रका विषयमा भनेको छ- 'न शूद्रे.......एक जातिः' अर्थात् शूद्रलाई कुनै पात लाग्दैन, न उ कुनै संस्कारको योग्य छ। शूद्र चौथा वर्ण र एक जाति हो। शूद्रका लागि वेदाध्ययनको निषेध पनि साक्षात् रूपले भनेको छ, यथा-'पद्यु.....शरीरभेदः' अर्थात् यो शूद्र मसानरूप छ। यसैले शूद्रका सामुन्ने वदे न पढ्नु। शूद्रले कतै वेदलाई सुन्यो भने त्यसको कानमा शीशा र जस्ता भरिदिनु पर्दछ, वेदको त्यो उदाहरण दिन्छ भने त्यसको जिब्रो छेडिदिनु पर्छ र यदि त्यो वेदलाई धारण गर्दछ भने त्यसको शरीरलाई काटिदिनु पर्दछ। यी श्रुति स्मृतिहरू द्वारा शूद्रलाई वेद सुन्न अधिकार छैन। र यसैले अध्ययनको पनि निषेध भयो किनकी नसुनीकन अध्ययन हुँदैन। हे अर्जुन! ब्राह्मण आदिको कर्म उनीहरूको स्वभावले उत्पन्न गुणहरूका द्वारा पूर्णरूपले विभक्त छ, जस्तो ब्राह्मणमा स्वभावले नै रजोगुण र तमोगुण दबिईरहेको हुन्छ र सतोगुण बढि रहन्छ, र क्षत्रियहरूका स्वभावमा सतोगुण र तमोगुण दबिईरहन्छन् र रजोगुण बढिरहेको हुन्छ, वैश्यको स्वभावमा तमोगुण दबिईरहेको हुन्छ र रजोगुण बढिरहेको हुन्छ र शूद्रको स्वभावमा रजोगुण गौण र तमोगुण बढेको हुन्छै। यस प्रकार स्वभावानुसार चारै वर्णहरूका जुन विभक्त गरिएका कर्मलाई शास्त्रहरूले प्रतिपादन गरेका छन् उनैलाई म भन्दछु, हे अर्जुन! तिमी सावधानी पूर्वक सुन॥४१॥**

–★–★–★–

**शमो दमस्तपः शौचं क्षान्तिरार्जवमेव च।**
**ज्ञानं विज्ञानमास्तिक्यं ब्रह्मकर्म स्वभावजम्॥**

**मनको निग्रह गर्नु, इन्द्रियहयलाई वशमा गर्नु, धर्मपालनको लागि कष्ट सहनु, बाहिर-भित्रबाट पवित्र रहनु, अर्काको अपराधलाई क्षमा गर्नु, शरीर, मन आदिमा सरलता राख्नु, वेद, शास्त्र आदिको ज्ञान हुनु, यज्ञविधिलाई अनुभवमा ल्याउनु र परमात्मा, वेद आदिमा आस्तिकभाव राख्नु- यी सबै नै ब्राह्मणका स्वभाविक कर्म हुन्॥४२॥**



तत्र ब्राह्मणानां स्वभावप्रभवाणि कर्माण्याह–शम इति। शमो बाह्येन्द्रियसंयमः, दमो मनोनियमनं, तपः शास्त्रीय–

**अब ब्राह्मणहरूका स्वभावोत्पन्न कर्महरूलाई भन्नहुन्छ- शम अर्थात् बाहिरी इन्द्रियहरूका संयम, दम अर्थात् मनलाई काबूमा**

व्रतोवासनियमैः शरीरतापनं, शौचं शास्त्रीयकर्मयोग्यतापादनं बाह्याभ्यन्तरं, तत्र बाह्यं मृज्जलादिना, आभ्यन्तरं रागद्वेषशून्यत्वं, क्षान्तिर्बह्वपकृतस्याप्यविकृतचित्तत्वम्, आर्जवं भावकौटिल्यराहित्यं शरीरवाङ्मनोभिः समानाचरणमित्यर्थः ज्ञानं परावरतत्त्वयाथात्म्यबोधः, विज्ञानं परस्परविरुद्धानां वाक्यानामविरोधेन महावाक्यार्थावबोधः आस्तिक्यं वेदतदनुकूलस्मृतिपुराणेतिहासपञ्चरात्राद्युक्तार्थस्य कृत्स्नस्य सत्यतानिश्चयः, एतद्ब्राह्मणस्य स्वभावजं कर्म ॥४२॥

गर्नु, तप अर्थात् शास्त्र मा भनिएका व्रत, उपवास, नियम आदिले शरीरलाई तपाउनु, शौच अर्थात् शास्त्रीय कर्महरू गर्नलाई योग्य बनाउने बाहिरी र भित्रि शुद्धता, बाहिरी शुद्धता माटो र जल आदिले र भित्री शुद्धता राग द्वेषले रहित हुनु। क्षान्ति अर्थात् धेरै अपकार भएपनि चित्तमा कुनै विकार आउन दिंदैन, आर्जव नाम भावको कुटिलता नहुनु अर्थात् शरीर वचन मनमा एक समान आचरण गर्नु, ज्ञान अर्थात् पर र अपर तत्त्वको सहि-सहि बोध, विज्ञान अर्थात् परस्पर विरोधी शास्त्र वचनहरूको समन्वय गर्दै 'तत्वमसी' आदि महावाक्यहरूको अर्थको बोध, आस्तिक्य अर्थात् वेद र त्यसको अनुकुल, स्मृति, पुराण, इतिहास पंचरात्र आदिमा भनिएको अर्थको सत्यतामा पूरा विश्वास, यी सबै ब्राह्मणहरूका स्वभावोत्पन्न कर्म हुन ॥४२॥

-★-★-★-

## शौर्यं तेजो धृतिर्दाक्ष्यं युद्धे चाप्यपलायनम्।
## दानमीश्वरभावश्च क्षात्रं कर्म स्वभावजम्॥

**शूरवीरता, तेज, धैर्य, प्रजाको संचालन आदिको विशेष चतुरता तथा युद्धमा कहिल्यै पीठ नदेखाउनु, दान गर्नु र शासन गर्ने भाव(-यी सबै-का-सबै) क्षत्रियका स्वभाविक कर्म हुन्॥४३॥**

क्षत्रियस्य स्वभावजं कर्माह-शौर्यमिति। शौर्यं पराक्रमः महत्तरानपि रिपून् हन्तुं निःशङ्कतया प्रवर्त्तनस्वभावत्वमित्यर्थः, तेजः परैरनभिभवयोग्यत्वे सति पराभिभवनसामर्थ्यं, धृतिः युद्धादिकर्मण्यारब्धे आपद्यपि अवसादशून्यत्वं, दाक्ष्यं सर्वक्रियासाधनचातुर्यं, युद्धे चायपलायनं मरणे ज्ञातेऽपि परेभ्योऽपराङ्मुखत्वं, दानमर्थिस्यस्तत्तदर्थत्यागः, ईश्वरभावः प्रजापालनार्थमुत्पथगामिनां नियमनसामर्थ्यम्, एतत् क्षात्रं क्षत्रियस्य स्वभावजं कर्म ॥४३॥

शौर्य अर्थात् पराक्रम, आफु भन्दा ठूला शत्रुलाई पनि मार्न निःशंक भएर प्रवृत्त हुने स्वभाव, तेज अर्थात् शत्रुहरूबाट हराउन नसकिने योग्यता राख्दै उनीहरूलाई हराउने योग्यता राख्नु, धृति अर्थात् युद्धादि कार्य आरम्भ भएपछि आपत्तिकालमा पनि शिथिल नहुनु, दाक्ष्य अर्थात् सबै कामहरूका चतुरता, अपलायन अर्थात् युद्धबाट नभाग्नु अर्थात् मरण निश्चय भएपछि पनि शत्रुलाई पीठ नदेखाउनु, दान अर्थात् याचकहरूले जो माग्दछन् त्यो दिनु, ईश्वर भाव अर्थात् प्रजापालनका लागि कुमार्गमा हिंड्नेहरूलाई शासन गर्ने सामर्थ्य, यीनै क्षत्रियहरूका स्वभावोत्पन्न गुणहरूमा अनुसार कर्म हुन्॥४३॥

-★-★-★-

## कृषिगौरक्ष्यवाणिज्यं वैश्यकर्म स्वभावजम्।
## परिचर्यात्मकं कर्म शूद्रस्यापि स्वभावजम्॥

**खेति गर्नु, गाईहरूका रक्षा गर्नु र व्यापार गर्नु (-यी सबै ) वैश्यहरूका स्वाभाविक कर्म हुन् तथा चारै वर्णहरूका सेवा गर्नु शूद्रको पनि स्वाभाविक कर्म हो॥४४॥**

वैश्यशूद्रयोः कर्माह-कृषीति। कृषिरन्नोत्पादनार्थं भूमिकर्षणं, गोरक्षस्य भावो गोरक्ष्यं पशुपालनमित्यर्थः। वाणिज्यं वणिजः कर्म क्रयविक्रयलक्षणम्, अनेन कुसीदलक्षणं च ग्राह्यम्, एतद्वैश्यस्य स्वभावजं कर्म। परिचर्यात्मकं पूर्वोक्तवर्णत्रयाणां शुश्रुषात्मकं कर्म शूद्रस्यापि स्वभावजम्। एतैरेव त्रयाणां वर्णानां नित्यकर्त्तव्यतया वेदविद्भिर्मन्वा-

अब वैश्य र शूद्रका कर्महरूलाई भन्नुहुन्छ-
कृषि अर्थात् अन्न उब्जाउनका लागि भूमिलाई जोत्नु, गोरक्षा अर्थात् पशुपालन आदि, वाणिज्य अर्थात् क्रय-विक्रय लक्षणवाला व्यापारीको काम। व्याजमा पैसा दिनु पनि यसमा सम्मिलित छ। यी वैश्यका स्वभावोत्पन्न कर्म हुन्। र पहिले भनिएका तीनै वर्णहरूका सेवा शूद्रका स्वभाविक कर्म हो। वेदलाई जान्ने मनुआदि द्वारा अध्ययन यज्ञादि जो नित्य कर्म तीनै वर्णहरूका

दिभिर्विहितानि अन्यान्यध्ययनयज्ञादीनि तान्यप्यनुष्ठेयतया गृह्यन्ते इति ज्ञेयम्। तत्राध्ययनयज्ञदानानि त्रयाणां साधारणानि, ब्राह्मणस्याध्यापनादीनि त्रीण्यधिकानीति विवेकः। तथाऽऽह मनुः "अध्यापनमध्ययनं यजनं याजनं तथा। दानं प्रतिग्रहं चैव ब्राह्मणानामकल्पयत्। प्रजानां रक्षणं दानमिज्याध्ययनमेव च। विषयेष्वप्रसक्तिं च क्षत्रियस्य समादिशत्। पशूनां रक्षणं दानमिज्याध्ययनमेव च। वणिक्पथं कुसीदं च वैश्यस्य कृषिमेव च। एकमेव तु शूद्रस्य प्रभुः कर्म समादिशत्। एतेषामेव वर्णानां शुश्रूषामनसूये"ति। शमदमादयस्तु यद्यपि सर्वेषां मुमुक्षुणां साधारणास्तथाऽपि ब्राह्मणस्य सत्त्वोद्रिक्तस्वभावत्वाद्विशिष्योक्ताः। कदा चिदन्यत्रापि सत्त्वोद्रेकवशात्ते भवन्तीति शास्त्रादेव ज्ञायते। तथोक्तं विष्णुस्मृतौ "क्षमा सत्यं दमः शौचं दानमिन्द्रियसंयमः। अहिंसा गुरुशुश्रूषा तीर्थानुशरणं तथा। आर्जवं लोभशून्यत्वं देवब्राह्मणपूजनम्। अनाभ्यसूया च तथा धर्मः सामान्य उच्यते" इति ॥४४॥

लागि कर्त्तव्यरूपले भनिएका गुणहरूद्वारा गर्नुपर्दछ अर्थात् ती पनि यसैमा सम्मिलित छन्। त्यसमा अध्ययन, यज्ञ, दान आदि ब्राह्मण क्षत्रिय र वैश्य तीनैका लागि होर र अध्यापन आदि कर्म ब्राह्मणका लागि खास हो। मनुले पनि यस्तै भनेको छन्- 'अध्यापन.....सूयया' अर्थात् ब्राह्मणहरूका लागि यी कर्म बनाईयो जस्तै- पढ्नु पढाउनु, यज्ञ गर्नु गराउनु, दान लिनु दिनु। क्षत्रियहरूका यी कर्महरू गर्ने आज्ञा भयो- प्रजाको रक्षा गर्नु, दान दिनु, यज्ञ गर्नु, पढ्नु, विषयमा आसक्त नहुनु। वैश्यका यी कर्म भए, जस्तो-पशुहरूको रक्षा गर्नु, दान दिनु, यज्ञ गर्नु, पढ्नु, व्यापार गर्नु, व्याजमा पैसा लगाउनु र खेति गर्नु। शूद्रहरूका केवल एक नै धर्म भनिएको छ जस्तो- तीनै वर्णहरूका ईर्ष्या रहित सेवा गर्नु। यद्यपि शम, दम, आदि मोक्ष चाहनेवाला सबै वर्णका साधारण धर्म हुन्, तथापि अधिक सात्त्विक गुणले युक्त स्वभाववाला भएका कारण ब्राह्मणहरूका यी विशेष गुण हुन्। सत्त्व गुणको अधिकताले यी गुण कहिले-काँही अन्य ठाउँमा पनि पाईन्छ अर्थात् अन्य वर्णहरूमा पनि पाईन्छ, यो शास्त्रद्वारा नै ज्ञात हुन्छ। जस्तो कि विष्णुस्मृतिमा भनिएको छ। 'क्षमा.....उच्यते' अर्थात् यी सबै वर्णहरूका लागि समान धर्म हुन्, यथा-क्षमा, सत्य, दम, पवित्रता, दान, इन्द्रिय संयम, अहिंसा, गुरुको सेवा, तीर्थहरूमा वास, सरलता, लोभ-हीनता, देव ब्राह्मणको पूजा र कसैसँग पनि ईर्ष्या नगर्नु ॥४४॥

-★-★-★-

**स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः।**
**स्वकर्मनिरतः सिद्धिं यथा विन्दति तच्छृणु ॥**

**आ-आफ्नो कर्ममा प्रीतिपूर्वका लागेका मनुष्य सम्यक् सिद्धि (परमात्मा)लाई प्राप्त गर्दछन्। आफ्नो कर्ममा लागेको मनुष्य जसरी सिद्धिलाई प्राप्त गर्दछ, त्यसलाई तिमी मबाट सुन ॥४५॥**

एवं नियतस्वस्ववर्णाश्रमादिकर्मणः पुरुषार्थोपायत्वमित्याह स्वे स्वे यथोदितवर्णाश्रमोद्देशेन विहिते कर्मणि अभिरतः सम्यगनुष्ठानपरः नरो मनुष्य संसिद्धिं सम्यग्ज्ञानयोग्यतां लभते। ननु तर्हि स्वकर्मनिरताः प्रायः सर्वेऽपि दृश्यन्ते सम्यग्ज्ञानिनः कथं न भवन्ति ? चेत्कश्चिदपि संसारी न स्यादिति चेत्तत्राह-स्वकर्मणि निरतो नितरां रतः श्रद्धयाऽनुष्ठानं कुर्वन् यथा येन प्रकारेण सिद्धिं ज्ञाननिष्ठां विन्दति लभते तत्तत्प्रकारं शृणु ॥४५॥

आ-आफ्नो वर्णाश्रमादि कर्म पुरुषार्थ अर्थात् मोक्षका उपाय हुन्। यस कुरालाई अब भन्नुहुन्छ- आफ्नो वर्णाश्रमको अनुकुल निश्चित गरिएका कर्महरूमा जुन मनुष्य पूर्णरूपमा लागिरहन्छ त्यो संसिद्धि अर्थात् सम्यक् ज्ञानको योग्यता पाउँदछ। यहाँ यो शंका हुन्छ कि आ-आफ्नो वर्णाश्रमका कर्ममा निरत प्रायः सबै मनुष्य देखिन्छन् भने ती सम्यक् ज्ञानी किन हुँदैनन्? र यदि सबै सम्यक् ज्ञानवाला हुन्छन् भने सबैको मोक्ष हुनुपर्ने हो कुनै संसारी नहुनु पर्ने हो। यस शंकाको उत्तर दिनुहुन्छ कि मनुष्य आफ्नो वर्णाश्रमोचित कर्महरूलाई श्रद्धायुक्त भएर गर्दै जुन प्रकारको ज्ञान निष्ठा प्राप्त गर्दछ त्यसको रीतिलाई मबाट सुन ॥४५॥

-★-★-★-

**यतः प्रवृत्तिर्भूतानां येन सर्वमिदं ततम्।**
**स्वकर्मणा तमभ्यर्च्य सिद्धिं विन्दति मानवः ॥**

**जुन परमात्माबाट सम्पूर्ण प्राणिहरूको प्रवृत्ति (उत्पत्ति) हुन्छ र जसबाट यो सम्पूर्ण संसार व्याप्त छ, त्यस**

**परमात्मालाई आफ्नो कर्मको द्वारा पूजन गरेर मनुष्यमात्र सिद्धिलाई प्राप्त गर्दछ॥४६॥**

तमेवाह–यत इति। यतः सर्वज्ञात्सर्वशक्तेर्भगवतो हेतोर्भूतानां ब्रह्मादिकीटान्तानां प्राणिनां प्रवृत्तिरुत्पत्तिर्चेष्टा वा भवति येनैकेन सर्वमिदं जगत्ततं व्याप्तं स्वकर्मणा स्वाभाविकेन वैदिकेन लौकिकेनापि तमभ्यर्च्य फलकर्तृत्वसमर्पणेन पूजयित्वा मानवः तत्प्रसादात् सिद्धिं तत्त्वज्ञाननिष्ठालक्षणां विन्दति लभते॥४६॥

जुन सर्वज्ञ, सर्वशक्तिमान् र सबैका कारण भगवान्बाट ब्रह्मा देखि लिएर कीट पर्यन्त प्राणिहरूको उत्पत्ति वा चेष्टा हुन्छ र जुन एक भगवान्ले यो सारा जगत् व्याप्त छ त्यस भगवान्लाई आफ्नो स्वभाविक वैदिक र लौकिक कर्महरू द्वारा, फलको आकांक्षालाई र कर्त्तापनको अहंकारलाई समर्पण गरेर, जो पूजा गर्दछ, त्यो मनुष्य भगवान् को प्रसादले तत्त्वज्ञान निष्ठा लक्षणवाला सिद्धिलाई प्राप्त गर्दछ॥४६॥

–★–★–★–

## श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात्। स्वभावनियतं कर्म कुर्वन्नप्नोति किल्बिषम्॥

**राम्रो सँग गरिएको परधर्मभन्दा गुणरहित भएपनि आफ्नै धर्म श्रेष्ठ हुन्छ। किनकी स्वभावद्वारा नियत गरिएको स्वधर्मरूप कर्मलाई गर्दै रहेमा मनुष्यलाई पाप हुँदैन॥४७॥**

यतः परमेश्वराराधनलक्षणधर्मस्य तत्प्रसादात् सिद्धि–हेतुत्वमतः सर्वजनस्य तथाविधः स्वधर्मः एव श्रेयस्कर इत्याह–श्रेयानिति। स्वधर्मः स्वेनोपादातुं योग्यः परमात्माराधनरूपो धर्मः विगुणः किञ्चिदङ्गविहीनोऽपि स्वनुष्ठितात्सम्यगनुष्ठितादपि परधर्मात् श्रेयान् प्रशस्यतरः। यतः स्वभावनियतं पूर्वोक्तस्वभावेन नियतं नियमेनोक्तं कर्म युद्धादिकं कुर्वन्नपि किल्विषं न प्राप्नोति॥४७॥

किनकी माथि भनिएको रीतिले परमेश्वराराधन लक्षण धर्म परमेश्वरको प्रसादले सिद्धि दिन्छ यसैले सबै मनुष्यहरूका लागि त्यस प्रकारको स्वधर्म नै श्रेयस्कर छ।। यसैलाई भन्नुहुन्छ– स्वधर्म अर्थात् आफ्नो गर्नयोग्य परमात्माराधनरूप धर्म केहि अंगले हीन भएपनि राम्रो सँग गरिएको परधर्म भन्दा कतै राम्रो हो किनकी पूर्वोक्त स्वभावले निश्चित गरिएको लड़ाईं आदि आ–आफ्नो जातिको स्वभावप्राप्त कर्महरूलाई गरेर दोषको भागी हुँदैन॥४७॥

–★–★–★–

## सहजं कर्म कौन्तेय सदोषमपि न त्यजेत्। सर्वारम्भा हि दोषेण धूमेनाग्निरिवावृताः॥

**हे कौन्तेय! दोषयुक्त भएपनि सहज कर्मको त्याग गर्नु हुँदैन; किनकी सम्पूर्ण कर्म धुँवाले आगो ढाकिए जस्तो कसैन–कसै–गरी दोषले युक्त छ॥४८॥**

ननु यदि कर्मणो ज्ञानोतपत्तिरेवान्ततः फलं चेत्तर्हि हिंसादिदोषयुक्तं कर्म परित्यत्य ज्ञानाभ्यास एव यत्नः कर्त्तव्यः, किमनेन हेयेन कर्मणेति चेत्तत्राह–सहजमिति। हे कौन्तेय! सहजं स्वभावविहितं कर्म सदोषमपि न त्यजेत्। हि यस्मात् सर्वारम्भाः सर्वे परमेश्वराराधनव्यतिरिक्ता आरम्भाः कर्मज्ञानयोगाद्युपाया दोषेणावृत्ताः। कथं धूमेनाग्निरिव। यथा शीततमोनाशकोऽपि अग्निरार्द्रेन्ध–नसंयोगजन्यधूमावृतो न सम्यग् ज्वलति प्रकाशते च, तथा

यहाँ यो शंका हुन्छ कि यदि कर्मको आखिरी फल ज्ञान उत्पन्न गर्नु नै हो भने त कर्मलाई छोडेर ज्ञानको अभ्यास किन नगर्नु। हेय कर्मलाई गर्नाले के लाभ? यस शंकाको उत्तर दिनुहुन्छ–
हे अर्जुन! स्वभाव निर्धारित कर्मलाई दोषयुक्त भएपनि छोड्नु हुँदैन, किनकी परमेश्वराराधनलाई छोडेर सबै आरम्भ अर्थात् कर्म, ज्ञान, योग आदि उपाय दोषले त्यसरी नै छोपिएका छन् जसरी धूँवाले आगो छोपिएको हुन्छ। भाव यो कि जस्तो शीत र अन्धकारको नाशक भएपनि आगो चिसो दाउराको संयोगले धूँवाको द्वारा ढाकिन्छ र न राम्रो सँग बल्दछ, र न प्रकाश नै गर्दछ त्यसै गरी स्वभावैले नियत कर्मानुष्ठानको बिना सत्त्वशुद्धि अर्थात्

कर्मानुष्ठानमन्तरेण सत्त्वशुद्ध्यभावेन यथार्थतत्त्वज्ञानं न स्यात्। असम्भावानाविपरीतभावनादोषानिवृत्तेः तस्मात् स्वभावविहितं कर्म फलकर्तृत्वत्यागेन यथाशक्ति अनुष्ठाय निर्मलेऽन्तःकरणे सति निखिलप्रमादं विहाय तत्त्वज्ञाननिष्ठा स्वयमेव सम्पद्येत। "अविद्यया मृत्युं तीर्त्वा विद्यया- मृतमश्नुते" इति श्रुतेः। तस्मात्स्वाधिकारयोग्यकर्मणा परमात्मानमभ्यर्च्य ज्ञाननिष्ठालक्षणां सिद्धिं प्राप्नोतीति सिद्धम् ॥४८ ॥

**अन्तःकरणको शुद्धि हुँदैन र यसैले यथार्थ तत्त्व ज्ञान पनि हुँदैन किनकी असम्भावना र विपरीत भावनाको दोषको निवृत्ति हुँदैन। यसैले स्वभाव निर्दिष्ट कर्म फलको कर्त्तापनलाई छोडेर यथाशक्ति गर्नाले अन्तःकरण निर्मल हुन्छ र यसले प्रमाद नाश भएर तत्त्वज्ञाननिष्ठा स्वयं नै प्राप्त हुन्छ। श्रुतिमा भनेको छ- 'अविद्याया. ....मश्नुते' यसैले आफ्नो अधिकारको योग्य कर्मद्वारा परमात्माको पूजा गरेर ज्ञाननिष्ठा लक्षणवाला सिद्धिलाई मनुष्य प्राप्त गर्दछ यो प्रमाणित भयो ॥४८ ॥**

-★-★-★-

## असक्तबुद्धिः सर्वत्र जितात्मा विगतस्पृहः।
## नैष्कर्म्यसिद्धिं परमां सन्न्यासेनाधिगच्छति ॥

**जसको बुद्धि सबैतिर आसक्ति रहित छ, जसले शरीरलाई वशमा राखेको छ, जो स्पृहारहित छ त्यो मनुष्य सांख्ययोगको द्वारा सर्वश्रेष्ठ नैष्कर्म्य सिद्धिलाई प्राप्त गर्दछ ॥४९ ॥**

तदेवं स्वकर्मणाऽऽराधितपरमपुरुषस्य तत्त्वनिष्ठालक्षणा सिद्धिरुक्ता। इदानीं तस्या अपि यत्फलं स्यात्तन्निर्दिशति- असक्तबुद्धिरिति। असक्ता सर्वत्रासक्तिशून्या बुद्धिर्यस्य सः, जितात्मा वशीकृतमनाः, यतो विगतस्पृहो विशेषेण गता दूरीभूता स्पृहा फलविषया इच्छा यस्य स संन्यासेन "सङ्गं त्यक्त्वा फलं चैव स त्यागः सात्त्विको मतः" इत्युक्तलक्षणेन नैष्कर्म्यसिद्धिं कर्मनिवृत्तिलक्षणां परमां प्रकृष्टां पूर्वोक्तसिद्धेर्ज्ञाननिष्ठाया अपि फलभूतां सर्वोत्कृष्टां श्रीभगवत्स्वरूपमङ्गलविषयकश्रीगङ्गाप्रवाहवदनवच्छिन्न- स्मृतिसन्तानरूपां परां भक्तिमधिगच्छति प्राप्नोति ॥४९ ॥

आफ्नो स्वभावनियत कर्महरू द्वारा जो परमेश्वरको पूजा गर्दछ त्यसलाई तत्त्वज्ञाननिष्ठावाला सिद्धि प्राप्त हुन्छ, यो पछाडि भनेर आउनुभएको छ। अब त्यस सिद्धिको जुन फल हुन्छ त्यसलाई यहाँ देखाउनु हुन्छ-
आसक्तिशून्य बुद्धियुक्त पुरुष जसले मनलाई वशमा गरेको छ र स्पृहा अर्थात् फलको इच्छाले रहित छ 'संगं....मतः' यस्तो लक्षणवाला सात्त्विक संन्यास द्वारा कर्म निवृत्ति लक्षणवाला परम उत्कृष्ट सिद्धिलाई प्राप्त गर्दछ। यो सिद्धि पहिले भनिएको ज्ञाननिष्ठावाला सिद्धिको फलस्वरूप र भगवान्को स्वरूप र मंगलविग्रहमा गंगाप्रवाहको समान अनवच्छिन्न अर्थात् कहिल्यै नचुँडिने अखण्ड ध्यान उत्पन्न गर्नेवाला हो। अर्थात् यस सिद्धिद्वारा मनुष्य पराभक्तिलाई प्राप्त गर्दछ, जसमा भगवान्को स्वरूप दिव्य विग्रहको सधैं ध्यान भईरहन्छ ॥४९ ॥

-★-★-★-

## सिद्धिं प्राप्तो यथा ब्रह्म तथाप्नोति निबोध मे।
## समासेनैव कौन्तेय निष्ठा ज्ञानस्य या परा ॥

**हे कौन्तेय! सिद्धि (अन्तःकरणको शुद्धि) लाई प्राप्त गरेको साधक ब्रह्मलाई जो कि ज्ञानको परानिष्ठा हो, जसरी प्राप्त हुन्छ त्यसलाई तिमी मबाट संक्षेपमा संझ ॥५० ॥**

अधुना नैष्कर्म्यलक्षणा सिद्धिः प्रेमलक्षणा भक्तिर्भग- वत्प्राप्त्यन्तरङ्गहेतुरिति वक्तुं तस्याः प्राप्तिप्रकारमुपदिशति सिद्धिमिति। ज्ञाननिष्ठाफलरूपां नैष्कर्म्यसिद्धिमनवरत- ध्याननिष्ठालक्षणां परां भक्तिं यथा येन प्रकारेण प्राप्तस्सन् ब्रह्म प्राप्नोतीति प्रतिज्ञातां ब्रह्मप्राप्त्यसाधारणोपायभूतां

नैष्कर्म्य लक्षणवाला सिद्धि भगवान्को प्रेम लक्षणवाला भक्तिको प्राप्तिका अन्तरंग कारण हो, यस कुरालाई भन्नका लागि त्यसलाई प्राप्त गर्ने तरीका अब उपदेश गर्नुहुन्छ- हे अर्जुन! ज्ञाननिष्ठाको फलस्वरूप नैष्यकर्म्य लक्षणवाला सिद्धि र निरन्तर ध्यान लक्षणवाला पराभक्तिलाई जसरी प्राप्त गरेर मनुय ब्रह्मको लाभ गर्दछ, त्यो संक्षेपमा मबाट संझ। पूर्वोक्त सिद्धिलाई प्राप्त गरेर

पराभक्तिं विशिनष्टि–निष्ठा ज्ञानस्य या परेति। या ज्ञानोत्तर–भाविनी पराभक्तिः सा ज्ञानस्य परानिष्ठा उत्तमावस्थितिः फलमिति यावत् स्वरूपतो विषयतश्च निरतिशयत्वात् ज्ञान्यग्रेसराणां सनकादिप्रह्लादादीनाम्। तथोक्तं श्रीभागवते भगवता स्वयमेव। "एतावान्योग आदिष्टो मच्छिष्यैः सनकादिभिः। सर्वतो मन आकृष्य मय्यद्धावेश्यते यथे"ति। "या प्रीतिरविवेकानां विषयेष्वनपायिनी। त्वाम–नुस्मरतः सा मे हृदयान्नापसर्पतु" इति वैष्णवे प्रह्लादोक्तेश्च ॥५०॥

मनुष्य ब्रह्मलाई प्राप्त गर्दछ त्यसलाई बताउनका लागि ब्रह्मप्राप्तिको असाधारण उपायभूत पराभक्तिको वर्णन गर्नुहुन्छ। जुन ज्ञानको पश्चात हुन्छ त्यो पराभक्ति ज्ञानको परानिष्ठा हो, अर्थात् उत्तमस्थिति वा फल हो। यस निष्ठाको स्वरूप र विषय सर्वश्रेष्ठ छ र यो सनक, सनन्दन, प्रह्लाद आदि ज्ञानिहरूमा श्रेष्ठ पुरुषहरूलाई प्राप्त थियो। श्रीभगवतमा स्वयं भगवान्ले भन्नुभएको छ- 'एतावान्योग.......यथा' अर्थात् यो योग मेरो शिष्य सनकादिहरूले भनेका छन्। मनलाई सबै वस्तुहरूबाट तानेर ममा जसरी लगाईन्छ। फेरि विष्णुपुराणमा प्रह्लादले भनेका छन् 'या....सर्पतु' अर्थात् अविवेकिहरूलाई जस्तो प्रगाढ़ प्रीति विषयहरूमा हुन्छ त्यस्तै नै प्रीति हजुरलाई स्मरण गर्ने मेरो हृदयमा हजुरको प्रति सधैं बनिरहोस ॥५०॥

–★–★–★–

## बुद्ध्या विशुद्धया युक्तो धृत्यात्मानं नियम्य च।
## शब्दादीन्विषयांस्त्यक्त्वा रागद्वेषौ व्युदस्य च॥

**जो विशुद्ध सात्त्विकी बुद्धिले युक्त, धैर्यपूर्वक इन्द्रियहरूको नियमन गरेर, शब्दादि विषयलाई त्याग गरेर र राग–द्वेषलाई छोडेर ॥५१॥**

प्रतिज्ञातं प्राप्तिप्रकारमेवाह–बुद्ध्येत्यादिपञ्चभिः। विशुद्धया यथाऽवस्थितपरावरतत्त्वविषयासात्त्विक्या बुद्ध्या युक्तो धृत्या सात्त्विक्या आत्मानं मनो नियम्य अनात्मनः प्रत्या–हारेणात्मप्रवणीकृत्य च शब्दादीन् विषयांस्त्यक्त्वाऽसत्सं–सर्गं विहाय तद्विषयौ रागद्वेषौ च व्युदस्य तत्रेष्टानिष्टबुद्धि–मकृत्वेत्यर्थः। इत्यादीनां "ब्रह्मभूयाय कल्पते" इति तृतीय श्लोकेनान्वयः॥५१॥

ब्रह्मप्राप्तिका प्रकारलाई पाँच श्लोकहरूद्वारा वर्णन गर्नुहुन्छ- विशुद्ध अर्थात् यथार्थमा र अपर तत्त्वविषयक सात्त्विक बुद्धिले युक्त सात्त्विक धृति द्वारा मनलाई नियमन गरेर अर्थात् अनात्म वस्तुबाट हटाएर आत्मातिर लगाई, शब्दादि विषयहरूको संगत छोडेर र विषय सम्बन्धी रागद्वेषबाट मुक्त भएर अर्थात् विषयहरूमा इष्ट र अनिष्ट बुद्धि नराखेर ब्रह्मभावलाई प्राप्त गर्दछ। (यसको अन्वय त्रिपन्नौ श्लोकमा छ)॥५१॥

–★–★–★–

## विविक्तसेवी लघ्वाशी यतवाक्कायमानसः।
## ध्यानयोगपरो नित्यं वैराग्यं समुपाश्रितः॥

**वैराग्यको आश्रित भई, एकान्तको सेवन गर्नेवाला र नियमित (परिमित) भोजन गर्नेवाला साधक शरीर–वाणी–मनलाई वशमा गरेर, निरन्तर ध्यानयोगको परायण हुन्छ॥५२॥**

विविक्तसेवी एकान्तदेशसेवनशीलः लघ्वाशी शुद्धमितभोजी, यतवाक्कायमानसः वशीकृतशरीरेन्द्रियमनाः, ध्यानयोग–परोनित्यम्, अहरहः प्रतिसवनं ध्याननिरतः, तद्विरोधि–परिहाराय वैराग्यं समुपाश्रितः सम्यगुपाश्रितः सन्॥५२॥

एकान्तमा बस्ने, शुद्ध र थोरै खानेकुरा खाने, वचन, शरीर, इन्द्रिय र मनलाई वशमा राख्ने, सदा ध्यानमा निरत र ध्यानका विरोधी विषयहरूलाई हटाउनका लागि वैराग्यको पूर्णरीतिले आश्रय लिनेवाला(ब्रह्मलाई प्राप्त गर्दछ)॥५२॥

–★–★–★–

## अहङ्कारं बलं दर्पं कामं क्रोधं परिग्रहम्।
## विमुच्य निर्ममः शान्तो ब्रह्मभूयाय कल्पते॥

**त्यो अहंकार, बल, दर्प, काम, क्रोध र परिग्रहले रहित भएर एवं ममतारहित तथा शान्त भएर ब्रह्मप्राप्तिको पात्र हुनजान्छ॥५३॥**

अहङ्कारमिति। अहङ्कारमनात्मन्यात्माभिमानं, बलमनात्मवस्तुविषयं देहेन्द्रियसामर्थ्यं, तन्निमित्तं दर्पं गर्वं, कामं प्रारब्धवशाद्यदृच्छाप्राप्तेष्वपि विषयेषु स्वीकारेच्छा तत्प्रतिबन्धके क्रोधं, परिग्रहं वस्त्रान्नादेः सङ्ग्रहं विमुच्य विशेषेण त्यक्त्वा निर्ममःदेहसम्बन्धिषु ममताशून्यः।अत एव शान्तः सर्वविक्षेपवर्जितः। एवम्भूतो ध्याननिष्ठो ब्रह्मभूयाय कल्पते। ब्रह्मणो भावो ब्रह्मभूयं तस्मै ब्रह्मभूयाय ब्रह्मवद्दोषास्पृष्ट स्वभावतयाऽवस्थानाय कल्पते योग्यो भवति॥५३॥

अहंकार अर्थात् अनात्म वस्तुहरूमा आत्माको अभिमान गर्नु, बल अर्थात् अनात्मवस्तु विषयक देह र इन्द्रिय सामर्थ्य, दर्प अर्थात् देह आदि सामर्थ्य सम्बन्धी गर्व, काम अर्थात् प्रारब्धद्वारा स्वतः प्राप्त विषयमा स्वीकार गर्ने इच्छा, क्रोध अर्थात् काममा रोकावट हाल्नेहरूमा कोप, परिग्रह अर्थात् वस्त्र, अन्न आदिको संग्रह, यी सबैलाई विशेष गरेर छोडी, र देह सम्बन्धी ममताले शून्य, यसैले शान्त अर्थात् सर्व विक्षेपले रहित भई ध्याननिष्ठ मनुष्य ब्रह्मलाई प्राप्त गर्दछ॥५३॥

-★-★-★-

## ब्रह्मभूतः प्रसन्नात्मा न शोचति न काङ्क्षति।
## समः सर्वेषु भूतेषु मद्भक्तिं लभते पराम्॥

**त्यो ब्रह्मरूप बनेको प्रसन्न मनवाला साधक न त कसैको लागि शोक गर्दछ र न कसैको इच्छा नै गर्दछ यस्तो सम्पूर्ण प्राणिहरूमा समभाववाला साधक मेरो पराभक्तिलाई प्राप्त गर्दछ॥५४॥**

इदानीं यस्य ब्रह्मभावयोग्यतोक्ता तस्य ब्रह्मभावप्राप्तस्य लक्षणं तत्फलं चाह-ब्रह्मभूत इति। आविर्भूतानवच्छिन्नज्ञानधर्मात्मस्वरूपानुभूतिस्तत एव प्रसन्नात्मा बाह्यविषयनिरपेक्षप्रसादयुक्त आत्मा चित्तं यस्य स तथा तत्र लिङ्गं-न शोचति किञ्चिन्नष्टं वस्तु न शोचति। न वा अप्राप्तं किञ्चित् काङ्क्षति, आत्मानुभवसन्तुष्टतया समलोष्टाश्मकाञ्चनदृष्टिरित्यर्थः। अत एव सर्वेषु भूतेषु समः, स्वस्य स्तुतिपूजाकर्तृषु निन्दापकारकर्तृषु च मित्रारिभाववर्जितः। एवं ज्ञानसिद्धिं प्राप्तो मद्भक्तिं लभते परां मद्विषयां निरतिशयप्रीतिलक्षणां परामव्यभिचारिणीं मत्साक्षात्कारासाधारणभूतां भक्तिं लभते। पराभक्तिलाभ एव ज्ञानस्य परा निष्ठा फलमित्यर्थः। तथोक्तं श्रीभागवते। "आत्मारामाश्च-मुनयो निर्ग्रन्था अप्युरुक्रमे। कुर्वन्त्यहैतुकीं भक्तिमित्थम्भूतगुणो हरिः। सनन्दनादयो ये च ब्रह्मभावनया युता" इति विष्णुपुराणोक्तब्रह्मभावनावतां सनन्दनादीनामपि "हरिः शरणमित्येव नित्यं तेषां मुखे वच" इति भागवतमाहात्म्ये अहर्निशभगवत्स्मरणस्य पराभक्तिलक्षणस्य प्रतिपादनात्। एवं विशुद्धबुद्ध्यादियोगपूर्वकप्रशान्तस्य ब्रह्मभूतस्यापि पराभक्तिलाभकथनेनोक्तसाधनप्रक्रियां विना सर्वभूतस-

माथि जुन पुरुषको ब्रह्मभाव प्राप्तिको योग्यता वर्णन गरिएको छ त्यही ब्रह्मभाव प्राप्त पुरुषको लक्षण र ब्रह्मभाव प्राप्तिको फल अब भन्नुहुन्छ- ब्रह्मभावलाई प्राप्त पुरुषलाई अवच्छिन्न ज्ञानधर्मवाला आत्मस्वरूपको अनुभव भएको छ यसैले त्यो प्रसन्नात्मा हुन्छ अर्थात् त्यसको चित्तको प्रसन्नता बाहिरी संसारको अपेक्षा राख्दैन। यस्तो मनुष्यको पहिचान यो हो कि न त्यो कुनै नष्ट वस्तुका लागि चिन्ता वा शोक गर्दछ, न कुनै अप्राप्त वस्तुको आकांक्षा नै गर्दछ। भाव यो हो कि यस्तो पुरुष आफ्ना आत्मानुभवले सन्तुष्ट रहन्छ र यसैले माटो र सुन उसको दृष्टिमा बराबर हो। यसै कारण त्यो सबै जीवहरूमा समदृष्टि राख्दछ र त्यसको प्रशंसा गर्नेवालाहरूमा न त्यसलाई मित्रभाव हुन्छ, न निन्दा गर्नेवालाहरू सँग शत्रुता। यस्तो ज्ञानसिद्धि प्राप्त पुरुष निरतिशय प्रीति लक्षणवाला मेरो अव्यभिचारिणी(एकान्तिक र अनन्य) पराभक्तिलाई प्राप्त गर्दछ, जुन मेरो साक्षात्कारको असाधारण कारण हो। भाव यो हो कि पराभक्तिको प्राप्ति नै ज्ञानको अन्तिम फल हो। श्रीभागवतमा लेखिएको छ- 'आत्मारामाश्च.......युताः' अर्थात् आत्मानभववाला, सनन्दनादि मुनि जुन बन्धनले हीन र ब्रह्मभावनाले युक्त छन् ती पनि श्रीविष्णु भगवान्मा अहैतुकी भक्ति गर्दछन् किनकी हरि नै यस्तो गुणवाला हुनुहुन्छ र 'हरि शरणं' यो वाक्य सदा उहाँहरूका मुखमा हुन्छ। भागवत् माहात्म्यमा अहर्निश भगवान्को स्मरण गर्नु नै पराभक्तिको लक्षण भनिएको छ। यस प्रकार विशुद्ध बुद्धियोगले युक्त प्रशान्त चित्त, ब्रह्मभावलाई प्राप्त पुरुषलाई पराभक्ति प्राप्त हुन्छ। यसलाई भनेर यो थाहा भयो कि माथि भनिएको साधन प्रक्रियाको बिना

मत्वलक्षणब्रह्मभावयोग्यता न भवति। उक्तब्रह्मभावं विना पराभक्तिर्न लभ्यत, तस्मात् पराभक्तेः क्षेत्रज्ञस्वरूपयाथात्म्यज्ञानोत्तरभावित्वं निश्चीयते ॥५४॥

सर्वभूतहरूमा समता लक्षणवाला ब्रह्मभावको योग्यता प्राप्त हुँदैन। र यस ब्रह्मभावको बिना पराभक्ति प्राप्त हुँदैन। यसैले यो निश्चय भयो कि क्षेत्रज्ञ अर्थात् जीवात्मा को यथार्थ ज्ञानको पछि मात्र पराभक्ति हुन्छ॥५४॥

-★-★-★-

## भक्त्या मामभिजानाति यावान्यश्चास्मि तत्त्वतः।
## ततो मां तत्त्वतो ज्ञात्वा विशते तदनन्तरम्॥

**त्यस पराभक्तिले मलाई, म जति छु र जो छु- यसलाई तत्त्वबाट जानेर तत्काल ममा प्रविष्ट हुन्छ॥५५॥**

ततश्च "भक्तिरेवैनं वर्द्धयति भक्तिरेवैनं दर्शयति, भक्तिवशः पुरुषो भक्तिरेव भूयसी"ति श्रुत्युक्तं भक्तेर्भगवद्दर्शनसाधारणकारणत्वं तद्वशीकरणत्वं चाह-भक्त्येति। ततस्तया भक्त्या यावान् यादृग्गुणशक्तिविभूतिमानहं यश्च सच्चिदानन्दविग्रहः सर्वज्ञः सर्वकारणं सर्वान्तर्यामी देशकालवस्तुपरिच्छेदशून्यः सर्वव्यापकोऽपि सर्वदोषास्पृष्टः सकलचेतनाचेतनभिन्नाभिन्नस्वभावस्तं मां तत्त्वतः संशयविपर्ययराहित्येनाभिजानाति, साक्षादनुभवति। ततो मां तत्त्वतो ज्ञात्वा तदनन्तरं मयि विशते निरतिशयानन्दं मामनुभवन्निरतिशयानुरागेण सर्वदा मां परिचरन्नाभिनिविष्टो मयि वर्त्तते, कदाचिन्मद्दृष्ट्यगोचरो न भवति। तद्भक्त्या वशीभूतोऽहमपि कदा चित्तद्दृष्ट्यगोचरो न भवामीत्यर्थः। "यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति। तस्याहं न प्रणश्यामि स च न प्रणश्यती"त्युक्तरीत्या सर्वदा मद्दर्शनपरिचर्यया मदविनाभावेन मय्येव वर्त्तते। न च मत्तः कदाचिद्वियुज्यते इति भावः॥५५॥

श्रुति मा भनेको छ- 'भक्ति......भूयसी' अर्थात् भक्ति यसलाई बढाउँदछ, भक्ति कै द्वारा यसलाई देखिन्छ, पुरुष (परमात्मा) भक्तिको वशमा छन्, अतः भक्ति नै श्रेष्ठ हो। श्रुतिद्वारा वर्णित भगवान् भक्तिको वशमा हुनु र भक्ति नै उहाँको दर्शनको असाधारण कारण भएको कुरा यस श्लोकमा वर्णन गर्नुहुन्छ-
जस्तो म छु अर्थात् जस्तो गुण, शक्ति, विभूतिले युक्त म छु र जो म छु यथा सत् चित् आनन्द विग्रहवाला, सर्वज्ञ, सबैका कारण, सबैका अन्तर्यामी, देश काल र वस्तु तीनै प्रकारका पचिच्छेदले शून्य, सर्वव्यापक भएर पनि सबै दोषहरूले रहित र सकमल चेतन र अचेतन भन्दा भिन्न हुँदा हुँदै पनि अभिन्न स्वभाववाला, त्यसको यथार्थ (संशयविपर्ययले हीन) ज्ञान भक्तिद्वारा हुन्छ अर्थात् भक्तिद्वारा पुरुष, मेरो साक्षात् अनुभव गर्दछ।तब त्यो मलाई यथार्थ रूपले जानेर म मा प्रवेश गर्दछ। भाव यो हो कि निरतिशय आनन्दस्वरूप मेरो अनुभव गर्दछ र सदा निरतशय अनुराग पूर्वक मेरो सेवा गर्दै ममानै रहन्छ, कहिल्यै पनि मेरो दृष्टिबाट अगोचर हुँदैन। भाव यो हो कि त्यसको भक्तिको वशीभूत भएर म कहिल्यै पनि त्यसको आँखाबाट ओझेल हुँदिन, जस्तो पछाडि भनिसकिएको छ- 'यो मां....प्रणश्यति' यस रीतिले सदा मेरो दर्शन र सेवा गर्दै यस्तो पुरुष ममा नै रहन्छ, त्यसको मसँग कहिल्यै पनि वियोग हुँदैन॥५५॥

-★-★-★-

## सर्वकर्माण्यपि सदा कुर्वाणो मद्व्यपाश्रयः।
## मत्प्रसादादवाप्नोति शाश्वतं पदमव्ययम्॥

**मेरो आश्रय लिने भक्त सधैं सबै कर्म गर्दै रहेर पनि मेरो कृपाले शाश्वत अविनाशी पदलाई प्राप्त प्राप्त हुन्छ॥५६॥**

एवं वर्णाश्रमोचितनियतकर्मणां फलकर्त्तृत्वाभिसन्धानरहितानां नैष्कर्म्यसिद्धिप्राप्तिद्वारेण भगवत्प्राप्तिफलकत्वमुक्तमिदानीं नैष्कर्म्यसिद्ध्यभावे कर्मकर्त्तुः किं फलं स्यादित्यपेक्षायामाह-सर्वकर्माणीति। सर्वकर्माणि वैदिकलौकिकानि विधिहीनान्यपि सदा कुर्वाणोऽनुतिष्ठन् मद्व्यपाश्रयः अहं सर्वेश्वर एव व्यपाश्रयः समाश्रयणीयो न त्वन्यो

आफ्नो वर्णाश्रमोचित नियत कर्महरूलाई, तिनीहरूका फल र कर्त्तापनको अभिमानलाई छोडेर गरेको फल नैष्कर्म्य सिद्धि प्राप्ति द्वारा भगवत्प्राप्ति हो, यो भन्नुभयो। अब जसलाई नैष्कर्म्य सिद्धिको प्राप्ति भएन यस्तो कर्म गर्नेवाला लाई के फल हुन्छ यसलाई यहाँ भन्नुहुन्छ- सबै कर्महरू अर्थात् वैदिक, लौकिक र विधिहीन कर्महरूलाई सधैं गर्दै रहेर पुरुष मेरो आश्रयमा भई, अर्थात् यो जानेर कि सर्वेश्वर भगवान् नै आश्रयणीय हुन्, दोस्रो

देव: फलं वा यस्य स, मत्प्रसादात् शाश्वतमनादिमव्ययं परिणामशून्यं नित्यं पदं मद्धाम प्राप्नोति ॥५६ ॥

कुनै देवता वा फल होईन, मेरो प्रसादले अनादि, परिणाम शून्य र नित्य पदलाई अर्थात् मेरो धाम (विष्णुपद) लाई प्राप्त गर्दछ ॥५६ ॥

–★–★–★–

**चेतसा सर्वकर्माणि मयि सन्न्यस्य मत्पर:।**
**बुद्धियोगमुपाश्रित्य मच्चित्त: सततं भव ॥**

**हृदय देखि नै सम्पूर्ण कर्म मलाई अर्पण गरेर मेरो परायण भई तथा समताको आश्रय लिएर निरन्तर मैतिर चित्त लगाउने होऊ ॥५७॥**

तस्मात्पूर्वोक्तप्रकारेण वैराग्यादि कर्त्तुं न शक्नोषि चेत्त्वमप्येवं कुर्वित्याह–चेतसेति । चेतसा मत्तन्त्रकर्त्तृत्वविचारेण सर्वाणि कर्माणि लौकिकानि वैदिकानि स्वभावप्राप्तानि च फलकर्त्तृत्वोद्देश्यदेवतासहितानि मयि संन्यस्य सम्यगर्प्य मत्पर: अहमेव पर: प्राप्य: प्रापकश्च यस्य स:, बुद्धियोगं व्यवसायात्मिकबुद्ध्या सर्वसम्बन्धमुपाश्रित्य सर्वात्मना मामेव सर्वश्रेयोहेतुं श्रेयोरूपं च निश्चित्य सततं मच्चितो भव इत्येवमनुसन्धानं कुरुष्वेत्यर्थ: ॥५७ ॥

यदि तिमी पूर्वोक्त रीतिले वैराग्यादि गर्न सक्दैनौ भने तिमी यस प्रकारले गर। अब विधिलाई भन्नुहुन्छ–
सबै कर्त्तृत्व मेरो (भगवान्)को अधीन छ, यस विचार द्वारा सबै लौकिक वैदिक र स्वभावप्राप्त कर्महरूलाई, उनीहरूका फल, कर्त्तापना, उद्देश्य र देउताको सहित ममा सम्पूर्णरूपले अर्पण गरेर मलाई नै प्राप्य र प्राप्त गराउनेवाला संझ। व्यवसायात्मिका (निश्चित) बुद्धि द्वारा मसँग सबै सम्बन्धहरूको आश्रय गरेर अर्थात् सम्पूर्ण तरिकाले मलाई नै सबै कल्याणको कारण र श्रेयको रूप निश्चय गरेर सर्वदा मतिर नै चित्त लगाउ अर्थात् मेरो यसै प्रकार सर्वसम्बन्ध पूर्वक अनुसन्धान गर ॥५७॥

–★–★–★–

**मच्चित्त: सर्वदुर्गाणि मत्प्रसादात्तरिष्यसि।**
**अथ चेत्त्वमहङ्कारान्न श्रोष्यसि विनङ्क्ष्यसि ॥**

**मलाई चित्त दिनेवाला भएर तिमी मेरो कृपाले सम्पूर्ण विघ्नहरूलाई तर्नेछौ तर यदि तिमी अहंकारको कारण मेरो कुरालाई सुन्दैनौ भने तिम्रो पतन हुनेछ ॥५८ ॥**

एवं मदुक्तार्थे विश्वतो यत् प्राप्स्यसि तच्छृणु–मच्चित्त इति। उक्तप्रकारेण मच्चित्त: सन् सर्वकर्माणि कुर्वन्नपि सर्वाणि दुर्गाणि दुस्तराणि सांसारिकाणि दु:खानि मत्प्रसादादेव तरिष्यसि। विपक्षे दोषमाह–अथ चेदिति। यदि पुनस्त्वमहङ्कारादहमेव कर्त्तव्याकर्त्तव्यं सर्वं जानामीत्यभिमानान्मदुक्तमेव तन्न श्रोष्यसि पुरुषार्थाद्भ्रश्यसे। यत: सर्वस्य हिताहितज्ञाता प्रशास्ता च मदन्य: कश्चिन्न विद्यते ॥५८ ॥

मैले भनेका कुराहरूमा विश्वास गर्नाले जो प्राप्त गर्ने छौ त्यसलाई सुन। उक्त प्रकारले ममा चित्त लगाएर सबै कर्महरूलाई गर्दै रहेर पनि मेरो प्रसादले सबै दुस्तर सांसारिक दु:खहरूलाई पार गर्नेछौ। यस प्रकार मैले भनेको नगर्नाले जुन दोष हुन्छ त्यसलाई अब भन्नुहुन्छ–यदि तिमी अहंकारले अर्थात् यो संझेर कि म स्वयं नै कर्त्तव्य र अकर्त्तव्यलाई जान्दछु, मैले भनेको सुन्दैनौ भने नाश हुनेछौ अर्थात् पुरुषार्थ (आफ्नो कल्याणको मार्ग) बाट भ्रष्ट हुनेछौ, किनकी सबैको हित र अहितलाई जान्नेवाला र सबैको शासन गर्नेवाला म भन्दा अतिरिक्त अर्को कोही छैन ॥५८ ॥

–★–★–★–

**यदहङ्कारमाश्रित्य न योत्स्य इति मन्यसे ।**
**मिथ्यैष व्यवसायस्ते प्रकृतिस्त्वां नियोक्ष्यति ॥**

**अहंकारको आश्रय लिएर तिमी जुन यस्तो मानिरहेका छौ कि म युद्ध गर्दिनँ, तिम्रो यो निश्चय झुटो हो; किनकी तिम्रो क्षात्र-प्रकृति तिमीलाई युद्धमा लगाईदिनेछ ॥५९ ॥**

किञ्चाहं स्वतन्त्रो बन्धुवधार्थं त्वन्नियोगं कथं करिष्यामीति

र अरु पनि, तिमीले यस्तो संझिनु हुँदैन कि म स्वतन्त्र छु बन्धुब-

त्वया न मन्तव्यमित्याह–यदिति। यद्यहङ्कारमात्मनि स्वातन्त्र्याभिमानमाश्रित्य मदुक्तमनादृत्य न योत्स्ये युद्धं न करिष्यामीति मन्यसे व्यवस्यसे तर्ह्येष ते व्यवसायो मिथ्यैव स्यात्। यतः प्रकृतिस्त्वां नियोक्ष्यति प्रकृतिस्त्रिगुणमयी मन्नियम्या रजोगुणरूपेण परिणता सती रजःप्रधानक्षत्रियजातावुद्भवं त्वां युद्धे प्रवर्त्तयिष्यत्येवेत्यर्थः ॥५९ ॥

**धार्थ हजुरको आज्ञाको पालन कसरी गर्नु यसैलाई भन्नुहुन्छ–जुन अहंकार अर्थात् आफ्नो स्वतन्त्रताको अभिमानको आश्रय गरेर मैले भनेका कुराहरूलाई अनादर गरेर 'म युद्ध गर्दिन' यस्तो यदि निश्चय गर्दछौ भने त यो तिम्रो व्यवसाय अर्थात् विचार झुटो हुनेछ, किनकी मद्वारा नियम्य मेरो त्रिगुणमयी माया रजोगुणरूपमा परिणत भएर रजः प्रधान क्षत्रिय जातिमा उत्पन्न भएको तिमीलाई युद्धमा अवश्य प्रवृत्त गर्नेछ ॥५९ ॥**

–★–★–★–

## स्वभावजेन कौन्तेय निबद्धः स्वेन कर्मणा।
## कर्तुं नेच्छसि यन्मोहात्करिष्यस्यवशोऽपि तत् ॥

**हे कौन्तेय! आफ्नो स्वभावजन्य कर्मले बाँधिएको तिमी मोहको कारण जुन युद्धलाई गर्न चाहँदैनौ, त्यसलाई पनि तिमी (क्षात्र प्रकृतिको) परवश भएर गर्नेछौ ॥६० ॥**

तदेवोपपादयति स्वभावजेनेति। हे कौन्तेय! यत्स्वधर्मभूतं युद्धाख्यं नियतं कर्म मोहात्कर्त्तुं नेच्छसि–तत्स्वभावजेन स्वभावः पूर्वकर्मनिबन्धनसत्त्वादिगुणवृत्तिरूपस्तस्मात् जातेन राजसेन क्षत्रियत्व प्रयोजकेन पूर्वोक्तेन शौर्याख्येन स्वेनकर्मणा निबद्धो यन्त्रितः अवशोऽपि शत्रूणामवाच्य–वादानसहमानस्त्वं स्वयमेव करिष्यसि ॥६० ॥

**जो माथि भनेर आउनु भएको छ त्यसैको समर्थन गर्नुहुन्छ। हे अर्जुन! जुन स्वधर्मभूत युद्धरूप आफ्नो निश्चित कर्मलाई तिमी मोहले गर्न चाहन्नौ, त्यसलाई पूर्व कर्मानुसार सत्त्वादिगुण वृत्तिरूप स्वभावले उत्पन्न राजस, क्षत्रियत्वको प्रयोजक, पूर्वमा भनिएका शौर्यरूप आफ्नो कर्ममा बाँधिएर विवश भई अर्थात् शत्रुहरूको गाली सहनमा अयोग्य भएर, स्वयं नै गर्नेछौ ॥६० ॥**

–★–★–★–

## ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति।
## भ्रामयन्सर्वभूतानि यन्त्रारूढानि मायया ॥

**हे अर्जुन! ईश्वर सम्पूर्ण प्राणिहरूका हृदयमा बस्दछ र आफ्नो मायाले शरीररूपी यन्त्रमा आरूढ़ भएका सम्पूर्ण प्राणिहरूलाई उनीहरूका स्वभाव अनुसार घुमाईरहन्छ ॥६१ ॥**

तदेवं साङ्ख्यमतानुकुलं प्रकृतिपारतन्त्र्यं स्वभावाधीनं च कर्मकर्त्तृत्वमुक्तमिदानीम् "अन्तः प्रविष्टः शास्ता जनानां सर्वात्मा य आत्मनि तिष्ठन्नात्मानमन्तरो यमयति यमात्मा न वेद यस्यात्मा शरीरम् एष ते आत्माऽन्तर्याम्यमृतः, एतदक्षरस्य प्रशासने गार्गि! सूर्याचन्द्रमसौ विधृतौ तिष्ठतः" इत्यादिश्रुतिनिर्णीतं सर्वस्य प्राणिनः परमेश्वराधीनत्वमाह– ईश्वर इति। ईश्वरः सर्वचेतनाचेतननियमनशीलो भगवान् वासुदेवः सर्वभूतानां हृद्देशे हे अर्जुन! तिष्ठति। किं कुर्वन्? सर्वभूतानि मायया निजशक्त्या भ्रामयन् तत्तदनादिबीजभूत–कर्मानुसारेण शुभाशुभकर्मसु प्रवर्त्तयन्। कथं भूतानि यन्त्रारूढानि प्रकृतिपरिणामदेहेन्द्रियरूपं यन्त्रमारूढान्यारो–

**कर्मको कर्त्तापन प्रकृति परतन्त्र भएकोले स्वभावको अधीन हुनु सांख्य मतको रीतिले भनेर श्रुति निर्णीत सबै प्राणिहरू परमेश्वरको अधीन हुने कुरा अब भन्नुहुन्छ। जुन श्रुतिहरू जीवलाई सदा परमेश्वराधीन भन्दछन् तिनीहरूमा केहि यी हुन्, यथा– 'अन्तः .......तिष्ठत' (यसको अर्थ पहिले नै लेखिसकिएको छ)। हे अर्जुन सबै चेतन र अचेतनलाई नियमन गर्नेवाला भगवान् वासुदेव सबै भूतहरूका हृदयमा बस्नुहुन्छ। हृदयमा बसेर के गर्नुहुन्छ? यस प्रश्नको उत्तरमा भगवान् भन्नुहुन्छ कि सबै जीवहरूलाई आफ्नो माया अर्थात् शक्तिले घुमाउँदै अर्थात् ती ती जीवहरूका अनादि बीजरूप कर्मका अनुसार शुभ र अशुभ कर्महरूलाई तिनीहरूबाट गराउँदै उनीहरूका हृदयमा स्थिर भएर बस्नुहुन्छ। कुन तरीकाले जीवहरूलाई घुमाउनु हुन्छ? जस्तो जादुगर काठले बनेको यन्त्रमा चढ़ाएर डोरीमा बाँधिएको नक्कली पंक्षी, मृग आदि जीवहरूलाई मनुष्यको सामुन्ने नचाउँदछ, त्यसै**

पितानि यथा दारुमययन्त्रमारूढानि कृत्रिमाणि पक्षिमृगा–दिभूतानि सूत्रबद्धानि सूत्रधारो लोके भ्रामयति तद्वदित्यर्थः ॥६१ ॥

प्रकार प्रकृतिको परिणामस्वरूप देह इन्द्रियरूप यन्त्रमा चढ़ाएर भगवान् वासुदेव चर-अचर जीवहरूलाई घुमाउनु हुन्छ ॥६० ॥

–★–★–★–

## तमेव शरणं गच्छ सर्वभावेन भारत।
## तत्प्रसादात्परां शान्तिं स्थानं प्राप्स्यसि शाश्वतम् ॥

**हे भारत! तिमी सर्वभावले त्यस ईश्वरको शरणमा जाऊ। त्यसको कृपाले तिमी परम शान्ति( संसारबाट सर्वथा उपरति) लाई र अविनाशी परमपदलाई प्राप्त हुनेछौ ॥६२ ॥**

नन्वेवं चेत्तर्हि मायायास्तत्प्रयोजकस्य च नित्यत्वात्कस्यापि कदाऽपि संसारनिवृत्तिर्न स्यात्कथं मोक्षाशेति चेत्तत्राह तमेवेति। सर्वभूतानां भ्रामको मायाया अपि नियन्ता वात्सल्यकारुण्यसौहार्दादिगुणपारवश्येन त्वत्सारथ्यमङ्गी–कृत्य त्वद्धितं चिकीर्षुस्त्वत्प्रशासिता तमेव सर्वभावेन सर्वात्मना शरणं गच्छ, तदुक्तं सर्वं निर्मायिकत्वेन कुरुष्व। हे भारतेति सम्बोधनेन भरतवंश्येन त्वया सर्वशत्रुनिग्रहेण स्वकीर्त्तिख्यापनमुचितमिति सूचितम् । तस्मान्मदुक्त–प्रकारेण युद्धाख्यं स्वधर्मं कुर्वन् तत्प्रसादात्तस्य ममानुग्रहात् परां शान्तिं निःशेषाऽविद्यानिवृत्तिपूर्वकपरमानन्दरूपां भगवद्भावापत्तिं शाश्वतं प्रकृतिकालकर्मसम्बन्धशून्यं नित्यैकरसं स्थानं परमपदविष्णुपदादिशब्दाभिधेयं धाम प्राप्स्यसि ॥६२ ॥

यदि यो कुरा हो कि माया र त्यसको प्रेरक भगवान् नित्य हुन् भने त कसैको कहिल्यै पनि संसारबाट निवृत्ति हुन सक्दैन यसैले मोक्षको आशा कोही गर्न सक्दैन। यस शंकाको उत्तर भगवान् यस श्लोकमा दिनुहुन्छ। सबै जीवहरूलाई नचाउने र मायालाई पनि नियमन गर्ने म (भगवान् वासुदेव) आफ्नो वत्सलता, करुणा, सौहार्द आदि गुणहरूका वशमा भएर तिम्रो सारथीपना अंगीकार गरेर तिम्रो हितको इच्छाले तिम्रो प्रशासन गरिरहेको छु तिमी सबै तरह ले अर्थात् सबै भावले मेरो शरणमा आउ जो म भन्दछु त्यसलाई नाईं-नास्ति नगरीकन मायारहित भाएर गर, हे भारत! अर्जुनलाई भारत सम्बोधन गरेर यो सूचित गर्नुभयो कि तिमी भरतको वंशज हौ र यसैले सबै शत्रुहरूलाई हराएर आफ्नो कीर्त्तिलाई स्थापना गर्नु तिम्रो लागि उचित नै हो। यस प्रकार भनिएको रीतिले युद्धरूप आफ्नो धर्म गर्दै मेरो कृपाले श्रेष्ठ शान्तिलाई अर्थात् समस्त अविद्यानिवृत्ति पूर्वक परमानन्दरूप मेरो (भगवत्) भावको प्राप्ति र शाश्वत् अर्थात् प्रकृति, काल र कर्मको सम्बन्धले शून्य, नित्य एकरस स्थान जसलाई परमपद विष्णुधाम आदि नामले पुकारिन्छ, प्राप्त गर्नेछौ ॥६२ ॥

–★–★–★–

## इति ते ज्ञानमाख्यातं गुह्याद्गुह्यतरं मया।
## विमृश्यैतदशेषेण यथेच्छसि तथा कुरु ॥

**यो गुप्त भन्दा गुप्त(शरणागतिरूप)ज्ञान मैले तिमीलाई दिए। अब तिमी यसमा राम्रो सँग विचार गरेर जस्तो चाहन्छौ त्यस्तै गर ॥६३ ॥**

इदानीं प्रसादं दर्शयितुमुपदेशमुपसंहरन्नुपदिष्टार्थं स्तौति इतीति। इत्येवमुक्तप्रकारेण ते तुभ्यं हितैषिणा परमकारुणिकेन मया मुमुक्षूपादेयं ज्ञानमाख्यातमुपदिष्टम्। कथम्भूतं? गुह्याद्गुह्यतरं कर्मज्ञानभक्तियोगविषयमतिरहस्यमेतन्मदु–पदिष्टं गीताशास्त्रमशेषेण विमृश्य पर्यालोच्य तदनन्तरं स्वाधिकारानुरूपं यथेच्छसि तथा कुरु। कर्मज्ञानभक्तिषु यदेकं हिततरं मन्यसे तदेवानुतिष्ठेत्यर्थः ॥६३ ॥

अब आफ्नो प्रसन्नता देखाउनका लागि उपदेशको संहार गर्दै उपदेशमा भनिएका कुराहरूको स्तुति गर्नुहुन्छ–
यस प्रकार तिम्रो हितैषी, परम कारुणिक मैले मुमुक्षुहरूले ग्रहण गर्नयोग्य ज्ञानको उपदेश तिमीलाई गरे। कर्म ज्ञान र भक्ति विषयक यो उपदिष्ट ज्ञान गोपनीय वस्तुहरूमा पनि गोपनीय अर्थात् धेरै गोपनीय छ। यस समग्र गीताशास्त्रलाई राम्रो सँग विचार गरेर आफ्नो अधिकारको अनुसार तिम्रो जस्तो ईच्छा छ त्यस्तै गर। भाव यो हो कि कर्म, ज्ञान, र भक्तिमा जसलाई सबैभन्दा हितकर संझन्छौ त्यसको अनुष्ठान गर ॥६३ ॥

–★–★–★–

## सर्वगुह्यतमं भूयः शृणु मे परमं वचः।

## इष्टोऽसि मे दृढमिति ततो वक्ष्यामि ते हितम्॥

**सबैभन्दा अत्यन्त गोपनीय सर्वोत्कृष्ट वचनलाई तिमी फेरि पनि सुन। तिमी मेरो अत्यन्त प्रिय मित्र हौ, यसैले यो विशेष हितको कुरा म तिमीसँग भन्दैछु॥६४॥**

अतिगम्भीरस्य गीताशास्त्रस्याशेषेण विमर्शनक्लेशपरिहाराय स्वयमेव कृपया तत्सारं संगृह्य ग्राहयितुं दृढीकरोति–सर्वगुह्यतममिति। पूर्वं गुह्यतरमुक्तमिदानीं तस्मादन्येभ्योऽपि गुह्यतरेभ्यो गुह्यतममतिरहस्यं परमं प्रकृष्टं मे वचः भूयस्तत्र तत्रोक्तमपि त्वदनुग्रहार्थं पुनर्वक्ष्यमाणं शृणु। नन्वतिरहस्यं कुतः कथयसि। तत्राह–यतस्त्वं मे ममेष्टः प्रियोऽसि दृढमतिर्विश्वासयुक्तस्ततस्ते हितं वक्ष्यामि॥६४॥

अति गम्भीर गीताशास्त्रको पूरै आलोचना गर्ने क्लेशबाट मुक्त गर्नको लागि भगवान् स्वयं नै कृपा गरेर गीताको सारलाई जम्मा गरेर अर्जुनलाई त्यो ग्रहण गराउनका लागि दृढ गर्नुहुन्छ। पूर्वमा भनिएको सबै गोपनीय विषयहरूमा पनि अति रहस्य मेरो प्रकृष्ट वचनलाई फेरि पनि सुन। अर्थात् यो कुरा पहिले भनिसकिएको छ कि तर फेरि पनि तिमी माथि कृपा गरेर त्यसलाई दोहोर्‍याउँदै छु। यति गोपनीय रहस्यलाई हजुर किन प्रकट गर्नुहुन्छ? भगवान् यस प्रश्नको उत्तर दिनुहुन्छ– कि तिमी मेरो प्रिय छौ र तिम्रो मति दृढ छ अर्थात् तिमी म माथि दृढ विश्वास राख्दछौ यसैले तिम्रो हितको कुराहरूलाई म भन्दछु॥६४॥

–★–★–★–

## मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु।
## मामेवैष्यसि सत्यं ते प्रतिजाने प्रियोऽसि मे॥

**तिमी मेरो भक्त बन, ममा मन लगाउने गर, मेरो पूजन गर्नेवाला होऊ, मलाई नमस्कार गर। यस्तो गर्नाले तिमी मलाई नै प्राप्त हुनेछौ (–यो म तिम्रो) सामुन्ने सत्य प्रतिज्ञा गर्दछु किनकी तिमी मेरो अत्यन्त प्रिय छौ॥६५॥**

तदेवाह–मन्मना भवेति। मयि भगवति पुरुषोत्तमे चेतसः शुभाश्रये मनो यस्य स मन्मनास्तया भव, पराभक्तिलक्षणं सर्वदा मद्ध्यानं कुर्वित्यर्थः। तत्साधनमाह–मद्भक्तो भवेति। मद्भक्तिं कुर्वित्यर्थः। सा च भगवदर्था क्रियैव। "सुरर्षे! विहिता शास्त्रे हरिमुद्दिश्य या क्रिया। सैव भक्तिरिति प्रोक्ता यया भक्तिः परा भवेदि"ति वचनात्। तामेवोपदिशति–मद्याजीति। द्रव्ययज्ञास्तपोयज्ञा इत्यादिनोक्तैः पञ्चयज्ञैः अभिगमनोपादानेज्यास्वाध्याययोगैः पञ्चकालोक्तमद्भजनैर्वा मत्पूजनशीलो भवेत्यर्थः। तत्र द्रव्ययज्ञो विभवे सति सर्वसमृद्धिमदुपचारैर्मदाराधनं, निष्किञ्चनानां यथाशक्ति पत्रपुष्पफलादिभिर्यथोपलब्धैरतिप्रीत्या भगवदाराधनं, तपोयज्ञश्च स्वधर्मक्षुत्पिपासाशीतोष्णदिसहनं, योगयज्ञश्च यमनियमासनादिनियमपूर्वकसगर्भप्राणायामैश्चेतसो जयाभ्यासः, स्वाध्याययज्ञश्च यथाधिकारमुपनिषद्गीतासहस्त्रनामादिस्तवपाठरूपः, ज्ञानयज्ञश्च श्रुताधीतोपनिषद्गीताद्यर्थस्य मननकथनरूपः। अथ कृतस्य

माथि भनिएको हितकारी कुराहरूलाई भन्नुहुन्छ। स्वभावले नै शुभ आश्रय म (पुरुषोत्तम भगवान्) मा मनलाई लगाउ अर्थात् मेरो सदा ध्यान गर, जुन पराभक्तिको लक्षण हो। अब ध्यानको साधकहरूलाई भन्नुहुन्छ कि मेरो भक्त बन अर्थात् मेरो भक्ति गर। भगवान्को लागि जुन क्रिया गरिन्छ त्यही भक्ति हो। नारद पांचरात्रको वचन छ– 'सुरर्षे! विहिता....परा भवेत्' अर्थात् हे नारद! हरिका लागि जुन क्रिया गर्नु भन्ने कुरा शास्त्रहरूमा भनिएको छ, त्यही भक्ति भनिन्छ। त्यसैलाई गर्नाले पराभक्ति हुन्छ। अब त्यही भक्तिको उपदेश गर्नुहुन्छ। मेरो यजन वा पूजा गर, 'द्रव्ययज्ञास्तपोयज्ञा' इत्यदि द्वारा भनिएका पंच यज्ञहरूले अर्थात् नारदपंचरात्रोक्त वैष्णव विधि अनुसार 'मन्दिरमा वा आचार्य भएर ठाउँ जानु' 'पुजाको सामाग्री जम्मा गर्नु' 'पूजा गर्नु' 'वेदान्त आदिलाई गुरुमुख भएर पढ्नु सुन्नु' र 'चित्तवृत्ति निरोधपूर्वक भगवान्को दिव्य विग्रहको ध्यान गर्नु' यी पंचकालोक्त भजन द्वारा मेरो सेवा गर। यिनीहरूमा द्रव्ययज्ञ अर्थात् सर्व समृद्धिले युक्त बहुमुल्य उपचारहरूद्वारा मेरो पूजा धनीहरूका लागि हो। गरीब मनुष्य यथा शक्ति प्राप्त फूल, पान, फल आदि ले नै बडो प्रीति पूर्वक मेरो पूजा गर्नु। आफ्नो धर्मको अनुसार भोक, प्यास, जाडो, गर्मी आदि सहनु तप यज्ञ भनिन्छ। योग यज्ञ त्यो हो जसमा यम, नियम, आसन आदि नियमपूर्वक संगोपांग प्राणायाम द्वारा मन इन्द्रिय आदि माथि जय पाउने अभ्यास गरिन्छ।

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज–२, सर्लाही, नेपाल

यजनस्य वैगुण्यपरिहारार्थमाह–मां नमस्कुरु। मां सर्वेश्वरं सर्वशक्तिं वात्सल्यकारुण्यादिगुणार्णवं नियमेन नित्यमष्टाङ्गैः प्रणमेत्यर्थः। एतत्साधनभक्तेः फलमुक्तं विष्णुधर्मे "अश्वमेधसहस्राणां सहस्रं यः समाचरेत्। नासौ तत्फलमाप्नोति मद्भक्त्या यदवाप्नुयादि"ति। एवं पञ्चविधमदाराधनेन निरन्तरध्याननिष्ठो भूत्वा मत्साक्षात्कारेण ब्रह्मरुद्रादिभिर्दुराराध्यं परमप्राप्यं परमानन्दघनं मामेवैष्यसि प्राप्स्यसि एतत्सत्यं न प्रलम्भनमिति ते तुभ्यं प्रतिजाने प्रतिज्ञां करोमि। यतस्त्वं मे प्रियोऽसि प्रियस्य प्रलम्भनमनुचितमिति भावः। अत एव महाभारते ध्यानस्यैव परमश्रेयोहेतुत्वं श्रीव्यासेन निर्णीतम् "आलोड्य सर्वशास्त्राणि विचार्य च पुनः पुनः। इदमेकं सुनिष्पन्नं ध्येयो नारायणः सदे"ति। मोक्षधर्मे मेधाविनाऽपि तथैव निश्चितं "सोऽहं त्वहिंस्रः सत्यात्मा कामक्रोधविवर्जितः। जितेन्द्रियः शमी भूत्वा मृत्युं जेष्याम्यमर्त्त्यवत्। अन्तर्बहिश्च यत् किञ्चिन्मनोव्यासङ्गकारणम्। तत्सर्वं सम्परित्यज्य ध्यानेऽभ्यस्येन्मनः सदा। मनसश्चेन्द्रियाणां च कृत्वैकाग्रं समाधितः। तावत्स्थास्यामि नियतो यावत्सङ्क्षयमागतम्। विमुक्तविषयासङ्गं सन्निरुध्य मनो हृदि। यदा यात्युन्मनीभावं तदा निर्वाणमृच्छतिं कामक्रोधभयेनेह तमसाऽऽवृतचेतसः। पिशुनाश्च कृतघ्नाश्च नास्तिका भिन्नवृत्तयः। एतन्मूढा न पश्यन्ति मोक्षद्वारमपावृतम्। अश्वमेधसहस्राणि वाजपेयशतानि चं ध्यानयोगस्य माहात्म्यं कलां नार्हन्ति षोडशीमि"ति। अत एवमुक्ते सर्वगुह्यतमे त्वद्धिते परमे मद्वचसि त्वं सर्वात्मना श्रद्दधानो यथोक्तमनुतिष्ठेति भावः॥६५॥

आफ्नो अधिकारको अनुसार उपनिषद्, गीता, सहस्रनाम आदि पाठ गर्नु स्वाधाय यज्ञ भनिन्छ। त्यस सुनेका र पढेका उपनिषद्, गीता आदिको अर्थलाई मनन गरेर अरुलाई सुनाउनु ज्ञान यज्ञ भनिन्छ। अब गरिएको यज्ञादिक को अंगहीनता आदि दोष हटाउनका लागि भगवान् भन्नुहुन्छ कि म सर्वेश्वर, सर्वशक्ति, वत्सलता करुणादि गुणहरूका समूहलाई नियमले नित्य साष्टांग प्रणाम गर यस साधनभक्तिको फल विष्णुपुराणमा यस प्रकार भनिएको छ-'अश्वमेध....यदवाप्नुयात्' अर्थात् लाखौं अश्वमेध यज्ञ गरेर त्यो फल मिल्दैन जुन फल मेरो भक्तिले मात्र मिल्दछ। यस प्रकार पाँच प्रकारको मेरो पूजा द्वारा ज्ञाननिष्ठ भई, मेरो साक्षात्कारलाई प्राप्त गरेर ब्रह्मा शिवादिलाई पनि दुराराध्य परमानन्दघन परमप्राप्य मलाई तिमी पाउने छौ। यो कुरा सत्य हो। म झुटो कुरा गर्दिनँ। म तिमी सँग यस्तो प्रतिज्ञा गर्दछु कि तिमी मेरो प्रिय हौ र प्रियलाई ठग्नु बिल्कुल अनुचित हो। ध्यान नै परम कल्याणको कारण हो यो कुरा वेदव्यासजी ले महाभारतमा भन्नुभएको छ यथा- 'आलोड्य....सदा' अर्थात् सबै शास्त्रहरूलाई मथेर बारम्बार विचार गर्दा पनि यही कुरा निस्कन्छ कि भगवान्को सदा ध्यान गर्नुपर्दछ। महाभारतको मोक्षधर्म मा मेधावी ऋषिको पनि यहि मत छ यथा-'सोऽहं....षोड़शीम्' अर्थात् त्यो म, हिंसारहित, सत्य आत्मा काम क्रोधलाई छोडेर, जितेन्द्रिय तथा शमयुक्त भई देउताहरूका समान मृत्युलाई जित्ने छु। भित्र र बाहिर जतिथोक मनलाई संसारी प्रलोभनमा फँसाउने कारण छन्, तिनीहरूलाई बिल्कुल छोडेर मनलाई सदा ध्यानमा लगाउँछु। समाधि द्वारा मन र इन्द्रियहरूलाई एकाग्र गरेर म तब सम्म सावधानरूपले स्थित हुन्छु जब सम्म मेरो मृत्यु हुँदैन। विषयहरूको संगलाई छोडेर र मनलाई हृदयमा रोकेर जब उन्मनीभाव हुन्छ तब निर्वाण प्राप्त हुन्छ। काम, क्रोध र भयले आक्रान्त र अन्धकारले जसको हृदय छोपिएको छ यस्तो चुक्ली लाउने, कृतघ्न, नास्तिक, भिन्नवृत्तिवाला मूढ़ खुलेको मोक्षद्वार लाई देख्दैनन्। हजारौं अश्वमेध र सयौं वाजपेय यज्ञको फल ध्यानयोगको महात्म्यको सोह्रौं भागको एकभागको बराबर पनि हुन सक्दैन। यसैले हे अर्जुन! सबैभन्दा गोपनीय तिम्रो हितको लागि भनेको मेरा श्रेष्ठ वचनहरूमा पूर्णरूपले श्रद्धा राखेर जस्तो मैले भनेको छु त्यस्तै गर॥६५॥

–★–★–★–

## सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज।
## अहं त्वा सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः॥

**सबै धर्मको आश्रय छोडेर तिमी केवल मेरो शरणमा आउ। म तिमीलाई सम्पूर्ण पापहरूबाट मुक्त गरिदिनेछु, चिन्ता नगर॥६६॥**

एवं भगवदुपदिष्टे सर्वशास्त्रगुह्यतमसिद्धान्ते सर्वात्मना स्वानन्यभजने श्रद्दधानमपि धर्मविन्मन्वादिमहर्षिविहितयज्ञदानतपः स्वाध्याययाग्निहोत्रमहायज्ञानुष्ठाने कर्त्तव्ये

यस प्रकार भगवान् को द्वारा उपदेश गरिएको र सबै शास्त्रहरू मध्ये अधिक गोपनीय सिद्धान्तमा र भगवान्को अनन्य भजनमा सबै प्रकारले श्रद्धा राख्दै धर्मलाई जान्ने मनु आदि महर्षिहरू द्वारा भनिएको यज्ञ, दान, तप, स्वाध्याय, अग्निहोत्र महायज्ञादि को

यथोक्तं केवलभगवद्भजनं नोपपद्येत तत्परित्यागे च विहित धर्मत्यागजन्यपापापत्तिप्रसङ्गेन भजनभङ्गः स्यात्। किञ्च "यज्ञो दानं तपश्चैव पावनानि मनीषिणाम्। एतान्यपि तु कर्माणि सङ्गं त्यक्त्वा फलानि च। कर्त्तव्यानीति मे पार्थ! निश्चितं मतमुत्तमम्।" पुनः "स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः" इत्येवमादिवचनैस्तेषामवश्यकर्त्तव्यताया भगवता स्वयमपीह विहितत्वात् कथं तत्त्यागो युज्येत अत्यागे च भगवति मनोनिवेशनपूर्वकं तदैकान्त्यभजनं न स्यादन्यकर्मादौ प्रवृत्तत्वात्। एवं च किं हेयं किमुपादेयमित्यनिश्चयात् सन्देहव्याकुलचित्तमर्जुनमालोक्य श्रीभगवान्वासुदेवस्तत्सन्देहमपाकुर्वन् स्वस्य निरङ्कुशेश्वरत्वं ख्यापयन् स्वशरणागतस्य सर्वपापक्षयकर्तृत्वेन स्वप्रपत्तिमेव दृढयति–सर्वधर्मानिति। सर्वान् धर्मान्यज्ञदानतपोऽग्निहोत्रदर्शपौर्णमासादीन्नित्यनैमित्तिकान्साधनाङ्ग फलसहितान्परित्यज्य एतैरेव मे श्रेयो भविष्यतीति तेष्वादरं विहाय तदनुष्ठानं कुर्वन्नकुर्वन्वा तत्करणाकरणयोर्गुणदोषबुद्धिमकृत्वेत्यर्थः मामेकं शरणं व्रज, मां निखिलहेयगन्धशून्यं भगवन्तं ज्ञानशक्तिबलैश्वर्यतेजोवीर्यवात्सल्यकारुण्यदयाक्षमाद्यनन्तकल्याणगुणार्णवं सर्वनियन्तारं सर्वफलप्रदातारं सच्चिदानन्दमूर्तिमेकमतिशयसाम्यशून्यं ब्रह्मरुद्रेन्द्रादिवन्द्यं सर्वमुमुक्षूपास्यं शरण्यं प्राप्यं रक्षकं च विज्ञाय मदानुकूल्यसङ्कल्पाद्याचरणाध्यवसायेन कर्म्रदेवादिनिरेक्षाद्भगवदनुग्रहादेवाहं कृतार्थो भविष्यामीति विश्वासपूर्वकं स्वस्य स्वतन्त्रकर्त्तृत्वाभिमानं विहाय स्वहिताहितं सर्वं मदधीनं निश्चित्य प्रेमकर्षेण गङ्गाप्रवाहवदनवच्छिन्नचिन्तनेन प्रपद्यस्वेत्यर्थः। न चैवं सर्वधर्मानादरेण मम पापसम्बन्धः स्यादिति शङ्कनीयमित्याह–अहं त्वां सर्वपापोभ्यो मोक्षयिष्यामीति। अहं स्वतन्त्रः सर्वेश्वरः स्वभक्तिमार्गसंरक्षणाय स्वीयाराधनधर्मप्रवर्त्तनाय स्वेच्छयैव

अनुष्ठानमा लागेपछि केवल भगवत् भजन हुन सक्दैन। र मनुआदि ऋषि प्रोक्त यी कर्महरूलाई यदि छोडिदियो भने या नगर्ने हो भने विहित धर्म छोडेको पाप लाग्दछ जसले भजन भंग हुन्छ। यति मात्रै होईन हजुरले स्वयं पनि आफ्नो यसै गीतामा भन्नुभएको छ कि 'यज्ञोदानं....मतमुत्तमम्' भाव यो हो कि यज्ञादि पवित्र गर्नेवाला हुन्, यिनीहरूमा आसक्ति र फललाई छोडेर सबैले गर्नुपर्दछ, यो मेरो श्रेष्ठ मत हो। फेरि स्वे स्वे......नरः' आदि वचनहरूले हजुरले यो भन्नुभयो कि यी यज्ञादि कर्महरूलाई अवश्य गर्नुपर्दछ। त यसको त्याग कसरी उचित छ? र न त्यागेमा भगवान्मा मन लगाएर एकान्त भजन हुँदैन किनकी अरु कर्महरूमा प्रवृत्ति रहन्छ। कसलाई ग्रहण गर्नु र कसलाई छोड्नु यस अनिश्चयले सन्देहयुक्त व्याकुल चित्त अर्जुनलाई जानेर भगवान् वासुदेव अर्जुनको सन्देह हटाउँदैआफ्नो निरंकुश ईश्वरतालाई प्रकट गर्नका लागि यस श्लोकमा आफ्नो शरणागतिलाई दृढ गर्दै भन्नुहुन्छ कि मेरो शरणागति सबै पापहरूलाई क्षय गर्नेवाला छ। सबै धर्महरूलाई जस्तो यज्ञ, दान, तप, अग्निहोत्र, अमावस्या, पूर्णिमा आदिलाई नित्य नैमित्तिक कर्महरूलाई, उनीहरूका अंग र फलको सहित छोडेर, अर्थात् यिनीहरूबाट मेरो कल्याण हुनेछ यस प्रकार उनीहरूलाई आदर नदिईकन र उनीहरूका अनुष्ठान गर्दै या न गर्दै, अर्थात् त्यसलाई गर्ने वा नगर्नेको गुणदोषमा ध्यान नदिई, मेरो शरणमा आउ। म समस्त हेय(मायिक) गुणहरूका गन्धले रहित, भगवान्, ज्ञान, शक्ति, बल, ऐश्वर्य, तेज, वीर्य, वत्सलता, करुणा, दया, क्षमा आदि अनन्त कल्याण गुणहरूका समुद्र हुँ। म सबैको नियन्ता, सबै कर्महरूको फल दिनेवाला, सत्, चित्, आनन्दमूर्त्ति, म भन्दा ठूला र बराबरीका ले शून्य अर्थात् म भन्दा ठूलो र मसँग बराबरी गर्नेवाला छैन, ब्रह्मा शिवादि का एक वन्द्य, सबै मोक्षार्थिहरूका उपास्य, शरण, शरण दिने योग्यतायुक्त, प्राप्त गर्न योग्य र रक्षक हुँ। मलाई यस्तो जानेर मेरो अनुकुल संकल्पादि आचरणहरूमा निश्चय राख्दै, कर्म, देवादिको अपेक्ष नगरी यो विश्वास गर्दै कि भगवान्को कृपाले नै म कृतार्थ हुनेछु, आफ्नो स्वतन्त्र कर्त्तापनको घमण्डलाई छोडेर र आफ्नो हित अहित सबै मेरो अधीन जानेर, प्रेमको अधिकताले गंगाप्रवाहवत् अनवरत मेरो चिन्तन गर्दै मेरो शरणमा आउ। यस्तो शंका नगर कि सबै धर्महरूको आदर गर्नाले मलाई पाप लाग्नेछ, किनकी म स्वतन्त्र र सर्वेश्वर हुँ। आफ्नो भक्तिमार्गको रक्षार्थ र भगवद्भक्ति धर्मको प्रचारार्थ आफ्नो इच्छाले नै भक्तहरूमा कृपा देखाउनका लागि मैले यदुकुलमा जन्म लिएको हुँ। यस्तो म भगवान्मा अतिभक्ति गरेको कारण नित्य नैमित्तिक कार्यहरूलाई अनादर गर्नेहरूका र केवल मेरो नै शरणको भरोसा गर्नेवाला तिमीलाई म सबै पापहरूबाट अर्थात् अनेक जन्महरूमा गरिएका जो पापहरू छन् ती सबै र पूर्वका तथा वर्तमान र भविष्यत् पाप छन् ती सबै पापहरूबाट म तिमीलाई छुटाई दिनेछु। यसले सोच नगर अर्थात् यसको चिन्ता र शोक नगर कि पापहरूका प्रायश्चित नगर्नाले,

भक्तानुग्रहाय यदुकुलेऽवतीर्णः मयि भक्त्यतिशयान्नित्य-नैमित्तिककर्मानादरकारिणं मदेकशरणं त्वां सर्व पापेभ्योऽ-नेकजन्मस्वकृत्यकरणकृत्याकरणजनितानि बहुपापानि इह च प्रायश्चित्ताद्यकरणात्स्ववर्णाश्रमोचितधर्मानादरणाच्च बन्धुवधादिनिमित्ताच्च जायमानानि प्राक्तनभविष्यद्वर्त्त-मानानि पापानि तेभ्यः सर्वेभ्यो मोक्षयिष्यामि स्वसामर्थ्या-देव, अतो मा शुचः प्रायश्चित्ताकरणात्स्वधर्मानादराद् बन्धुवधाच्च यानि मे पापानि तानि कथं तरिष्यामीति शोकं मा कृथाः। नचैवं "नकर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते। नियतस्य तु संन्यासः कर्मणो नोपपद्यते। मोहात्तस्य परित्या-गस्तामसः परिकीर्त्तित" इत्यादिस्वधर्माचरणावश्यकत्व-प्रतिपादकस्ववचन-विरोध इति वाच्यं, यथोक्तभक्तिहीनानां तदधिकारयोग्यतापादनाय तेषां नियतत्वेनाङ्गीकार्यत्वात्। "तमेतं वेदानवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेने"ति श्रुत्या तेषां विविदिषायामेवोपयोगस्य निर्णीतत्वात्। जिज्ञासायां सम्प्रवृत्तौ नाद्रियेत् कर्मचोदनाम्। तावत् कर्माणि कुर्वीत न निर्विद्येत यावता। मत्कथाश्रवणादौ वा श्रद्धा यावन्न जायते" इति। अन्यथा "न वेदयज्ञाध्यय-नैर्न दानैर्न तपोभिरुग्रैः। एवं रूपः शक्य एवंविधो द्रष्टुं दृष्टवानसि मां यथा। भक्त्या त्वनन्यया शक्य अहमेवंवि-धोऽर्जुन! ज्ञातुं द्रष्टुं च तत्त्वेन प्रवेष्टुं च परन्तपः। मत्कर्म-कृन्मत्परमो मद्भक्तः सङ्गवर्जितः। निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डवे"ति पारमेश्वररूपदर्शनं प्रति यज्ञ-दानादीनामकिञ्चित्करत्वमभिधायानन्यभक्तेरेव तद्धेतुत्व-कथनपूर्वकं स्वकर्मकर्त्तुर्निर्वैरस्य स्वभक्तस्यैव स्वप्राप्त्य-भिधायकवाक्यवृन्दविरोधः कथं न शङ्क्यते बुधैः। किञ्च "भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः। क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे। यदा चर्मवदाकाशं वेष्टयिष्यन्ति मानवाः। तदा देवमविज्ञाय दुःखस्यान्तं निगच्छति"

**आफ्नो वर्णाश्रम घर्मको अनादरले र बन्धुवर्गहरूलाई मार्नाले जुन पाप हुन्छन् त्यसबाट म कसरी तर्नेछु। यदि तिमी यो भन कि हजुरले स्वयं यसै अध्यायमा 'नकर्मणा....परिकीर्त्तितः' आदि द्वारा यो भन्नुभएको छ कि स्वधर्मको आचरण आवश्यक छ भने तिम्रो यो सोच्नु ठीक होईन किनकी मेरो यथोक्त भक्तिले हीन पुरुषहरूका लागि उनीहरूलाई भक्तिको अधिकार को योग्यता प्राप्ति गराउनको लागि नियतरूपले कर्मको अंगीकार गर्न भनिएको छ। श्रुतिमा पनि यस्तै भनेको छ, यथा- 'तमेतं......नाशकेन' अर्थात् वेदहरूका अनुवचन, यज्ञ, दान, तप र उपवास द्वारा ब्राह्मण त्यस ब्रह्मलाई जान्ने इच्छा गर्दछन्। यस प्रकार श्रुतिहरू यज्ञ, दान आदिको उपयोगिता केवल यही भन्दछन् कि उनीहरूलाई गर्नाले ब्रह्मज्ञानको इच्छा जाग्दछ। यो इच्छा जागेपछि उनीहरूको कुनै आवश्यकता रहँदैन। भागवत्को एकादश स्कन्धमा पनि यही कुरा भनिएको छ, जस्तो 'निवृत्तं.....जायते' अर्थात् ममा संलग्न चित्त मनुष्य निवृत्तिवाला कर्महरूलाई गरुन् र प्रवृत्तिवाला कर्मलाई छोडुन्। जब ब्रह्म लाई जान्ने इच्छा जाग्दछ त कर्म प्रेरणाको आदर नगर्नु। तब सम्म कर्महरूलाई गनु जबसम्म या त वैराग्य प्राप्त नहोस यो मेरो कथाहरू सुन्न अथवा मेरो कीर्त्तनादिमा श्रद्धा उत्पन्न नहोस। फेरि तिम्रो यो सोचाई पनि ठीक हो भने यसै गीता मा भनिएका मेरा अरु वचनसमूहका साथ विरोध हुन्छ, जसमा यो भनिएको छ कि परमेश्वरको रूपको दर्शनमा यज्ञ, दान बिल्कुल अकिञ्चित्कर अर्थात् सामर्थ्यहीन छ। अनन्य भक्ति नै त्यस रूपको दर्शन गराउन सक्दछ। मेरो अनुकुल कर्महरूलाई गर्दै शत्रुता हीन, मेरो भक्त नै मलाई पाउन सक्दछ। यी सबै वचन एकादश आदि अध्यायहरूमा भनिएको छ यथा 'न वेद... ..पाण्डव' फेरि उपनिषदहरूमा पनि भनिएको छ 'भिद्यते.... निगच्छति' अर्थात् परनाम मनुष्यहरू भन्दा श्रेष्ठ ब्रह्मरुद्रादि देव जसभन्दा अवर नाम अश्रेष्ठ छन, त्यस भगवान्को दर्शनले हृदयको मायाकृत सबै गाँठाहरू आफैं नाश भएर जान्छन्, गाँठाहरू नाश भएपछि फेरि आत्म परमात्म सम्बन्धी कुनै संशय रहँदैन र जीवको सबै प्रकारका कर्म (संचित, प्रारब्ध क्रियमाणादि) नाश हुन्छन्। यदि मनुष्य आकाशलाई छालाको जस्तो बेर्न सक्दछ भने, जुन कुरा बिल्कुल असम्भव छ, त्यतिखेर मात्र उ बिना परमेश्वरलाई जानि दुःखको अन्तलाई पाउन सक्दछ अर्थात् संसारका त्रिविध दुःखहरूबाट छुट्न सक्दछ। यी उपनिषद् वाक्यहरूमा अन्वय व्यतिरेक द्वारा यो देखाईएको छ कि दुःख, कर्म र संशय को पूर्ण निवृत्तिमा परमात्मज्ञान नै एक मात्र कारण हुन सक्दछ र परमात्मज्ञान बिना भगवान्को अनन्यभक्ति हुन सक्दैन। फेरि श्रुतिमा पनि भनेको छ- 'शृण्वन्तोऽपि.....स्वाम्' अर्थात् सुनेर पनि जुन परब्रह्मलाई धेरै मान्छे जान्दैनन्। त्यो आत्मा (परमात्मा) न वेदार्थलाई जानेर, न बुद्धिले, र न धेरै सुनेर प्राप्त हुन सक्दछ तर जसलाई त्यो वरण गर्दछ त्यसैलाई त्यो प्राप्त छ त्यसैको आत्मालाई त्यो आफ्नो शरीर भनेर स्वीकार गर्दछ। स्मृति पनि**

इत्यन्वयव्यतिरेकवाक्याभ्यां निःशेषदुःखकर्मसंशयनिवृत्तिहेतुत्वेन परमात्मज्ञानस्यैव हेतुत्वाभिधानात्तस्य च पूर्वोक्तानन्यभक्तेरेव हेतुत्वात्। "शृण्वन्तोऽपि वहवो यं न विद्युः, नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन। यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा वृणुते तनुं स्वां, न स शक्यः सुरैर्द्रष्टुमर्हती"ति श्रुतिस्मृतिभ्यां भगवत्प्रसादस्यैव तद्दर्शनहेतुत्वात्। प्रसादविषयोऽपि तदनन्यभक्त एव। "नास्यभक्तात्प्रियतरो लोके कश्चन विद्यते। अहं भक्तपराधीनो ह्यस्वतन्त्र इव द्विज!। साधुभिर्ग्रस्तहृदयो भक्तैर्भक्तजनप्रियः। नाहमात्मानमाशासे मद्भक्तैः साधुभिर्विना। श्रियमात्यन्तिकीं ब्रह्मन् येषां गतिरहं परा। न मे प्रियश्चतुर्वेदी मद्भक्तः श्वपचः प्रियः। तस्मै देयं ततो ग्राह्यं स च पूज्यो यथा ह्यहमि"ति महाभारतश्रीभागवतरेवाखण्डादिषूक्तभगवद्वचनेभ्यः। तथा धर्मविदग्रेसरेण याज्ञवल्क्यनाप्युक्तम् "इज्याचारदमाहिंसादानास्वाध्यायकर्मणाम्। अयं तु परमो धर्मो यद्योगेनात्मदर्शनमि"त्यादिश्रुतिस्मृतिपुराणादिवाक्यैर्भगवदनन्यभक्तिरेव परमो धर्म इति सिद्धम्।तस्माद्यथोक्तभक्तिहीनो मत्प्रपत्तिशून्यः यथेष्टाचारेण स्ववर्णाश्रमोचितधर्मत्यागी मदाज्ञाविरुद्धाचरणात् पतितः स्यात्। नतु मदनन्यशरणो मद्भक्त्यावेशाद्यज्ञादिकर्म कुर्वन्नुपेक्षको वा कदाऽपि (न) कथमपि पुरुषार्थाद्भ्रश्यते मदनुग्राहात्। तथा मोक्षधर्मे नारायणीयाख्याने भगवदनन्यशरणस्य प्रपत्त्यैव सर्वपापक्षयपूर्वकं सर्वपुरुषार्थावाप्तिरभिहिता। तथाहि "अनेनैव प्रपन्नस्य भगवन्तं सनातनम्। तस्यानुबन्धाः पाप्मानः सर्वे नश्यन्ति तत्क्षणात्। कृतान्यनेन सर्वाणि तपांसि तपतां वर। सर्वतीर्थाः सर्वयज्ञा सर्वदानानि तत्क्षणात्। कृतान्यनेन मोक्षश्च तस्य हस्ते न संशयः। यद्येन कामकामेन संसाध्यं साधनान्तरैः। मुमुक्षुणा यत्साङ्ख्येन योगेनापि च भक्तितः। प्राप्यते परमं धाम

यही कुरा भन्दछ जस्तो- 'न स........द्रष्टुमर्हति' अर्थात् परमात्मालाई देउता तथा अन्य पनि देख्न सक्दैनन्। जसमाथि त्यो कृपा गर्दछ त्यही उसलाई देख्न योग्य हुन्छ। माथि लेखिएको श्रुति स्मृति वाक्यहरूबाट यो प्रमाणित भयो कि भगवत् कृपानै उहाँको दर्शन हुनमा एकमात्र कारण हो र उहाँको कृपाको पात्र उहाँ का अनन्य भक्त नै हुन्। भगवान्ले स्वयं महाभारतमा भागवतमा र रेवाखण्डमा भन्नुभएको छ कि 'नास्य....यथाह्यहम्' अर्थात् हे ब्राह्मणच, यस संसामा मलाई आफ्नो भक्त भन्दा प्रिय अर्को कोही छैन। म अस्वतन्त्र वा मातहतको समान भक्तहरूका अधीन छु। भक्त साधु मेरो हृदयमा अधिकार गर्दछन्। म भक्तहरूको प्रिय हुँ र ती मेरा प्रिय हुन्। भक्त साधुहरूका बिना जसको गति म नै हुँ म आफुलाई पनि चाहन्न र अत्यन्त प्रिय लक्ष्मीलाई पनि चाहन्न। मलाई चारै वेदको ज्ञाता अभक्त छ भने त्यो ब्राह्मण भएपनि मलाई प्रिय छैन र भक्त श्वपच छ भने पनि त्यो मलाई प्रिय छ। त्यसैलाई दिनुपर्दछ, त्यसैबाट लिनु पर्दछ, त्यो मेरो नै समान पूज्य छ। धर्मलाई जान्नेहरूमा श्रेष्ठ याज्ञवल्क्य ले पनि यहि कुरा भनेका छन्, यथा- 'इज्याचार....दर्शनम्' अर्थात् यज्ञ, आचार, इन्द्रियदमन, अहिंसा, दान वेदपाठ आदि सबै कर्महरूमा पनि योग द्वारा आत्मदर्शन गर्नु परमश्रेष्ठ धर्म हो। यी सबै श्रुति, स्मृति, पुराण इत्यादिका वचनहरूले यहि सिद्ध हुन्छ कि भगवान्को अनन्य भक्ति नै जीवको परम धर्म हो। यसैले जुन पुरुष मेरो यथोक्त भक्तिले शून्य छ त्यो यदि आफ्नो वर्णाश्रमको उचित धर्मलाई यथेष्टाचारले छोड्दछ भने त्यो श्रुति स्मृतिहरूमा उक्त मेरो आज्ञाको विरुद्ध आचरण गर्नाले पतित हुन सक्दछ। तर त्यो पुरुष जो मेरो अनन्य शरणमा छ मेरो भक्तिको प्रचुरताको वश यज्ञादि कर्महरूलाई गरेर वा नगरेर मेरो कृपाको कारण पुरुषार्थले कहिल्यै पनि कुनै प्रकारले पनि भ्रष्ट हुँदैन। महाभारतको मोक्षधर्मको नारायणीय आख्यानमा यो भनिएको छ कि भगवान्को अनन्यशरण पुरुष शरणागतिले नै सबै पापहरूबाट छुटेर सर्व पुरुषार्थ अर्थात् अर्थ, धर्म, काम र मोक्षलाई पाउँदछ। जस्तो 'अनेनैव......नारायणाश्रयाः' अर्थात् जो पुरुष सनातन भगवान्को शरण हुन जान्छ त्यसको सबै पापहरूका बन्धन त्यसैक्षण नाश हुन्छन्। हे तपस्वीहरूमा श्रेष्ठ! यस्ता पुरुषले त्यही क्षण सबै तपहरू, तीर्थ, यज्ञ, र दानहरू गर्‍यो र मोक्ष पनि त्यसको हातैमा छ, यसमा केही पनि संशय छैन। जुन परमधामलाई काम-कामी अन्य साधनहरू द्वारा र मुमुक्षु सांख्य, योग वा भक्तिद्वारा प्राप्त गर्दछ त्यसलाई यो पुरुष आत्मसमर्पण (प्रपत्ति)ले नै प्राप्त गर्दछ। नारायणको आश्रय गर्नेवाला पुरुष अर्थ, धर्म, काम र मोक्षका साधनका सामग्रीहरूका बिना पनि प्राप्त गर्दछ। फेरि पुण्डरीकाख्यान मा लेखिएको छ- 'अश्वमेध......पदाश्रयाः' अर्थात् जो मनुष्य नारायणबाट विमुख हुन्छन् ती सयौं अश्वमेध र वाजपेय यज्ञ गरेर पनि सुगति पाउन सक्दैनन र क्रूरहृदय, दुरात्मा,

तयोर्नावर्त्तते यतिः। तेन तेनाप्यते तत्तन्न्यासेनैव महामुने!। परमात्मा च तेनैव साध्यते पुरुषोत्तमः। या वै साधनसम्पत्तिः पुरुषार्थचतुष्टये। तया विना तदाप्नोति नरो नारायणाश्रय" इत्यन्वयव्यतिरेकाभ्यां भगवदनन्यशरणानामेव परमपद-प्राप्त्यभिधानं, नतु केवलयज्ञादिकर्मिष्ठानामिति निर्णीतम्। तत्र नृशंसत्वादिविशेषणानि प्रपत्तिपूर्वकालानीति बोध्यम्। तथोक्तं सात्वततन्त्रे "दुराचारोऽपि सर्वाशीः कृतघ्नो नास्तिकः पुरा। समाश्रयेदादिदेवं श्रद्धया शरणं हि यः। निर्दोषं विद्धि तं जन्तुं प्रभावात्परमात्मन" इति। अपिशब्देन यद्येवंविधा दुराचारिणोऽपि भगवन्तं प्रपद्य सर्वदोषनिरासेन परं धाम प्राप्नुवन्ति चेत्तर्हि सदाचारनिष्ठा ज्ञानवैराग्ययुक्ता भगवदनन्यशरणास्तदाराधनेतरकर्मोपेक्षकास्तत्पदं प्राप्नु-युरिति किमु वक्तव्यमिति कैमुत्यं दर्शितमित्यलं विस्तरेण ॥६६॥

**पापचारी मनुष्य पनि नारायणको चरणको आश्रय लिएर परमधामलाई प्राप्त गर्दछन्। यहाँ अन्वय व्यतिरेक द्वारा शास्त्रीय वाक्यहरूबाट भगवान्को अनन्य शरणद्वारा नै परमपद को प्राप्ति निश्चित गरियो, केवल यज्ञादि कर्महरूका अनुष्ठान द्वारा होईन। प्रपन्नहरूमा क्रूर हृदयता आदि विशेषण लागू हुनु शरणागत भन्दा पहिले संझिनु पर्दछ, शरणागत भएपछि होईन, जस्तो कि सात्त्वततन्त्र मा लेखिएको छ- 'दुराचारोऽपि.....परमात्मनः' अर्थात् जो पुरुष पूर्वमा दुराचारी, सर्वभक्षी, कृतघ्न र नास्तिक भएपनि जब त्यो आदिदेव भगवान्को शरणमा जान्छ भने त्यसलाई परमेश्वरको प्रभावले निर्दोष संझ। 'अपि' शब्दको मतलब यो हो कि यस प्रकारका दुराचारी पनि भगवान्को शरण लिएर सबै दोषहरूबाट छुटेर परधामलाई प्राप्त गर्दछन्, भने जो सदाचार निष्ठायुक्त, ज्ञान वैराग्यले सम्पन्न र भगवत् को अनन्य शरणागत भएको कारण भगवान्को पूजालाई छोडेर अन्य कर्महरूको उपेक्षा गर्दछन् ती यदि परमधामलाई प्राप्त गर्दछन् भने त त्यसमा सोध्नु नै के छ र? यो कैमुत्य न्याय देखाउनु भयो॥६६॥**

-★-★-★-

## इदं ते ना तपस्काय नाभक्ताय कदाचन।
## न चाशुश्रूषवे वाच्यं न च मां योऽभ्यसूयति॥

**यो सर्वगुह्यतम वचन तिमीले जो तपस्वी छैनन् उनीहरूलाई भन्नुहुँदैन। अभक्तलाई भन्नुहुँदैन तथा जो सुन्न चाहँदैन त्यसलाई पनि कहिल्यै सुनाउनु हुँदैन र जो ममाथि दोषदृष्टि राख्दछ त्यसलाई पनि भन्नुहुँदैन॥६७॥**

एवं सर्वशास्त्रस्य सारभूतं गीताशास्त्रमुपदिश्येदानीमस्य शास्त्रस्योपदेशाधिकारिनियममाह-इदमिति। इदं कर्म-ज्ञानभक्तिविषयं गुह्यतमं शास्त्रं तुभ्यं मया कृपयोपदिष्टं, ते त्वया अतपस्काय वाङ्मयमानसशरीरेति त्रिविधतपोरहि-ताय, तपः स्वधर्मवर्त्तित्वं तद्रहितायेति वा न वाच्यं नोपदेष्टव्यं, तपोयुक्ताय अभक्ताय गुरावीश्वरे च भक्तिशून्याय कदाचन न वाच्यं, न चाशूश्रूषवे वाच्यं, भक्तायापि अशुश्रूषवे परि-चर्यामकुर्वते न च वाच्यं, न च मां योऽभ्यसूयति, मां भग-वन्तं वासुदेवं दोषारोपेण यः पश्यति दोषगन्धास्पृष्टस्वरूपे दिव्याप्राकृतानन्तगुणे ब्रह्माद्यचिन्त्यनित्यैश्वर्येऽपि दोष-मारोपयतीत्यर्थः, तस्मै तपस्विने भक्ताय शुश्रूषवेऽपि कदा-चन न वाच्यं, तपस्विने भक्ताय शुश्रूषवेऽनसूयवे श्रीकृष्णेऽनु-रागयुक्ताय वाच्यमित्यर्थः॥६७॥

**यस प्रकार सबै शास्त्रहरूका सारभूत गीताशास्त्रको उपदेश गरेर अब यस शास्त्रको अधिकारीको नियमको वर्णन गर्नुहुन्छ। कर्म ज्ञान भक्ति विषयक परम गोपनीय यस गीता शास्त्रको उपदेश मैले तिमीमाथि कृपा गरेर तिमीलाई गरें। जुन पुरुष कायिक, वाचिक, मानसिक तीन प्रकारको तपले शून्य छ या आफ्नो ध र्मले रहित छ त्यसलाई यसको उपदेश नगर्नु। फेरि तप युक्त भएपनि यदि कुनै मनुष्य ईश्वर र गुरुको भक्ति गर्दैन भने त्यो सँग पनि यो शास्त्र कहिल्यै पनि नभन्नु। गुरु र ईश्वरको भक्त पनि यदि उनीहरूका सेवा गर्दैन भने त्यसलाई पनि नभन्नु। र जो पुरुष दोषहरूका गन्धले अस्पृष्ट, दिव्य अप्राकृत गुणहरूका समूह, ब्रह्मादिकहरू द्वारा चिन्तन गर्न नसकिने र नित्य ऐश्वर्यवाला म भगवान् वासुदेवमा दोषारोपण गर्दछ त्यसलाई पनि यो गीताशास्त्र कहिल्यै पनि नदिनु, यद्यपि त्यो तपस्वी, भक्त र सेवा गर्नेवाला भएपनि। मतलब यो कि यस गीता शास्त्रको त्यही अधिकारी हो जो तपस्वी, भक्त, गुरु र ईश्वरको सेवा गर्ने, भगवान्मा दोषा रोपण नगर्ने र कृष्णानुरागले युक्त छ अर्थात् यस्तो नै पुरुषलाई यस गीता शास्त्र सुनाउनु पर्दछ॥६७॥**

-★-★-★-

## य इमं परमं गुह्यं मद्भक्तेष्वभिधास्यति।

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

## भक्तिं मयि परां कृत्वा मामेवैष्यत्यसंशयः ॥

**ममा पराभक्ति गरेर जो यस परम गोपनीय संवाद (गीताग्रन्थ) लाई मेरो भक्तहरूमा प्रचार गर्नेछ, त्यो मलाई नै प्राप्त हुनेछ; यसमा अलिकति पनि सन्देह छैन ॥६८॥**

एवमुक्तदोषरहितेभ्यो भगवद्भक्तेभ्यो यो ददाति तस्य फलमाह–य इदमिति। यः कश्चिद्गीतासम्प्रदायप्रवर्त्तक इदं मदुक्तं परमं गुह्यमतिरहस्यत्वात्सर्वत्र प्रकाशनार्हमतो मद्भक्तेषु मयि भगवति वासुदेवे भक्तियुक्तेषु योऽभिधास्यति अभितो ग्रन्थतोऽर्थतश्च स्थापयिष्यति पूर्वश्लोकेऽभक्तस्य निषेधेन भक्तस्यैवार्थतो ग्रहणेऽपि पुनर्भक्तग्रहणात् तप आद्यभावेऽपि मद्भक्तिमात्रेणाप्यस्य शास्त्रस्य सम्प्रदान–पात्रता भवति, भक्तेरेव तदधिकारापादनत्वमिति सूचितम्। कथमभिधास्यति तत्राह भक्तिं मयि परां कृत्वेति। गीताकर्त्तुर्भगवतो गरीयसः परमप्रीत्यर्थं मया भक्तेभ्यो दीयते। नतु केन चिदुपाधिनेति निश्चित्य यो वक्ष्यति स मामेवैष्यत्यत्र संशयो न कर्त्तव्यः। अथवा यो मद्भक्तेभ्योऽभि–धास्यति स मयि परां प्रेमलक्षणां भक्तिं कृत्वा तया मामारा–ध्य मामेवैष्यति। अवधारणेनोक्तार्थसिद्धौ सत्यां पुनरसं–शयवचनं यथा यज्ञादिकर्मनिष्ठो भक्तिहीनज्ञाननिष्ठो वाऽन्य–देवान्तवत्फलं प्राप्नोति न तथा मद्भक्त इति दार्ढ्यायेति भावः ॥६८॥

उक्त दोषहरूले रहित भगद्भक्तहरूलाई जो गीताको उपदेश गर्दछ त्यसको फल भन्नुहुन्छ– जो कोही यस गीताशास्त्रको सम्प्रदायको प्रचारक मैले भनेको यस गोपनीय अर्थात् सबै ठाउँमा प्रकट गर्न नहुने रहस्यलाई म वासुदेव भगवान्को भक्तका लागि ग्रन्थले वा अर्थले स्थापित गर्दछ अर्थात् केवल पाठ अथवा अर्थ सहित पाठको उपदेश दिन्छ, यो सोचेर कि गीताको कर्त्ता भगवान्को प्रीति का लागि म भक्तहरूलाई गीताको उपदेश दिन्छु र कुनै उपाधि आदिको लालचले होईन, त्यो मलाई अवश्य नै प्राप्त गर्दछ यसमा सन्देह छैन। अथवा जो मेरा भक्तहरूलाई गीताको उपदेश गर्दछ त्यो म मा प्रेमलक्षणा भक्ति गरेर र त्यसको द्वारा मेरो पूजन गरेर मलाई पाउने छ।पूर्वोक्त श्लोकमा अभक्तलाई गीताको उपदेश को निषेध गरेर भक्तलाई नै उपदेश गर्नु भन्नुभयो। फेरि यस श्लोकमा पनि 'भक्त' शब्दको व्यवहार यो सूचित गर्नको लागि गर्नुभयो कि तप आदिको अभाव भएर पनि मेरो भक्तलाई यसको उपदेश ग्रहण गर्ने अधिकार प्राप्त हुनसक्दछ। 'एव' शब्दलाई, जो निश्चय वाचक शब्द हो व्यवहार गरेर फेरि 'असंशय' शब्दको व्यवहार गर्नुभयो। यसको भाव यो हो कि जस्तो यज्ञादि कर्महरूमा अथवा ज्ञानमा या अन्य देवताहरूमा निष्ठा राख्ने वाला भक्तिशून्य पुरुष विनाशी अल्प फललाई पाउँदछ मेरो भक्त पाउँदैन। त्यो मलाई नै पाउँदछ। यसैलाई दृढ़ गर्नको लागि 'असंशय' शब्द व्यवहार गर्नुभयो ॥६८॥

–★–★–★–

## न च तस्मान्मनुष्येषु कश्चिन्मे प्रियकृत्तमः।
## भविता न च मे तस्मादन्यः प्रियतरो भुवि ॥

**त्यसको समान मेरो अत्यन्त प्रिय कार्य गर्नेवाला मनुष्यमा कुनै पनि हुँदैन र यस भूमण्डलमा त्यसको समान मेरो प्रियतर हुँदापनि हुँदैन ॥६९॥**

मामेवैष्यतीत्युक्तं तत्र हेतुमाह–न चेति। मद्भक्तेषु यो गीताशास्त्राभिधायकस्तस्मादन्यो मनुष्येषु मध्ये कश्चिन्मे मम प्रियकृत्तमः अतिशयेन प्रियकृन्नास्ति वर्त्तमानकाले न च मे तस्मादन्यः कश्चित्प्रियतरो भुवि अस्मिंल्लोके भविता भविष्यति ॥६९॥

यस्तो पुरुष मलाई पाउँदछ, यो माथि भन्नुभयो अब यसको कारण बताउनु हुन्छ–

जो मेरा भक्तहरूलाई गीताको उपदेश दिन्छ त्यो भन्दा बढ़ेर मनुष्यहरूमा मेरो प्रिय गर्नेवाला अरु कोहि हुँदैन र न यस संसारमा त्यो भन्दा धेरै मेरो प्रिय अरु कोही हुन्छ ॥६९॥

–★–★–★–

## अध्येष्यते च य इमं धर्म्यं संवादमावयोः।
## ज्ञानयज्ञेन तेनहमिष्टः स्यामिति मे मतिः ॥

**जो मनुष्य हामी दुईको यस धर्ममय संवादलाई अध्ययन गर्नेछ, त्यसको द्वारा पनि म ज्ञानयज्ञले पूजित हुनेछु–यस्तो मेरो मत छ ॥७० ॥**

एवमध्यापकस्य फलमुक्त्वा अध्येतुः फलमाह–अध्येष्यत इति। आवयोर्वासुदेवार्ज्जुनयोरिमं धर्म्यं धर्मादनपेतं संवादं सर्वशास्त्रार्थनिर्णयं यश्चाध्येष्यते यथोक्तार्थविशिष्टं सद्गुरोः सम्यगवधार्यार्थानुसन्धानसहितं नियमेन पठिष्यति, तेन पुंसा ज्ञानयज्ञेन चतुर्थाध्यायोक्तसर्वयज्ञेषु "न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते। सर्वकर्माखिलं पार्थ! ज्ञाने परिसमाप्यते। श्रेयान् द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञ परन्तपे"ति विशिष्टतयोक्तेन अहमिष्टः पूजितः स्यामिति मे मतिर्ममम निश्चयः। यद्यपि ज्ञानयज्ञस्त्वर्थविचारेणैव भवति तथाऽपि यो मद्भक्तः केवलपाठमात्रेणापि मां स्तौति सोऽपि स्वमाहात्म्यं शृण्वतो मम प्रियो भवति। यथा लोके कश्चिदल्पबुद्धिरपि कस्य चिन्महाजनस्य यथाबुद्धि माहात्म्यं वाङ्मात्रेणापि ख्यापयति स तस्य प्रियो भवति, तथा गीतापाठमात्रकृदपि ममैश्वर्यगुणसूचकोऽयमिति मे प्रियो भवतीत्यर्थः ॥७० ॥

अध्यापक को फल भनेर अब पढ्नेहरूलाई के फल हुन्छ त्यसलाई भन्नुहुन्छ– वासुदेव र अर्जुनको यस धर्मयुक्त सर्वशास्त्र निर्णयलाई जो पढ्दछ अर्थात् यथोक्त अर्थका साथ गुरुसँग पढेर सम्यक् धारण गरेर, अर्थको अनुसन्धानको विचार गर्दै नित्य नियमले पढ्दछ भने त्यस पुरुषले चौथो अध्यायमा भनेको सबै यज्ञहरूमा श्रेष्ठ ज्ञानयज्ञ द्वारा मेरो पूजा गर्‍यो यो मेरो निश्चय मत हो। 'न हि. ......परन्तपः' यद्यपि ज्ञानयज्ञ अर्थविचारले नै हुन्छ तथापि जो भक्त केवल गीता पाठले मेरो स्तुति गर्दछ त्यो पनि मेरो प्रिय हुन्छ किन भने त्यो मेरो माहात्म्य मलाई सुनाउँदछ। जस्तो संसारमा अल्प बुद्धिवाला मनुष्य कुनै पनि श्रेष्ठ पुरुषलाई आफ्नो अल्पबुद्धि अनुसार वचनले नै बढाईं गर्दछ भने त्यो त्यस ठूलो मान्छेको प्रिय हुन्छ, त्यस्तै प्रकारले गीताको केवल पाठ गर्नेवाला पनि मेरो प्रिय हन्छ किनकी गीता मेरो ऐश्वर्य र दिव्य गुणहरूको सूचक हो ॥७० ॥

–★–★–★–

**श्रद्धावाननसूयश्च शृणुयादपि यो नरः।**
**सोऽपि मुक्तः शुभाँल्लोकान्प्राप्नुयात्पुण्यकर्मणाम् ॥**

**श्रद्धालु र दोषदृष्टिले रहित जो मनुष्य यस (गीताग्रन्थलाई) सुनेको छा भने त्यो पनि शरीर छूटेपछि पुण्यकारिहरूका शुभलोकलाई प्राप्त हुनेछ ॥७१ ॥**

इदानीमन्यस्य पठतो योऽन्यः शृणोति तस्य फलमाह श्रद्धावानिति। यः कश्चिन्नरः अन्यस्य विदुषो वोच्चैः पठतः सकाशात् केवलं शृणुयादपि कथम्भूतःश्रद्धावान् साक्षाद्भगवद्गीतत्वान्महाफलमिति विश्वासवान् पुनरनसूयश्च सम्यग्न पठितुमनर्ह इति दोषारोपमकुर्वन् यः शृणुयात्सोऽपि पापैर्मुक्तः पुण्यकर्मणामश्वमेधादिपुण्यकर्मकृतां शुभाँल्लोकान् पुण्यफलभोगभोग्यान्प्राप्नुयात् ॥७१ ॥

अरुले पाठ गरेको जो सुन्दछ त्यसको फल भन्नुहुन्छ–
अन्य विद्वान् द्वारा उच्च स्वरले पढ्दै गरेको गीताशास्त्रलाई गीताको महाफलमा विश्वास गर्दै र पाठ गर्नेवालामा 'यो पाठ गर्न अयोग्य छ' यस्तो दोष ननिकालि जो मनुष्य केवल सुन्दछ त्यो पनि सबै पापहरूबाट छुटेर अश्वमेधादि पुण्य कर्महरू द्वारा प्राप्त हुन योग्य पुण्यफल भोग्ने शुभ स्थानहरू अर्थात् स्वर्गादि लोकहरूलाई प्राप्त गर्दछ ॥७१ ॥

–★–★–★–

**कच्चिदेतच्छ्रुतं पार्थ त्वयैकाग्रेण चेतसा।**
**कच्चिदज्ञानसम्मोहः प्रनष्टस्ते धनञ्जय ॥**

**हे पार्थ! के तिमीले एकाग्र चित्तले यसलाई सुन्यौ ? र हे धनञ्जय! के तिम्रो अज्ञानले उत्पन्न भएको मोह नष्ट भयो ? ॥७२ ॥**

एतद्गीताशास्त्रस्य वक्तुरध्येतुः श्रोतुश्च फलमुक्तमिदानीं

यस गीताशास्त्रको उपदेश दिनेवाला, पढ्नेवाला र सुन्नेवालाको

यावच्छिष्यस्याज्ञानं न नश्येत्तावद् गुरुणा शिष्यः पुनरुपदेष्टव्य इति गुरुधर्मं शिक्षयन्सर्वज्ञोऽपि भगवानर्जुनं मोहनिवृत्तिं पृच्छति–कच्चिदिति प्रश्ने। एतन्मयोक्तं गुह्यतममज्ञाननाशनं गीताशास्त्रं हे पार्थ! त्वयैकाग्रेणाविक्षिप्तेन चेतसा श्रुतं किं सद्युक्तिभिरवधारितं! तेन तवाज्ञानसंमोहः अज्ञानहेतुको विपर्ययः प्रणष्टः कच्चित् हे धनञ्जय! येन सम्मूढः सन्न योत्स्यामीत्युक्तवान्स यदि न नष्टःस्यात्तर्हि पुनरुपदेक्ष्यामीति भावः॥७२॥

फल भन्नुभयो। जब सम्म शिष्यको अज्ञान नाश नहोस तब सम्म गुरु बारम्बार उपदेश दिनु, यस गुरुधर्मको शिक्षा दिनका लागि सर्वज्ञ भगवान् पनि अर्जुनको मोह निवृत्तिको विषयमा उनीसँग सोध्नुहुन्छ- हे अर्जुन! मैले भनेको अज्ञानको नाशक र अति गोपनीय यस गीताशास्त्रलाई के तिमीले एकाग्र मनले सुन्यौ अर्थात् सद्युक्तिहरूका साथ के यो तिम्रो मन मा बस्यो? के यसले तिम्रो अज्ञानको कारण मोह अर्थात् उल्टो ज्ञान नाश भयो जसले मोहित भएर तिमी भन्दथ्यौ कि म युद्ध गर्दिन? भाव यो कि नष्ट नभएको भए म फेरि यसलाई उपदेश गरुँ॥७२॥

–★–★–★–

## अर्जुन उवाच

**नष्टो मोहः स्मृतिर्लब्धा त्वत्प्रसादान्मयाच्युत।**
**स्थितोऽस्मि गतसन्देहः करिष्ये वचनं तव॥**

**अजुर्नले भने- हे अच्युत! हजुरको कृपाले मेरो मोह नष्ट भईसकेको छ र मैले स्मृति प्राप्त गरिसकेको छु। म सन्देह रहित भएर स्थित छु। (अर्थात् अब मलाई कुनै शंका छैन।) अब म हजुरको आज्ञाको पालन गर्दछु॥७३॥**

एवम्पृष्टः स्वकृतार्थतामर्जुन उवाच–नष्ट इति। य आत्मविषयो मोहोऽन्यथाज्ञानजो विपर्ययोऽभूत्स नष्टः। तत्र हेतुमाह–त्वत्प्रसाददिति। मोहनाशे गमकमाह–स्मृतिर्लब्धेति। यथाऽवस्थिततत्त्वज्ञानमवाप्तं, तच्च पूर्वजन्मन्यासीन्नररूपनारायणसखित्वात्। पूर्वसिद्धमेवेह जन्मनि विनष्टं पुनर्भगवत्कृपया लब्धमतः स्मृतेर्लब्धेत्युक्तं, मम ज्ञानं त्वं तु सदैकरसज्ञान इत्यभिप्रायेण सम्बोधयति–हे अच्युतेति। एतेन त्वत्प्रसादात्सत्यज्ञानानन्दस्वरूपमजहद्गुणशक्तिकं सर्वनियन्तारं सर्वस्य भवाभवहेतुं परमात्मानं साक्षाद्भगवन्तं वासुदेवं त्वां जानामीति सूचितम्। स्मृतिलाभस्य "स्मृतिलम्भे सर्वग्रन्थीनां विप्र मोक्ष" इति श्रुत्युक्तं सन्देहनिवृत्तिरूपं फलमाह–स्थितोऽस्मि, गता मुक्ताः सन्देहाः संशया आत्मपरमात्मस्वरूपगुणसम्बन्धमोक्षप्राप्तिसाधनविषया यस्य सोऽयं। स्थितोऽस्मि निश्चितत्वदुक्तशास्त्रार्थो निःसंशयोऽस्मीत्यर्थः। तथा हि "न त्वेवामि"त्यादिनाऽऽत्मनित्यत्वनानात्वाविनाशित्वनिश्चयदनित्यत्वैकत्वविनाशित्वसंशयो नष्टः। तत "एषातेऽभिहिता साङ्ख्ये"

यसरी सोधिएपछि अर्जुन आफ्नो कृतार्थता भन्दछन्-
जो आत्माको सम्बन्धमा मलाई मोह अर्थात् अन्यथा ज्ञानले उत्पन्न उल्टो ज्ञान भएको थियो त्यो नष्ट भयो। कसरी? हजुरको प्रसाद वा कृपाले। यसको प्रमाण वा चिन्ह के हो? चिन्ह यहि हो कि मलाई तत्त्वको यथार्थ ज्ञान प्राप्त भयो। पूर्व जन्ममा मलाई तत्त्वको यथार्थ ज्ञान थियो किनकी म नारायणको सखा नररूपले थिएँ तर यस जन्ममा मेरो त्यो ज्ञान नष्ट भएको थियो। त्यसलाई फेरि हजुरको कृपाले प्राप्त गरें, यसैले 'स्मृति लब्ध्वा' भने अर्थात् बिर्सिएका कुरालाई हजुरको कृपाले स्मरण भएर आयो। मेरो ज्ञान च्युत वा नाशवान् छ र हजुरको ज्ञान सदा एकरस रहन्छ यसैले भगवान्लाई यहाँ अच्युत सम्बोधन गरेका छन्। यस सम्बोधनले यो पनि सूचित गरियो कि हजुरको कृपाले मैले हजुरको सत्य, ज्ञान र आनन्दस्वरूप, सम्पूर्णगुण शक्तियुक्त, सबैका नियन्ता, सबैका संसार र मोक्षको कारण, परमात्मा साक्षात् भगवान वासुदेव जानें। श्रुतिमा भनेको छ कि- 'स्मृतिलम्भे सर्वग्रन्थीनां विप्र मोक्ष' अर्थात् स्मृति प्राप्त भएपछि सबै ग्रन्थिहरूको पूर्णरूपले नाश हुन्छ। यसैले अर्जुनलाई स्मृति पाउँदा यो फल भयो कि उनको सन्देहहरू नाश भए, यसैलाई स्पष्ट गरिन्छ। आत्मा र परमात्मको स्वरूप, गुण र उनीहरूका सम्बन्ध विषयक तथा मोक्ष र त्यसको प्राप्तिको साधनको विषयमा जुन मेरा सन्देह थिए ती सबै नाश भए म अब स्थित छु अर्थात् हजुरले भन्नुभएको शास्त्रार्थमा निश्चित बुद्धियुक्त र निःसंशय छु। अब यसको प्रमाण दिईन्छ।
पूर्वमा हजुरले भनेको 'नत्वेवाहं' आदि बाट मलाई यो निश्चय भयो कि आत्मा नित्य, अनेक र अविनाशी छ, र जुन यो सन्देह

इत्यारभ्य यावदध्यायसमाप्ति पूर्वोक्तात्मज्ञानप्राप्तिसाधनतया कर्मयोगज्ञानयोगभक्तियोगाः सङ्क्षिप्य दर्शिता ज्ञाताः। तत्र कर्मज्ञज्ञनाधिकारिविशेषानिश्चयजातमत्सन्देहनिरासपूर्वकासङ्गकर्मानुष्ठानतन्माहात्म्य कर्माकर्मादिज्ञानं तदनासक्त्या नैष्कर्म्यकर्मणि ब्रह्मदृष्टिर्यज्ञभेदस्तज्ज्ञानमाहात्म्यमात्मनोऽकर्तृत्वानुसन्धानेन कर्मानुष्ठानसंन्यासयोरैक्यं देहेन्द्रियमनोनियमनेन ध्यानयोगनिष्पत्त्या सर्वत्र समात्मस्वरूपानुसन्धानायाभ्यासवैराग्यभगवद्भक्तियोगनिष्ठेति तृतीयादिषष्ठाध्यायान्तेन साधनसंशयो गतः। ततो भजनीयभगवत्पदार्थतद्भक्तिनिरूपणोपयुक्तचिदचिल्लक्षणपरापरप्रकृतिद्वयविभागः स्वस्य तत्स्वामित्वसर्वात्मत्वसर्वकारणत्वसर्वपरमत्वं गुणमायया जगन्मोहकत्वं स्वाश्रितानां ततो मोचकत्वं भक्ताभक्तादिभेदतत्फलकथनेनात्मनः सर्वमुमुक्षूपास्यत्वं परमफलरूपत्वं भक्तिमाहात्म्यानन्तविभूत्यैश्वर्यं ब्रह्मेशानदेवर्ष्यादिसुरासुरनरदुर्दर्शदिव्याप्राकृताद्भुतैश्वररूपदर्शनं भक्त्यैकलभ्यं भक्तसुलभत्वं भक्तसंसारोद्धारकत्वं भक्तप्रियमिति सप्तमादिद्वादशाध्यायान्तेन निश्चयाद्भगवद्विभूतिगुणैश्वर्यभक्तलक्षणभक्तिप्राप्तिविषयकसंशयो गतः। ततः परापरप्रकृती एव क्षेत्रक्षेत्रज्ञशब्दवाच्ये तयोर्भगवच्छक्तित्वेन स्वरूपेण भिन्नत्वेऽपि पृथक्स्थितिप्रवृत्त्यनर्हतया तत्तादात्म्यं क्षेत्रस्वरूपकथनपूर्वकं क्षेत्रज्ञस्वरूपज्ञानोपायममानित्वादिविंशकं ज्ञानशब्दवाच्ये तत्स्वरूपं तु सदसद्विलक्षणं स्वयं प्रकाशं नित्यमेव। तथाविधस्य सदसद्योनिजन्मसु प्रकृत्युद्भवसत्त्वादिगुणसङ्गः कारणं तस्याणुपरिमाणकत्वेन देहाद्यावरणे धर्मभूतज्ञानेन सर्वक्षेत्रप्रकाशकत्वं तद्बन्धकगुणानामुत्पत्तौ स्वस्य हेतुत्वं तल्लक्षणबन्धकत्वप्रकारतत्कार्यभेदगुणातीतलक्षणगुणातिक्रमणप्रकारो गुणातीतस्य ब्रह्मभावप्राप्तिरित त्रयोदशचतुर्दशाध्यायाभ्यां निश्चयात्।

थियो कि आत्मा अनित्य, एक र अविनाशी छ, त्यो सबै छुट्यो। फेरि 'एषा तेऽभिहिता सांख्ये' बाट आरम्भ गरेर दोस्रो अध्यायको समाप्ति सम्म हजुरले जो आत्मज्ञानको प्राप्तिको साधनस्वरूप कर्मयोग, ज्ञानयोग र भक्तियोगको संक्षेपमा उपदेश दिनुभयो, त्यसलाई मैले बुझें। कर्म र ज्ञानका अधिकारी को-को हुन् यस विषयमा अनिश्चयले उत्पन्न जो मेरो सन्देह थियो त्यो नष्ट भयो। असंग भएर कर्म गर्नु, यस्ता कर्मको माहात्म्य, कर्म अकर्म आदि को ज्ञान, कर्महरूमा अनासक्ति, निष्काम कर्ममा ब्रह्मदृष्टि, यज्ञहरूका भेद, र त्यसलाई जान्नुको माहात्म्य, भगवान् को अधीन सबै जीवहरूका स्थिति र प्रवृत्ति हुने कारण कर्ममा आत्माको अकर्त्तापनको अनुसन्धान वा विचार द्वारा कर्मको अनुष्ठान र संन्यासको एकता, देह, इन्द्रिय, मनको नियमन द्वारा ध्यानयोगको सिद्धिले सबै ठाउँमा सम आत्मस्वरूपको अनुसन्धान र त्यसको लागि अभ्यास, वैराग्य र भगवत् भक्तियोगमा निष्ठा, यस प्रकार यी सबै साधनहरूका विषयमा जुन संशय थियो, त्यो तेस्रो अध्याय देखि लिएर छैटौं अध्याय सम्मको उपदेशद्वारा नष्ट भयो। त्यस पछि भजन गर्ने योग्य जुन भगवत् पदार्थ र उनको भक्तिनिरूपणका उपयोगी चेतन र अचेतन प्रकृतिपुरुष को विभाग र आफ्नो प्रकृतिपुरुषको साथ स्वामीत्व, सर्वात्मत्व सर्व कारणत्व र सर्वश्रेष्ठत्व को सम्बन्ध एवं मायाका गुणहरूद्वारा जगत्लाई मोह गराउनु र आफ्ना आश्रित भक्तहरूलाई मायागुणहरूका बाट मुक्त गर्नु, तथा भक्त र अभक्तको भेद र त्यसको फल भनेर आफुलाई सबै मुमुक्षुहरूका उपासनीय र परमफलस्वरूप भएको, भक्तिको माहात्म्य, अनन्त विभूति ऐश्वर्य, ब्रह्मा, शिव, देव, ऋषि, सुर, असुर, नर, द्वारा कठिनताले मात्रै दर्शन पाईने, दिव्य, अप्राकृत, अद्भुत ऐश्वर्यरूप, जसको दर्शन केवल भक्तिले नै हुन सक्दछ, आफ्ना भक्तहरूका लागि सुलभ हुनु, तिनीहरूलाई संसारबाट उद्धार गर्नु र भक्तहरूका प्रिय हुनु यी सबै कुराहरू सातौं देखि लिएर बाह्रौं अध्याय सम्मले निश्चय गरियो, जसले भगद्विभूति, गुण र ऐश्वर्य, भक्तहरूका लक्षण, र भक्तिको प्राप्ति सम्बन्धी मेरो सबै संशय नष्ट भए। त्यस पछि यो बताउनु भयो कि परा अपरा प्रकृतिनै क्षेत्र र क्षेत्रज्ञ शब्द ले भनिन्छ। यी दुबै भगवान्का शक्ति हुनाले स्वरूपले भिन्न भएपनि पृथक् स्थिति र प्रवृत्तिको अयोग्य भएको कारण उनीहरूका भगवान्को साथमा तादात्म्य सम्बन्ध छ। यस प्रकार क्षेत्रको स्वरूप भनेर क्षेत्रज्ञको स्वरूपज्ञान हुनको लागि अमानिता आदि बीस उपायहरूलाई भन्नुभयो। ज्ञान शब्दले वाच्य क्षेत्रज्ञको स्वरूपलाई, सत् अर्थात् कार्यावस्थामा नामरूप विभागको योग्य द्रव्य र असत् अर्थात् कारणावस्थामा नाम रूप विभागको अयोग्य द्रव्य, दुबै भन्दा विलक्षण, स्वयंप्रकाश नित्य भन्नुभयो। फेरि यो भन्नुभयो कि आत्माको उत्तम र अधम योनिमा जन्मको कारण प्रकृतिद्वारा उत्पन्न सत्वादि गुणहरूको संग नै हो। आत्मा अणु परिमाणवाला हो। देहादिको आवरण भएपछि पनि त्यो ज्ञानरूप

पं. कृष्ण शरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

क्षेत्रक्षेत्रज्ञभूतयोः प्रकृतिपुरुषयोः परमात्मना केवलभेदो वैक्यं वेति सम्बन्धविषयः, पुरुषस्य पारमार्थिकं स्वरूपं कीदृशं ? कथं संसारः ? कथं वा मोक्षः ? कीदृशी मोक्षः ? इति स्वरूपविषयश्च संशयो गतः। ततो ब्रह्मभाव-प्राप्त्यर्हस्य पुरुषस्य बन्धनिरासहेतुवैराग्यार्थं संसा-रस्याश्वत्थरूपकेण ज्ञानासिना छेदनपूर्वकपरमपुरुषप्रपत्त्या मानमोहादित्यागेन परमपदप्राप्तिः। प्रपद्यस्य प्राप्यभूतस्य परमात्मनः सर्वचेतनाचेतनात्मत्वसर्वप्रकाशकत्वसर्व-जीव- नहेतुत्ववेदवेद्यत्ववेदान्ताचार्यत्वसर्ववेदार्थ-वेत्तृत्वक्षराक्षरपुरुषद्वयातीतत्वेन पुरुषोत्तमत्वं तथा ज्ञातुः सर्वज्ञत्वं कृतकृत्यत्वमिति पञ्चदशेन निश्चयादनादि-संसारस्य कथं केन साधनेन वा निवृत्तिः स्यात्, परमात्मा किं स्वरूपः कीदृशगुणशक्त्यैश्वर्यवानिति संशयो गतः। तत उक्ततत्त्वाधिकार्यनधिकारिनिर्णयाय हेयोपादेयदैवासुर-सम्पद्द्वयविभागनिरूपणं दैव्याः सम्पदो मोक्षहेतुत्व-मासुर्याः कामक्रोधलोभमूलकत्वेन नित्यासुरभाववृद्ध्या अधमगतिनारक्यादियोनिप्राप्तिफलं ततो हेयोपादेयप्रदर्श-नार्थं सत्त्वादिगुणत्रयविभागेन श्रद्धाऽऽहारयज्ञतपोदानविभाग इति षोडशाद्यध्यायद्वयेन निश्चयस्तेन तत्त्वज्ञानस्य कोऽधिकारी को वाऽनधिकारी किं हेयं किमुपादेयमिति सन्देहो नष्टः। ततोऽन्तिमेऽस्मिन्नध्याये सर्वाध्यायोक्तार्थं सङ्गृह्य ग्राहयितुं तावत्पराभक्त्यनिधिकारिणामविशुद्धबुद्धियुक्तानां यज्ञ-दानतपआदिकर्मनिष्ठयैव श्रेयो नान्यथा, विशुद्धबुद्ध्यादि-युक्तस्य विगतकामक्रोधरागद्वेषस्य ब्रह्मभूतस्य पराभक्ति-लाभस्तयैव त्वत्स्वरूपगुणैश्वर्ययाथात्म्यज्ञानेन त्वत्प्राप्तिः, सर्वजीवानां त्वत्स्वरूपगुणैश्वर्ययाथात्म्यज्ञानेन त्वत्प्राप्तिः, सर्वजीवानां त्वन्नियम्यत्वं तव स्वतन्त्रत्वं निरङ्कु-शैश्वर्यवत्त्वमतस्त्वदाज्ञानुवर्त्तिनोऽनन्यशरणस्यनिरतिशयप्रेम्णा त्वां भजतो निष्कामस्य स्वेच्छया किञ्चित् कर्म कुर्व-

धर्म व्यापक हुनाले सम्पूर्ण क्षेत्र अर्थात् शरीरको त्यो प्रकाशक हो। फेरि त्यस आत्माको बन्धन गर्नेवाला गुणहरूका कारण आफु नै हो भन्नुभयो। बन्धनहरूका लक्षण र तिनिहरूका प्रकार र तिनीहरूका कार्यमा भेद र गुणातीत पुरुषहरूका लक्षण, गुणहरूको अतिक्रमण गर्ने रीति र गुणातीतहरूलाई ब्रह्मभावको प्राप्ति यी सबै कुराहरूलाई तेह्रौं र चौधौं अध्यायमा निश्चय रूपले भनेर मेरो निम्नलिखित आत्मस्वरूप विषयक संशयहरूलाई हजुरले हटाई दिनुभयो, जस्तो-क्षेत्र र क्षेत्रज्ञ जो प्रकृतिपुरुष उनीहरूको परमात्माका साथ केवल भेद छ वा अभेद सम्बन्ध छ र त्यसको विषय के हो? पुरुषको वास्तवमा स्वरूप कस्तो छ? त्यसलाई संसार(जन्म मरण) कसरी हुन्छ? र त्यो मोक्ष कसरी प्राप्त गर्दछ र मोक्षको स्वरूप कस्तो छ? त्यस पछि ब्रह्मभावको प्राप्ति योग्य पुरुषको बन्धन हटाउनका लागि वैराग्य उत्पन्न गर्नका निमित्त संसारलाई पीपलवृक्षको निरूपण गरेर ज्ञानरूप तरवारले त्यसलाई काटिदिनु पर्ने कुरा गर्नुभयो। फेरि परमपुषको शरणागति ग्रहण गरेर मान मोहादि त्याग पूर्वक परमपदको प्राप्ति बताउनु भयो। त्यस पछि शरण्य र प्राप्त हुन योग्य परमात्मालाई सबै चेतन अचेतनको आत्मा, सबैका प्रकाशक, सबैका जीवनको हेतु, वेदद्वारा जान्नयोग्य, वेदान्तको आचार्य, सबै वेदहरूका अर्थका ज्ञाता र प्रकृति र पुरुष दुबैबाट पर पुरुषोत्तम हो भनेर बताउनु भयो। फेरि भगवान्लाई जो यसरी पुरुषोत्तम भनेर जान्दछ त्यो सर्वज्ञ र कृतकृत्य हो, भन्नुभयो। यस प्रकार यी सबै कुराहरूलाई पन्ध्रौं अध्यायमा निश्चय गराएर मेरो संन्देहहरू भगाई दिनुभयो कि कुन कुन उपायहरूद्वारा र कसरी यस अनादि संसारको निवृत्ति हुन्छ?परमात्माको स्वरूप कस्तो छ? उहाँको गुण शक्ति र ऐश्वर्य कस्तो छ? यस पछि पूर्वमा भनिएको तत्त्वको अधिकारी र अनधिकारीहरूको निर्णय गर्नका लागि ग्रहण गर्न र छोड्न योग्य दैवी र आसुरी सम्पद् काम क्रोध लोभमूलक हुनाले नित्य असुरभाव को वृद्धिद्वारा अधमगति नरक आदि फल दिनेवाला हो। देवी सम्पद् ग्रहण गर्न योग्य र आसुरी सम्पद् छोड्न योग्य छ यसैलाई देखाउनका लागि सत्त्वादि तीन गुणहरूका विभाग गरेर श्रद्धा, आहार, तप, यज्ञ र दानको गुणानुसार विभाग भन्नुभयो। यी कुराहरूलाई सोह्रौं र सत्रौं अध्यायमा भनेर, तत्त्वज्ञानको अधिकारी को हो र अनधिकारी को हो तथा त्याग गर्न र ग्रहण गर्ने योग्य के हुन्, यी विषयहरूका मेरो संशयहरूलाई हजुरले हटाईदिनुभयो। त्यस पछि यस अठारौं अध्यायमा सबै अध्यायहरूमा भनेका कुराहरूलाई एकैठाउँमा गरेर त्यसलाई ग्रहण गराउनका लागि यो भन्नुभयो कि पराभक्ति अनधिकारीहरूका लागि, जसको बुद्धि विशुद्ध छैन, यज्ञ, दान, तप आदि कर्महरूमा निष्ठा नै श्रेयस्कर छ। जसको बुद्धि विशुद्ध छ र काम, क्रोध, राग द्वेष ले शून्य छन् यस्ता ब्रह्मभूत ज्ञानिहरूलाई पराभक्ति मिल्दछ। र त्यस भक्तिको द्वारा हजुरको स्वरूप, गुण र ऐश्वर्यको यथार्थ ज्ञान लाभ गरेर ती हजुरलाई प्राप्त गर्दछन्। सबै जीवहरूका

तोऽकुर्वतो वा न किञ्चित् पापस्पर्शस्त्वत्प्राप्तिसन्देहश्चेति त्वद्वचनान्निश्चिततत्त्वो निर्गतसन्देहो निर्भयोऽस्मि। अतस्त्वच्छासने यावज्जीवं स्थितोऽस्मि युद्धादिविषयं सर्वं त्वद्वचनं करिष्ये, परमगुरोर्भगवतस्तवाज्ञापालनमेव करिष्ये इत्यर्थः। अत्र मामेकं शरणं व्रजेति शरणागतावेव शास्त्र (स्य) समापनात् "शिष्यस्तेऽहं साधि मां त्वां प्रपन्नमि"त्युपक्रमेऽपि प्रपन्नशब्देन शरणागतस्यैवो-पदेश्यत्वज्ञापनात् "निवासः शरणं सुहृदि"ति मध्येऽपि उपास्यस्य सर्वशरणत्वाभिधानाच्छरणागतिपरमेवेदं गीताशास्त्रमित्यवगम्ये। सा च षड्विधा "आनुकूल्यस्य सङ्कल्पः। प्राप्तिकूल्यस्य वर्जनम्। रक्षिष्यतीति विश्वासो गोप्तृत्ववरणं तथा। आत्मनिक्षेपकार्पण्ये षड्विधा शरणा-गतिरि"ति नारदपञ्चरात्रवचनात्। तत्रानुकूल्यादिपञ्चाङ्गानि आत्मनिक्षेपोऽङ्गी, तथा च "सर्वभूतस्थितं यो मां भजत्ये-कत्वमास्थित"इत्यादिनाऽऽनुकूल्यसङ्कल्पाख्यः प्रथमोऽङ्गो दर्शितः। हेयतया आसुरीसम्पत्प्रतिपादनमन्यत्रापि निर्वै-रत्वादिप्रतिपादन प्रातिकूल्यवर्जनाख्यो द्वितीयोऽङ्गो दर्शितः। "योगक्षेमं वहाम्यहमि"ति विश्वासाख्यस्तृतीयोऽङ्गो-दर्शितः। "पिताऽसि लोकस्य चराचरस्ये"त्यादिना "प्रसीद देवेश ! जगन्निवास" इत्यन्तेन गोप्तृत्ववरणाख्यश्चतुर्थोऽङ्गो दर्शितः। "दिशो न जाने न लभे च शर्म प्रसीद देवेश जगन्निवास !। नहि प्रजानामि तव प्रवृत्तिमि"ति कार्पण्य-रूपः पञ्चमोऽङ्गो दर्शितः। आत्मात्मीयस्य सर्वस्य वि-धिश्रद्धया भगवत्यर्पणमात्मनिक्षेपः, स च "तमेव चाद्यं पुरुषं प्रपद्ये, मामेकं शरणं व्रजे"ति षष्ठोऽङ्गो दर्शितः। अवशिष्टो ज्ञानकर्मभक्तिप्रतिपादको ग्रन्थः। प्रपतृप्रपदन-प्रपत्तव्यस्वरूपगुणाङ्गैश्वर्यप्रतिपादनेन तत्रैव परम्परया सम्बध्यते इति विवेकः। अथवोपास्यस्वरूपमुपास-कस्वरूपं तदुपासनस्वरूपं तदुपासनफलं तद्विरोधि

नियन्ता, स्वतन्त्र र निरंकुश ऐश्वर्यवाला हजुरको आज्ञामा रहने, अनन्य शरणागत निरतिशय प्रेमद्वारा हजुरको भजन गर्नेवाला निष्कामी भक्त चाहे आफ्नो ईच्छाले केही कर्म गरोस या नगरोस, त्यसलाई कुनै पनि पाप छुन सक्दैन र हजुरको प्राप्तिमा कुनै सन्देह रहँदैन। हजुरको वचनले म निश्चित र सन्देह रहित भएर निर्भय भएको छु। यसैले जब सम्म म बाँच्नेछु तब सम्म हजुरको शासनमा बस्दछु। युद्धादिको विषयमा जो हजुर भन्नुहुनेछ म त्यही गर्नेछु। भाव यो हो कि हजुरलाई परमगुरु र भगवान् जानेर हजुरको आज्ञाको पालन गर्नेछु, यही मेरो धर्म हो, यो मलाई निश्चय भयो।

यस गीताशास्त्र को समाप्ति 'मामेकं शरणं व्रज' यो भनेर शरणागतिमा गरिएको छ। गीताको आरम्भमा पनि 'शिष्यस्तेऽहं. ...प्रपन्नं' मा 'प्रपन्न' अर्थात् शरणागत जन नै उपदेश दिन योग्य छन् र शास्त्रको बीचमा पनि यो भनेर कि 'निवासः शरणं सुहृद्' यो देखाईयो कि उपास्य जो भगवान् उनै सबै जीवहरूका शरण्य हुन् अर्थात् उनै सबैलाई शरण मा राख्नमा समर्थ अर्थात् रक्षक हुन्। यसैले यो प्रमाणित भयो कि गीताशास्त्र शरणागति परक छ। यो शरणागति छः प्रकारको हुन्छ जस्तो कि नारदपाञ्चरात्रमा भनिएको छ, यथा–

'आनुकूल्यस्य......शरणागति' अर्थात् (१) भगवान् को आज्ञाको अनुकूल कामहरूको संकल्प, (२) र उहाँको प्रतिकूल कामहरूलाई छोड्नु (३) भगवान् रक्षा गर्नुहुनेछ यस्तो विश्वास, (४) उहाँलाई आफ्नो रक्षक वरण गर्नु र त्यसका लागि भगवान्सँग प्रार्थना गर्नु, (५) आफुलाई उहाँको चरणमा अर्पण गरिदिनु र , (६) दीनता, यी नै शरणागतिका छः प्रकार हुन्। यसमा अनुकुलता आदि पाँच अंग छन् र आत्मनिक्षेप अंगी छ। यस गीताशास्त्रमा 'सर्वभूतस्थितं......मास्थितः' ले अनुकूलता को संकल्परूप शरणागतिको पहिलो अंग देखाउनु भयो। छोड्न योग्य प्रतिपादनपूर्वक आसुरी सम्पद्को एवं निर्वैर आदि गुणहरूका प्रतिपादन गरेर प्रतिकूलताको वर्जनरूप दोस्रो अंग दर्शाउनु भयो। 'योगक्षेमंवहाम्यहं' ले विश्वास नामक तेस्रो अंग बताउनु भयो। 'पिताऽसि....चराचरस्य' देखि आरम्भ गरेर 'प्रसीद देवेश जगन्निवास' सम्मले गोप्तृत्ववरणरूप चौथो अंग प्रकट गर्नुभयो। 'दिशो न जाने..... जगन्निवास'। 'नहि प्रजानामि तव प्रवृत्तिम्' ले कृपणतारूप पाँचौ अंग बताउनुभयो। आत्मा र आत्मीय सबै पदार्थहरूका, विधि र श्रद्धापूर्वक, एक भगवान्को निमित्त अर्पण गर्नुलाई आत्मनिक्षेप भन्दछन्। 'तमेव चाद्यं पुरुषं प्रपद्ये' । 'मामेकं शरणं व्रज' ले आत्मनिक्षेपरूप छैटौं अंग देखाउनुभयो। शेष ग्रन्थ ज्ञान, कर्म र भक्तिको प्रतिपादक हो। शरणागत हुनेवाला, शरणागति, शरणागति गर्न योग्य भगवान्को स्वरूप, गुण र ऐश्वर्यादिलाई जो गीतामा प्रतिपादन गरिएका छन् ती सबै परम्परया शरणागति संग सम्बन्धित छन्। अथवा गीताशास्त्रमा उपास्य (भगवान्) , उपासक(जीव) , उपासनाको स्वरूप तथा फल

स्वरूपमित्यर्थपञ्चकं निरूपितम्। तत्र सप्तमाध्यायादिषु तत्र तत्र सर्वज्ञसर्वनियन्तृभक्तवात्सल्यादिगुणार्णवं भगवत्तत्वमुपास्यस्वरूपमुक्तम्।१। तत्प्राप्तृतया तत्र तत्र जीवक्षेत्रज्ञाक्षरपुरुषादिशब्दवाच्यं ज्ञानं ज्ञातृप्रतिशरीरभिन्नमसङ्ख्यकं भगवदधीनं बन्धमोक्षार्हं नित्यमित्युपासकस्य स्वरूपं निर्णीतम्।२। तत्प्राप्तिसाधनं कर्मज्ञानभक्तिप्रपत्तिगुर्वाज्ञानुवृत्तिभेदात् पञ्चविधं तदुपासनं तत्र तत्र निर्दिष्टम्।३। निःशेषाविद्यानिवृत्त्या परमानन्दस्वरूपतत्साधर्म्यभगवद्भावादिशब्दाभिधेयं मोक्षाख्यं तदुपासनजं तत्कृपाफलम्।४। एतच्चतुष्टयस्य प्रतिबन्धकं कामक्रोधरागद्वेषादिकमासुरीसम्पच्च विरोधिस्वरूपमित्यर्थपञ्चकमेव गीतायां श्रीभगवतोपदिष्टमिति बोध्यम्।५। तदुक्तं भगवता आद्याचार्येण श्रीनिम्बादित्येन "उपास्यरूपं तदुपासकस्य च कृपाफलं भक्तिरसस्ततः परम्। विरोधिनो रूपमथैतदाप्तेर्ज्ञेया इमेऽर्था अपि पञ्च साधुभि"रिति ॥७३॥

र फल तथा उपासनाको विरोधिहरूका स्वरूप यिनै पाँचै(अर्थपञ्चक) को निरूपण गरिएको छ। भगवान् सर्वज्ञ, सबैका कारण र नियन्ता तथा भक्तवत्सलता आदि गुणहरूका समुद्र हुन्। र (२) भगवान्लाई प्राप्त गर्नयोग्य जीव, क्षेत्रज्ञ, अक्षरपुरुष आदि शब्दहरूका वाच्य, ज्ञानस्वरूप, ज्ञाता, प्रत्येक स्वरूपमा भिन्न, असंख्य, भगवदधीन, बन्ध र मोक्षलाई प्राप्त गर्ने योग्यतायुक्त र नित्य यस्तो उपासकको स्वरूप बताउनु भयो। र(३) परमात्माको प्राप्तिको साधन, कर्म, ज्ञान, भक्ति, शरणागति र सर्वथा गुरु आज्ञाको पालन, यस्ता पाँच प्रकारको उपासनाको निरूपण गर्नुभयो। (४) अविद्याको अशेष निवृत्तिद्वारा परमानन्दस्वरूप भगवान्को सामन धर्मको प्राप्ति, उहाँको भावको प्राप्ति आदि मोक्षलाई उहाँको उपासना जनित उहाँको कृपाको फल बताउनुभयो। (५) यी चारैको प्रतिबन्धक काम, क्रोध, रागद्वेष आदि आसुरी सम्पद्को विरोधीको स्वरूप बताउनुभयो। यस अर्थ पञ्चकको उपदेश भगवान्ले गीतामा गर्नुभएको छ यो जान्नु। यस अर्थ पञ्चकलाई प्रथम आचार्य भगवान् निम्बार्कले दशश्लोकी मा भन्नुभएको छ, यथा-
'उपास्यरूपं....साधुभिः' अर्थात् भगवान्को स्वरूप, जीवको स्वरूप, भगवत् कृपाको फल, भक्तिमा आनन्द आउनु, विरोधीको रूप, यी पाँच कुरा अर्थात् अर्थपञ्चक वैष्णवहरूले अवश्य नै जान्नुपर्दछ॥७३॥

-★-★-★-

## सञ्जय उवाच

### इत्यहं वासुदेवस्य पार्थस्य च महात्मनः।
### संवादमिममश्रौषमद्भुतं रोमहर्षणम्॥

**संजय भन्दछन्- यस प्रकार मैले भगवान् वासुदेव र महात्मा पृथानन्दन अर्जुनको यो रोमाञ्चित गर्नेवाला अद्भुत संवाद सुनें॥७४॥**

तदेवं सर्वं श्रीकृष्णार्जुनसंवादं धृतराष्ट्रायावेद्य स्वयमनुसन्दधानः सञ्जय उवाच-इतीति। इत्येवमुक्तप्रकारेण वासुदेवस्य पार्थस्य च महात्मन इत्युभयोर्विशेषणम् अद्भुतमाश्चर्यरूपमत एव रोमहर्षणं रोमाञ्चकरं संवादं यथोक्तमहमश्रौषं श्रुतवानस्मि॥७४॥

यस प्रकार सम्पूर्ण कृष्णार्जुन सम्वाद धृतराष्ट्रलाई भनेर संजय स्वयं अनुभव गर्दै भने- महान् आत्मा श्रीकृष्ण र अर्जुनको यस आश्चर्यरूप यसैले रोमाञ्चकारी सम्वादलाई जस्तो कि मैले तपाईंसँग वर्णन गरेको छु, मैले सुने॥७४॥

-★-★-★-

### व्यासप्रसादाच्छ्रुतवानेतद्गुह्यमहं परम्।
### योगं योगेश्वरात्कृष्णात्साक्षात्कथयतः स्वयम्॥

**मैले व्यासजीको कृपाले मैले स्वयं यस परम गोपनीय योग (गीताग्रन्थ)लाई भन्दै गर्नुभएका साक्षात् योगेश्वर भगवान् श्रीकृष्णबाट सुनेको हुँ॥७५॥**

असन्निकृष्टस्य व्यवहितस्य संवादस्यात्मनःश्रवणयोग्यतायां हेतुमाह-व्यासप्रसादादिति। दिव्यचक्षुः श्रोत्रादिलाभ-

टाढा भएको सम्वादलाई सुन्ने योग्यता प्राप्त भएको कारणलाई संजय भन्दछन्-

रूपाद् व्यासप्रसादादेतद् गुह्यं गोप्यं परं सर्वोत्कृष्टं परमपुरुषार्थोपायं योगेश्वरात् कृष्णात्स्वयमेवेश्वररूपेण कथयतः साक्षादहं श्रुतवानस्मि, नतु परम्परया। अहो मे भाग्यमित्यभिप्रायः ॥७५ ॥

व्यासजीको कृपाले दिव्य आँखा, कान पाएको कारण यस गोपनीय सर्वोत्कृष्ट योग अर्थात् मोक्षको उपाय द्वाराको उपायलाई योगेश्वर कृष्णबाट, जो स्वयं ईश्वररूपले कथन गर्नुभएको छ, मैले साक्षात् सुने, परम्परा द्वारा होईन। भाव यो कि धन्य छ मेरो भाग्य ॥७५ ॥

-★-★-★-

## राजन्संस्मृत्य संस्मृत्य संवादमिममद्भुतम्।
## केशवार्जुनयोः पुण्यं हृष्यामि च मुहुर्मुहुः ॥

**हे राजन! भगवान् श्रीकृष्ण र अर्जुनको यस पवित्र र अद्‌भुत संवादलाई बारम्बार याद गरेर म बारम्बार हर्षित भईरहेको छु ॥७६ ॥**

तदेव विशदयति-राजन्निति। केशवार्जुनयोरिमं पुण्यं श्रवणमात्रेण पापहरं पुण्योत्पादनमद्‌भुतं संवादं संस्मृत्य मुहुर्मुहुर्वारं वारं हृष्यामि हर्षं प्राप्नोमि ॥७६ ॥

हे राजन् कृष्ण र अर्जुनको यस आश्चर्यमय र श्रवणमात्रले पापका नाशक अर्थात् पुण्योत्पादक सम्वादलाई बारम्बार संस्मरण गरेर मलाई हर्ष प्राप्त भईरहेको छ ॥७६ ॥

-★-★-★-

## तच्च संस्मृत्य संस्मृत्य रूपमत्यद्भुतं हरेः।
## विस्मयो मे महान्राजन्हृष्यामि च पुनः पुनः ॥७७ ॥

**हे राजन भगवान् श्रीकृष्णको त्यस अत्यन्त अद्‌भुत विराट्‌रूपलाई पनि बारम्बार याद गरेर मलाई धेरै ठूलो आश्चर्य भईरहेको छ र म फेरि पनि बारम्बार हर्षित भईरहेको छु ॥७७ ॥**

अथार्जुनाय दर्शितं विश्वरूपमनुसन्दधान आह- तच्चेति। यदर्जुनाय प्रकाशितमत्यद्‌भुतमैश्वर्यं हरे रूपं मया साक्षात्कृतं तच्च संस्मृत्य हे राजन्! संस्मरतो मे महान् विस्मयो जायते, पुनः पुनश्च हृष्यामि रोमाञ्चितो भवामि ॥७७ ॥

अर्जुनलाई देखाईएको विश्वरूपलाई अनुभव गर्दै संजय भन्दछन्- हे राजन्! जुन आफ्नो रूपलाई भगवान्‌ले अर्जुनलाई देखाउनुभयो त्यस अद्‌भुत रूपलाई मैले पनि साक्षात्कार गरें र त्यसलाई बारम्बार संस्मरण गरेर मलाई ठूलो विस्मय भईरहेको छ र म पुनः पुनः हर्षित भईरहेको छु ॥७७ ॥

-★-★-★-

## यत्र योगेश्वरः कृष्णो यत्र पार्थो धनुर्धरः।
## तत्र श्रीर्विजयो भूतिर्ध्रुवा नीतिर्मतिर्मम ॥

**जहाँ योगेश्वर भगवान् श्रीकृष्ण हुनुहुन्छ र जहाँ गाण्डीव धनुषधारी अर्जुन छन्, त्यहाँ नै श्री, विजय, विभूति र अचल नीति छ- यस्तो मेरो मत छ ॥७८ ॥**

एवं चेश्वरेश्वरकृष्णपराङ्मुखस्वपुत्रसैन्यविजयादिदुराशा ते वृथैवेत्याह-यत्रेति। यत्र यस्मिन् पक्षे योगेश्वरः योगोऽघटितघटनापटीयस्त्वसामर्थ्यं राज्यैश्वर्यादि-प्राप्त्युपायो वा योगस्तस्येश्वरो निर्वर्त्तको नियामको वा सर्वकर्मसिद्धीनामपीश्वरः सर्वकर्मफलप्रभुः सर्वज्ञोऽचिन्त्य-शक्तिर्भगवान् कृष्णः स्वाश्रित दुःखकर्षकस्तिष्ठति यत्र पार्थस्तत्पितृस्वस्त्रीयो धनुर्धरो गाण्डीवधन्वाऽर्जुनो सवर्त्तते तत्रोभयाधिष्ठिते धर्मराजपक्षे श्रीः राज्यलक्ष्मीः, विजयः

यस प्रकार भगवान् श्रीकृष्ण र अर्जुनको विरोधी आफ्ना पुत्रहरूका सेनाको विजयलाभको तपाईको आशा वृथा छ, यसैलाई भन्दछन्- जुन पक्षमा योग अर्थात् अघटित घटनाघटाउने सामर्थ्य अथवा राज ऐश्वर्य प्राप्तिको उपायको ईश्वर अर्थात् नियामक, सबै कामहरू का सिद्धिका मालिक, सबै कामहरूका फलका प्रभु, सर्वज्ञ र अचिन्त्य शक्तिवाला भगवान् श्रीकृष्ण जो आफ्ना आश्रितहरूका दुःखलाई हर्नेवाला हुन्, स्थित हुनुहुन्छ र जहाँ गाण्डीव धनुषलाई धारण गर्नेवाला अर्जुन छन् अर्थात् धर्मराज युधिष्ठिरको पक्षमा यी दुबै रहेकोले राज्यलक्ष्मी, विजय अर्थात् शत्रुविनाश, सर्वसम्पत् वा ऐश्वर्य र न्याय सबै उसैका पक्षमा

शत्रुविनाशः, भूतिः सर्वसम्पत् ऐश्वर्यं वा नीतिर्न्यायोऽपि तत्रैव, ध्रुवा निश्चितेति सर्वत्रान्वेतव्यम् इति मे मम मतिर्निश्चयबुद्धिः तस्मात्स्वपुत्रविजयाशां त्यक्त्वा श्रेयस्कामनया श्रीभगवदाश्रितैर्लक्ष्मीविजयाद्यर्हैः पाण्डवैः सह राज्याद्यर्पणेन सन्धिं विधाय स्वीयानां संरक्षणं कुर्विितिभावः ॥७८ ॥ स्वतन्त्रः सर्वफलदः सर्वोपास्यो हि यो हरिः। कर्त्तृत्वं सर्वजीवानां तत्तन्त्रमिति निश्चयात् ॥१ ॥ श्रेयस्कामो मुमुक्षुर्वा तमेव शरणं व्रजेत। स्वभिमानं परित्यज्य ह्येतदन्ते दृढीकृतम् ॥२ ॥ संसाराम्बुधिमग्नानां स्वभक्तकृपया हरिः। चकार गीतानावं तं वन्दे सर्वगरीयसम् ॥३ ॥हंसस्वरूपं सनकादिकेभ्यस्तत्त्वोप- देशाय विधाय शुद्धम्। तत्त्वं परं भागवतञ्च धर्मं सत्सम्प्रदायार्थमुपादिशद्यः ॥४ ॥ श्रीवासुदेवो भगवान्स एव भक्ताय पार्थाय तु भारते वै। मोहापहं शास्त्रमुवाच गीतां सर्वेश्वरं तं शरणं प्रपद्ये ॥५ ॥ व्याख्यातमादौ तददभ्रबोधादाचार्यवर्येण हरिप्रियेण। निम्बार्कनाम्नाऽतिगभीरबोधं श्रीनारदानुग्रहभाजनेन ॥६ ॥ तत्पादचिन्ताप्रतिबुद्धबुद्धिना भट्टेन श्रीकेशवसञ्ज्ञकेन। तदर्थबोधाय तदाश्रितानां सङ्क्षिप्य चैतद्विवृतं सुबोधम् ॥७ ॥

**रहन्छन्, यो निश्चित हो, यो मेरो मत वा निश्चय बुद्धि हो। भाव यो हो कि यस कारणले आफ्ना छोराहरूका विजयको आशा छोडेर आफ्नो भलाईको लागि श्रीभगवान्‌को आश्रित र लक्ष्मी र विजयको योग्यतायुक्त पाण्डवहरूका साथ, उनीहरूलाई राज्य आदि दिएर सन्धि गर्नुस र यस प्रकार आफ्नो छोराहरूको रक्षा गर्नुहोस ॥७८ ॥**

**'स्वतन्त्रः......सुबोधम्' अर्थात् जुन हरि स्वतन्त्र र सबै फलहरूलाई दिनेवाला हुन र उहाँको नै अधीन सबै जीवहरूका कर्त्तापना हो। यसैले श्रेयको कामनावाला या मुमुक्षुहरूले आफ्नो अभिमानलाई छोडेर उहाँ कै शरणमा जानु पर्दछ। यो कुरा गीताको अन्तमा दृढ़ गरिएको छ। जसले आफ्ना भक्तहरूमाथि कृपा गरे संसार समुद्रमा डुबेका भक्तहरूका लागि गीतारूपी डुंगा बनाउनु भयो ती सर्वश्रेष्ठ हरिलाई म प्रणाम गर्दछु। सनकादिहरूलाई तत्त्वको उपदेश गर्नका लागि शुद्ध हंसको स्वरूपलाई धारण गरेर जसले सत्संप्रदायार्थ परतत्त्व र भागवत धर्मको उपदेश गर्नुभयो उनै भगवान् वासुदेवले महाभारतको युद्ध क्षेत्रमा मोहको नाशक गीताशास्त्रलाई भक्त अर्जुन सँग भन्नुभयो। यस्ता श्रीवासुदेवको शरणमा हामी छौ। यस अति गम्भीर गीताशास्त्रको व्याख्या श्रीनारदको कृपापात्र निम्बार्क नामवाला आचार्य श्रेष्ठ श्रीहरिप्रियले पहिले गर्नुभयो। उनै निम्बार्क आचार्यको चरणको चिन्तनले तेजबुद्धिवाला केशवकाश्मीरी भट्टले त्यस व्याख्याको अर्थबोधको लागि उहाँको आश्रितहरूका हितार्थ संक्षेपले यो सुबोध तत्त्वप्रकाशिका नामक टीका गरें।**

**इति श्रीमद्भगवद्गीताटीकायां तत्त्वप्रकाशिकायां (नेपालीभाषा-टीका सहित) जगद्विजयी श्रीकेशवकाश्मीरिभट्टाचार्य विरचितायां मोक्षसन्न्याससयोगो नामाष्टादशोऽध्यायः ॥१८ ॥**

★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★★

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

# वेदान्त-दशश्लोकी

ज्ञानस्वरुपञ्च हरेरधिनं शरीरसंयोगवियोगयोग्यम्।

अणुं हि जीवं प्रतिदेहभिन्नं ज्ञातृत्ववन्तं यदनन्तमाहुः॥ १ ॥

अनादि माया परियुक्तरूपं त्वेनं विदुर्वै भगवत्प्रसादात्।

मुक्तञ्च बद्धं किलबद्धमुक्तं प्रभेदबाहुल्यमथापिबोध्यम्॥२॥

अप्राकृतं प्राकृतरूपकञ्च कालस्वरूपं तदचेतनं मतम्।

मायाप्रधानादिपदप्रवाच्यम् शुक्लादिभेदाश्च समेऽपि तत्र॥३॥

स्वभावतोऽपास्त-समस्तदोषमशेषकल्याणगुणैक-राशिम्।

व्यूहाङ्गिनं ब्रह्म परंवरेण्यं ध्यायेम कृष्णं कमलेक्षणं हरिम्॥४॥

अङ्गेतुवामे वृषभानुजां मुदा विराजमानमनरूपसौभगाम्।

सखीसहस्त्रैः परिसेवितां सदा स्मरेमदेवीं सकलेष्टकामदाम्॥५॥

उपासनीयं नितरां जनैः सदा प्रहाणयज्ञानतमोनुवृत्तेः।

सनन्दनाद्यैर्मुनिभिस्तथोक्तं श्रीनारदायाखिलतत्त्वसाक्षिणे॥६॥

सर्वं हि विज्ञानमतोयथार्थकं श्रुतिस्मृतिभ्यो निखिलस्यवस्तुनः।

ब्रह्मात्मकत्वादितिवेदविन्मतं त्रिरूपताऽपिश्रुतिसूत्रसाधिता॥७॥

नान्यागतिः कृष्णपदारविन्दात् संदृष्यते ब्रह्मशिवादिवन्दितात्।

भक्तेच्छयोपात्तसुचिन्त्यविग्रहादचिन्त्यशक्तेरविचिन्त्यसाशयात्॥८॥

कृपास्य दैन्यादियुदि प्रजायते यया भवेत्प्रेम विशेष लक्षणा।

भक्तिर्ह्यनन्याधिपतेर्महात्मनः साचोत्तमासाधनरूपिकाऽपरा॥९॥

उपास्यरूपं तदुपासकस्य च कृपाफलं भक्तिरसस्ततःपरम्।

विरोधिनोरूपमथैतदाप्तेर्ज्ञेया इमेऽर्था अपि पञ्च साधुभिः॥१०॥

॥इति॥

पं. कृष्णशरण शास्त्री 'पोखरेल' रानीगंज-२, सर्लाही, नेपाल

